# मेरा थोरै कुरा

निघण्टु भनेको संस्कृत भाषाको शब्दका पर्यायहरूको सङ्ग्रह भएको प्राचीन कोश वा वैदिक शब्दकोश वा शब्दकोश हो । यसमा रोग र उपचारका विस्तृत कुरा हुँदैनन् । कुन द्रव्यमा के के गुण हुन्छ र त्यो पदार्थ वा द्रव्यलाई के के नामले चिनिन्छ भनी निघण्टुमा बताइएको हुन्छ ।

अन्य धन्वन्तरि, मदनपाल, हलायुध आदिले लेखेको निघण्टु हेरेर यो ग्रन्थ लेखिएको हो । यसको लेखनशैली धन्वन्तरि निघण्टुको लेखनशैलीसँग मेल खान्छ भन्ने कुरा ग्रन्थकार स्वयंले स्वीकार गरेका छन् ।

शुरुमा अभिधानचूडामणि वा द्रव्याभिधानगणसङ्ग्रह नाम दिइएको यो ग्रन्थलाई ग्रन्थको समाप्तितिर पुग्दा ग्रन्थकार स्वयंबाट निघण्टुराज नाम दिइएको हो ।

श्रीनरहरि यो ग्रन्थका लेखक हुन् । उनी काश्मिरका वीर राजा थिए । उनका पिताको नाम ईश्वर थियो । यी शिव र पार्वतीका परम भक्त थिए । यिनलाई अठार भाषाको ज्ञान थियो भनिन्छ ।



यो पुस्तक कहिले लेखियो भनी लेखकबाट बताइएको छैन । वि.सं.१४७१ मा लेखिएको मदनपाल निघण्टुलाई समेत आधार बनाएर लेखिएको यो ग्रन्थ पन्ध्रौं शताब्दीको शुरुतिर लेखिएको अनुमान गरिएको पाइन्छ ।

यसग्रन्थमा अनेकौं विषयहरुसँग सम्बन्धित शब्दहरूको पर्यायवाची नाम दिइएको छ । पर्यायवाची नामसँगै अधिकांश द्रव्यको गुण पनि बताइएको छ ।

कुनै पनि कुरा ओखतीमा प्रयोग गर्न वैद्य आदिका लागि "जडिबुटी आदि पहिचान गर्ने क्षमता" पहिलो आधारभूत गुण हो । निघण्टुले यस्तो ज्ञान प्रदान गर्ने हुनाले आयुर्वेदमा यसलाई महत्वपूर्ण आधार-ग्रन्थ मानिएको छ ।

समग्रमा निघण्टु नै सम्पूर्ण आयुर्वेद होइन, अन्य संहिता आदि ग्रन्थको समेत ज्ञान हुनुपर्दछ । "निघण्टु नजानेको वैद्य, व्याकरण नपढेको विद्वान र अभ्यास नगर्ने धनुर्धर (शस्त्रअस्त्र चलाउने) हाँसाको पात्र हुन्छन्" भनिएको छ ।

यसग्रन्थमा प्रयोग भएका कतिपय शब्दहरुको नेपालीमा अर्थ खुलाउन सकिएको छैन । कतिपय शब्दको पहिचान पनि हुन सकेको छैन ।

ग्रन्थ ठूलो भएका कारणले हुन सक्दछ शुरुदेखि अन्तसम्म स्थिर देखिँदैनन् अर्थात् कतिपय पर्यायवाची शब्दमा एकरूपता छैन । विशेषतः एकार्थक, द्व्यर्थक आदिमा दिइएका र मूल श्लोकमा दिइएका शब्दमा यस्तो असमानता बढी देखिन्छ । लेखकले यस्ता शब्दलाई अप्रसिद्ध नाम भनेका छन् ।

आयुर्वेदको समग्र पक्षप्रति भोक जगाउन यो भावानुवाद भएको ग्रन्थले पर्याप्त सहयोग गर्नेछ भन्ने विश्वास लिएको छु ।

ग्रन्थको उपलब्ध प्रतिका केही श्लोकहरूमा विभिन्नता पाइए, ती सबैलाई यहाँ समेट्न सकिएन । ग्रन्थमा दिइएका ज्ञानलाई व्याख्या एवं विश्लेषण गर्नेतिर नलागी सामान्य ढङ्गले नेपालीमा भावानुवाद गर्ने प्रयाश गरिएको छ ।

म सानो छँदा उर्दूमा अनुवाद भएको राजनिघण्टुको पुस्तक हेरेर मेरा स्वर्गीय पिताले आयुर्वेद सम्बन्धी निर्णय लिने गरेको सम्झना आइरहेछ । बेलाबेलामा म पनि त्यो पुस्तक हेर्दथेँ तर उर्दू भाषाको ज्ञान नभएकाले बुझ्दैनथेँ । त्यसबेला नेपालीमा यो ग्रन्थ किन नलेखिएको होला भनेर मनमा कुरा खेलिरहन्थे । अहिले आफैँले यो ग्रन्थ यथासम्भव तरिकाले नेपालीमा भावानुवाद गरेर यहाँहरू समक्ष सर्वसुलभ बनाउन पाएकोमा खुशी लागेको छ । अमेरिकाको ओरिगनमा करिब छ महिना (२०७९ असारदेखि मंसिरसम्म) बस्दा यसको अनुवाद गर्ने काम सकिएको हो ।



ग्रन्थको भावानुवाद गर्दा :

१. कलकत्ताबाट प्रकाशित पण्डित विद्यासागर र विद्याभूषण भट्टाचार्यको संस्कृत भाषामा संक्षिप्त टीका लेखिएको ग्रन्थको पीडीयफ प्रति,
२. आनन्दाश्रमसंस्कृतग्रन्थावलिको तेत्तीसौँ "राजनिघण्टुसहितो धन्वन्तरीयनिघण्टुः" नामक सन् १८९६ मा प्रकाशित ग्रन्थको पीडीयफ प्रति,
३. राज निघण्टु (समालोचनात्मक टिप्पणी सहितको अंग्रेजी अनुवाद, डा.सतिश चन्द्र साङ्ख्यधर, प्रथम संस्करण : ई.सं.२०१२, प्रकाशक : चौखम्बा ओरियन्टालिया, वाराणसी, भारत,
४. के.यनस्वामीको अनलाईन "संस्कृत-नेपाली शब्दकोश",
५. नेपाली बृहत् शब्दकोश,
६. कुलचन्द्रशर्माको अमरकोश,

७. आयुर्वेद विश्वकोश,
८. हलायुधकोश,
९. आयुर्वेद महाकोश,
१०. अष्टाङ्गहृदयकोश,
११. हिन्दी शब्दकोश र
१२. सामाजिक सञ्जालमा रहेका आचार्य बालकृष्णका केही लेखहरूको सहयोग लिइएको छ ।

यस ग्रन्थ भित्रका कुरा वा अन्य यस्तै ग्रन्थका कुरा हालेर परम्परागत तरिकाले भूमिकालाई लामो बनाउन चाहिन ।

अन्तमा, यो ग्रन्थ अनुवादका क्रममा जानी नजानी मबाट भएका गल्तिप्रति विद्वत्जनबाट खबरदारी आउने नै छ भन्ने विश्वास लिएको छु ।

वि.सं.२०७९।०८।२८, नेपाल

## विषयसूची

**॥ श्रीः ॥**

# राजनिघण्टुः

# महामहोपाध्याय श्रीमन्नरहरिपण्डितविरचितः

### मङ्गलाचरणम्

**श्रीकण्ठाचलमेखलापरिणमत्कुम्भीन्द्रबुद्ध्या रद-**
**प्रान्तोत्तम्भितसम्भृताब्दगलितैः शीतैरपां शीकरैः ।**
**निर्वाणे मदसञ्ज्वरे प्रमुदितस्तेनाऽऽतपत्रश्रियं**
**तन्वानेन निरन्तरं दिशतु वः श्रीविघ्नराजो मुदम् ॥१॥**

कैलाश पर्वतलाई मानौ अर्को हात्ती नै होकि जसरी ढाकिरहेको बादललाई देखेर भगवान् श्रीगणेश क्रोधित हुनु भयो । क्रोधमा आएपछि उहाँले आफ्नो सुँडले बादललाई हिर्काउनु भयो । फलस्वरुप बादलले उहाँमाथि शीतल जल बर्साइ दियो । उहाँमाथि खसिरहेका चिसो पानीका थोपाले उहाँलाई शान्त बनायो । यसबेला बादल छाताजस्तै देखिइ रहेको थियो । यसले गणेशलाई परम आनन्द भइरहेको थियो । यस्ता आनन्दमा रमाइरहेका श्रीगणेशले सदा (मलाई अर्थात् लेखकलाई) आशिर्वाद दिइरहून् ।



**कर्पूरक्षोदगौरं धृतकपिलजटं त्रीक्षणं चन्द्रमौलिं**
**सौधं कुण्डं सुधांशुं वरयुतमभयं दोश्चतुष्के दधानम् ।**
**वामोत्सङ्गे वहन्तं विविधमणिगणालङ्कृतामुज्ज्वलाङ्गीं**
**शर्वाणीं स्वानुरूपां तमनिशममृतेशाख्यमीशं स्मरामि ॥२॥**

कपुरको धुलोजस्तै गोरो वर्णका, कैलो जटा र तीन आँखा भएका, शिरमा चन्द्रमालाई धारण गरेका, चार वटा हात मार्फत अमृतको कचौरा समाई वरमुद्रा धारण गरेका, देब्रेतिर अनेकथरी मणिमाणिक्यादिले धपधपी बलिरहेकी आफू जस्तै देवीलाई सँगै राखेका, यस्ता अविनाशी शिवलाई (म अर्थात् लेखक) भक्तिपूर्वक ध्यान गर्दछु ।

**श्रीमन्महेशनलिनासननिर्जरेन्द्रास्तत्राश्विनावथ ततोऽत्रितनूद्भवश्च ।**
**धन्वन्तरिश्चरकसुश्रुतसूरिमुख्यास्तेऽप्यायुरागमकृतः कृतिनो जयन्तु ॥३॥**

भगवान् श्रीशिव, श्रीब्रह्मा, कहिल्यै बूढो नहुने इन्द्र, अश्विनीकुमार, आत्रेय, धन्वन्तरि, चरक, सुश्रुत आदि सबै प्रमुख आयुर्वेदाचार्यले यो (मेरो) कृतिलाई सफल एवं प्रसिद्ध बनाऊन् ।

**शम्भुं प्रणम्य शिरसा स्वगुरूनुपास्य पित्रोः पदाब्जयुगले प्राणिपत्य भक्त्या ।
विघ्नेशितारमधिगम्य सरस्वतीञ्च प्रारम्भि भैषजहिताय निघण्टुराजः ॥४॥**

भगवान् शिवलाई शिरले नमन गर्दै, आफ्ना गुरुलाई आदर गर्दै, पितृहरूका दुवै चरणमा भक्तिपूर्वक नमस्कार गर्दै, विघ्नहर्ता श्रीगणेश र विद्याकी देवी सरस्वतीलाई नमस्कार गर्दै वैद्यहरूका हितका लागि (म यो) निघण्टुराज (लेख्न) शुरु गर्दछु ।

**ग्रन्थ-प्रस्तावना**

**धन्वन्तरीय-मदनादिहलायुधादीन् विश्वप्रकाश्यमरकोषसशेषराजौ ।
आलोक्य लोकविदितांश्च विचिन्त्य शब्दान् द्रव्याभिधानगणसङ्ग्रह एष सृष्टः ॥५॥**

धन्वन्तरि निघण्टु, मदनादि निघण्टु, हलायुधकोश, अमरकोश, विश्वप्रकाश, शेषराज आदि ग्रन्थको सहयोगमा लोकमतलाई समेत विचार गरी यो “द्रव्याभिधानगणसङ्ग्रह” बनाइएको छ ।

**आयुःश्रुतीनामतुलोपकारकं धन्वन्तरिग्रन्थमतानुसारकम् ।
आचक्ष्महे लक्षणलक्ष्मधारकं नामोच्चयं सर्वरुजापसारकम् ॥६॥**



विविध किसिमका उपचारमा प्रयोग हुने ओखतीका पर्यायवाची शब्दका लागि मैले धन्वन्तरी निघण्टुको सहयोग लिएको छु । यसबाट कुनै द्रव्यको वास्तविक विवरण बयान गर्न र रोगको उपचार गर्न आयुर्वेदका अध्ययनकर्तालाई धेरै नै सहयोग हुनेछ ।

**निदशलक्षणपरीक्षणनिर्णयेन नानाविधौषधविचोरपरायणो यः ।
सोऽधीत्य यत् सकलमेनमवैति सर्वं तस्मादयं जयति सर्वनिघण्टुराजः ॥७॥**

जसले यो ग्रन्थ राम्ररी अध्ययन गरी यसमा दिइएका निर्देशन, रोगका लक्षण र ओखतीको परीक्षण गरी निर्णय लिन्छ अनि अनेक प्रकारका ओखती विचार गरी प्रयोग गर्ने गर्दछ उसले सर्वत्र सफलता हासिल गर्दछ । अतः यो निघण्टुराज सर्वोत्कृष्ट हुन सक्दछ ।

**नानाविधौषधरसाह्वयवीर्य्यपाकप्रस्तावनिस्तरणपण्डितचेतनोऽपि ।
मुह्यत्यवश्यमनवेक्ष्य निघण्टुमेनं तस्मादयं विरचितो भिषजां हिताय ॥८॥**

अति विद्वान् वैद्य पनि यदि यो ग्रन्थको सहयोग लिँदैन भने उ ओखती चयन गर्दा दोमनमा पर्दछ किन कि ओखती अनेक प्रकारका हुन्छन् । वैद्यलाई रस, गुण, वीर्य, विपाक आदिको यथार्थ जानकारी दिनका लागि नै यो ग्रन्थको रचना गरिएको हो ।

**निघण्टुना विना वैद्यो विद्वान् व्याकरणं विना ।**
**अनभ्यासेन धानुष्कस्त्रयो हास्यस्य भाजनम् ॥९॥**

निघण्टु नपढेको वैद्य, व्याकरण नपढेको शास्त्र-पण्डित र अभ्यास नगरेको धनुर्धर : यी तीन प्रायः हाँसोका पात्र हुन पुग्दछन् ।

**नानादेशविशेषभाषितवशाद्यत् संस्कृतप्राकृता**
**पभ्रंशादिकनाम्नि नैव गणना द्रव्योच्चयव्याहृतौ ।**
**तस्मादत्र तु यावतास्त्युपकृतिस्तावन्मया गृह्यते**
**पाथोदैः परिपीयते किमखिलं तद्वारि वारां निधेः ॥१०॥**

संस्कृत, प्राकृत, अपभ्रंश आदि अनेक भाषामा नाम हुने हुनाले एउटै पुस्तकमा ती सबै नाम समावेश गर्न सकिन्न । त्यसैले बादलले समुद्रबाट आवश्यकता अनुसार जल लिए जसरी मैले पनि यो पुस्तकमा आवश्यकता अनुसार मात्र शब्दहरू प्रयोग गरेको छु ।

**आभीरगोपालपुलिन्दतापसाः पान्थास्तथाऽन्येऽपि च वन्यपारगाः ।**
**परीक्ष्य तेभ्यो विविधौषधाभिधारसादिलक्ष्माणि ततः प्रयोजयेत् ॥११॥**



गुफामा बस्ने आदिवासी (आभीर), गोठाला (गोपाल), प्राचीन आदिवासी विशेष (पुलिन्द), जङ्गलमा तपस्या गरेर बस्ने ऋषिमुनि (तापसा), यात्रु र अन्य बारम्बार वनमा गइरहने मानिसहरू मार्फत अनेक किसिमका ओखतीका नाम, विशेषता र कामका बारेमा जानकारी लिई त्यसको प्रयोग गर्नू पर्दछ ।

**नानाभिधेयमथ यत्र शिवासमङ्गाश्यामादिनाम निगमेषु विवेशितं यत् ।**
**प्रस्ताववीर्य्यरसयोगवशादमुष्य बुद्ध्या विमृश्य भिषजां च धृतिर्विधेया ॥१२॥**

शिवा, समङ्गा, श्यामा आदि जस्ता धेरै अर्थ दिने ओखतीलाई वीर्य, रस, योग आदिलाई बुद्धिपूर्वक विचार गरी सोही अनुसार वैद्यले उचित रोगको ओखतीमा प्रयोग गर्न जान्नु पर्दछ ।

**नामानि क्वचिदिह रूढितः स्वभावात् देश्योक्त्या क्वचन च लाञ्छनोपमाभ्याम् ।**
**वीर्य्येण क्वचिदितराह्वयादिदेशात् द्रव्याणां ध्रुवमिति सप्तधोदितानि ॥१३॥**

द्रव्यसम्बन्धी निर्णय गर्दा कतै द्रव्यको प्रसिद्धिबाट, कतै प्रभावबाट, कतै मानिसको भनाई (स्थानीय नाम) बाट, कतै लक्षणबाट, कतै उपमाबाट, कतै वीर्यबाट र कतैकतै अन्य नामका आधारमा गरी सात किसिमले गर्नुपर्दछ भनिएको छ ।

**अत्रौषधीनिवहनामगुणाभिधानप्रस्तावतस्तदुपयुक्ततयेराणि ।**
**क्षेत्रावनीधरनदीनरतिर्यगादीन् व्याख्यागुणैरतिसविस्तरमीरितानि ॥१४॥**

यो निघण्टुमा ओखती-समूहका नाम, गुणको कुरा सङ्केत, उपयोग तथा अन्य प्रकारका स्थान, पहाड, नदी, मानिस, जीव आदि नामको व्याख्या आदि मार्फत विस्तारले बताइएको छ ।

**एकः कोऽपि सचेतसां यदि मुदे कल्पेत जल्पे गुण-**
**स्तत्रान्येऽपि विनार्थनां बहुमतिं सन्तः स्वयं तन्वते ।**
**अप्यार्द्रीकृतशैलसानुगशिलामापीय चान्द्रीं सुधा-**
**मम्भोधिः कुमुदैर्दृशश्च जगतां नन्दन्ति केनार्दिताः ॥१५॥**

यो निघण्टुमा मैले बताएको एउटै गुण पनि सज्जनको प्रसन्नताका लागि काम लागे त्यसबाट सन्तहरूले अन्य गुणका बारेमा मैले नभने पनि धेरै मानेर वा जानेर आफैँ प्रचारप्रसार गर्नेछन् । समुद्रले भिजाएको पर्वतका शिखरमा रहेको पत्थररूपी चन्द्रमाको अमृत पिई फुल्ने कुमुदले संसारको नेत्र कसका प्रार्थनाले पो आनन्दित गर्दछन् र ! (आफैँ गर्दछन्) । अर्थात् असल गुण फिँजाउनका लागि सज्जनहरूलाई बताइरहन नै पर्दैन, सज्जनहरू आफैँ (अरुका) राम्रा गुणलाई फिँजाउने गर्दछन् । 

**अप्रसिद्धाभिधं चात्र यदौषधमुदीरितम् ।**
**तस्याभिधाविवेकः स्यादेकार्थादिनिरूपणे ॥१६॥**

यो निघण्टुमा नसुनेका वा प्रसिद्ध नभएका नामबाट जेजस्ता ओखतीका बारेमा बताइएको छ, तिनको नामका बारेमा एकार्थक, दुई अर्थक आदि द्रव्य पहिचानका समयमा विचार गरिनेछ ।

**रम्भाश्यामादिनाम्नां ये स्वर्गस्त्रीतरुणीति च ।**
**अर्था नानार्थतन्त्रोक्तास्त्यक्तास्तेऽस्मिन्नपार्थकाः ॥१७॥**

रम्भा, श्यामा आदि नामका जुन् स्वर्ग, स्त्री, तरुणी आदि अर्थ अनेक तन्त्रग्रन्थमा गरिएको छ, त्यस्ता ती नामको गलत अर्थलाई यहाँ ग्रहण गरिएको छैन ।

**व्यक्तिः कृताऽत्र कर्णाट-महाराष्ट्रीयभाषया ।**
**आन्ध्रलाटादिभाषास्तु ज्ञातव्यास्तद्धयाश्रयाः ॥१८॥**

यस निघण्टुमा कर्णाटक, महाराष्ट्रिय आदि भाषामा जे जे कुरा बताइएका छन्, ती नामले प्रसिद्ध आन्ध्र-लाटादि भाषा पनि जान्नु पर्दछ ।

**एतत्त्रिनेत्रगुणनीयगुणानुविद्धवर्णाढ्यवृत्तसितमौक्तिकवर्गसारम् ।**
**कण्ठे सतां सकलनिर्वृतिधामनामचिन्तामणिप्रकरदाम करोतु केलिम् ॥१९॥**

यो त्रिनेत्र शङ्करका प्रशंसनीय गुणले उनिएको वर्ण समूह तथा वृत्तरूपी सेतो मोतीवर्गको माला भएको, सम्पूर्ण निवृत्तिको स्थानरूपी चिन्तामणि समूहको डोरी सज्जनको घाँटीमा शोभायमान बनोस् अर्थात् शङ्करका प्रशंसनीय गुणले युक्त वर्ण, वृत्त आदि सफा मोतिका वर्ग स्वरूपको यो निघण्टु सज्जनका लागि आनन्ददायी बनोस् ।

**अत्रानूपादिरस्मादवनिरथ गुडूचीशताह्वादिकौ द्वौ**
**तत्प्रान्ते पर्पटादिस्तदुपरि पठितौ पिप्पलीमूलकादिः ।**
**शाल्मल्यादिः प्रभद्रादिकमनु करवीरादिराम्रादिरन्य-**
**स्तस्याग्रे चन्दनादिस्तदनु निगदितः कोमलः काञ्चनादिः ॥२०॥**
**पानीयः क्षीरशाल्यादिकमनु कथितो मांसमानुष्यकादिः**
**सिंहादिः स्याद्गदादिस्तदनु भवति सत्त्वाधिको मिश्रकोऽन्यः ।**
**एकार्थादिस्तदेतैस्त्रिकरपरिचितैः प्रातिभोन्मेषसर्गं**
**वर्गैरासाद्य वैद्यो निजमतहृदये निस्तरां निश्चिनोतु ॥२१॥**

यस निघण्टुमा आनूपादिवर्ग, अवन्यादि वर्ग, गुडूच्यादि वर्ग, शताह्वादि वर्ग, पर्पट्यादि वर्ग, पिप्पल्यादि वर्ग, मूलकादि वर्ग, शाल्मल्यादि वर्ग, प्रभद्रादि वर्ग, करवीरादि वर्ग, आम्रादि वर्ग तथा चन्दनादि वर्ग बताइएको छ । यसपछि कोमल काञ्चनादि वर्ग, पानीयादि वर्ग, क्षीरादि वर्ग, मांसादि वर्ग, मनुष्यादि वर्ग, सिंहादि वर्ग, रोगादि वर्ग, मिश्रकादि वर्ग तथा एकार्थादिवर्गका बारेमा वर्णन गरिएको छ । त्रिक (नाम, गुण, वीर्य) सँग जानकार व्यक्ति यी वर्गबाट आफ्नो क्षमतासम्बन्धी विशेषता पाई वैद्यजनले आफ्नो मतका सम्बन्धमा मनले राम्ररी निर्णय गर्नू ।

**काश्मीरेण कपर्दिपादकमलद्वन्द्वार्चनोपार्जित-**
**श्रीसौभाग्ययशःप्रतापपदवी धाम्ना प्रतिष्ठापिता ।**
**सेयं श्रीनरसिंहनामविदुषो स्ववैद्यविद्यास्थितिः**
**प्रीत्या प्राप्तसुवर्णराजिरचना चित्रोज्वला पीठिका ॥२२॥**

काश्मिरका लेखक नरहरि पण्डितले यश र साथमा भगवान शिवको चरण कमलको प्रार्थना गरेर महिमा र राजसी-स्थिति सहित धन समेत कमाएका छन् । पृथ्वीमा उहाँको स्थिति

अश्विनीकुमारसँग तुलना गर्न योग्य छ । उहाँलाई अदालतमा पद अनुसारको सुन र मनमोहक रत्नजडित सम्मानजनक आसन प्रदान गरिन्छ ।

**अन्यत्र विद्यमानत्वादुपयोगानवेक्षणात् ।**
**तथा विस्तरभीत्या च नोक्तो गुणगणो मया ॥२३॥**

अन्यत्र लेखिएको हुनाले, धेरै उपयोगिता नदेखिएकोले र ग्रन्थ ठूलो हुने डरले द्रव्य-गुणका विषयमा यहाँ मबाट धेरै कुरा बताइएको छैन ।

**॥ इति ग्रन्थप्रस्तावना ॥**

। प्रस्तावना खण्ड पूर्ण भयो ।

# अथ आनूपादिवर्गः

## अथ आनूपदेशः ओसिलो क्षेत्र

**नानाक्षौणीजनानाजलमृगसहितं निर्झरव्रातशीतं,**
**शैलाकीर्णं कनीयः कुररमुखखगालङ्कृतं ताम्रभूमि ।**
**विभ्रद्व्रीह्यादिकं यत् स्थलमतिविपुलं नीरसं यत्त्वनुष्णं,**
**पित्तघ्नं श्लेष्मवातप्रदमुदररुजापामदं स्यादनूपम् ॥१॥**

अनेक थरी मानिस, पानी र मृग भएको; झरनाहरूको समूहले गर्दा शीतल भएको; सानातिना पर्वतहरूले ढाकिएको; चखेवा आदि चराहरू भएको; तामा रङको माटो भएको; व्रिही आदि अनाजले भरिएको; अति विशाल; सुकेको; धेरै गर्मी नहुने; पित्तविकार नाशक; कफविकार र वातविकार गर्ने र पेटका रोगहरू निकाल्ने खालको ओसिलो स्थान (Wet land) लाई 'आनूपदेश' भनिन्छ ।

## ओसिलो जमिनको प्रकार

**तच्चोक्तकृत्स्ननिजलक्षणधारिभूरिच्छायावृतान्तरवहद्बहुवारिमुख्यम् ।**
**ईषत्प्रकाशसलिलं यदि मध्यमं तत् एतच्च नातिबहलाम्बु भवेत्कनीयः ॥२॥**

ओसिलो क्षेत्र (आनूपदेश) मुख्य, मध्यम र कनीय गरी तीन किसिमको हुन्छ । माथि उल्लेखित सबै विशेषताहरू सहित पानी बगिरहने खोला धेरै भएको, दलदल भूमि भएको र वनस्पतिहरूको बाक्लो छायाले ढाकिएको जमिनलाई 'मुख्य ओसिलो भूमि' भनिन्छ । जहाँ तुलनात्मक रूपमा पानी कम छ र वनस्पतिहरूको बाक्लो छायालाई कतैकतै थोरै प्रकाशले छेड्दछ त्यस्तो भूमिलाई 'मध्यम खालको ओसिलो भूमि' भनिन्छ । त्यस्तो जमिन जहाँ पानी प्रशस्त छैन त्यसलाई 'निम्न (कनीय) वा साधारण खालको ओसिलो जमिन' भनिन्छ ।

## अथ जाङ्गलदेशः (सुक्खा क्षेत्र, Dry land)

**यत्रानूपविपर्य्ययस्तनुतृणास्तीर्णा धरा धूसरा**
**मुद्गव्रीहियवादिधान्यफलदा तीव्रोष्मवत्युत्तमा ।**
**प्रायः पित्तविवृद्धिरुद्धतबलाः स्युर्नीरजः प्राणिनो**
**गावोऽजाश्च पयः क्षरन्ति बहु तत्कूपे जलं जाङ्गलम् ॥३॥**

ओसिलो जमिनको विपरित सुक्खा भूमि (जाङ्गलदेश) मुगी, गेडागुडी, धान र जौ जस्ता

अनाजका लागि उर्वर हुने गर्दछ । यस्तो न्यानो र राम्रो जमिन त्यहाँका वासिन्दाको पित्तविकार, क्षमता र धैर्यता बढाउन अनुकूल हुने गर्दछ । यस्तो जमिनमा हुने गाईबाख्राले बढी दूध दिन्छन् र यहाँ हुने इनार आदिमा पर्याप्त पानी हुन्छ ।

**सुक्खा जमिनका प्रकार**

**एतच्च मुख्यमुदितं स्वगुणैः समग्रमल्पाल्पभूरुहयुतं यदि मध्यमं तत् ।**
**तच्चापि कूपखनने सुलभाम्बु यत्तज्ज्ञेयं कनीय इति जाङ्गलकं त्रिरूपम् ॥४॥**

ओसिलो जमिन जस्तै सुक्खा जमिन पनि मुख्य, मध्यम र निम्न गरी तीन किसिमको हुन्छ । माथि उल्लेखित सबै विशेषता भएको जमिनलाई 'मुख्य सुक्खा जमिन' भनिन्छ । थोरै वनस्पति र रूखहरू भएको सुक्खा जमिनलाई 'मध्यम सुक्खा जमिन' भनिन्छ । जहाँ इनार खन्दा सजिलै पानी निस्कन्छ त्यस्तो जमिनलाई 'निम्न सुक्खा जमिन' भनिन्छ ।

**अथ साधारणदेशः (मिश्रित क्षेत्र)**

**लक्ष्मोन्मीलति यत्र किञ्चिदुभयोस्तज्जाङ्गलानूपयो-**
**र्गोधूमोल्बणयावनालविलसन्माषादिधान्योद्भवः ।**

**नानावर्णमशेषजन्तुसुखदं देशं बुधा मध्यमं**
**दोषोद्भूतिविकोपशान्तिसहितं साधारणं तं विदुः ॥५॥**

जहाँ ओसिलो र सुक्खा दुवै खाले जमिनको लक्षण देखिन्छ; जहाँ गहुँ, जौ, मास, धान आदिजस्ता सामान्य बाली प्रशस्त मात्रामा उब्जनी हुन्छ र जुन यो जमिन सबै खालका जीवका लागि अनुकूल हुन्छ त्यस्तो जमिनलाई विद्वानहरूले 'मिश्रित जमिन' भनेका छन् । यहाँ हल्का पित्तविकार हुने गर्दछ । यहाँ बस्नेहरूको उत्तेजनाले सधैं सुखदायी बाटो लिने गर्दछ ।

**साधारण वा मिश्रित देशको प्रकार**

**तच्च साधारणं द्वेधाऽऽनूपजाङ्गलयोः परम् ।**
**यत्र यत्र गुणाधिक्यं तत्र तस्य गुणं भजेत् ॥६॥**

मिश्रित जमिन 'ओसिलो-मिश्रित' र 'सुक्खा-मिश्रित' गरी दुई थरी हुन्छ । ओसिलो जमिनको गुण बढी हुने मिश्रित जमिनलाई 'ओसिलो-मिश्रित' र सुक्खा जमिनको गुण बढी हुने मिश्रित जमिनलाई 'सुक्खा-मिश्रित' जमिन भनिन्छ ।

**मुख्यं तद्देशवैषम्यान्नास्ति साधारणं क्वचित् ।**

**सूक्ष्मत्वाल्लक्ष्म तत्त्वस्य तांद्विधैर्वेदांमिष्यते ॥७॥**

ओसिलो र सुक्खा जमिन बाँडफाँडमा हुने असमानताका कारण कतै पनि आदर्श खालको मिश्रित जमिन हुँदैन । त्यसैले दुई प्रकारका जमिनका बारेमा, तिनका विशेषताहरूमा भिन्नताको उपलब्धता अनुसार विचार गरिन्छ ।

### जमिनको वर्ण अनुसारको वर्गीकरण

**क्षेत्रभेदं प्रवक्ष्यामि शिवेनाख्यातमञ्जसा ।**
**ब्राह्मं क्षात्रं च वैश्यीयं शौद्रं चेति यथाक्रमात् ॥८॥**

भगवान् शिवले बताए अनुसार जमिनको ब्राह्म, क्षत्र, वैश्यीय र शौद्र भनी गरिएको वर्गीकरण अब म क्रमैले बताउँदछु ।

### ब्राह्म क्षेत्र

**तत्र क्षेत्रे ब्रह्मभूमिरुहाढ्यं वारिस्फारं यत्कुशाङ्कुरकीर्णम् ।**
**रम्यं यच्च श्वेतमृत्स्नासमेतं तद्व्याचष्टे ब्राह्ममित्यष्टमूर्त्तिः ॥९॥**

राम्रा वनस्पति, प्रशस्त पानी, प्रचूर कुश हुने तथा सेतो माटोले रमणीय देखिने पृथ्वी भएको स्थानलाई 'ब्राह्मक्षेत्र' भनिन्छ भनी भगवान् शिवले बताउनु भएको छ ।

### क्षात्र क्षेत्र

**ताम्रभूमिवलयं विभूधरं यन्मृगेन्द्रमुखसङ्कुलं कुलम् ।**
**घोरघोषि खदिरादिदुर्गमं क्षात्रमेतदुदितं पिनाकिना ॥१०॥**

ताम्रवर्णको माटो भएको, मृग आदिका बथान घुमिरहने, खयर आदि वृक्ष सुसाएको डरलाग्दो आवाज आइरहने दुर्गम क्षेत्रलाई भगवान् शिवले 'ताम्रभूमि' वा 'क्षात्र क्षेत्र' भनी बताउनु भएको छ ।

### वैश्यीय क्षेत्र

**शातकुम्भनिभभूमिभास्वरं स्वर्णरेणुनिचितं विधानवत् ।**
**सिद्धकिन्नरसुपर्वसेवितं वैश्यमाख्यदिदमिन्दुशेखरः ॥११॥**

सुनौला रङको धुलोले गर्दा सुन जस्तै चम्किरहने माटो भएको, सिद्ध-किन्नर-देवता आदिले वसोवास गर्ने भूमिलाई 'वैश्यीयक्षेत्र' भनी शिवले बताउनु भएको छ ।

**शौद्र क्षेत्र**

**श्यामस्थलाढ्यं बहुशस्यभूतिदं लसत्तृणैर्बब्बुलवृक्षवृद्धिदम् ।**
**धान्योद्भवैः कर्षकलोकहर्षदं जगाद शौद्रं जगतौ वृषध्वजः ॥१२॥**

'शौद्र क्षेत्र'को माटो कालो हुन्छ । उत्पादकलाई खूब आनन्द दिनेगरी घाँसका विभिन्न प्रजातिहरू प्रशस्त मात्रामा उब्जन्छन् । भगवान् शिवले बताए अनुसार यस्तो जमिन घाँस तथा बबुर जस्ता वृक्षले ढाकिने गर्दछ ।

**वर्ण अनुसारका जमिनमा उत्पन्न हुने द्रव्य**

**द्रव्यं क्षेत्रादुदितमनघं ब्राह्म तत्सिद्धिदायि**
**क्षत्रादुत्थं वलिपलितजिद्विश्वरोगापहारि ।**
**वैश्याज्जातं प्रभवतितरां धातुलोहादिसिद्धौ**
**शौद्रादेतज्जनितमखिलव्याधिविद्रावकं द्राक् ॥१३॥**



ब्राह्मक्षेत्रमा हुने उत्पादन सुरक्षित र दोषरहित हुन्छ । यसले समृद्धि र उपलब्धि लेराउँदछ । क्षात्रक्षेत्रमा हुने उत्पादनले रोगहरू भगाउँदछ तथा (उमेर नपुगी) तालु खुइलन, कपाल फुल्न र कपाल झर्न दिँदैन । वैश्यीयक्षेत्रमा हुने उत्पादनले फलाम आदिजस्ता सामान्य धातुसम्बन्धी कार्य फस्टाउँदछ । शौद्रक्षेत्रमा हुने उत्पादनले रोग र अनियमितता फैलाउँदछ ।

**ब्रह्मा आदि क्षेत्रका देवता**

**ब्रह्मा शक्रः किन्नरेशस्तथा भूरित्येतेषां देवताः स्युः क्रमेण ।**
**प्रोक्तास्तत्र प्रागुमावल्लभेन प्रत्येकं ते पञ्च भूतानि वक्ष्य ॥१४॥**

ब्रह्मा, इन्द्र, कुबेर र विष्णु क्रमशः उल्लेखित चार क्षेत्रका देवता हुन्छन् । भगवान् शिवले बताए अनुसार अब म जमिनको पाञ्चभौतिक वर्गीकरण गर्नेछु ।

**पार्थिव क्षेत्र**

**पीतस्फुरद्धलयशर्करिलाश्मरम्यं पीतं यदुत्तममृगं चतुरस्रभूतम् ।**

**प्रायश्च पीतकुसुमान्वितवीरुदादि तत्पार्थिवं कठिनमुद्यदशेषतस्तु ॥१५॥**

'पार्थिव जमिन' सामान्यतः समथर र चारकुने हुन्छ । पहेँलो एवं गोलाकार गेगरिन सहितको हातमा लगाउने बाला जसरी चम्कने जमिन हुन्छ । यहाँका मृगवर्ग र लहराका फूल पनि पहेँला हुन्छन् । यो जमिन कडा र केही उठेको हुन्छ ।

## जलीय क्षेत्र

**अर्द्धचन्द्राकृतिश्वेतं कमलाभं दृषच्चितम् ।**
**नदीनदजलाकीर्णमाप्यं तत् क्षेत्रमुच्यते ॥१६॥**

अर्धाकार चन्द्रमा वा सेतो कमल जस्ता पत्थरले शोभायमान तथा नदी र खोलाले भरिपूर्ण जमिनलाई 'जलीय क्षेत्र' भनिन्छ ।

## तैजस क्षेत्र

**खदिरादिद्रुमाकीर्णं भूरिचित्रकवेणुकम् ।**
**त्रिकोणं रक्तपाषाणं क्षेत्रं तैजसमुत्तमम् ॥१७॥**



खयर आदिका वृक्ष तथा अनेक थरी बाँसले ढाकिएको, तीनकुने परेको तथा राता ढुङ्गा हुने क्षेत्रलाई 'तैजस क्षेत्र' भनिन्छ ।

## वायवीय क्षेत्र

**धूम्रस्थलं धूम्रदृषत्परीतं षट्कोणकं तूर्णमृगावकीर्णम् ।**
**शाकैस्तृणैरञ्चितरूक्षवृक्षकं प्रकारमेतत् खलु वायवीयम् ॥१८॥**

ध्वाँसे जमिन र ध्वाँसे ढुङ्गाले ढाकिएको, छ कुना परेको, तिव्र वेगले दौडने मृग आदिले भरिएको, सागपात, घाँस (काम नलाग्ने खालका) र रुखा वृक्षहरूले ढाकिएको क्षेत्रलाई 'वायवीय क्षेत्र' भनिन्छ ।

## आन्तरिक्ष क्षेत्र

**नानावर्णं वर्त्तुलं तत्प्रशस्तं प्रायः शुभ्रं पर्वताकीर्णमुच्चैः ।**
**यच्च स्थानं पावनं देवतानां प्राह क्षेत्रं त्रीक्षणस्त्वान्तरिक्षम् ॥१९॥**

चित्रविचित्र रङको, गोलाकार, सेता अग्ला पर्वतहरूले ढाकेको र देवताको पवित्र क्षेत्रलाई भगवान् शिवले 'आन्तरिक्ष क्षेत्र' भनी बताउनु भएको छ ।

**पाञ्चभौतिकक्षेत्रको उत्पादन**

**द्रव्यं व्याधिहरं बलातिशयकृत्स्वादु स्थिरं पार्थिवं**
**स्यादाप्यं कटुकं कषायमखिलं शीतं च पित्तापहम् ।**
**यत्तिक्तं लवणं च दीप्यमरुचिजिच्चोष्णं च तत्तैजसं**
**वायव्यं तु हिमोष्णमम्लमबलं स्यान्नाभसं नीरसम् ॥२०॥**

पार्थिव क्षेत्रमा रोगनाशक, अति बलदायक, स्वादिलो र लामो समय असर गर्ने खालका कुरा उत्पादन हुने गर्दछ । जलीय क्षेत्रमा पिरो र टर्रो स्वादका, शीतवीर्य भएका र पित्तविकार नाश गर्ने खालका कुरा उत्पादन हुने गर्दछ । तैजस क्षेत्रमा तीतो र नुनिलो स्वादको, दीपनी गुण भएको, अरुची नाशक र उष्णवीर्यका द्रव्य उत्पादन हुने गर्दछ । वायवीय क्षेत्रमा चिसा, उष्णवीर्य भएका, अमिला र बल नदिने खालका द्रव्य उत्पादन हुने गर्दछ । आन्तरिक्ष क्षेत्रमा रसहीन कुरा उत्पादन हुन्छन् ।

**पाञ्चभौतिकक्षेत्रका देवता**



**ब्रह्मा विष्णुश्च रुद्रोऽस्मादीश्वरोऽथ सदाशिवः ।**
**इत्येताः क्रमशः पञ्च क्षेत्रभूताधिदेवताः ॥२१॥**

ब्रह्मा, विष्णु, रुद्र, ईश्वर र सदाशिव : यी क्रमशः पाञ्चभौतिक क्षेत्रका देवता हुन् ।

**जित्वा जवादजरसैन्यमिहाजहार वीरः पुरा युधि सुधाकलशं गरुत्मान् ।**
**कीर्णैस्तदा भुवि सुधाशकलैः किलासीद्वृक्षादिकं सकलमस्य सुधांशुरीशः ॥२२॥**

प्राचीन कालमा गरुडले देवता र दानवलाई हराई अमृत लेराउने क्रममा खोसाखोस हुँदा अमृतका केही थापा पृथ्वीमा खसे । यसरी खसेको अमृतको थोपाबाट पृथ्वीमा समस्त खालका वनस्पति उम्रन पुगे ।

**तत्रोत्पन्नास्तूत्तमे क्षेत्रभागे विप्रीयादौ विप्रुषो यत्र यत्र ।**
**क्षौणीजादिद्रव्यभूयं प्रपन्नास्तास्ताः संज्ञा बिभ्रते तत्र भूयः ॥२३॥**

यसरी अमृत खस्दा वर्ण अनुसारका ब्राह्म आदि जुन जुन क्षेत्रमा खसेर जे जे वनस्पति उम्रिए ती

वनस्पतिलाइ त्यहाँ त्यहाँ क्षेत्रको नाम दिइयो ।

**एवं क्षेत्रानुगुण्येन तज्ज्ञा विप्रादिवर्णिनः ।**
**यदि वा लक्षणं वक्ष्याम्यमोहाय मनीषिणाम् ॥२४॥**

यसरी क्षेत्र अनुसार ब्राह्म (विप्र) आदि नाम रहन गयो । विद्वत् जनलाई भ्रम नहोस् भनेर अब म यिनको लक्षणका बारेमा बताउँदछु ।

विप्रादिवृक्ष

**किसलयकुसुमे प्रकाण्डशाखादिषु विशदेषु वदन्ति विप्रमेतान् ।**
**नरपतिमतिलोहितेषु वैश्यं कनकनिभेषु सितेतरेषु शूद्रम् ॥२५॥**

भर्खर पलाएका पालुवा, फूल, काण्ड र हाँगाबिँगा सुन्दर भएका वृक्षलाई 'विप्रवृक्ष' भनिन्छ । यी अङ्ग अति राता भएका वृक्षलाई 'क्षत्रिय वृक्ष' भनिन्छ । सुनौला रङका भए 'वैश्यवृक्ष' र सेतो बाहेकका भए 'शूद्रवृक्ष' भनिन्छ ।

**विप्रादिजातिसम्भूतान् विप्रादिष्वेव योजयेत् ।**

**गुणाढ्यानपि वृक्षादीन् प्रातिलोम्यं न चाचरेत् ॥२६॥**

ब्राह्मण आदि जातका लागि ब्राह्म आदि वृक्षकै प्रयोग गर्नू । गुनिलो वृक्ष भएपनि विपरित तरिकाले प्रयोग नगर्नू ।

**विप्रो विप्राद्येषु वर्णेषु राजा राजन्यादौ वैश्यमुख्येषु वैश्यः ।**
**शूद्रः शूद्राद्येषु शस्तं गुणाढ्यं द्रव्यं नैव प्रातिलोम्येन किञ्चित् ॥२७॥**

विप्रवृक्ष विप्रका लागि, क्षत्रिय वृक्ष क्षत्रियका लागि, वैश्यीयवृक्ष वैश्यका लागि र शौद्रवृक्ष शूद्रका लागि प्रयोग गर्नू । गुनिलो भएपनि विपरित तरिकाले प्रयोग नगर्नू ।

वनस्पति आदि

**द्रव्यं यदङ्कुरजमाहुरार्यास्तत्ते पुनः पञ्चविधं वदन्ति ।**
**वनस्पतिश्चापि स एव वानस्पत्यः क्षुपो वीरुदथौषधीश्च ॥२८॥**

टुसाएर उम्रने खालका जुन वनस्पतिका वारेमा बताइयो ती पुनः वनस्पति, वानस्पत्य, क्षुप, वीरुद र औषधी गरी पाँच प्रकारका हुन्छन् भनी बताइएको छ ।

**ज्ञेयः सोऽत्र वनस्पतिः फलति यः पुष्पैर्विना तैः फलं**
**वानस्पत्य इति स्मृतस्तनुरसौ ह्रस्वः क्षुपः कथ्यते ।**
**या वेल्लत्यगमादिसंश्रयवशादेषा तु वल्ली मता**
**शल्यादिः पुनरोषधिः फलपरीपाकावसानान्विता ॥२९॥**

फूल नफुली फल फल्ने बोटलाई वनस्पति भनिन्छ । फूल फुली त्यसबाट फल लाग्ने बोटलाई वानस्पत्य भनिन्छ । ससाना जरा हुने बोटलाई क्षुप भनिन्छ । अर्को रूख आदिमा चढ्ने खालका बोटलाई विरुध भनिन्छ । फल पाकेपछि मर्ने खालका विरुवालाई औषधी भनिन्छ ।

वृक्षका लिङ्गभेद

**स्त्रीपुंनपुंसकत्वेन त्रैविध्यं स्थावरेष्वपि ।**
**शृणु वक्ष्यामि तल्लक्ष्म व्यक्तमत्र यथाक्रमम् ॥३०॥**

स्थावर वृक्ष पनि स्त्री, पुरुष र नपुंसक गरी तीन किसिमका हुन्छन् । म यी वृक्षको लक्षणका बारेमा क्रमैले बताउँदछु, सुन ।



स्त्रीजाति वृक्ष

**इक्षुवेणुतरुवीरुदादयः स्कन्धकाण्डफलपुष्पपल्लवैः ।**
**स्निग्धदीर्घतनुतामनोरमास्ताः स्त्रियः खलु मता विपश्चिताम् ॥३१॥**

आँख्ला, डाँठ, फल, फूल र पालुवा हुने; चिल्ला; लामो आकार र हेर्दा सुन्दर देखिने उखु, बाँस, रुख, लहरा आदिलाई विज्ञले स्त्रीवृक्ष मानेका छन् ।

पुरुषजाति वृक्ष

**यत्र पुष्पप्रवालादि नातिदीर्घं न चाल्पकम् ।**
**स्थूलं परुषमित्येष पुमानुक्तो मनीषिभिः ॥३२॥**

फूल, डाँठ आदि न धेरै लामा न धेरै छोटा हुने तथा बोट मोटो र खस्रो हुने वृक्षलाई विज्ञहरूले पुरुषजातिको वृक्ष भनी बताएका छन् ।

### नपुंसकजातिं वृक्ष

**स्त्रीपुंसयोर्यत्र विभाति लक्ष्म द्वयोरपि स्कन्धफलादिकेषु ।**
**सन्देहदं नैकतरावधारि नपुंसकं तद्विबुधा वदन्ति ॥३३॥**

आँख्ला, फल आदिमा स्त्रीवृक्ष र पुरुषवृक्ष दुवैको लक्षण देखिने तथा स्त्रीवृक्ष र पुरुषवृक्ष के हो भनी छुट्याउन नसकिने बोटलाई विज्ञले नपुंसक वृक्ष भनी बताएका छन् ।

### जाति अनुसार वृक्षका गुण

**द्रव्यं पुमान् स्यादखिलस्य जन्तोरारोग्यदं तद्बलवर्द्धनञ्च ।**
**स्त्री दुर्बला स्वल्पगुणा गुणाढ्या स्त्रीष्वेव न क्वापि नपुंसकः स्यात् ॥३४॥**

पुरुष वृक्षका उत्पादनहरू आरोग्यदायक र बलवर्धक हुन्छन् । स्त्रीवृक्ष कम गुनिला र स्त्रीका लागि मात्र उपयोगी हुन्छन् । नपुंसक वृक्ष कसैका लागि पनि फाइदाजनक हुँदैनन् ।

**यदि स्त्रियः स्त्रीषु कृता गुणाढ्याः क्लीबानि तु क्लीबशरीरभाजाम् ।**
**सदा च सर्वत्र पुमान् प्रयुक्तो गुणावहश्चेति च केचिदाहुः ॥३५॥**



स्त्रीवृक्षको उत्पादन स्त्रीहरूका लागि प्रयोग गर्नु उत्तम हुन्छ । नपुंसक वृक्षजन्य उत्पादन उभयलिङ्गीका लागि उपयोगी हुन्छ । पुरुष वृक्षजन्य उत्पादन सधैं, सबैतिर सबैले प्रयोग गर्न हुन्छ भनी कसैकसैले बताएका छन् ।

### वृक्षको तिर्खा र भोक

**क्षुत्पिपासा च निद्रा च वृक्षादिष्वपि लक्ष्यते ।**
**मृज्जलादानतस्त्वाद्ये पर्णसङ्कोचिताऽन्तिमा ॥३६॥**

रूख आदिलाई पनि भोक, तिर्खा र निद्रा लागेको अनुभव गरिएको छ । ती आफ्नो भोक र तिर्खा जरा मार्फत मेट्ने गर्दछन् । यी कुरा नपाउँदा तिनको पात खुम्चने गर्दछ ।

### स्थावरवृक्ष र पाञ्चभौतिकत्व

**यत्काठिन्ये सा क्षितिर्योद्भवोऽम्भस्तेजस्तूष्मा वर्द्धते यत् स वातः ।**
**यद्वयच्छिद्रं तन्नभः स्थावराणामित्येतेषां पञ्चभूतात्मकत्वम् ॥३७॥**

स्थावरवृक्षमा पनि पाञ्चभौतिक गुण रहेको हुन्छ । तिनमा हुने कडापन पृथ्वी तत्वले, पालुवा आदि पलाउने काम जल तत्वले, तातोपन तेज तत्वले, वृद्धि वायु तत्वले र प्वाल, धोत्रो आदि आकाश तत्वले गर्दा हुने गर्दछ ।

**वर्गप्रशंसा**

**इत्थं देशगुणस्वरूपकथनप्रक्रान्तकान्तारज-**
**क्षेत्रद्रव्यगुणान्वयक्रममिमं वर्गं पठित्वा नरः ।**
**प्राप्नोत्याशु भिषक् प्रयोगविषयप्रावीण्यपारीणता-**
**ऽहङ्कुर्वाणसुपर्वसंसदगदङ्कारक्रियाकौशलम् ॥३८॥**

यसरी जमिन र त्यसका विशेषता, जङ्गल क्षेत्र र त्यसको उत्पादन आदि कुरा अध्ययन गर्नाले व्यक्तिले चाँडै तिनको ओखतीमा गरिने प्रयोगका बारेमा वास्तविक ज्ञान पाउँदछ । उसलाई कुनै द्विविधा रहन्न र ढुक्क भएर उपचार गर्न सक्दछ ।

**असूत सुतमीश्वरः श्रुतयशा यमष्टादशप्रभेदविधवाङ्मयाम्बुनिधिपारपारीणधीः ।**
**अमुष्य नृहरीशितुः कृतिवरस्य वर्गः कृतावसावगमदादिमः सदभिधानचूडामणौ ॥३९॥**



प्रसिद्ध पण्डित ईश्वर जसले अठार वटा शास्त्रहरू राम्ररी अध्ययन गरेका थिए अनि जो विशाल ज्ञान-सागर तर्न सक्षम थिए, उनले आफ्नै क्षेत्रका मालिक पुत्र नरहरि पाए । तिनै विद्वान नरहरिले अभिधान चूडामणि नामक यस कृतिको पहिलो अध्याय पूरा गर्दछन् ।

**॥ इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ आनूपादिवर्गः प्रथमः ॥१॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत अनूपादि वर्ग नामक पहिलो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१।

# अथ धरण्यादिवर्गः

## पृथ्वीका नामहरू

अथ धरणि धरित्री भूतधात्री धरा भूक्षिति महि धरणीडा क्ष्मावनी मेदिनीज्या ।
अवनिरुदधिवस्त्रा गौः क्षमा क्षौणिरूर्वी कुरपि वसुमतीरा काश्यपी रत्नगर्भा ॥१॥
क्षमाऽऽदिमा भूमिरिला वसुन्धरा वरा च धात्री वसुधाऽचलोर्वरा ।
विश्वम्भराद्या जगती क्षिती रसा पृथ्वी च गोत्रा पृथिवी पृथुर्मही ॥२॥
क्षौणी सर्वंसहाऽनन्ता भूतमाता च निश्चला ।
भूमी वीजप्रसूः श्यामा क्रोडकान्ता च कीर्त्तिता ॥३॥

धरणि, धरित्री, भूतधात्री, धरा, भू, क्षिति, महि, धरणी, इडा, क्ष्मा, अवनी, मेदिनी, ज्या, अवनि, उदधिवस्त्रा, गौ, क्षमा, क्षौणि, ऊर्वी, कुरपि, वसुमति, इरा, काश्यपी, रत्नगर्भा, क्षमा, आदिमा, भूमि, इला, वसुन्धरा, वरा, धात्री, वसुधा, अचला, उर्वरा, विश्वम्भरा, आद्या, जगती, क्षिती, रसा, पृथ्वी, गोत्रा, पृथिवी, पृथु, मही, क्षौणि, सर्वसहा, अनन्ता, भूतमाता, निश्चला, भूमी, वीजप्रसू, श्यामा र क्रोडकान्ता : यी पृथ्वीका संस्कृत पर्यायवाची नामहरू हुन् भनिएको छ ।



## उर्वरभूमि

सा भूमिरुर्वराख्या या सर्वशस्योद्भवप्रदा ।
समस्तवस्तूद्भवनादुर्वरा नाम भूरियम् ॥४॥

त्यो भूमिलाई उर्वर-भूमि भनिन्छ जुन भूमिमा सबै खालका अनाज उब्जनी हुन्छन् । सबै खालका वस्तु उब्जनी हुने हुनाले नै यस्तो जमिनलाई उर्वर-जमिन भनिएको हो ।

## माटोका नाम

मृन्मृत्तिका प्रशस्ता सा मृत्सा मृत्स्नेति चेष्यते ॥५॥

मृत्, मृत्तिका, प्रशस्ता, मृत्सा र मृत्स्ना : यी माटो (राम्रो खालको) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

## नुनिलो भूमि र मरुभूमि

क्षारा मृदुषरो देशस्तद्वानिरणमूषरम् ।

**खिलमप्रहतं प्राहुर्धन्वा तु मरुरुच्यते ॥६॥**

नुनिलो माटो भएको जमिनलाई उषर भनिन्छ । अनिरणम्, उषरम्, खिलम् र अप्रहतम् : यी उषर जमिनका संस्कृत पर्यायवाची नामहरू हुन् । मरुभूमिलाई धन्वा वा मरु भनिन्छ ।

### जाङ्गल प्रदेश

**मरुप्रायस्तु यो देशः स चोक्तो जाङ्गलाभिधः ।**

मरुभूमि बढी भएको देशलाई “जाङ्गल” भनिन्छ ।

### कृष्णभूमि र पाण्डुभूमि

**कृष्णमृत् कृष्णभूमिः स्यात् पाण्डुभूमिस्तु पाण्डुमृत् ॥७॥**

कालो माटो भएको जमिनलाई “कृष्णभूमि” तथा पहेँलो माटो भएको जमिनलाई “पाण्डुभूमि” भनिन्छ ।



### गेगरान र बलौटे जमिन

**स शार्करः शार्करिलो देशो यः शर्करान्वितः ।**
**सैकतः स्यात् सिकतिलः सिकतावांश्च यो भवेत् ॥८॥**

गेगरान जमिनलाई शार्कर वा शार्करिल भनिन्छ । यसैगरी बलौटे जमिनलाई सैकत वा सिकतिल भनिन्छ ।

### देश वा प्रदेश

**देशो जनपदो नीवृद्विषयश्चोपवर्त्तनम् ।**
**प्रदेशः स्थानमाख्या भूरवकाशः स्थितिः पदम् ॥९॥**

देश, जनपद, नीवृद्, विषय, उपवर्त्तनम्, प्रदेश, स्थान, भू, अवकाश र पद : यी देश (वा प्रदेश) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

### नदीमातृक र देवमातृक भूमि

**नद्यम्बुजैर्भृतो धान्यैर्नदीमातृक उच्यते ।**
**वृष्ट्यम्बुजैस्तु तैरेष देशः स्याद्देवमातृकः ॥१०॥**

नदी, कमल र अनाजले भरिपूर्ण हुने भूमिलाई नदीमातृक तथा वर्षा र कमलले भरिपूर्ण हुने भूमिलाई देवमातृक भनिन्छ ।

### द्वैमातृक भूमि

**नदीवृष्टिजलोद्भूतैर्नानाधान्यैः समावृतः ।**
**देशो द्वयानुगमनात् स द्वैमातृक उच्यते ॥११॥**

नदी र वर्षातको पानीले अनाज भरिपूर्ण हुने जमिन (देश) लाई दुवै गुण हुने हुनाले द्वैमातृक भूमि भनिन्छ ।

### मुगी आदि लगाइएको खेतका नाम



**मुद्गादीनां क्षेत्रमुद्भूतिदं यत्तन्मौद्गीनं कोद्रवीणं तथाऽन्यत् ।**
**व्रैहेयं स्यात् किञ्च शालेयमेवं बुङ्वाणव्यञ्चाणवीनञ्च विद्यात् ॥१२॥**

मुगी आदि बढी उब्जा हुने (वा लगाइएका) स्थान (वा जमिन) लाई यी नामले चिनिन्छ : मुगीको :- मौद्गीनम्, कोदोको :- कोद्रवीणम्, व्रिहीधानको -व्रैहेयम्, शालिधानको - शालेयम्, बुङ्वाण (?) को -बुङ्वाणव्यम् र आणवीन (?) को- आणवीनम् भनी जान्नू ।

**अथ माष्यं माषीणं भङ्ग्यं भाङ्गीनमुम्यमौमीनम् ।**
**तिल्यं तैलीनं स्यादिति षष्टिक्यञ्च यव्यञ्च ॥१३॥**

यसैगरी मास उब्जने क्षेत्रलाई माष्यम्, भाङ हुनेलाई भङ्ग्यम् वा भाङ्गीनम्, आलस-हलेदो वा सन हुने खेतलाई उम्यम् वा औमीनम्, तिल हुने खेतलाई तिल्यम् वा तैलीनम्, सठिया धान हुने क्षेत्रलाई षष्टिक्यम् र जौ हुने क्षेत्रलाई यव्यम् भनिन्छ ।

**शाकादेर्यत्र निष्पत्तिरेतत् स्याच्छाकशाकटम् ।**
**शाकशाकिनमित्येतत्तथा वास्तूकशाकटम् ॥१४॥**

जहाँ सागपातको खेती हुन्छ त्यस क्षेत्रलाई शाकशाकटम् वा शाकशाकिनम् भनिन्छ । यस्तै वेथेको

साग हुने क्षेत्रलाई वास्तूकशाकटम् भनिन्छ ।

### पर्वत

**अथ गिरि धरणीघ्र गोत्र भूभृत् शिखरि शिलोच्चय शैल सानुमन्तः ।**
**क्षितिभृदग नगावनीधराद्रि स्थिर कुधराश्च धराधरो धरश्च ॥१५॥**
**अहार्य्यः पर्वतो ग्रावा कटकी प्रस्थवानपि ।**
**शृङ्गी च वृक्षवांश्चेति शब्दाः शैलार्थवाचकाः ॥१६॥**

गिरी, धरणीध्र, गोत्र, भूभृत्, शिखरि, शिलोच्चय, शैल, सानुमान्, क्षितिभृत्, अग, नग, अवनीधर, अद्रि, स्थिर, कुधर, धराधर, धर, अहार्य्य, पर्वत, ग्रावा, कटकी, प्रस्थवान्, शृङ्गी र वृक्षवान् : यी पर्वतका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पर्वतका भागहरूको नाम

**मध्यमस्तु नितम्बः स्यात् कटकं मेखला च सा ।**
**तटे तटी प्रपातश्च प्रस्थे स्नुः सानुसानुनी ॥१७॥**



पर्वतको बीच भागलाई नितम्ब, कटक वा मेखला; पहाडका फेद नजिकको भिरालो जमिनलाई तट, तटी वा प्रपात; पहाड माथिको समथर भूभागलाई प्रस्थ (अधित्यका) र पहाडको चुचुरो (सम्म) लाई स्नु, सानु वा सानुनी भनिन्छ ।

### शिखर

**शृङ्गं तु शिखरं कूटं कन्दरं कन्दरा दरी ।**

पहाडको चुचुरोलाई शृङ्ग, शिखर र कूट भनिन्छ । गुफालाई कन्दर, कन्दरा वा दरी भनिन्छ ।

### दुलो वा प्वाल

**विलं गुहा शिलासन्धिर्देवखातञ्च गह्वरम् ॥१८॥**

विल, गुहा, शिलासन्धि, देवखात र गह्वर : यी दुलो (प्रायः जमिन भित्र) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

**प्रत्यन्त पर्वत आदि**

**प्रत्यन्तगिरयः पादा गण्डशैलाश्च्युतोपलाः ।**
**आकरः खनिरित्युक्तो धातवो गैरिकादयः ॥१९॥**

ठूलो पहाडसँग जोडिएर फेदमा रहेको सानो पहाडलाई प्रत्यन्तगिरि तथा पहाडबाट झरेको ढुङ्गोलाई गण्डशैल वा च्युतोपला भनिन्छ । पहाडमा हुने सुन आदि धातुको खानीलाई आकर वा खनि भनिन्छ ।

**पत्थर**

**ग्रावा प्रस्तरपाषाणौ दृषदश्मोपलः शिला ।**
**लोहानि विविधानि स्युरश्मसारादिसञ्ज्ञया ॥२०॥**

ग्रावा, प्रस्तर, पाषाण, दृषद, अश्म, उपल र शिला : यी पत्थरका संस्कृत पर्यायवाची नामहरू हुन् । अश्मसार आदि नामका अनेक थरी फलाम हुन्छन् ।

**वन**



**काननं गहनं सत्रं कान्तारं विपिनं वनम् ।**
**अरण्यमटवी दावो दवश्च वनवाचकाः ॥२१॥**

कानन, गहन, सत्र, कान्तार, विपिन, वन, अरण्य, अटवी, दाव र दव : यी वनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**उद्यान**

**अन्यदुद्यानमाक्रीडी यत्र क्रीडन्ति रागिणः ।**
**नृपालयेषु प्रमदवनमन्तःपुरोचितम् ॥२२॥**

मन बहलाउनेहरू (रागी) ले खेल्ने बगैँचालाई उद्यान वा आक्रीडी भनिन्छ । दरबार भित्र स्त्री–कक्षका लागि उपयुक्त हुने बगैँचालाई प्रमदवन भनिन्छ ।

**ठूलो वन**

**महावनमरण्यानी महारण्यं महाटवी ।**

महावन, अरण्य, महारण्य र महाटवी : यी नाम ठूलो खालको वनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**उपवन**

**अथोपवनमारामः पुरप्रान्ते वनन्तु यत् ॥२३॥**

गाउँ (वा शहर) को नजिकै हुने वन (पार्क) लाई उपवन वा आराम भनिन्छ ।

**रूख**

**कुजः क्षितिरुहोऽङ्घ्रिपः शिखरिपादपौ विष्टरः**
**कुठस्तरुरनोकहः कुरुह भूरुह द्रु द्रुमाः ।**
**अगो नगवनस्पती विटपिशाखि भूजागमा**
**महीज धरणीरुह क्षितिज वृक्ष शालादयः ॥२४॥**

कुज, क्षितिरुह, अङ्घ्रिप, शिखरि, पादप, विष्टर, कुठ, तरु, अनोकह, कुरुह, भूरुह, द्रु, द्रुम, अग, नग, वनस्पति, विटपि, शाखि, भूज, अगम, महीज, धरणीरुह, क्षितिज, वृक्ष र शाल आदि नाम रूखका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**फल फलेका वा फल फल्ने रूख**

**फलितः फलवानेष फलिनश्च फली तथा ।**
**फलेग्रहिरबन्ध्यो यः स्यादमोघफलोदयः ॥२५॥**

फलित, फलवान्, फलिन, फली, फलेग्रहि र अबन्ध्य : यी विफल नहुने गरी फल फल्ने वृक्षका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**फल नफल्ने वृक्षका नाम**

**अथावकेशी वन्ध्योऽयं विफलो निष्फलोऽफलः ।**

अवकेशी, वन्ध्य, विफल, निष्फल र अफल : यी फल नफल्ने वृक्षलाई बुझाउने संस्कृत पर्यायवाची नामहरू हुन् ।

### वानस्पत्य र वनस्पति

**उक्तौ प्रागात्मना भिन्नौ वानस्पत्यवनस्पती ॥२६॥**

वानस्पत्य र वनस्पतिको भिन्नताका बारेमा पहिले (अनुपादि वर्ग, श्लोक-२९ मा) नै बताई सकिएको छ ।

### मूल जरा

**मूलन्तु नेत्रं पादः स्यादङ्घ्रिश्चरणमित्यपि ।**

मूल, नेत्र, पाद, अङ्घ्रि र चरणः यी नाम रूख, विरुवा आदिको जराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### टुसा वा पालुवा

**उद्भेदस्त्वङ्कुरो ज्ञेयः प्ररोहोऽङ्कूर इत्यपि ॥२७॥**

उद्भेद, अङ्कुर, प्ररोह र अङ्कूर : यी टुसा वा पालुवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रूखविरुवाको सबभन्दा मोटो भाग वा फेद

**अर्वाग्भागोऽस्य बुध्नः स्यात् नितम्बः सपृथुर्भवेत् ।**

अर्वाग्भाग, बुध्न र नितम्ब : यी रूखविरुवाको सबभन्दा मोटो भाग वा फेदका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### डाँठ वा दुई आँख्ला बीचको भाग

**आस्कन्धात्तु प्रकाण्डः स्यात् काण्डो दण्डश्च कथ्यते ॥२८॥**

आस्कन्ध, प्रकाण्ड, काण्ड र दण्ड : यी डाँठ वा दुई आँख्लाका बीचको भागका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**हाँगा**

**स्कन्धप्रमाणास्य लतास्तु शाखाः स्कन्धोत्थशाखास्तु भवन्ति शालाः ।**

काँधबाट हात निस्के जसरी निस्केका हाँगालाई शाखा र माथितिर उठेको मूल हाँगोलाई शाला भनिन्छ ।

**सहायक जरा**

**जटाः शिरास्तस्य किलावरोहाः शाखा शिफा मज्जनि सारमाहुः ॥२९॥**

जटा, शिरा, अवरोह, शाखा र शिफा : यी फिँजिएका सानातिना जराका संस्कृत पर्यायवाची नामहरू हुन् । रुखको चुरोलाई मज्जा वा सार भनिन्छ ।

**रुखको खोक्रो र बोक्रा**

**निष्कुटं कोटरं प्रोक्तं त्वचि वल्कन्तु वल्कलम् ।**

रुखको खोक्रो भागलाई कोटर र निष्कुट तथा बोक्रालाई वल्क र वल्कल भनिन्छ ।

**मुना वा पालुवा वा टुसा**

**नवपुष्पाढ्यशाखाग्रे वल्लरी मञ्जरी तथा ॥३०॥**

फूलको पालुवालाई वल्लरी वा मञ्जरी भनिन्छ ।

**पात**

**पर्णं पत्रं दलं वर्हं पलाशं छदनं छदः ।**

पातलाई संस्कृतमा पर्ण, पत्र, दल, वर्ह, पलाश, छदन र छद भनिन्छ ।

**पालुवा**

**स्यात्पल्लवः किशलयः प्रवालः पल्लवं नवम् ॥३१॥**

नयाँ पातलाई पल्लव, किशलय र प्रवाल भनिन्छ ।

### रूखको हाँगा वा लहराको फैलावट र टुप्पो

**विस्तारो विटपः प्रोक्तः प्राग्रन्तु शिखरं शिरः ।**

रूख, लहरा आदिको फैलावटलाई विटप र टुप्पोलाई शिखर वा शिर भनिन्छ ।

### ठुसो र भेट्नु

**माढिः पर्णशिरा ज्ञेया वृन्तं प्रसवबन्धनम् ॥३२॥**

रूखविरुवाको फक्रिनु अघिको पातलाई माढि वा पर्णशिरा भनिन्छ । भेट्नुलाई वृन्त वा प्रसवबन्धन भनिन्छ ।

### कोपिला

**कुलक्षारकजालककलिकास्तु कुड्मले कथिताः ।**



कुलक्षारक, जालक, कलिका र कुड्मल : यी कोपिलाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### फूल

**कुसुमं सुमनः प्रसूनप्रसवसुमं सूनुफुल्लपुष्पं स्यात् ॥३३॥**

कुसुम, सुमन, प्रसून, प्रसव, सुमम्, सूनु, फुल्ल र पुष्प : यी फूलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### फूलको रस

**मकरन्दो मरन्दश्च मधु पुष्परसाह्वयम् ।**

मकरन्द, मरन्द, मधु र पुष्परस : यी फूलको रसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### फूलको पराग

**पौष्पं रजः परागः स्यान्मधुली धूलिका च सा ॥३४॥**

पौष्पम्, रज, पराग, मधुली र धूलिका : यी फूलको परागका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**फूलको गुच्छा**

**गुच्छो गुलुच्छः स्तवको गुच्छकः कुसुमोच्चयः ।**

गुच्छ, गुलुच्छ, स्तवक, गुच्छक र कुसुमोच्चय : यी फूलको गुच्छाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बास्ना**

**समं परिमलामोदगन्धसौरभ्यसौरभम् ॥३५॥**

परिमल, आमोद, गन्ध, सौरभ्य र सौरभ : यी नाम बास्नालाई बुझाउने संस्कृत पर्यायवाची नामहरू हुन् ।

**फुलेको वा फक्रेको**



**उज्जृम्भितमुज्जृम्भं स्मितमुन्मिषितं विनिद्रमुन्निद्रम् ।**
**उन्मीलितं विजृम्भितमुदबुद्धोद्भिदुरभिन्नमुद्भिन्नम् ॥३६॥**
**विकसितहसितविकस्वरविकचव्याकोशफुल्लसम्फुल्लम् ।**
**स्फुटमुदितदलितदीर्णस्फुटितोत्फुल्लप्रफुल्लमेकार्थम् ॥३७॥**

उज्जृम्भित, उज्जृम्भ, स्मित, उन्मिषित, विनिद्र, उन्निद्र, उन्मीलित, विजृम्भित, उदबुद्ध, उद्भिद, उरभिन्न, विकसित, हसित, विकस्वर, विकच, व्याकोश, फुल्ल, सम्फुल्ल, स्फुट, उदित, दलित, दीर्ण, स्फुटित, उत्फुल्ल र प्रफुल्ल : फुलेको वा फक्रेको अर्थ जनाउने संस्कृत पर्यायवाची नामहरू हुन् ।

**आधा फुलेको कोपिला वा नफक्रिएको फूल**

**निद्राणं मुद्रितं सुप्तं मिलितं मीलितं नतम् ।**
**निकूणितं सङ्कुचितं सनिद्रमलसं समम् ॥३८॥**

निद्राण, मुदित, सुप्त, मिलित, मीलित, नत, निकूणित, सङ्कुचित, सनिद्र र अलस : यी आधा फुलेको

कोपिला वा नफक्रिएको फूललाई बुझाउने संस्कृत पर्यायवाची शब्दहरू हुन् ।

**शस्य, शलाटु, वान, महीज**

**आहुस्तरूणां फलमत्र शस्यं तदाममुक्तं हि शलाटुसंज्ञम् ।**
**शुष्कन्तु वानं प्रवदन्ति गुल्मस्तम्बौ प्रकाण्डैरहितो महीजः ॥३९॥**

रूख वा बोटको फललाई शस्य भनिन्छ । नपाकेको काँचो फललाई शलाटु भनिन्छ । सुकेको फललाई वान भनिन्छ । आँख्ला नहुने वृक्षलाई गुल्म वा स्तम्ब भनिन्छ । (जरादेखि माथि हाँगाबिँगा फैलने भागसम्मको गिँडलाई प्रकाण्ड भनिन्छ । यसैले फेदबाट नै हाँगाबिँगा लाग्ने खालका बोटलाई गुल्म वा झाडी भनिएको हो ) ।

**लता (लहरा)**

**उलपं गुल्मिनी वीरुल्लता वल्ली प्रतानिनी ।**
**व्रततिः प्रततिश्चैषा विस्तीर्णा वीरुदुच्यते ॥४०॥**

उलप, गुल्मिनी, वीरुध्, लता, वल्ली, प्रतानिनी, व्रतति, प्रतति र विस्तीर्णा : यी लहराका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**नक्षत्रवृक्ष**

**अथ वक्ष्यामि नक्षत्रवृक्षानागमलक्षितान् ।**
**पूज्यानायुष्यदांश्चैव वर्धनात्पालनादपि ॥४१॥**

यसपछि नक्षत्रवृक्षका बारेमा बताउँदछु । यी कुरा शास्त्रमा बताइएका छन् । यी वृक्षलाई हुर्काइयो, संरक्षण गरियो भने यी लामो समय बाँच्दछन् । अश्विनी आदि नक्षत्र अनुसारका नक्षत्रवृक्ष वा देववृक्ष निम्नानुसार हुन्छन् :-

**विषद्रु-धात्री-तरु-हेमदुग्धा जम्बूस्तथा खादिरकृष्णवंशाः ।**
**अश्वत्थनागौ च वटः पलाशः प्लक्षस्तथाऽम्बष्ठतरुः क्रमेण ॥४२॥**
**बिल्वार्जुनौ चैव विकङ्कतोऽथ सकेसराः शम्बरसर्जवञ्जुलाः ।**
**सपानसार्काश्च शमीकदम्बास्तथाऽऽम्रनिम्बौ मधुकद्रुमः क्रमात् ॥४३॥**
**अमी नक्षत्रदैवत्या वृक्षाः स्युः सप्तविंशतिः ।**
**अश्विन्यादिक्रमादेषामेषा नक्षत्रपद्धतिः ॥४४॥**

विषद्रु (कुचिला)-अश्विनी, धात्री (अमला)-भरणी, तरु (नरिवल)-कृत्तिका, हेमदुग्धा (डुम्री)-रोहिणी, जम्बू (जामुनू)-मृगशिरा, खादिर (खयर)-आर्द्रा, कृष्णवंश (कालोबाँस) -पुनर्वसु, अश्वत्थ (पीपल)-पुष्य, नाग (नागकेशर)-अश्लेषा, वट (बर)-मघा, पलाश (पलास)-पूर्वाफाल्गुनी, प्लक्ष ( पाखरी)-उत्तराफाल्गुनी, अम्बष्ठ (बेलिचन्दा वा राते)- हस्ता, बिल्व (बेल)-चित्रा, अर्जुन (खरी) -स्वाति, विकङ्कत (काँगियो)-विशाखा, केसर (मौलसिरी)-अनुराधा, शम्बर (?)-ज्येष्ठा, सर्ज ( साल)-मूल, वञ्जुल (बेत)-पूर्वाषाढा, सपानस (?)-उत्तराषाढा, अर्क (आँक)-श्रवण, शमी-धनिष्ठा, कदम्ब (कदम)-शतभिषा, आम्र (आँप)-पूर्वभाद्रपदा, निम्ब (नीम)-उत्तरभाद्रपदा र मधुक (महुवा)-रेवती ।

**यस्त्वेतेषामात्मजन्मर्क्षभाजां मर्त्त्यः कुर्याद्द्वेषजादीन्मदान्धः ।**
**तस्यायुष्यं श्रीकलत्रञ्च पुत्रो नश्यत्येषा वर्द्धते वर्द्धनाद्यैः ॥४५॥**

जसले धैर्य गुमाई आफ्नो जन्मनक्षत्रसँग सम्बन्धित वृक्ष ओखती आदिका लागि भनी काट्दछ त्यसको आयु, सम्पत्ति, पत्नी र पुत्र नाश हुन्छ । जसले यस्ता वृक्ष हुर्काउँदछ र जोगाउँदछ उसलाई सर्वत्र फलिफाप हुन्छ ।

**आचार्योक्तौ स्फुटमथ बृहत्सुश्रुते नारदीये**
**नारायण्यां क्वचिदपि तथाऽन्यत्र तन्त्रान्तरेषु ।**
**ज्ञात्वाऽपीह प्रथितभिषजां नातिदृष्टोपयोगं**
**नैवास्माभिर्विशदितमिदं गौरवाद्ग्रन्थभीतेः ॥४६॥**

नक्षत्र र वृक्षका बीचको सम्बन्धका बारेमा सुश्रुत, नारद संहिता, नारायण संहिता आदि अन्य ग्रन्थमा आचार्यहरूले विस्तृत कुरा लेखेका छन् । यी कुरा जानेका प्रख्यात वैद्यले यी वृक्ष ओखतीका लागि अधिक प्रयोग नगर्ने हुनाले यी वृक्षका बारेमा ग्रन्थ मोटो हुने डरले धेरै कुरा यहाँ उल्लेख गरिएन ।

## तृणवृक्ष

**तालाद्या जातयः सर्वाः क्रमुकः केतकी तथा ।**
**खर्जूरीनारिकेलाद्यास्तृणवृक्षाः प्रकीर्तिताः ॥४७॥**

ताडी जातका सबै वृक्ष, सुपारी, केतकी, खजूर, नरिवल आदि जस्ता वृक्षलाई तृणवृक्ष भनिन्छ ।

### सवीर्य र निर्वीर्य औषधी

**सर्वाणि चार्द्राणि नवौषधानि सुवीर्यवन्तीति वदन्ति धीराः ।**
**सर्वाणि शुष्काणि तु मध्यमानि शुष्काणि जीर्णानि च निष्फलानि ॥४८॥**

सबै आलो वा ताजा नयाँ ओखती वीर्यशाली, सबै सुकेका ओखती मध्यम गुणका र सबै सुकेका र पुराना ओखती काम नलाग्ने हुन्छन् भनी विद्वानहरूले बताएका छन् ।

### आलो र पुरानो द्रव्यप्रयोग

**वास्तूककुटजगुडूचीवासाकुष्माण्डकादिशतपत्री ।**
**इत्यादि तु नित्यार्द्रं गुणवच्छुष्कं यदा तदा द्विगुणम् ॥४९॥**

बेथु, इन्द्रजौ, गुर्जो, असुरो, कुभिण्डो, सयपत्री आदि ओखती सधैँ आलो प्रयोग गर्नू, सुकेको प्रयोग गर्नु पर्दा दोब्बर प्रयोग गर्नू ।

**विडङ्गं मधु मण्डूरो दाडिमं पिप्पली गुडः ।**
**नागवल्लीन्दुशाल्याद्याः पुराणाः स्युर्गुणोत्तमाः ॥५०॥**

वायुविडङ्ग, मह, फलामको कीट (?), दारिम, पिप्ला, सखर, नागवल्ली (पानको लहरो ?), कपुर, शालीधान आदि पुरानो प्रयोग गर्नु उत्तम हुन्छ ।

### द्रव्यका प्रकार

**काठिन्यं मध्यकाठिन्यं मार्दवं चेति तु त्रिधा ।**
**द्रव्याणामिह सर्वेषां प्रकृतिः कथ्यते बुधैः ॥५१॥**

कडा (साह्रो), मध्यम खमलको र नरम गरी सबैखालका द्रव्य तीन थरीका हुन्छन् भनी विज्ञहरू भन्दछन् ।

### रस, वीर्य र विपाक

**द्रव्याणां सन्ति सर्वेषां पूर्वैरुक्तास्त्रयो गुणाः ।**
**रसो वीर्यं विपाकश्च ज्ञातव्यास्तेऽतियत्नतः ॥५२॥**
**रसस्तु मधुरादिः स्याद्वीर्य्यं कार्य्यसमर्थता ।**

**परिणामे गुणाढ्यत्वं विपाक इति संज्ञितम् ॥५३॥**

सबै द्रव्यमा पहिले बताएका तीन गुणहरू हुन्छन् । रस, वीर्य र विपाक नामका यी तीन गुणलाई प्रयत्नपूर्वक थाहा पाउनू । रस भन्नाले गुलियो आदिलाई, वीर्य भन्नाले ओखतीको काम गर्ने क्षमता वा फाइदा गर्ने गुणलाई तथा प्रयोग पछिको गुणात्मक परिणामलाई विपाक भनिन्छ ।

### आठ थरी वीर्य

**शीतमुष्णञ्च रूक्षञ्च स्निग्धं तीक्ष्णं तथा मृदु ।**
**पिच्छिलं विशदं चेति वीर्त्त्यमष्टविधं स्मृतम् ॥५४॥**

चिसो, तातो, रुखो, चिल्लो, तिक्खर, नरम, लेस्याइलो (वा पातलो) र बाक्लो गरी द्रव्यको वीर्य आठ प्रकारको हुन्छ भनिएको छ ।

### निर्गुणद्रव्य

**निष्कुटप्रमदकाननादिषु द्रव्यमेतदपि निर्गुणं भवेत् ।**
**क्वाप्यलीकवचनोपकर्णनात् क्वाप्यसाधुवनितादिसेवनात् ॥५५॥**

अन्तपुरः र त्यस नजिक रहेका बगैंचा आदिका द्रव्य कुनै पनि असत्य कुरा सुन्नाले तथा कुनै पनि खराब स्त्रीले देख्नाले गुणहीन हुन्छन् ।

### औषधी टिप्न अयोग्यस्थान

**जातं श्मशाने वल्मीके देशे मूत्रादिदूषिते ।**
**द्रव्यं नैवोपयोगाय भिषजामुपजायते ॥५६॥**

मसान, धमिराको गोला र मूत्रादिले दूषित स्थानमा उम्रेका द्रव्यलाई वैद्यले उपचारका लागि उपयोगमा लेराउँदैनन् ।

### औषधी चयन काल

**कन्दं हिमर्त्तौ शिशिरे च मूलं पुष्पं वसन्ते गुणदं वदन्ति ।**
**प्रबालपत्राणि निदाधकाले स्युः पङ्कजातानि शरत्प्रयोगे ॥५७॥**

कन्दमूल हेमन्तमा, जरा शिशिरमा, फूल वसन्तमा, मुना जेठ-असारमा र हिलोमा उम्रने कुरा शरद् ऋतुमा ओखतीका लागि बटुल्दा बढी गुनिलो हुन्छ ।

**निम्बोडुम्बरजम्ब्वाद्या यथाकालं गुणोत्तराः ।**
**कन्दादिष्वथ सर्वेषां पृथगेव रसादयः ॥५८॥**

नीम, डुम्री, जामुनू आदि चाहिएका बेलामा बटुल्दा नै गुनिला हुन्छन् । कन्दमूल आदि सबैमा रस, वीर्य र विपाक फरक फरक हुन्छ ।

### द्रव्यको अङ्ग अनुसारको गुण

**केचित् कन्दे केऽपि मूलेषु केचित् पत्रे पुष्पे केऽपि केचित् फलेषु ।**
**त्वच्येवान्ये वल्कले केचिदित्थं द्रव्यस्तोमा भिन्नभिन्नं गुणाढ्याः ॥५९॥**

कुनै द्रव्यको कन्दमूलमा, कुनैको जरामा, कुनैको पातमा, कुनैको फूलमा, कुनैको फलमा त कुनैको बोक्रामा बेग्लाबेग्लै तरिकाले विशेष गुण रहेको हुन्छ ।

### देश अनुसार द्रव्यको नाममा विभिन्नता



**देशे देशे योजनद्वादशान्ते भिन्नान्याहुर्द्रव्यनामानि लोके ।**
**किञ्चामीषु प्राणिनां वर्णभाषाचेष्टाच्छाया भिन्नरूपा विभाति ॥६०॥**

संसारमा देश नै पिच्छे वा हरेक बाह्र योजनको अन्तरका द्रव्यका नाम फरकफरक हुन्छन् । स्थानीय रङ, भाषा, आदत र त्यसले पार्ने छाप अनुसार ओखतीका नामाकरण गरिएका हुन्छन् ।

### ओखतीको तोकिएकै भाग प्रयोग गर्न निर्देशन

**अनिर्दिष्टप्रयोगेषु मूलं ग्राह्यं त्वगादिषु ।**
**सामान्योक्तौ प्रयोक्तव्यं प्राहुस्तोयं तु नाभसम् ॥६१॥**

कुन विरुवाको कुन भाग ओखतीका लागि प्रयोग गर्ने भनी नतोकिएको अवस्थामा त्यो विरुवाको जरा प्रयोग गर्नुपर्दछ । ओखतीका लागि कस्तो पानी प्रयोग गर्ने भनी तोकिएको छैन भने आकाशबाट परेको पानी प्रयोग गर्नुपर्दछ ।

**चूर्णकल्ककषायाणां प्रमाणं यत्र नोदितम् ।**

**तत्र द्रव्यप्रमाणेन स्वयं बुद्ध्या प्रयोजयेत् ॥६२॥**

धुलो, लेदो, काँढापानीको मात्रा बताइएको छैन भने द्रव्य हेरी वैद्यले आफैं विचार गरी प्रयोग गर्नुपर्दछ ।

**माध्वीकं सर्वमद्यानां मधूनां माक्षिकं तथा ।**
**तैलं तु तिलसम्भूतं धातवो वस्तिसम्भवाः ॥६३॥**
**शालीनां रक्तशालिः स्यात्सूप्यानां मुद्ग एव च ।**
**मूलानां पिप्पलीमूलं फलानां मदनं फलम् ॥६४॥**
**त्वचा तु गन्धद्रव्याणां पत्राणां गन्धपत्रकम् ।**
**जीवन्तिशाकं शाकानां लवणानाञ्च सैन्धवम् ॥६५॥**
**सामान्यपुष्पनिर्देशात् मालतीकुसुमं क्षिपेत् ।**
**इत्थमन्येऽपि बोद्धव्याः प्रयोगा योगलक्षिताः ॥६६॥**

मद्य मात्र भनेमा अङ्गूरको मद्य, मह मात्र भनेमा माहुरीको मह, तेल मात्र भनेमा तिलको तेल, धातु मात्र भनेमा उपलब्धता हेरी, मार्सी चामल मात्र भनेमा रातो मार्सी, सुप मात्र भनिएमा मुगी, जरा मात्र भनिएमा पिप्लाको जरा, फल मात्र भनिएमा मैनफल, गन्धद्रव्य मात्र भनिए दालचिनी, पात मात्र भनिए तेजपात, साग मात्र भनिए जिरीको साग, नुन मात्र भनिए सिधेनुन र फूल मात्र भनिएको स्थानमा मालतीको फूल प्रयोग गर्नू । यसैगरी अन्य कुराको पनि वैद्यले विचार गरी प्रयोग गर्नुपर्दछ भनी जान्नू ।



**अग्नि, वीर्य सापेक्ष र दोषहर प्रभाव**

**द्रव्यं वातहरं यत्तत् सकलं दीपनं परम् ।**
**कफहारि समं प्रोक्तं पित्तघ्नं मन्ददीपनम् ॥६७॥**

वातनाशक जेजति द्रव्य हुन्छन् ती सबै अति नै दीपन हुन्छन् । कफनाशक द्रव्यका दीपन क्षमता मध्यम खालको र पित्तनाशक द्रव्यको दीपन क्षमता कम हुन्छ ।

**यच्छीतवीर्य्यं गुरु पित्तहारि द्रव्यं नृणां वातकरं तदुक्तम् ।**
**यदुष्णवीर्यं लघु वातहारि श्लेष्मापहं पित्तकरं च तत् स्यात् ॥६८॥**

जुन द्रव्य शीतवीर्य भएको, पचाउन कठिन र पित्तविकार नाशक हुन्छ त्यसले मानिसलाई वातविकार बढाउँदछ । जुन द्रव्य उष्णवीर्यको, पचाउन सहज, वातविकार नाशक र कफविकार

नाशक हुन्छ त्यसले पित्तविकार बढाउँदछ ।

**वर्गप्रशस्ति**

**इति बहुविधदेशभूध्रभूमीरुहवनगुल्मलताभिधागुणानाम् ।**
**सविवरमभिधाय लक्ष्म साधारणमथ तच्च विशेषतोऽभिधास्ये ॥६९॥**

यसरी जमिन, पर्वत, माटो, रूख, जङ्गल, गुल्म, लहरा आदिका बारेमा सामान्य कुरा बताएपछि म यसलाई पछि विस्तारमा बताउनेछु ।

**इत्थं भूमीविपिनविषयक्षेत्रगोत्रादिनाम-**
**स्तोमाख्यानप्रकरणगुणव्याकृतिप्रौढमेनम् ।**
**वर्गं बुद्ध्वा भिषगुपचितानर्गलात्यन्तसूक्ष्म-**
**प्रज्ञालोकप्रकटितधियामाधिराज्ये भिषज्येत् ॥७०॥**

यसरी पृथ्वी, जङ्गल, प्रदेश, माटो, पर्वत आदिका बारेमा वर्णन गरियो । यो अध्याय पढेपछि वैद्य उपचार गर्न सफल हुनेछ र ओखती सम्बन्धी सूक्ष्म ज्ञानका कारण उ संसारभर प्रसिद्ध हुनेछ ।



**इत्येष वैद्यकविकल्पविधानिदानचूडामणौ मृडपरागमपारगेण ।**
**काश्मीरवंशतिलकेन कृतोपवर्गे वर्गो नृसिंहकृतिना रचितो द्वितीयः ॥**

काश्मिर राजवंशका अग्रणि एवं ज्ञानसागर पार गरेका व्यावसायिक वैद्यका लागि वैकल्पिक वैद्यग्रन्थका रूपमा नरसिंह पण्डितले लेखेको राज निघण्टु अन्तर्गत निदान चूडामणि नामक दोश्रो अध्याय समाप्त भयो ।

**॥ इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ धरण्यादिवर्गो द्वितीयः ॥२॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत धरण्यादिवर्ग नामक दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।२।

# अथ गुडूच्यादिवर्गः

गुडूची चाथ मूर्वा च पटोलोऽरण्यजस्तथा ।
काकोली च द्विधा प्रोक्ता माषपर्णी तथाऽपरे ॥१॥
मुद्गपर्णी च जीवन्ती त्रिविधा चाथ लिङ्गिनी ।
कटुकोशातकी चैव कपिकच्छुस्तथाऽपरे ॥२॥
खलता कटुतुम्बी च देवदाली तथा स्मृता ।
बन्ध्याकर्कोटकी प्रोक्ता कटुतुण्ड्याखुकर्णिका ॥३॥
द्विधेन्द्रवारुणी चात्र यवतिक्तेश्वरी तथा ।
ज्योतिष्मती द्विधा चैव द्विधा च गिरिकर्णिका ॥४॥
मोरटश्चाथ चेदिन्दीवरा वस्तान्त्रिका च सा ।
सोमवल्ली तथा वत्सादनी गोपालकर्कटी ॥५॥
काकतुण्डी द्विधा चाथ गुञ्जा द्विर्वृद्धदारु च ।
कैवर्ती ताम्रवल्ली च काण्डीरी चाथ जन्तुका ॥६॥
अम्लपर्णी तथा शङ्खपुष्पी चावर्त्तकी तथा ।
कर्णस्फोटा तथा कट्वीलता चैवामृतस्रवा ॥
पुत्रदा च पलाशी च विज्ञेयाऽत्र नवाभिधा ॥७॥



यस अध्यायमा गुर्जो, मरुई लहरो, पर्बल, दुई थरी कल्छे लहरो, वनमाष, वनमुगी, तीन थरी जीवन्ती, लिङ्गिनी, कटुकोशातकी, कपिकच्छु, ख-लता, कटुतुम्बी, देवदाली, बन्ध्याकर्कोटकी, कटुतुण्डी, आखुकर्णिका, दुई थरी इन्द्रवारुणी, यवतिक्ता, दुई थरी ज्योतिष्मती, दुई थरी गिरिकर्णिका, मोरट, इन्दीवरा, वस्तान्त्रिका, सोमवल्ली, वत्सादनी, गोपालकर्कटी, दुई थरी काकतुण्डी, दुई थरी गुञ्जा, वृद्धदारु, कैवर्ती, ताम्रवल्ली, काण्डीरी, गोपालकर्कटी, अम्लपर्णी, शङ्खपुष्पी, आवर्त्तकी, कर्णस्फोटा, कट्वीलता, अमृतस्रवा, पुत्रदा र पलाशीका बारेमा समेत बताइएको छ ।

सुमतिभिरित्थमनुक्ता बोद्धव्या वीरुधः क्रमादेताः ।
अस्मिन् वीरुद्वर्गे नाम्ना च गुणैश्च कीर्त्त्यन्ते ॥८॥

यो लहरासम्बन्धी अध्याय हो जसमा अनेक थरी लहरालाई तिनका समानार्थी शब्द र गुणहरूद्वारा वर्णन गरिएको छ । विद्वान् विद्यार्थीहरूले ती लहराका विषयमा थाहा पाउन प्रयाश गर्नुपर्दछ, जसको बारेमा यहाँ वर्णन गरिएको छैन ।

आपानीयात्परिगणनयैवाप्रसिद्धाभिधाना
नाम्नामुक्ता परिमितिकथाऽप्यत्र सर्वौषधीनाम् ।
साऽपि क्वापि स्फुटमभिधया क्वापि च प्रौढिभङ्ग्या
प्रोक्ता नोक्ता प्रथितविषये साऽपि नष्टाङ्कवाक्ये ॥९॥

पहिलो वर्गदेखि नै यहाँ धेरै अप्रसिद्ध ओखतीका नामहरूको संक्षिप्त प्रयोग भएको छ । ती पनि कतै प्रत्यक्ष त कतै परोक्ष ढङ्गले आत्मविश्वासका साथ प्रयोग गरिएका छन् । प्रसिद्ध वस्तुका लागि सङ्ख्यात्मक गणना गरिएको छैन ।

तस्मादिह न यत्रोक्ता नाम्नामङ्कादिनिर्मितिः ।
तत्र तत्राष्टसङ्ख्यैव ज्ञेया सर्वत्र सूरिभिः ॥१०॥

तसर्थ जहाँ सङ्ख्या दिइएको छैन, त्यहाँ सङ्ख्या आठ हो भनी अनुमान गर्न विद्वानहरूलाई सल्लाह दिइन्छ ।

यद्यपि क्वापि नष्टाङ्कसङ्ख्यानियतिरीक्ष्यते ।
तत्र स्फुटत्वबुद्ध्यैव नोक्ता सङ्ख्येति बुध्यताम् ॥११॥



यद्यपि कतिपय ठाउँमा सङ्ख्या उल्लेख गर्न बन्देज लगाइएको भएपनि पाठकवृन्दले त्यस्ता ठाउँमा उल्लेखित कुरा स्वयं व्याख्यात्मक छ भनी बुझ्नुपर्दछ ।

द्रव्याणां गणशो नियोगवशतो वीर्यं परे प्रोचिरे
प्राचीनैर्न च तद्वशेन निगमेषूक्तश्चिकित्साक्रमः ।
तस्यान्नैगमयोगसङ्ग्रहविदां संवादवाग्भिस्तथा
नैवास्माभिरभाणि किन्तु तदिह प्रत्येकशः कथ्यते ॥१२॥

पहिले पहिलेका लेखकहरूले द्रव्यको वीर्य तिनीहरूको प्रयोग-गण अनुसार वर्णन गर्ने गरेका छन् । तथापि उपचारका कुरा बयान गर्दा तिनले यो नियमको पालना गरेको देखिँदैन । त्यसैले मैले ती विद्वानहरुको जसरी उही कुरा दोहोऱ्याएको छैन । मैले यसलाई हरेक ओखतीसँगै बेग्लै वर्णन गर्न रुचाएको छु ।

## गुर्जो र गानेगुर्जो

ज्ञेया गुडूच्यमृतवल्ल्यमृता ज्वरारिः श्यामा वरा सुरकृता मधुपर्णिका च ।
छिन्नोद्भवाऽमृतलता च रसायनी च छिन्ना च सोमलतिकाऽमृतसम्भवा च ॥१३॥

**वत्सादनी च्छिन्नरुहा विशल्या भिषक्प्रिया कुण्डलिनी वयःस्था ।**
**जीवन्तिका नागकुमारिका च स्याच्छद्मिका सैव च चन्द्र(चण्ड)हासा ॥१४॥**
**अन्या कन्दोद्भवा कन्दामृता पिण्डगुडूचिका ।**
**बहुच्छिन्ना बहुरुहा पिण्डालुः कन्दरोहिणी ॥१५॥**
**पूर्वा वार्द्धि(चाब्धि)कराह्वा स्यादुत्तरा लोकसञ्ज्ञिका ।**
**गुडूच्योरुभयोरित्थमेकत्रिंशदिहाभिधाः ॥१६॥**

(१) गुडूची, (२) अमृतवल्ली, (३) अमृता, (४) ज्वरारि, (५) श्यामा, (६) वरा, (७) सुरकृता, (८) मधुपर्णिका, (९) छिन्नोद्भवा, (१०) अमृतलता, (११) रसायनी, (१२) छिन्ना, (१३) सोमलतिका, (१४) अमृतसम्भवा, (१५) वत्सादनी, (१६) छिन्नरुहा, (१७) विशल्या, (१८) भिषक्प्रिया, (१९) कुण्डलिनी, (२०) वयस्था, (२१) जीवन्तिका, (२२) नागकुमारिका, (२३) छद्मिका र (२४) चन्द्र(चण्ड)हासा : यी गुर्जोका तथा (१) कन्दोद्भवा, (२) कन्दामृता, (३) पिण्डगुडूचिका, (४) बहुच्छिन्ना, (५) बहुरुहा, (६) पिण्डालु र (७) कन्दरोहिणी : यी अर्को थरी गुर्जो अर्थात् गानेगुर्जोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसरी दुवै थरी गुर्जोका गरी जम्मा एकतीस नामहरू हुन्छन् ।

**ज्ञेया गुडूची गुरुरुष्णवीर्या तिक्ता कषाया ज्वरनाशिनी च ।**
**दाहार्त्तितृष्णावमिरक्तवातप्रमेहपाण्डुभ्रमहारिणी च ॥१७॥**

**कन्दोद्भवा गुडूची च कटूष्णा सन्निपातहा ।**
**विषघ्नी ज्वरभूतघ्नी वलीपलितनाशिनी ॥१८॥**

गुर्जो पचाउन कठिन, उष्णवीर्य भएको, तीतो, टर्रो, जरोनाशक तथा डाह, पीडा, तिर्खा, वाकवाकी, रक्तविकार, वातविकार, प्रमेह, पाण्डु र भ्रम नाशक पनि हुन्छ । गानेगुर्जो पिरो, उष्णवीर्यको तथा सन्निपात, विषविकार, जरो, भूतबाधा, छाला चाउरी पर्नेर कपाल फुल्ने रोग नाशक हुन्छ ।

**मरुइ लहरो (मूर्वा)**

**मूर्वा दिव्यलता मिरा मधुरसा देवी त्रिपर्णी मधु-**
**श्रेणी भिन्नदलाऽमरी मधुमती तिक्ता पृथक्पर्णिका ।**
**गोकर्णी लघुपर्णिका च दहनी तेजस्विनी मोरटा**
**देवश्रेणिमधूलिकामधुदलाः स्युः पीलुनी रक्तला ॥१९॥**
**सुखोषिता स्निग्धपर्णी पीलुपर्णी मधुस्रवा ।**
**ज्वलनी गोपवल्ली चेत्यष्टाविंशतिसंज्ञकाः ॥२०॥**

(१) मूर्वा, (२) दिव्यलता, (३) मिरा, (४) मधुरसा, (५) देवी, (६) त्रिपर्णी, (७) मधुश्रेणी, (८)

भिन्नदला, (९) अमरा, (१०) मधुमता, (११) तिक्ता, (१२) पृथक्पर्णिका, (१३) गोकर्णी, (१४) लघुपर्णिका, (१५) दहनी, (१६) तेजस्विनी, (१७) मोरटा, (१८) देवश्रेणि, (१९) मधूलिका, (२०) मधुदला, (२१) पीलुनी, (२२) रक्तला, (२३) सुखोषिता, (२४) स्निग्धपर्णी, (२५) पीलुपर्णी, (२६) मधुस्रवा, (२७) ज्वलनी र (२८) गोप : यी अठ्ठाईस नाम मरुई लहरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मूर्वा तिक्तकषायोष्णा हृद्रोगकफवातहृत् ।**
**वमिप्रमेहकुष्ठादिर्विषमज्वरहारिणी ॥२१॥**

मरुई लहरो तीतो, टर्रो, उष्णवीर्यको तथा मुटुका रोग, कफविकार र वातविकार नाशक हुन्छ । यसले वाकवाकी, प्रमेह, कुष्ठ आदि रोग र विषमज्वर नाश गर्दछ ।

### परबर (पटोल)

**स्यात्पटोलः कटुफलः कुलकः कर्कशच्छदः ।**
**राजनामाऽमृतफलः पाण्डुः पाण्डुफलो मतः ॥२२॥**
**वीजगर्भो नागफलः कुष्ठारिः कासमर्दनः ।**
**पञ्चराजिफलो ज्योत्स्नी कुष्ठघ्नः षोडशाह्वयः ॥२३॥**
**पटोलः कटुतिक्तोष्णः रक्तपित्तबलासजित् ।**
**कफकण्डूतिकुष्ठासृग्ज्वरदाहार्त्तिनाशनः ॥२४॥**

(१) पटोल, (२) कटुफल, (३) कुलक, (४) कर्कशच्छद, (५) राजनामा, (६) अमृतफल, (७) पाण्डु, (८) पाण्डुफल, (९) वीजगर्भ, (१०) नागफल, (११) कुष्ठारि, (१२) कासमर्दन, (१३) पञ्चराजिफल, (१४) राजिफल (राफलम्), (१५) ज्योत्स्नी र (१६) कुष्ठघ्न : यी सोह्र नाम परबरका संस्कृत पर्यायवाची नामहरू हुन् । परबर पिरो, तीतो, उष्णवीर्य भएको तथा रक्तपित्त र कफविकार माथि विजय हासिल गर्ने गुणको हुन्छ । यसले कफविकार, लुतो, कुष्ठ, रक्तविकार, जरो, डाहा र पीडा नाश गर्दछ ।

### कल्छेलहरो (काकोली)

**काकोली मधुरा काकी कालिका वायसोलिका ।**
**क्षीरा च ध्वांक्षिका वीरा शुक्ला धीरा च मेदुरा ॥२५॥**
**ध्वांक्षोली स्वादुमांसी च वयस्था चैव जीविनी ।**
**इत्येषा खलु काकोली ज्ञेया पञ्चदशाह्वया ॥२६॥**
**काकोली मधुरा स्निग्धा क्षयपित्तानिलार्त्तिनुत् ।**

**रक्तदाहज्वरघ्नौ च कफशुक्रविवर्द्धनौ ॥२७॥**

(१) काकोली, (२) मधुरा, (३) काकी, (४) कालिका, (५) वायसोलिका, (६) क्षीरा, (७) ध्वांक्षिका, (८) वीरा, (९) शुक्ला, (१०) धीरा, (११) मेदुरा, (१२) ध्वांक्षोली, (१३) स्वादुमांसी, (१४) वयस्था र (१५) जीविनी : यी पन्ध्र नाम भनेका निश्चय नै कल्छे लहरोका संस्कृत पर्यायवाची नामहरू हुन् । कल्छे लहरो मिठो, चिल्लो तथा क्षयरोग, पित्तविकार र वातविकार नाशक हुन्छ । यसले रक्तविकार, डाह र जरो नाश गर्दछ तथा कफ र शुक्र बढाउँदछ ।

**दूधे कल्छेलहरो (क्षीरकाकोली)**

**द्वितीया क्षीरकाकोली क्षीरशुक्ला पयस्विनी ।**
**पयस्या क्षीरमधुरा वीरा क्षीरविषाणिका ॥२८॥**
**जीववल्ली जीवशुक्ला स्यादित्येषा नवाह्वया ।**
**रसवीर्यविपाकेषु काकोल्या सदृशी च सा ॥२९॥**

दोश्रो थरी कल्छे लहरो अर्थात् दूधे कल्छेलहरोका (१) क्षीरकाकोली, (२) क्षीरशुक्ला, (३) पयस्विनी, (४) पयस्या, (५) क्षीरमधुरा, (६) वीरा, (७) क्षीरविषाणिका, (८) जीववल्ली र (९) जीवशुक्ला : यी नौ संस्कृत पर्यायवाची नामहरू हुन् । यो रस, वीर्य र विपाकमा पनि कल्छेलहरो समानकै गुणको हुन्छ ।



**बनमास (माषपर्णी)**

**माषपर्णी तु काम्बोजी कृष्णवृन्ता महासहा ।**
**आर्द्रमाषा मांसमाषा मङ्गल्या हयपुच्छिका ॥३०॥**
**हंसमाषाश्वपुच्छा च पाण्डुरा माषपत्रिका ।**
**कल्याणी वज्रमूली च शालिपर्णी विसारिणी ॥३१॥**
**आत्मोद्भवा बहुफला स्वयम्भूः सुलभा घना ।**
**इत्येषा माषपर्णी स्यादेकविंशतिनामका ॥३२॥**
**माषपर्णी रसे तिक्ता वृष्या दाहज्वरापहा ।**
**शुक्रवृद्धिकरी बल्या शीतला पुष्टिवर्धिनी ॥३३॥**

(१) माषपर्णी, (२) काम्बोजी, (३) कृष्णवृन्ता, (४) महासहा, (५) आर्द्रमाषा, (६) मांसमाषा, (७) मङ्गल्या, (८) हयपुच्छिका, (९) हंसमाषा, (१०) अश्वपुच्छा, (११) पाण्डुरा, (१२) माषपत्रिका, (१३) कल्याणी, (१४) वज्रमूली, (१५) शालिपर्णी, (१६) विसारिणी, (१७) आत्मोद्भवा, (१८) बहुफला, (१९) स्वयम्भू, (२०) सुलभा र (२१) घना : यी एक्काईस नाम बनमासका संस्कृत

पर्यायवाची नामहरू हुन् । बनमास रसमा तीतो, वीर्यवर्धक तथा डाह र जरो नाशक हुन्छ । यो शुक्रवर्धक, बलदायक, शीतवीर्य भएको र पुष्टिवर्धक हुन्छ ।

## बनमुगी (मुद्गपर्णी)

**मुद्गपर्णी क्षुद्रसहा शिम्बी मार्जारगन्धिका ।**
**वनजा रिङ्गणी ह्रस्वा शू(सू)र्पपर्णी कुरङ्गिका ॥३४॥**
**कांसिका काकमुद्गा च वनमुद्गा वनोद्भवा ।**
**अरण्यमुद्गा वन्येति ज्ञेया पञ्चदशाह्वया ॥३५॥**
**मुद्गपर्णी हिमा कासवातरक्तक्षयापहा ।**
**पित्तदाहज्वरान्हन्ति चक्षुष्या शुक्रवृद्धिकृत् ॥३६॥**

(१) मुद्गपर्णी, (२) क्षुद्रसहा, (३) शिम्बी, (४) मार्जारगन्धिका, (५) वनजा, (६) रिङ्गणी, (७) ह्रस्वा, (८) शू(सू)र्पपर्णी, (९) कुरङ्गिका, (१०) कांसिका, (११) काकमुद्गा, (१२) वनमुद्गा, (१३) वनोद्भवा, (१४) अरण्यमुद्गा र (१५) वन्या : यी पन्ध्र नाम बनमुगीका संस्कृत पर्यायवाची नामहरू हुन् । बनमुगी शीतवीर्य भएको तथा खोकी, वातरक्त र क्षयरोग नाशक हुन्छ । यसले पित्तविकार, डाह र जरो पनि नाश गर्दछ । यो आँखाका लागि हितकर र शुक्रवर्धक हुन्छ ।



## जिरीको साग (जीवन्ती)

**जीवन्ती स्याज्जीवनी जीवनीया जीवा जीव्या जीवदा जीवदात्री ।**
**शाकश्रेष्ठा जीवभद्रा च भद्रा मङ्गल्या च क्षुद्रजीवा यशस्या ॥३७॥**
**शृङ्गाटी जीवपृष्ठा च काञ्जिका शशशिम्बिका ।**
**सुपिङ्गलेति जीवन्ती ज्ञेया अष्टादशाभिधा ॥३८॥**
**जीवन्ती मधुरा शीता रक्तपित्तानिलापहा ।**
**क्षयदाहज्वरान् हन्ति कफवीर्यविवर्द्धिनी ॥३९॥**

(१) जीवन्ती, (२) जीवनी, (३) जीवनीया, (४) जीवा, (५) जीव्या, (६) जीवदा, (७) जीवदात्री, (८) शाकश्रेष्ठा, (९) जीवभद्रा, (१०) भद्रा, (११) मङ्गल्या, (१२) क्षुद्रजीवा, (१३) यशस्या, (१४) शृङ्गाटी, (१५) जीवपृष्ठा, (१६) काञ्जिका, (१७) शशशिम्बिका र (१८) सुपिङ्गला : यी अठार नाम जिरीको सागका संस्कृत पर्यायवाची नामहरू हुन् । यो साग गुलियो, शीतवीर्य भएको तथा रक्तपित्त, वातविकार, क्षयरोग, डाह र जरो नाशक हुन्छ । यसले कफ र वीर्य बढाउँदछ ।

**जीवन्तीविशेष (ठूलो जातको जिरीको साग)**

**जीवन्त्यन्या बृहत्पूर्वा पुत्रभद्रा प्रियङ्करी ।**
**मधुरा जीवपृष्ठा च बृहज्जीवा यशस्करी ॥४०॥**
**एवमेव बृहत्पूर्वा रसवीर्यबलान्विता ।**
**भूतविद्रावणी ज्ञेया वेगाद्रसनियामिका ॥४१॥**

अर्को थरी ठूलो खालको जिरीको सागका (१) बृहत्पूर्वा, (२) पुत्रभद्रा, (३) प्रियङ्करी, (४) मधुरा, (५) जीवपृष्ठा, (६) बृहज्जीवा र (७) यशस्करी संस्कृत पर्यायवाची नामहरू हुन् । यसले रस, वीर्य र बल बढाउँदछ तथा भूतबाधा नाश गर्दछ । साथै, शरीरका रसलाई वेगसँग नियमित बनाउँदछ ।

**पहेँलो जिरी साग (स्वर्णजीवन्ती)**

**हेमा हेमवती सौम्या तृणग्रन्थिर्हिमाश्रया ।**
**स्वर्णपर्णी सुजीवन्ती स्वर्णजीवा सुवर्णिका ॥४१॥**
**हेमपुष्पी स्वर्णलता स्वर्णजीवन्तिका च सा ।**
**हेमवल्ली हेमलता नामान्यस्याश्चतुर्दश ॥४२॥**
**स्वर्णजीवन्तिका वृष्या चक्षुष्या मधुरा तथा ।**
**शिशिरा वातपित्तासृग्दाहजिद्बलवर्धनी ॥४३॥**

(१) हेमा, (२) हेमवती, (३) सौम्या, (४) तृणग्रन्थि, (५) हिमाश्रया, (६) स्वर्णपर्णी, (७) सुजीवन्ती, (८) स्वर्णजीवा, (९) सुवर्णिका, (१०) हेमपुष्पी, (११) स्वर्णलता, (१२) स्वर्णजीवन्तिका, (१३) हेमवल्ली र (१४) हेमलता यी चौध नाम पहेँलो जिरी सागका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वीर्यवर्धक, आँखाका लागि फाइदाजनक, गुलियो र शीतवीर्य भएको हुन्छ । यसले वातविकार, पित्तविकार, रक्तविकार र डाह माथि विजय प्राप्त गर्दछ । यो सागले बल बढाउँदछ ।

**शिवलिङ्गी**

**लिङ्गिनी बहुपत्रा स्यादीश्वरी शैवमल्लिका ।**
**स्वयम्भूर्लिङ्गसम्भूता लिङ्गी चित्रफलाऽमृता ॥४४॥**
**पण्डोली लिङ्गजा देवी चण्डापस्तम्भिनी तथा ।**
**शिवजा शिववल्ली च विज्ञेया षोडशाह्वया ॥४५॥**
**लिङ्गिनी कटुरुष्णा च दुर्गन्धा च रसायनी ।**
**सर्वसिद्धिकरी दिव्या वश्या रसनियामिनी ॥४६॥**

(१) लिङ्गनी, (२) बहुपत्रा, (३) ईश्वरी, (४) शिवमल्लिका, (५) स्वयम्भू, (६) लिङ्गसम्भूता, (७) लिङ्गी, (८) चित्रफला, (९) अमृता, (१०) पण्डोली, (११) लिङ्गजा, (१२) देवी, (१३) चण्डा, (१४) अपस्तम्भिनी, (१५) शिवजा र (१६) शिववल्ली : यी सोह्र नाम शिवलिङ्गीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्य भएको, गनाउने र रसायनी हुन्छ । यसले सबै कुरा (रोग आदि) सिद्ध वा नाश गर्दछ । यो एक दिव्य ओखती हो । यसले वशीकरण वा नियन्त्रण गर्दछ र शरीरका रसलाई नियमित बनाउँदछ ।

## पाटेघिरौंलो

**कोषातकी कृतच्छिद्रा जालिनी कृतवेधना ।**<br>
**क्ष्वेडा सुतिक्ता घण्टाली मृदङ्गफलिनी तथा ॥४७॥**<br>
**कोशातकी तु शिशिरा कटुकाऽल्पकषायका ।**<br>
**पित्तवातकफघ्नी च मलाध्मानविशोधिनी ॥४८॥**

(१) कोषातकी, (२) कृतच्छिद्रा, (३) जालिनी, (४) कृतवेधना, (५) क्ष्वेडा, (६) सुतिक्ता, (७) घण्टाली र (८) मृदङ्गफलिनी : यी पाटेघिरौंलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्य भएको, पिरो र थोरै टर्रो हुन्छ । यसले पित्तविकार, वातविकार र कफविकारलाई नाश गर्दछ । यो घिरौंलोले मल(दिसा)जन्य आध्मान रोगलाई सफा गर्दछ ।



## काउसो

**कपिकच्छूरात्मगुप्ता स्वयंगुप्ता महर्षभी ।**<br>
**लाङ्गूली कुण्डली चण्डा मर्कटी दुरभिग्रहा ॥४९॥**<br>
**कपिरोमफला गुप्ता दुःस्पर्शा कच्छुरा जया ।**<br>
**प्रावृषेण्या शूकशिम्बी बदरी गुरुरार्षभी ॥५०॥**<br>
**शिम्बी वराहिका तीक्ष्णा रोमालुर्वनमूरिका (शूकरी) ।**<br>
**कीशरोमा रोमवल्ली स्यात्षड्विंशतिनामका ॥५१॥**<br>
**कपिकच्छूः स्वादुरसा वृष्या वातक्षयापहा ।**<br>
**शीतपित्तास्रहन्त्री च विकृता व्रणनाशिनी ॥५२॥**

(१) कपिकच्छू, (२) आत्मगुप्ता, (३) स्वयंगुप्ता, (४) महर्षभी, (५) लाङ्गूली, (६) कुण्डली, (७) चण्डा, (८) मर्कटी, (९) दुरभिग्रहा, (१०) कपिरोमफला, (११) गुप्ता, (१२) दुःस्पर्शा, (१३) कच्छुरा, (१४) जया, (१५) प्रावृषेण्या, (१६) शूकशिम्बी, (१७) बदरी, (१८) गुरु, (१९) आर्षभी, (२०) शिम्बी, (२१) वराहिका, (२२) तीक्ष्णा, (२३) रोमालु, (२४) वनमूरिका (वनशूकरी), (२५) कीशरोमा र (२६) रोमवल्ली : यी सोह्र नाम काउसोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो

गुलियो स्वादको हुन्छ । काउसो वीर्यवर्धक तथा वातविकार र क्षयरोग नाशक हुन्छ । यो शीतवीर्यको हुन्छ । यसले पित्तविकार र रक्तविकार तथा बिग्रेका घाउखटिरा ठिक गर्दछ ।

**आकाशवल्ली**

**खवल्ल्याकाशवल्ली स्यादस्पर्शा व्योमवल्लिका ।**
**आकाशनामपूर्वा सा वल्लीपर्य्यायगा स्मृता ॥५३॥**
**आकाशवल्ली कटुका मधुरा पित्तनाशिनी ।**
**वृष्या रसायनी बल्या दिव्यौषधिपरा स्मृता ॥५४॥**

(१) खवल्ली, (२) आकाशवल्ली, (३) अस्पर्शा, (४) व्योमवल्लिका तथा (५) शुरुमा आकाशका पर्यायवाची नामका पछाडि वल्ली शब्द जोडिएका सबै नामले आकाशवल्लीलाई बुझाउँदछ । यो पिरो, गुलियो र पित्तविकारनाशक हुन्छ । आकाशवल्ली वीर्यवर्धक, रसायनी र बलदायक एक दिव्य ओखती हो भनिएको छ ।

**तीते तुम्बा**

**कटुतुम्बी कटुफला तुम्बिनी कटुतुम्बिनी ।**
**बृहत्फला राजपुत्री तिक्तबीजा च तुम्बिका ॥५५॥**
**कटुतुम्बी कटुस्तीक्ष्णा वान्तिकृच्छ्वासवातजित् ।**
**कासघ्नी शोधनी शोफ-व्रणशूलविषापहा ॥५६॥**

(१) कटुतुम्बी, (२) कटुफला, (३) तुम्बिनी, (४) कटुतुम्बिनी, (५) बृहत्फला, (६) राजपुत्री, (७) तिक्तबीजा र (८) तुम्बिका : यी तीतेतुम्बाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तिक्खर, बान्ता गराउने तथा दम र वातविकारमाथि जित हासिल गर्ने गुणको हुन्छ । यसले खोकी नाश गर्दछ तथा सुजनलाई प्रशोधन गर्दछ । साथै, यसले घाउखटिरा, शूल र विषविकार नाश गर्दछ ।

**सानो बनतोरियाँ (जीमूतक)**

**जीमूतकः कण्टफला गरागरी वेणी सहा कोशफला च कटूफला ।**
**घोरा कदम्बा विषहा च कर्कटी स्याद्देवदाली खलु सारमूषिका ॥५७॥**
**वृत्तकोशा विषघ्नी च दाली लोमशपत्रिका ।**
**तुरङ्गिका च तर्कारी नाम्नामेकोनविंशतिः ॥५८॥**
**देवदाली तु तिक्तोष्णा कटुः पाण्डुकफापहा ।**
**दुर्नामश्वासकासघ्नी कामलाभूतनाशिनी ॥५९॥**

(१) जीमूतक, (२) कण्टफला, (३) गरागरी, (४) वेणी, (५) सहा, (६) कोशफला, (७) कट्फला, (८) घोरा, (९) कदम्बा, (१०) विषहा, (११) कर्कटी, (१२) देवदाली, (१३) सारमूषिका, (१४) वृत्तकोशा, (१५) विषघ्नी, (१६) दाली, (१७) लोमशपत्रिका, (१८) तुरङ्गिका र (१९) तर्कारी : यी उन्नाईस नाम सानो बनतोरियाँका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्य भएको, पिरो तथा पाण्डु र कफविकार नाशक हुन्छ । यसले अल्काई, दम र खोकीका साथै कमलपित्त र भूतबाधा समेत नाश गर्दछ ।

### फल नफल्ने चठेल (वन्ध्याकर्कोटकी)

**बन्ध्या देवी बन्ध्यकर्कोटका स्यान्नागारातिर्नागहन्त्री मनोज्ञा ।**
**पथ्या दिव्या पुत्रदात्री सुकन्दा श्रीकन्दा सा कन्दवल्लीश्वरी च ॥६०॥**
**सुगन्धा सर्पदमनी विषकण्टकिनी वरा ।**
**कुमारी भूतहन्त्री च नाम्नामित्यूनविंशतिः ॥६१॥**
**बन्ध्याकर्कोटकी तिक्ता कटूष्णा च कफापहा ।**
**स्थावरादिविषघ्नी च शस्यते सा रसायनी(ने) ॥६२॥**

(१) बन्ध्या, (२) देवी, (३) बन्ध्यकर्कोटका, (४) नागाराति, (५) नागहन्त्री, (६) मनोज्ञा, (७) पथ्या, (८) दिव्या, (९) पुत्रदात्री, (१०) सुकन्दा, (११) श्रीकन्दा, (१२) कन्दवल्ली, (१३) ईश्वरी, (१४) सुगन्धा, (१५) सर्पदमनी, (१६) विषकण्टकिनी, (१७) वरा, (१८) कुमारी र (१९) भूतहन्त्री : यी उन्नाईस नाम फल नफल्ने चठेलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो, उष्णवीर्य भएको र कफविकार नाशक हुन्छ । यसले स्थावर आदि विष (बोट, लहरो, ढुङ्गा आदिबाट निस्कने विष) नाश गर्दछ । यो रसायनी हुन्छ ।

### तीते गोलकाँक्री (तिक्ततुण्डी)

**तिक्ततुण्डी तु तिक्ताख्या कटुका कटुतुण्डिका ।**
**बिम्बी च कटुतिक्तादि-तुण्डीपर्यायगा च सा ॥६३॥**
**कटुतुण्डी कटुस्तिक्ता कफवान्तिविषापहा ।**
**अरोचकास्रपित्तघ्नी सदा पथ्या च रोचनी ॥६४॥**

(१) तिक्ततुण्डी, (२) तिक्ताख्या, (३) कटुका, (४) कटुतुण्डिका, (५) बिम्बी र (६) कटुतिक्ता : यी तीते गोलकाँक्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो तथा कफविकार, वाकवाकी, विषविकार, अरुचि, रक्तविकार र पित्तविकार नाशक हुन्छ । यो सधैं पथ्य र रुचिवर्धक हुन्छ ।

## मुसाकाने झार (आखुपर्णा)

**स्यादाखुकर्णी कृषिका द्रवन्ती चित्रा सुकर्णोन्दुरुकर्णिका च ।**
**न्यग्रोधिका मूषिकनागकर्णी स्याद्वृश्चिकर्णी बहुकर्णिका च ॥६५॥**
**माता भूमिचरी चण्डा शम्बरी बहुपादिका ।**
**प्रत्यक्श्रेणी वृषा चैव पुत्रश्रेण्यद्रिभूह्वया ॥६६॥**
**आखुकर्णी कटूष्णा च कफपित्तहरा सदा ।**
**आनाहज्वरशूलार्त्ति नाशिनी पाचनी परा ॥६७॥**

(१) आखुकर्णी, (२) कृषिका, (३) द्रवन्ती, (४) चित्रा, (५) सुकर्णा, (६) उन्दुरुकर्णिका, (७) न्यग्रोधिका, (८) मूषिकनागकर्णी, (९) वृश्चिकर्णी, (१०) बहुकर्णिका, (११) माता, (१२) भूमिचरी, (१३) चण्डा, (१४) शम्बरी, (१५) बहुपादिका, (१६) प्रत्यक्श्रेणी, (१७) वृषा र (१८) पुत्रश्रेणी : यी सत्र (तर यथार्थमा अठार हुन्छ) मुसाकानेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्य भएको तथा कफविकार, पित्तविकार, आनाह, जरो र शूल रोग नाशक हुन्छ । यो अति पाचनी हुन्छ ।

## ऐरेलु (इन्द्रवारुणी)



**ऐन्द्रीन्द्रवारुण्यरुणा मृगादनी गवादनी क्षुद्रसहेन्द्रचिर्भिटा ।**
**सूर्य्या विषघ्नी गुणकर्णिकाऽमरा माता सुवर्णा सुफला च तारका ॥६८॥**
**वृषभाक्षी गवाक्षी च पीतपुष्पीन्द्रवल्लरी ।**
**हेमपुष्पी क्षुद्रफला वारुणी बालकप्रिया ॥६९॥**
**रक्तेर्वारुविषलता शक्रवल्ली विषापहा ।**
**अमृता विषवल्ली च ज्ञेयोनत्रिंशदाह्वया ॥७०॥**
**इन्द्रवारुणिका तिक्ता कटुः शीता च रेचनी ।**
**गुल्मपित्तोदरश्लेष्मक्रिमिकुष्ठज्वरापहा ॥७१॥**

(१) ऐन्द्री, (२) इन्द्रवारुणी, (३) अरुणा, (४) मृगादनी, (५) गवादनी, (६) क्षुद्रसहा, (७) इन्द्रचिर्भिटा, (८) सूर्या, (९) विषघ्नी, (१०) गुणकर्णिका, (११) अमरा, (१२) माता, (१३) सुवर्णा, (१४) सुफला, (१५) तारका, (१६) वृषभाक्षी, (१७) गवाक्षी, (१८) पीतपुष्पी, (१९) इन्द्रवल्लरी, (२०) हेमपुष्पी, (२१) क्षुद्रफला, (२२) वारुणी, (२३) बालकप्रिया, (२४) रक्तेर्वारु, (२५) विषलता, (२६) शक्रवल्ली, (२७) विषापहा, (२८) अमृता र (२९) विषवल्ली : यी उनन्तीस नाम ऐरेलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो, शीतवीर्य भएको र रेचनी हुन्छ । यसले गुल्म, पित्तविकार, पेटका रोग, कफविकार, कीरा, कुष्ठ र जरो नाश गर्दछ ।

## ठूलो जातको ऐरेलु (विशाला)

**महेन्द्रवारुणी रम्या चित्रवल्ली महाफला ।**
**सा माहेन्द्री चित्रफला त्रपुसी त्रपुसा च सा ॥७२॥**
**आत्मरक्षा विशाला च दीर्घवल्ली बृहत्फला ।**
**स्याद्बृहद्वारुणी सौम्या नामान्यस्याश्चतुर्दश ॥७३॥**
**महेन्द्रवारुणी ज्ञेया पूर्वोक्तगुणभागिनी ।**
**रसे वीर्ये विपाके च किञ्चिदेषा गुणाधिका ॥७४॥**

(१) महेन्द्रवारुणी, (२) रम्या, (३) चित्रवल्ली, (४) महाफला, (५) माहेन्द्री, (६) चित्रफला, (७) त्रपुसी, (८) त्रपुसा, (९) आत्मरक्षा, (१०) विशाला, (११) दीर्घवल्ली, (१२) बृहत्फला, (१३) बृहद्वारुणी र (१४) सौम्या : यी चौध नाम ठूलो जातको ऐरेलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गुण पहिले बताइएको ऐरेलुका जस्तै हुन्छन् तर रस, वीर्य र पचेपछिको रसको गुण यसमा केही बढी हुन्छ ।

## कालानाथ (कालमेघ, यवतिक्ता)

**यवतिक्ता महातिक्ता दृढपादा विसर्पिणी ।**
**नाकुली नेत्रमीला च शङ्खिनी पत्रतण्डुली ॥७६॥**
**तण्डुली चाक्षपीडा च सूक्ष्मपुष्पी यशस्विनी ।**
**माहेश्वरी तिक्तयवा यावी तिक्तेति षोडश ॥७७॥**
**यवतिक्ता सतिक्ताऽम्ला दीपनी रुचितत्परा ।**
**क्रिमिकुष्ठविषमास्रदोषघ्नी रेचनी च सा ॥७८॥**

(१) यवतिक्ता, (२) महातिक्ता, (३) दृढपादा, (४) विसर्पिणी, (५) नाकुली, (६) नेत्रमीला, (७) शङ्खिनी, (८) पत्रतण्डुली, (९) तण्डुली, (१०) अक्षपीडा, (११) सूक्ष्मपुष्पी, (१२) यशस्विनी, (१३) माहेश्वरी, (१४) तिक्तयवा, (१५) यावी र (१६) तिक्ता : यी सोह्र वटा नाम बिहीँ जत्रो ऐरेलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, अमिलो, दीपनी, रुचिकर तथा कीरा, कुष्ठ, विषविकार र रक्तविकार नाशक अनि रेचनी हुन्छ ।

## रुद्रजटा

**रौद्री जटा रुद्रजटा च रुद्रा सौम्या सुगन्धा सुहता घना च ।**
**स्यादीश्वरी रुद्रलता सुपत्रा सुगन्धपत्रा सुरभिः शिवाह्वा ॥७९॥**

**पत्रवल्ली जटावल्ली रुद्राणी नेत्रपुष्करा ।**
**महाजटा जटारुद्रा नाम्ना विंशतिरीरिता ॥८०॥**
**जटा कटुरसा श्वास-कासहृद्रोगनाशिनी ।**
**भूतविद्राविणी चैव रक्षसाञ्च निबर्हिणी ॥८१॥**

(१) रौद्री, (२) जटा, (३) रुद्रजटा, (४) रुद्रा, (५) सौम्या, (६) सुगन्धा, (७) सुहता, (८) घना, (९) ईश्वरी, (१०) रुद्रलता, (११) सुपत्रा, (१२) सुगन्धपत्रा, (१३) सुरभि, (१४) शिवा(ह्वा), (१५) पत्रवल्ली, (१६) जटावल्ली, (१७) रुद्राणी, (१८) नेत्रपुष्करा, (१९) महाजटा र (२०) जटारुद्रा : यी बीस वटा नाम रुद्रजटाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो हुन्छ । यसले दम, खोकी र मुटुका रोग नाश गर्दछ । यसले भूतबाधा र राक्षसबाधा हटाउँदछ ।

**मालकागुनो (ज्योतिष्मती)**

**ज्योतिष्मती स्वर्णलताऽनलप्रभा ज्योतिर्लता सा कटभी सुपिङ्गला ।**
**दीप्ता च मेध्या मतिदा च दुर्जरा सरस्वती स्यादमृतार्कसङ्ख्यया ॥८२॥**

(१) ज्योतिष्मती, (२) स्वर्णलता, (३) अनलप्रभा, (४) ज्योतिर्लता, (५) कटभी, (६) सुपिङ्गला, (७) दीप्ता, (८) मेध्या, (९) मतिदा, (१०) दुर्जरा, (११) सरस्वती र (१२) अमृता : यी बाह्र नाम मालकागुनोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**ठूलो जातको मालकागुनो**

**तेजोवती बहुरसा कनकप्रभाऽन्या तीक्ष्णा सुवर्णनकुली लवणाग्निदीप्ता ।**
**तेजस्विनी सुरलताऽग्निफलाऽग्निगर्भा स्यात्कङ्गुणी तदनु शैलसुता सुतैला ॥८३॥**
**सुवेगा वायसी तीव्रा काकाण्डी वायसादनी ।**
**गीर्लता श्रीफली सौम्या ब्राह्मी लवणकिंशुका ॥८४॥**
**पारावतपदी पीता पीततैला यशस्विनी ।**
**मेध्या मेधाविनी धीरा स्यादेकत्रिंशदाह्वया ॥८५॥**
**ज्योतिष्मती तिक्तरसा च रूक्षा किञ्चित्कटुर्वातकफापहा च ।**
**दाहप्रदा दीपनकृच्च मेध्या प्रज्ञाञ्च पुष्णाति तथा द्वितीया ॥८६॥**

तेजोवती, बहुरसा, कनकप्रभा, तीक्ष्णा, सुवर्णनकुली, लवणाग्निदीप्ता, तेजस्विनी, सुरलता, अग्निफला, अग्निगर्भा, कङ्गुणी, शैलसुता, सुतैला, सुवेगा, वायसी, तीव्रा, काकाण्डी, वायसादनी, गी, लता, श्रीफली, सौम्या, ब्राह्मी, लवणकिंशुका, पारावतपदी, पीता, पीततैला, यशस्विनी,

मध्या, मेधाविनी र धीरा : यी एकतीस नाम ठूलो जातको मालकागुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले डाह गर्दछ । यो तीतो, रुखो र केही पिरो हुन्छ । मालकागुनो वातविकार र कफविकार नाशक हुन्छ । यो दीपनी र दिमागको ग्रहण गर्ने क्षमता तथा बुद्धि बढाउने गुणको हुन्छ । ठूलो खालको मालकागुनोमा पनि यिनै गुण हुन्छन् ।

## सेतो अपराजिता (अश्वक्षुरा)

**अश्वक्षुराद्रिकर्णी च कटभी दधिपुष्पिका ।**
**गर्दभी सितपुष्पी च श्वेतस्यन्दाऽपराजिता ॥८७॥**
**श्वेता भद्रा सुपुष्पी च विषहन्त्री त्रिरेकधा ।**
**नागपर्यायकर्णी स्यादश्वाह्वादिक्षुरीस्मृता ॥८८॥**
**गिरिकर्णी हिमा तिक्ता पित्तोपद्रवनाशिनी ।**
**चक्षुष्या विषदोषघ्नी त्रिदोषशमनी च सा ॥८९॥**

अश्वक्षुरा, अद्रिकर्णी, कटभी, दधिपुष्पिका, गर्दभी, सितपुष्पी, श्वेतस्यन्दा अपराजिता, श्वेता, भद्रा, सुपुष्पी, विषहन्त्री, नागका पर्यायवाची शब्दका पछाडि कर्णी आउने शब्द र घोडा अर्थ बुझाउने शब्दका पछाडि क्षुर आउने शब्द : यी सेतो अपराजिताका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो र पित्तले उपद्रो नाश गर्ने, आँखाका लागि हितकर, विषविकार नाशक र त्रिदोष शान्त पार्ने गुणको हुन्छ ।

## नीलो अपराजिता (नीलपुष्पी)

**नीलपुष्पी महानीला स्यान्नीला गिरिकर्णिका ।**
**गवादनी व्यक्तगन्धा नीलस्यन्दा षडाह्वया ॥९०॥**
**नीलाद्रिकर्णी शिशिरा सतिक्ता रक्तातिसारज्वरदाहहन्त्री ।**
**विच्छर्दिकोन्मादमदभ्रमार्तिश्वासातिकासामयहारिणी च ॥९१॥**

नीलपुष्पी, महानीला, नीला-गिरिकर्णिका, गवादनी, व्यक्तगन्धा र नीलस्यन्दा : यी नीलो अपराजिताका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको र तीतो तथा रक्तातिसार, जरो, डाह, वाकवाकी, उन्माद, भ्रमजन्य पीडा, दम र लहरे खोकी नाशक हुन्छ ।

## मोरट (उखुको जरा ?)

**मोरटः कीर्णपुष्पश्च पीलुपत्रो मधुस्रवः ।**
**घनमूलो दीर्घमूलः पुरुषः क्षीरमोरटः ॥९२॥**

**मोरटः क्षीरबहुलो मधुरः सकषायकः ।**
**पित्तदाहज्वरान्हन्ति वृष्यो बलविवर्द्धनः ॥९३॥**

मोरट, कीर्णपुष्प, पीलुपत्र, मधुस्रव, घनमूल, दीर्घमूल, पुरुष र क्षीरमोरट : यी मोरटका संस्कृत पर्यायवाची नामहरू हुन् । यो धेरै दुधिलो, गुलियो र टर्रो हुन्छ । यसले पित्तविकार, डाह र जरो नाश गर्दछ । यो वीर्य र बल बढाउने गुणको हुन्छ ।

### बोके (इन्दीवरा)

**इन्दीवरा युग्मफला दीर्घवृत्तोत्तमारणी ।**
**पुष्पमञ्जरिका द्रोणी करम्भा नलिका च सा ॥९४॥**
**इन्दीवरा कटुः शीता पित्तश्लेष्मापहारिका ।**
**चक्षुष्या कासदोषघ्नी व्रणक्रिमिहरा परा ॥९५॥**

इन्दीवरा, युग्मफला, दीर्घवृत्ता, उत्तमारणी, पुष्पमञ्जरिका, द्रोणी, करम्भा र नलिका : यी इन्दीवराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, शीतवीर्यको, पित्तविकार र कफविकार नाशक, आँखाका लागि हितकर, खोकीजन्य असर नाशक तथा विशेषतः घाउखटिरा ठिक गर्ने र कीरा नाश गर्ने गुणको हुन्छ ।



### बस्तान्त्री

**बस्तान्त्री वृषगन्धाख्या मेषान्त्री वृत्तपत्रिका ।**
**अजान्त्री वोकडी चैव स्यादित्येषा षडाह्वया ॥९६॥**
**बस्तान्त्री स्यात्कटुरसा कासदोषविनाशिनी ।**
**बीजदा गर्भजननी कीर्तिता भिषगुत्तमैः ॥९७॥**

बस्तान्त्री, वृषगन्धा, मेषान्त्री, वृत्तपत्रिका, अजान्त्री र वोकडी : यी लहरो विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा पिरो तथा खोकीजन्य विकार नाशक हुन्छ । यो लहरो वीर्यदायक र गर्भ बसाउने गुणको हुन्छ भनी प्रख्यात वैद्यहरूबाट बताइएको छ ।

### सोमलता

**सोमवल्ली महागुल्मा यज्ञश्रेष्ठा धनुर्लता ।**
**सोमार्हा गुल्मवल्ली च यज्ञवल्ली द्विजप्रिया ॥९८॥**
**सोमक्षीरा च सोमा च यज्ञाङ्गा रुद्रसङ्ख्यया ।**

**सोमवल्ली कटुः शीता मधुरा पित्तदाहनुत् ॥९९॥**
**तृष्णाविशोषशमनी पावनी यज्ञसाधनी ।**

(१) सोमवल्ली, (२) महागुल्मा, (३) यज्ञश्रेष्ठा, (४) धनुर्लता, (५) सोमार्हा, (६) गुल्मवल्ली, (७) यज्ञवल्ली, (८) द्विजप्रिया, (९) सोमक्षीरा, (१०) सोमा र (११) यज्ञाङ्गा : यी एघार नाम सोमलताका संस्कृत पर्यायवाची नामहरू हुन् । यो लता पिरो, शीतवीर्यको, गुलियो तथा पित्तविकार र डाह नाशक हुन्छ । यसले तिर्खारोग र विषविकारलाई शान्त पार्दछ । यो यज्ञका लागि पवित्र साधन मानिन्छ ।

**भैंसेलहरो (सौम्या)**

**सौम्या महिषवल्ली च प्रतिसोमान्त्रवल्लिका ॥१००॥**
**अपत्रवल्लिका प्रोक्ता काण्डशाखा षडाह्वया ।**
**रसवीर्यविपाके च सोमवल्लीसमा स्मृता ॥१०१॥**

(१) सौम्या, (२) महिषवल्ली, (३) प्रतिसोमा, (४) अन्त्रवल्लिका, (५) अपत्रवल्लिका र (६) काण्डशाखा : यी छ नाम भैंसेलहरोका संस्कृत पर्यायवाची नामहरू हुन् । रस, वीर्य र विपाकमा यो सोमलता समान हुन्छ ।

**पातालगरुडी**

**वत्सादनी सोमवल्ली विक्रान्ता मेचकाभिधा ।**
**पातालगारुडी तार्क्ष्री सौपर्णी गारुडी तथा ॥१०२॥**
**वासनी दीर्घकाण्डा च दृढकाण्डा महाबला ।**
**दीर्घवल्ली दृढलता नामान्यस्याश्चतुर्दश ॥१०३॥**
**वत्सादनी तु मधुरा पित्तदाहास्रदोषनुत् ।**
**वृष्या सन्तर्पणी रुच्या विषदोषविनाशिनी ॥१०४॥**

(१) वत्सादनी, (२) सोमवल्ली, (३) विक्रान्ता, (४) मेचका, (५) पातालगारुडी, (६) तार्क्ष्री, (७) सौपर्णी, (८) गारुडी, (९) वासनी, (१०) दीर्घकाण्डा, (११) दृढकाण्डा, (१२) महाबला, (१३) दीर्घवल्ली र (१४) दृढलता : यी चौध वटा नाम पातालगरुडीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो हुन्छ । यसले पित्तविकार, डाह र रक्तविकार नाश गर्दछ । यो वीर्यवर्धक, तृप्तिदायक, रुचिकर र विषविकार नाशक हुन्छ ।

### काँक्रोविशेष (गोपालकर्कटी)

**गोपालकर्कटी वन्या गोपकर्कटिका तथा ।**
**क्षुद्रेर्वारुः क्षुद्रफला गोपाली क्षुद्रचिर्भटा ॥१०५॥**
**गोपालकर्कटी शीता मधुरा पित्तनाशनी ।**
**मूत्रकृच्छ्राश्मरीमेहदाहशोषनिवर्तनी ॥१०६॥**

गोपालकर्कटी, वन्या, गोपकर्कटिका, क्षुद्रेर्वारु, क्षुद्रफला, गोपाली र क्षुद्रचिर्भटा : यी अति सानो गोठाले काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो र पित्तनाशक हुन्छ । यसले मूत्रकृच्छ्र, पत्थरी, प्रमेह, डाह र सुजन पनि नाश गर्दछ ।

### कौवाठोरी वा कागचुच्चे (काकनासा)

**काकनासा ध्वाङ्क्षनासा काकतुण्डा च वायसी ।**
**सुरङ्गी तस्करस्नायुर्ध्वाङ्क्षतुण्डा सुनासिका ॥१०७॥**
**वायसाह्वा ध्वाङ्क्षवल्ली काकाक्षी ध्वाङ्क्षनासिका ।**
**काकप्राणा च विज्ञेया स्यादित्येष त्रयोदश ॥१०८॥**

**काकनासा तु मधुरा शिशिरा पित्तहारिणी**
**रसायनी दार्ढ्यकरी विशेषात्पलितापहा ॥१०९॥**

(१) काकनासा, (२) ध्वाङ्क्षनासा, (३) काकतुण्डा, (४) वायसी, (५) सुरङ्गी, (६) तस्करस्नायु, (७) ध्वाङ्क्षतुण्डा, (८) सुनासिका, (९) वायसाह्वा, (१०) ध्वाङ्क्षवल्ली, (११) काकाक्षी, (१२) ध्वाङ्क्षनासिका र (१३) काकप्राणा : यी तेह्र नाम कौवाठोरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, पित्तविकार नाशक, रसायनी, शरीर सुदृढ बनाउने र विशेषतः उमेर नपुगी कपाल फुल्नबाट जोगाउने गुणको हुन्छ ।

### सानो काकचुच्चे वा कौवाठोरी (काकादनी)

**काकादनी काकपीलुः काकशिम्बी च रक्तला ।**
**ध्वाङ्क्षादनी वक्त्रशल्या दुर्मोहा वायसादनी ॥११०॥**
**काकतुण्डी ध्वाङ्क्षनखी वायसी काकदन्तिका**
**ध्वाङ्क्षदन्तीति विज्ञेयास्तिस्रश्च दशधाऽभिधाः ॥१११॥**
**काकादनी कटूष्णा च तिक्ता दिव्यरसायनी ।**
**वातदोषहरा रुच्या पलितस्तम्भिनी परा ॥११२॥**

(१) काकादनी, (२) काकपीलु, (३) काकशिम्बी, (४) रक्तला, (५) ध्वाङ्क्षादनी, (६) वक्त्रशल्या, (७) दुर्मोहा, (८) वायसादनी, (९) काकतुण्डी, (१०) ध्वाङ्क्षनखी, (११) वायसी, (१२) काकदन्तिका र (१३) ध्वाङ्क्षदन्ती : यी तेह्र नाम सानो कागचुच्चेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो र अति नै रसायनी हुन्छ । यसले वातविकार नाश गर्दछ, रुची जगाउँदछ र उमेर नपुगी कपाल फुल्नबाट रोक्दछ ।

## रातीगेडी

**गुञ्जा चूडामणिः सौम्या शिखण्डी कृष्णलाऽरुणा ।**
**ताम्रिका शीतपाकी स्यादुच्चटा कृष्णचूडिका ॥११३॥**
**रक्ता च रक्तिका चैव काम्भोजी भिल्लिभूषणा ।**
**वन्यास्या मानचूडा च विज्ञेया षोडशाह्वया ॥११४॥**

(१) गुञ्जा, (२) चूडामणि, (३) सौम्या, (४) शिखण्डी, (५) कृष्णला, (६) अरुणा, (७) ताम्रिका, (८) शीतपाकी, (९) उच्चटा, (१०) कृष्णचूडिका, (११) रक्ता, (१२) रक्तिका, (१३) काम्भोजी, (१४) भिल्लिभूषणा, (१५) वन्यास्या र (१६) मानचूडा : यी सोह्र नाम रातीगेडीका संस्कृत पर्यायवाची नामहरू हुन् । 

## सेतो रातीगेडी

**द्वितीया श्वेतकाम्भोजी श्वेतगुञ्जा भिराटिका ।**
**काकादनी काकपीलुर्वक्त्रशल्या षडाह्वया ॥११५॥**

(१) श्वेतकाम्भोजी, (२) श्वेतगुञ्जा, (३) भिराटिका, (४) काकादनी, (५) काकपीलु र (६) वक्त्रशल्या : यी छ नाम दोश्रो सेतो रातीगेडीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## रातीगेडीका गुण

**गुञ्जाद्वयन्तु तिक्तोष्णं बीजं वान्तिकरी शिफा ।**
**शूलघ्नं विषकृत् पत्रं वश्ये श्वेतञ्च शस्यते ॥११६॥**

दुवै थरी रातीगेडी तीता हुन्छन् । यिनको बीज उष्णवीर्यका र जरा बान्ताकारक हुन्छन् । यिनका पात शूल नाशक तर विषालु हुन्छन् । वशीकरणका लागि सेतो रातीगेडी उत्तम हुन्छ ।

### बाटुल्पाते (वृद्धदारुक)

**वृद्धदारुक आवेगी जुङ्गको दीर्घबालुकः ।**
**वृद्धः कोटरपुष्पी स्यादजान्त्री छागलान्त्रिका ॥११७॥**
**जीर्णदारु द्वितीया स्याज्जीर्णा फञ्जी सुपुष्पिका ।**
**अजरा सूक्ष्मपत्रा च विज्ञेया च षडाह्वया ॥११८॥**
**वृद्धदारुद्वयं गौल्यं पिच्छिलं कफवातहृत्**
**बल्यं कासामदोषघ्नं द्वितीयं स्वल्पवीर्य्यदम् ॥११९॥**

वृद्धदारुक, आवेगी, जुङ्गक, दीर्घबालुक, वृद्ध, कोटरपुष्पी, अजान्त्री र छागलान्त्रिका : यी ठूलो बाटुल्पातेका तथा (१) जीर्णदारु, (२) जीर्णा, (३) फञ्जी, (४) सुपुष्पिका, (५) अजरा र (६) सूक्ष्मपत्रा : यी छ नाम दोश्रो सानो बाटुल्पातेका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै थरी बाटुल्पाते गुलिया, लेस्याइला तथा कफविकार र वातविकार नाशक हुन्छन् । यी बलदायक, खोकी र आमविकार नाशक हुन्छन् । दोश्रो अर्थात् सानो बाटुल्पाते कम गुनिलो हुन्छ ।

### कालो ऐँसेलु (कैवर्तिका)

**कैवर्तिका सुरङ्गा च लता वल्ली द्रुमारुहा ।**
**रिङ्गिणी वस्त्ररङ्गा च भगा चेत्यष्टधाऽभिधा ॥१२०॥**
**कैवर्तिका लघुर्वृष्या कषाया कफनाशनी ।**
**कासश्वासहरा चैव सैव मन्दाग्निदोषनुत् ॥१२१॥**

(१) कैवर्तिका, (२) सुरङ्गा, (३) लता, (४) वल्ली, (५) द्रुमारुहा, (६) रिङ्गिणी, (७) वस्त्ररङ्गा र (८) भगा : यी आठ नाम कालो फल हुने ऐँसेलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, वीर्यवर्धक, टर्रो र कफनाशक हुन्छ । यसले खोकी, दम र मन्द-पाचनशक्ति सम्बन्धी विकारलाई नाश गर्दछ ।

### रत्नाउलो (ताम्रवल्ली)

**ताली तमाली ताम्रा च ताम्रवल्ली तमालिका ।**
**सूक्ष्मवल्ली सुलोमा च शोधनी तालिका नव ॥१२२॥**
**ताम्रवल्ली कषाया स्यात् कफदोषविनाशनी ।**
**मुखकण्ठोत्थदोषघ्नी श्लेष्मशुद्धिकरी परा ॥१२३॥**

(१) ताली, (२) तमाली, (३) ताम्रा, (४) ताम्रवल्ली, (५) तमालिका, (६) सूक्ष्मवल्ली, (७) सुलोमा, (८) शोधनी र (९) तालिका : यी नौ नाम रत्नाउलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो हुन्छ । यसले कफविकार, मुखका रोग र घाँटीका रोग नाश गर्दछ । यसले कफलाई राम्ररी (विशेष तरिकाले) सफा गर्दछ ।

**करेलो (काण्डीर)**

**काण्डीरः काण्डकटुको नासासंवेदनः पटुः ।**
**उग्रकाण्डस्तोयवल्ली कारवल्ली सुकाण्डकः ॥१२४॥**
**काण्डीरः कटुतिक्तोष्णः सरो दुष्टव्रणार्तिनुत् ।**
**लूतागुल्मोदरप्लीह शूलमन्दाग्निनाशनः ॥१२५॥**

काण्डीर, काण्डकटुका, नासासंवेदन, पटु, उग्रकाण्ड, तोयवल्ली, कारवल्ली र सुकाण्डक : यी करेलाका संस्कृत पर्यायवाची नामहरू हुन् । करेलो पिरो, तीतो र उष्णवीर्यको हुन्छ । यसले मलमूत्रलाई तलतिर सार्दछ तथा पुराना घाउखटिराको पीडा कम गर्दछ । करेलोले लुतो, गुल्म, पेटका रोग, फियोका रोग, शूल र कमजोर पाचनशक्तिसम्बन्धी रोग नाश गर्दछ ।



**जन्तुका**

**जन्तुका जन्तुकारी च जननी चक्रवर्तिनी ।**
**तिर्यक्फला निशान्धा च बहुपत्रा सुपत्रिका ॥१२६॥**
**राजकृष्णा जनेष्टा च कपिकच्छुफलोपमा ।**
**रञ्जनी सूक्ष्मवल्ली च भ्रमरी कृष्णवल्लिका ॥१२७॥**
**विज्जुलिका वृक्षरुहा ग्रन्थिपर्णी सुवल्लिका ।**
**तरुवल्ली दीर्घफला एकविंशतिसञ्ज्ञका ॥१२८॥**
**जन्तुका शिशिरा तिक्ता रक्तपित्तकफापहा ।**
**दाहतृष्णावमिघ्नी च रुचिकृद्दीपनी परा ॥१२९॥**

(१) जन्तुका, (२) जन्तुकारी, (३) जननी, (४) चक्रवर्तिनी, (५) तिर्यक्फला, (६) निशान्धा, (७) बहुपत्रा, (८) सुपत्रिका, (९) राजकृष्णा, (१०) जनेष्टा, (११) कपिकच्छुफलोपमा, (१२) रञ्जनी, (१३) सूक्ष्मवल्ली, (१४) भ्रमरी, (१५) कृष्णवल्लिका, (१६) विज्जुलिका, (१७) वृक्षरुहा, (१८) ग्रन्थिपर्णी, (१९) सुवल्लिका, (२०) तरुवल्ली र (२१) दीर्घफला : यी एक्काईस नाम जन्तुकाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो, तथा रक्तपित्त, कफविकार, डाह, तिर्खा र वाकवाकी नाशक हुन्छ । जन्तुका रुचिकर र अत्यन्त दीपनी हुन्छ ।

## पुरनी (अत्यम्लपर्णी)

**अत्यम्लपर्णी तीक्ष्णा च कण्डुला वल्लिसूरणा ।**
**वल्ली करवडादिश्च वनस्थाऽरण्यवासिनी ॥१३०॥**
**अत्यम्लपर्णी तीक्ष्णाम्ला प्लीहशूलविनाशनी**
**वातहृद्दीपनी रुच्या गुल्मश्लेष्मामयापहा ॥१३१॥**

अत्यम्लपर्णी, तीक्ष्णा, कण्डुला, वल्लिसूरणा, वल्ल, करवडादि, वनस्था र अरण्यवासिनी : यी पुरनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तिक्खर, अमिलो तथा फियोका रोग, शूल र वातविकार नाशक हुनुका साथै दीपनी, रुचिकर तथा गुल्म र कफविकारजन्य रोग नाशक हुन्छ ।

## शङ्खपुष्पी

**शङ्खपुष्पी सुपुष्पी च शङ्खाह्वा कम्बुमालिनी ।**
**सितपुष्पी कम्बुपुष्पी मेध्या वनविलासिनी ॥१३२॥**
**चिरिण्टी शङ्खकुसुमा भूलग्ना शङ्खमालिनी ।**
**इत्येषा शङ्खपुष्पी स्यादुक्ता द्वादशनामभिः ॥१३३॥**
**शङ्खपुष्पी हिमा तिक्ता मेधाकृत्स्वरकारिणी ।**
**ग्रहभूतादिदोषघ्नी वशीकरणसिद्धिदा ॥१३४॥**

(१) शङ्खपुष्पी, (२) सुपुष्पी, (३) शङ्खाह्वा, (४) कम्बुमालिनी, (५) सितपुष्पी, (६) कम्बुपुष्पी, (७) मेध्या, (८) वनविलासिनी, (९) चिरिण्टी, (१०) शङ्खकुसुमा, (११) भूलग्ना र (१२) शङ्खमालिनी : यी बाह्र वटा नाम शङ्खपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । शङ्खपुष्पी शीतवीर्यको, तीतो, दिमागको ग्रहण गर्ने क्षमता बढाउने र स्वर खुलाउने गुणको हुन्छ । यसले ग्रहबाधा र भूतबाधा हटाउँदछ तथा मोहनी लगाउने काममा सफलता प्रदान गर्दछ ।

## मृगासिङ्ग (आवर्त्तकी)

**आवर्त्तकी तिन्दुकिनी विभाण्डी विषाणिका रङ्गलता मनोज्ञा ।**
**सा रक्तपुष्पी महदादिजाली सा पीतकीलाऽपि च चर्मरङ्गा ॥१३५॥**
**वामावर्ता च सम्प्रोक्ता (संयुक्ता) भूसङ्ख्या शशिसंयुता ।**
**आवर्त्तकी कषायाम्ला शीतला पित्तहारिणी ॥१३६॥**

(१) आवर्त्तकी, (२) तिन्दुकिनी, (३) विभाण्डी, (४) विषाणिका, (५) रङ्गलता, (६) मनोज्ञा, (७) रक्तपुष्पी, (८) महदादिजाली, (९) पीतकीला, (१०) चर्मरङ्गा र (११) वामावर्ता : यी एघार नाम

मृगासिङ्गाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टरो, अमिलो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ ।

### कनफोडा (कर्णस्फोटा)

**कर्णस्फोटा श्रुतिस्फोटा त्रिपुटा कृष्णतण्डुला ।**
**चित्रपर्णी स्फोटलता चन्द्रिका चार्धचन्द्रिका ॥१३७॥**
**कर्णस्फोटा कटुस्तिक्ता हिमा सर्वविषापहा ।**
**ग्रहभूतादिदोषघ्नी सर्वव्याधिविनाशिनी ॥१३८॥**

कर्णस्फोटा, श्रुतिस्फोटा, त्रिपुटा, कृष्णतण्डुला, चित्रपर्णी, स्फोटलता, चन्द्रिका र अर्धचन्द्रिका : यी कनफोडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, शीतवीर्यको र सबैखालका विषविकार नाशक हुन्छ । यसले ग्रहबाधा, भूतबाधा आदि जस्ता दोष र सबै खालका रोग नाश गर्दछ ।

### कट्वी

**कट्वी कटुकवल्ली च सुकाष्ठा काष्ठवल्लिका ।**
**सुवल्ली च महावल्ली पशुमोहनिका कटुः ॥१३९॥**
**कट्वी तु कटुका शीता कफश्वासार्तिनाशनी ।**
**नानाज्वरहरा रुच्या राजयक्ष्मनिवारिणी ॥१४०॥**



कट्वी, कटुकवल्ली, सुकाष्ठा, काष्ठवल्लिका, सुवल्ली, महावल्ली, पशुमोहनिका र कटु : यी कट्वीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र शीतवीर्यको हुन्छ । यसले कफविकार, दम र पीडा नाश गर्दछ । कट्वीले अनेक थरी जरो नाश गर्दछ, रुची जगाउँदछ र क्षयरोग पनि ठिक गर्दछ ।

### जडेलो (अमृतस्रवा)

**ज्ञेयाऽमृतस्रवा वृक्षारुहाख्या तोयवल्लिका ।**
**घनवल्ली सितलता नामभिः शरसम्मिता ॥१४१॥**
**उक्ताऽमृतस्रवा पथ्या ईषत्तिक्ता रसायनी ।**
**विषघ्नी व्रणकुष्ठादीन् कामलां श्वयथुं जयेत् ॥१४२॥**

(१) अमृतस्रवा, (२) वृक्षारुहा, (३) तोयवल्लिका, (४) घनवल्ली र (५) सितलता : यी पाँच नाम

अमृतस्रवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पथ्य, कहीं तीतो, रसायनी, विषविकार नाशक तथा घाउखटिरा, कुष्ठ आदि एवं कमलपित्त र सुजनलाई जित्ने गुणको हुन्छ ।

### पुत्रदात्री

**पुत्रदात्री तु वातारिर्भ्रामरी श्वेतपुष्पिका ।**
**वृत्तपत्राऽतिगन्धालुर्वैशिजाता सुवल्लरी ॥१४३॥**
**पुत्रदात्री तु वातघ्नी कटुरुष्णा कफापहा ।**
**सुरभिः सर्वदा पथ्या वन्ध्यादोषविनाशनी ॥१४४॥**

पुत्रदात्री, वातारि, भ्रामरी, श्वेतपुष्पिका, वृत्तपत्रा, अतिगन्धालु, वैशिजाता र सुवल्लरी : यी पुत्रदात्री(सुरभि)का संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार नाश गर्दछ । यो पिरो, उष्णवीर्यको र कफविकार नाशक हुन्छ । यसको फूल सधैं नै पथ्य हुन्छ । यसले बाँझोपना नाश गर्दछ अर्थात् गर्भ बसाउन मद्दत गर्दछ ।

### पलाशी

**पलाशी पत्रवल्ली पर्णवल्ली पलाशिका**
**खुरपर्णी सुपर्णी च दीर्घवल्ली विषादनी ॥१४५॥**
**अम्लपत्री दीर्घपत्री रसाम्ला चाम्लका च सा ।**
**अम्लातकी काञ्जिका च स्याच्चतुर्दशधाऽभिधा ॥१४६॥**
**पलाशी लघुरम्या च मुखदोषविनाशनी ।**
**अरोचकहरा पथ्या पित्तकोपकरी च सा ॥१४७॥**

(१) पलाशी, (२) पत्रवल्ली, (३) पर्णवल्ली, (४) पलाशिका, (५) खुरपर्णी, (६) सुपर्णी, (७) दीर्घवल्ली, (८) विषादनी, (९) अम्लपत्री, (१०) दीर्घपत्री, (११) रसाम्ला, (१२) अम्लका, (१३) अम्लातकी र (१४) काञ्जिका : यी चौध नाम पलाशीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन सहज, आनन्ददायी, मुखका रोग नाशक, अरुची नाशक, पथ्य तथा पित्तविकार नाशक हुन्छ ।

### वर्गप्रशंसा

**इति बहुविधवल्लीस्तोमनामाभिधान-**
**प्रगुणगुणयथावद्वर्णनापूर्णमेनम् ।**

**सुललितपदसर्गे वर्गनाम्ना च वैद्यः**
**सदसि बहुविलासं व्यासवद्व्यातनोतु ॥१४८॥**

अनेक थरी लहराहरूका समूहको नाम र गुणका बारेमा यस अध्यायमा राम्रा पदहरू मार्फत कुशलतापूर्वक वर्णन गरिएको छ । यसको अध्ययन पश्चात् एक चिकित्सकले ज्ञानलाई व्यासले जसरी नै विस्तार गरी विद्वानहरूको समूहलाई सामना गर्न सक्दछ ।

**दीप्तता दीधितयस्तथाऽन्धतमसध्वंसाय भानोरिव**
**व्यातन्वन्ति निजं रुजां विजयते वीर्य्यं विरुद्धौ च याः ।**
**तासामेव विलासभूमिरसमो वर्गः श्रुतो वीरुधां**
**वीरुद्वर्ग इति प्रतीतमहिमा नैसर्गिकैर्यो गुणैः ॥१४९॥**

सूर्य आफ्ना किरण मार्फत अन्धकार हटाउन सधैं सक्षम भएजस्तै यो तेश्रो अध्यायमा वर्णन भएका लहराहरू पनि तिनको वीर्य मार्फत रोगहरू उन्मूलन गर्न सक्षम छन् । यो अध्याय ती शक्तिशाली लहराहरूका लागि एक क्रिडास्थल बनेकोले यसका अन्तरङ्ग गुण र उत्कृष्टताले गर्दा यो तेश्रो अध्यायले “विरुद् वर्ग” नाम सहितको महिमा प्राप्त गरेको छ ।

**प्राप्ता यस्य परिग्रहं त्रिविधसद्वीरैकचूडामणेस्तीव्रा-**
**ण्योषधयः स्रवन्ति सहसा वीर्याण्यजर्यादिव ।**
**तस्यायं नृहरेः कृतौ स्थितिमगाद्वर्गो गुडूच्यादिक-**
**स्तार्तीयीकतयाभिधानरचनाचूडामणौ कीर्तितः ॥१५०॥**

वीरहरूमा श्रेष्ठ वीर, जसको आदेशमा ओखतीले कुनै हानीको डर नराखी अचानक आफ्नो शक्ति दिन्छ, त्यस्ता नरहरिले लेखेको अभिधान चूडामणि नामक यो ग्रन्थमा गुडुच्यादि वर्ग नामक तेश्रो अध्याय पूर्ण भएको छ ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ गुडूच्यादिवर्गः तृतीयः ॥३॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत गुडूच्यादिवर्ग नामक तेश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।३।

*(जन्ममात्रं पशुभावं वर्षषोडशकावधि । ततश्च वीरभावस्तु यावत् पञ्चशतो भवेत् ॥*
*द्वितीयांशे वीरभावः तृतीये द्विव्य भावकः ॥*

*जन्मेर सोह्र वर्षको नहुँदासम्म मानिसमा पशुभाव हुन्छ । त्यसपछि पचास वर्ष नपुग्दा सम्म वीरभाव हुन्छ । सय वर्ष उमेरको मानिस पच्चीस पच्चीस वर्षको एक अंश मानी गणना गर्दा दोश्रो अंशमा वीरभावको र तेश्रो अंशमा दिव्य अर्थात् दार्शनिक भावको हुने गर्दछ । यो सामान्य नियम हो । अपवादमा जे पनि हुन सक्दछ ।*

# शताह्वादिवर्ग

शताह्वा चैव मिश्रेया शालिपर्णी समष्ठिला ।
बृहती कण्टकारी च द्विधा स्यात् पृश्निपर्णिका ॥१॥
द्विधा गोक्षुरकश्चैव यासो वासा शतावरी ।
धन्वयासद्वयं चाग्निदमनी वाकुची तथा ॥२॥
शणपुष्पी द्विधा चैव त्रिविधा शरपुङ्खिका ।
शणोऽम्बष्ठा द्विधा नीली द्विधा गोजिह्विका स्मृता ॥३॥
अपामार्गद्वयं पञ्चबला राष्ट्री महादि च ।
हयगन्धा च हपुषा शतावर्यौ द्विधा मते ॥४॥
एलवालुकतैरण्यौ कलिकारी जयन्तिका ।
काकमाची श्रुतश्रेणी भृङ्गराजस्त्रिधा मतः ॥५॥
काकजङ्घा त्रिधा चुञ्चुः त्रिविधः सिन्दुवारकः ।
भेण्डा स्यात् पुत्रदा चैव तक्रा स्वर्णुलिकाह्वया ॥६॥
खस्खसः सिमृडी चैव ज्ञेयो वन्यकुसुम्भकः ।
द्वयाहुल्यः कासमर्दश्च रविपत्री द्विधाऽम्लिका ॥७॥
अजगन्धाऽऽदित्यभक्ता विषमुष्टिर्द्विधा परा ।
कालाञ्जनी द्विकार्पासी द्विविधः कोकिलाक्षकः ॥८॥
सातला कामवृद्धिश्च चक्रमर्दोऽथ भिञ्भिरा ।
शताह्वाद्याः क्रमेणैव क्षुपाः प्रोक्ता यथागुणाः ॥९॥



यस अध्यायमा शताह्वा, मिश्रेया, शालिपर्णी, समष्ठिला, दुई थरी बृहती, दुई थरी कण्टकारी, पृश्निपर्णिका, दुई थरी गोक्षुर, यास, वासा, शतावरी, दुई थरी धन्वयास, अग्निदमनी, वाकुची, दुई थरी शणपुष्पी, तीन थरी शरपुङ्खिका, शण, अम्बष्ठा, दुई थरी नीली, गोजिह्विका, दुई थरी अपामार्ग, पाँच थरी बला, महाराष्ट्री, हयगन्धा, हपुषा, दुई थरी शतावरी, एलवालुक, तैरणि, कलिकारी, जयन्तिका, काकमाची, श्रुतश्रेणी, तीन थरी भृङ्गराज, काकजङ्घा, तीन थरी चुञ्चु, तीन थरी सिन्दुवारक, भेण्डा, पुत्रदा, तक्रा, स्वर्णुलिका, खस्खस, सिमृडी, वन्यकुसुम्भक, आहुल्य, कासमर्द, रविपत्री, दुई थरी अम्लिका, अजगन्धा, आदित्यभक्ता, दुई थरी विषमुष्टि, कालाञ्जनी, कार्पासी, दुई थरी कोकिलाक्षक, सातला, कामवृद्धि, चक्रमर्द र भिञ्भिरा नामका ओखतीका गुणका बारेमा क्रमैले बताइएको छ ।

## सुप (शताह्वा)

**शताह्वा शतपुष्पा च मिसिर्घोषा च पोतिका ।**
**अहिच्छत्राऽप्यवाक्पुष्पी माधवी कारवी शिफा ॥१०॥**
**सङ्घातपत्रिका छत्रा वज्रपुष्पा सुपुष्पिका ।**
**शतप्रसूना बहुला पुष्पाह्वा शतपत्रिका ॥११॥**
**वनपुष्पा भूरिपुष्पा सुगन्धा सूक्ष्मपत्रिका ।**
**गन्धारिकाऽतिच्छत्रा च चतुर्विंशतिनामका ॥१२॥**

(१) शताह्वा, (२) शतपुष्पा, (३) मिसि, (४) घोषा, (५) पोतिका, (६) अहिच्छत्रा, (७) अवाक्पुष्पी, (८) माधवी, (९) कारवी, (१०) शिफा, (११) सङ्घातपत्रिका, (१२) छत्रा, (१३) वज्रपुष्पा, (१४) सुपुष्पिका, (१५) शतप्रसूना, (१६) बहुला, (१७) पुष्पाह्वा, (१८) शतपत्रिका, (१९) वनपुष्पा, (२०) भूरिपुष्पा, (२१) सुगन्धा, (२२) सूक्ष्मपत्रिका, (२३) गन्धारिका र (२४) अतिच्छत्रा : यी चौबीस नाम सुपका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शताह्वा तु कटुस्तिक्ता स्निग्धा श्लेष्मातिसारनुत् ।**
**ज्वरनेत्रव्रणघ्नी च वस्तिकर्मणि शस्यते ॥१३॥**



सुप पिरो, तीतो र चिल्लो हुन्छ । यसले कफविकार र अतिसार भगाउँदछ तथा जरो, आँखाका रोग र घाउखटिरा नाश गर्दछ । यो वस्तिकर्ममा पनि उत्तम हुन्छ ।

## बनसुप (मिश्रेया)

**मिश्रेया तालपर्णी च तालपत्रा मिशिस्तथा ।**
**शालेया स्याच्छीतशिवा शालीना वनजा च सा ॥१४॥**
**अवाक्पुष्पी मधुरिका छत्रा संहितपुष्पिका ।**
**सुपुष्पा सुरसा वन्या ज्ञेया पञ्चदशाह्वया ॥१५॥**
**मिश्रेया मधुरा स्निग्धा कटुः कफहरा परा ।**
**वातपित्तोत्थदोषघ्नी प्लीहजन्तुविनाशिनी ॥१६॥**

(१) मिश्रेया, (२) तालपर्णी, (३) तालपत्रा, (४) मिशि, (५) शालेया, (६) शीतशिवा, (७) शालीना, (८) वनजा, (९) अवाक्पुष्पी, (१०) मधुरिका, (११) छत्रा, (१२) संहितपुष्पिका, (१३) सुपुष्पा, (१४) सुरसा र (१५) वन्या : यी पन्ध्र नाम बनसुपका संस्कृत पर्यायवाची नामहरू हुन् । बनसुप मिठो, चिल्लो, पिरो र अति नै कफनाशक हुन्छ । यसले वात र पित्तजन्य विकार नाश गर्दछ तथा फियोका रोग र कीरा नष्ट पार्दछ ।

## साकिनु (शालिपर्णी)

**स्याच्छालिपर्णी सुदला सुपत्रिका स्थिरा च सौम्या कुमुदा गुहा ध्रुवा ।**
**विदारिगन्धांऽशुमती सुपर्णिका स्याद्दीर्घमूलाऽपि च दीर्घपत्रिका ॥१७॥**
**वातघ्नी पीत्तला तन्वी सुधा सर्वानुकारिणी ।**
**शोफघ्नी सुभगा देवी निश्चला व्रीहिपर्णिका ॥१८॥**
**सुमूला च सुरूपा च सुपत्रा शुभपत्रिका ।**
**शालिपर्णी शालिदला स्यादूनत्रिंशादाह्वया ॥१९॥**

(१) शालिपर्णी, (२) सुदला, (३) सुपत्रिका, (४) स्थिरा, (५) सौम्या, (६) कुमुदा, (७) गुहा, (८) ध्रुवा, (९) विदारिगन्धा, (१०) अंशुमती, (११) सुपर्णिका, (१२) दीर्घमूला, (१३) दीर्घपत्रिका, (१४) वातघ्नी, (१५) पीत्तला, (१६) तन्वी, (१७) सुधा, (१८) सर्वानुकारिणी, (१९) शोफघ्नी, (२०) सुभगा, (२१) देवी, (२२) निश्चला, (२३) व्रीहिपर्णिका, (२४) सुमूला, (२५) सुरूपा, (२६) सुपत्रा, (२७) शुभपत्रिका, (२८) शालिपर्णी र (२९) शालिदला : यी उनन्तीस नाम साकिनुका संस्कृत पर्यायवाची नामहरू हुन् । (यहाँ शालिपर्णी नाम दुई पटक प्रयोग भएको छ) ।

**शालिपर्णी रसे तिक्ता गुरूष्णा वातदोषनुत् ।**
**विषमज्वरमेहार्शः शोफसन्तापनाशनी ॥२०॥**

साकिनु तीतो रसको हुन्छ । यो पचाउन कठिन, उष्णवीर्य भएको र वातविकार नाश गर्ने गुणको हुन्छ । यो विषमज्वर, प्रमेह, अल्काई, सुजन र सन्ताप नाश गर्ने गुण भएको हुन्छ ।

## नाककोरे (समष्ठिला)

**समष्ठिला च भण्डीरी नद्याम्रश्चाम्रगन्धधृक् ।**
**काकाम्रः कण्टकिफलोऽप्युपदंशो मुनिह्वयः ॥२१॥**
**नद्याम्रः कटुरुष्णश्च रुच्यो मुखविशोधनः ।**
**कफवातप्रशमनो दाहकृद्दीपनः परः ॥२२॥**

(१) समष्ठिला, (२) भण्डीरी, (३) नद्याम्र, (४) आम्रगन्धधृक्, (५) काकाम्र, (६) कण्टकिफल र (७) उपदंश : यी सातवटा नाम नाककोरेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, रुचिकर, मुख शुद्ध पार्ने, कफविकार शान्त पार्ने, वातविकार शान्त पार्ने, डाह गराउने र अत्यन्त दीपनी गुणको हुन्छ ।

### ठूलो बिहीँ (बृहती)

**बृहती महतिक्रान्ता वार्ताकी सिंहिकाकुली ।**
**राष्ट्रिका स्थलकण्टा च भण्टाकी तु महोटिका ॥२३॥**
**बहुपत्री कण्टतनुः कण्टालुः कट्फला तथा ।**
**डोरली वनवृन्ताकी नामान्यस्याश्चतुर्दश ॥२४॥**
**बृहती कटुतिक्तोष्णा वातजिज्ज्वरहारिणी ।**
**अरोचकामकासघ्नी श्वासहृद्रोगनाशनी ॥२५॥**

(१) बृहती, (२) महतिक्रान्ता, (३) वार्ताकी, (४) सिंहिकाकुली, (५) राष्ट्रिका, (६) स्थलकण्टा, (७) भण्टाकी, (८) महोटिका, (९) बहुपत्री, (१०) कण्टतनु, (११) कण्टालु, (१२) कट्फला, (१३) डोरली र (१४) वनवृन्ताकी : यी चौध वटा नाम ठूलो बिहीँका संस्कृत पर्यायवाची नामहरू हुन् । ठूलो बिहीँ पिरो, तीतो, उष्णवीर्यको तथा वातविकारलाई जित्ने गुणको हुन्छ । यसले जरो, अरुची, खोकी, दम र मुटुका रोग नाश गर्दछ ।

### सानो बिहीँ (सर्पतनु)

**बृहत्यन्या सर्पतनुः क्षविका पीततण्डुला ।**
**पुत्रप्रदा बहुफला गोधिनीति षडाह्वया ॥२६॥**
**क्षविका बृहती तिक्ता कटुरुष्णा च तत्समा ।**
**युक्त्या द्रव्यविशेषेण धारासंस्तम्भसिद्धिदा ॥२७॥**

अर्को खालको बृहती (सानो बिहीँ) का (१) सर्पतनु, (२) क्षविका, (३) पीततण्डुला, (४) पुत्रप्रदा, (५) बहुफला र (६) गोधिनी गरी छ नाम संस्कृत पर्यायवाची नामहरू हुन्छन् । सानो बिहीँ तीतो, पिरो र उष्णवीर्यमा ठूलो बिहीँ समान हुन्छ । यो द्रव्यविशेष (दुर्लभा ?) मा मिसाएपछि धारासंस्तम्भ (तरल पदार्थ बग्नबाट रोक्ने ?) ओखती बन्दछ ।

### सेतो फूल फुल्ने बिहीँ (श्वेतबृहती)

**श्वेताऽन्या श्वेतबृहती ज्ञेया श्वेतमहोटिका ।**
**श्वेतसिंही श्वेतफला श्वेतवार्ताकिनी च षट् ॥२८॥**
**विज्ञेया श्वेतबृहती वातश्लेष्मविनाशनी ।**
**रुच्या चाञ्जनयोगेन नानानेत्रामयापहा ॥२९॥**

(१) श्वेता, (२) श्वेतबृहती, (३) श्वेतमहोटिका, (४) श्वेतसिंही, (५) श्वेतफला र (६) श्वेतवार्ताकिनी :

यी छ नाम अको खालको सेतो बिहौंका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो बिहौं वातविकार र कफविकार नाशक हुन्छ भनी जान्नू । यो रुचिकर हुन्छ । गाजलमा यो मिसाउँदा यसले अनेक थरी आँखाका रोगहरू ठिक गर्दछ ।

## कण्टकारी

**कण्टकारी कण्टकिनी दुःस्पर्शा दुष्प्रधर्षिणी ।**
**क्षुद्रा व्याघ्री निदिग्धा च धाविनी क्षुद्रकण्टिका ॥३०॥**
**बहुकण्टा क्षुद्रकण्टा ज्ञेया क्षुद्रफला च सा ।**
**कण्टारिका चित्रफला स्याच्चतुर्दशसञ्ज्ञका ॥३१॥**
**कण्टकारी कटूष्णा च दीपनी श्वासकासजित् ।**
**प्रतिश्यायार्तिदोषघ्नी कफवातज्वरार्तिनुत् ॥३२॥**

(१) कण्टकारी, (२) कण्टकिनी, (३) दुःस्पर्शा, (४) दुष्प्रधर्षिणी, (५) क्षुद्रा, (६) व्याघ्री, (७) निदिग्धा, (८) धाविनी, (९) क्षुद्रकण्टिका, (१०) बहुकण्टा, (११) क्षुद्रकण्टा, (१२) क्षुद्रफला, (१३) कण्टारिका र (१४) चित्रफला : यी चौध नाम सामान्य खालको कण्टकारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको र दीपनी हुन्छ । यसले दम र खोकीलाई जित्दछ । कण्टकारीले पिनासजन्य पीडा, कफविकार, वातविकार र जरो नाश गर्दछ ।

## सेतो कण्टकारी

**सितकण्टारिका श्वेता क्षेत्रदूती च लक्ष्मणा ।**
**सितसिंही सितक्षुद्रा क्षुद्रवार्ताकिनी सिता ॥३३॥**
**क्लिन्ना च कटुवार्ताकी क्षेत्रजा कपटेश्वरी ।**
**स्यान्निःस्नेहफला रामा सितकण्टा महौषधी ॥३४॥**
**गर्दभी चन्द्रिका चान्द्री चन्द्रपुष्पा प्रियङ्करी ।**
**नाकुली दुर्लभा रास्ना द्विरेषा द्वादशाह्वया ॥३५॥**
**श्वेतकण्टारिका रुच्या कटूष्णा कफवातनुत् ।**
**चक्षुष्या दीपनी ज्ञेया प्रोक्ता रसनियामिका ॥३६॥**

(१) सितकण्टारिका, (२) श्वेता, (३) क्षेत्रदूती, (४) लक्ष्मणा, (५) सितसिंही, (६) सितक्षुद्रा, (७) क्षुद्रवार्ताकिनी, (८) सिता, (९) क्लिन्ना, (१०) कटुवार्ताकी, (११) क्षेत्रजा, (१२) कपटेश्वरी, (१३) निःस्नेहफला, (१४) रामा, (१५) सितकण्टा, (१६) महौषधी, (१७) गर्दभी, (१८) चन्द्रिका, (१९) चान्द्री, (२०) चन्द्रपुष्पा, (२१) प्रियङ्करी, (२२) नाकुली, (२३) दुर्लभा र (२४) रास्ना : यी चौबीस

वटा नाम सेतो कण्टकारीका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो कण्टकारी रुचिकर, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यो आँखाका लागि हितकर, दीपनी र शरीरका रसलाई नियमित बनाउने गुणको हुन्छ भनी बताइएको छ ।

### सतिबयर (पृश्निपर्णी)

**स्यात् पृश्निपर्णी कलशी महागुहा शृगालविन्ना धमनी च मेखला ।**
**लाङ्गलिका क्रोष्टुकपुच्छिका गुहा शृगालिका सैव च सिंहपुच्छिका ॥३७॥**
**पृथक्पर्णी दीर्घपर्णी दीर्घा क्रोष्टुकमेखला ।**
**चित्रपर्ण्युपचित्रा च श्वपुच्छाऽष्टादशाह्वया ॥३८॥**
**पृश्निपर्णी कटूष्णाम्ला तिक्ताऽतीसारकासजित् ।**
**वातरोगज्वरोन्मादव्रणदाहविनाशनी ॥३९॥**

(१) पृश्निपर्णी, (२) कलशी, (३) महागुहा, (४) शृगालविन्ना, (५) धमनी, (६) मेखला, (७) लाङ्गलिका, (८) क्रोष्टुकपुच्छिका, (९) गुहा, (१०) शृगालिका, (११) सिंहपुच्छिका, (१२) पृथक्पर्णी, (१३) दीर्घपर्णी, (१४) दीर्घा, (१५) क्रोष्टुकमेखला, (१६) चित्रपर्णी, (१७) उपचित्रा र (१८) श्वपुच्छा : यी अठार नाम सतिबयरका संस्कृत पर्यायवाची नामहरू हुन् । सतिबयर पिरो, उष्णवीर्यको, अमिलो र तीतो हुन्छ । यसले अतिसार र खोकीलाई जित्दछ तथा वातरोग, जरो, उन्माद, घाउखटिरा र डाह नाश गर्दछ ।

### गोखुर (गोक्षुर)

**स्याद्गोक्षुरो गोक्षुरकः क्षुराङ्गः श्वदंष्ट्रकः कण्टक-भद्रकण्टकौ ।**
**स्याद् व्यालदंष्ट्रः क्षुरको महाङ्गो दुश्चक्रमश्च क्रमशो दशाह्वः ॥४०॥**

(१) गोक्षुर, (२) गोक्षुरक, (३) क्षुराङ्ग, (४) श्वदंष्ट्रक, (५) कण्टक, (६) भद्रकण्टक, (७) व्यालदंष्ट्र, (८) क्षुरक, (९) महाङ्ग र (१०) दुश्चक्रम : यी दश नाम गोखुरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### सानो जातको गोखुर (क्षुद्रगोक्षुर)

**क्षुद्रोऽपरो गोक्षुरकस्त्रिकण्टकः कण्टो षडङ्गो बहुकण्टकः क्षुरः ।**
**गोकण्टकः कण्टफलः पलङ्कषः क्षुद्रक्षुरो भक्षाटकश्चणद्रुमः ॥४१॥**
**स्थलशृङ्गाटकश्चैव वनशृङ्गाटकस्तथा ।**
**इक्षुगन्धः स्वादुकण्टः पर्यायाः षोडश स्मृताः ॥४२॥**

(१) गोक्षुरक, (२) त्रिकण्टक, (३) कण्ट, (४) षडङ्ग, (५) बहुकण्टक, (६) क्षुर, (७) गोकण्टक, (८) कण्टफल, (९) पलङ्कष, (१०) क्षुद्रक्षुर, (११) भक्षटक, (१२) चणद्रुम, (१३) स्थलशृङ्गाटक, (१४) वनशृङ्गाटक, (१५) इक्षुगन्ध र (१६) स्वादुकण्ट : यी सोह्र नाम अर्कोथरी गोखुर अर्थात् सानो जातको गोखुरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुवै गोखुरका गुण

**स्यातामुभौ गोक्षुरकौ सुशीतलौ बलप्रदौ तौ मधुरौ च बृंहणौ ।**
**कृच्छ्राश्मरीमेहविदाहनाशनौ रसायनौ तत्र बृहद्गुणोत्तरः ॥४३॥**

दुवै थरी गोखुर शीतवीर्यका, बलदायक, गुलिया र पौष्टिक हुन्छन् । यिनले कृच्छ्र, पत्थरी, प्रमेह र डाह नाश गर्दछन् । यी रसायनी हुन्छन् । ठूलो जातको गोखुर सानोभन्दा बढी गुनिलो हुन्छ ।

### दुरालभा

**यासो यवासो बहुकण्टकोऽल्पकः क्षुद्रेङ्गुदी रोदनिका च कच्छुरा ।**
**स्याद्बालपत्रोऽधिककण्टकः खरः सुदूरमूलो विषकण्टकोऽपि सः ॥४४॥**
**अनन्तस्तीक्ष्णकण्टश्च समुद्रान्तो मरूद्भवः ।**

**दीर्घमूलः सूक्ष्मपत्रो विषघ्नः कण्टकालुकः ॥४५॥**
**त्रिपर्णिका च गान्धारी चैकविंशतिनामभिः ।**
**यासो मधुरतिक्तोऽसौ शीतः पित्तार्त्तिदाहजित् ॥**
**बलदीपनकृत्तृष्णाकफच्छर्दिविसर्पजित् ॥४६॥**

(१) यास, (२) यवास, (३) बहुकण्टक, (४) अल्पक, (५) क्षुद्रेङ्गुदी, (६) रोदनिका, (७) कच्छुरा, (८) बालपत्र, (९) अधिककण्टक, (१०) खर, (११) सुदूरमूल, (१२) विषकण्टक, (१३) अनन्त, (१४) तीक्ष्णकण्ट, (१५) समुद्रान्त, (१६) मरूद्भव, (१७) दीर्घमूल, (१८) सूक्ष्मपत्र, (१९) विषघ्न, (२०) कण्टकालुक, (२१) त्रिपर्णिका र (२२) गान्धारी : यी बाईस (एक्काईस भनिएको) नाम दुरालभाका संस्कृत पर्यायवाची नामहरू हुन् । दुरालभा गुलियो, तीतो, शीतवीर्यको तथा पित्तविकार र डाहलाई जित्ने गुणको हुन्छ । यो बलदायक, दीपन तथा तिर्खारोग, कफविकार, वाकवाकी र विसर्पलाई जित्ने गुण भएको हुन्छ ।

### असुरो (वासक)

**वासकः सिंहिका वासा भिषग्माता वसादनी ।**
**आटरूषः सिंहमुखी सिंही कण्ठीरवी वृषः ॥४७॥**

शितपर्णी वाजिदन्ता नासा पञ्चमुखी तथा ।
सिंहपर्णी मृगेन्द्राणी नामान्यस्यास्तु षोडश ॥४८॥
वासा तिक्ता कटुः शीता कासघ्नी रक्तपित्तजित् ।
कामलाकफवैकल्यज्वरश्वासक्षयापहा ॥४९॥

(१) वासक, (२) सिंहिका, (३) वासा, (४) भिषग्माता, (५) वसादनी, (६) आटरूष, (७) सिंहमुखी, (८) सिंही, (९) कण्ठीरवी, (१०) वृष, (११) शितपर्णी, (१२) वाजिदन्ता, (१३) नासा, (१४) पञ्चमुखी, (१५) सिंहपर्णी र (१६) मृगेन्द्राणी : यी सोह्र वटा नाम असुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । असुरो तीतो, पिरो, शीतवीर्यको, खोकी नाशक र रक्तपित्तलाई जित्ने गुणको हुन्छ । यसले कमलपित्त, कफविकार, जरो, दम र क्षयरोग नाश गर्दछ ।

## सुनिषण्णक

शितावरी शितावरः सूच्याह्वः सूचिपत्रकः ।
श्रीवारकः शिखी बभ्रुः स्वस्तिकः सुनिषण्णकः ॥५०॥
कुरुटः कुक्कुटः सूचीदलः श्वेताम्बरोऽपि सः ।
मेधाकृद्ग्राहकश्चेति ज्ञेयः पञ्चदशाह्वयः ॥५१॥
शितावरस्तु सङ्ग्राही कषायोष्णस्त्रिदोषजित् ।
मेधारुचिप्रदो दाहज्वरहारी रसायनः ॥५२॥

(१) शितावरी, (२) शितावर, (३) सूच्याह्व, (४) सूचिपत्रक, (५) श्रीवारक, (६) शिखी, (७) बभ्रु, (८) स्वस्तिक, (९) सुनिषण्णक, (१०) कुरुट, (११) कुक्कुट, (१२) सूचीदल, (१३) श्वेताम्बर, (१४) मेधाकृत् र (१५) ग्राहक : यी पन्ध्र नाम सुनिषण्णकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ग्राही, टर्रो, उष्णवीर्यको र त्रिदोषलाई जित्ने गुणको हुन्छ । यसले दिमागको ग्रहण गर्ने क्षमता र रुची बढाउँदछ, डाह र जरो नाश गर्दछ । यो रसायनी हुन्छ ।

## लहरे दुरालभा (धन्वयास)

धन्वयासो दुरालम्भा ताम्रमूली च कच्छुरा ।
दुरालभा च दुःस्पर्शा धन्वी धन्वयवासकः ॥५३॥
प्रबोधनी सूक्ष्मदला विरूपा दुरभिग्रहा ।
दुर्लभा दुष्प्रधर्षा च स्याच्चतुर्दशसञ्ज्ञका ॥५४॥
दुरालम्भा कटुस्तिक्ता सोष्णा क्षाराम्लिका तथा ।
मधुरा वातपित्तघ्नी ज्वरगुल्मप्रमेहजित् ॥५५॥

(१) धन्वयास, (२) दुरालम्भा, (३) ताम्रमूली, (४) कच्छुरा, (५) दुरालभा, (६) दुःस्पर्शा, (७) धन्वी, (८) धन्वयवासक, (९) प्रबोधनी, (१०) सूक्ष्मदला, (११) विरूपा, (१२) दुरभिग्रहा, (१३) दुर्लभा र (१४) दुष्प्रधर्षा : यी चौध वटा नाम लहरे दुरालभाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको, नुनिलो र अमिलो हुन्छ । लहरे दुरालभा गुलियो, वातविकारनाशक, पित्तविकार नाशक तथा जरो, गुल्म र प्रमेह माथि जित हासिल गर्ने गुणको हुन्छ ।

### सानो दुरालभा

**अन्या क्षुद्रदुरालम्भा मरुस्था मरुसम्भवा ।**
**विशारदाऽजभक्षा स्यादजादन्युष्ट्रभक्षिका ॥५६॥**
**कषाया कफहृच्चैव ग्राहिणी करभप्रिया ।**
**करभादनिका चेति विज्ञेया द्वादशाभिधा ॥५७॥**
**दुरालम्भा द्वितीया च गौल्याम्लज्वरकुष्ठनुत् ।**
**श्वासकासभ्रमघ्नी च पारदे शुद्धिकारिका ॥५८॥**

(१) क्षुद्रदुरालम्भा, (२) मरुस्था, (३) मरुसम्भवा, (४) विशारद, (५) अजभक्षा, (६) अजादनी, (७) उष्ट्रभक्षिका, (८) कषाया, (९) कफहृत्, (१०) ग्राहिणी, (११) करभप्रिया र (१२) करभादनिका : यी बाह्र नाम सानो खालको दुरालभाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दोश्रो थरी सानो दुरालभा गुलियो र अमिलो हुन्छ । यसले जरो, कुष्ठ, दम, खोकी र भ्रम नाश गर्दछ । यो पारोलाई प्रशोधन गर्नमा पनि उपयोगी हुन्छ ।

### सिस्नो (अग्निदमनी)

**अथाग्निदमनी वह्निदमनी बहुकण्टका ।**
**वल्लिकण्टारिका गुच्छफला क्षुद्रफला ॥५९॥**
**विज्ञेया क्षुद्रदुःस्पर्शा क्षुद्रकण्टारिका तथा ।**
**मर्त्त्येन्द्रमाता दमनी स्यादित्येषा दशाह्वया ॥६०॥**
**कटूष्णा चाग्निदमनी रूक्षा वातकफापहा ।**
**रुचिकृद्दीपनी हृद्या गुल्मप्लीहापहा भवेत् ॥६१॥**

(१) अग्निदमनी, (२) वह्निदमनी, (३) बहुकण्टका, (४) वल्लिकण्टारिका, (५) गुच्छफला, (६) क्षुद्रफला, (७) क्षुद्रदुःस्पर्शा, (८) क्षुद्रकण्टारिका, (९) मर्त्त्येन्द्रमाता र (१०) दमनी : यी दश नाम सिस्नुका संस्कृत पर्यायवाची नामहरू हुन् । सिस्नु पिरो, उष्णवीर्यको, रुखो तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले रुचि जगाउँदछ, मुटुका लागि फाइदा गर्दछ तथा गुल्म र फियोका

रोग नाश गर्दछ ।

## बकुची

**बाकुची सोमराजी च सोमवल्ली सुवल्लिका ।**
**सिता सितावरी चन्द्रलेखा चान्द्री च सुप्रभा ॥६२॥**
**कुष्ठहन्त्री च काम्बोजी प्रतिगन्धा च वल्गुजा ।**
**स्मृता चन्द्राभिधा राजी काल्माषी च तथैन्दवी ॥६३॥**
**कुष्ठदोषापहा चैव कान्तिदाऽवल्गुजा तथा ।**
**चन्द्राभिधा प्रभायुक्ता विंशति स्यात्तु नामतः ॥६४॥**
**वाकुची कटुतिक्तोष्णा क्रिमिकुष्ठकफापहा ।**
**त्वग्दोषविषकण्डूति खर्जुप्रशमनी च सा ॥६५॥**

(१) बाकुची, (२) सोमराजी, (३) सोमवल्ली, (४) सुवल्लिका, (५) सिता, (६) सितावरी, (७) चन्द्रलेखा, (८) चान्द्री, (९) सुप्रभा, (१०) कुष्ठहन्त्री, (११) काम्बोजी, (१२) प्रतिगन्धा, (१३) वल्गुजा, (१४) चन्द्राभिधा, (१५) राजी, (१६) काल्माषी, (१७) ऐन्दवी, (१८) कुष्ठदोषापहा, (१९) कान्तिदा, (२०) अवल्गुजा र (२१) चन्द्रप्रभा : यी एक्काईस वटा नाम बकुचीका संस्कृत पर्यायवाची नामहरू हुन् । बकुची पिरो, तीतो र उष्णवीर्यको हुन्छ । यसले कीरा, कुष्ठ र कफविकार तथा छालाको विकार, विषविकार, लुतो र धतुराको असर नाश गर्दछ ।



## शणपुष्पी

**शणपुष्पी बृहत्पुष्पी शणिका शणघण्टिका ।**
**पीतपुष्पी स्थूलफला लोमशा माल्यपुष्पिका ॥६६॥**
**शणपुष्पी रसे तिक्ता कषाया कफवातजित् ।**
**अजीर्णज्वरदोषघ्नी वमनी रक्तदोषनुत् ॥६७॥**

शणपुष्पी, बृहत्पुष्पी, शणिका, शणघण्टिका, पीतपुष्पी, स्थूलफला, लोमशा र माल्यपुष्पिका : यी शणपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा तीतो र टर्रो हुन्छ । यसले कफविकार र वातविकारलाई जित्दछ । यसले अजीर्ण र जरोका असर नाश गर्दछ । शणपुष्पीले बान्ता गराउँदछ र रक्तविकार नाश गर्दछ ।

## सानो जातको शणपुष्पी

**द्वितीयाऽन्या सूक्ष्मपुष्पा स्यात्क्षुद्रशणपुष्पिका ।**

विष्टिका सूक्ष्मपर्णी च बाणाह्वा सूक्ष्मघण्टिका ॥
शणपुष्पी क्षुद्रतिक्ता वम्या रसनियामिका ॥६८॥

सूक्ष्मपुष्पा, क्षुद्रशणपुष्पिका, विष्टिका, सूक्ष्मपर्णी, बाणाह्वा, सूक्ष्मघण्टिका, शणपुष्पी, क्षुद्रतिक्ता, वम्या र रसनियामिका : यी दोश्रो सानो जातको नालुपाट (क्षुद्रशणपुष्पी) का संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो तीतो, बान्ताकारक र शरीरका रसलाई नियमित बनाउने गुणको हुन्छ ।

ठूलो खालको शणपुष्पी (महासिता)

तृतीयाऽन्या वृत्तपर्णी श्वेतपुष्पा महासिता ।
सा महाश्वेतघण्टी च सा महाशणपुष्पिका ॥६९॥
महाश्वेता कषायोष्णा शस्ता रसनियामिका ।
कुतूहलेषु च प्रोक्ता मोहनस्तम्भनादिषु ॥७०॥

वृत्तपर्णी, श्वेतपुष्पा, महासिता, महाश्वेतघण्टी र महाशणपुष्पिका : यी तेश्रो जातको ठूलो नालुपाटका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र उष्णवीर्यको हुन्छ । यसका साथै शरीरका रसलाई नियमित बनाउन, उत्सुकता जगाउन, मोहनी लगाउन र लट्याउन समेत यो उपयोगी हुन्छ ।



रातो साकिनु (शरपुङ्खा)

शरपुङ्खा काण्डपुङ्खा बाणपुङ्खेषुपुङ्खिका ।
ज्ञेया सायकपुङ्खा च इषुपुङ्खा च षड्विधा ॥७१॥
शराभिधा च पुङ्खा स्याच्छ्वेताढ्या सितसायका ।
सितपुङ्खा श्वेतपुङ्खा शुभ्रपुङ्खा च पञ्चधा ॥७२॥
शरपुङ्खा कटूष्णा च क्रिमिवातरुजापहा ।
श्वेता त्वेषा गुणाढ्या स्यात् प्रशस्ता च रसायने ॥७३॥

(१) शरपुङ्खा, (२) काण्डपुङ्खा, (३) बाणपुङ्खा, (४) इषुपुङ्खिका, (५) सायकपुङ्खा र (६) इषुपुङ्खा : यी छ नाम रातो साकिनुका तथा (१) श्वेताढ्या, (२) सितसायका, (३) सितपुङ्खा, (४) श्वेतपुङ्खा र (५) शुभ्रपुङ्खा : यी पाँच नाम सेतो साकिनुका संस्कृत पर्यायवाची नामहरू हुन् । रातो साकिनु पिरो, उष्णवीर्यको तथा कीरा र वातविकार जन्य रोग नाशक हुन्छ । सेतो साकिनुमा पनि यिनै तर केही बढी गुण हुन्छन् । यो ओखतीको रसायन प्रक्रियामा पनि उपयोगी हुन्छ ।

**साकिनुविशेष**

**अन्या तु कण्टपुङ्खा स्यात् कण्टालुः कण्टपुङ्खिका ।**
**कण्टपुङ्खा कटूष्णा च कृमिशूलविनाशनी ॥७४॥**

कण्टपुङ्खा, कण्टालु र कण्टपुङ्खिका : यी साकिनुविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कीरा र शूल नाशक हुन्छ ।

**शण**

**शणस्तु माल्यपुष्पः स्याद्वमनः कटुतिक्तकः ।**
**निशावनो दीर्घशाखस्त्वक्सारो दीर्घपल्लवः ॥७५॥**
**शणस्त्वम्लः कषायश्च मलगर्भास्रपातनः ।**
**वान्तिकृद्वातकफनुज्ज्ञेयस्तीव्राङ्गमर्दजित् ॥७६॥**

शण, माल्यपुष्प, वमन, कटुतिक्तक, निशावन (ण), दीर्घशाख, त्वक्सार र दीर्घपल्लव : यी सनपाटका संस्कृत पर्यायवाची नामहरू हुन् । सन अमिलो र टर्रो हुन्छ । यसले मल, गर्भ र रगत झार्दछ तथा बान्ता गराउँदछ । सनले वातविकार र कफविकार नाश गर्दछ । यसले जिउ दुखेको तिव्र तरिकाले ठिक गर्दछ ।



**अम्बष्ठा**

**अम्बष्ठाऽम्बालिकाऽम्बाला शठाम्बाऽम्बष्ठिकाऽम्बिका ।**
**अम्बा च माचिका चैव दृढवल्का मयूरिका ॥७७॥**
**गन्धपत्री चित्रपुष्पी श्रेयसी मुखवाचिका ।**
**छिन्नपत्रा भूरिमल्ली विज्ञेया षोडशाह्वया ॥७८॥**
**अम्बष्ठा सा कषायाम्ला कफकण्ठरुजापहा ।**
**वातामयबलासघ्नी रुचिकृद्दीपनी परा ॥७९॥**

(१) अम्बष्ठा, (२) अम्बालिका, (३) अम्बाला, (४) शठाम्बा, (५) अम्बष्ठिका, (६) अम्बिका, (७) अम्बा, (८) माचिका, (९) दृढवल्का, (१०) मयूरिका, (११) गन्धपत्री, (१२) चित्रपुष्पी, (१३) श्रेयसी, (१४) मुखवाचिका, (१५) छिन्नपत्रा र (१६) भूरिमल्ली : यी सोह्र वटा नाम अम्बष्ठाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र अमिलो हुन्छ । यसले कफविकार र घाँटीका रोग ठिक गर्दछ । अम्बष्ठा वातजन्य रोग र बलास रोग निको पार्दछ । यसले रुची जगाउँदछ र अत्यन्त दीपनी हुन्छ ।

## नीर (नीली)

**नीली नीला नीलिनी नीलपत्री तुत्था राझी नीलिका नीलपुष्पी ।**
**काली श्यामा शोधनी श्रीफला च ग्राम्या भद्रा भारवाही च मोचा ॥८०॥**
**कृष्णा व्यञ्जनकेशी च रञ्जनी च महाफला ।**
**असिता क्लीतनी नील-केशी चारटिका मता ॥८१॥**
**गन्धपुष्पा श्यामलिका रङ्गपत्री महाबला ।**
**स्थिररङ्गा रङ्गपुष्पी स्यादेषा त्रिंशदाह्वया ॥८२॥**
**नीली तु कटुतिक्तोष्णा केश्या कासकफामनुत् ।**
**मरुद्विषोदरव्याधि गुल्मजन्तुज्वरापहा ॥८३॥**

(१) नीली, (२) नीला, (३) नीलिनी, (४) नीलपत्री, (५) तुत्था, (६) राझी, (७) नीलिका, (८) नीलपुष्पी, (९) काली, (१०) श्यामा, (११) शोधनी, (१२) श्रीफला, (१३) ग्राम्या, (१४) भद्रा, (१५) भारवाही, (१६) मोचा, (१७) कृष्णा, (१८) व्यञ्जनकेशी, (१९) रञ्जनी, (२०) महाफला, (२१) असिता, (२२) क्लीतनी, (२३) नील-केशी, (२४) चारटिका, (२५) गन्धपुष्पा, (२६) श्यामलिका, (२७) रङ्गपत्री, (२८) महाबला, (२९) स्थिररङ्गा र (३०) रङ्गपुष्पी : यी तीस नाम नीरका संस्कृत पर्यायवाची नामहरू हुन् । नीर पिरो र तीतो हुन्छ । यो उष्णवीर्यको, कपालका लागि हितकर तथा खोकी, कफविकार र आमविकार नाशक हुन्छ । यसले वातविकार, विषविकार, पेटका रोग, गुल्म, पेटका कीरा र जरो पनि नाश गर्दछ ।



## ठूलो जातको नीर (महानीली)

**अन्या चैव महानीली अमला राजनीलिका ।**
**तुत्था श्रीफलिका मेला केशार्हा भृशपत्रिका ॥८४॥**
**महानीली गुणाढ्या स्याद्रङ्गश्रेष्ठा सुवीर्यदा ।**
**पूर्वोक्तनीलिकाऽऽदेश्या सगुणा सर्वकर्मसु ॥८५॥**

महानीली, अमला, राजनीलिका, तुत्था, श्रीफलिका, मेला, केशार्हा र भृशपत्रिका : यी ठूलो नीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नीरभन्दा बढी गुनिलो, बढी रङ्ग दिने र वीर्यशाली हुन्छ । यसमा पहिले बताइएको नीरका सबै गुण पनि हुन्छन् ।

## गाईजिभ्रे (गोजिह्वा)

**गोजिह्वा खरपत्री स्यात् प्रतना दार्विका तथा ।**

**अधोमुखा धेनुजिह्वा अधःपुष्पी च सप्तधा ॥८६॥**
**गोजिह्वा कटुका तीव्रा शीतला पित्तनाशनी ।**
**व्रणसंरोपणी चैव सर्वदन्तविषार्तिजित् ॥८७॥**

(१) गोजिह्वा, (२) खरपत्री, (३) प्रतना, (४) दार्विका, (५) अधोमुखा, (६) धेनुजिह्वा र (७) अधःपुष्पी : यी सात नाम गाईजिभ्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, चाँडो असर गर्ने, शीतवीर्यको र पित्तविकार नाश गर्ने गुणको हुन्छ । यसले घाउ भर्ने तथा सबै खालका दाँतका पीडा र विषविकारका पीडा माथि जित हासिल गर्ने काम पनि गर्दछ ।

## दतिवन (अपामार्ग)

**अपामार्गस्तु शिखरी किणिही खरमञ्जरी ।**
**दुर्ग्रहश्चाप्यधःशल्यः प्रत्यक्पुष्पी मयूरकः ॥८८॥**
**काण्डकण्टः शैखरिको मर्कटी दुरभिग्रहः ।**
**वशिरश्च पराक्पुष्पी कण्टी मर्कटपिप्पली ॥८९॥**
**कटुर्माञ्जरिको नन्दी क्षवकः पङ्क्तिकण्टकः ।**
**मालाकण्टश्च कुब्जश्च त्रयोविंशतिनामकः ॥९०॥**

**अपामार्गस्तु तिक्तोष्णः कटुश्च कफनाशनः ।**
**अर्शकण्डूदरामघ्नो रक्तहृद्ग्राहिवान्तिकृत् ॥९१॥**

(१) अपामार्ग, (२) शिखरी, (३) किणिही, (४) खरमञ्जरी, (५) दुर्ग्रह, (६) अधःशल्य, (७) प्रत्यक्पुष्पी, (८) मयूरक, (९) काण्डकण्ट, (१०) शैखरिक, (११) मर्कटी, (१२) दुरभिग्रह, (१३) वशिर, (१४) पराक्पुष्पी, (१५) कण्टी, (१६) मर्कटपिप्पली, (१७) कटु, (१८) माञ्जरिक, (१९) नन्दी, (२०) क्षवक, (२१) पङ्क्तिकण्टक, (२२) मालाकण्ट र (२३) कुब्ज : यी तेइस वटा नाम दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । दतिवन तीतो, उष्णवीर्यको, पिरो र कफनाशक हुन्छ । यसले अल्काई, लुतो र आमविकार नाश गर्दछ । दतिवनले रक्तविकार पनि नाश गर्दछ । यो ग्राहि र बान्ताकारक हुन्छ ।

## रातो दतिवन

**अन्यो रक्तो ह्यपामार्गः क्षुद्रापामार्गकस्तथा ।**
**आघट्टको दुग्धनिका रक्तबिन्दुल्पपत्रिका ॥९२॥**
**रक्तोऽपामार्गकः शीतः कटुकः कफवातनुत् ।**
**व्रणकण्डूविषघ्नश्च सङ्ग्राही वान्तिकृत् परः ॥९३॥**

रक्त अपामार्ग, क्षुद्र अपामार्ग, आघट्टक, दुग्धनिका, रक्तबिन्दु र अल्पपत्रिका : यी रातो दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, पिरो तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले घाउखटिरा, लुतो र विषविकार समेत नाश गर्दछ । यो ग्राही र अत्यन्त बान्ताकारक हुन्छ ।

### बलु (बला)

**बला समङ्गोदकिका च भद्रा भद्रोदनी स्यात् खरकाष्ठिका च ।**
**कल्याणिनी भद्रबला च मोटा बाटी बलाढ्येति रुद्रसङ्ख्या ॥९४॥**
**बलाऽतितिक्ता मधुरा पित्तातीसारनाशनी ।**
**बलवीर्यप्रदा पुष्टिकफरोगविशोधनी ॥९५॥**

(१) बला, (२) समङ्गा, (३) उदकिका, (४) भद्रा, (५) भद्रोदनी, (६) खरकाष्ठिका, (७) कल्याणिनी, (८) भद्रबला, (९) मोटा, (१०) बाटी र (११) बलाढ्या : यी एघार नाम बलुका संस्कृत पर्यायवाची नामहरू हुन् । बलु अति नै तीतो र गुलियो हुन्छ । यसले पित्तविकार र अतिसार नाश गर्दछ । बलु बलदायक, वीर्यदायक, पौष्टिक र कफजन्य रोग राम्ररी सफा गर्ने गुणको हुन्छ ।



### नागबलु (महासमङ्गा)

**महासमङ्गोदनिका बलाह्वया वृक्षारुहा वृद्धिबलाऽक्षतण्डुला ।**
**भुजङ्गजिह्वाऽपि च शीतपाकिनो शीता बला शीतवरा बलोत्तरा ॥९६॥**
**खिरिहिट्टी च बल्या च ललजिह्वा त्रिपञ्चधा ।**
**महासमङ्गा मधुरा अम्ला चैव त्रिदोषहा ॥**
**युक्त्या बुधैः प्रयोक्तव्या ज्वरदाहविनाशिनी ॥९७॥**

(१) महासमङ्गा, (२) ओदनिका, (३) बलाह्वया (४) वृक्षारुहा, (५) वृद्धिबला, (६) अक्षतण्डुला, (७) भुजङ्गजिह्वा, (८) शीतपाकिनी, (९) शीता, (१०) बला, (११) शीतवरा, (१२) बलोत्तरा, (१३) खिरिहिट्टी, (१४) बल्या र (१५) ललजिह्वा : यी पन्ध्र वटा नाम नागबलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, अमिलो र त्रिदोष नाशक हुन्छ । विद्वानले यसलाई विचार गरेर प्रयोग गर्नू । यसले जरो र डाह पनि नाश गर्दछ ।

### महाबलु (महाबला)

**महाबला ज्येष्ठबला कटम्भरा केशारुहा केसरिका मृगादनी ।**

**स्याद्वर्षपुष्पाऽपि च केशवर्धनी पुरासिनी देवसहा च सारिणी ॥९८॥**
**सहदेवी पीतपुष्पी देवार्हा गन्धवल्लरी ।**
**मृगा मृगरसा चेति ज्ञेया सप्तदशाह्वया ॥९९॥**
**महाबला तु हृद्रोगवातार्शःशोफनाशनी ।**
**शुक्रवृद्धिकरी बल्या विषमज्वरहारिणी ॥१००॥**

(१) महाबला, (२) ज्येष्ठबला, (३) कटम्भरा, (४) केशारुहा, (५) केसरिका, (६) मृगादनी, (७) वर्षपुष्पा, (८) केशवर्धनी, (९) पुरासिनी, (१०) देवसहा, (११) सारिणी, (१२) सहदेवी, (१३) पीतपुष्पी, (१४) देवार्हा, (१५) गन्धवल्लरी, (१६) मृगा र (१७) मृगरसा : यी सत्र नाम महाबलुका संस्कृत पर्यायवाची नामहरू हुन् । मशाबलुले मुटुका रोग, वातविकार, अल्काई र सुजन नाश गर्दछ । यसले शुक्र बढाउँदछ, बल दिन्छ र विषमज्वरलाई ठिक गर्दछ ।

(अतिबलु) अतिबला

**बलिकाऽतिबला बल्या विकङ्कता वाटचपुष्पिका घण्टा ।**
**शीता च शीतपुष्पा भूरिबला वृष्यगन्धिका दशधा ॥१०१॥**
**तिक्ता कटुश्चातिबला वातघ्नी क्रिमिनाशनी ।**
**दाहतृष्णाविषच्छर्दिक्लेदोपशमनी परा ॥१०२॥**

(१) बलिका, (२) अतिबला, (३) बल्या, (४) विकङ्कता, (५) वाटचपुष्पिका, (६) घण्टा, (७) शीता, (८) शीतपुष्पा, (९) भूरिबला र (१०) वृष्यगन्धिका : यी दश नाम अतिबलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो तथा वातविकार र कीरा नाशक हुन्छ । यसले डाह, तिर्खा, विषविकार, वाकवाकी र दुःख विशेष किसिमले नियन्त्रण गर्दछ ।

बलु विशेष (भद्रोदनी)

**भद्रोदनी नागबला खरगन्धा चतुष्फला ।**
**महोदया महाशाखा महापत्रा महाफला ॥१०३॥**
**विश्वदेवा तथाऽरिष्टा खर्वा ह्रस्वागवेधुका ।**
**देवदण्डा महादण्डा घण्टेत्याह्वास्तु षोडश ॥१०४॥**
**मधुराम्ला नागबला कषायोष्णा गुरुस्तथा ।**
**कण्डूतिकुष्ठवातघ्नी व्रणपित्तविकारजित् ॥१०५॥**

(१) भद्रोदनी, (२) नागबला, (३) खरगन्धा, (४) चतुष्फला, (५) महोदया, (६) महाशाखा, (७) महापत्रा, (८) महाफला, (९) विश्वदेवा, (१०) अरिष्टा, (११) खर्वा, (१२) ह्रस्वा, (१३) गवेधुका, (

१४) देवदण्डा, (१५) महादण्डा र (१६) घण्टा : यी सोह्र नाम बलुविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बलु गुलियो, अमिलो र टर्रो हुन्छ । यो उष्णवीर्यको र पचाउन कठिन हुन्छ । यसले लुतो, कुष्ठ र वातविकार नाश गर्दछ तथा घाउखटिरा र पित्तविकारलाई जित्दछ ।

### जल पिप्ला (तोयपिप्पली)

**महाराष्ट्री तु सम्प्रोक्ता शारदी तोयपिप्पली ।**
**मच्छादनी मच्छगन्धा लाङ्गली शकुलादनी ॥१०६॥**
**अग्निज्वाला चित्रपत्री प्राणदा जलपिप्पली ।**
**तृणशीता बहुशिखा स्यादित्येषा त्रयोदश ॥१०७॥**
**महाराष्ट्री कटुस्तीक्ष्णा कषाया मुखशोधनी ।**
**व्रणकीटादिदोषघ्नी रसदोषनिबर्हणी ॥१०८॥**

(१) महाराष्ट्री, (२) शारदी, (३) तोयपिप्पली, (४) मच्छादनी, (५) मच्छगन्धा, (६) लाङ्गली, (७) शकुलादनी, (८) अग्निज्वाला, (९) चित्रपत्री, (१०) प्राणदा, (११) जलपिप्पली, (१२) तृणशीता र (१३) बहुशिखा : यी तेह्र नाम जलपिप्लाका संस्कृत पर्यायवाची नामहरू हुन् । जलपिप्ला पिरो, तिक्खर र टर्रो हुन्छ । यसले मुख सफा गर्दछ, घाउखटिरा-कीरा आदिको दोष नाश गर्दछ तथा पारोलाई प्रशोधन गर्दछ (वा शरीरका रस-दोषलाई प्रशोधन गर्दछ) ।

### अश्वगन्धा

**अश्वगन्धा वाजिगन्धा कम्बुकाष्ठा वराहिका ।**
**वराहकर्णी तुरगी वनजा वाजिनी हयी ॥१०९॥**
**पुष्टिदा बलदा पुण्या हयगन्धा च पीवरा ।**
**पलाशपर्णी वातघ्नी श्यामला कामरूपिणी ॥११०॥**
**कालप्रियकरी बल्या गन्धपत्री हयप्रिया ।**
**वराहपत्री विज्ञेया त्रयोविंशतिनामका ॥१११॥**
**अश्वगन्धा कटूष्णा स्यात्तिक्ता च मदगन्धिका ।**
**बल्या वातहरा हन्ति कासश्वासक्षयव्रणान् ॥११२॥**

(१) अश्वगन्धा, (२) वाजिगन्धा, (३) कम्बुकाष्ठा, (४) वराहिका, (५) वराहकर्णी, (६) तुरगी, (७) वनजा, (८) वाजिनी, (९) हयी, (१०) पुष्टिदा, (११) बलदा, (१२) पुण्या, (१३) हयगन्धा, (१४) पीवरा, (१५) पलाशपर्णी, (१६) वातघ्नी, (१७) श्यामला, (१८) कामरूपिणी, (१९) कालप्रियकरी, (२०) बल्या, (२१) गन्धपत्री, (२२) हयप्रिया र (२३) वराहपत्री : यी तेइस वटा नाम अश्वगन्धाका

संस्कृत पर्यायवाची नामहरू हुन् । अश्वगन्धा पिरो, उष्णवीर्यको, तीतो र मादरा जस्तो गनाउने हुन्छ । यसले बल दिनुका साथै वातविकार, खोकी, दमरोग, क्षयरोग र घाउखटिरा नाश (ठिक) गर्दछ ।

### हपुषा

**हपुषा विपुषा विस्रा विस्रगन्धा विगन्धिका ।**
**अन्या चासौ स्वल्पफला कृच्छ्रघ्नी ध्वाङ्क्षनाशिनी ॥११३॥**
**प्लीहशत्रुर्विषघ्नी च कफघ्नी चापराजिता ।**
**पूर्वा तु पञ्चनाम्नी स्यादपरा सप्तधाऽभिधा ॥११४॥**
**हपुषा कटुतिक्तोष्णा गुरुः श्लेष्मबलासजित्**
**प्रदरोदरविड्बन्धशूलगुल्मार्शसां हरा ॥११५॥**

(१) हपुषा, (२) विपुषा, (३) विस्रा, (४) विस्रगन्धा र (५) विगन्धिका : यी पाँच नाम पहिलो थरी हपुषाका तथा (१) स्वल्पफला, (२) कृच्छ्रघ्नी, (३) ध्वाङ्क्षनाशिनी, (४) प्लीहशत्रु, (५) विषघ्नी, (६) कफघ्नी र (७) अपराजिता : यी सात नाम दोश्रो थरी हपुषाका संस्कृत पर्यायवाची नामहरू हुन् । हपुषा पिरो, तीतो, उष्णवीर्यको, पचाउन कठिन हुन्छ तथा कफविकार र बलास रोगलाई परास्त गर्दछ ।



### कुरिलो (शतावरी)

**शतावरी शतपदी पीवरीन्दीवरी वरी ।**
**भीरुर्दीप्या द्वीपिशत्रुर्द्वीपिकाऽमरकण्टिका ॥११६॥**
**सूक्ष्मपत्रा सुपत्रा च बहुमूला शताह्वया ।**
**नारायणी स्वादुरसा शताह्वा लघुपर्णिका ॥११७॥**
**आत्मशल्या जटामूला शतवीर्या महौदनी ।**
**मधुरा शतमूला च केशिका शतनेत्रिका ॥११८॥**
**विश्वाख्या वैष्णवी कार्ष्णी वासुदेवी वरीयसी ।**
**दुर्मरा तेजवल्ली च स्यात्त्रयस्त्रिंशदाह्वया ॥११९॥**

(१) शतावरी, (२) शतपदी, (३) पीवरी, (४) इन्दीवरी, (५) वरी, (६) ऋष्यप्रोक्ता, (७) भीरु, (८) दीप्या, (९) द्वीपिशत्रु, (१०) द्वीपिका, (११) अमरकण्टिका, (१२) सूक्ष्मपत्रा, (१३) सुपत्रा, (१४) बहुमूला, (१५) शताह्वया, (१६) नारायणी, (१७) स्वादुरसा, (१८) शताह्वा, (१९) लघुपर्णिका, (२०) आत्मशल्या, (२१) जटामूला, (२२) शतवीर्या, (२३) महौदनी, (२४) मधुरा, (२५) शतमूला,

(२६) कांशिका, (२७) शतनेत्रिका, (२८) विश्वाख्या, (२९) वैष्णवी, (३०) कार्ष्णी, (३१) वासुदेवी, (३२) वरीयसी, (३३) दुर्मरा र (३४) तेजवल्ली : यी तेत्तीस वटा (तेत्तीस उल्लेख भएको) नाम कुरिलोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ठूलो कुरिलो (महाशतावरी)

**महाशतावरी वीरा तुङ्गिनी बहुपत्रिका ।**
**सहस्रवीर्य्या सुरसा महापुरुषदन्तिका ॥१२०॥**
**ऊर्ध्वकण्टा महावीर्य्या फणिजिह्वा महाशना ।**
**शतवीर्य्या सुवीर्य्या च नामान्यस्यास्त्रयोदश ॥१२१॥**

(१) महाशतावरी, (२) वीरा, (३) तुङ्गिनी, (४) बहुपत्रिका, (५) सहस्रवीर्य्या, (६) सुरसा, (७) महापुरुषदन्तिका, (८) ऊर्ध्वकण्टा, (९) महावीर्य्या, (१०) फणिजिह्वा, (११) महाशना, (१२) शतवीर्य्या र (१३) सुवीर्य्या : यी तेह्र वटा नाम ठूलो जातको कुरिलोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुवै थरी कुरिलोका गुण (शतावरीद्वयगुण)



**शतावर्यौ हिमे वृष्ये मधुरे पित्तजित् परे ।**
**कफवातहरे तिक्ते महाश्रेष्ठे रसायने ॥१२२॥**
**शतावरीद्वयं वृष्यं मधुरं पित्तजिद्धिमम् ।**
**महती कफवातघ्नी तिक्ता श्रेष्ठा रसायने ॥**
**कफपित्तहरास्तिक्तास्तस्या एवाङ्कुराः स्मृताः ॥१२३॥**

दुवै थरी कुरिला शीतवीर्यका, वीर्यवर्धक, गुलिया र पित्तविकारलाई जित्ने गुणका हुन्छन् । यिनले कफविकार र वातविकार नाश गर्दछन् । यी तीता र अत्यन्त रसायनी हुन्छन् । कुरिलाको टुसा पनि कफविकार र पित्तविकार नाश गर्ने र तीतो स्वादका नै हुन्छन् भनिएको छ ।

### सिलटिमुर (एलवालुक)

**एलवालुकमालूकं वालुकं हरिवालुकम् ।**
**एल्वालुकं कपित्थञ्च दुर्वर्णं प्रसरं दृढम् ॥१२४॥**
**एलागन्धिकमेलाह्वं गुप्तगन्धि सुगन्धिकम् ।**
**एलाफलञ्च विज्ञेयं द्विःसप्ताह्वयमुच्यते ॥१२५॥**
**एलवालुकमत्युग्रं कषायं कफवातनुत् ।**

**मूर्छार्त्तिज्वरदाहाँश्च नाशयेद्रोचनं परम्॥१२६॥**

(१) एलवालुक, (२) आलूक, (३) वालुक, (४) हरिवालुक, (५) एल्वालुक, (६) कपित्थ, (७) दुर्वण, (८) प्रसर, (९) दृढम्, (१०) एलागन्धिक, (११) ऐलाह्व, (१२) गुप्तगन्धि, (१३) सुगन्धिक र (१४) एलाफल : यी चौध वटा नाम सिलटिमुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति नै कडा खालको (तिक्खर) र टर्रो हुन्छ । यसले कफविकार, वातविकार, बेहोस हुने रोग, पीडा र डाहा नाश गर्दछ । यो अति नै रोचनी हुन्छ ।

## तिउरी (तैरिणी)

**तैरिणी तेरणस्तेरः कुनीली नामतश्चतुः ।**
**तेरणः शिशिरस्तिक्तो व्रणघ्नोऽरुणरङ्गदः ॥१२७॥**

(१) तैरिणी, (२) तेरण, (३) तेर र (४) कुनीली : यी चार नाम तिउरीका संस्कृत पर्यायवाची नामहरू हुन् । तिउरी शीतवीर्यको, तीतो, घाउखटिरा नाशक र अरुण (हल्का पहैँलो) रङ दिने खालको हुन्छ ।

## कलिहारी नामक विष (लाङ्गलिनी)



**कलिकारी लाङ्गलिनी हलिनी गर्भपातिनी ।**
**दीप्तिर्विशल्याऽग्निमुखी हली नक्तेन्दुपुष्पिका ॥१२८॥**
**विद्युज्ज्वालाऽग्निजिह्वा च व्रणहृत्पुष्पसौरभा ।**
**स्वर्णपुष्पा वह्निशिखा स्यादेषा षोडशाह्वया ॥१२९॥**
**कलिकारी कटूष्णा च कफवातनिकृन्तनी ।**
**गर्भान्तःशल्यनिष्कासकारिणी सारिणी परा ॥१३०॥**

(१) कलिकारी, (२) लाङ्गलिनी, (३) हलिनी, (४) गर्भपातिनी, (५) दीप्ति, (६) विशल्या, (७) अग्निमुखी, (८) हली, (९) नक्ता, (१०) इन्दुपुष्पिका, (११) विद्युज्ज्वाला, (१२) अग्निजिह्वा, (१३) व्रणहृत्, (१४) पुष्पसौरभा, (१५) स्वर्णपुष्पा र (१६) वह्निशिखा : यी सोह्र नाम कलिहारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई नाश गर्ने गुणको हुन्छ । यो गर्भपतन र काँडा निकाल्न सहयोगी तथा अत्यन्त कडा तरिकाले मलमूत्र तलतिर सार्ने खालको हुन्छ ।

## जयन्ती

**जयन्ती तु बलामोटा हरिता च जया तथा ।**
**विजया सूक्ष्ममूला च विक्रान्ता चापराजिता ॥१३१॥**
**ज्ञेया जयन्ती गलगण्डहारी तिक्ता कटूष्णाऽनिलनाशनी च ।**
**भूतापहा कण्ठविशोधनी च कृष्णा तु सा तत्र रसायनी स्यात् ॥१३२॥**

जयन्ती, बलामोटा, हरिता, जया, विजया, सूक्ष्ममूला, विक्रान्ता र अपराजिता : यी जयन्तीका संस्कृत पर्यायवाची नामहरू हुन् । जयन्ती गलगाँड निको पार्दछ । यो तीतो, पिरो, उष्णवीर्यको र वातविकार नाशक हुन्छ । जयन्तीले भूतबाधा हटाउँदछ र घाँटी सफा गर्दछ । कालो जयन्ती रसायनी हुन्छ ।

## कबई (काकमाची)

**काकमाची ध्वाङ्क्षमाची वायसाह्वा च वायसी ।**
**सर्वतिक्ता बहुफला कट्फला च रसायनी ॥१३३॥**
**गुच्छफला काकमाता स्वादुपाका च सुन्दरी ।**
**वरा चन्द्राविणी चैव मत्स्याक्षी कुष्ठनाशिनी ॥**
**तिक्तिका बहुतिक्ता च नाम्नामष्टादश स्मृताः ॥१३४॥**
**काकमाची कटुस्तिक्ता रसोष्णा कफनाशनी ।**
**शूलार्शःशोफदोषघ्नी कुष्ठकण्डूतिहारिणी ॥१३५॥**

(१) काकमाची, (२) ध्वाङ्क्षमाची, (३) वायसाह्वा, (४) वायसी, (५) सर्वतिक्ता, (६) बहुफला, (७) कट्फला, (८) रसायनी, (९) गुच्छफला, (१०) काकमाता, (११) स्वादुपाका, (१२) सुन्दरी, (१३) वरा, (१४) चन्द्राविणी, (१५) मत्स्याक्षी, (१६) कुष्ठनाशिनी, (१७) तिक्तिका र (१८) बहुतिक्ता : यी अठार वटा नाम कबईका संस्कृत पर्यायवाची नामहरू हुन् । कबई पिरो र तीतो हुन्छ । यो रसमा उष्णवीर्यको हुन्छ । यसले कफविकार, शूल, अल्काई, सुजनका दोष, कुष्ठ र लुतो नाश गर्दछ ।

## मुसाकाने विशेष (शृतश्रेणी)

**श्रुतश्रेणी द्रवन्ती च न्यग्रोधी मूषिकाह्वया ।**
**चित्रा मूषकमारी च प्रत्यक्श्रेणी च शम्बरी ॥१३६॥**
**श्रुतश्रेणी च चक्षुष्या कटुराखुविषापहा ।**

**व्रणदोषहरा चैव नेत्रामयनिकृन्तनी ॥१३७॥**

श्रुतश्रेणी, द्रवन्ती, न्यग्रोधी, मूषिकाह्वया, चित्रा, मूषकमारी, प्रत्यक्श्रेणी र शम्बरी : यी मुसाकानेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो आँखाका लागि हितकर, पिरो र मुसाको विषविकार नाशक हुन्छ । यसले घाउखटिराको विकार र आँखाका रोग पनि ठिक गर्दछ ।

**भृङ्गीराज**

**मार्कवो भृङ्गराजश्च भृङ्गाह्वः केशरञ्जनः ।**
**पितृप्रियो रङ्गकश्च केश्यः कुन्तलवर्द्धनः ॥१३८॥**
**पीतोऽन्यः स्वर्णभृङ्गारो हरिवासो हरिप्रियः ।**
**देवप्रियो वन्दनीयः पावनश्च षडाह्वयः ॥१३९॥**
**नीलस्तु भृङ्गराजोऽन्यो महानीलस्तु नीलकः ।**
**महाभृङ्गो नीलपुष्पः श्यामलश्च षडाह्वयः ॥१४०॥**
**भृङ्गराजास्तु चक्षुष्यास्तिक्तोष्णाः केशरञ्जनाः ।**
**कफशोफविषघ्नाश्च तत्र नीलो रसायनः ॥१४१॥**



मार्कव, भृङ्गराज, भृङ्गाह्व, केशरञ्जन, पितृप्रिय, रङ्गक, केश्य र कुन्तलवर्द्धन : यी सेतो भृङ्गीराजका; (१) स्वर्णभृङ्गार, (२) हरिवास, (३) हरिप्रिय, (४) देवप्रिय, (५) वन्दनीय र (६) पावन : यी छ पहेँलो भृङ्गीराजका तथा (१) नील, (२) महानील, (३) नीलक, (४) महाभृङ्ग, (५) नीलपुष्प र (६) श्यामल : यी छ नाम नीलो भृङ्गीराजका संस्कृत पर्यायवाची नामहरू हुन् । भृङ्गीराज आँखाका लागि लाभदायक, तीतो, उष्णवीर्यको र कपाल कालो बनाउनका लागि हितकर हुन्छ । यसले कफविकार, सुजन र विषविकार नाश गर्दछ । नीलो भृङ्गीराज रसायनी हुन्छ ।

**काकजङ्घा**

**काकजङ्घा ध्वाङ्क्षजङ्घा काकाह्वा साऽथ वायसी ।**
**पारावतपदी दासी नदीकान्ता सुलोमशा ॥१४२॥**
**काकजङ्घा तु तिक्तोष्णा कृमिव्रणकफापहा ।**
**बाधिर्य्याजीर्णजित् जिर्ण-विषमज्वरहारिणी ॥१४३॥**

काकजङ्घा, ध्वाङ्क्षजङ्घा, काकाह्वा, वायसी, पारावतपदी, दासी, नदीकान्ता र सुलोमशा : यी काकजङ्घाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको तथा कीरा, घाउखटिरा र कफविकार नाशक हुन्छ । यसले बहिरोपना र अजीर्णलाई जित्दछ तथा पुरानो खालको

विषमज्वरलाई नाश गर्दछ ।

### चम्सुर (चुञ्चु)

**चुञ्चुश्च विजला चञ्चुः कलभी वीरपत्रिका ।**
**चुञ्चुरश्चुञ्चुपत्रश्च सुशाकः क्षेत्रसम्भवः ॥१४४॥**
**चुञ्चुस्तु मधुरा तीक्ष्णा कषाया मलशोषणी ।**
**गुल्मोदरविबन्धार्शो ग्रहणीरोगहारिणी ॥१४५॥**

चुञ्चु, विजला, चञ्चु, कलभी, वीरपत्रिका, चुञ्चुर, चुञ्चुपत्र, सुशाक र क्षेत्रसम्भव : यी चम्सुरको सागका संस्कृत पर्यायवाची नामहरू हुन् । चम्सुर गुलियो, तिक्खर, टर्रो र मललाई सोस्ने गुणको हुन्छ । यसले गुल्म, कब्जियत, पेटका रोग, अल्काई र ग्रहणी जस्ता रोगलाई नाश गर्दछ ।

### ठूलो जातको चम्सुर (बृहच्चुञ्चु)

**बृहच्चुञ्चुर्विषारिः स्यान्महाचुञ्चुः सुचुञ्चुका ।**
**स्थूलचुञ्चुर्दीर्घपत्री दिव्यगन्धा च सप्तधा ॥१४६॥**
**महाचुञ्चुः कटूष्णा च कषाया मलरोधनी ।**
**गुल्मशूलोदरार्शोऽर्ति विषघ्नी च रसायनी ॥१४७॥**

बृहच्चुञ्चु, विषारि, महाचुञ्चु, सुचुञ्चुका, स्थूलचुञ्चु, दीर्घपत्री र दिव्यगन्धा : यी ठूलो जातको चम्सुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, टर्रो, मल रोक्ने तथा गुल्म, शूल, पेटका रोग र अल्काई नाशक हुन्छ । यसले विषविकार पनि नाश गर्दछ । यो रसायनी हुन्छ ।

### सानो जातको चम्सुर (क्षुद्रचुञ्चु)

**क्षुद्रचुञ्चुः सुचुञ्चुः स्याच्चुञ्चुः शुनकचुञ्चुका ।**
**त्वक्सारभेदिनी क्षुद्रा कटुका चिरपत्रिका ॥१४८॥**
**क्षुद्रचुञ्चुस्तु मधुरा कटूष्णा च कषायिका ।**
**दीपनी शूलगुल्मार्शःशमनी च विबन्धकृत् ॥१४९॥**

क्षुद्रचुञ्चु, सुचुञ्चु, चुञ्चु, शुनकचुञ्चुका, त्वक्सारभेदिनी, क्षुद्रा, कटुका र चिरपत्रिका : यी सानो जातको चम्सुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, पिरो, उष्णवीर्यको र टर्रो हुन्छ । यो दीपनी हुन्छ । यसले शूल, गुल्म र अल्काईलाई शान्त पार्दछ तथा कब्जियत गर्दछ ।

चम्सुरका गेडा (चुञ्चुबीज)

**चुञ्चुबीजं कटूष्णञ्च गुल्मशूलोदरार्तिजित् ।**
**विषत्वग्दोषकण्डूतिखर्जूकुष्ठविषापहम् ॥१५०॥**

चम्सुरका गेडा पिरो, उष्णवीर्यको तथा गुल्म, शूल र पेटका रोगमाथि जित हासिल गर्ने गुणको हुन्छ । यसले विषविकार, छालाका विकार, लुतो, कुष्ठ र विषविकार समेत नाश गर्दछ ।

सेतो फुल्ने सिमाली (सिन्दुवार)

**सिन्दुवारः श्वेतपुष्पः सिन्दुकः सिन्दुवारकः ।**
**स्थिरसाधनको नेता सिद्धकश्चार्थसिद्धकः ॥१५१॥**
**सिन्दुवारः कटुस्तिक्तः कफवातक्षयापहः ।**
**कुष्ठकण्डूतिशमनः शूलहृत्कासिद्धिदः ॥१५२॥**

सिन्दुवार, श्वेतपुष्प, सिन्दुक, सिन्दुवारक, स्थिरसाधनक, नेता, सिद्धक र अर्थसिद्धक : यी सेतो फूल फुल्ने सिमालीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिमाली पिरो र तीतो हुन्छ । यसले कफविकार, वातविकार र क्षयरोग नाश गर्दछ । कुष्ठ र चिलाउने रोग शान्त पार्दछ । शूलरोग ठिक गर्दछ र खोकी नाश गर्दछ ।

नीलो फुल्ने सिमाली (निर्गुण्डी)

**सुगन्धाऽन्या शीतसहा निर्गुण्डी नीलसिन्दुकः ।**
**सिन्दूकश्चपिका भूतकेशीन्द्राणी च नीलिकाः ॥१५३॥**
**कटूष्णा नीलनिर्गुण्डी तिक्ता रूक्षा च कासजित् ।**
**श्लेष्मशोफसमीरार्तिप्रदराध्मानहारिणी ॥१५४॥**

सुगन्धा, शीतसहा, निर्गुण्डी, नीलसिन्दुक, सिन्दूक, चपिका, भूतकेशी, इन्द्राणी र नीलिका : यी नीलो फूल फुल्ने सिमालीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिमाली पिरो, उष्णवीर्यको, तीतो, रुखो र खोकिलाई जित्ने गुणको हुन्छ । यसले कफविकार, सुजन, वातविकार, पीडा, प्रदर र आध्मान रोग नाश गर्दछ ।

शेफालिका

**शेफालिका तु सुवहा शुक्लाङ्गी शीतमञ्जरी प्रोक्ता ।**

**अपराजिता च विजया वातारिर्भूतकेशी च ॥१५५॥**
**शेफालिः कटुतिक्तोष्णा रूक्षा वातक्षयापहा ।**
**स्यादङ्गसन्धिवातघ्नी गुदवातादिदोषनुत् ॥१५६॥**

शेफालिका, सुवहा, शुक्लाङ्गी, शीतमञ्जरी, अपराजिता, विजया, वातारि र भूतकेशी : यी फुस्रो फूल हुने सिमालीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिमाली पिरो, तीतो, उष्णवीर्यको, रुखो तथा वातविकार र क्षयरोग नाशक हुन्छ । यसले जोर्नीका रोग र मलद्वारका वातसम्बन्धी रोग निको पार्दछ ।

### रामतोरियाँ वा भिण्डी (भिण्डातिका)

**भेण्डा भिण्डातिका भिण्डो भिण्डकः क्षेत्रसम्भवः ।**
**चतुष्पदश्चतुष्पुण्ड्रः सुशाकश्चाम्लपत्रकः ॥१५७॥**
**करपर्णो वृत्तबीजो भवेदेकादशाह्वयः ।**
**भेण्डा त्वम्लरसा सोष्णा ग्राहिका रुचिकारिका ॥१५८॥**

(१) भेण्डा, (२) भिण्डातिका, (३) भिण्ड, (४) भिण्डक, (५) क्षेत्रसम्भव, (६) चतुष्पद, (७) चतुष्पुण्ड्र, (८) सुशाक, (९) चाम्लपत्रक, (१०) करपर्ण र (११) वृत्तबीज : यी एघार नाम रामतोरियाँका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा अमिलो, उष्णवीर्यको, ग्राहि र रुचिवर्धक हुन्छ ।

### पुत्रदा

**पुत्रदा गर्भदात्री च प्रजादाऽपत्यदा च सा ।**
**सृष्टिप्रदा प्राणिमाता तापसद्रुमसन्निभा ॥१५९॥**
**पुत्रदा मधुरा शीता नारीपुष्पादिदोषहा ।**
**पित्तदाहश्रमहरा गर्भसम्भूतिदायिका ॥१६०॥**

पुत्रदा गर्भदात्री, प्रजादा, अपत्यदा, सृष्टिप्रदा, प्राणिमाता र तापसद्रुमसन्निभा : यी पुत्रदा नामक ओखतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र शीतवीर्यको हुन्छ । यसले नारीको डिम्बसम्बन्धी दोष, पित्तविकार, डाह र थकाई पनि नाश गर्दछ । यसले गर्भधारण गर्न सहायता गर्दछ ।

## मोहोलहरा (तक्राह्वा)

**तक्राह्वा तक्रभक्षा तु तक्रपर्यायवाचका ।**
**पञ्चाङ्गुली सिताभा स्यादेषा पञ्चाभिधा स्मृता ॥**
**तक्रा कटुः क्रिमिघ्नी स्याद् व्रणनिर्मूलिनी च सा ॥१६१॥**

(१) तक्राह्वा, (२) तक्रभक्षा, (३) तक्र शब्दका पर्यायवाची शब्दहरू, (४) पञ्चाङ्गुली र (५) सिताभा : यी पाँच नाम तक्राह्वाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, कीरानाशक र घाउखटिरा निर्मूल पार्ने गुणको हुन्छ ।

## स्वर्णुली

**स्वर्णुली हेमपुष्पी स्यात् स्वर्णपुष्पध्वजा तथा ।**
**स्वर्णुली कटुका शीता कषाया च व्रणापहा ॥१६२॥**

स्वर्णुली, हेमपुष्पी र स्वर्णपुष्पध्वजा : यी स्वर्णुलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, शीतवीर्यको, टर्रो र घाउखटिरा नाशक हुन्छ ।



## अफिम (खस्खस)

**खस्खसः सूक्ष्मबीजः स्यात् सुबीजः सूक्ष्मतण्डुलः ।**
**खस्खसो मधुरः पाके कान्तिवीर्यबलप्रदः ॥१६३॥**

खस्खस, सूक्ष्मबीज, सुबीज र सूक्ष्मतण्डुल : यी अफिमको गेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचेपछि गुलियो तथा कान्ति र वीर्यप्रदायक हुन्छ ।

## शिमृडी

**शिमृडी मतिदा प्रोक्ता बल्या पङ्गुत्वहारिणी ।**
**द्रवत्पत्री च वातघ्नी गुच्छपुष्पी च सप्तधा ॥१६४॥**
**शिमृडी कटुरुष्णा च वातहृत् पृष्ठशूलहा ।**
**युक्त्या रसायने योग्या देहदार्ढ्यकरी च सा ॥१६५॥**

शिमृडी, मतिदा, बल्या, पङ्गुत्वहारिणी, द्रवत्पत्री, वातघ्नी र गुच्छपुष्पी : यी शिमृडीका संस्कृत पर्यायवाची नामहरू हुन् । शिमृडी पिरो, उष्णवीर्यको, वातविकार नाशक र ढाडको शूल नाशक

हुन्छ । यो रसायनमा प्रयोग हुन्छ र यसले शरीरलाई बलियो बनाउँदछ ।

### जङ्गली कुसुम (अरण्यकुसुम्भ)

**ज्ञेयोऽरण्यकुसुम्भः स्यात् कौसुम्भश्चाग्निसम्भवः ।**
**कौसुम्भः कटुकः पाके श्लेष्महृद्दीपनश्च सः ॥१६६॥**

अरण्यकुसुम्भ, कौसुम्भ र अग्निसम्भव : यी वनकुसुमका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचेपछि पिरो हुन्छ । यसले कफविकार नाश गर्दछ । यो दीपनी हुन्छ ।

### वनमाली (आहुल्य)

**आहुल्यं हलुराख्यं च करं तरवटं तथा ।**
**शिम्बफलं सुपुष्पं स्यादर्बुरं दन्तकाष्ठकम् ॥१६७॥**
**हेमपुष्पं तथा पीतपुष्पं काञ्चनपुष्पकम् ।**
**नृपमङ्गल्यकं चैव शरत्पुष्पं त्रिरेकधा ॥१६८॥**
**आहुल्यं तिक्तशीतं स्याच्चक्षुष्यं पित्तदोषनुत् ।**
**मुखरुक्कुष्ठकण्डूति जन्तुशूलव्रणापहम् ॥१६९॥**

(१) आहुल्य, (२) हलुराख्य, (३) कर, (४) तरवट, (५) शिम्बफल, (६) सुपुष्प, (७) अर्बुर, (८) दन्तकाष्ठक, (९) हेमपुष्प, (१०) पीतपुष्प, (११) काञ्चनपुष्पक, (१२) नृपमङ्गल्यक र (१३) शरत्पुष्प : यी तेह्र नाम वनमालीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, शीतवीर्यको, आँखाका लागि हितकर र पित्तविकार नाशक हुन्छ । मुखका रोग, कुष्ठ, चिलाउने रोग, कीरा, शूल र घाउखटिरालाई पनि यसले नाश गर्दछ ।

### भूम्याहुल्य

**भूम्याहुल्यं कुष्ठकेतुर्मार्कण्डीयं महौषधम् ।**
**भूम्याहुल्यं तिक्तरसं ज्वरकुष्ठामसिध्मनुत् ॥१७०॥**

भूम्याहुल्य, कुष्ठकेतु, मार्कण्डीय र महौषध : यी भूम्याहुल्यका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा तीतो हुन्छ । यसले ज्वर, कुष्ठ, आमविकार र सिध्म रोग नाश गर्दछ ।

### ठूलो तापे (कासमर्द)

**कासमर्दोऽरिमर्दश्च कासारिः कासमर्दकः ।**
**कालः कनक इत्युक्तो जारणो दीपकश्च सः ॥१७१॥**
**कासमर्दः सतिक्तोष्णो मधुरः कफवातनुत् ।**
**अजीर्णकासपित्तघ्नः पाचनः कण्ठशोधनः ॥१७२॥**

कासमर्द, अरिमर्द, कासारि, कासमर्दक, काल, कनक, जारण र दीपक : यी ठूलो तापे (कासमर्द) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको, गुलियो तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले अजीर्ण, खोकी र पित्तविकार नाश गर्दछ । यो पाचनी हुन्छ र यसले घाँटी सफा गर्दछ ।

### आँकको पात (आदित्यपत्र)

**आदित्यपत्रोऽर्कदलार्कपत्रः स्यात्सूक्ष्मपत्रस्तपनच्छदश्च ।**
**कुष्ठारिरर्को विटपः सुपत्रो रविप्रियो रश्मिपतिश्च रुद्रः ॥१७३॥**
**आदित्यपत्रः कटुरुष्णवीर्यः कफापहो वातरुजापहश्च ।**
**सन्दीपनो जाठरगुल्महारी ज्ञेयः स चारोचननाशकश्च ॥१७४॥**

(१) आदित्यपत्र, (२) अर्कदल, (३) अर्कपत्र, (४) सूक्ष्मपत्र, (५) तपनच्छद, (६) कुष्ठारि, (७) अर्क, (८) विटप, (९) सुपत्र, (१०) रविप्रिय र (११) रश्मिपति : यी एघार वटा नाम आदित्यपत्रका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यो सन्दीपनी तथा पेटको गुल्म र अरुची नाशक समेत हुने गर्दछ ।

### सेतो अमिली (श्वेताम्ली)

**श्वेताम्ली त्वम्बिका प्रोक्ता पिष्टौण्डिः पिण्डिका च सा ।**
**श्वेताम्ली मधुरा वृष्या पित्तघ्नी बलदायिनी ॥१७५॥**

श्वेताम्ली, अम्बिका, पिष्टौण्डि र पिण्डिका : यी श्वेताम्लीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, वीर्यवर्धक, पित्तविकार नाशक र बलदायक हुन्छ ।

### नीलाम्ली

**नीलाम्ली नीलपिष्टौण्डी श्यामाम्ली दीर्घशाखिका ।**

**नीलाम्ली मधुरा रुच्या कफवातहरा परा ॥१७६॥**

नीलाम्ली, नीलपिष्टौण्डी, श्यामाम्ली र दीर्घशाखिका : यी नीलाम्लीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, रुचिकर तथा कफविकार र वातविकार राम्ररी नाश गर्ने गुणको हुन्छ ।

### अजमोदा (अजगन्धा)

**अजगन्धा बस्तगन्धा सुरपुष्पी विगन्धिका ।**
**उग्रगन्धा ब्रह्मगर्भा ब्राह्मी पूतिमयूरिका ॥१७७॥**
**अजगन्धा कटूष्णा स्याद्वातगुल्मोदरापहा ।**
**कर्णव्रणार्तिशूलघ्नी पीता चेदञ्जने हिता ॥१७८॥**

अजगन्धा, बस्तगन्धा, सुरपुष्पी, विगन्धिका, उग्रगन्धा, ब्रह्मगर्भा, ब्राह्मी र पूतिमयूरिका : यी नाम अजगन्धाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा वातविकार, गुल्म र पेटका रोग नाशक हुन्छ । यसले कानको दुखाई र घाउखटिराको दुखाई नाश गर्दछ । पहेँलो अजगन्धा गाजल बनाउनका लागि हितकर हुन्छ ।

### हुर्हुरे (आदित्यभक्ता)



**आदित्यभक्ता वरदाऽर्कभक्ता सुवर्चला सूर्य्यलताऽर्ककान्ता ।**
**मण्डूकपर्णी सुरसम्भवा च सौरिः सुतेजाऽर्कहिता रवीष्टा ॥१७९॥**
**मण्डूकी सत्यनाम्नी स्याद्देवी मार्तण्डवल्लभा ।**
**विक्रान्ता भास्करेष्टा च भवेदष्टादशाह्वया ॥१८०॥**
**आदित्यभक्ता शिशिरा सतिक्ता कटुस्तथोग्रा कफहारिणी च ।**
**त्वग्दोषकण्डूव्रणकुष्ठभूतग्रहोग्रशीतज्वरनाशिनी च ॥१८१॥**

(१) आदित्यभक्ता, (२) वरदा, (३) अर्कभक्ता, (४) सुवर्चला, (५) सूर्य्यलता, (६) अर्ककान्ता, (७) मण्डूकपर्णी, (८) सुरसम्भवा, (९) सौरि, (१०) सुतेजा, (११) अर्कहिता, (१२) रवीष्टा, (१३) मण्डूकी, (१४) सत्यनाम्नी, (१५) देवी, (१६) मार्तण्डवल्लभा, (१७) विक्रान्ता र (१८) भास्करेष्टा : यी अठार वटा नाम हुर्हुरेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो, पिरो, कडाखालको र कफनाशक हुन्छ । यसले छालाका रोग, चिलाउने रोग, घाउखटिरा, कुष्ठ, भूतबाधा, ग्रहबाधा र शीतज्वर नाश गर्दछ ।

## विषमुष्टि

**विषमुष्टिः केशमुष्टिः सुमुष्टिरणुमुष्टिकः ।**
**क्षुपडोडिसमायुक्तो मुष्टिः पञ्चाभिधः स्मृतः ॥१८२॥**
**विषमुष्टिः कटुस्तिक्तो दीपनः कफवातहृत् ।**
**कण्ठामयहरो रुच्यो रक्तपित्तार्तिदाहकृत् ॥१८३॥**

(१) विषमुष्टि, (२) केशमुष्टि, (३) सुमुष्टि, (४) अणुमुष्टिक र (५) क्षुपडोडिमुष्टि : यी पाँच नाम बकाइनु (?) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, दीपनी तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले घाँटीका रोग समेत नाश गर्दछ । यो रुचिकर हुन्छ । यसले रक्तपित्त, पीडा र डाह गराउँदछ ।

## जीवन्तीविशेष (डोडी)

**अन्या डोडी तु जीवन्ती शाकश्रेष्ठा सुखालुका ।**
**बहुपर्णी दीर्घपत्रा सूक्ष्मपत्रा च जीवनी ॥१८४॥**
**डोडी तु कटुतिक्तोष्णा दीपनी कफवातजित् ।**
**कण्ठामयहरा रुच्या रक्तपित्तार्तिदाहनुत् ॥१८५॥**

डोडी, जीवन्ती, शाकश्रेष्ठा, सुखालुका, बहुपर्णी, दीर्घपत्रा, सूक्ष्मपत्रा र जीवनी : यी जीवन्तीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको, दीपनी तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले घाँटीका रोग निको पार्दछ, रुची जगाउँदछ तथा रक्तपित्त, पीडा र डाह नाश गर्दछ ।

## कालाञ्जनी

**कालाञ्जनी चाञ्जनी च रेचनी चासिताञ्जनी ।**
**नीलाञ्जनी च कृष्णाभा काली कृष्णाञ्जनी च सा ॥१८६॥**
**कालाञ्जनी कटूष्णा स्यादम्लामक्रिमिशोधनी ।**
**अपानावर्तशमनी जठरामयहारिणी ॥१८७॥**

कालाञ्जनी, अञ्जनी, रेचनी, असिताञ्जनी, नीलाञ्जनी, कृष्णाभा, काली र कृष्णाञ्जनी : यी कालो कपासका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, अमिलो र कीरा नाशक हुन्छ । यसले हावा भरिएर पेट कराउने रोग र पेटका रोग नाश गर्दछ ।

कपास (कार्पासी)

**कार्पासी सारिणी चैव चव्या स्थूला पिचुस्तथा ।**
**बदरी बादरश्चैव गुणसूस्तुण्डिकेरिका ॥**
**मरूद्भवा समुद्रान्ता ज्ञेया एकादशाभिधा ॥१८८॥**
**कार्पासी मधुरा शीता स्तन्या पित्तकफापहा ।**
**तृष्णादाहश्रमभ्रान्ति मूर्छाहृद्बलकारिणी ॥१८९॥**

(१) कार्पासी, (२) सारिणी, (३) चव्या, (४) स्थूला, (५) पिचु, (६) बदरी, (७) बादर, (८) गुणसू, (९) तुण्डिकेरिका, (१०) मरूद्भवा र (११) समुद्रान्ता : यी एघार नाम कपासका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, दूध बढाउने तथा पित्तविकार र कफविकार नाशक हुन्छ । यसले तिर्खा, डाह, थकाई, भ्रम र बेहोसी नाश गर्नुका साथै बलदायक पनि हुन्छ ।

वनकपास (अरण्यकार्पासी)

**वनजाऽरण्यकार्पासी भारद्वाजी वनोद्भवा ।**
**भारद्वाजी हिमा रुच्या व्रणशस्त्रक्षतापहा ॥१९०॥**



वनजा, अरण्यकार्पासी, भारद्वाजी र वनोद्भवा : यी वनकपासका संस्कृत पर्यायवाची नामहरू हुन् । वनकपास शीतवीर्यको, रुचिकर तथा घाउखटिरा र हतियानले लाग्ने चोटपटक ठिक गर्ने गुणको हुन्छ ।

तालमखाना (कोकिलाक्ष)

**कोकिलाक्षः शृगाली च शृङ्खला रणकस्तथा ।**
**शृङ्गालघण्टी वज्रास्थि-शृङ्खला वज्रकण्टकः ॥१९१॥**
**इक्षुरः क्षुरको वज्रः शृङ्खलिका पिकेक्षणः ।**
**पिच्छिला चेक्षुगन्धा च ज्ञेया भुवनसम्मिता ॥१९२॥**
**कोकिलाक्षस्तु मधुरः शीतः पित्तातिसारनुत् ।**
**वृष्यः कफहरो बल्यो रुच्यः सन्तर्पणः परः ॥१९३॥**

(१) कोकिलाक्ष, (२) शृगाली, (३) शृङ्खला, (४) रणक, (५) शृङ्गालघण्टी, (६) वज्रास्थि-शृङ्खला, (७) वज्रकण्टक, (८) इक्षुर, (९) क्षुरक, (१०) वज्र, (११) शृङ्खलिका, (१२) पिकेक्षण, (१३) पिच्छिला र (१४) इक्षुगन्धा : यी चौध नाम तालमखानाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा पित्तविकार र अतिसारलाई ठिक गर्ने गुणको हुन्छ । यसका साथै यो

वीर्यशाली, कफविकार नाशक, बलदायक, रुचिकर र अत्यन्त तृप्तिदायक हुन्छ ।

## सातला (हात्तीकाने)

**सातला सप्तला सारी विदुला विमलाऽमला ।**
**बहुफेना चर्मकषा फेना दीप्ता विषाणिका ॥**
**स्वर्णपुष्पी चित्रघना स्यात्त्रयोदशनामका ॥१९४॥**
**सातला कफपित्तघ्नी लघुतिक्तकषायिका ।**
**विसर्पकुष्ठविस्फोटव्रणशोफनिकृन्तनी ॥१९५॥**

(१) सातला, (२) सप्तला, (३) सारी, (४) विदुला, (५) विमला, (६) अमला, (७) बहुफेना, (८) चर्मकषा, (९) फेना, (१०) दीप्ता, (११) विषाणिका, (१२) स्वर्णपुष्पी र (१३) चित्रघना : यी तेह्र नाम सातलाका संस्कृत पर्यायवाची नामहरू हुन् । सातलाले कफविकार पित्तविकार नाश गर्दछ । यो पचाउन सहज, तीतो र टर्रो हुन्छ । यसले विसर्प, कुष्ठ, विस्फोट, घाउखटिरा र सुजन नाश गर्दछ ।

## कामवृद्धि



**स्यात् कामवृद्धिः स्मरवृद्धिसञ्ज्ञो मनोजवृद्धिर्मदनायुधश्च ।**
**कन्दर्पजीवश्च जितेन्द्रियाह्वः कामोपजीवोऽपि च जीवसञ्ज्ञः ॥१९६॥**
**कामवृद्धेस्तु बीजं स्यान्मधुरं बलवर्धनम् ।**
**कामवृद्धिकरं रुच्यं बहुलेन्द्रियवृद्धिदम् ॥१९७॥**

कामवृद्धि, स्मरवृद्धि, मनोजवृद्धि, मदनायुध, कन्दर्पजीव, जितेन्द्रियाह्व, कामोपजीव र जीव : यी कामवृद्धिका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको बीजले कामाशक्ति बढाउँदछ, मिठो हुन्छ र बल बढाउँदछ । यसले मैथुनको इछाशक्ति वृद्धि गर्दछ, रुचि जगाउँदछ र (पुरुषका) इन्द्रिय ( अङ्ग) हरु समेत बढाउँदछ ।

## ताप्रे वा चकौंते (चक्रमर्द)

**स्याच्चक्रमर्दोऽण्डगजो गजाख्यो मेषाह्वयश्चैडगजोऽण्डहस्ती ।**
**व्यावर्तकश्चक्रगजश्च चक्री पुन्नाडपुन्नाटविमर्दकाश्च ॥१९८॥**
**दद्रुघ्नस्तर्वटश्च स्याच्चक्राह्वः शुकनाशनः ।**
**दृढबीजः प्रपुन्नाटः खर्जूघ्नश्चोनविंशतिः ॥१९९॥**
**चक्रमर्दः कटुस्तीव्रो मेदोवातकफापहः ।**

**व्रणकण्डूर्तिकुष्ठार्तिदद्रुपामादिदोषनुत्॥२००॥**

(१) चक्रमर्द, (२) अण्डगज, (३) गजाख्य, (४) मेषाह्वय, (५) एडगज, (६) अण्डहस्ती, (७) व्यावर्तक, (८) चक्रगज, (९) चक्री, (१०) पुन्नाड, (११) पुन्नाट, (१२) विमर्दक, (१३) दद्रुघ्न, (१४) तर्वट, (१५) चक्राह्व, (१६) शुकनाशन, (१७) दृढबीज, (१८) प्रपुन्नाट र (१९) खर्जूघ्न : यी उन्नाईस वटा नाम ताप्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, छिटो असर गर्ने तथा बोसोविकार, वातविकार र कफविकार नाशक हुन्छ । यसका साथै ताप्रेले घाउखटिरा, चिलाउने रोग, सिध्मकुष्ठ, पीडा, दाद, पामा आदि रोगहरू पनि ठिक गर्दछ ।

## झिञ्झिरीटा

**झिञ्झिरीटा कण्टफली पीतपुष्पाऽपि झिञ्झिरा ।**
**हुडरोमाश्रयफला वृत्ता चैव षडाह्वया ॥२०१॥**
**झिञ्झिरीटा कटुः शीता कषाया चातिसारजित् ।**
**वृष्या सन्तर्पणी बल्या महिषीक्षीरवर्धनी ॥२०२॥**

(१) झिञ्झिरीटा, (२) कण्टफली, (३) पीतपुष्पा, (४) झिञ्झिरा, (५) हुडरोमा, (६) आश्रयफला र (७) वृत्ता : यी सात (छ भनिएको) नाम झिञ्झिरीटाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, शीतवीर्यको, टर्रो र अतिसारलाई जित्ने गुणको हुन्छ । यो वीर्यवर्धक, तृप्तिदायक, बलदायक र भैंसीको दूध बढाउने गुणको हुन्छ ।

## उपसंहार

**इत्थं पृथुक्षुपकदम्बकनामकाण्डनिर्वर्णनागुणनिरूपणपूर्वमेतम् ।**
**वर्गं वटुः स्फुटमधीत्य दधीत सद्यः सौवर्गवैद्यकविचारसुचातुरीं सः ॥२०३॥**

यसरी धेरै थरी झाडीदार वृक्षहरूका बारेमा गुणसहित वर्णन गरिएको यो "पृथुक्षुपककदम्ब" नामक अध्यायलाई गहन अध्ययन गर्ने विद्यार्थीले चिकित्साक्षेत्रसम्बन्धी छलफलमा निपुणता प्राप्त गर्नेछ ।

## शताह्वादिवर्ग प्रशस्ति

**येन स्वेन नृणां क्षणेन महता वीर्येण सूर्योपमा**
**व्यत्यस्याङ्गविकारमुद्धततया दूरं क्षिपन्त्यामयान् ।**
**स्वस्मिन्नाम्न्यपि संस्तवादिवशतस्तेषां विकारोदय-**

**व्यत्यासं दधतां नितान्तगहनो वर्गः क्षुपाणामयम् ॥२०४॥**

यी झाडीहरू सूर्यजस्तै शक्तिशाली हुन्छन्, त्यसैले यिनले आफ्नो प्रचूर शक्तिद्वारा व्यक्तिका रोगलाई क्षणभरमै हटाइदिन्छन् । यो अध्याय ती झाडीहरूको अकल्पनीय शब्द-चित्रण सँगै पूर्ण हुन्छ, जसको प्रत्येक नामले नै बिरामीको उपस्थितिलाई असम्भव बनाउँदछ, यी झाडीको प्रयोगकै बारेमा त के कुरा गर्नु ?

**सन्तापं विदुषां प्रसह्य समितौ स्फीतं प्रतापं द्विषां**
**यस्मिन् विस्मयतेऽवनञ्च निधनं दृष्ट्वाऽधुना तेजसा ।**
**धुन्वन्त्यौषधयः स्वयं किल गदान् येनार्पिताः स्पर्धया**
**तुर्यस्तस्य कृतौ स्थितो नरहरेर्वर्गः शताह्वादिकः ॥२०५॥**

यहाँ नरहरीले लेखेको ग्रन्थको चौथो शताह्वादि वर्ग उपस्थित छ, जुन वर्गले विद्वानहरूको दुःख हटाउने  र सभाहरूमा विरोधीहरूको महिमा लुट्ने क्षमता राख्दछ । पण्डितहरूका संरक्षक र तिनका विरोधीहरूका विध्वंसकहरू नरहरीलाई मानिसहरू अचम्म मानेर हेर्दछन् । साथै, उनले गर्वका साथ उल्लेख गरेका गरेका ओखतीजन्य वनस्पतिहरू मार्फत ती आफ्नै रोगहरू नाश गर्दैछन् ।



**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ शताह्वादिवर्गः चतुर्थः ॥४॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत शताह्वादिवर्ग नामक चौथो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।४।

## पर्पटादिवर्गः

पर्पटो जीवकाश्चैवर्षभकः श्रावणी द्विधा ।
मेदाद्वयं ऋद्धिवृद्धी धूम्रपत्रा प्रसारणी ॥१॥
चतुष्पाषाणभेदः स्यात् कन्या बर्हिशिखा तथा ।
क्षीरिणीद्वितयं चैव त्रायमाणा रुदन्तिका ॥२॥
ब्राह्मी द्विधा च वन्दाकः कुलत्था तण्डुलीयकः ।
चिविल्लो नागशुण्डी च कुटुम्बी स्थलपद्मिनी ॥३॥
जम्बूश्च नागदन्ती च विष्णुक्रान्ता कुणञ्जरः ।
भूम्यामली च गोरक्षी गोलोमी दुग्धफेनिका ॥४॥
क्षुद्राम्लिका च लज्जाह्वी हंसपादी च काथरा ।
पुनर्नवात्रयं प्रोक्तं वसुको द्विविधः स्मृतः ॥५॥
सर्पिणी चालिर्मत्स्याक्षी गुण्डालाऽवनिपाटली ।
स्यात् पाण्डुरफली श्वेता ब्रह्मदण्डी द्रवन्तिका ॥६॥
द्रोणपुष्पीद्वयं चैव भ्रूण्डूर्गोरक्षदुग्धिका ।
नवबाणमिताः क्षुद्रक्षुपाः प्रोक्ता यथाक्रमात् ॥७॥



यो पर्पटादि नामक वर्गमा पर्पट, जीवक, ऋषधक, दुई थरी श्रावणी, दुई थरी मेदा, ऋद्धि, वृद्धि, धूम्रपत्रा, प्रसारणी, चार थरी पाषाणभेद, कन्या, बर्हिशिखा, दुई थरी क्षीरिणी, त्रायमाणा, रुदन्तिका, दुई थरी ब्राह्मी, वन्दाक, कुलत्था, तण्डुलीयक, चिबिल्ली, नागशुण्डी, कुटुम्बी, स्थलपद्मिनी, जम्बू, नागदन्ती, विष्णुक्रान्ता, कुणञ्जर, भूम्यामली, गोरक्षी, गोलोमी, दुग्धफेनिका, क्षुद्राम्लिका, लज्जाह्वी, हंसपादी, काथरा, तीन थरी पुनर्नवा, दुई थरी वसुक, सर्पिणी, आलि, मत्स्याक्षी, गुण्डाला, अवनिपाटली, पाण्डुरफली, श्वेता, ब्रह्मदण्डी, द्रवन्तिका, दुई थरी द्रोणपुष्पी, भ्रूण्डू र गोरक्षदुग्धिका गरी जम्मा उनन्चास वटा साना बिरुवाका बारेमा क्रमैले बताइनेछ ।

### पित्तपापडा (पर्पट)

पर्पटश्चरको रेणुस्तृष्णारिः खरको रजः ।
शीतः शीतप्रियः पांशुः कल्पाङ्गी वर्मकण्टकः ॥८॥
कृशशाखः पर्पटकः सुतिक्तो रक्तपुष्पकः ।
पित्तारिः कटुपत्रश्च कवचोऽष्टादशाभिधः ॥९॥
पर्पटः शीतलस्तिक्तः पित्तश्लेष्मज्वरापहः ।
रक्तदाहारुचिग्लानि मदविभ्रमनाशनः ॥१०॥

(१) पर्पट, (२) चरक, (३) रेणु, (४) तृष्णारि, (५) खरक, (६) रज, (७) शीत, (८) शीतप्रिय, (९) पांशु, (१०) कल्पाङ्गी, (११) वर्मकण्टक, (१२) कृशशाख, (१३) पर्पटक, (१४) सुतिक्त, (१५) रक्तपुष्पक, (१६) पित्तारि, (१७) कटुपत्र र (१८) कवच : यी अठार नाम पित्तपापडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो तथा पित्तविकार, कफविकार र जरो नाशक हुन्छ । यसले रक्तविकार, डाह, अरुचि, मानसिक थकाई, नसा र भ्रम पनि नाश गर्दछ ।

**जीवक**

**जीवको जीवनो जीव्यः शृङ्गाह्वः प्राणदः प्रियः ।**
**चिरजीवी च मधुरो मङ्गल्यः कूर्चशीर्षकः ॥११॥**
**ह्रस्वाङ्गो वृद्धिदश्चोक्तो ह्यायुष्माञ्जीवदस्तथा ।**
**दीर्घायुर्बलदश्चैव नामान्येतानि षोडश ॥१२॥**
**जीवको मधुरः शीतो रक्तपित्तानिलार्तिजित् ।**
**क्षयदाहज्वरान्हन्ति शुक्रश्लेष्मविवर्धनः ॥१३॥**

(१) जीवक, (२) जीवन, (३) जीव्य, (४) शृङ्गाह्व, (५) प्राणद, (६) प्रिय, (७) चिरजीवी, (८) मधुर, (९) मङ्गल्य, (१०) कूर्चशीर्षक, (११) ह्रस्वाङ्ग, (१२) वृद्धिद, (१३) आयुष्मान्, (१४) जीवद, (१५) दीर्घायु र (१६) बलद : यी सोह्र नाम जीवकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा रक्तपित्त, वातविकार र पीडा नाशक हुन्छ । यसले क्षयरोग, डाह र जरो नाश गर्नुका साथै शुक्र र कफविकार बढाउँदछ ।

**ऋषभक**

**ऋषभो गोपतिर्धीरो विषाणी धूर्धरो वृषः ।**
**ककुद्मान् पुङ्गवो वोढा शृङ्गी धुर्य्यश्च भूपतिः ॥१४॥**
**कामी ऋक्षप्रियश्चोक्षा लाङ्गुली गौश्च वन्धुरः ।**
**गोरक्षी वनवासी च ज्ञेयो विंशतिनामकः ॥१५॥**
**ऋषभो मधुरः शीतः पित्तरक्तविरेकनुत् ।**
**शुक्रश्लेष्मकरो दाह क्षयज्वरहरश्च सः ॥१६॥**

(१) ऋषभ, (२) गोपति, (३) धीर, (४) विषाणी, (५) धूर्धर, (६) वृष, (७) ककुद्मान्, (८) पुङ्गव, (९) वोढा, (१०) शृङ्गी, (११) धुर्य्य, (१२) भूपति, (१३) कामी, (१४) ऋक्षप्रिय, (१५) ऊक्षा, (१६) लाङ्गुली, (१७) गौ, (१८) वन्धुर, (१९) गोरक्षी र (२०) वनवासी : यी बीस नाम ऋषभकका संस्कृत पर्यायवाची नामहरू हुन् । ऋषभक गुलियो, शीतवीर्यको तथा रक्तपित्त र छेरपटी नाशक

हुन्छ । यसले शुक्र र कफविकार बढाउँदछ तथा क्षयरोग र जरो पनि नाश गर्दछ ।

## सानो गोरखमुण्डी (श्रावणी)

**श्रावणी स्यान्मुण्डितिका भिक्षुः श्रवणशीर्षिका ।**
**श्रवणा च प्रव्रजिता परिव्राजी तपोधना ॥१७॥**
**श्रावणी तु कषाया स्यात्कटूष्णा कफपित्तनुत् ।**
**आमातीसारकासघ्नी विषच्छर्दिविनाशिनी ॥१८॥**

श्रावणी, मुण्डितिका, भिक्षु, श्रवणशीर्षका, श्रवणा, प्रव्रजिता, परिव्राजी र तपोधना : यी सानो गोरखमुण्डीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, पिरो, उष्णवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले आमविकार, अतिसार, खोकी, विषविकार र वाकवाकी नाश गर्दछ ।

## ठूलो गोरखमुण्डी (महाश्रावणी)

**महाश्रावणिकाऽन्या सा महामुण्डी च लोचनी ।**
**कदम्बपुष्पी विकचा क्रोडचूडा पलङ्कषा ॥१९॥**
**नदीकदम्बो मुण्डाख्या महामुण्डनिका च सा ।**
**छिन्ना ग्रन्थिनिका माता स्थविरा लोभनी तथा ॥**
**भूकदम्बोऽलम्बुषा स्यादित्येषा शोडषाह्वया ॥२०॥**
**महामुण्ड्युष्ण तिक्ता च ईषद्गौल्या मरुच्छिदा ।**
**स्वरकृद्रोचनी चैव मेहहृच्च रसायनी ॥२१॥**

(१) महाश्रावणिका, (२) महामुण्डी, (३) लोचनी, (४) कदम्बपुष्पी, (५) विकचा, (६) क्रोडचूडा, (७) पलङ्कषा, (८) नदीकदम्ब, (९) मुण्डाख्या, (१०) महामुण्डनिका, (११) छिन्ना, (१२) ग्रन्थिनिका, (१३) माता, (१४) स्थविरा, (१५) लोभनी, (१६) भूकदम्ब र (१७) अलम्बुषा : यी सत्र (सोह्र लेखिएको) नाम ठूलो गोरखमुण्डीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, तीतो, हल्का गुलियो र वातविकार नाशक हुन्छ । यसले स्वर खुलाउँदछ, रुची जगाउँदछ, प्रमेह नाश गर्दछ र रसायनी हुन्छ ।

## मेदा

**मेदा वसा मणिच्छिद्रा जीवनी शल्यपर्णिका ।**
**नखच्छेद्या हिमा रङ्गा मध्यदेशे प्रजायते ॥२२॥**

**मेद:सारा स्नेहवती मेदिनी मधुरा वरा ।**
**स्निग्धा मेदोद्भवा साध्वी शल्यदा बहुरन्ध्रिका ॥**
**ऊनविंशत्याह्वया सा मता पूरुषदन्तिका ॥२३॥**
**मेदा तु मधुरा शीता पित्तदाहार्तिकासनुत् ।**
**राजयक्ष्मज्वरहरा वातदोषकरी च सा ॥२४॥**

(१) मेदा, (२) वसा, (३) मणिच्छिद्रा, (४) जीवनी, (५) शल्यपर्णिका, (६) नखच्छेद्या, (७) हिमा, (८) रञ्जा, (९) मेद:सारा, (१०) स्नेहवती, (११) मेदिनी, (१२) मधुरा, (१३) वरा, (१४) स्निग्धा, (१५) मेदोद्भवा, (१६) साध्वी, (१७) शल्यदा, (१८) बहुरन्ध्रिका र (१९) पूरुषदन्तिका : यी उन्नाईस नाम मेदाका संस्कृत पर्यायवाची नामहरू हुन् । शुरुका आठनामका मेदा मध्यदेशमा पाइन्छन् । मेदा गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह, पीडा र खोकी नाशक हुन्छ । यसले क्षयरोग र जरो नाश गर्दछ तर वातविकार बढाउँदछ ।

**महामेदा**

**महामेदा वसुच्छिद्रा जीवनी पांशुरागिणी ।**
**देवेष्टा सुरमेदा च दिव्या देवमणिस्तथा ॥२५॥**
**देवगन्धा महाच्छिद्रा ऋक्षार्हा रुद्रसम्मिता ।**
**महामेदोऽभिधः कन्दो लताजातः सुपाण्डुरः ॥**
**मेदाऽपि शुक्लकन्दः स्यान्मेदोधातुमिव स्रवेत् ॥२६॥**
**महामेदा हिमा रुच्या कफशुक्रप्रवृद्धिकृत् ।**
**हन्ति दाहास्रपित्तानि क्षयं वातज्वरं च सा ॥२७॥**

(१) महामेदा, (२) वसुच्छिद्रा, (३) जीवनी, (४) पांशुरागिणी, (५) देवेष्टा, (६) सुरमेदा, (७) दिव्या, (८) देवमणि, (९) देवगन्धा, (१०) महाच्छिद्रा र (११) ऋक्षार्हा : यी एघार नाम महामेधाका संस्कृत पर्यायवाची नामहरू हुन् । महामेधा लहराविशेषको कन्दमूल हो र यो हल्का पहेँलो मिसिएको सेतो रङको (फिका पहेँलो) हुन्छ । मेदाको कन्द भने सेतो रङको हुन्छ र यसमा बोसो जस्तै बाक्लो तरल पदार्थ रहेको हुन्छ । महामेदा शीतवीर्यको, रुचिकर तथा कफविकार र शुक्र धातु बढाउने गुणको हुन्छ । यसले डाह, रक्तविकार, पित्तविकार, क्षयरोग र वातज्वर नाश गर्दछ ।

**ऋद्धि**

**ऋद्धिः सिद्धिः प्राणदा जीवदात्री सिद्धा योग्या चेतनीया रथाङ्गी ।**
**मङ्गल्या स्याल्लोककान्ता यशस्या जीवश्रेष्ठा द्वादशाह्वा क्रमेण ॥२८॥**

(१) ऋद्धि, (२) सिद्धि, (३) प्राणदा, (४) जीवदात्री, (५) सिद्धा, (६) योग्या, (७) चेतनीया, (८) रथाङ्गी, (९) मङ्गल्या, (१०) लोककान्ता, (११) यशस्या र (१२) जीवश्रेष्ठा : यी बाह्र नाम ऋद्धिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## वृद्धि

**वृद्धिस्तुष्टिः पुष्टिदा वृद्धिदात्री मङ्गल्या श्रीः सम्पदाशीर्जनेष्टा ।**
**लक्ष्मीर्भूतिर्मुत् सुखं जीवभद्रा स्यादित्येषा लोकसंज्ञा क्रमेण ॥२९॥**
**ऋद्धिर्वृद्धिश्च कन्दौ द्वौ भवतः कोशयामले ।**
**श्वेतरोमान्वितः कन्दो लताजातः सरन्ध्रकः ॥३०॥**
**तूलग्रन्थिसमा ऋद्धिर्वामावर्तफला च सा ।**
**वृद्धिस्तु दक्षिणावर्तफला प्रोक्ता महर्षिभिः ॥३१॥**

वृद्धि, तुष्टि, पुष्टिदा, वृद्धिदात्री, मङ्गल्या, श्री, सम्पदाशी, जनेष्टा, लक्ष्मी, भूतिर्मुत्, सुखं र जीवभद्रा : यी वृद्धिका संस्कृत पर्यायवाची नामहरू हुन् । ऋद्धि र वृद्धि दुवैका कन्द (लसुनजस्तै) खोलले ढाकिएका हुन्छन् । यी कन्द सेता र भुसयुक्त हुन्छन् । मूल बोट लहरेदार र खोक्रा हुन्छन् । ऋद्धि नामक लहरा कपासको गाँठो जस्तै हुन्छ र बायाँतिरबाट बेरिएर उक्लिने गर्दछ तथा वृद्धि नामक लहरा दाहिनेतिरबाट बेरिँदै उक्लने गर्दछ भनी महर्षिहरूले बताएका छन् ।

## ऋद्धि र वृद्धिका गुण

**ऋद्धिर्वृद्धिश्च मधुरा सुस्निग्धा तिक्तशीतला ।**
**रुचिमेधाकरी श्लेष्मकुष्ठकृमिहरा परा ॥३२॥**
**प्रयोगेष्वनयोरेकं यथालाभं प्रयोजयेत् ।**
**यत्र द्वयानुसृष्टिः स्याद्द्वयमप्यत्र योजयेत् ॥३३॥**

ऋद्धि र वृद्धि दुवै गुलिया, चिल्ला, तीता र शीतवीर्यका हुन्छन् । यिनले रुची जगाउँदछन् र दिमागको ग्रहण गर्ने क्षमतालाई बढाउँदछन् । यी दुवैले कफविकार, कुष्ठ र कीरालाई प्रभावकारी ढङ्गले नाश गर्दछन् । ओखती बनाउँदा यी दुईमध्ये एकले नै आवश्यकता अनुसारको उद्देश्य पूरा गर्न सक्दछ । पाउँदा दुवैको प्रयोग गर्नू ।

## सुर्ती (धूम्रपत्रा)

**धूम्रपत्रा तु धूम्राह्वा सुलभा तु स्वयम्भुवा ।**
**गृध्रपत्रा च गृध्राणी क्रिमिघ्नी स्त्रीमलापहा ॥३४॥**

**धूम्रपत्रा रसे तिक्ता शोफघ्नी क्रिमिनाशिनी ।**
**उष्णा कासहरा चैव रुच्या दीपनकारिणी ॥३५॥**

धूम्रपत्रा, धूम्राह्वा, सुलभा, स्वयम्भुवा, गृध्रपत्रा, गृध्राणी, क्रिमिघ्नी र स्त्रीमलापहा : यी सुर्तीका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो रसमा तीतो तथा सुजन र कीरा नाशक हुन्छ । सुर्ती उष्णवीर्यको, खोकी नाशक, रुचीकर र दीपनी हुन्छ ।

### प्रसारणी

**प्रसारिणी सुप्रसरा सारणी सरणी सरा ।**
**चारुपर्णी राजबला भद्रपर्णी प्रतानिका ॥३६॥**
**प्रबला राजपर्णी च बल्या भद्रबला तथा ।**
**चन्द्रवल्ली प्रभद्रा च ज्ञेया पञ्चदशाह्वया ॥३७॥**
**प्रसारिणी गुरूष्णा च तिक्ता वातविनाशिनी ।**
**अर्शःश्वयथुहन्त्री च मलविष्टम्भहारिणी ॥३८॥**

प्रसारिणी, सुप्रसरा, सारणी, सरणी, सरा, चारुपर्णी, राजबला, भद्रपर्णी, प्रतानिका, प्रबला, राजपर्णी, बल्या, भद्रबला, चन्द्रवल्ली र प्रभद्रा : यी पन्ध्र नाम बिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, उष्णवीर्यको, तीतो र वातविकार नाशक हुन्छ । यसले अल्काई, सुजन र दिसा गोटा पर्ने रोग नाश गर्दछ ।

### पाषाणभेद

**पाषाणभेदकोऽश्मघ्नः शिलाभेदोऽश्मभेदकः ।**
**श्वेता चोपलभेदी च नगजिच्छिलिगर्भजा ॥३९॥**
**पाषाणभेदो मधुरस्तिक्तो मेहविनाशनः ।**
**तृट्दाहमूत्रकृच्छ्रघ्नः शीतलश्चाश्मरीहरः ॥४०॥**

पाषाणभेदक, अश्मघ्न, शिलाभेद, अश्मभेदक, श्वेता, उपलभेदी, नगजित् र शिलिगर्भजा : यी पाषाणभेदका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तीतो र प्रमेह नाशक हुन्छ । यसले तिर्खारोग, डाह, मूत्रकृच्छ्र र पत्थरी नाश गर्दछ । यो शीतवीर्यको हुन्छ ।

### वटपत्री

**अन्या तु वटपत्री स्यादन्या चैरावती च सा ।**

**गोधावतीरावती च श्यामा खट्वाङ्गनामिका ॥४१॥**
**वटपत्री हिमा गौल्या मेहकृच्छ्रविनाशिनी ।**
**बलदा व्रणहन्त्री च किञ्चिद्दीपनकारिणी ॥४२॥**

वटपत्री, ऐरावती, गोधावती, इरावती, श्यामा र खट्वाङ्गनामिका : यी वटपत्री अर्थात् पाषाणभेद विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो तथा प्रमेह र कृच्छ्र नाशक हुन्छ । यसले बलदिन्छ, घाउखटिरा नाश गर्दछ र थोरै दीपनी हुन्छ ।

### शिलावल्का

**अन्या श्वेता शिलावल्का शिलाजा शैलवल्कला ।**
**वल्कला शैलगर्भाह्वा शिलात्वक् सप्तनामिका ॥४३॥**
**शिलावल्कं हिमं स्वादु मेहकृच्छ्रविनाशनम् ।**
**मूत्ररोधाश्मरीशूलक्षयपित्तापहारकम् ॥४४॥**

(१) श्वेता, (२) शिलावल्का, (३) शिलाजा, (४) शैलवल्कला, (५) वल्कला, (६) शैलगर्भाह्वा र (७) शिलात्वक् : यी सात नाम अर्को थरी पाषाणभेदका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो तथा प्रमेह र कृच्छ्र नाशक हुन्छ । पिसाब रोकिने रोग, पत्थरी, शूल, क्षयरोग र पित्तविकार पनि यसले नाश गर्दछ ।

### क्षुद्रपाषाणभेद

**क्षुद्रपाषाणभेदान्या चतुष्पत्री च पार्वती ।**
**नागभूरश्मकेतुश्च गिरिभूः कन्दरोद्भवा ॥४५॥**
**शैलोद्भवा च गिरिजा नगजा च दशाह्वया ।**
**क्षुद्रपाषाणभेदा तु व्रणकृच्छ्राश्मरीहरा ॥४६॥**

(१) क्षुद्रपाषाणभेद, (२) चतुष्पत्री, (३) पार्वती, (४) नागभू, (५) अश्मकेतु, (६) गिरिभू, (७) कन्दरोद्भवा, (८) शैलोद्भवा, (९) गिरिजा र (१०) नगजा : यी दश नाम सानो जातको पाषाणभेदका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले घाउखटिरा, कृच्छ्र र पत्थरी नाश गर्दछ ।

### घिउकुमारी

**गृहकन्या कुमारी च कन्यका दीर्घपत्रिका ।**
**स्थलेरुहा मृदुः कन्या बहुपत्राऽमराऽजरा ॥४७॥**

**कण्टकप्रावृता वीरा भृङ्गेष्टा विपुलस्रवा ।**
**व्रणघ्नी तरुणी रामा कपिला चाम्बुधिस्रवा ॥**
**सुकण्टका स्थूलदलेत्येकविंशतिनामका ॥४८॥**
**गृहकन्या हिमा तिक्ता मदगन्धिः कफापहा ।**
**पित्तकासविषश्वासकुष्ठघ्नी च रसायनी ॥४९॥**

(१) गृहकन्या, (२) कुमारी, (३) कन्यका, (४) दीर्घपत्रिका, (५) स्थलेरुहा, (६) मृदु, (७) कन्या, (८) बहुपत्रा, (९) अमरा, (१०) अजरा, (११) कण्टकप्रावृता, (१२) वीरा, (१३) भृङ्गेष्टा, (१४) विपुलस्रवा, (१५) व्रणघ्नी, (१६) तरुणी, (१७) रामा, (१८) कपिला, (१९) अम्बुधिस्रवा, (२०) सुकण्टका र (२१) स्थूलदला : यी एक्काईस वटा नाम घिउकुमारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो, मदिराको गन्ध आउने र कफविकार नाश गर्ने गुणको हुन्छ । यसले पित्तविकार, खोकी, विषविकार, दम र कुष्ठ पनि निको पार्दछ । यो रसायनी हुन्छ ।

## सहस्रजरी

**बर्हिचूडा तु शिखिनी शिखालुः सुशिखा शिखा ।**
**शिखाबला केकिशिखा मयूराद्यभिधा शिखा ॥५०॥**
**बर्हिचूडारसे स्वादुर्मूत्रकृच्छ्रविनाशिनी ।**
**बालग्रहादिदोषघ्नी वश्यकर्मणि शस्यते ॥५१॥**

बर्हिचूडा, शिखिनी, शिखालु, सुशिखा, शिखा, शिखाबला, केकिशिखा र पछाडि शिखा शब्द जोडिएका मयुरका पर्यायवाची शब्द : यी सहस्रजरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो हुन्छ । यसले मूत्रकृच्छ्र र बालकका ग्रह आदि बाधा नाश गर्दछ । वशीकरणमा यो बढी उपयोगी हुन्छ ।

## पहेँलो दूधे थाकल (क्षीरिणी)

**क्षीरिणी काञ्चनक्षीरी कर्षणी कटुपर्णिका ।**
**तिक्तदुग्धा हैमवती हिमदुग्धा हिमावती ॥५२॥**
**हिमाद्रिजा पीतदुग्धा यवचिञ्चा हिमोद्भवा ।**
**हैमी च हिमजा चेति चतुरेकगुणाह्वया ॥५३॥**
**क्षीरिणी कटुतिक्ता च रेचनी शोफतापनुत् ।**
**कृमिदोषकफघ्नी च पित्तज्वरहरा च सा ॥५४॥**

(१) क्षीरिणी, (२) काञ्चनक्षीरी, (३) कषणी, (४) कटुपर्णिका, (५) तिक्तदुग्धा, (६) हेमवती, (७) हिमदुग्धा, (८) हिमावती, (९) हिमाद्रिजा, (१०) पीतदुग्धा, (११) यवचिञ्चा, (१२) हिमोद्भवा, (१३) हेमी र (१४) हिमजा : यी चौध नाम पहेँलो दूधे थाकलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, रेचनी, सुजन र डाह वा जरो नाशक हुन्छ । यसले कीराका विकार, कफविकार र पित्तजन्य ज्वर नाश गर्दछ ।

## सियालकाने (स्वर्णक्षीरी)

**स्वर्णक्षीरी स्वर्णदुग्धा स्वर्णाह्वा रुक्मिणी तथा ।**
**सुवर्णा हेमदुग्धी च हेमक्षीरी च काञ्चनी ॥५५॥**
**स्वर्णक्षीरी हिमा तिक्ता कृमिपित्तकफापहा ।**
**मूत्रकृच्छ्राश्मरीशोफदाहज्वरहरा परा ॥५६॥**

स्वर्णक्षीरी, स्वर्णदुग्धा, स्वर्णाह्वा, रुक्मिणी, सुवर्णा, हेमदुग्धी, हेमक्षीरी र काञ्चनी : यी नाम सियालकानेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो तथा कीरा, पित्तविकार र कफविकार नाशक हुन्छ । यसले मूत्रकृच्छ्र, पत्थरी, सुजन, डाह र जरो विशेषरूपले नाश गर्दछ ।



## मुडिलो (त्रायमाण)

**त्रायमाणा कृतत्राणा त्रायन्ती त्रायमाणिका ।**
**बलभद्रा सुकामा च वार्षिकी गिरिजानुजा ॥५७॥**
**मङ्गल्याह्वा देवबला पालनी भयनाशिनी ।**
**अवनी रक्षणी त्राणा विज्ञेया षोडशाह्वया ॥५८॥**
**त्रायन्ती शीतमधुरा गुल्मज्वरकफास्रनुत् ।**
**भ्रमतृष्णाक्षयग्लानिविषच्छर्दिविनाशिनी ॥५९॥**

त्रायमाणा, कृतत्राणा, त्रायन्ती, त्रायमाणिका, बलभद्रा, सुकामा, वार्षिकी, गिरिजानुजा, मङ्गल्याह्वा, देवबला, पालनी, भयनाशिनी, अवनी, रक्षणी र त्राणा : यी मुडिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो तथा गुल्म, ज्वर, कफविकार र रक्तविकार नाशक हुन्छ । यसले भ्रम, तिर्खा, क्षयरोग, मानसिक पीडा वा थकाई, विषविकार र वाकवाकी नाश गर्दछ ।

## जडेलो वा रुदिलो (रुदन्ती)

**स्याद्रुदन्ती स्रवत्तोया सञ्जीवन्यमृतस्रवा ।**

**रोमाञ्चिका महामांसी चणपत्री सुधास्रवा ॥६०॥**
**रुदन्ती कटुतिक्तोष्णा क्षयक्रिमिविनाशिनी ।**
**रक्तपित्तकफश्वासमेहहारी रसायनी ॥६१॥**
**चणपत्रसमं पत्रं क्षुपश्चैव तथाऽम्लकम् ।**
**शिशिरे जलबिन्दूनां स्रवन्तीति रुदन्तिका ॥६२॥**

रुदन्ती, स्रवत्तोया, सञ्जीवनी, अमृतस्रवा, रोमाञ्चिका, महामांसी, चणपत्री र सुधास्रवा : यी रुदिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा क्षयरोग र कीरा नाशक हुन्छ । यसले रक्तपित्त, कफविकार, दम र प्रमेह समेत नाश गर्दछ । यो रसायनी हुन्छ । यसको बोट र पात चनाको बोट र पात जस्तै हुन्छन् । यो पात अमिलो हुन्छ । शिशिर ऋतुमा यी पातबाट आँशु झरे जसरी नै पानीका थोपा चुहिने हुनाले यसको नाम रुदन्ती रहेको हो ।

**ब्राह्मी**

**ब्राह्मी सरस्वती सौम्या सुरश्रेष्ठा सुवर्च्चला ।**
**कपोतवेगा वैधात्री दिव्यतेजा महौषधी ॥६३॥**
**स्वयम्भुवी सोमलता सुरेज्या ब्रह्मकन्यका ।**

**मण्डूकमाता मत्स्याक्षी मण्डूकी सुरसा तथा ॥६४॥**
**मेध्या वीरा भारती च वरा च परमेष्ठिनी ।**
**दिव्या च शारदी चेति ज्ञेयाऽवर्णकराह्वया ॥६५॥**
**ब्राह्मी हिमा कषाया च तिक्ता वातास्रपित्तजित् ।**
**बुद्धिं प्रज्ञां च मेधां च कुर्यादायुष्यवर्धनी ॥६६॥**

(१) ब्राह्मी, (२) सरस्वती, (३) सौम्या, (४) सुरश्रेष्ठा, (५) सुवर्च्चला, (६) कपोतवेगा, (७) वैधात्री, (८) दिव्यतेजा, (९) महौषधी, (१०) स्वयम्भुवी, (११) सोमलता, (१२) सुरेज्या, (१३) ब्रह्मकन्यका, (१४) मण्डूकमाता, (१५) मत्स्याक्षी, (१६) मण्डूकी, (१७) सुरसा, (१८) मेध्या, (१९) वीरा, (२०) भारती, (२१) वरा, (२२) परमेष्ठिनी, (२३) दिव्या र (२४) शारदी : यी चौबीस नाम ब्राह्मीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, टर्रो, तीतो तथा वातविकार, रक्तविकार र पित्तविकार (कतै अस्रपित्तको अर्थ रक्तपित्त लगाइएको छ) लाई जित्ने गुणको हुन्छ । यसले बुद्धि, निर्णय क्षमता, दिमागको ग्रहण गर्ने क्षमता र आयु पनि बढाउँदछ ।

**सानो खालको ब्राह्मी**

**ब्राह्मी तु क्षुद्रपत्रान्या लघुब्राह्मी जलोद्भवा ।**

**ब्राह्मी तिक्तरसोष्णा च सरा वातामशोफजित्॥६७॥**

अर्को ससाना पात र पानीबहुल क्षेत्रमा हुने ब्राह्मीलाई लघुब्राह्मी भनिन्छ । यो तीतो रसको, उष्णवीर्यको तथा वातविकार, आमविकार र सुजनलाई जित्ने गुणको हुन्छ ।

### ऐँफेरु (वन्दाक)

**वन्दाकः पादपरुहा शिखरी तरुरोहिणी ।**
**वृक्षादनी वृक्षरुहा कामवृक्षश्च शेखरी ॥६८॥**
**केशरूपा तरुरुहा तरुस्था गन्धभेदिनी ।**
**कामिनी तरुरुट्श्यामा द्रुपदी षोडशाह्वया ॥६९॥**
**वन्दाकस्तिक्तशिशिरः कफपित्तश्रमापहः ।**
**वश्यादिसिद्धिदो वृष्यः कषायश्च रसायनः ॥७०॥**

(१) वन्दाक, (२) पादपरुहा, (३) शिखरी, (३) तरुरोहिणी, (४) वृक्षादनी, (५) वृक्षरुहा, (६) कामवृक्ष, (७) शेखरी, (८) केशरूपा, (९) तरुरुहा, (१०) तरुस्था, (११) गन्धभेदिनी, (१२) कामिनी, (१३) तरुरुट्, (१४) श्यामा र (१६) द्रुपदी : यी सोह्र नाम ऐँफेरुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, शीतवीर्यको तथा कफविकार, पित्तविकार र थकाई नाशक हुन्छ । यसले वशीकरणमा सफलता दिन्छ । यो वीर्यवर्धक, टर्रो तथा रसायनी हुन्छ ।

### गहत (कुलत्थ)

**कुलत्था दृक्प्रसादा च ज्ञेयाऽरण्यकुलत्थिका ।**
**कुलाली लोचनहिता चक्षुष्या कुम्भकारिका ॥७१॥**
**कुलत्थिका कटुस्तिक्ता स्यादर्शःशूलनाशनी ।**
**विबन्धाध्मानशमनी चक्षुष्या व्रणरोपणी ॥७२॥**

कुलत्था, दृक्प्रसादा, अरण्यकुलत्थिका, कुलाली, लोचनहिता, चक्षुष्या र कुम्भकारिका : यी गहतका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो तथा अल्काई र शूल नाशक हुन्छ । यसले विबन्ध र आध्मानलाई शान्त पार्दछ । गहत आँखाका लागि हितकर हुन्छ । यसले घाउ भर्दछ ।

### लुँडेको साग (तण्डुलीय)

**तण्डुलीयस्तु भण्डीरस्तण्डुली तण्डुलीयकः ।**

**ग्रन्थिली बहुवीर्यश्च मेघनादो घनस्वनः ॥७३॥**
**सुशाकः पथ्यशाकश्च स्फूर्जथुः स्वनिताह्वयः ।**
**वीरस्तण्डुलनामा च पर्यायाश्च चतुर्दश ॥७४॥**
**तण्डुलीयस्तु शिशिरो मधुरो विषनाशनः ।**
**रुचिकृद्दीपनः पथ्यः पित्तदाहभ्रमापहः ॥७५॥**

(१) तण्डुलीय, (२) भण्डीर, (३) तण्डुली, (४) तण्डुलीयक, (५) ग्रन्थिली, (६) बहुवीर्य, (७) मेघनाद, (८) घनस्वन, (९) सुशाक, (१०) पथ्यशाक, (११) स्फूर्जथु, (१२) स्वनिताह्वय, (१३) वीर र (१४) तण्डुलनामा : यी चौध नाम लुँडे (साग) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो, विषविकार नाशक, रुचि जगाउने, दीपनी, पथ्य तथा पित्तविकार, डाह र भ्रम नाशक हुन्छ ।

### रातोपाते अमिलो झार (चिविल्लिका)

**चिविल्लिका रक्तदला खरच्छदा स्यात् क्षुद्रघोली मधुमालपत्रिका ।**
**चिविल्लिका चैव कटुः कषायिका ज्वरेऽतिसारे च हिता रसायनी ॥७६॥**

चिविल्लिका, रक्तदला, खरच्छदा, क्षुद्रघोली र मधुमालपत्रिका : यी रातोपाते अमिलो झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, टर्रो, जरो र अतिसारमा फाइदा गर्ने तथा रसायनी हुन्छ ।

### हात्तीसुँडे (हस्तिशुण्डी)

**हस्तिशुण्डी महाशुण्डी शुण्डी घूसरपत्रिका ।**
**हस्तिशुण्डी कटूष्णा स्यात् सन्निपातज्वरापहा ॥७७॥**

हस्तिशुण्डी, महाशुण्डी, शुण्डी र घूसरपत्रिका : यी हात्तीसुँडेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा सन्निपात जरो नाशक हुन्छ ।

### रातो सानो झुसे दूधे झार (कुटुम्बिनी)

**कुटुम्बिनी पयस्या च क्षीरिणी जलकामुका ।**
**वक्रशल्या दुराधर्षा क्रूरकर्मा झिरिण्टिका ॥७८॥**
**शीता प्रहरजाया च शीतला च जलेरुहा ।**
**विख्याता किल विद्वद्भिरेषा द्वादशनामभिः ॥७९॥**

**कुटुम्बिनी तु मधुरा ग्राहिणी कफपित्तनुत् ।**
**व्रणास्रदोषकण्डूतिनाशनी सा रसायनी ॥८०॥**

(१) कुटुम्बिनी, (२) पयस्या, (३) क्षीरिणी, (४) जलकामुका, (५) वक्रशल्या, (६) दुराधर्षा, (७) क्रूरकर्मा, (८) झिरिण्टिका, (९) शीता, (१०) प्रहरजाया, (११) शीतला र (१२) जलेरुहा : यी बाह्र नाम सानो रातो दूधे झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, ग्राही तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले घाउखटिरा, रक्तविकार र चिलाउने रोग नाश गर्दछ । यो रसायनी हुन्छ ।

### स्थलकमल (स्थलपद्मिनी)

**स्थलपद्मी तु पद्माह्वा चारटी पद्मचारिणी ।**
**सुगन्धमूलाम्बुरुहा लक्ष्मीश्रेष्ठा सुपुष्करा ॥८१॥**
**रम्या पद्मवती चातिचरा स्थूलरुहा स्मृता ।**
**ज्ञेया पुष्करिणी चैव पुष्कराद्या च पर्णिका ॥**
**पुष्करादियुता नाडी प्रोक्ता पञ्चदशाह्वया ॥८२॥**
**स्थलादिपद्मिनी गौल्या तिक्ता शीता च वान्तिनुत् ।**
**रक्तपित्तहरा मेहभूतातीसारनाशनी ॥८३॥**



(१) स्थलपद्मी, (२) पद्माह्वा, (३) चारटी, (४) पद्मचारिणी, (५) सुगन्धमूला, (६) अम्बुरुहा, (७) लक्ष्मीश्रेष्ठा, (८) सुपुष्करा, (९) रम्या, (१०) पद्मवती, (११) अतिचरा, (१२) स्थूलरुहा, (१३) पुष्करिणी, (१४) पुष्करपर्णिका र (१५) पुष्करनाडी : यी पन्ध्र नाम स्थलकमलका संस्कृत पर्यायवाची नामहरू हुन् । स्थलकमल गुलियो, तीतो, शीतवीर्यको र वाकवाकी नाशक हुन्छ । यसले रक्तपित्त, प्रमेह, भूतबाधा र अतिसार पनि नाश गर्दछ ।

### तीतेपाती (नागदमनी)

**जम्बूर्जाम्बवती वृत्ता वृत्तपुष्पा च जाम्बवी ।**
**मदघ्नी नागदमनी दुर्धर्षा दुःसहा नव ॥८४॥**
**ज्ञेया जम्बूस्त्रिदोषघ्नी तीक्ष्णोष्णा कटुतिक्तका ।**
**उदराध्मानदोषघ्नी कोष्ठशोधनकारिणी ॥८५॥**

जम्बू, जाम्बवती, वृत्ता, वृत्तपुष्पा, जाम्बवी, मदघ्नी, नागदमनी, दुर्धर्षा र दुःसहा : यी तितेपातीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो त्रिदोष नाशक, तिक्खर, उष्णवीर्यको, पिरो र तीतो हुन्छ भनी जान्नू । यसले पेटका रोग तथा आध्मान जस्ता रोग नाश गर्दछ र पेट सफा गर्दछ ।

## कुकुरडाइनु (नागदन्ती)

**नागदन्ती श्वेतघण्टा मधुपुष्पा विशोधनी ।**
**नागस्फोता विशालाक्षी नागच्छत्रा विचक्षणा ॥८६॥**
**सर्पपुष्पी शुक्लपुष्पी स्वादुका शीतदन्तिका ।**
**सितपुष्पी सर्पदन्ती नागिनी बाणभूमिता ॥८७॥**
**नागदन्ती कटुस्तिक्ता रूक्षा वातकफापहा ।**
**मेधाकृद्विषदोषघ्नी पाचनी शुभदायिनी ॥**
**गुल्मशूलोदरव्याधि कण्ठदोषनिकृन्तनी ॥८८॥**

(१) नागदन्ती, (२) श्वेतघण्टा, (३) मधुपुष्पा, (४) विशोधनी, (५) नागस्फोता, (६) विशालाक्षी, (७) नागच्छत्रा, (८) विचक्षणा, (९) सर्पपुष्पी, (१०) शुक्लपुष्पी, (११) स्वादुका, (१२) शीतदन्तिका, (१३) सितपुष्पी, (१४) सर्पदन्ती र (१५) नागिनी : यी पन्ध्र नाम कुकुरडाइनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, रुखो तथा वात तथा कफविकार नाशक हुन्छ । यसले दिमागको ग्रहण गर्ने क्षमता बढाउँदछ र विषविकार नाश गर्दछ । यो पाचनी र शरीरलाई फाइदाजनक हुन्छ । कुकुरडाइनुले गुल्म, शूल, पेटका रोग र घाँटीका रोग समेत नाश गर्दछ ।



## विष्णुक्रान्ता

**विष्णुक्रान्ता हरिक्रान्ता नीलपुष्पाऽपराजिता ।**
**नीलक्रान्ता सतीना च विक्रान्ता छर्दिका च सा ॥**
**विष्णुक्रान्ता कटुस्तिक्ता कफवातामयापहा ॥८९॥**

विष्णुक्रान्ता, हरिक्रान्ता, नीलपुष्पा, अपराजिता, नीलक्रान्ता, सतीना, विक्रान्ता र छर्दिका : यी विष्णुक्रान्ताका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो तथा कफविकार र वातविकार नाशक हुन्छ । (विष्णुक्रान्ताको अर्थ नीलो अपराजिता हुन्छ तर यसका बारेमा पहिले नै बताई सकिएको अवस्थामा यसलाई त्यही विरुवा हो भन्न सकिएन, यो कुन विरुवा हो, अनुसन्धान गरी निर्णय हुनुपर्ने देखिन्छ) ।

## बनबेथे (कुणञ्जर)

**कुणञ्जरः कुणञ्जी च कुणजैऽरण्यवास्तुकः ।**
**कुणञ्जो मधुरो रुच्यो दीपनः पाचनो हितः ॥९०॥**

कुणञ्जर, कुणञ्जो, कुणज र अरण्यवास्तुक : यी बनबेथका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, रुचीकर, दीपन र पाचनमा हितकारी हुन्छ ।

### भुइँअमला (भूम्यामलकी)

**भूम्यामली तमाली च ताली चैव तमालिका ।**
**उच्चटा दृढपादी च वितुन्ना च वितुन्निका ॥९१॥**
**भूधात्री चारुटा वृष्या विषघ्नी बहुपत्रिका ।**
**बहुवीर्याऽहिभयदा विश्वपर्णी हिमालया ॥**
**जटा वीरा च नाम्ना सा भवेदेकोनविंशतिः ॥९२॥**
**भूधात्री तु कषायाम्ला पित्तमेहविनाशनी ।**
**शिशिरा मूत्ररोगार्तिशमनी दाहनाशनी ॥९३॥**

(१) भूम्यामल, (२) तमाली, (३) ताली, (४) तमालिका, (५) उच्चटा, (६) दृढपादी, (७) वितुन्ना, (८) वितुन्निका, (९) भूधात्री, (१०) चारुटा, (११) वृष्या, (१२) विषघ्नी, (१३) बहुपत्रिका, (१४) बहुवीर्या, (१५) अहिभयदा, (१६) विश्वपर्णी, (१७) हिमालया, (१८) जटा र (१९) वीरा : यी उन्नाईस नाम भुइँअमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, अमिलो तथा पित्तविकार र प्रमेह नाशक हुन्छ । भुइँअमला शीतवीर्यको, पिसाबसम्बन्धी रोग र पीडा शान्त पार्ने एवं दाह नाशक हुन्छ ।



### गोरखतुम्बा (गोरक्षी)

**गोरक्षी सर्पदण्डी च दीर्घदण्डी सुदण्डिका ।**
**चित्रला गन्धबहुला गोपाली पञ्चपर्णिका ॥९४॥**
**गोरक्षी मधुरा तिक्ता शिशिरा दाहपित्तनुत् ।**
**विस्फोटवान्त्यतीसारज्वरदोषविनाशनी ॥९५॥**

गोरक्षी, सर्पदण्डी, दीर्घदण्डी, सुदण्डिका, चित्रला, गन्धबहुला, गोपाली र पञ्चपर्णिका : यी गोरखतुम्बाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तीतो, शीतवीर्यको तथा डाह र पित्तविकार नाशक हुन्छ । यसले विस्फोट, वाकवाकी, अतीसार र ज्वर पनि नाश गर्दछ । (पर्पटादि वर्ग जस्ता साना बोटको वर्गमा यो वृक्ष समावेश हुँदा शङ्का बढेको छ कतै यो अर्कै विरुवा त होइन ?) ।

### सेतो दूबो (गोलोमिका)

**गोलोमिका तु गोधूमी गोजा क्रोष्टुकपुच्छिका ।**
**गोसम्भवा प्रस्तरिणी विज्ञेयेति षडाह्वया ॥९६॥**
**गोलोमिका कटुस्तिक्ता त्रिदोषशमनी हिमा ।**
**मूत्ररोगास्रदोषघ्नी ग्राहिणी दीपनी च सा ॥९७॥**

(१) गोलोमिका, (२) गोधूमी, (३) गोजा, (४) क्रोष्टुकपुच्छिका, (५) गोसम्भवा र (६) प्रस्तरिणी : यी छ नाम गोलोमिकाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, त्रिदोश शान्त पार्ने र शीतवीर्यको हुन्छ । यसले पिसाबसम्बन्धी र रक्तसम्बन्धी रोग नाश गर्दछ । यो ग्राही र दीपनी हुन्छ ।

### गोठाले साग (दुग्धफेनी)

**दुग्धफेनी पयःफेनी फेनदुग्धा पयस्विनी ।**
**लूतारिर्व्रणकेतुश्च गोजापर्णी च सप्तधा ॥९८॥**
**दुग्धफेनी कटुस्तिक्ता शिशिरा विषनाशिनी ।**
**व्रणापसारिणी रुच्या युक्त्या चैव रसायनी ॥९९॥**

(१) दुग्धफेनी, (२) पयःफेनी, (३) फेनदुग्धा, (४) पयस्विनी, (५) लूतारि, (६) व्रणकेतु र (७) गोजापर्णी : यी सात नाम गोठाले सागका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, शीतवीर्यको र विषविकार नाशक हुन्छ । यसले घाउखटिरा हटाउँदछ । यो रुचिकर हुन्छ र बुद्धि लगाएर प्रयोग गर्न जाने रसायनी पनि हुन्छ ।

### चरीअमिलो (क्षुद्राम्लिका)

**क्षुद्राम्लिका तु चाङ्गेरी चक्राह्वा चुक्रिका च सा ।**
**लोणाम्लिका च चतुष्पर्णी लोणा लोडाऽम्लपत्रिका ॥१००॥**
**अम्बष्ठाऽम्लवती चैव अम्ला दन्तशठा मता ।**
**शस्त्राङ्गा चाम्लपत्री च ज्ञेया पञ्चदशाह्वया ॥१०१॥**
**क्षुद्राम्ली च रसे साम्ला सोष्णा सा वह्निवर्धनी ।**
**रुचिकृद्ग्रहणीदोष दुर्नामघ्नी कफापहा ॥१०२॥**

(१) क्षुद्राम्लिका, (२) चाङ्गेरी, (३) चक्राह्वा, (४) चुक्रिका, (५) लोणाम्लिका, (६) चतुष्पर्णी, (७)

लोणा, (८) लोडा, (९) अम्लपांत्रका, (१०) अम्बष्ठा, (११) अम्लवर्ता, (१२) अम्ला, (१३) दन्तशठा, (१४) शस्त्राङ्गा र (१५) अम्लपत्री : यी पन्ध्र वटा नाम चरीअमिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । चरीअमिलो रसमा अमिलो, उष्णवीर्यको र जठराग्नि वर्धक हुन्छ । यसले रुची जगाउँदछ तथा ग्रहणी-दोष, अल्काई र कफविकार नाश गर्दछ ।

### लज्जावती

**रक्तपादी शमीपत्रा स्पृक्का खदिरपत्रिका ।**
**सङ्कोचनी समङ्गा च नमस्कारी प्रसारिणी ॥१०३॥**
**लज्जालुः सप्तपर्णी स्यात् खदिरी गण्डमालिका ।**
**लज्जा च लज्जिका चैव स्पर्शलज्जाऽस्रोधिनी ॥१०४॥**
**रक्तमूला ताम्रमूला स्वगुप्ताऽञ्जलिकारिका ।**
**नाम्ना विंशतिरित्युक्ता लज्जायास्तु भिषग्वरैः ॥१०५॥**
**रक्तपादी कटुः शीता पित्तातीसारनाशनी ।**
**शोफदाहश्रमश्वासव्रणकुष्ठकफास्रनुत् ॥१०६॥**

(१) रक्तपादी, (२) शमीपत्रा, (३) स्पृक्का, (४) खदिरपत्रिका, (५) सङ्कोचनी, (६) समङ्गा, (७) नमस्कारी, (८) प्रसारिणी, (९) लज्जालु, (१०) सप्तपर्णी, (११) खदिरी, (१२) गण्डमालिका, (१३) लज्जा, (१४) लज्जिका, (१५) स्पर्शलज्जा, (१६) अस्रोधिनी, (१७) रक्तमूला, (१८) ताम्रमूला, (१९) स्वगुप्ता र (२०) अञ्जलिकारिका : यी बीस नाम लज्जावतीका संस्कृत पर्यायवाची नामहरू हुन् भनी श्रेष्ठ बैद्यजनले बताएका छन् । लज्जावती पिरो, शीतवीर्यको तथा पित्तविकार र अतिसार नाशक हुन्छ । यसले सुजन, डाह, थकाई, दम, घाउखटिरा, कुष्ठ, कफविकार र रक्तविकार नाश गर्दछ ।



### लज्जालुविशेष (लुर्हीं)

**लज्जालुर्वैपरीत्याऽन्या अल्पक्षुपबृहद्दला ।**
**वैपरीत्यादिलज्जालुर्ह्यभिधाने प्रयोजयेत् ॥१०७॥**
**लज्जालुर्वैपरीत्याह्वा कटुरुष्णा कफामनुत् ।**
**रसो नियामका चैव नानाविज्ञानकारिका ॥१०८॥**

लज्जालु भारकै वैपरीत्या लज्जालु नामक एक अर्को जात पनि हुन्छ । यसको बोट सानो र पात ठूला हुन्छन् । यसलाई लुर्हीं पनि भनिन्छ । यो लज्जालु पिरो, उष्णवीर्यको तथा कफविकार र आमविकार नाशक हुन्छ । यसले पारोलाई शुद्ध पार्ने जस्ता अनेक रसायन-विज्ञानका काम समेत गर्दछ ।

## कानोसिन्को (हंसपादी)

**रक्तपाद्यपरा प्रोक्ता त्रिपदा हंसपादिका ।**
**घृतमण्डलिका ज्ञेया विश्वग्रन्थिस्त्रिपादिका ॥१०९॥**
**विपादी कीटमारी च हेमपादी मधुस्रवा ।**
**कर्णाटी ताम्रपत्री च विक्रान्ता सुवहा तथा ॥११०॥**
**ब्रह्मादनी पदाङ्गी च शीताङ्गी सुतपादुका ।**
**सञ्चारिणी च पदिका प्रह्लादी कीलपादिका ॥१११॥**
**गोधापदी च हंसाङ्घ्रिर्धार्तराष्ट्रपदी तथा ।**
**हंसपादी च विज्ञेया नाम्ना चैषा शराक्षिधा ॥११२॥**
**हंसपादी कटूष्णा स्याद्विषभूतविनाशिनी ।**
**भ्रान्त्यपस्मारदोषघ्नी विज्ञेया च रसायनी ॥११३॥**

(१) रक्तपादी, (२) त्रिपदा, (३) हंसपादिका, (४) घृतमण्डलिका, (५) विश्वग्रन्थि, (६) त्रिपादिका, (७) विपादी, (८) कीटमारी, (९) हेमपादी, (१०) मधुस्रवा, (११) कर्णाटी, (१२) ताम्रपत्री, (१३) विक्रान्ता, (१४) सुवहा, (१५) ब्रह्मादनी, (१६) पदाङ्गी, (१७) शीताङ्गी, (१८) सुतपादुका, (१९) सञ्चारिणी, (२०) पदिका, (२१) प्रह्लादी, (२२) कीलपादिका, (२३) गोधापदी, (२४) हंसाङ्घ्रि, (२५) धार्तराष्ट्रपदी र (२६) हंसपादी : यी छब्बीस नाम कानेसिन्कोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा विषविकार र भूतबाधा नाशक हुन्छ । यसले भ्रम र छारेरोग पनि नाश गर्दछ । यो रसायनी हुन्छ ।



## हयकाथरा

**काथरा हयपर्यायैः काथरान्तैः प्रकीर्तिता ।**
**अश्वकाथरिका तिक्ता वातघ्नी दीपनी परा ॥११४॥**

हय वा हय (घोडा) का पर्यायवाची शब्दका पछाडि काथरा शब्द जोडिएर आउने शब्दले हयकाथरा नामक विरुवालाई बुझाउँदछ । यो तीतो वातविकार नाशक र अत्यन्त दीपनी हुन्छ ।

## पुनर्नवा (सेतो)

**पुनर्नवा विशाखश्च कठिल्लः शशिवाटिका ।**
**पृथ्वी च सितवर्षाभूर्दीर्घपत्रः कठिल्लकः ॥११५॥**
**श्वेता पुनर्नवा सोष्णा तिक्ता कफविषापहा ।**

**कासहृद्रोगशूलास्रपाण्डुशोफानिलार्त्तिनुत् ॥११६॥**

पुनर्नवा, विशाख, कठिल्ल, शशिवाटिका, पृथ्वी, सितवर्षाभू, दीर्घपत्र र कठिल्लक : यी पुनर्नवा ( सेतो) का संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो पुनर्नवा उष्णवीर्यको, तीतो तथा कफविकार र विषविकार नाशक हुन्छ । यसले खोकी, मुटुका रोग शूल, रक्तविकार, पाण्डु, सुजन र वातविकार नाश गर्दछ ।

### रातो पुनर्नवा

**पुनर्नवाऽन्या रक्ताख्या क्रूरा मण्डलपत्रिका ।**
**रक्तकाण्डा वर्षकेतुर्लोहिता रक्तपत्रिका ॥११७॥**
**वैशाखी रक्तवर्षाभूः शोफघ्नी रक्तपुष्पिका ।**
**विकस्वरा विषघ्नी च प्रावृषेण्या च सारिणी ॥११८॥**
**वर्षाभवः शोणपत्रो शोणः सम्मीलितद्रुमः ।**
**पुनर्नवो नवो नव्यः स्याच्च विंशतिसञ्ज्ञया ॥११९॥**
**रक्ता पुनर्नवा तिक्ता सारिणी शोफनाशिनी ।**
**रक्तप्रदरदोषघ्नी पाण्डुपित्तप्रमर्दिनी ॥१२०॥**



(१) रक्तपुनर्नवा, (२) क्रूरा, (३) मण्डलपत्रिका, (४) रक्तकाण्डा, (५) वर्षकेतु, (६) लोहिता, (७) रक्तपत्रिका, (८) वैशाखी, (९) रक्तवर्षाभू, (१०) शोफघ्नी, (११) रक्तपुष्पिका, (१२) विकस्वरा, ( १३) विषघ्नी, (१४) प्रावृषेण्या, (१५) सारिणी, (१६) वर्षाभव, (१७) शोणपत्र, (१८) शोण, (१९) सम्मीलितद्रुम, (२०) पुनर्नव, (२१) नव, र  (२२) नव्य : यी पन्ध्र वटा नाम रातो पुनर्नवाका संस्कृत पर्यायवाची नामहरू हुन् । रातो पुनर्नवा तीतो, मलमूत्रलाई तलतिर सार्ने र सुजन नाश गर्ने  गुणको हुन्छ । यसले रक्तप्रदर, पाण्डु  र पित्तविकार नाश गर्दछ ।

### नीलो पुनर्नवा

**नीला पुनर्नवा नीला श्यामा नीलपुनर्नवा ।**
**कृष्णाख्या नीलवर्षाभूर्नीलिनी स्वाभिधान्विता ॥१२१॥**
**नीला पुनर्नवा तिक्ता कटूष्णा च रसायनी ।**
**हृद्रोगपाण्डुश्वयथुश्वासवातकफापहा ॥१२२॥**

नीलापुनर्नवा, नीला, श्यामा, नीलपुनर्नवा, कृष्णा, नीलवर्षाभू, नीलिनी र नीलका पर्यायवाची शब्द : यी नीलो पुनर्नवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।  नीलो पुनर्नवा तीतो, पिरो, उष्णवीर्यको

र रसायनी हुन्छ । यसले मुटुका रोग, पाण्डु, सुजन, दम, वातविकार र कफविकार नाश गर्दछ ।

### ठूलो मौलसिरी (वसुक)

**वसुकोऽथ वसुः शैवो वसोऽथ शिवमल्लिका ।**
**पाशुपतः शिवमतः सुरेष्टः शिवशेखरः ॥**
**सितो रक्तो द्विधा प्रोक्तो ज्ञेयः स च नवाभिधः ॥१२३॥**
**वसुकौ कटुतिक्तोष्णौ पाके शीतौ च दीपनौ ।**
**अजीर्णवातगुल्मघ्नौ श्वेतश्चैव रसायनः ॥१२४॥**

(१) वसुक, (२) वसु, (३) शैव, (४) वस, (५) शिवमल्लिका, (६) पाशुपत, (७) शिवमत, (८) सुरेष्ट र (९) शिवशेखर : यी नौ नाम सेतो र रातो गरी दुई थरी हुने ठूलो मौलसिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको र पचेपछि शीतवीर्यको हुन्छ । ठूलो मौलसिरी दीपनी तथा अजीर्ण, वातविकार र गुल्म नाशक हुन्छ । सेतो जातको रसायनी पनि हुन्छ ।

### सर्पिणी (लहरा विशेष)

**सर्पिणी भुजगी भोगी कुण्डली पन्नगी फणी ।**
**षड्भिधा सर्पिणी स्याद्विषघ्नी कुचवर्द्धनी ॥१२५॥**

(१) सर्पिणी, (२) भुजगी, (३) भोगी, (४) कुण्डली, (५) पन्नगी र (६) फणी : यी छ वटा नाम सर्पिणी नामक बुटीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो विषविकार नाशक र स्त्रीको स्तन वढाउने गुणको हुन्छ ।

### सिस्नुविशेष वा अल्लो (अलिपत्रिका)

**वृश्चिका नखपर्णी च पिच्छिलाप्यलिपत्रिका ।**
**वृश्चिका पिच्छलाऽम्ला स्यादन्त्रवृद्ध्यादिदोषनुत् ॥१२६॥**

वृश्चिका, नखपर्णी, पिच्छिला र अलिपत्रिका : यी अल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो लेस्याइलो, अमिलो र हर्निया आदि रोग नाशक हुन्छ ।

### मत्स्याक्षी (पिर्रे वा मरहट्टी झार)

**ब्राह्मी वयस्या मत्स्याक्षी मीनाक्षी सोमवल्लरी ।**

**मत्स्याक्षी शिशिरा रुच्या व्रणदोषक्षयापहा ॥१२७॥**

ब्राह्मी, वयस्या, मत्स्याक्षी, मीनाक्षी र सोमवल्लरी : यी मत्स्याक्षीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, रुचिकर तथा घाखटिरा र क्षयरोग नाशक हुन्छ ।

## गुण्डाला

**गुण्डाला तु जलोद्भूता गुच्छबुध्ना जलाशया ।**
**गुण्डाला कटुतिक्तोष्णा शोफव्रणविनाशनी ॥१२८॥**

गुण्डाला, जलोद्भूता, गुच्छबुध्ना र जलाशया : यी गुण्डालाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा सुजन र घाउखटिरा नाशक हुन्छ ।

## भूपाटली

**भूपाटली च कुम्भी च भूताली रक्तपुष्पिका ।**
**भूपाटली कटूष्णा च पारदे सुप्रयोजिका ॥१२९॥**



भूपाटली, कुम्भी, भूताली र रक्तपुष्पिका : यी भूपाटलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा पारो प्रशोधनमा प्रयोग गर्न मिल्ने गुणको हुन्छ ।

## पाण्डुरफली (पाडरी ?)

**पाटली पाण्डुरफली धूसरा वृत्तबीजका ।**
**भूरिफली तथा पाण्डुफली स्यात् सप्ताह्वयाभिधा ॥१३०॥**
**शिशिरा पाण्डुरफली गौल्या कृच्छ्रार्तिदोषहा ।**
**बल्या पित्तहरा वृष्या मूत्राघातनिवारणी ॥१३१॥**

पाटली, पाण्डुरफली, धूसरा, वृत्तबीजका, भूरिफली र पाण्डुफली : यी पाटलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो तथा कृच्छ्र र पीडा नाशक हुन्छ । यो बलदायक, पित्तविकार नाशक, वीर्यवर्धक र पिसाब बन्द हुने रोग नाशक हुन्छ ।

## श्वेता

**श्वेता तु छुरिकापत्री पर्वमूलाऽप्यविप्रिया ।**

**श्वेताऽतिमधुरा शीता स्तन्यदा रुचिकृत् परा ॥१३२॥**

श्वेता, छुरिकापत्री, पर्वमूला र अविप्रिया : यी श्वेताका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति गुलियो, शीतवीर्यको, दूध बर्धक र अत्यन्त रुचीकारक हुन्छ ।

### ब्रह्मदण्डी

**ब्रह्मदण्ड्यजलादण्डी कण्टपत्रफला च सा ।**
**ब्रह्मदण्डी कटूष्णा स्यात् कफशोफानिलापहा ॥१३३॥**

ब्रह्मदण्डी, अजलादण्डी र कण्टपत्रफला : यी ब्रह्मदण्डीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार, सुजन र वातविकार नाशक हुन्छ ।

### द्रवन्ती

**द्रवन्ती शाम्बरी चित्रा न्यग्रोधी शतमूलिका ।**
**प्रत्यक्श्रेणी वृषा चण्डा पत्रश्रेण्याखुकर्णिका ॥१३४॥**
**मूषकाह्वादिका कर्णी प्रतिपर्णी शिफा च सा ।**
**सहस्रमूली विक्रान्ता ज्ञेया स्याच्चतुरेकधा ॥१३५॥**
**द्रवन्ती मधुरा शीता रसबन्धकरी परा ।**
**ज्वरघ्नी कृमिहा शूलशमनी च रसायनी ॥१३६॥**

द्रवन्ती, शाम्बरी, चित्रा, न्यग्रोधी, शतमूलिका, प्रत्यक्श्रेणी, वृषा, चण्डा, पत्रश्रेणी, आखुकर्णिका, मूषककर्णी, प्रतिपर्णीशिफा, सहस्रमूली र विक्रान्ता : यी द्रवन्तीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, पारो प्रशोधनका लागि अति उपयोगी, जरो नाशक, कीरानाशक, शूल शान्त पार्ने र रसायनी हुन्छ । (पहिले नै दुई थरी मुसाकानेका बारेमा बताई सकिएको हुँदा यो मुसाकानेको जातविशेष हो कि जस्तो देखिन्छ) ।

### द्रोणपुष्पी

**द्रोणपुष्पी दीर्घपत्रा कुम्भयोनिः कुतुम्बिका ।**
**चित्राक्षुपः कुतुम्बा च सुपुष्पा चित्रपत्रिका ॥१३७॥**
**द्रोणपुष्पी कटुः सोष्णा रुच्या वातकफापहा ।**
**अग्निमान्द्यहरा चैव पथ्या वातापहारिणी ॥१३८॥**

द्रोणपुष्पी, दीर्घपत्रा, कुम्भयोनि, कुतुम्बिका, चित्राक्षुप, कुतुम्बा, सुपुष्पा र चित्रपत्रिका : यी द्रोणपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, रुचिकर तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले कमजोर पानशक्ति हुने रोग नाश गर्दछ । यो पथ्य हुन्छ र वातविकारलाई सोस्दछ ।

## द्रोणपुष्पीविशेष (महाद्रोणी)

**अन्या चैव महाद्रोणा कुरुम्बा देवपूर्वका ।**
**दिव्यपुष्पी महाद्रोणी देवीकाण्डा षडाह्वया ॥१३९॥**
**देवद्रोणी कटुस्तिक्ता मेध्या वातार्तिभूतनुत् ।**
**कफमान्द्यापहा चैव युक्त्या पारदशोधने ॥१४०॥**

(१) महाद्रोणा, (२) कुरुम्बा, (३) देवपूर्वका, (४) दिव्यपुष्पी, (५) महाद्रोणी र (६) देवीकाण्डा : यी छ वटा नाम द्रोणपुष्पीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो देवद्रोणीपिरो, तीतो, दिमागको ग्रहणगर्ने क्षमता बढाउने र वातविकारको पीडा नाश गर्ने गुणको हुन्छ । यसले कफविकार र कमजोर पाचनशक्ति हुने रोग नाश गर्दछ । यो महाद्रोणी पारो प्रशोधनमा समेत प्रयोग हुन्छ ।



## सयपत्री (झण्डू)

**झण्डूः स्यात्स्थूलपुष्पा तु झण्डूको झेण्डुकस्तथा ।**
**झण्डूः कटुकषायः स्यात् ज्वरभूतग्रहापहा ॥१४१॥**

झण्डू, स्थूलपुष्पा, झण्डूक र झेण्डुक : यी सयपत्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र टर्रो हुन्छ । यसले जरो, भूतबाधा र ग्रहबाधा हटाउँदछ ।

## गोरक्षदुग्धी

**गोरक्षदुग्धी गोरक्षी ताम्रदुग्धी रसायनी ।**
**बहुपत्रा मृताजीवी मृतसञ्जीवनी मुनिः ॥१४२॥**
**गोरक्षदुग्धी मधुरा वृष्या सा ग्राहिणी हिमा ।**
**सर्ववश्यकरी चैव रसे सिद्धिगुणप्रदा ॥१४३॥**

(१) गोरक्षदुग्धी, (२) गोरक्षी, (३) ताम्रदुग्धी, (४) रसायनी, (५) बहुपत्रा, (६) मृताजीवी र (७) मृतसञ्जीवनी : यी सात नाम गोरक्षदुग्धीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गोरक्षदुग्धी

गुल्मियो, वीर्यवर्धक, ग्राही, शीतवीर्यको, सबैलाई वशीकरण गर्नसक्ने र रसमा सिद्धि प्रदान गर्ने गुणको हुन्छ ।

**वर्गप्रशस्ति**

**इत्थं वितत्य विशदीक्रियमाणनानाक्षुद्रक्षुपाह्वयगुणप्रगुणापवर्गम् ।**
**वर्गं विधाय मुखमण्डनमेनमुच्चैरुच्चाटनाय च रुजां प्रभुरस्तु वैद्यः ॥१४४॥**

यसरी क्षुद्र क्षुप (ससाना बोट) का बारेमा विस्तृत छलफल एवं सामान्य र विशेष प्रयोग गरी तिनका गुणहरू विस्तार गरी प्रयोगमा सफलता हासिल गर्न वैद्यका लागि यो अध्याय तयार गरिएको छ । यो अध्याय राम्ररी अध्ययन गरेको वैद्य कडा रोगलाई पनि उन्मूलन गर्न सक्षम हुनेछ । जसले यो अध्याय राम्ररी पढी यसमा बताइएका ओखतीलाई विवेकपूर्ण तरिकाले प्रयोग गर्दछ, उ रोगहरू हटाउन सफल हुनेछ ।

**क्षुधं रान्ति जनस्योच्चैस्तस्मात् क्षुद्राः प्रकीर्तिताः ।**
**तेषां क्षुपाणां वर्गोऽयमादाने धातुरुच्यते ॥१४५॥**

क्षुद्रको अर्थ सानो मात्र होइन । मानिसको ज्ञान आदि भोक (क्षुधं) उच्चस्तरमा मेटाउँदछ (रन्ति) त्यसैले यसलाई क्षुद्रा नाम दिइएको हो । मानिसमा ज्ञानको भोक जगाउने हुनाले पनि यो वर्गमा त्यस्तो विरुवाहरुका बारेमा उल्लेख भएको छ ।



**धत्ते नित्यसमाधिसंस्तववशात् प्रीत्यार्चितेशार्पितां**
**स्वात्मीयामृतहस्ततां किल सदा यः सर्वसञ्जीवनीम् ।**
**वर्गस्तस्य कृतौ नृसिंहकृतिनो यः पर्पटादिर्महा-**
**नेष प्राञ्चति नामकाण्डपरिषच्चूडामणौ पञ्चमः ॥१४६॥**

पूर्ण लगनशील भई प्रेम र भक्तिपूर्वक भगवान् शिवको आराधना गरी उनैले दिएको ज्ञान अनुसारका ताजा ओखतीबाट आफ्नो लक्ष प्राप्त गरेका नरहरी मार्फत प्राप्त यो ज्ञानबाट वैद्यले पीडितहरूलाई नयाँ जीवन प्रदान गर्न सक्दछ । नृसिंह अर्थात् नरहरीले लेखेको कृतिको यो पाँचौं वर्गलाई पर्पटादि वर्ग भनिन्छ ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ पर्पटादिवर्गः पञ्चमः ॥५॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत पर्पटादिवर्ग नामक पाँचौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।५।

## पिप्पल्यादि वर्ग

चतुर्धा पिप्पली प्रोक्ता तन्मूलं नागरं तथा ।
आर्द्रकं मरिचद्वन्द्वं धान्यकञ्च यवानिका ॥१॥
चव्यं च चित्रकद्वन्द्वं विडङ्गं च वचाद्वयम् ।
कुलञ्जो जीरकाः पञ्च मेथिका हिङ्गुपत्रिका ॥२॥
हिङ्गुद्वयं चाग्निजारो रास्ने एलाद्वयं शिवम् ।
सौवर्चलं च काचाह्वं विडञ्च गडनामकम् ॥३॥
सामुद्रं द्रौणिकं चान्यदौषरं रोमकं तथा ।
नवधा लवणं प्रोक्तमजमोदा च रेणुका ॥४॥
बोलं कर्चूरकः पाठा वृक्षाम्लश्चाम्लवेतसम् ।
कटुकाऽतिविषा मुस्ताद्वयं यष्टीमधुद्वयम् ॥५॥
भार्गी पुष्करमूलञ्च शृङ्गचथो दन्तिकाद्वयम् ।
जैपालश्च त्रिवृद्द्वेधा त्वक्पत्रं नागकेशरम् ॥६॥
तवक्षीरञ्च तालीसपत्राख्यं वंशरोचना ।
मञ्जिष्ठा च चतुर्धा स्याद्धरिद्रे च द्विधा मते ॥७॥
लाक्षा चालक्तको लोध्रो धातक्यब्धिफलं तथा ।
निर्विषाऽथ विषद्वन्द्वं द्विधा चाम्लहरिद्रका ॥८॥
अब्धिफेनमफेनञ्च च टङ्कणौ साकुरण्डकम् ।
हिमावली हस्तिमदः स्वर्जिको लोणकं तथा ॥९॥
वज्रको यवजश्चाथ सर्वक्षारोऽथ मायिका ।
औषधान्यभिधीयन्ते षडङ्गमितसङ्ख्यया ॥१०॥



चार थरी पिप्ला, पिप्लाको जरा, सुठो, अदुवा, दुई थरी मरिच, धनिया, ज्वानु, चव्य, दुई थरी चित्रक, वायविडङ्ग, दुई थरी बोजो, कुलञ्ज, पाँच प्रकारका जिरा, मेथी, हिङ्गुपत्रिका, दुई थरी हिङ, अग्निजार, रास्ना, दुई थरी एला, शिवम्-सौवर्चल-काच-विड-गड-सामुद्री- द्रौणिक-औषर र रोमक गरी नौ थरी नुन, अजमोदा, रेणुका, बोल, कर्चूर, पाठा, वृक्षाम्ल, अम्लवेत, कटुका, अतिविषा, दुई थरी मुस्ता, दुई थरी मधुयष्टि, भार्ङ्ग, पुष्करमूल, श्रृङ्गी, दुई थरी दन्ती, जयपाल, दुई थरी त्रिवृत्, त्वक्, तमालपत्र, नागकेशर, तवक्षीर, तालीसपत्र, वंशरोचना, चार थरी मञ्जिष्ठा, दुई थरी हरिद्रा, लाक्षा, आलक्तक, लोध्र, धातकी, अब्धिफल, निर्विषा, दुई थरी विष, आम्लहरिद्रका, अब्धिफेन, अफेन, टङ्कण, साकुरण्ड, हिमावली, हस्तिमद, स्वर्जिका, लोणक, वज्रक, यवज, सर्वक्षार र मायिका गरी छैसठ्ठी ओखतीका बारेमा यस वर्गमा बताइने छ ।

पिप्ला (पिप्पली)

**पिप्पली कृकरा शौण्डी चपला मागधी कणा ।**
**कटुबीजा च कोरङ्गी वैदेही तिक्ततण्डुला ॥११॥**
**श्यामा दन्तफला कृष्णा कोला च मगधोद्भवा ।**
**उषणा चोपकुल्या च स्मृत्याह्वा तीक्ष्णतण्डुला ॥१२॥**
**पिप्पली ज्वरहा वृष्या स्निग्धोष्णा कटुतिक्तका ।**
**दीपनी मारुतश्वासकासश्लेष्मक्षयापहा ॥१३॥**

पिप्पली, कृकरा, शौण्डी, चपला, मागधी, कणा, कटुबीजा, कोरङ्गी, वैदेही, तिक्ततण्डुला, श्यामा, दन्तफला, कृष्णा, कोला, मगधोद्भवा, उषणा, उपकुल्या, स्मृत्याह्वा र तीक्ष्णतण्डुला : यी पिप्लाका संस्कृत पर्यायवाची नामहरू हुन् । पिप्ला ज्वरो नाशक, वीर्यवर्धक, चिल्लो, उष्णवीर्यको, पिरो र तीतो हुन्छ । यो दीपनी तथा वातविकार, दम, खोकी, कफविकार र क्षयरोग नाशक हुन्छ ।

गजपिप्पली (चाभोको फल)

**गजोषणा चव्यफला चव्यजा गजपिप्पली ।**

**श्रेयसी छिद्रवैदेही दीर्घग्रन्थिश्च तैजसी ॥**
**वर्तु (र्त्त) ली स्थूलवैदेही ज्ञेया चेति दशाभिधा ॥१४॥**
**गजोषणा कटूष्णा च रूक्षा मलविशोषणी ।**
**बलासवातहन्त्री च स्तन्यवर्णविवर्द्धिनी ॥१५॥**

(१) गजोषणा, (२) चव्यफला, (३) चव्यजा, (४) गजपिप्पली, (५) श्रेयसी, (६) छिद्रवैदेही, (७) दीर्घग्रन्थि, (८) तैजसी, (९) वर्तु (र्त्त) ली र (१०) स्थूलवैदेही : यी दश नाम गजपिप्पलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, रुखो र मलको आर्द्रतालाई सोस्ने, कफविकार नाशक, वातविकार नाशक, दूधवर्धक र वर्णवर्धक हुन्छ ।

श्रीलङ्काली पिप्ला (सैंहलीपिप्पली)

**सैंहली सर्पदण्डा च सर्पाङ्गी ब्रह्मभूमिजा ।**
**पार्वती शैलजामूलं ताम्रा लम्बबीजा तथोत्कटा ॥१६॥**
**अद्रिजा सिंहलस्था च लम्बदन्ता च जीवला ।**
**जीवली जीवनेत्रा च कुरवी षोडशाह्वया ॥१७॥**
**सैंहली कटुरुष्णा च जन्तुघ्नी दीपनी परा ।**

**कफश्वाससमीरार्तिशमनो कोष्ठशोधनो ॥१८॥**

(१) सैंहली, (२) सर्पदण्डा, (३) सर्पाङ्गी, (४) ब्रह्मभूमिजा, (५) पार्वती, (६) शैलजामूल, (७) ताम्रा, (८) लम्बबीजा, (९) उत्कटा, (१०) अद्रिजा, (११) सिंहलस्था, (१२) लम्बदन्ता, (१३) जीवला, (१४) जीवली, (१५) जीवनेत्रा र (१६) कुरवी : यी सोह्र नाम श्रीलङ्काली पिप्लाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिप्ला पिरो, उष्णवीर्यको, कीरानाशक र अत्यन्त दीपनी हुन्छ । यसले कफविकार, दम र वातविकारजन्य पीडा नाश गर्दछ तथा पेट सफा गर्दछ ।

### वनपिप्ला (वनपिप्पली)

**वनादिपिप्पल्यभिधानयुक्तं सूक्ष्मादिपिप्पल्यभिधानमेतत् ।**
**क्षुद्रादिपिप्पल्यभिधानयोज्यं वनाभिधापूर्वकणाभिधानम् ॥१९॥**
**वनपिप्पलिका चोष्णा तीक्ष्णा रुच्या च दीपनी ।**
**आमा भवेद्गुणाढ्या तु शुष्का स्वल्पगुणा स्मृता ॥२०॥**

वन, सूक्ष्म र क्षुद्र : यी तीन शब्द र यिनका पर्यायवाची शब्दका पछाडि पिप्पली शब्द जोडिएर आए अथवा वन र यसका पर्यायवाची शब्दका पछाडि कण वा यसका पर्यायवाची शब्द आए ती शब्दले वनपिप्लालाई बुझाउँदछन् । यो पिप्ला पनि उष्णवीर्यको, तिक्खर, रुचिकर र दीपनी हुन्छ । यो पिप्ला काँचोमा सुकेको भन्दा बढी गुनिलो हुन्छ ।

### पिप्लाको जरा (पिप्पलीमूल)

**ग्रन्थिकं पिप्पलीमूलं मूलं तु चविकाशिरः ।**
**कोलमूलं कटुग्रन्थि कटुमूलं कटूषणम् ॥२१॥**
**सर्वग्रन्थि च पत्राढ्यं विरूपं शोणसम्भवम् ।**
**सुग्रन्थि ग्रन्थिलं चैव पर्य्यायाः स्युश्चतुर्दश ॥२२॥**
**कटूष्णं पिप्पलीमूलं श्लेष्मक्रिमिविनाशनम् ।**
**दीपनं वातरोगघ्नं रोचनं पित्तकोपनम् ॥२३॥**

(१) ग्रन्थिक, (२) पिप्पलीमूल, (३) मूल, (४) चविकाशिर, (५) कोलमूल, (६) कटुग्रन्थि, (७) कटुमूल, (८) कटूषण, (९) सर्वग्रन्थि, (१०) पत्राढ्य, (११) विरूप, (१२) शोणसम्भव, (१३) सुग्रन्थि र (१४) ग्रन्थिल : यी चौध नाम पिप्लाको जराका संस्कृत पर्यायवाची नामहरू हुन् । पिप्लाको जरा पिरो र उष्णवीर्यको हुन्छ । यसले कफविकार र कीरा नाश गर्दछ । यो दीपन, वातविकार नाशक, रोचन र पित्तलाई उत्तेजित बनाउने गुणको हुन्छ ।

## सुठो (शुण्ठी)

**शुण्ठी महौषधं विश्वं नागरं विश्वभेषजम् ।
विश्वौषधं कटुग्रन्थि कटुभद्रं कटूषणम् ॥२४॥
सौपर्णं शृङ्गवेरञ्च कफारिश्चार्द्रकं स्मृतम् ।
शोषणं नागराह्वञ्च विज्ञेयं षोडशाह्वयम् ॥२५॥**

(१) शुण्ठी, (२) महौषध, (३) विश्व, (४) नागर, (५) विश्वभेषज, (६) विश्वौषध, (७) कटुग्रन्थि, (८) कटुभद्र, (९) कटु, (१०) उषण, (११) सौपर्ण, (१२) शृङ्गवेर, (१३) कफारि, (१४) आर्द्रक, (१५) शोषण र (१६) नागरवाचक शब्द : यी सोह्र नाम सुठोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शुण्ठी कटूष्णा स्निग्धा च कफशोफानिलापहा ।
शूलबद्धोदराध्मानश्वासश्लीपदहारिणी ॥२६॥**

सुठो पिरो, उष्णवीर्यको र चिल्लो हुन्छ । यसले कफविकार, सुजन र वातविकार नाश गर्दछ । यसले शूल वद्धोदर, आध्मान, दम र हात्तीपाइले रोग समेत नाश गर्दछ ।



## अदुवा (आर्द्रक)

**आर्द्रकं गुल्ममूलं च मूलजं कन्दलं वरम् ।
शृङ्गवेरं महीजं च सैकतेष्टमनूपजम् ॥२७॥
अपाकशाकञ्चार्द्राख्यं राहुच्छत्रं सुशाककम् ।
शार्ङ्गं स्यादार्द्रशाकञ्च सच्छाकमृतुभूह्वयम् ॥२८॥**

(१) आर्द्रक, (२) गुल्ममूल, (३) मूलज, (४) कन्दलं, (५) वर, (६) शृङ्गवेर, (७) महीज, (८) सैकतेष्ट, (९) अनूपज, (१०) अपाकशाक, (११) आर्द्राख्य, (१२) राहुच्छत्र, (१३) सुशाकक, (१४) शार्ङ्ग, (१५) आर्द्रशाक र (१६) सच्छाक : यी अदुवाका सोह्र (ऋतुभू) संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कटूष्णमार्द्रकं हृद्यं विपाके शीतलं लघु ।
दीपनं रुचिदं शोफकफकण्ठामयापहम् ॥२९॥**

अदुवा पिरो, उष्णवीर्यको, मुटुका लागि हितकर, पचाउन हलुका, दीपनी र रुचिकर हुन्छ । यसले सुजन, कफविकार र घाँटीका रोग नाश गर्दछ ।

## मरिच

**मरिचं पलितं श्यामं कोलं वल्लीजमूषणम् ।**
**यवनेष्टं वृत्तफलं शाकाङ्गं धर्मपत्तनम् ॥३०॥**
**कटुकं च शिरोवृत्तं वीरं कफविरोधि च ।**
**रूक्षं सर्वहितं कृष्णं सप्तभूख्यं निरूपितम् ॥३१॥**

(१) मरिच, (२) पलित, (३) श्याम, (४) कोल, (५) वल्लीज, (६) ऊषण, (७) यवनेष्ट, (८) वृत्तफल, (९) शाकाङ्ग, (१०) धर्मपत्तन, (११) कटुक, (१२) शिरोवृत्त, (१३) वीर, (१४) कफविरोधि, (१५) रूक्ष, (१६) सर्वहित र (१७) कृष्ण : यी सत्र (सप्तभू) मरिचका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मरिचं कटु तिक्तोष्णं लघु श्लेष्मविनाशनम् ।**
**समीरकृमिहृद्रोगहरञ्च रुचिकारकम् ॥३२॥**

मरिच पिरो, तीतो, उष्णवीर्यको र पचाउन हलुका हुन्छ । यसले कफविकार, वातविकार, कीरा र मुटुका रोग नाश गर्नुका साथै रुचि पनि जगाउँदछ ।



## सेतो मरिच (सितमरिच)

**सितमरिचं तु सिताख्यं सितवल्लीजं च बालकं बहुलम् ।**
**धवलं चन्द्रकमेतन्मुनिनाम गुणाधिकं च वश्यकरम् ॥३३॥**
**कटूष्णं श्वेतमरिचं विषघ्नं भूतनाशनम् ।**
**अवृष्यं दृष्टिरोगघ्नं युक्त्या चैव रसायनम् ॥३४॥**

(१) सितमरिच, (२) सिताख्य, (३) सितवल्लीज, (४) बालक, (५) बहुल, (६) धवल र (७) चन्द्रक : यी सात नाम सेतो मरिचका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मरिच अधिक गुनिलो र वशीकरण गर्ने गुणको हुन्छ । यो पिरो, उष्णवीर्यको, विषविकार नाशक, भूतबाधा नाशक, वीर्य नबढाउने, दृष्टिरोग नाशक र रसायनी हुन्छ ।

## धनिया (धान्यक)

**धान्यकं धान्यजं धान्यं धानेयं धनिकं तथा ।**
**कुस्तुम्बुरुश्चावलिका छत्रधान्यं वितुन्नकम् ॥३५॥**
**सुगन्धिः शाकयोग्यश्च सूक्ष्मपत्रो जनप्रियः ।**

**धान्यवीजो वीजधान्य वेधक षोडशाह्वयम् ॥३६॥**
**धान्यकं मधुरं शीतं कषायं पित्तनाशनम् ।**
**ज्वरकासतृषाछर्दिकफहारि च दीपनम् ॥३७॥**

(१) धान्यक, (२) धान्यज, (३) धान्य, (४) धानेय, (५) धनिक, (६) कुस्तुम्बुरु, (७) अवलिका, (८) छत्रधान्य, (९) वितुन्नक, (१०) सुगन्धि, (११) शाकयोग्य, (१२) सूक्ष्मपत्र, (१३) जनप्रिय, (१४) धान्यवीज, (१५) वीजधान्य र (१६) वेधक : यी सोह्र नाम धनियाका संस्कृत पर्यायवाची नामहरू हुन् । धनिया गुलियो, शीतवीर्यको, टर्रो र पित्तविकार नाशक हुन्छ । यसले जरो, खोकी, तिर्खारोग, वाकवाकी र कफविकार नाश गर्दछ । यो दीपनी हुन्छ ।

### ज्वानु (यवानी)

**यवानी दीप्यको दीप्यो यवसाह्वो यवाग्रजः ।**
**दीपनी चोग्रगन्धा च वातारिर्भूकदम्बकः ॥३८॥**
**यवजो दीपनीयश्च शूलहन्त्री यवानिका ।**
**उग्रा च तीव्रगन्धा च ज्ञेया पञ्चदशाह्वया ॥३९॥**
**यवानी कटुतिक्तोष्णा वातार्शःश्लेष्मनाशनी ।**
**शूलाध्मानकृमिच्छर्दिमर्दनी दीपनी परा ॥४०॥**



(१) यवानी, (२) दीप्यक, (३) दीप्य, (४) यवसाह्व, (५) यवाग्रज, (६) दीपनी, (७) उग्रगन्धा, (८) वातारि, (९) भूदम्बक, (१०) यवज, (११) दीपनीय, (१२) शूलहन्त्री, (१३) यवानिका, (१४) उग्रा र (१५) तीव्रगन्धा : यी पन्ध्र नाम ज्वानुको संस्कृत पर्यायवाची नामहरू हुन् । ज्वानु पिरो, तीतो, उष्णवीर्यको तथा वातविकार, अल्काई र कफविकार नाशक हुन्छ । यसले शूल, आध्मान, कीरा र वाकवाकी नाश गर्दछ । यो अत्यन्त दीपनी हुन्छ ।

### चाँवो (चव्य)

**चव्यकं चविका चव्यं वशिरो गन्धनाकुली ।**
**वल्ली च कोलवल्ली च कोलं कुटलमस्तकम् ॥**
**तीक्ष्णा करिणिका वल्ली कृकरो नेत्रभूह्वया ॥४१॥**
**चव्यं स्यादुष्णकटुकं लघु रोचनदीपनम् ।**
**जन्तूद्रेकापहं कासश्वासशूलार्तिकृन्तनम् ॥४२॥**

(१) चव्यक, (२) चविका, (३) चव्य, (४) वशिर, (५) गन्धनाकुली, (६) वल्ली, (७) कोलवल्ली, (८) कोल, (९) कुटलमस्तक, (१०) तीक्ष्णा, (११) करिणिका र (१२) वल्लीकृकर : यी बाह्र नाम

चौंवोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, पिरो, पचाउन सहज, रोची र दीपनी हुन्छ । कीरा बढ्नबाट रोक्दछ । खोकी, दम, शूल र पीडालाई शान्त पार्दछ ।

### सेतो चितु (चित्रक)

**चित्रकोऽग्निश्च शार्दूलश्चित्रपाली कटुः शिखी ।**
**कृशानुर्दहनो व्यालो ज्योतिष्कः पालकस्तथा ॥४३॥**
**अनलो दारुणो वह्निः पावकः शबलस्तथा ।**
**पाठी द्वीपी च चित्राङ्गो ज्ञेयः शूरश्च विंशतिः ॥४४॥**
**चित्रकोऽग्निसमः पाके कटुः शोफकफापहः ।**
**वातोदरार्शोग्रहणीकृमिकण्डूतिनाशनः ॥४५॥**

(१) चित्रक, (२) अग्नि, (३) शार्दूल, (४) चित्रपाली, (५) कटु, (६) शिखी, (७) कृशानु, (८) दहन, (९) व्याल, (१०) ज्योतिष्क, (११) पालक, (१२) अनल, (१३) दारुण, (१४) वह्नि, (१५) पावक, (१६) शबल, (१७) पाठी, (१८) द्वीपी, (१९) चित्राङ्ग र (२०) शूर : यी बीस नाम सेतो चितुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, पचेपछि पिरो तथा सुजन र कफविकार नाशक हुन्छ । यसले वातविकार, पेटका रोग, अल्काई, ग्रहणी, कीरा र चिलाउने रोग नाश गर्दछ ।



### रातो चितु (रक्तचित्रक)

**कालो व्यालः कालमूलोऽतिदीप्यो मार्जारोऽग्निर्दाहकः पावकश्च ।**
**चित्राङ्गोऽयं रक्तचित्रो महाङ्गः स्याद्रुद्राह्वश्चित्रकोऽन्यो गुणाढ्यः ॥४६॥**
**स्थूलकायकरो रुच्यः कुष्ठघ्नो रक्तचित्रकः ।**
**रसे नियामको लोहे वेधकश्च रसायनः ॥४७॥**

(१) काल, (२) व्याल, (३) कालमूल, (४) अतिदीप्य, (५) मार्जार, (६) अग्नि, (७) दाहक, (८) पावक, (९) चित्राङ्ग, (१०) रक्तचित्र र (११) महाङ्ग : यी एघार वटा नाम रातो चितुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सेतोभन्दा बढी गुनिलो हुन्छ । यसले शरीरलाई मोटो बनाउँदछ र रुची जगाउँदछ । यसले कुष्ठ नाश गर्दछ । यो पारो प्रशोधन गर्न र फलाम प्वाल पार्न रसायनी हुन्छ ।

### वायुविडङ्ग (विडङ्ग)

**विडङ्गा कृमिहा चित्रतण्डुला (चैत्रातण्डुला) तण्डुलीयका ।**
**वातारिस्तण्डुला प्रोक्ता जन्तुघ्नी मृगगामिनी ॥४८॥**

**केरली गह्वराऽमोघा कपाली चित्रतण्डुला ।**
**वरा सुचित्रबीजा च जन्तुहन्त्री च षोडश ॥४९॥**
**विडङ्गा कटुरुष्णा च लघुर्वातकफार्तिनुत् ।**
**अग्निमान्द्यारुचिभ्रान्तिकृमिदोषविनाशिनी ॥५०॥**

(१) विडङ्गा, (२) कृमिहा, (३) चित्रतण्डुला (चैत्रा, तण्डुला), (४) तण्डुलीयका, (५) वातारि, (६) तण्डुला, (वातारितण्डुला), (७) जन्तुघ्नी, (८) मृगगामिनी, (९) कैरली, (१०) गह्वरा, (११) अमोघा, (१२) कपाली, (१३) चित्रतण्डुला, (१४) वरा, (१५) सुचित्रबीजा र (१६) जन्तुहन्त्री : यी सोह्र नाम वायुविडङ्गका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, पचाउन सहज तथा वातविकार, कफविकार र पीडा नाशक हुन्छ । यसले कमजोर पाचनशक्ति, अरुची, भ्रम र कीराजन्य विकार नाश गर्दछ ।

## बोझो (वचा)

**वचोग्रगन्धा गोलोमी जटिलोग्रा च लोमशा ।**
**रक्षोघ्नी विजया भद्रा मङ्गल्येति दशाह्वया ॥५१॥**
**वचा तिक्ता कटूष्णा च कफामग्रन्थिशोफनुत् ।**
**वातज्वरातिसारघ्नी वान्तिकृन्मादभूतनुत् ॥५२॥**



(१) वचा, (२) उग्रगन्धा, (३) गोलोमी, (४) जटिला, (५) उग्रा, (६) लोमशा, (७) रक्षोघ्नी, (८) विजया, (९) भद्रा र (१०) मङ्गल्या : यी दश नाम बोझोका संस्कृत पर्यायवाची नामहरू हुन् । बोझो तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार, आमविकार र गाँठामा हुने सुजन नाशक हुन्छ । यसले वातज्वर र अतिसार नाश गर्दछ । बोझोले उन्माद र भूतबाधाजन्य वाकवाकीलाई समेत नाश गर्दछ ।

## सेतो बोझो (श्वेतवचा)

**मेध्या श्वेतवचा त्वन्या षड्ग्रन्था दीर्घपत्रिका ।**
**तीक्ष्णगन्धा हैमवती मङ्गल्या विजया च सा ॥५३॥**
**श्वेतवचाऽतिगुणाढ्या मतिमेधायुःसमृद्धिदा कफनुत् ।**
**वृष्या च वातभूतक्रिमिदोषघ्नी च दीपनी च वचा ॥५४॥**

मेध्या, श्वेतवचा, षड्ग्रन्था, दीर्घपत्रिका, तीक्ष्णगन्धा, हैमवती, मङ्गल्या र विजया : यी सेतो बोझोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बढी गुनिलो, बुद्धि दायक, दिमागको ग्रहण गर्ने

क्षमता बढाउने, समृद्धिदायक र कफविकार नाशक हुन्छ । यो वीर्यवर्धक तथा वातविकार, भूतबाधा र कीराजन्य विकार नाशक एवं दीपनी हुन्छ ।

### कुलिञ्जन (बोझो विशेष)

**कुलञ्जो गन्धमूलश्च तीक्ष्णमूलः कुलञ्जनः ।**
**कुलञ्जः कटुतिक्तोष्णो दीपनो मुखदोषनुत् ॥५५॥**

कुलञ्ज, गन्धमूल, तीक्ष्णमूल र कुलञ्जन : यी कुलिञ्जनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको, दीपनी र मुखका रोग नाशक हुन्छ ।

### जिरा (जीरक)

**जीरको जरणो जीरो जीर्णो दीप्यश्च दीपकः ।**
**अजाजिको वह्निशङ्खो मागधश्च नवाह्वय ॥५६॥**
**जीरकः कटुरुष्णाश्च वातहृद्दीपनः परः ।**
**गुल्माध्मानातिसारघ्नो ग्रहणीक्रिमिहृत्परः ॥५७॥**



(१) जीरक, (२) जरण, (३) जीर, (४) जीर्ण, (५) दीप्य, (६) दीपक, (७) अजाजिक, (८) वह्निशङ्ख र (९) मागध : यी नौ नाम जिराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, वातविकार नाशक र अत्यन्त दीपनी हुन्छ । यसले गुल्म, आध्मान र अतिसारलाई नाश गर्दछ । यसले ग्रहणी र कीरालाई प्रभावकारी तरिकाले नाश गर्दछ ।

### सेतो जिरा (श्वेतजीरक)

**गौरादिजीरकस्त्वन्योऽजाजी स्यात् श्वेतजीरकः ।**
**कणाह्वा कणजीर्णा च कणा दीप्यः सितादिकः ॥**
**ज्ञेया दीर्घकणा चैव सिताजाजी दशाह्वया ॥५८॥**
**गौराजाजी हिमा रुच्या कटुर्मधुरदीपनी ।**
**क्रिमिघ्नी विषहन्त्री च चक्षुष्याध्माननाशिनी ॥५९॥**

(१) गौरजिरक, (२) अजाजी, (३) श्वेतजीरक, (४) कणाह्वा, (५) कणजीर्णा, (६) कणा, (७) दीप्य, (८) सिताजिरक, (९) दीर्घकणा र (१०) सिताजाजी : यी दश नाम सेतो जिराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, रुचीकर, पिरो, गुलियो र दीपनी हुन्छ । यसले कीरा र विषविकार नाश गर्दछ । यो आँखाका लागि हितकर र आध्मान नाशक हुन्छ ।

## कालो जिरा (कृष्णजीरक)

**कृष्णा तु जरणा काली बहुगन्धा च भेदिनी ।**
**कटुभेदिनिका रुच्या नीला नीलकणा स्मृता ॥६०॥**
**काश्मीरजीरका वर्षा काली स्याद्दन्तशोधनी ।**
**कालमेषी सुगन्धा च विज्ञेया बाणभूह्वया ॥६१॥**
**जरणा कटुरुष्णा च कफशोफनिकृन्तनी ।**
**रुच्या जीर्णज्वरघ्नी च चक्षुष्या ग्रहणी परा ॥६२॥**

(१) कृष्णा, (२) जरणा, (३) काली, (४) बहुगन्धा, (५) भेदिनी, (६) कटुभेदिनिका, (७) रुच्या, (८) नीला, (९) नीलकणा, (१०) काश्मीरजीरक, (११) वर्षा, (१२) काली, (१३) दन्तशोधनी, (१४) कालमेषी र (१५) सुगन्धा : यी पन्ध्र वटा नाम कालो जिराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार र सुजन नाशक हुन्छ । यसले रुची जगाउनुका साथै पुरानो जरो समेत नाश गर्दछ । साथै, यो आँखाका लागि हितकर र अत्यन्त ग्राही हुन्छ ।

## मुगरेलो, मोटो जिरा (स्थूलजीरक)



**दीप्योपकुञ्चिका काली पृथ्वी स्थूलकणा पृथुः ।**
**मनोज्ञा जारणी जीर्णा तरुणः स्थूलजीरकः ॥**
**सुषवी कारवी ज्ञेया पृथ्वीका च चतुर्दश ॥६३॥**
**पृथ्वीका कटुतिक्तोष्णा वातगुल्मामदोषनुत् ।**
**श्लेष्माध्मानहरा जीर्णा जन्तुघ्नी दीपनी परा ॥६४॥**

(१) दीप्या, (२) उपकुञ्चिका, (३) काली, (४) पृथ्वी, (५) स्थूलकणा, (६) पृथु, (७) मनोज्ञा, (८) जारणी, (९) जीर्णा, (१०) तरुण, (११) स्थूलजीरक, (१२) सुषवी, (१३) कारवी र (१४) पृथ्वीका : यी चौध नाम मोटो जिराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो तथा वातविकार, गुल्मर आमविकार नाशक हुन्छ । यसले कफविकार, आध्मान, अपच र कीरा नाश गर्दछ । यो अत्यन्त दीपनी हुन्छ ।

## बनजिरा (अरण्यजीरक)

**बृहत्पाली क्षुद्रपत्रोऽरण्यजीरः कणा तथा ।**
**वनजीरः कटुः शीतो व्रणहा पञ्चनामकः ॥६५॥**

(१) बृहत्पाली, (२) क्षुद्रपत्र, (३) अरण्यजीर, (४) कणा र (५) वनजीर : यी पाँच नाम बनांजराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, शीतवीर्यको र घाउखटिरा नाशक हुन्छ ।

### जिराका सामान्य गुण

**जीरकाः कटुकाः पाके कृमिघ्ना वह्निदीपनाः ।**
**जीर्णज्वरहरा रुच्या व्रणहाध्माननाशनाः ॥६६॥**

जिरा पचेपछि पिरो हुन्छ । यसले कीरा नाश गर्दछ, पाचकाग्निलाई बाल्दछ, पुरानो जरो ठिक गर्दछ, रुची जगाउँदछ, घाउखटिरा निको पार्दछ र आध्मान नाश गर्दछ ।

### मेथी (मेथिका)

**मेथिका मेथिनी मेथी दीपनी बहुपत्रिका ।**
**वेधनी गन्धबीजा च ज्योतिर्गन्धफला तथा ॥६७॥**
**वल्लरी चन्द्रिका मेथा मिश्रपुष्पा च कैरवी ।**
**कुञ्चिका बहुपर्णी च पीतबीजा मुनीन्दुधा ॥६८॥**
**मेथिका कटुरुष्णा च रक्तपित्तप्रकोपणी ।**
**अरोचकहरा दीप्तिकरा वातघ्नदीपनी ॥६९॥**

(१) मेथिका, (२) मेथिनी, (३) मेथी, (४) दीपनी, (५) बहुपत्रिका, (६) वेधनी, (७) गन्धबीजा, (८) ज्योति, (९) गन्धफला, (१०) वल्लरी, (११) चन्द्रिका, (१२) मेथा, (१३) मिश्रपुष्पा, (१४) कैरवी, (१५) कुञ्चिका, (१६) बहुपर्णी र (१७) पीतबीजा : यी सत्र (मुनीन्दु) नाम मेथीका संस्कृत पर्यायवाची नामहरू हुन् । मेथी पिरो, उणवीर्यको, रक्तपित्त गर्ने, अरुची नाशक, जठराग्नि बाल्ने, वातविकार नाशक र दीपनी हुन्छ ।

### जिम्बु (हिङ्गुपत्री)

**पृथ्वीका हिङ्गुपत्री च कवरी दीर्घिका पृथुः ।**
**तन्वी च दारुपत्री च बिल्वी बाष्पी नवाह्वया ॥७०॥**
**हिङ्गुपत्री कटुस्तीक्ष्णा तिक्तोष्णा कफवातनुत् ।**
**आमक्रिमिहरा रुच्या पथ्या दीपनपाचनी ॥७१॥**

(१) पृथ्वीका, (२) हिङ्गुपत्री, (३) कवरी, (४) दीर्घिका, (५) पृथु, (६) तन्वी, (७) दारुपत्री, (८) बिल्वी र (९) बाष्पी : यी नौ नाम जिम्बुका संस्कृत पर्यायवाची नामहरू हुन् । जिम्बु पिरो, तिक्खर, तीतो,

उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले आमविकार र कीरा नाश गर्दछ । यो रुचीकर, पथ्य, दीपन र पाचनी हुन्छ ।

**हिङ (हिङ्गु)**

**हिङ्गूग्रगन्धं भूतारिर्वाह्लीकं जन्तुनाशनम् ।**
**शूलगुल्मादिरक्षोघ्नमुग्रवीर्यं च रामठम् ॥७२॥**
**अगूढगन्धं जरणं भेदनं सूपधूपनम् ।**
**दीप्तं सहस्रवेधीति ज्ञेयं पञ्चदशाभिधम् ॥७३॥**
**हृद्यं हिङ्गु कटूष्णं च क्रिमिवातकफापहम् ।**
**विबन्धाध्मानशूलघ्नं चक्षुष्यं गुल्मनाशनम् ॥७४॥**

(१) हिङ्गु, (२) उग्रगन्ध, (३) भूतारि, (४) वाह्लीक, (५) जन्तुनाशन, (६) शूलघ्न, (७) गुल्मघ्न, (८) रक्षोघ्न, (९) उग्रवीर्य, (१०) रामठ, (११) अगूढगन्ध, (१२) जरण, (१३) भेदन, (१४) सूपधूपन, (१५) दीप्त र (१६) सहस्रवेधि : यी पन्ध्र नाम हिङका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुटुका लागि हितकर, पिरो, उष्णवीर्यको तथा कीरा, वातविकार र कफविकार नाशक हुन्छ । यसले विबन्ध, आध्मान र शूललाई नाश गर्दछ । यो आँखाका लागि लाभदायक र गुल्मनाशक हुन्छ ।



**नाडीहिङ्गु**

**नाडीहिङ्गुः पलाशाख्या जन्तुका रामठी च सा ।**
**वंशपत्री च पिण्डाह्वा सुवीर्या हिङ्गुनाडिका ॥७५॥**
**नाडीहिङ्गुः कटूष्णा च कफवातार्तिशान्तिकृत् ।**
**विष्ठाविबन्धदोषघ्नमानाहामयहारि च ॥७६॥**

नाडीहिङ्गु, पलाशाख्या, जन्तुका, रामठी, वंशपत्री, पिण्डाह्वा, सुवीर्या र हिङ्गुनाडिका : यी नाडीहिङ्गुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार, वातविकार र पीडालाई शान्त पार्ने गुणको हुन्छ । यसले दिसा कब्जियत भएर लाग्ने रोग तथा आनाह र आमजन्य रोग नाश गर्दछ ।

**अग्निजार**

**अग्निजारोऽग्निनिर्यासोऽप्यग्निगर्भोऽग्निजः स्मृतः ।**
**बडबाग्निमलो ज्ञेयो जरायुश्चाग्निसम्भवः ॥७७॥**
**स्यादग्निजारः कटुरुष्णवीर्यस्तुण्डामयो वातकफापहश्च ।**

**पित्तप्रदः सोऽधिकसन्निपातशूलार्तिशीतामयनाशकश्च ॥७८॥**

अग्निजार, अग्निनिर्यास, अग्निगर्भ, अग्निज, बडबाग्निमल, जरायु र अग्निसम्भव : यी अग्निजार नामक ओखतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा मुखका रोग, वातविकार र कफविकार नाशक हुन्छ । यसले पित्तविकार गर्दछ तथा बढेको सन्निपात, शूलजन्य पीडा र शीतजन्य रोग पनि नाश गर्दछ ।

### जाराभ

**जाराभो दहनस्पर्शी पिच्छिलः सागरेभवः ।**
**जरायुस्तच्चतुर्वर्णः तेषु श्रेष्ठः सलोहितः ॥७९॥**

जाराभ, दहनस्पर्शी, पिच्छिल र जरायु : यी जाराभका संस्कृत पर्यायवाची नामहरू हुन् । यो समुद्रमा हुने र चार रङ्को पाइने विरुवा हो । तीमध्ये रातो श्रेष्ठ हुन्छ ।

### गाईतियारे (रास्ना)

**रास्ना युक्तरसा रम्या श्रेयसी रसना रसा ।**

**सुगन्धिमूला सुरसा रसाढ्याऽतिरसा दश ॥८०॥**
**रास्ना तु त्रिविधा प्रोक्ता मूलं पत्रं तृणं तथा ।**
**ज्ञेये मूलदले श्रेष्ठे तृणरास्ना च मध्यमा ॥८१॥**
**रास्ना गुरुश्च तिक्तोष्णा विषवातास्रकासजित् ।**
**शोफकम्पोदरश्लेष्मशमनी पाचनी च सा ॥८२॥**

(१) रास्ना, (२) युक्तरसा, (३) रम्या, (४) श्रेयसी, (५) रसना, (६) रसा, (७) सुगन्धिमूला, (८) सुरसा, (९) रसाढ्या र (१०) अतिरसा : यी दश नाम गाईतिहारेका संस्कृत पर्यायवाची नामहरू हुन् । रास्ना जरा प्रयोग हुने, पात प्रयोग हुने र घाँस प्रयोग हुने गरी तीन किसिमका हुन्छन् । जरा र पात प्रयोग हुने खालका रास्ना उत्तम हुन्छन् । घाँस प्रयोग हुने खालको रास्ना मध्यम हुन्छ । रास्ना पचाउन कठिन, तीतो, उष्णवीर्यको तथा विषविकार, वातविकार, रक्तविकार र खोकीलाई जित्ने गुणको हुन्छ । यसले सुजन, काम्ने रोग, पेटका रोग र कफविकारलाई शान्त पार्दछ । यो पाचनी हुन्छ ।

### अलैंची (स्थूलैला)

**स्थूलैला बृहदेला त्रिपुटा त्रिदिवोद्भवा च भद्रैला ।**

सुरभित्वक् महैला पृथ्वी कन्या कुमारिका चैन्द्री ॥८३॥
कायस्था गोपुटा कान्ता घृताची गर्भसम्भवा ।
इन्द्राणी दिव्यगन्धा च विज्ञेयाऽष्टादशाह्वया ॥८४॥

(१) स्थूलैला, (२) बृहदेला, (३) त्रिपुटा, (४) त्रिदिवोद्भवा, (५) भद्रैला, (६) सुरभित्वक्, (७) महैला, (८) पृथ्वी, (९) कन्या, (१०) कुमारिका, (११) ऐन्द्री, (१२) कायस्था, (१३) गोपुटा, (१४) कान्ता, (१५) घृताची, (१६) गर्भसम्भवा, (१७) इन्द्राणी र (१८) दिव्यगन्धा : यी अठार नाम अलैंचीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

सुकुमेल (एला)

एला बहुलगन्धैन्द्री द्रावडी निष्कुटिस्त्रुटिः ।
कपोतवर्णी गौराङ्गी बाला बलवती हिमा ॥८५॥
चन्द्रिका चोपकुञ्ची च सूक्ष्मासागरगामिनी ।
गर्भारिर्गन्धफलिका कायस्थाऽष्टादशाह्वया ॥८६॥

(१) एला, (२) बहुलगन्धा, (३) ऐन्द्री, (४) द्रावडी, (५) निष्कुटि, (६) त्रुटि, (७) कपोतवर्णी, (८) गौराङ्गी, (९) बाला, (१०) बलवती, (११) हिमा, (१२) चन्द्रिका, (१३) चोपकुञ्ची, (१४) सूक्ष्मा, (१५) सागरगामिनी, (१६) गर्भारि, (१७) गन्धफलिका र (१८) कायस्था : यी अठार नाम सुकुमेलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

अलैंची र सुकुमेलको गुण (एलाद्वयगुण)

एलाद्वयं शीतलतिक्तमुक्तं सुगन्धि पित्तार्तिकफापहारि ।
करोति हृद्रोगमलार्तिबस्तिशूलघ्नमत्र स्थविरा गुणाढ्या ॥८७॥

दुवै थरी एला (अलैंची र सुकुमेल) शीतवीर्यका, तीता, सुगन्धी तथा पित्तविकार र कफविकार नाशक हुन्छन् भनिएको छ । यसले मुटुका रोग, दिसासम्बन्धी रोग, पेटका रोग र शूलरोगलाई नाश गर्दछ । यी दुईमा सुकुमेलभन्दा अलैंची बढी गुनिलो हुन्छ ।

सिँधेनुन (सैन्धव)

सैन्धवं स्याच्छीतशिवं नादेयं सिन्धुजं शिवम् ।
शुद्धं शिवात्मजं पथ्यं मणिमन्थं नवाभिधम् ॥८८॥
सैन्धवं लवणं वृष्यं चक्षुष्यं रुचिदीपनम् ।

**त्रिदोषशमनं पूतं व्रणदोषविबन्धजित् ॥८९॥**
**सैन्धवं द्विविधं ज्ञेयं श्वेतं रक्तमिति क्रमात् ।**
**रसवीर्यविपाकेषु गुणाढ्यं पूतनं शिवम् ॥९०॥**

(१) सैन्धवम्, (२) शीतशिवम्, (३) नादेयम्, (४) सिन्धुजम्, (५) शिवम्, (६) शुद्धम्, (७) शिवात्मजम्, (८) पथ्यम् र (९) मणिमन्थम् : यी नौ नाम सिँधेनुनका संस्कृत पर्यायवाची नामहरू हुन् । सिँधेनुन वीर्यवर्धक, आँखाका लागि हितकर, रुचिकर र दीपनी हुन्छ । यसले त्रिदोषलाई शान्त पार्दछ, पवित्र गर्दछ तथा घाउखटिरा र विबन्धलाई जित्दछ । सिँधेनुन सेतो र रातो गरी दुई किसिमको हुन्छ । रस, गुण र विपाकमा पुरानोभन्दा ताजा सिँधेनुन गुनिलो हुन्छ ।

### सौँचर नुन (सौवर्चल)

**सौवर्चलन्तु रुचकं तिलकं हृद्यगन्धकम् ।**
**अक्षञ्च कृष्णलवणं रुच्यं कौद्रविकं तथा ॥९१॥**
**सौवर्चलं लघु क्षारं कटूष्णं गुल्मजन्तुजित् ।**
**ऊर्ध्ववातामशूलार्त्तिविबन्धारोचकाञ्जयेत् ॥९२॥**

सौवर्चल, रुचक, तिलक, हृद्यगन्धक, अक्ष, कृष्णलवण, रुच्य र कौद्रविक : यी सौँचर नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नुन पचाउन सहज, नुनिलो, पिरो, उष्णवीर्यको तथा गुल्म र कीरालाई जित्ने गुणको हुन्छ । यसले ऊर्ध्ववात, आमविकार, शूल, पीडा, विबन्ध र अरुचीलाई पनि जित्दछ ।

### काँचे नुन (काच)

**नीलं काचोद्भवं काचं तिलकं काचसम्भवम् ।**
**काचसौवर्चलं कृष्णलवणं पाक्यजं स्मृतम् ॥९३॥**
**काचोत्थं हृद्यगन्धं तत्काललवणं तथा ।**
**कुरुविन्दं काचमलं कृत्रिमं चतुर्दश ॥९४॥**
**काचादिलवणं रुच्यमीषत्क्षारं च पित्तलम् ।**
**दाहकं कफवातघ्नं दीपनं गुल्मशूलहृत् ॥९५॥**

(१) नील, (२) काचोद्भव, (३) काच, (४) तिलक, (५) काचसम्भव, (६) काचसौवर्चल, (७) कृष्णलवण, (८) पाक्यज, (९) काचोत्थ, (१०) हृद्यगन्ध, (११) तत्काललवण, (१२) कुरुविन्द, (१३) काचमल र (१४) कृत्रिम : यी चौध नाम काच नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो

नुन रुचिकर, केही नुनिलो, पित्तविकार बढाउने, डाह गर्ने, कफविकार र वातविकार नाश गर्ने, दीपनी तथा गुल्म र शूल नाशक हुन्छ ।

### बिरेनुन (विड)

**विडं द्राविडकं खण्डं कृतकं क्षारमासुरम् ।**
**सुपाक्यं खण्डलवणं धूर्तं कृत्रिमकं दश ॥९६॥**
**विडमुष्णञ्च लवणं दीपनं वातनाशनम् ।**
**रुच्यं चाजीर्णशूलघ्नं गुल्ममेहविनाशनम् ॥९७॥**

(१) विड, (२) द्राविडक, (३) खण्ड, (४) कृतक, (५) क्षार, (६) आसुर, (७) सुपाक्य, (८) खण्डलवण, (९) धूर्त र (१०) कृत्रिमक : यी दश नाम बिरेनुनका संस्कृत पर्यायवाची नामहरू हुन् । बिरेनुन उष्णवीर्यको, नुनिलो , दीपनी र वातविकार नाशक हुन्छ । यो रुचिकर, अजीर्ण र शूल नाशक तथा गुल्म र प्रमेह नाशक हुन्छ ।

### साबरीनुन (गडोत्थ)

**गाढादिलवणं शुभ्रं पृथ्वीजं गडदेशजम् ।**

**गडोत्थं च महारम्भं साम्भरं सम्भरोद्भवम् ॥९८॥**
**गडोत्थं तूष्णलवणमीषदम्लं मलापहम् ।**
**दीपनं कफवातघ्नमर्शोघ्नं कोष्ठशोधनम् ॥९९॥**

गाढादिलवण, शुभ्र, पृथ्वीज, गडदेशज, गडोत्थ, महारम्भ, साम्भर र सम्भरोद्भव : यी गडोत्थ नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, नुनिलो, केही अमिलो, मल खुलाउने, दीपनी तथा कफविकार, वातविकार र अल्काई नाशक तथा पेट सफा गर्ने गुणको हुन्छ ।

### समुद्री नुन (समुद्रलवण)

**सामुद्रकं तु सामुद्रं समुद्रलवणं शिवम् ।**
**वंशिरं सागरोत्थञ्च शिशिरं लवणाब्धिजम् ॥१००॥**
**सामुद्रं लघु हृद्यं च पलितास्रदपित्तदम् ।**
**विदाहि कफवातघ्नं दीपनं रुचिकृत् परम् ॥१०१॥**

सामुद्रक, सामुद्र, समुद्रलवण, शिवम्, वंशिरं, सागरोत्थम्, शिशिरं र लवणाब्धिजम् : यी समुद्री नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नुन पचाउन सहज, मुटुका लागि हितकर, कपाल

फुलाउने र रक्तपित्त गराउने गुणको हुन्छ । यसले डाह गराउँदछ तथा कफविकार र वातविकार नाश गर्दछ । यो दीपनी र अत्यन्त रुचिकर हुन्छ ।

**भोटेनुन (द्रौणेयलवण)**

**द्रौणेयं वार्द्धेयं द्रोणीजं वारिजं च वार्द्धिभवम् ।**
**द्रोणीलवणं द्रौणं त्रिकूटलवणं च वसुसञ्ज्ञम् ॥१०२॥**
**द्रौणेयं लवणं पाके नात्युष्णमविदाहि च ।**
**भेदनं स्निग्धमीषच्च शूलघ्नं चाल्पपित्तलम् ॥१०३॥**

(१) द्रौणेय, (२) वार्द्धेय, (३) द्रोणीज, (४) वारिज, (५) वार्द्धिभव, (६) द्रोणीलवण, (७) द्रौण र (८) त्रिकूटलवण : यी आठ नाम द्रौणेय नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नुन पचेपछि पनि धेरै उष्णवीर्यको हुँदैन, डाह पनि गर्दैन । यो भेदनी, केही चिल्लो, शूल नाशक र थोरै पित्तविकार गर्ने गुणको हुन्छ ।

**औषरलवण**

**औषरकं सार्वगुणं सार्वरसं सर्वलवणमूषरजम् ।**
**साम्भारं बहुलवणं मेलकलवणं च मिश्रकं नवधा ॥१०४॥**
**औषरं तु कटु क्षारं तिक्तं वातकफापहम् ।**
**विदाहि पित्तकृद्ग्राहि मूत्रसंशोषकारि च ॥१०५॥**



(१) औषरक, (२) सार्वगुण, (३) सार्वरस, (४) सर्वलवण, (५) ऊषरज, (६) साम्भार, (७) बहुलवण, (८) मेलकलवण र (९) मिश्रक : यी नौ नाम औषरक नामक नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, नुनिलो, तीतो तथा वातविकार र कफविकार नाशक हुन्छ । यो डाहकारी, पित्तविकार गर्ने र ग्राही हुन्छ । यसले पिसाबको मात्रा पनि कम गर्दछ ।

**माटे (औद्भिद) नुन**

**रोमकमौद्भिदमुक्तं वसुकं वसु पांशुलवणमूषरजम् ।**
**पांशवमौषरमैरिणमौर्वं सार्वसहं रुद्रैः ॥१०६॥**
**रोमकं तीक्ष्णमत्युष्णं कटु तिक्तं च दीपनम् ।**
**दाहशोषकरं ग्राहि पित्तकोपकरं परम् ॥१०७॥**

(१) रोमक, (२) औद्भिद, (३) वसुक, (४) वसु, (५) पांशुलवण, (६) ऊषरज, (७) पांशव, (८)

ओषर, (९) एरंण, (१०) ओव र (११) सावसह : यी एघार नाम माटे नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तिक्खर, अती उष्णवीर्यको, पिरो, तीतो र दीपनी हुन्छ । यसले डाह र क्षयरोग गराउँदछ । यो ग्राही र धेरै नै पित्तविकार बढाउने गुणको हुन्छ ।

### अजमोदा

**अजमोदा खराह्वा च बस्तमोदा च मर्कटी ।**
**मोदा गन्धदला हस्तिकारवी गन्धपत्रिका ॥१०८॥**
**मायूरी शिखिमोदा च मोदाढ्या वह्निदीपिका ।**
**ब्रह्मकोशी विशाली च हृद्यगन्धोग्रगन्धिका ॥**
**मोदिनी फलमुख्या च वसुचन्द्राभिधा मता ॥१०९॥**
**अजमोदा कटुरुष्णा रूक्षा कफवातहारिणी रुचिकृत् ।**
**शूलाध्मानारोचकजठरामयनाशनी चैव ॥११०॥**

(१) अजमोदा, (२) खराह्वा, (३) बस्तमोदा, (४) मर्कटी, (५) मोदा, (६) गन्धदला, (७) हस्तिकारवी, (८) गन्धपत्रिका, (९) मायूरी, (१०) शिखिमोदा, (११) मोदाढ्या, (१२) वह्निदीपिका, (१३) ब्रह्मकोशी, (१४) विशाली, (१५) हृद्यगन्धा, (१६) उग्रगन्धिका, (१७) मोदिनी र (१८) फलमुख्या : यी अठार (वसुचन्द्राभिधा) नाम अजमोदाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, रुखो, कफविकार र वातविकार नाशक तथा रुचिकर हुन्छ । यसले शूल, आध्मान, अरुची र पेटका रोग पनि नाश गर्दछ ।

### कबाफचिनी (रेणुका)

**रेणुका कपिला कान्ता नन्दिनी महिला द्विजा ।**
**राजपुत्री हिमा रेणुः पाण्डुपुत्री हरेणुका ॥१११॥**
**सुपर्णी शिशिरा शान्ता कौन्ती वृत्ता च धर्मिणी ।**
**कपिलोमा हैमवती पाण्डुपत्नी च विंशतिः ॥११२॥**
**रेणुका तु कटुः शीता खर्जूकण्डूतिहारिणी ।**
**तृष्णादाहविषघ्नी च मुखवैमल्यकारिणी ॥११३॥**

(१) रेणुका, (२) कपिला, (३) कान्ता, (४) नन्दिनी, (५) महिला, (६) द्विजा, (७) राजपुत्री, (८) हिमा, (९) रेणु, (१०) पाण्डुपुत्री, (११) हरेणुका, (१२) सुपर्णी, (१३) शिशिरा, (१४) शान्ता, (१५) कौन्ती, (१६) वृत्ता, (१७) धर्मिणी, (१८) कपिलोमा, (१९) हैमवती र (२०) पाण्डुपत्नी : यी बीस

नाम कबाफाचिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, शीतवीर्यको तथा लुतो र चिलाउने रोग नाशक हुन्छ । यसले तिर्खा, डाह र विषविकार नाश गर्दछ तथा मुखलाई शुद्ध बनाउँदछ ।

### बोल

**बोलं रक्तापहं मुण्डं सुरसं पिण्डकं विषम् ।**
**निर्लोहं बर्बरं पिण्डं सौरभं रक्तगन्धकम् ॥११४॥**
**रसगन्धं महागन्धं विश्वञ्च शुभगन्धकम् ।**
**विश्वगन्धं गन्धरसं व्रणारिर्वसुभूह्वयम् ॥११५॥**
**बोलन्तु कटुतिक्तोष्णं कषायं रक्तदोषनुत् ।**
**कफपित्तामयान् हन्ति प्रदरादिरुजापहम् ॥११६॥**

(१) बोल, (२) रक्तापह, (३) मुण्ड, (४) सुरस, (५) पिण्डक, (६) विष, (७) निर्लोह, (८) बर्बर, (९) पिण्ड, (१०) सौरभ, (११) रक्तगन्धक, (१२) रसगन्ध, (१३) महागन्ध, (१४) विश्व, (१५) शुभगन्धक, (१६) विश्वगन्ध, (१७) गन्धरस र (१८) व्रणारि : यी अठार (वसुभू) नाम बोलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको, टर्रो र रक्तविकार नाशक हुन्छ । यसले कफविकार, पित्तविकार र प्रदर आदि रोग नाश गर्दछ ।



### कचुर (कर्चूर)

**कर्चूरो द्राविडः कार्शो दुर्लभो गन्धमूलकः ।**
**वेधमुख्यो गन्धसारो जटिलश्चाष्टनामकः ॥११७॥**
**कर्चूरः कटुतिक्तोष्णः कफकासविनाशनः ।**
**मुखवैशद्यजननो गलगण्डादिदोषनुत् ॥११८॥**

(१) कर्चूर, (२) द्राविड, (३) कार्श, (४) दुर्लभ, (५) गन्धमूलक, (६) वेधमुख्य, (७) गन्धसार र (८) जटिल : यी आठ नाम कचुरका संस्कृत पर्यायवाची नामहरू हुन् । कचुर पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार र खोकी नाशक हुन्छ । यसले मुखलाई शुद्ध पार्दछ र गलगाँडजस्ता रोग निको पार्दछ ।

### गुन्दरगानु (पाठा)

**पाठाऽम्बष्ठाऽम्बष्ठिका स्यात् प्राचीना पापचेलिका ।**
**पाठिका स्थापनी चैव श्रेयसी वृद्धिकर्णिका ॥११९॥**
**एकाष्ठीला कुचैली च दीपनी वरतिक्तका ।**

**तिक्तपुष्प वरातिक्ता दीपनी त्रिशिरा वृकी ॥**
**मालवी च वरा देवी वृत्तपर्णी द्विदृङ्मिता ॥१२०॥**
**पाठा तिक्ता गुरूष्णा च वातपित्तज्वरापहा ।**
**भग्नसन्धानकृत्पित्तदाहातीसारशूलहृत् ॥१२१॥**

(१) पाठा, (२) अम्बष्ठा, (३) अम्बष्ठिका, (४) प्राचीना, (५) पापचेलिका, (६) पाठिका, (७) स्थापनी, (८) श्रेयसी, (९) वृद्धिकर्णिका, (१०) एकाष्ठीला, (११) कुचैली, (१२) दीपनी, (१३) वरतिक्तका, (१४) तिक्तपुष्प, (१५) वरातिक्ता, (१६) दीपनी, (१७) त्रिशिरा, (१८) वृकी, (१९) मालवी, (२०) वरा, (२१) देवी र (२२) वृत्तपर्णी : यी बाईस (द्विदृङ्) गुन्दरगानुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पचाउन कठिन, उष्णवीर्यको तथा वातविकार, पित्तविकार र ज्वर नाशक हुन्छ । यसले भाँचिएको हाड जोड्दछ तथा पित्तजन्य डाह, अतिसार र शूल नाश गर्दछ ।

## वृक्षाम्ल

**वृक्षाम्लमम्लशाकं स्याच्चुक्राम्लं तित्तिडीफलम् ।**
**शाकाम्लमम्लपूरं च पूराम्लं रक्तपूरकम् ॥१२२॥**
**चूडाम्लबीजाम्लफलाम्लकं स्यादम्लादिवृक्षाम्लफलं रसाम्लम् ।**
**श्रेष्ठाम्लमत्यम्लमथाम्लबीजं फलं च चुक्रादि नगेन्दुसङ्ख्यम् ॥१२३॥**
**वृक्षाम्लमम्लं कटुकं कषायं सोष्णं कफार्शोघ्नमुदीरयन्ति ।**
**तृष्णासमीरोदरहृद्गदादिगुल्मातीसारव्रणदोषनाशि ॥१२४॥**



(१) वृक्षाम्ल, (२) अम्लशाक, (३) चुक्राम्ल, (४) तित्तिडीफलम्, (५) शाकाम्ल, (६) अम्लपूर, (७) पूराम्ल, (८) रक्तपूरक, (९) चूडाम्ल, (१०) बीजाम्ल, (११) फलाम्लक, (१२) अम्लादिवृक्षाम्लफल, (१३) रसाम्ल, (१४) श्रेष्ठाम्ल, (१५) अत्यम्ल, (१६) अम्लबीज, (१७) अम्लफल र (१८) चुक्र : यी अठार (नगेन्दु) नाम वृक्षाम्लका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, पिरो, टर्रो, उष्णवीर्यको तथा कफविकार र अल्काई नाशक हुन्छ । यसले तिर्खा, वातविकार, पेटका रोग, मुटुका रोग, गुल्म, अतिसार र घाउखटिराको असर नाश गर्दछ ।

## अम्लवेतस

**अम्लोऽम्लवेतसो वेधी रसाम्लो वीरवेतसः ।**
**वेतसाम्लश्चाम्लसारः शतवेधी च वेधकः ॥१२५॥**
**भीमश्च भेदनी भेदी राजाम्लश्चाम्लभेदनः ।**

**अम्लाङ्कुशो रक्तसारः फलाम्लश्चाम्लनायकः ॥१२६॥**
**सहस्रवेधी वीराम्ली गुल्मकेतुर्धराक्षिधा ।**
**शङ्खमांसादिद्रावी स्याद्द्विधा चैवाम्लवेतसः ॥१२७॥**
**अम्लवेतसमत्यम्लं कषायोष्णं च वातजित् ।**
**कफार्शःश्रमगुल्मघ्नमरोचकहरं परम् ॥१२८॥**

(१) अम्ल, (२) अम्लवेतस, (३) वेधी, (४) रसाम्ल, (५) वीरवेतस, (६) वेतसाम्ल, (७) अम्लसार, (८) शतवेधी, (९) वेधक, (१०) भीम, (११) भेदनी, (१२) भेदी, (१३) राजाम्ल, (१४) अम्लभेदन, (१५) अम्लाङ्कुश, (१६) रक्तसार, (१७) फलाम्ल, (१८) अम्लनायक, (१९) सहस्रवेधी, (२०) वीराम्ली र (२१) गुल्मकेतु : यी एक्काईस (धराक्षि) नाम अम्लवेतसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति अमिलो, टर्रो र उष्णवीर्यको हुन्छ । यसले वातविकारलाई जित्दछ । अम्लवेतसले कफविकार, अल्काई, थकाई र गुल्म नाश गर्दछ तथा प्रभावकारी ढङ्गले अरुचीलाई नाश गर्दछ ।

## कुटकी (कटुकी)

**कटुका जननी तिक्ता रोहिणी तिक्तरोहिणी ।**
**चक्राङ्गी मत्स्यपित्ता च बकुला शुकुलादनी ॥१२९॥**
**सादनी शतपर्वा स्यात् चक्राङ्गी मत्स्यभेदिनी ।**
**अशोकरोहिणी कृष्णा कृष्णभेदा महौषधी ॥१३०॥**
**कट्व्यञ्जनी काण्डरुहा कटुश्च कटुरोहिणी ।**
**केदारकटुकाऽरिष्टाऽप्यामघ्नी पञ्चविंशतिः ॥१३१॥**
**कटुकाऽतिकटुस्तिक्ता शीतपित्तास्रदोषजित् ।**
**बलासारोचकश्वासज्वरहृद्रेचनी च सा ॥१३२॥**

(१) कटुका, (२) जननी, (३) तिक्ता, (४) रोहिणी, (५) तिक्तरोहिणी, (६) चक्राङ्गी, (७) मत्स्यपित्ता, (८) बकुला, (९) शुकुलादनी, (१०) सादनी, (११) शतपर्वा, (१२) चक्राङ्गी, (१३) मत्स्यभेदिनी, (१४) अशोकरोहिणी, (१५) कृष्णा, (१६) कृष्णभेदा, (१७) महौषधी, (१८) कट्व्यञ्जनी, (१९) काण्डरुहा, (२०) कटु, (२१) कटुरोहिणी, (२२) केदारकटुका, (२३) अरिष्टा र (२४) आमघ्नी : यी पच्चीस वटा (दुई पटक चक्राङ्गीलाई गन्दा पनि चौबीस मात्र हुन्छ) नाम कुटकीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति पिरो, तीतो, शीतवीर्यको तथा पित्तविकार र रक्तविकारलाई जित्ने गुणको हुन्छ । यसले कफविकार, अरुची, दम र ज्वर पनि नाश गर्दछ । यो रेचनी हुन्छ ।

## अतीस (आतीविषा)

**अतिविषा श्वेतकन्दा विश्वा शृङ्गी च भङ्गुरा ।**
**विरूपा श्यामकन्दा च विश्वरूपा महौषधी ॥१३३॥**
**वीरा प्रतिविषा चान्द्री विषा श्वेतवचा स्मृता ।**
**अरुणोपविषा चैव ज्ञेया सप्तदशाह्वया ॥१३४॥**
**कटूष्णाऽतिविषा तिक्ता कफपित्तज्वरापहा ।**
**आमातीसारकासघ्नी विषच्छर्दिविनाशनी ॥१३५॥**

(१) अतिविषा, (२) श्वेतकन्दा, (३) विश्वा, (४) शृङ्गी, (५) भङ्गुरा, (६) विरूपा, (७) श्यामकन्दा, (८) विश्वरूपा, (९) महौषधी, (१०) वीरा, (११) प्रतिविषा, (१२) चान्द्री, (१३) विषा, (१४) श्वेतवचा, (१५) अरुणा र (१६) उपविषा : यी सत्र नाम अतीसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो तथा कफविकार, पित्तविकार र ज्वर नाशक हुन्छ । यसले आमविकार, अतिसार, खोकी, विषविकार र वाकवाकी नाश गर्दछ ।

**त्रिविधाऽतिविषा ज्ञेया शुक्ला कृष्णा तथारुणा ।**
**रसवीर्यविपाकेषु निर्विशेषगुणा च सा ॥१३६॥**



अतीस सेतो, कालो र रातो (अरुण) गरी तीन प्रकारको हुन्छ । यी तीन थरी अतीसको रस, वीर्य र विपाक समान हुन्छ ।

**दोलायां गोमयक्वाथे पचेदतिविषां ततः ।**
**सूर्यतापे भवेच्छुष्का योजयेत् तां भिषग्वरः ॥१३७॥**

अतीसलाई गोबरको काँडापानीमा दोलायन्त्रमा राखी पकाउनू । यसरी राख्दा अतीसले भाँडाको पिँधलाई छुनु हुँदैन । यसपछि (राम्ररी उम्लेपछि) निकाली अतीसलाई घाममा सुकाउनू र विज्ञ-वैद्यले ओखतीका लागि यसको प्रयोग गर्नू ।

## मोथे (मुस्ता)

**मुस्ता भद्रा वारिदाम्भोदमेघा जीमूतोऽब्दो नीरदोभ्रं घनश्च ।**
**गाङ्गेयं स्याद्भद्रमुस्ता वराही गुञ्जा ग्रन्थिर्भद्रकासी कसेरुः ॥१३८॥**
**क्रोडेष्टा कुरुविन्दाख्या सुगन्धिर्ग्रन्थिला हिमा ।**
**वन्या राजकसेरुश्च कच्छोत्था पञ्चविंशतिः ॥१३९॥**

**भद्रमुस्ता कषाया च तिक्ता शीता च पाचनी ।**
**पित्तज्वरकफघ्नी च ज्ञेया सङ्ग्रहणी च सा ॥१४०॥**

(१) मुस्ता, (२) भद्रा, (३) वारिदा, (४) अम्भोद, (५) मेघा, (६) जीमूत, (७) अब्द, (८) नीरद, (९) अभ्र, (१०) घन, (११) गाङ्गेय, (१२) भद्रमुस्ता, (१३) वराही, (१४) गुञ्जा, (१५) ग्रन्थि, (१६) भद्रकासी, (१७) कसेरु, (१८) क्रोडेष्टा, (१९) कुरुविन्दाख्या, (२०) सुगन्धि, (२१) ग्रन्थिला, (२२) हिमा, (२३) वन्या, (२४) राजकसेरु र (२५) कच्छोत्था : यी पच्चीस नाम मोथेका संस्कृत पर्यायवाची नामहरू हुन् । माथे टर्रो, तीतो, शीतवीर्यको र पाचनी हुन्छ । यसले पित्तजन्य ज्वर र कफविकार नाश गर्दछ । यो सङ्ग्रहणीमा पनि उपयोगी हुन्छ भनी जान्नू ।

## नागरमोथे (नागरमुस्त)

**अपरा नागरमुस्ता नागरोत्था नागरादिघनसञ्ज्ञा ।**
**चक्राङ्का नादेयी चूडाला पिण्डमुस्ता च ॥१४१॥**
**शिशिरा च वृषध्वाङ्क्षी कच्छरुहा चानुकेसरोच्चटा ।**
**सा पूर्णकोष्ठसञ्ज्ञा कलापिनी सागरेन्दुमिता ॥१४२॥**
**तिक्ता नागरमुस्ता कटुः कषाया च शीतला कफनुत् ।**
**पित्तज्वरातिसारारुचितृष्णादाहनाशनी श्रमहृत् ॥१४३॥**

(१) नागरमुस्ता, (२) नागरोत्था, (३) नागरादिघनसञ्ज्ञा, (४) चक्राङ्का, (५) नादेयी, (६) चूडाला, (७) पिण्डमुस्ता, (८) शिशिरा, (९) वृषध्वाङ्क्षी, (१०) कच्छरुहा, (११) चानुकेसरा, (१२) उच्चटा, (१३) पूर्णकोष्ठ र (१४) कलापिनी : यी चौध (सागरेन्दु) नाम नागरमोथेका संस्कृत पर्यायवाची नामहरू हुन् । नागरमोथे तीतो, पिरो, टर्रो, शीतवीर्यको र कफविकार नाशक हुन्छ । यसले पित्तज्वर, अतिसार, अरुचि, तिर्खा, डाह र थकाई नाश गर्दछ ।

## जेठीमधु (यष्टीमधु)

**यष्टीमधुर्मधुयष्टी मधुवल्ली मधुस्रवा ।**
**मधुकं मधुका यष्टी यष्ट्याह्वं वसुसम्मितम् ॥१४४॥**
**मधुरं यष्टिमधुकं किञ्चित्तिक्तं च शीतलम् ।**
**चक्षुष्यं पित्तहृद्रुच्यं शोषतृष्णाव्रणापहम् ॥१४५॥**

(१) यष्टीमधु, (२) मधुयष्टी, (३) मधुवल्ली, (४) मधुस्रवा, (५) मधुक, (६) मधुका, (७) यष्टी र (८) यष्ट्याह्व : यी आठ नाम जेठीमधुका संस्कृत पर्यायवाची नामहरू हुन् । जेठीमधु गुलियो, केही तीतो र शीतवीर्यको हुन्छ । यसले आँखालाई फाइदा गर्दछ र पित्तविकार नाश गर्दछ । जेठीमधुले रुची

जगाउँदछ तथा सुजन, तिखो र घाउखटिरा पनि नाश गर्दछ ।

### जेठीमधु विशेष (क्लीतनक)

**अन्यत् क्लीतनमुक्तं क्लीतनकं क्लीतनीयकं मधुकम् ।**
**मधुवल्ली च मधूलो मधुरलता मधुरसाऽतिरसा ॥१४६॥**
**शोषापहा च सौम्या स्थलजा जलजा च सा द्विधाभूता ।**
**सामान्येन मतेयं द्वादशसञ्ज्ञा बहुज्ञधिया ॥१४७॥**
**क्लीतनं मधुरं रुच्यं बल्यं वृष्यं व्रणापहम् ।**
**शीतलं गुरु चक्षुष्यमस्रपित्तापहं परम् ॥१४८॥**

क्लीतन, क्लीतनक, क्लीतनीयक, मधुक, मधुवल्ली, मधूल, मधुरलता, मधुरसा, अतिरसा, शोषापहा र सौम्या : यी अर्को थरी जेठीमधुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो जमिनमा हुने र पानीमा हुने गरी दुई थरीको हुन्छ । यो गुलियो, रुचिकर, बलदायक, वीर्यदायक र घाउखटिरा नाशक हुन्छ । यो शीतवीर्यको, पचाउन कठिन, आँखाका लागि हितकर तथा प्रभावकारी ढङ्गले रक्तविकार र पित्तविकार नाशक हुन्छ ।



### चिण्डे (भारङ्गी)

**भार्ङ्गी गर्दभिशाकश्च फञ्जी चाङ्गारवल्लरी ।**
**वर्षा ब्राह्मणयष्टिश्च बर्बरी भृङ्गजा च सा ॥१४९॥**
**पद्मा यष्टिश्च भारङ्गी वातारिः कासजित् परम् ।**
**सुरूपा भ्रमरेष्टा च शक्रमाता च षोडश ॥१५०॥**
**भार्ङ्गी तु कटुतिक्तोष्णा कासश्वासविनाशनी ।**
**शोफव्रणक्रिमिघ्नी च दाहज्वरनिवारिणी ॥१५१॥**

(१) भार्ङ्गी, (२) गर्दभिशाक, (३) फञ्जी, (४) अङ्गारवल्लरी, (५) वर्षा, (६) ब्राह्मणयष्टि, (७) बर्बरी, (८) भृङ्गजा, (९) पद्मा, (१०) यष्टि, (११) भारङ्गी, (१२) वातारि, (१३) कासजित्, (१४) सुरूपा, (१५) भ्रमरेष्टा र (१६) शक्रमाता : यी सोह्र नाम चिण्डेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा खोकी र दम नाशक हुन्छ । यसले सुजन, घाउखटिरा, कीरा, डाह र ज्वर पनि ठिक गर्दछ ।

### पुष्करमूल

**मूलं पुष्करमूलं च पुष्करं पद्मपत्रकम् ।**

**पद्मं पुष्करजं बीजं पौष्करं पुष्कराह्वयम् ॥१५२॥**
**काश्मीरं ब्रह्मतीर्थं च श्वासारिर्मूलपुष्करम् ।**
**ज्ञेयं पञ्चदशाह्वं च पुष्कराद्ये जटाशिफे ॥१५३॥**
**पुष्करं कटुतिक्तोष्णं कफवातज्वरापहम् ।**
**श्वासारोचककासघ्नं शोफघ्नं पाण्डुनाशनम् ॥१५४॥**

(१) मूल, (२) पुष्करमूल, (३) पुष्कर, (४) पद्मपत्रक, (५) पद्म, (६) पुष्करज, (७) बीज, (८) पौष्कर, (९) पुष्कराह्वय, (१०) काश्मीर, (११) ब्रह्मतीर्थ, (१२) श्वासारि, (१३) मूलपुष्कर, (१४) पुष्करजटा र (१५) पुष्करशिफा : यी पन्ध नाम पुष्करमूलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार, वातविकार र जरो नाशक हुन्छ । यसले दम, अरुची, खोकी, सुजन र पाण्डुरोग नाश गर्दछ ।

## कर्कटशृङ्गी

**शृङ्गी कुलीरशृङ्गी स्यात् घोषा च वनमूर्द्धजा ।**
**चन्द्रा कर्कटशृङ्गी च महाघोषा च शृङ्गिका ॥१५५॥**
**कालिका चेन्दुखण्डा च लताङ्गी च विषाणिका ।**
**चक्रा च शिखरं चैव कर्कटाह्वा त्रिपञ्चधा ॥१५६॥**
**तिक्ता कर्कटश्रृङ्गी तु गुरुरुष्णानिलापहा ।**
**हिक्कातीसारकासघ्नी श्वासपित्तास्रनाशनी ॥१५७॥**



(१) शृङ्गी, (२) कुलीरशृङ्गी, (३) घोषा, (४) वनमूर्द्धजा, (५) चन्द्रा, (६) कर्कटशृङ्गी, (७) महाघोषा, (८) शृङ्गिका, (९) कालिका, (१०) इन्दुखण्डा, (११) लताङ्गी, (१२) विषाणिका, (१३) चक्रा, (१४) शिखर र (१५) कर्कटाह्वा : यी पन्ध्र नाम कर्कटशृङ्गीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पचाउन कठिन, उष्णवीर्यको र वातविकार नाशक हुन्छ । यसले बाडुली, अतीसार, खोकी, दम, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

## अजयपाल (दन्ती)

**दन्ती शीघ्रा श्येनघण्टा निकुम्भी नागस्फोता दन्तिनी चोपचित्रा ।**
**भद्रा रूक्षा रोचनी चानुकूला निःशल्या स्याद्वक्रदन्ता विशल्या ॥१५८॥**
**मधुपुष्पैरण्डफला भद्राण्येरण्डपत्रिका ।**
**उदुम्बरदला चैव तरुणी चाणुरेवती ॥**
**विशोधनी च कुम्भी च ज्ञेया चाग्निकराह्वया ॥१५९॥**

**दन्ती कटूष्णा शूलामत्वद्दोषशमनी च सा ।**
**अर्शोव्रणाश्मरीशल्यशोधनी दीपनी परा ॥१६०॥**

(१) दन्ती, (२) शीघ्रा, (३) श्येनघण्टा, (४) निकुम्भी, (५) नागस्फोता, (६) दन्तिनी, (७) उपचित्रा, (८) भद्रा, (९) रूक्षा, (१०) रोचनी, (११) अनुकूला, (१२) निःशल्या, (१३) वक्रदन्ता, (१४) विशल्या, (१५) मधुपुष्पा, (१६) एरण्डफला, (१७) भद्राणी, (१८) एरण्डपत्रिका, (१९) उदुम्बरदला, (२०) तरुणी, (२१) अणुरेवती, (२२) विशोधनी र (२३) कुम्भी : यी तेईस नाम अजयपालका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा शूल र छालाका रोग शान्त पार्ने गुणको हुन्छ । यसले अल्काई, घाउखटिरा, पत्थरी, चिरफार शोधक र अत्यन्त दीपनी हुन्छ ।

### अजयपालविशेष (दन्तीविशेष)

**अन्या दन्ती केशरुहा विषभद्रा जयावहा ।**
**आवर्तकी वराङ्गी च जयाह्वा भद्रदन्तिका ॥१६१॥**
**अन्या दन्ती कटूष्णा च रेचनी कृमिहा परा ।**
**शूलकुष्ठामदोषघ्नी त्वगामयविनाशिनी ॥१६२॥**



दन्ती, केशरुहा, विषभद्रा, जयावहा, आवर्तकी, वराङ्गी, जयाह्वा र भद्रदन्तिका : यी अजयपालविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अजयपाल पिरो, उष्णवीर्यको, रेचनी र अत्यन्त कीरा नाशक हुन्छ । यो अजयपालले शूल, कुष्ठ र आमजन्य विकार तथा छालाका रोग नाश गर्दछ ।

### अजयपालको बीज

**रेचको जयपालश्च सारकस्तित्तिरीफलम् ।**
**दन्तीबीजं मलद्रावि ज्ञेयं स्याद्बीजरेचनी ॥१६३॥**
**कुम्भीबीजं कुन्तिनीबीजसञ्ज्ञं घण्टाबीजं दन्तिनीबीजमुक्तम् ।**
**बीजान्ताख्यं शोधनी चक्रदन्त्यो वेदेन्द्वाख्यं तन्निकुम्भ्याश्च बीजम् ॥१६४॥**
**जैपालः कटुरुष्णश्च कृमिहारी विरेचनः ।**
**दीपनः कफवातघ्नो जठरामयशोधनः ॥१६५॥**

(१) रेचक, (२) जयपाल, (३) सारक, (४) तित्तिरीफल, (५) दन्तीबीज, (६) मलद्रावि, (७) बीजरेचनी, (८) कुम्भीबीज, (९) कुन्तिनीबीज, (१०) घण्टाबीज, (११) दन्तिनीबीज, (१२) शोधनीबीज, (१३) चक्रदन्त्यबीज र (१४) निकुम्भीबीज : यी चौध (वेदेन्दु) नाम जयपालको

बीजका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, कीरा नाशक, विरेचन, दीपन, कफविकार नाशक, वातविकार नाशक तथा पेटका रोग प्रशोधक हुन्छ ।

### कालो निसोथ (श्यामात्रिवृत्)

**उक्ता त्रिवृन्मालविका मसूरा श्यामाऽर्धचन्द्रा विदला सुषेणी ।**
**कालिन्दिका सैव तु कालमेषी काली त्रिवेलाऽवनिचन्द्रसञ्ज्ञा ॥१६६॥**
**त्रिवृत्तिक्ता कटूष्णा च कृमिश्लेष्मोदरार्तिजित् ।**
**कुष्ठकण्डूव्रणान्हन्ति प्रशस्ता च विरेचने ॥१६७॥**

(१) त्रिवृत्, (२) मालविका, (३) मसूरा, (४) श्यामा, (५) अर्धचन्द्रा, (६) विदला, (७) सुषेणी, (८) कालिन्दिका, (९) कालमेषी, (१०) काली र (११) त्रिवेला : यी एघार (अवनिचन्द्र) नाम कालो निसोथका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो, उष्णवीर्यको तथा कीरा, कफविकार र पेटका रोग नाशक हुन्छ । यसले कुष्ठ, चिलाउने रोग र घाउखटिरा नाश गर्दछ तथा विरेचनका लागि उपयुक्त हुन्छ ।

### रातो निसोथ (रक्तत्रिवृत्)



**रक्ताऽन्यापि च कालिन्दी त्रिपुटा ताम्रपुष्पिका ।**
**कुलवर्णा मसूरी चाध्यमृता कासनाशिका ॥१६८॥**
**रक्ता त्रिवृद्रसे तिक्ता कटूष्णा रेचनी च सा ।**
**ग्रहणी मलविष्टम्भहारिणी हितकारिणी ॥१६९॥**

रक्तत्रिवृत्, कालिन्दी, त्रिपुटा, ताम्रपुष्पिका, कुलवर्णा, मसूरी, अमृता र कासनाशिका : यी रातो निशोधका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा तीतो, पिरो, उष्णवीर्यको र रेचनी हुन्छ । यसले ग्रहणी र कब्जियत हटाउँदछ तथा लाभ गर्दछ ।

### दालचिनी (त्वक्)

**त्वचं त्वग्वल्कलं भृङ्गं वराङ्गं मुखशोधनम् ।**
**शकलं सैंहलं वन्यं सुरसं रामवल्लभम् ॥१७०॥**
**उत्कटं बहुगन्धं च विज्जुलञ्च वनप्रियम् ।**
**लाटपर्णं गन्धवल्कं वरं शीतं वसुक्षिती ॥१७१॥**
**त्वचन्तु कटुकं शीतं कफकासविनाशनम् ।**

**शुक्रामशमनं चैव कण्ठशुद्धिकरं लघु ॥१७२॥**

(१) त्वच, (२) त्वग्वल्कल, (३) भृङ्ग, (४) वराङ्ग, (५) मुखशोधन, (६) शकल, (७) सैंहल, (८) वन्य, (९) सुरस, (१०) रामवल्लभ, (११) उत्कट, (१२) बहुगन्ध, (१३) विज्जुल, (१४) वनप्रिय, (१५) लाटपर्ण, (१६) गन्धवल्क, (१७) वर र (१८) शीत : यी अठार नाम दालचिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । दालचिनी पिरो, शीतवीर्यको तथा कफविकार र खोकी नाशक हुन्छ । यसले वीर्यदोष नाश गर्नुका साथै घाँटी पनि सफा गर्दछ । यो पचाउन हलुका हुन्छ ।

### तेजपात (तमालपत्र)

**पत्रं तमालपत्रञ्च पत्रकं छदनं दलम् ।**
**पलाशमंशुकं वासस्तापसं सुकुमारकम् ॥१७३॥**
**वस्त्रं तमालकं रामं गोपनं वसनं तथा ।**
**तमालं सुरभिगन्धं ज्ञेयं सप्तदशाह्वयम् ॥१७४॥**
**पत्रकं लघु तिक्तोष्णं कफवातविषापहम् ।**
**वस्तिकण्डूतिदोषघ्नं मुखमस्तकशोधनम् ॥१७५॥**

(१) पत्र, (२) तमालपत्र, (३) पत्रक, (४) छदन, (५) दल, (६) पलाश, (७) अंशुक, (८) वास, (९) तापस, (१०) सुकुमारक, (११) वस्त्र, (१२) तमालक, (१३) राम, (१४) गोपन, (१५) वसन, (१६) तमाल र (१७) सुरभिगन्ध : यी सत्र नाम तेजपातका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, तीतो, उष्णवीर्यको तथा कफविकार, वातविकार र विषविकार नाशक हुन्छ । यसले तल्लो पेट र चिलाउने रोगजन्य विकारलाई नाश गर्दछ तथा मुख र टाउकोलाई सफा गर्दछ ।

### नागकेशर

**किञ्जल्कं कनकाह्वं च केशरं नागकेशरम् ।**
**चाम्पेयं नागकिञ्जल्कं नागीयं काञ्चनं तथा ॥१७६॥**
**सुवर्णं हेमकिञ्जल्कं रुक्मं हेमं च पिञ्जरम् ।**
**फणिपुन्नागयोगादि केसरं पञ्चभूह्वयम् ॥१७७॥**
**नागकेसरमल्पोष्णं लघु तिक्तं कफापहम् ।**
**बस्तिवातामयघ्नं च कण्ठशीर्षरुजापहम् ॥१७८॥**

(१) किञ्जल्क, (२) कनकाह्व, (३) केशर, (४) नागकेशर, (५) चाम्पेय, (६) नागकिञ्जल्क, (७) नागीय, (८) काञ्चन, (९) सुवर्ण, (१०) हेमकिञ्जल्क, (११) रुक्म, (१२) हेम, (१३) पिञ्जर, (१४) फणिकेसर र (१५) पुन्नागकेसर : यी पन्ध्र नाम नागकेशरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

यो केही उष्णवीर्यको, पचाउन सहज, तीतो र कफविकार नाशक हुन्छ । यसले तल्लो पेटका रोग, वातविकार, घाँटीका रोग र टाउकाका रोग निको पार्दछ ।

**तवक्षीर**

**तवक्षीरं पयःक्षीरं यवजं गवयोद्भवम् ।**
**अन्यद्गोधूमजं चान्यत् पिष्टिकातण्डुलोद्भवम् ॥१७९॥**
**अन्यच्च तालसम्भूतं तालक्षीरादिनामकम् ।**
**वनगोक्षीरजं श्रेष्ठमभावेऽन्यदुदीरितम् ॥१८०॥**
**तवक्षीरं तु मधुरं शिशिरं दाहपित्तनुत् ।**
**क्षयकासकफश्वासनाशनं चास्रदोषनुत् ॥१८१॥**

तवक्षीर, पयःक्षी, यवज, र गवयोद्भव : यी तवक्षीरका संस्कृत पर्यायवाची नामहरू हुन् । अन्य गोधूमज, पिष्टिकातण्डुलोद्भव, तालसम्भूत र तालक्षीर आदि जात पनि हुन्छन् । वनमा पाइने तवक्षीर उत्तम हुन्छ, त्यो नपाउँदा अन्य तवक्षीर प्रयोग गर्नू । तवक्षीर गुलियो, शीतवीर्यको तथा डाह र पित्तविकार नाशक हुन्छ । यसले क्षयरोग, खोकी, कफविकार, दम र रक्तविकार पनि नाश गर्दछ ।



**सुनपाती वा गोब्रेसल्लो (तालीसपत्र)**

**तालीसपत्रं तालीसं पत्राख्यं च शुकोदरम् ।**
**धात्रीपत्रं चार्कवेधं करिपत्रं घनच्छदम् ॥१८२॥**
**नीलं नीलाम्बरं तालं तालीपत्रं तलाह्वयम् ।**
**तालीसपत्रकस्येति नामान्याहुस्त्रयोदश ॥१८३॥**
**तालीसपत्रं तिक्तोष्णं मधुरं कफवातनुत् ।**
**कासहिक्काक्षयश्वासच्छर्दिदोषविनाशकृत् ॥१८४॥**

(१) तालीसपत्र, (२) तालीस, (३) पत्राख्य, (४) शुकोदर, (५) धात्रीपत्र, (६) अर्कवेध, (७) करिपत्र, (८) घनच्छद, (९) नील, (१०) नीलाम्बर, (११) ताल, (१२) तालीपत्र र (१३) तलाह्वय (तल र यसका पर्यायवाची शब्द) : यी तेह्र नाम तालीसपत्रका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको, गुलियो तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले खोकी, बाडुली, क्षयरोग, दम र वाकवाकीका दोषलाई पनि नाश गर्दछ ।

### वंशलोचन (वंशरोचना)

**स्याद्वंशरोचना वांशी तुङ्गक्षीरी तुगा शुभा ।**
**त्वक्क्षीरी वंशगा शुक्रा वंशक्षीरी च वैणवी ॥१८५॥**
**त्वक्सारा कर्मरी श्वेता वंशकर्पूररोचना ।**
**तुङ्गा रोचनिका पिङ्गा नवेन्दुर्वंशशर्करा ॥१८६॥**
**स्याद्वंशरोचना रूक्षा कषाया मधुरा हिमा ।**
**रक्तशुद्धिकरी तापपित्तोद्रेकहरा शुभा ॥१८७॥**

(१) वंशरोचना, (२) वांशी, (३) तुङ्गक्षीरी, (४) तुगा, (५) शुभा, (६) त्वक्क्षीरी, (७) वंशगा, (८) शुक्रा, (९) वंशक्षीरी, (१०) वैणवी, (११) त्वक्सारा, (१२) कर्मरी, (१३) श्वेता, (१४) वंशकर्पूर, (१५) रोचना, (१६) तुङ्गा, (१७) रोचनिका, (१८) पिङ्गा र (१९) वंशशर्करा : यी उन्नाईस (नवेन्दु) नाम वंशलोचनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुखो, टर्रो, गुलियो, शीतवीर्यको, रक्त प्रशोधक तथा डाह र पित्तविकार नाशक अनि शुभ हुन्छ ।

### तवक्षीर आदिको विवेचना

**तवक्षीरं यवक्षीरं क्षीरे जातं गुणोत्तरम् ।**
**वंशक्षीरीसमं प्रोक्तं तदभावेऽन्यवस्तुजम् ॥१८८॥**

यवक्षीर वा क्षीरबाट तयार हुने तवक्षीर उत्तम गुणको र वंशलोचना सरहको हुन्छ भनिएको छ । तर पनि वंशलोचन नपाउँदा मात्र अन्य तवक्षीर आदिको प्रयोग गर्नू ।

### गवयक्षीरज

**गवयक्षीरजं क्षीरं सुस्निग्धं शीतलं लघु ।**
**सुगन्धि द्रावकं शुभ्रमन्यत्स्वल्पगुणं स्मृतम् ॥१८९॥**

नीलगाईको दूधबाट बन्ने तवक्षीर चिल्लो, शीतवीर्यको र पचाउन सहज हुन्छ । यो बास्ना आउने, बाल्ने गुणको र सेतो हुन्छ । अरु तवक्षीर कम गुणस्तरीय हुन्छन् ।

### मजिठो (मञ्जिष्ठा)

**मञ्जिष्ठा हरिणी रक्ता गौरी योजनवल्लिका ।**
**समङ्गा विकसा पद्मा रोहिणी कालमेषिका ॥१९०॥**

भण्डी चित्रलता चित्रा चित्राङ्गी जननी च सा
मण्डूकपर्णी विजया मञ्जूषा रक्तयष्टिका ॥१९१॥
क्षेत्रिणी चैव रागाढ्या भण्डीरी कालभाण्डिका ।
अरुणा ज्वरहन्त्री च छद्मा नागकुमारिका ॥१९२॥
भाण्डीरलतिका चैव रागाङ्गी वस्त्रभूषणा ।
त्रिंशाह्वया तथा प्रोक्ता मञ्जिष्ठा च भिषग्वरैः ॥१९३॥
मञ्जिष्ठा मधुरा स्वादे कषायोष्णा गुरुस्तथा ।
व्रणमेहज्वरश्लेष्मविषनेत्रामयापहा ॥१९४॥
चोलश्च योजनी कौञ्ची सिंहली च चतुर्विधा ।
मञ्जिष्ठा चैव सा प्रोक्ता विलोमे चोत्तमोत्तमा ॥१९५॥

(१) मञ्जिष्ठा, (२) हरिणी, (३) रक्ता, (४) गौरी, (५) योजनवल्लिका, (६) समङ्गा, (७) विकसा, (८) पद्मा, (९) रोहिणी, (१०) कालमेषिका, (११) भण्डी, (१२) चित्रलता, (१३) चित्रा, (१४) चित्राङ्गी, (१५) जननी, (१६) मण्डूकपर्णी, (१७) विजया, (१८) मञ्जूषा, (१९) रक्तयष्टिका, (२०) क्षेत्रिणी, (२१) रागाढ्या, (२२) भण्डीरी, (२३) कालभाण्डिका, (२४) अरुणा, (२५) ज्वरहन्त्री, (२६) छद्मा, (२७) नागकुमारिका, (२८) भाण्डीरलतिका, (२९) रागाङ्गी र (३०) वस्त्रभूषणा : यी तीस नाम विज्ञ वैद्यहरूबाट बताइएका मजिठोका संस्कृत पर्यायवाची नामहरू हुन् । मजिठोको स्वाद गुलियो र टर्रो हुन्छ । यो उष्णवीर्यको, पचाउन कठिन तथा घाउखटिरा, प्रमेह, ज्वर, कफविकार, विषविकार र आँखाका रोग नाशक हुन्छ । चोल, योजनी, कौञ्ची र सिंहली गरी चार प्रकारका मजिठा हुन्छन् । यी उल्टो क्रममा क्रमशः उत्तम हुन्छन् ।



नोट : (१) चोल : एक प्राचीन देश । यो कावेरी नदीको किनारमा थियो र वर्तमान मैसूर राज्यको दक्षिण भाग पनि यसमा मिलेको थियो । पछि यसैलाई कर्णाटक भन्न थालियो । (२) सिंहली : श्रीलङ्काली । यसैगरी योजन र कौञ्च पनि प्राचीन कालका स्थान विशेषका नाम हुन सक्दछन् ।

## हलेदो (हरिद्रा)

हरिद्रा हरिद्रञ्जनी स्वर्णवर्णा सुवर्णा शिवा वर्णिनी दीर्घरागा ।
हरिद्री च पीता वराङ्गी च गौरी जनिष्ठा वरा वर्णदात्री पवित्रा ॥१९६॥
हरिता रजनीनाम्नी विषघ्नी वरवर्णिनी ।
पिङ्गला वर्णनी चैव मङ्गल्या मङ्गला च सा ॥१९७॥
लक्ष्मी भद्रा शिफा शोफा शोभना सुभगाह्वया ।
श्यामा जयन्तिका द्वे च त्रिंशन्नामविलासिनी ॥१९८॥
हरिद्रा कटुतिक्तोष्णा कफवातास्रकुष्ठनुत् ।

**मेहकण्डूव्रणान् हन्ति देहवर्णविधायिनी ॥१९९॥**

(१) हरिद्रा, (२) हरित्-रञ्जनी, (३) स्वर्णवर्णा, (४) सुवर्णा, (५) शिवा, (६) वर्णिनी, (७) दीर्घरागा, (८) हरिद्री, (९) पीता, (१०) वराङ्गी, (११) गौरी, (१२) जनिष्ठा, (१३) वरा, (१४) वर्णदात्री, (१५) पवित्रा, (१६) हरिता, (१७) रजनी र यसका पर्यायवाची नाम, (१८) विषघ्नी, (१९) वरवर्णिनी, (२०) पिङ्गला, (२१) वर्णनी, (२२) मङ्गल्या, (२३) मङ्गला, (२४) लक्ष्मी, (२५) भद्रा, (२६) शिफा, (२७) शोफा, (२८) शोभना, (२९) सुभगाह्वया, (३०) श्यामा, (३१) जयन्तिका र (३२) विलासिनी : यी बत्तीस नाम हलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । हलेदो पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार, वातविकार, रक्तविकार र कुष्ठ नाशक हुन्छ । यसले प्रमेह, चिलाउने रोग र घाउखटिरा नाश गर्दछ तथा शरीरको वर्णलाई सुन्दर बनाउँदछ ।

### चुत्रो (दारुहरिद्रा)

**अन्या दारुहरिद्रा च दार्वी पीतद्रु पीतिका ।**
**कालेयकं पीतदारु स्थिरराग च कामिनी ॥२००॥**
**कटङ्कटेरी पर्जन्या पीता दारुनिशा स्मृता ।**
**कालीयकं कामवती दारुपीता पचम्पचा ॥**
**स्यात् कर्कटकिनी ज्ञेया प्रोक्ता सप्तदशाह्वया ॥२०१॥**
**तिक्ता दारुहरिद्रा तु कटूष्णा व्रणमेहनुत् ।**
**कण्डूविसर्पत्वग्दोषविषकर्णाक्षिदोषनुत् ॥२०२॥**

(१) दारुहरिद्रा, (२) दार्वी, (३) पीतद्रु, (४) पीतिका, (५) कालेयक, (६) पीतदारु, (७) स्थिरराग, (८) कामिनी, (९) कटङ्कटेरी, (१०) पर्जन्या, (११) पीता, (१२) दारुनिशा, (१३) कालीयक, (१४) कामवती, (१५) दारुपीता, (१६) पचम्पचा र (१७) कर्कटकिनी : यी सत्र नाम चुत्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । चुत्रो तीतो, पिरो, उष्णवीर्यको तथा घाउखटिरा र प्रमेह नाशक हुन्छ । यसले चिलाउने रोग, विसर्प रोग, छालाका रोग, विषविकार, कानका रोग र आँखाका रोग निको पार्दछ ।

### लाहा (लाक्षा)

**लाक्षा खदिरका रक्ता रङ्गमाता पलङ्कषा ।**
**जतु च कृमिजा चैव द्रुमव्याधिरलक्तकः ॥२०३॥**
**पलाशी मुद्रणी दीप्तिर्जन्तुका गन्धमादनी ।**
**नीला द्रवरसा चैव पित्तारिर्मुनिभूह्वया ॥२०४॥**

**लाक्षा तिक्तकषाया स्यात् श्लेष्मपित्तास्रदोषनुत् ।**
**विषरक्त प्रशमनी विषमज्वरनाशनी ॥२०५॥**

(१) लाक्षा, (२) खदिरका, (३) रक्ता, (४) रङ्गमाता, (५) पलङ्कषा, (६) जतु, (७) कृमिजा, (८) द्रुमव्याधि, (९) अलक्तक, (१०) पलाशी, (११) मुद्रणी, (१२) दीप्ति, (१३) जन्तुका, (१४) गन्धमादनी, (१५) नीला, (१६) द्रवरसा र (१७) पित्तारि : यी सत्र (मुनिभू) नाम लाहाका संस्कृत पर्यायवाची नामहरू हुन् । लाहा तीतो, टर्रो तथा कफविकार, पित्तविकार र पीडा नाशक हुन्छ । यसले विषविकार र रक्तविकारलाई शान्त पार्नुका साथै विषमज्वरलाई नाश गर्दछ ।

**माहुर (अलक्तक)**

**अलक्तको जन्तुरसो रागो निर्भर्त्सनस्तथा ।**
**जननी जन्तुकारी च सन्धर्षा चक्रमर्दिनी ॥२०६॥**
**अलक्तकः सुतिक्तोष्णः कफवातामयापहः ।**
**कण्ठरुक्शमनो रुच्यो व्रणदोषार्तिनाशनः ॥२०७॥**

अलक्तक, जन्तुरस, राग, निर्भर्त्सन, जननी, जन्तुकारी, सन्धर्षा र चक्रमर्दिनी : यी माहुरका संस्कृत पर्यायवाची नामहरू हुन् । माहुर तीतो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले घाँटीका रोग शान्त पार्दछ, रुची जगाउँदछ र घाउखटिराको पीडा नाश गर्दछ ।

**सेतो लोध (लोध्र)**

**लोध्रो रोध्रो भिल्लतरुश्चिल्लकः काण्डकीलकः ।**
**तिरीटी लोध्रको वृक्षः शम्बरो हस्तिरोध्रकः ॥२०८॥**
**तिलकः काण्डहीनश्च शावरो हेमपुष्पकः ।**
**भिल्ली शाबरकश्चैव ज्ञेयः पञ्चदशाह्वयः ॥२०९॥**

(१) लोध्र, (२) रोध्र, (३) भिल्लतरु, (४) चिल्लक, (५) काण्डकीलक, (६) तिरीटी, (७) लोध्रकवृक्ष, (८) शम्बर, (९) हस्तिरोध्रक, (१०) तिलक (तिल्वक), (११) काण्डहीन, (१२) शावर, (१३) हेमपुष्पक, (१४) भिल्ली र (१५) शाबरक : यी पन्ध्र नाम सेतो लोधका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**रातो लोध (क्रमुक)**

**क्रमुकः पट्टिकारोध्रो वल्करोध्रो बृहद्दलः ।**

**जीर्णबुध्नो बृहद्वल्को जीर्णपत्रोऽक्षिभेषजः ॥२१०॥**
**शावरः श्वेतरोध्रश्च मार्जनो बहलत्वचः ।**
**पट्टी लाक्षाप्रसादश्च वल्कलो बाणभूह्वयः ॥२११॥**

(१) क्रमुक, (२) पट्टिकारोध्र, (३) वल्करोध्र, (४) बृहत् दल, (५) जीर्णबुध्न, (६) बृहत् वल्क, (७) जीर्णपत्र, (८) अक्षिभेषज, (९) शावर, (१०) श्वेतरोध्र, (११) मार्जन, (१२) बहलत्वच, (१३) पट्टी, (१४) लाक्षाप्रसाद र (१५) वल्कल : यी पन्ध्र (बाणभू) नाम रातो लोधका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**दुई थरी लोधका गुण (लोध्रद्वयगुण)**

**लोध्रद्वयं कषायं स्यात्शीतं वातकफास्रनुत् ।**
**चक्षुष्यं विषहृत्तत्र विशिष्टो वल्करोध्रकः ॥२१२॥**

दुवै थरी लोध टर्रा, शीतवीर्यका तथा वातविकार, कफविकार र रक्तविकार नाशक हुन्छन् । यी आँखाका लागि फाइदाजनक र विषविकार नाशक हुन्छन् । रातो लोध बढी गुनिलो हुन्छ ।



**धयैँरो (धातकी)**

**धातकी वह्निपुष्पी च ताम्रपुष्पी च दाहनी ।**
**अग्निज्वाला सुभिक्षा च पार्वती बहुपुष्पिका ॥२१३॥**
**कुमुदा सीधुपुष्पी च कुञ्जरा मद्यवासिनी ।**
**गुच्छसङ्गादिपुष्पान्ता ज्ञेया सा लोध्रपुष्पिणी ॥**
**तीव्रज्वाला वह्निशिखा मद्यपुष्प च विंशतिः (मद्यपुष्पीन्द्रसम्मिता) ॥२१४॥**
**धातकी कटुरुष्णा च मदकृद्विषनाशनी ।**
**प्रवाहिकाऽतिसारघ्नी विसर्पव्रणनाशिनी ॥२१५॥**

(१) धातकी, (२) वह्निपुष्पी, (३) ताम्रपुष्पी, (४) दाहनी, (५) अग्निज्वाला, (६) सुभिक्षा, (७) पार्वती, (८) बहुपुष्पिका, (९) कुमुदा, (१०) सीधुपुष्पी, (११) कुञ्जरा, (१२) मद्यवासिनी, (१३) गुच्छपुष्पा, (१४) सङ्गपुष्पा, (१५) लोध्रपुष्पिणी, (१६) तीव्रज्वाला, (१७) वह्निशिखा र (१८) मद्यपुष्प : यी अठार नाम धयैँरोका (बीस वा चौध भनिएको) संस्कृत पर्यायवाची नामहरू हुन् । धयैँरो पिरो, उष्णवीर्यको, नसालु र विषविकार (वा नसाजन्य विषविकार) नाशक हुन्छ । यो प्रवाहिका, अतिसार, विसर्प र घाउखटिरा नाशक हुन्छ ।

## समुद्रफल

**समुद्रनाम प्रथमं पश्चात् फलमुदाहरेत् ।**
**समुद्रफलमित्यादि नाम वाच्यं भिषग्वरैः ॥२१६॥**
**फलं समुद्रस्य कटूष्णकारि वातापहं भूतनिरोधकारि ।**
**त्रिदोषदावानलदोषहारि कफामयभ्रान्तिविरोधकारि ॥२१७॥**

समुद्र र यसका पर्यायवाची शब्दका पछाडि फल शब्द जोडिएका शब्दले समुद्रफललाई बुझाउँदछ भनी विज्ञ-वैद्यहरूले बताएका छन् । समुद्रफल पिरो, उष्णवीर्यको, वातविकार नाशक र भूतबाधा रोक्ने गुणको हुन्छ । यसले त्रिदोष र पोलेको असर नाश गर्दछ । कफजन्य रोग र भ्रमको यो विरोधी हुन्छ ।

## निर्बिसी (निर्विषा)

**निर्विषाऽपविषा चैव विविषा विषहा परा ।**
**विषहन्त्री विषाभावा ह्यविषा विषवैरिणी ॥२१८॥**
**निर्विषा तु कटुः शीता कफवातास्रदोषनुत् ।**
**अनेकविषदोषघ्नी व्रणसंरोपणी च सा ॥२१९॥**

निर्विषा, अपविषा, विविषा, विषहा, विषहन्त्री, विषाभावा, अविषा र विषवैरिणी : यी नाम निर्बिसीका संस्कृत पर्यायवाची नामहरू हुन् । निर्बिसी पिरो, शीतवीर्यको तथा कफविकार, वातविकार र रक्तविकार नाशक हुन्छ । यो निर्बिसीले अनेक थरी विषविकार नाश गर्दछ तथा घाउ भर्दछ ।

## विष

**विषमाहेयममृतं गरलं दारदं गरम् ।**
**कालकूटं कालकूटे हरिद्रं रक्तशृङ्गकम् ॥२२०॥**
**नीलञ्च गरदं क्ष्वेडो घोरं हालाहलं हरम् ।**
**मरं हलाहलं शृङ्गी भूगरं चैकविंशतिः ॥२२१॥**

(१) विष, (२) आहेय, (३) अमृत, (४) गरल, (५) दारद, (६) गर, (७) कालकूट, (८) अर्को थरी कालकूट, (९) हरिद्र, (१०) रक्तशृङ्गक, (११) नील, (१२) गरद, (१३) क्ष्वेड, (१४) घोर, (१५) हालाहल, (१६) हर, (१७) मर, (१८) हलाहल, (१९) शृङ्गी र (२०) भूगर : यी एक्काईस थरी विषका संस्कृत नामहरू हुन् ।

## वत्सनाभ (वत्सनाभि)

**अमृतं स्यात् वत्सनाभो विषमुग्रं महौषधम् ।**
**गरलं मरणं नागं स्तोककं प्राणहारकम् ॥**
**गरलं स्थावरादि स्यात् प्रोक्तं चैकादशाह्वयम् ॥२२२**
**वत्सनाभोऽतिमधुरः सोष्णो वातकफापहः ।**
**कण्ठरुक्सन्निपातघ्नः पित्तसन्तापकारकः ॥२२३॥**

(१) अमृत, (२) वत्सनाभ, (३) विष, (४) उग्र, (५) महौषध, (६) गरल, (७) मरण, (८) नाग, (९) स्तोकक, (१०) प्राणहारक र (११) गरल : यी एघार नाम वत्सनाभ प्रवृत्ति स्थावर (निर्जीव) विषका संस्कृत पर्यायवाची नामहरू हुन् । वत्सनाभ अति गुलियो, उष्णवीर्यको तथा वातविकार र कपविकार नाशक हुन्छ । यसले घाँटीका रोग र सन्निपातलाई नाश गर्दछ तथा पित्तविकार र डाह बढाउँदछ ।

## स्थावरविष

**स्थावरे विषजातीनां श्रेष्ठौ नागोग्रशृङ्गकौ ।**
**नागो देहकरे श्रेष्ठो लोहे चैवोग्रशृङ्गकः ॥२२४॥**
**विषस्याष्टादशभिदाश्चतुर्वर्गाश्च यत् पृथक् ।**
**तदत्र नोक्तमस्माभिर्ग्रन्थगौरवभीरुभिः ॥२२५॥**

स्थावर विषमध्येमा नाग र उग्रशृङ्गक नामका विष उत्तम हुन्छन् । नाग शरीरका लागि र उग्रशृङ्गक फलाम आदि धातु प्रशोधनका लागि उत्तम हुन्छ । विषका अन्य अठार जात र चार वर्गका विषयमा ग्रन्थ ठूलो हुने डरले यहाँ वर्णन गरिएन ।

## कपुरहलेदो (शटी)

**सटी (शटी) सठीपलाश (शटीपलाश)श्च षड्ग्रन्था सुव्रता वधूः ।**
**सुगन्धमूला गन्धाली शटिका च पलाशिका ॥२२६॥**
**सुभद्रा च तृणी दूर्वा गन्धा पृथुपलाशिका ।**
**सौम्या हिमोद्भवा गन्धवधूर्नागेन्दुसम्मिता ॥२२७॥**
**सटी सतिक्ताम्लरसा लघूष्णा रुचिप्रदा च ज्वरहारिणी च ।**
**कफास्रकण्डूव्रणदोषहन्त्री वक्त्रामयध्वंसकरी च सोक्ता ॥२२८॥**

(१) सटी (शटी), (२) सठीपलाश (शटीपलाश), (३) षड्ग्रन्था, (४) सुव्रता, (५) वधू, (६) सुगन्धमूला, (७) गन्धाली, (८) शटिका, (९) पलाशिका, (१०) सुभद्रा, (११) तृणी, (१२) दूर्वा, (१३) गन्धा, (१४) पृथुपलाशिका, (१५) सौम्या, (१६) हिमोद्भवा र (१७) गन्धवधू : यी सत्र (नागेन्दु) नाम कपुरहलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । कपुरहलेदो तीतो, अमिलो, पचाउन सहज, उष्णवीर्यको, रुचिकर र जरो नाशक हुन्छ । यसले कफविकार, रक्तविकार, चिलाउने रोग, घाउखटिरा र मुखका रोग नाश गर्दछ ।

## कपुरहलेदोविशेष (शटीभेद)

**अन्या तु गन्धपत्रा स्यात् स्थूलास्या तिक्तकन्दका ।**
**वनजा शटिका वन्या स्तवक्षीर्येकपत्रिका ॥२२९॥**
**गन्धपीता पलाशान्ता गन्धाढ्या गन्धपत्रिका ।**
**दीर्घपत्रा गन्धनिशा वेदभूह्वा सुपाकिनी ॥२३०॥**
**गन्धपत्रा कटुः स्वादुस्तीक्ष्णोष्णा कफवातजित् ।**
**कासच्छर्दिज्वरान् हन्ति पित्तकोपं करोति च ॥२३१॥**

(१) गन्धपत्रा, (२) स्थूलास्या, (३) तिक्तकन्दका, (४) वनजा, (५) शटिका, (६) वन्या, (७) स्तवक्षीरी, (८) एकपत्रिका, (९) गन्धपीता, (१०) पलाशान्ता, (११) गन्धाढ्या, (१२) गन्धपत्रिका, (१३) दीर्घपत्रा, (१४) गन्धनिशा र (१५) सुपाकिनी : यी पन्ध्र (चौध भनिएको) नाम कपुरहलेदोविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, गुलियो, तिक्खर, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले खोकी, वाकवाकी र जरो नाश गर्दछ तथा पित्तविकार बढाउँदछ ।

## समुद्रफेन

**समुद्रफेनं फेनश्च वार्धिफेनं पयोधिजम् ।**
**सुफेनमब्धिहिण्डीरं सामुद्रं सप्तनामकम् ॥२३२॥**
**समुद्रफेनं शिशिरं कषायं नेत्ररोगनुत् ।**
**कफकण्ठामयघ्नञ्च रुचिकृत् कर्णरोगहृत् ॥२३३॥**

(१) समुद्रफेन, (२) फेन, (३) वार्धिफेन, (४) पयोधिज, (५) सुफेन, (६) अब्धिहिण्डीर र (७) सामुद्र : यी सात नाम समुद्रफेनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, टर्रो तथा आँखाका रोग, कफविकार र घाँटीका रोग नाशक हुन्छ । यसले रुची जगाउँदछ र कानका रोग पनि नाश गर्दछ ।

### अफिम (अहिफेन)

**अफेनं खस्खसरसो निफेनं चाहिफेनकम् ।**
**अफेनं सन्निपातघ्नं वृष्यं बल्यं च मोहदम् ॥२३४॥**

अफेन, खस्खसरस, निफेन र अहिफेनक : यी अफिमका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिमले सन्निपात रोग नाश गर्दछ । यसले वीर्य, बल र मोह (नसा) दिन्छ ।

### अफिमका जात र गुण (अहिफेनभेद, गुण)

**चतुर्विधमफेनं स्यात् जारणं मारणं तथा ।**
**धारणं सारणं चैव क्रमाद्वक्ष्ये तु लक्षणम् ॥२३५॥**
**श्वेतञ्च जारणं प्रोक्तं कृष्णवर्णञ्च मारणम् ।**
**धारणं पीतवर्णन्तु कर्बुरं सारणं तथा ॥२३६॥**
**जारणं जारयेदन्नं मारणं मृत्युदायकम् ।**
**धारणञ्च वयःस्तम्भं सारणं मलसारणम् ॥२३७॥**



जारण, मारण, धारण र सारण गरी अफिम चार थरीको हुन्छ । यिनको लक्षण क्रमशः बताउँदछु । सेतोलाई जारण, कालोलाई मारण, पहेँलोलाई धारण र छिरबिरे वा रङ्गीचङ्गीलाई सारण भनिन्छ । जारणले अन्नलाई पचाउँदछ, मारणले ज्यान लिन्छ, धारणले उमेरलाई स्थिर राख्दछ र सारणले दिसालाई तलतिर सार्दछ ।

### सुहागा (टङ्कण)

**टङ्कणष्टङ्कणक्षारो रङ्गक्षारो रसाधिकः ।**
**लोहद्रावी रसघ्नश्च सुभगो रङ्गदश्च सः ॥२३८॥**
**वर्त्तूलः कनकक्षारो मलिनो धातुवल्लभम् ।**
**त्रयोदशाह्वयश्चात्र कथितं तु भिषग्वरैः ॥२३९॥**
**कथितष्टङ्कणक्षारः कटूष्णः कफनाशनः ।**
**स्थावरादिविषघ्नश्च कासश्वासापहारकः ॥२४०॥**

(१) टङ्कण, (२) टङ्कणक्षार, (३) रङ्ग, (४) क्षार, (५) रसाधिक, (६) लोहद्रावी, (७) रसघ्न, (८) सुभग, (९) रङ्गद, (१०) वर्तुल, (११) कनकक्षार, (१२) मलिन र (१३) धातुवल्लभ : यी तेह्र नामलाई विज्ञ वैद्यहरूले सुहागाका संस्कृत पर्यायवाची नामहरू हुन् भनेका छन् । सुहागा पिरो, उष्णवीर्यको

र कफनाशक हुन्छ । यसले स्थावर आदि विषविकार तथा खोकी र दम नाश गर्दछ ।

## सेतो सुहागा (श्वेतटङ्कण)

**द्वितीयं टङ्कणं श्वेतं श्वेतकं श्वेतटङ्कणम् ।**
**लोहशुद्धिकरं सिन्धुमालतीतीरसम्भवम् ॥**
**शिवं च द्रावकं प्रोक्तं शितक्षारं दशाभिधम् ॥२४१॥**
**सुश्वेतं टङ्कणं स्निग्धं कटूष्णं कफवातनुत् ।**
**आमक्षयापहृच्छ्वासविषकासमलापहम् ॥२४२॥**

(१) टङ्कण, (२) श्वेत, (३) श्वेतक, (४) श्वेतटङ्कण, (५) लोहशुद्धिकर, (६) सिन्धुतीरसम्भव, (७) मालतीतीरसम्भव, (८) शिव, (९) द्रावक र (१०) शितक्षार : यी दश नाम सेतो सुहागाका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो सुहागा चिल्लो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले आमविकार, क्षयरोग, दम, विषविकार, खोकी र शरीरको मल नाश गर्दछ ।

## साकुरुण्ड

**साकुरुण्डो ग्रन्थिफलो विकटो वस्त्रभूषणः ।**

**कुरुण्डः कर्बुरफलः सकुरुण्डश्च सप्तधा ॥२४३॥**
**साकुरुण्डः कषायश्च रुचिकृद्दीपनः परः ।**
**श्लेष्मवातापहारी च वस्त्ररञ्जनको लघुः ॥२४४॥**

(१) साकुरुण्ड, (२) ग्रन्थिफल, (३) विकट, (४) वस्त्रभूषण, (५) कुरुण्ड, (६) कर्बुरफल र (७) सकुरुण्ड : यी सात नाम साकुरुण्डका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, रुचिकर, अत्यन्त दीपनी तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले कपडा पनि रङ्गाइन्छ । यो पचाउन सहज हुन्छ ।

## हिमावली

**हिमावली च हृद्धात्री कुष्ठघ्नो गारकुष्ठकः ।**
**अङ्गारग्रन्थिको ग्रन्थी ग्रन्थिलो मुनिसञ्ज्ञकः ॥२४५॥**
**हिमावली सरा तिक्ता प्लीहगुल्मोदरापहा ।**
**क्रिमिकुष्ठगुदात्युग्रखर्जूकण्डूतिहारिणी ॥२४६॥**

(१) हिमावली, (२) हृद्धात्री, (३) कुष्ठघ्न, (४) गारकुष्ठक, (५) अङ्गारग्रन्थिक, (६) ग्रन्थी र (७)

ग्रान्थिल : यी सात नाम हिमावलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मलमूत्र तलातिर सार्ने, तीतो तथा फियोका रोग, गुल्म र पेटका रोग नाशक हुन्छ । यसले कीरा, कुष्ठ, मलद्वारका रोग, कडाखालको लुतो र अन्य चिलाउने रोग नाश गर्दछ ।

**हात्तीको मद (हस्तिमद)**

**हस्तिमदो गजमदो गजदानं मदस्तथा ।**
**कुम्भिमदो दन्तिमदो दानं द्वीपिमदोऽष्टधा ॥२४७॥**
**स्निग्धो हस्तिमदस्तिक्तः केश्योऽपस्मारनाशनः ।**
**विषहृत् कुष्ठकण्डूतिव्रणदद्रुविसर्पनुत् ॥२४८॥**

(१) हस्तिमद, (२) गजमद, (३) गजदान, (४) मद, (५) कुम्भिमद, (६) दन्तिमद, (७) दान र (८) द्वीपिमद : यी आठ नाम हात्तीको मदका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चिल्लो, तीतो, कपालका लागि हितकर र छारेरोग नाशक हुन्छ । यसले विषविकार, कुष्ठ, चिलाउने रोग, घाउखटिरा, दाद र विसर्प ठिक गर्दछ ।

**सज्जिखार (स्वर्जिक्षार)**



**स्वर्जिक्षारः स्वर्जिकश्च क्षारस्वर्जी सुखार्जिकः ।**
**सुवर्चिकः सुवर्ची च सुखवर्चा मुनिह्वयः ॥२४९॥**
**स्वर्जिकः कटुरुष्णश्च तीक्ष्णो वातकफार्तिनुत् ।**
**गुल्माध्मानक्रिमीन्हन्ति व्रणजाठरदोषनुत् ॥२५०॥**

(१) स्वर्जिक्षार, (२) स्वर्जिक, (३) क्षारस्वर्जी, (४) सुखार्जिक, (५) सुवर्चिक, (६) सुवर्ची र (७) सुखवर्चा : यी सात नाम सज्जिखारका संस्कृत पर्यायवाची नामहरू हुन् । सज्जिखार पिरो, उष्णवीर्यको, तिक्खर तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले गुल्म, आध्मान, कीरा, घाउखटिरा र पेटका रोग नाश गर्दछ ।

**लवणक्षार**

**लवणारं लवणोत्थं लवणासुरजं लवणभेदश्च ।**
**जलजं लवणक्षारं लवणं च क्षारलवणम् ॥२५१॥**
**लोणारक्षारमत्युष्णं तीक्ष्णं पित्तप्रवृद्धिदम् ।**
**क्षारं लवणमीषच्च वातगुल्मादिदोषनुत् ॥२५२॥**

लवणार, लवणोत्थ, लवणासुरज, लवणभेद, जलज, लवणक्षार, लवण र क्षारलवण : यी लवणक्षारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति उष्णवीर्यको, तिक्खर, पित्तविकार बढाउने, हल्का नुनिलो तथा वातविकार र गुल्म नाशक हुन्छ ।

### हीरा-क्षार (वज्रकक्षार)

**वज्रकं वज्रकक्षारं क्षारश्रेष्ठं विदारकम् ।**
**सारं चन्दनसारं धूमोत्थं धूमजं गजाः ॥२५३॥**
**वज्रकं क्षारमत्युष्णं तीक्ष्णं क्षारं च रेचनम् ।**
**गुल्मोदरातिविष्टम्भशूलप्रशमनं सरम् ॥२५४॥**

(१) वज्रक, (२) वज्रकक्षार, (३) क्षारश्रेष्ठ, (४) विदारक, (५) सार, (६) चन्दनसार, (७) धूमोत्थ र (८) धूमज : यी आठ नाम हीरा-क्षारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो क्षार अति नै उष्णवीर्यको, तिक्खर र रेचनी हुन्छ । यसले गुल्म, पेटका रोग, विष्टम्भ र शूल नाश गर्दछ । यो मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

### जवाखार (यवक्षार)



**यवक्षारः स्मृतः पाक्यो यवजो यवसूचकः ।**
**यवशूको यवाह्वश्च यवापत्यं यवाग्रजः ॥२५५॥**
**यवक्षारः कटूष्णश्च कफवातोदरार्तिनुत् ।**
**आमशूलाश्मरीकृच्छ्रविषदोषहरः सरः ॥२५६॥**

यवक्षार, पाक्य, यवज, यवसूचक, यवशूक, यवाह्व, यवापत्य र यवाग्रज : यी जवाखारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो क्षार पिरो, उष्णवीर्यको तथा कफविकार, वातविकार र पेटका रोग नाशक हुन्छ । यसले, आमविकार, शूल, पत्थरी, कृच्छ्र र विषविकार नाश गर्दछ । यो मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

### क्षार (सर्वक्षार)

**सर्वक्षारो बहुक्षारः समूहक्षारकस्तथा ।**
**स्तोमक्षारो महाक्षारो मलारिः क्षारमेलकः ॥२५७॥**
**सर्वक्षारो ह्यतिक्षारश्चक्षुष्यो वस्तिशोधनः ।**
**गुदावर्तक्रिमिघ्नश्च मलवस्त्रविशोधनः ॥२५८॥**

सर्वक्षार, बहुक्षार, समूहक्षारक, स्तोमक्षार, महाक्षार, मलारि र क्षारमेलक : यी सबै क्षारको संस्कृत पर्यायवाची नामहरू हुन् । यो मिश्रण अति क्षारयुक्त, आँखाका लागि हितकर र तल्लो पेट सफा गर्ने गुणको हुन्छ । यसले गुदावर्त रोग र कीरा नाश गर्दछ तथा मल र वस्त्र प्रशोधन गर्दछ ।

### माजुफल (मायाफल)

**मायाफलं मायिफलञ्च मायिका छिद्राफलं मायि च पञ्चनामकम् ।**
**मायाफलं वातहरं कटूष्णकम् शैथिल्यसङ्कोचककेशकार्ष्ण्दम् ॥२५९॥**

(१) मायाफल, (२) मायिफल, (३) मायिका, (४) छिद्राफल र (५) मायि : यी पाँच नाम माजुफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वातविकार नाशक, पिरो र उष्णवीर्यको हुन्छ । यसले शिथिलता हटाउँदछ र कपाललाई कालो पार्दछ ।

### वर्गप्रशस्ति

**इत्थं नानाद्रव्यसम्भारनामग्रामव्याख्यातद्गुणाख्यानपूर्वम् ।**
**वर्गं वीर्यध्वस्तरोगोपसर्गं बुद्ध्वा वैद्यो विश्ववन्द्यत्वमीयात् ॥२६०॥**



अनेक ओखती र पदार्थका नाम र गुणका बारेमा विस्तृत तरिकाले वर्णन गरिएको यो अध्यायलाई राम्ररी अध्ययन गर्ने चिकित्सकले विश्वव्यापी मान्यता र प्रशंसा प्राप्त गर्दछ किन कि यी ओखतीहरू तिनका सक्रिय सिद्धान्त मार्फत रोग र सङ्क्रमण नियन्त्रण गर्न सक्षम छन् ।

**साफल्याय किलैत्य यानि जनुषः कान्तारदूरान्तरात्**
**स्वौजः पात्रविचारणाय विपणेर्मध्यं समध्यासते ।**
**तेषामाश्रयभूमिरेष भणितः पण्यौषधीनां बुधै-**
**र्वर्गो द्रव्यगुणाभिधाननिपुणैः पण्यादिवर्गात्मना ॥२६१॥**

घना जङ्गलबाट मानिसले आफ्नो क्षमताको परीक्षणका लागि खोजी लेराएका ओखतीहरू बजारमा भेटिन्छन् । यस्ता बजारका ओखतीका लागि यो अध्याय विद्वानहरूले वर्णन गरे अनुरुप नै शरणस्थल जस्तै छ । द्रव्यगुणको जानकारीका लागि यो अध्याय पण्यशाला जस्तै छ । त्यसैले यसको नाम पण्यादि वर्ग दिइएको हो ।

**यः सौम्येन सदाशयेन कलयन्दिव्यागमानां जनै-**
**र्दुर्ग्राहं महिमानमाशु नुदते स्वं जग्मुषां दुर्गतीः ।**
**वर्गः पिप्पलिकादिरेष नृहरेस्तस्येह शस्यात्मनो**

**नामग्रामांशिखामणौ खलु कृतौ षष्ठः प्रतिष्ठामगात् ॥२६२॥**

आयुर्वेदको सामान्य ज्ञानले थाहा पाउन नसक्ने दिव्य ओखतीको प्रधावलाई आफ्नो ज्ञान मार्फत थाहा दिई दयालु मन भएका नरहरीले आम नागरिकका रोगहरू निको पार्दछन् । यस्ता नागरिकलाई यो ज्ञानको अद्भुत प्रभावकारिताका बारेमा सचेत गराइन्छ । तिनै नरसिं यो ग्रन्थको सर्वोत्कृष्ट पिप्पल्यादि वर्ग नामक छैटौँ वर्ग पूरा गर्दछन् ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ पिप्पल्यादिः पण्यवर्गापरनामा षष्ठो वर्गः ॥६॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत पिप्पल्यादि वा पण्यवर्ग नामक छैटौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।६।

## मूलकादिवर्ग

मूलकं पञ्चधा प्रोक्तं चतुर्धा शिग्रुरुच्यते ।
वंशो द्विर्वेत्रो माकन्दी हरिद्रा वनजा तथा ॥१॥
शृङ्गाटो भ्रमरच्छल्ली वन्यार्द्रकमथापरम् ।
रसोनो द्विविधः प्रोक्तः पलाण्डुश्च द्विधा मतः ॥२॥
विंशत्येकोत्तरं मूलं शूरणं द्वन्द्वमुच्यते ।
आलूकसप्तकं चाथ प्रोक्ताश्चारण्यकन्दकाः ॥३॥
महिषी हस्ति कोलौश्च वाराही विष्णुधारिणी ।
द्विधा च नाकुली माला विदारीद्वयशाल्मली ॥४॥
चण्डालस्तैलकन्दश्च त्रिपर्णी पुष्करस्तथा ।
मुसली द्विविधा चाथ त्रिधा गुच्छास्तथैव च ॥५॥
एषु नागकराह्वा च पत्रशाकमथोच्यते ।
वास्तुकं चुक्रकं चिल्ली त्रिविधं शिग्रुपत्रकम् ॥६॥
पालक्यराजशाकिन्यौ चतुर्द्धोपोदकी क्रमात् ।
कुणञ्जरः कुसुम्भाख्यः शताह्वा पत्रतण्डुली ॥७॥



राजिकाद्वयचाङ्गेरी घोलिका त्रिविधा मता ।
जीवशाकस्तथा गौरसुवर्णाख्यः पुनर्नवा ॥८॥
वसुकः फञ्चिकादिश्च मिश्रकोऽङ्ककराह्वयः ।
अतः परं च कुष्माण्डी कुम्भतुम्बी त्वलाबुका ॥९॥
भूतुम्बिका कलिङ्गश्च द्विधा कोशातकी तथा ।
पटोली मधुराद्या च मृगाक्षी दधिपुष्पिका ॥१०॥
शिम्बी च कारवल्ली च कर्कोटी स्वादुतुम्बिका ।
निष्पावीद्वयवार्ताकी डङ्गरी खर्बुजा तथा ॥
कर्कटी त्रपुसैर्वारुर्बालुकी चीनकर्कटी ॥११॥
चिर्भिटा च शशाण्डूली कुडुहुञ्ची मुनीक्षणैः ।
वेदभेदाः क्रमान्मूलकन्दपत्रफलात्मकाः ॥१२॥
शाकवर्गेऽत्र कथ्यन्ते मनोहरगुणाश्रयाः ।
एवं चतुर्विधं द्रव्यं बाणखं चन्द्रसंयुतम् ॥१३॥

पाँच थरी मूलक (मूलक, चाणक्य मूलक, गृञ्जन, पिण्डमूलक र गृञ्जर), चार थरी शिग्रु (शिग्रु, नील शिग्रु, श्वेत शिग्रु र रक्त शिग्रु), दुई थरी वंश (वंश र रन्ध्र वंश एवं वंशाङ्कुर), वेत्र, माकन्दी,

हारिद्रा वनजा, शृङ्गाट, भ्रमरच्छल्ली, वन्याद्रक, दुई थरी रसोन (रसोन र गृञ्जन) र दुई थरी पलाण्डु (पलाण्डु र राजपलाण्डु) गरी एक्काईस प्रकारका मूल; दुई थरी शूरण (शूरण र सितशूरण), सात थरी आलूक (मुखालु, पिण्डालु, रक्तपिण्डालु, कासालु, फोण्डालु, पाणियालु र नीलालु), शुभ्रालु वा महिषीकन्द, हस्तिकन्द, कोलकन्द, वाराहीकन्द, विष्णुकन्द, धारिणीकन्द, दुई थरी नाकुली ( नाकुली र गन्धनाकुली), मालाकन्द, दुई थरी विदारी (विदारी र क्षीरविदारी), शाल्मलीकन्द, चण्डालकन्द, तैलकन्द, त्रिपर्णी, (पुष्कर : पहिले अर्कै वर्गमा वर्णन भएको), दुई थरी मुसली(एक गनिएको), तीन थरी गुच्छा (गुच्छा, पुत्रकन्दा र करजोडी) गरी अठ्ठाईस थरी पत्रशाक; वास्तुक, चुक्रक, तीन थरी चिल्ली (चिल्ली, श्वेत चिल्ली र शुनक चिल्ली), शिग्रुपत्रक, पालक्य, राजशाकिनी, चार थरी उपोदकी (उपोदकी, क्षुद्रोपोदकी, वनजोपोदकी र मूलपोती), कुणञ्जर, कुसुम्भ, शताह्वा, पत्रतण्डुली, दुई थरी राजिका (राजिका र सार्षपपत्र), चाङ्गेरी, तीन थरी घोलिका, जीवशाक, गौरसुवर्ण, पुनर्नवा, वसुक, फञ्जिक, कुष्माण्डी, कुम्भतुम्बी, अलाबुका, भूतुम्बिका, कलिङ्ग, दुई थरी कोशातकी, पटोली, मधुपटोली, मृगाक्षी, दधिपुष्पिका, शिम्बी, कारवल्ली, कर्कोटी, स्वादुतुम्बिका, दुई थरी निष्पावी, वार्ताकी, डङ्गरी, खर्बुजा, कर्कटी, त्रपुस, एर्वारु, बालुकी, चीनकर्कटी, चिर्भिटा, शशाण्डूली र कुडुहुञ्ची गरी १०५ (बाणखं चन्द्रसंयुतम्) प्रकारका (गन्दा सङ्ख्या नमिलेको) चार थरी सागपातका बारेमा यस वर्गमा वर्णन गरिएको छ ।

## मुला (मूलक)



मूलकं नीलकण्ठञ्च मूलाह्वं दीर्घमूलकम् ।
भूक्षारं कन्दमूलं स्याद्धस्तिदन्तं सितं तथा ॥१४॥
शङ्खमूलं हरित्पर्णं रुचिरं दीर्घकन्दकम् ।
कुञ्जरक्षारमूलञ्च मूलस्यैते त्रयोदश ॥१५॥
मूलकं तीक्ष्णमुष्णञ्च कटूष्णं ग्राहि दीपनम् ।
दुर्नामगुल्महृद्रोगवातघ्नं रुचिदं गुरु ॥१६॥

(१) मूलक, (२) नीलकण्ठ, (३) मूलाह्व, (४) दीर्घमूलक, (५) भूक्षार, (६) कन्दमूल, (७) हस्तिदन्त, (८) सित, (९) शङ्खमूल, (१०) हरित्पण, (११) रुचिर, (१२) दीर्घकन्दक र (१३) कुञ्जरक्षारमूल : यी तेह्र नाम मुलाका संस्कृत पर्यायवाची नामहरू हुन् । मुला तिक्खर, उष्णवीर्यको, पिरो, ग्राही र दीपनी हुन्छ । यसले अल्काई, गुल्म, मुटुका रोग र वातविकार नाश गर्दछ । मुलाले रुची जगाउँदछ तर यो पचाउन कठिन हुन्छ ।

## ठूलो वा प्युठाने मुला (चाणाख्यमूलक)

चाणाख्यमूलकं चान्यच्छालेयं विष्णुगुप्तकम् ।
स्थूलमूलं महाकन्दं कौटिल्यं मरुसम्भवम् ॥

**शालामर्कटकं मिश्रं ज्ञेयं चैव नवाभिधम् ॥१७॥**
**चाणाख्यमूलकं सोष्णं कटुकं रुच्यदीपनम् ।**
**कफवातक्रिमीन्गुल्मं नाशयेद्ग्राहकं गुरु ॥१८॥**

(१) चाणाख्यमूलक, (२) शालेय, (३) विष्णुगुप्तक, (४) स्थूलमूल, (५) महाकन्द, (६) कौटिल्य, (७) मरुसम्भव, (८) शालामर्कटक र (९) मिश्र : यी नौ नाम ठूलो जातको मुलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुला उष्णवीर्यको, पिरो, रुचिकर र दीपनी हुन्छ । यसले कफविकार, वातविकार, कीरा र गुल्म नाश गर्दछ । यो ग्राही र पचाउन कठिन हुन्छ ।

### सानो डल्लेमुला (गृञ्जन)

**गृञ्जनं शिखिमूलञ्च यवनेष्टञ्च वर्तुलम् ।**
**ग्रन्थिमूलं शिखाकन्दं कन्दं डिण्डीरमोदकम् ॥१९॥**
**गृञ्जनं कटुकोष्णं च कफवातरुजापहम् ।**
**रुच्यं च दीपनं हृद्यं दुर्गन्धं गुल्मनाशनम् ॥२०॥**

गृञ्जन, शिखिमूल, यवनेष्ट, वर्तुलम्, ग्रन्थिमूल, शिखाकन्द, कन्द र डिण्डीरमोदक : यी सानो डल्लेमुलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुला पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले रुची जगाउँदछ । यो दीपनी, मुटुका लागि हितकर तथा दुर्गन्ध र गुल्म नाशक हुन्छ ।

### ठूलो डल्लेमूला (पिण्डमूल)

**पिण्डमूलं गजाण्डञ्च पिण्डकं पिण्डमूलकम् ।**
**पिण्डमूलं कटूष्णं च गुल्मवातादिदोषनुत् ॥२१॥**

पिण्डमूल, गजाण्ड, पिण्डक र पिण्डमूलक : यी गान्टेमुलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुला पिरो, उष्णवीर्यको तथा गुल्म र वातविकार जस्ता विकार नाशक हुन्छ ।

### कलिला र काँचा मुलाका गुण (बाल, जीर्णमूलकगुण)

**सोष्णं तीक्ष्णं च तिक्तं मधुरकटुरसं मूत्रदोषापहारि**
**श्वासार्शःकासगुल्मक्षयनयनरुजानाभिशूलामयघ्नम् ।**
**कण्ठ्यं बल्यं च रुच्यं मलविकृतिहरं मूलकं बालकं स्या-**
**दुष्णं जीर्णं च शोषप्रदमुदितमिदं दाहपित्तास्रदायि ॥२२॥**

**आमं सङ्ग्राहि रुच्यं कफपवनहरं पक्वमेतत् कटूष्णं**
**भुक्तेः प्राग्भक्षितं चेत्सपदि वितनुते पित्तदाहास्रकोपम् ।**
**भुक्त्या सार्धन्तु जग्धं हितकरबलकृद्वेसवारेण तच्चेत्**
**पक्वं हृद्रोगशूलप्रशमनमुदितं शूलरुग्घारि मूलम् ॥२३॥**

कलिलो मुला उष्णवीर्यको, तिक्खर, तीतो, गुलियो, पिरो र पिसाबसम्बन्धी रोग नाशक हुन्छ । यसले दम, अल्काई, खोकी, गुल्म, क्षयरोग, आँखाका रोग र नाइटोको शूल नाश गर्दछ । यो मुला घाँटीका लागि हितकर, रुचिकर र मलजन्य विकार नाशक हुन्छ । तातो र पुरानो मुला सुजनकारक, डाह गराउने तथा पित्तविकार र रक्तविकार बढाउने गुणको हुन्छ । काँचो मुला ग्राही र रुचिकर हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ । यो मुला पचेपछि (वा पकाएपछि) पिरो र उष्णवीर्यको हुन्छ । खाना खानु अघि खाइएको मुलाले पित्तविकार, डाह र रक्तविकार बढाउँदछ । वेसवार (साँधेर) बनाएर खाए यो हितकारी र बलदायक हुन्छ । पकाइएको वा छिप्पिएको मुलाले मुटुका रोग र शूल नाश गर्दछ । शूलरोग नाश गर्नमा मुला लाभदायक हुन्छ ।

### गाजर (गर्जर)

**गर्जरं पिङ्गमूलञ्च पीतकञ्च सुमूलकम् ।**
**स्वादुमूलं सुपीतञ्च नारङ्गं पीतमूलकम् ॥२४॥**
**गर्जरं मधुरं रुच्यं किञ्चित् कटु कफापहम् ।**
**आध्मानकृमिशूलघ्नं दाहपित्ततृषापहम् ॥२५॥**

गर्जर, पिङ्गमूल, पीतक, सुमूलक, स्वादुमूल, सुपीत, नारङ्ग र पीतमूलक : यी गाजरका संस्कृत पर्यायवाची नामहरू हुन् । गाजर गुलियो, रुचिकर, हलुका पिरो र कफविकार नाशक हुन्छ । यसले आध्मान, कीरा, शूल, डाह, पित्तविकार र तिर्खारोग नाश गर्दछ ।

### सजिवन (शिग्रु)

**शिग्रुर्हरितशाकश्च शाकपत्रः सुपत्रकः ।**
**उपदंशक्षमो दंशो ज्ञेयः कोमलपत्रकः ॥**
**बहुमूलो दंशमूलस्तीक्ष्णमूलो दशाह्वयः ॥२६॥**
**शिग्रुश्च कटुतिक्तोष्णस्तीक्ष्णो वातकफापहः ।**
**मुखजाड्यहरो रुच्यो दीपनो व्रणदोषनुत् ॥२७॥**

(१) शिग्रु, (२) हरितशाक, (३) शाकपत्र, (४) सुपत्रक, (५) उपदंश, (६) क्षमादंश, (७) कोमलपत्रक, (८) बहुमूल, (९) दंशमूल र (१०) तीक्ष्णमूल : यी दश नाम सजिवनका संस्कृत

पर्यायवाची नामहरू हुन् । सजिवन पिरो, तीतो, उष्णवीर्यको, तिक्खर तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले मुख (जिभ्रो) को लाटोपन नाश गर्दछ । यो रुचिकर, दीपनी र घाउखटिराको विकार नाशक हुन्छ ।

### निलो सजिवन (शिग्रुविशेष)

**शोभाञ्जना नीलशिग्रुस्तीक्ष्णगन्धो जनप्रियः ।**
**मुखामोदः कृष्णशिग्रुश्चक्षुष्यो रुचिरञ्जनः ॥२८॥**
**शोभाञ्जनस्तीक्ष्णकटुः स्वादूष्णः पिच्छिलस्तथा ।**
**जन्तुवातार्तिशूलघ्नश्चक्षुष्यो रोचनः परः ॥२९॥**

शोभाञ्जन, नीलशिग्रु, तीक्ष्णगन्ध, जनप्रिय, मुखामोद, कृष्णशिग्रु, चक्षुष्य र रुचिरञ्जन : यी नीलो सजिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सजिवन तिक्खर, पिरो, गुलियो, उष्णवीर्यको र लेस्याइलो हुन्छ । यसले कीरा, वातविकार र शूल नाश गर्दछ । यो आँखाका लागि हितकर र अत्यन्त रुचिकर हुन्छ ।

### सेतो सजिवन (श्वेतशिग्रु)



**श्वेतशिग्रुः सुतीक्ष्णः स्यान्मुखभङ्गः सिताह्वयः ।**
**सुमूलः श्वेतमरिचो रोचनो मधुशिग्रुकः ॥३०॥**
**श्वेतशिग्रुः कटुस्तीक्ष्णः शोफानलनिकृन्तनः ।**
**अङ्गव्यथाहरो रुच्यो दीपनो मुखजाड्यनुत् ॥३१॥**

श्वेतशिग्रु, सुतीक्ष्ण, मुखभङ्ग, सिताह्वय, सुमूल, श्वेतमरिच, रोचन र मधुशिग्रु : यी सेतो सजिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो सजिवन पिरो, तिक्खर तथा सुजन र वातविकार नाशक हुन्छ । यसले आङ दुख्ने रोग ठिक गर्दछ । यो रुचिकर, दीपनी र मुख (जिभ्रो) को लाटोपन नाशक हुन्छ ।

### रातो सजिवन (रक्तशिग्रु)

**रक्तको रक्तशिग्रुः स्यान्मधुरो बहुलच्छदः ।**
**सुगन्धकेशरः सिंहो मृगारिश्च प्रकीर्तितः ॥३२॥**
**रक्तशिग्रुर्महावीर्यो मधुरश्च रसायनः ।**
**शोफाध्मानसमीरार्तिपित्तश्लेष्मापसारकः ॥३३॥**

रक्तक, रक्तांशगु, मधुर, बहुलच्छद, सुगन्धकेशर, सिंह र मृगारि : यी रातो सांजिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति वीर्यशाली, गुलियो र रसायनी हुन्छ । यसले सुजन, आध्मान, वातविकार, पित्तविकार र कफविकारलाई हटाउँदछ ।

**बाँस (वंश)**

**वंशो यवफलो वेणुः कर्मारस्तृणकेतुकः ।**
**मस्करः शतपर्वा च कण्टालुः कण्टकी तथा ॥३४॥**
**महाबलो दृढग्रन्थिर्दृढपत्रो धनुर्द्रुमः ।**
**धनुष्यो दृढकाण्डश्च विज्ञेयो बाणभूमितः ॥३५॥**
**वंशौ त्वम्लौ कषायौ च किञ्चित्तिक्तौ च शीतलौ ।**
**मूत्रकृच्छ्रप्रमेहार्शःपित्तदाहास्रनाशनौ ॥३६॥**

(१) वंश, (२) यवफल, (३) वेणु, (४) कर्मार, (५) तृणकेतुक, (६) मस्कर, (७) शतपर्वा, (८) कण्टालु, (९) कण्टकी, (१०) महाबल, (११) दृढग्रन्थि, (१२) दृढपत्र, (१३) धनुर्द्रुम, (१४) धनुष्य र (१५) दृढकाण्ड : यी पन्ध्र नाम बाँसका संस्कृत पर्यायवाची नामहरू हुन् । बाँस अमिलो, टर्रो, केही तीतो र शीतवीर्यको हुन्छ । यसले मूत्रकृच्छ्र, प्रमेह, अल्काई, पित्तविकार, डाह र रक्तविकार नाश गर्दछ ।



**तामाबाँस (रन्ध्रवंश)**

**अन्यस्तु रन्ध्रवंशः स्यात् त्वक्सारः कीचकाह्वयः ।**
**मस्करो वादनीयश्च सुषिराख्यः षडाह्वयः ॥३७॥**
**विशेषो रन्ध्रवंशस्तु दीपनोऽजीर्णनाशनः ।**
**रुचिकृत्पाचनो हृद्यो शूलघ्नो गुल्मनाशनः ॥३८॥**

(१) रन्ध्रवंश, (२) त्वक्सार, (३) कीचक, (४) मस्कर, (५) वादनीय र (६) सुषिर : यी छ नाम तामाबाँसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बाँस मुख्यतः दीपनी र अजीर्ण नाशक हुन्छ । यसले रुचि जगाउँदछ । यो पाचनी, मुटुका लागि हितकर तथा शूल र गुल्म नाशक हुन्छ ।

**बाँसको टुसा (करीर)**

**वंशाग्रन्तु करीरो वंशाङ्कुरश्च यवफलाङ्कुरः ।**
**तस्य ग्रन्थिस्तु परुः पर्व तथा काण्डसन्धिश्च ॥३९॥**

**करीरं कटुतिक्ताम्लं कषायं लघु शीतलम् ।**
**पित्तास्रदाहकृच्छ्रघ्नं रुचिकृत् पर्व निर्गुणम् ॥४०॥**

वंशाग्र, करीर, वंशाङ्कुर र यवफलाङ्कुर : यी बाँसको टुसाका संस्कृत पर्यायवाची नामहरू हुन् । बाँसको आँख्लालाई संस्कृतमा परु, पर्व वा काण्डसन्धि भनिन्छ । बाँसको टुसा पिरो, तीतो, अमिलो, टर्रो, पचाउन सहज र शीतवीर्यको हुन्छ । यसले पित्तविकार, रक्तविकार, डाह र कृच्छ्र नाश गर्दछ । यो रुचिकर हुन्छ । बाँसको आँख्लामा उल्लेखनीय कुनै गुण हुँदैन ।

**बेत (वेत्र)**

**वेत्रो वेतो योगिदण्डः सुदण्डो मृदुपर्वकः ।**
**वेत्रः पञ्चविधः शैत्यकषायो भूतपित्तहृत् ॥४१॥**

(१) वेत्र, (२) वेत, (३) योगिदण्ड, (४) सुदण्ड र (५) मृदुपर्वक : यी पाँच नाम बेतका संस्कृत पर्यायवाची नामहरू हुन् । पाँच थरी बेत शीतवीर्यका, टर्रा तथा भूतबाधा र पित्तविकार नाशक हुन्छन् ।

**मालिङ्गो (माकन्दी)**



**माकन्दी बहुमूला च मादनी गन्धमूलिका ।**
**एका विशदमूली च श्यामला च तथाऽपरा ॥४२॥**
**माकन्दी कटुका तिक्ता मधुरा दीपनी परा ।**
**रुच्याऽल्पवातला पथ्या न वर्षासु हिताऽधिका ॥४३॥**

माकन्दी, बहुमूला, मादनी र गन्धमूलिका : यी मालिङ्गोका संस्कृत पर्यायवाची नामहरू हुन् । मालिङ्गो विशदमूली र श्यामला गरी दुई जातको हुन्छ । मालिङ्गो पिरो, तीतो, गुलियो र अत्यन्त दीपनी हुन्छ । यो रुचिकर, थोरै वातविकार गर्ने, पथ्य र वर्षाकालमा धेरै हितकारी नहुने गुणको हुन्छ ।

**बन हलेदो (शोली)**

**शोली वनहरिद्रा स्यात् वनारिष्टा च शोलिका ।**
**शोलिका कटुगौल्या च रुच्या तिक्ता च दीपनी ॥४४॥**

शोली, वनहरिद्रा, वनारिष्टा र शोलिका : यी बन हलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । बन

हलेदो पिरो, गुलियो, रुचिकर, तीतो र दीपनी हुन्छ ।

### सिँगडा (शृङ्गाटक)

**शृङ्गाटकः शृङ्गरुहो जलवल्ली जलाश्रया ।**
**शृङ्गकन्दः शृङ्गमूलो विषाणी सप्तनामकः ॥४५॥**
**शृङ्गाटकः शोणितपित्तहारी लघुः सरो वृष्यतमो विशेषात् ।**
**त्रिदोषतापश्रमशोफहारी रुचिप्रदो मेहनदार्ढ्यहेतुः ॥४६॥**

(१) शृङ्गाटक, (२) शृङ्गरुह, (३) जलवल्ली, (४) जलाश्रया, (५) शृङ्गकन्द, (६) शृङ्गमूल र (७) विषाणी : यी सात नाम सिँगडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले रक्तपित्त नाश गर्दछ । यो पचाउन सहज, मलमूत्रलाई तलतिर सार्ने, अत्यन्त वीर्यवर्धक तथा त्रिदोष, डाह, थकाई र सुजन नाशक हुन्छ । यो रुचिकर र पुरुष जननेन्द्रिय बलियो बनाउने गुणको हुन्छ ।

### सेतीकाठ (भ्रमरच्छल्ली)

**भृङ्गाह्वा भ्रमरच्छल्ली भ्रमरा भृङ्गमूलिका ।**
**भृङ्गच्छल्ली कटूष्णा स्यात् तिक्ता दीपनरोचनी ॥४७॥**



भृङ्गाह्वा, भ्रमरच्छल्ली, भ्रमरा र भृङ्गमूलिका : यी सेतीकाठका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो, दीपनी र रोचनी हुन्छ ।

### बन अदुवा (अरण्यार्द्रक)

**पेऊर्वनार्द्रका प्रोक्ता वनजाऽरण्यजार्द्रका ।**
**पेऊस्तु कटुकाऽम्ला च रुचिकृद्बल्यदीपनी ॥४८॥**

पेऊ, वनार्द्रका, वनजा र अरण्यजार्द्रका : यी बन अदुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अदुवा पिरो, अमिलो, रुचिकर, बलदायक र दीपनी हुन्छ ।

### लसुन (रसोन)

**रसोनो लशुनोऽरिष्टो म्लेच्छकन्दो महौषधम् ।**
**भूतघ्नश्चोग्रगन्धश्च लशुनः शीतमर्दकः ॥४९॥**

रसोन, लशुन, अरिष्ट, म्लेच्छकन्द, महौषध, भूतघ्न, उग्रगन्ध र शीतमदक : यी लसुनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### लसुनका गुण (रसोनगुण)

**रसोनोऽम्लरसोनः स्याद्गुरूष्णः कफवातनुत् ।**
**अरुचिकृमिहृद्रोगशोफघ्नश्च रसायनः ॥५०॥**

लसुनमा अमिलो बाहेकका सबै पाँच रस हुन्छन् । यो पचाउन कठिन, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले अरुचि, कीरा, मुटुका रोग र सुजन नाश गर्दछ । यो रसायनी हुन्छ ।

**रसोन उष्णः कटुपिच्छिलश्च स्निग्धो गुरुः स्वादुरसोऽतिबल्यः ।**
**वृष्यश्च मेधास्वरवर्णचक्षुभग्नास्थिसन्धानकरः सुतीक्ष्णः ॥५१॥**

लसुन उष्णवीर्यको, पिरो, लेस्याइलो, चिल्लो, पचाउन कठिन, रसमा गुलियो र अति बलदायक हुन्छ । यो वीर्यवर्धक, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, स्वर खुलाउने, वर्णमा निखार लेराउने, आँखाका लागि हितकर र भाँचिएका हाड जोड्ने गुणको हुन्छ । यो अति तिक्खर हुन्छ ।



### छ्यापी वा लसुनविशेष (रसोनविशेष)

**रसोनोऽन्यो महाकन्दो गृञ्जनो दीर्घपत्रकः ।**
**पृथुपत्रः स्थूलकन्दो यवनेष्टो बले हितः ॥५२॥**

महाकन्द, गृञ्जन, दीर्घपत्रक, पृथुपत्र, स्थूलकन्द र यवनेष्ट : यी अर्को थरी लसुन वा छ्यापी वा रातो लसुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बलदायक हुन्छ ।

### लसुनमा हुने रस

**गृञ्जनस्य मधुरं कटु कन्दं नालमप्युपदिशन्ति कषायम् ।**
**पत्रसञ्चयमुशन्ति च तिक्तं सूरयो लवणमस्थि वदन्ति ॥५३॥**

लसुनको पोटी गुलियो र तीतो, डाँठ टर्रो, पात तीतो तथा डाँठको टुप्पो नुनिलो हुन्छ भन्दछन् ।

**छ्यापीका गुण**

**हृद्रोगजीर्णज्वरकुक्षिशूलविबन्धगुल्मारुचिकृच्छ्रशोफान् ।**
**दुर्नामकुष्ठानिलसादजन्तुकफामयान् हन्ति महारसोनः ॥५४॥**

छ्यापीले मुटुका रोग, धेरै दिनको जरो, कोखाको शूल, विबन्ध, गुल्म, अरुची, कृच्छ्र, सुजन, अल्काई, कुष्ठ, वातविकार, पेटका कीरा र कफजन्य रोग नाश गर्दछ ।

**प्याज (पलाण्डु)**

**पलाण्डुस्तीक्ष्णकन्दश्च उल्ली च मुखदूषणः ।**
**शूद्रप्रियः क्रिमिघ्नश्च दीपनो मुखगन्धकः ॥५५॥**
**बहुपत्रो विश्वगन्धो रोचनो रुद्रसञ्ज्ञकः ।**
**श्वेतकन्दश्च तत्रैको हारिद्रोऽन्य इति द्विधा ॥५६॥**
**पलाण्डुः कटुको बल्यः कफपित्तहरो गुरुः ।**
**वृष्यश्च रोचनः स्निग्धो वान्तिदोषविनाशनः ॥५७॥**

(१) पलाण्डु, (२) तीक्ष्णकन्द, (३) उल्ली, (४) मुखदूषण, (५) शूद्रप्रिय, (६) क्रिमिघ्न, (७) दीपन, (८) मुखगन्धक, (९) बहुपत्र, (१०) विश्वगन्ध र (११) रोचन : यी एघार नाम प्याजका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो र पहेँलो कन्द हुने गरी प्याज दुई किसिमको हुन्छ । प्याज पिरो, बलदायक, कफविकार नाशक, पित्तविकार नाशक र पचाउन कठिन हुन्छ । यो वीर्यवर्धक, रुचिकर र चिल्लो तथा वाकवाकी नाशक हुन्छ ।

**रातो प्याज (राजपलाण्डु)**

**अन्यो राजपलाण्डुः स्याद्यवनेष्टो नृपाह्वयः ।**
**राजप्रियो महाकन्दो दीर्घपत्रश्च रोचकः ॥५८॥**
**नृपेष्टो नृपकन्दश्च महाकन्दो नृपप्रियः ।**
**रक्तकन्दश्च राजेष्टो नामान्यत्र त्रयोदश ॥५९॥**
**पलाण्डुर्नृपपूर्वः स्याच्छिशिरः पित्तनाशनः ।**
**कफहृद्दीपनश्चैव बहुनिद्राकरस्तथा ॥६०॥**
**वक्ष्यते नृपपलाण्डुलक्षणं क्षारतीक्ष्णमधुरो रुचिप्रदः ।**
**कण्ठशोषशमनोऽतिदीपनः श्लेष्मपित्तशमनोऽतिबृंहणः ॥६१॥**

(१) राजपलाण्डु, (२) यवनेष्ट, (३) नृपाह्वय, (४) राजप्रिय, (५) महाकन्द, (६) दीर्घपत्र, (७) रोचक, (८) नृपेष्ट, (९) नृपकन्द, (१०) महाकन्द, (११) नृपप्रिय, (१२) रक्तकन्द र (१३) राजेष्ट : यी तेह्र (महाकन्द दुई पटक लेखिएको) नाम रातो प्याजका संस्कृत पर्यायवाची नामहरू हुन् । रातो प्याज पित्तविकार र कफविकार नाशक तथा दीपनी हुन्छ । यसले निद्रा धेरै लगाउँदछ । रातो प्याज नुनिलो, तिक्खर, गुलियो र रुचिप्रद हुन्छ भनिन्छ । यसले घाँटी सुकेको ठिक गर्दछ । यो अत्यन्त दीपनी तथा कफविकार र पित्तविकार शान्त पार्ने एवं अत्यन्त पौष्टिक हुन्छ ।

## ओल (शूरण)

**कण्डूलः शूरणः कन्दी सुकन्दी स्थूलकन्दकः ।**
**दुर्नामारिः सुवृत्तश्च वातारिः कन्दशूरणः ॥६२॥**
**अर्शोघ्नस्तीव्रकन्दश्च कन्दार्हः कन्दवर्धनः ।**
**बहुकन्दो रुच्यकन्दः शूरकन्दस्तु षोडशः ॥६३॥**
**शूरणः कटुकरुच्यदीपनः पाचनः क्रिमिकफानिलापहः ।**
**श्वासकासवमनार्शसां हरः शूलगुल्मशमनोऽस्रदोषनुत् ॥६४॥**

(१) कण्डूल, (२) शूरण, (३) कन्दी, (४) सुकन्दी, (५) स्थूलकन्दक, (६) दुर्नामारि, (७) सुवृत्त, (८) वातारि, (९) कन्दशूरण, (१०) अर्शोघ्न, (११) तीव्रकन्द, (१२) कन्दार्ह, (१३) कन्दवर्धन, (१४) बहुकन्द, (१५) रुच्यकन्द र (१६) शूरकन्द : यी सोह्र नाम ओलका संस्कृत पर्यायवाची नामहरू हुन् । ओल पिरो, रुचिकर, दीपनी, पाचनी तथा कीरा, कफविकार र वातविकार नाशक हुन्छ । यसले दम, खोकी, वाकवाकी, अल्काई, शूल, गुल्म र रक्तविकार नाश गर्दछ ।

## सेतो वा जङ्गली ओल (सितशूरण)

**सितशूरणस्तु वन्यो वनकन्दोऽरण्यशूरणो वनजः ।**
**स श्वेतशूरणाख्यो वनकन्दः कण्डूलश्च सप्ताख्यः ॥६५॥**
**श्वेतशूरणको रुच्यः कटूष्णः कृमिनाशनः ।**
**गुल्मशूलादिदोषघ्नः स चारोचकहारकः ॥६६॥**

(१) सितशूरण, (२) वन्य, (३) वनकन्द, (४) अरण्यशूरण, (५) वनज, (६) वनकन्द र (७) कण्डूल : यी सात नाम जङ्गली ओलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिकर, पिरो, उष्णवीर्यको र कीरा नाशक हुन्छ । यसले गुल्म, शूल आदि रोग र अरुची पनि नाश गर्दछ ।

## तरुल (मुखालु)

**मुखालुर्मण्डपारोहो दीर्घकन्दः सुकन्दकः ।**
**स्थूलकन्दो महाकन्दः स्वादुकन्दश्च सप्तधा ॥६७॥**
**मुखालुकः स्यान्मधुरः शिशिरः पित्तनाशनः ।**
**रुचिकृद्धातकृच्चैव दाहशोषतृषापहः ॥६८॥**

(१) मुखालु, (२) मण्डपारोह, (३) दीर्घकन्द, (४) सुकन्दक, (५) स्थूलकन्द, (६) महाकन्द र (७) स्वादुकन्द : यी सात नाम तरुलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । यसले रुचि जगाउनुका साथै डाह, सुजन र तिर्खा नाश गर्दछ ।

## सेतो सखरखण्ड (पिण्डालु)

**पिण्डालुः स्यात् ग्रन्थिलः पिण्डकन्दः कन्दग्रन्थी रोमशो रोमकन्दः ।**
**रोमालुः स्यात्सोऽपि ताम्बूलपत्रो लालाकन्दः पिण्डकोऽयं दशाह्वः ॥६९॥**
**पिण्डालुर्मधुरः शीतो मूत्रकृच्छ्रामयापहः ।**
**दाहशोषप्रमेहघ्नो वृष्यः सन्तर्पणो गुरुः ॥७०॥**



(१) पिण्डालु, (२) ग्रन्थिल, (३) पिण्डकन्द, (४) कन्दग्रन्थी, (५) रोमश, (६) रोमकन्द, (७) रोमालु, (८) ताम्बूलपत्र, (९) लालाकन्द र (१०) पिण्डक : यी दश नाम सेतो सखरखण्डका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा मूत्रकृच्छ्र नाशक हुन्छ । यसले डाह, सुजन र प्रमेह नाश गर्दछ । यो वीर्यवर्धक, तृप्तिदायक र पचाउन कठिन हुन्छ ।

## सुठनी वा रातो सखरखण्ड (रक्तपिण्डालु)

**अन्यस्तु रक्तपिण्डालू रक्तालू रक्तपिण्डकः ।**
**लोहितो रक्तकन्दश्च लोहितालुः षडाह्वयः ॥७१॥**
**रक्तपिण्डालुकः शीतो मधुराम्लः श्रमापहः ।**
**पित्तदाहापहो वृष्यो बलपुष्टिकरो गुरुः ॥७२॥**

(१) रक्तपिण्डालू, (२) रक्तालू, (३) रक्तपिण्डक, (४) लोहित, (५) रक्तकन्द र (६) लोहितालु : यी छ नाम रातो सखरखण्डका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो, अमिलो तथा थकाई नाशक हुन्छ । यसले पित्तविकार र डाह नाश गर्दछ । यो वीर्यवर्धक, बलदायक, पुष्टिकारक र पचाउन कठिन हुन्छ ।

## भ्याकुर (कासालु)

**कासालुः कासकन्दश्च कन्दालुश्चालुकश्च सः ।**
**आलुर्विशालपत्रश्च पत्रालुश्चेति सप्तधा ॥७३॥**
**कासालुरुग्रकण्डूतिवातश्लेष्मामयापहः ।**
**अरोचकहरः स्वादुः पथ्यो दीपनकारकः ॥७४॥**

(१) कासालु, (२) कासकन्द, (३) कन्दालु, (४) आलुक, (५) आलु, (६) विशालपत्र र (७) पत्रालु : यी सात नाम भ्याकुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले उग्र खालको चिलाउने रोग, वातविकार, कफविकार र अरुची नाश गर्दछ । यो गुलियो, पथ्य र दीपनी हुन्छ ।

## फ्याउसे (फोण्डालु)

**फोण्डालुर्लोहितालुश्च रक्तपत्रो मृदुच्छदः ।**
**फोण्डालुः श्लेष्मवातघ्नः कटूष्णो दीपनश्च सः ॥७५॥**

फोण्डालु, लोहितालु, रक्तपत्र र मृदुच्छद : यी फ्याक्सेकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार र वातविकार नाश गर्दछ । यो पिरो, उष्णवीर्यको र दीपनी हुन्छ ।

## जलुको (पाणियालु)

**पाणियालुर्जलालुः स्यात् अनुपालुरवालुकः ।**
**पाणियालुस्त्रिदोषघ्नः सन्तर्पणकरः परः ॥७६॥**

पाणियालु, जलालु, अनुपालु र अवालुक : यी जलुकोका संस्कृत पर्यायवाची नामहरू हुन् । जलालु त्रिदोषनाशक र अत्यन्त तृप्तिदायक हुन्छ ।

## तरुलविशेष (नीलालु)

**नीलालुरसितालुः स्यात् कृष्णालुः श्यामलालुकः ।**
**नीलालुर्मधुरः शीतः पित्तदाहश्रमापहः ॥७७॥**

नीलालु, असितालु, कृष्णालु र श्यामलालुक : यी नीलो तरुलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तरुल गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ ।

## भैंसे तरुल (शुभ्रालु)

**शुभ्रालुर्महिषीकन्दो लुलायकन्दश्च शुक्लकन्दश्च ।**
**सर्पाख्यो वनवासी विषकन्दो नीलकन्दोऽन्यः ॥७८॥**
**कटूष्णो महिषीकन्दः कफवातामयापहः ।**
**मुखजाड्यहरो रुच्यो महासिद्धिकरः सितः ॥७९॥**

शुभ्रालु, महिषीकन्द, लुलायकन्द, शुक्लकन्द, सर्पाख्य, वनवासी, विषकन्द र नीलकन्द : यी भैंसे तरुलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार, वातविकार र मुखको निरसता वा लाटोपन नाशक हुन्छ । यो तरुल रुचिकर र ओखती बनाउन अति नै सिद्धिदायक हुन्छ ।

## जँति तरुल (हस्तिकन्द)

**हस्तिकन्दो हस्तिपत्रः स्थूलकन्दोऽतिकन्दकः ।**
**बृहत्पत्रोऽतिपत्रश्च हस्तिकर्णः सुकर्णकः ॥८०॥**
**त्वग्दोषारिः कुष्ठहन्ता गिरिवासी नगाश्रयः ।**
**गजकन्दो नागकन्दो ज्ञेयो द्विसप्तनामकः ॥८१॥**
**हस्तिकन्दः कटूष्णः स्यात् कफवातामयापहः ।**
**त्वग्दोषश्रमहा कुष्ठविषवीसर्पनाशकः ॥८२॥**

(१) हस्तिकन्द, (२) हस्तिपत्र, (३) स्थूलकन्द, (४) अतिकन्दक, (५) बृहत्पत्र, (६) अतिपत्र, (७) हस्तिकर्ण, (८) सुकर्णक, (९) त्वग्दोषारि, (१०) कुष्ठहन्ता, (११) गिरिवासी, (१२) नगाश्रय, (१३) गजकन्द र (१४) नागकन्द : यी चौध नाम जँति तरुलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार, वातविकार, छालाका रोग, थकाई, कुष्ठ, विषविकार र वीसर्प नाशक हुन्छ ।

## तीते गिठो (कोलकन्द)

**कोलकन्दः क्रिमिघ्नश्च पञ्जलो वस्त्रपञ्जलः ।**
**पुटालुः सुपुटश्चैव पुटकन्दश्च सप्तधा ॥८३॥**
**कोलकन्दः कटुश्चोष्णः क्रिमिदोषविनाशनः ।**
**वान्तिहृच्छर्दिशमनो विषदोषनिवारणः ॥८४॥**

(१) कोलकन्द, (२) क्रिमिघ्न, (३) पञ्जल, (४) वस्त्रपञ्जल, (५) पुटालु, (६) सुपुट र (७) पुटकन्द :

यी सात नाम तीते गिठोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कीराजन्य रोग नाशक हुन्छ । यसले वाकवाकी नाश गर्दछ वा शान्त पार्दछ तथा विषविकार नाश गर्दछ ।

### रानी गिठो (वाराही)

**स्याद्वाराही सू(शू)करी क्रोडकन्या गृष्टिर्विष्वक्सेनकान्ता वराही ।**
**कौमारी स्याद्ब्रह्मपुत्री त्रिनेत्रा क्रौडी कन्या गृष्टिका माधवेष्टा ॥८५॥**
**सूकरकन्दः क्रोडी वनवासी कुष्ठनाशनो वन्यः ।**
**अमृतश्च महावीर्यो महौषधिः शवरकन्दश्च ॥८६॥**
**वराहकन्दो वीरश्च ब्राह्मकन्दः सुकन्दकः ।**
**वृद्धिदो व्याधिहन्ता च वसुनेत्रमिताह्वयः ॥८७॥**
**वाराही तिक्तकटुका विषपित्तकफापहा ।**
**कुष्ठमेहक्रिमिहरा वृष्या बल्या रसायनी ॥८८॥**

(१) वाराही, (२) सू(शू)करी, (३) क्रोडकान्ता, (४) गृष्टि, (५) विष्वक्सेनकान्ता, (६) वराही, (७) कौमारी, (८) ब्रह्मपुत्री, (९) त्रिनेत्रा, (१०) क्रौडी, (११) कन्या, (१२) गृष्टिका, (१३) माधवेष्टा, (१४) सूकरकन्द, (१५) क्रोडी, (१६) वनवासी, (१७) कुष्ठनाशन, (१८) वन्य, (१९) अमृत, (२०) महावीर्य, (२१) महौषधि, (२२) शवरकन्द, (२३) वराहकन्द, (२४) वीर, (२५) ब्राह्मकन्द, (२६) सुकन्दक, (२७) वृद्धिद र (२८) व्याधिहन्ता : यी अठ्ठाईस नाम रानी गिठोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो तथा विषविकार, पित्तविकार र कफविकार नाशक हुन्छ । यसले कुष्ठ, प्रमेह र कीरा नाश गर्दछ । यो वीर्यवर्धक, बलवर्धक र रसायनी हुन्छ ।

### विष्णुकन्द

**विष्णुकन्दो विष्णुगुप्तः सुपुष्टो बहुसम्पुटः ।**
**जलवासो बृहत्कन्दो दीर्घवृन्तो हरिप्रियः ॥८९॥**
**विष्णुकन्दस्तु मधुरः शिशिरः पित्तनाशनः ।**
**दाहशोफहरो रुच्यः सन्तर्पणकरः परः ॥९०॥**

विष्णुकन्द, विष्णुगुप्त, सुपुष्ट, बहुसम्पुट, जलवास, बृहत्कन्द, दीर्घवृन्त र हरिप्रिय : यी नाम विष्णुकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह र सुजन नाशक हुन्छ । यो रुचिकर र अत्यन्त तृप्तिदायक हुन्छ ।

### धारिणीकन्द

**धारिणी धारणीया च वीरपत्री सुकन्दकः ।**
**कन्दालुर्वनकन्दश्च कन्दाद्यो दण्डकन्दकः ॥९१॥**
**मधुरो धारिणीकन्दः कफपित्तामयापहः ।**
**वक्त्रदोषप्रशमनः कुष्ठकण्डूतिनाशनः ॥९२॥**

धारिणी, धारणीया, वीरपत्री, सुकन्दक, कन्दालु, वनकन्द, कन्दाद्य र दण्डकन्दक : यी धारिणीकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो हुन्छ । यसले कफविकार, पित्तविकार, मुखका रोग, कुष्ठ र चिलाउने रोग नाश गर्दछ ।

### चाँदमरुवा (नाकुली)

**नाकुली सर्पगन्धा च सुगन्धा रक्तपत्रिका ।**
**ईश्वरी नागगन्धा चाप्यहिभुक्स्वरसा तथा ॥**
**सर्पादनी व्यालगन्धा ज्ञेया चेति दशाह्वया ॥९३॥**

(१) नाकुली, (२) सर्पगन्धा, (३) सुगन्धा, (४) रक्तपत्रिका, (५) ईश्वरी, (६) नागगन्धा, (७) अहिभुक् (ज्), (८) स्वरसा, (९) सर्पादनी र (१०) व्यालगन्धा : यी दश नाम नाकुलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### गन्धनाकुली

**अन्या महासुगन्धा च सुवहा गन्धनाकुली ।**
**सर्पाक्षी फणिहन्त्री च नकुलाढ्याऽहिभुक्च सा ॥९४॥**
**विषमर्दनिका चाहिमर्दिनी विषमर्दिनी ।**
**महाहिगन्धाऽहिलता ज्ञेया सा द्वादशाह्वया ॥९५॥**

(१) महासुगन्धा, (२) सुवहा, (३) गन्धनाकुली, (४) सर्पाक्षी, (५) फणिहन्त्री, (६) नकुलाढ्या, (७) अहिभुक्, (८) विषमर्दनिका, (९) अहिमर्दिनी, (१०) विषमर्दिनी, (११) महाहिगन्धा र (१२) अहिलता : यी बाह्र नाम गन्धनाकुलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### नाकुलीद्वयका गुण

**नाकुलीयुगलं तिक्तं कटूष्णं च त्रिदोषजित् ।**

**अनेकविषविध्वंसि किञ्चिच्छ्रेष्ठं द्वितीयकम् ॥९६॥**

दुवै थरी नाकुली तीता, पिरा, उष्णवीर्यका र त्रिदोषनाशक हुन्छन् । यिनले अनेक प्रकारका विषविकार पनि नाश गर्दछन् । नाकुलीभन्दा गन्धनाकुली केही उत्तम हुन्छ ।

**मालाकन्द**

**अथ मालाकन्दः स्यादालिकन्दश्च पङ्क्तिकन्दश्च ।**
**त्रिशिखदला ग्रन्थिदला कन्दलता कीर्तिता षोढा ॥९७॥**
**मालाकन्दः सुतीक्ष्णः स्यात् गण्डमालाविनाशकः ।**
**दीपनो गुल्महारश्च वातश्लेष्मापकर्षकृत् ॥९८॥**

(१) मालाकन्द, (२) आलिकन्द, (३) पङ्क्तिकन्द, (४) त्रिशिखदला, (५) ग्रन्थिदला र (६) कन्दलता : यी छ नाम अमरकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति तिक्खर र गण्डमाला रोग नाशक हुन्छ । यो दीपनी तथा गुल्म, वातविकार र कफविकार नाशक पनि हुन्छ ।

**बिराले लहरो (विदारीकन्द)**



**विदारिका स्वादुकन्दा सिता शुक्ला शृगालिका ।**
**विदारी वृष्यकन्दा च विडाली वृष्यवल्लिका ॥९९॥**
**भूकूष्माण्डी स्वादुलता गजेष्टा वारिवल्लभा ।**
**ज्ञेया कन्दफला चेति मनुसङ्ख्याह्वया मता ॥१००॥**
**विदारी मधुरा शीता गुरुः स्निग्धाऽस्रपित्तजित् ।**
**ज्ञेया च कफकृत्पुष्टिबल्या वीर्य्यविवर्धिनी ॥१०१॥**

(१) विदारिका, (२) स्वादुकन्दा, (३) सिता, (४) शुक्ला, (५) शृगालिका, (६) विदारी, (७) वृष्यकन्दा, (८) विडाली, (९) वृष्यवल्लिका, (१०) भूकूष्माण्डी, (११) स्वादुलता, (१२) गजेष्टा, (१३) वारिवल्लभा र (१४) कन्दफला : यी चौध नाम बिराले लहरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, पचाउन कठिन, चिल्लो र रक्तपित्तलाई जित्ने गुणको हुन्छ । यसले कफविकार गर्दछ तथा पुष्टि, बल र वीर्य बढाउँदछ ।

**दूधे बिराले लहरो (क्षीरविदारी)**

**अन्या क्षीरविदारी स्यादिक्षुगन्धेक्षुवल्लरी ।**
**इक्षुवल्ली क्षीरकन्दः क्षीरवल्ली पयस्विनी ॥१०२॥**

**क्षीरशुक्ला क्षीरलता पयःकन्दा पयोलता ।**
**पयोविदारिका चेति विज्ञेया द्वादशाह्वया ॥१०३॥**
**ज्ञेया क्षीरविदारी च मधुराम्ला कषायका ।**
**तिक्ता च पित्तशूलघ्नी मूत्रमेहामयापहा ॥१०४॥**
**क्षीरकन्दो द्विधा प्रोक्तो विनालस्तु सनालकः ।**
**विनालो रोगहर्ता स्याद्वयस्तम्भो सनालकः ॥१०५॥**

(१) क्षीरविदारी, (२) इक्षुगन्धा, (३) इक्षुवल्लरी, (४) इक्षुवल्ली, (५) क्षीरकन्द, (६) क्षीरवल्ली, (७) पयस्विनी, (८) क्षीरशुक्ला, (९) क्षीरलता, (१०) पयःकन्दा, (११) पयोलता र (१२) पयोविदारिका : यी बाह्र नाम दूधे बिराले लहरोका संस्कृत पर्यायवाची नामहरू हुन् । दूधे बिराले लहरो गुलियो, अमिलो, टर्रो र तीतो हुन्छ । यसले पित्तविकार, शूल र प्रमेह नाश गर्दछ । यो लहरो पनि डाँठ हुने र नहुने गरी दुई प्रकारको हुन्छ । डाँठ नहुनेले रोग नाश गर्दछ भने डाँठ हुनेले उमेरलाई स्थिर राख्दछ ।

### सिमलको जरा (शाल्मलीकन्द)

**शाल्मलीकन्दकश्चाथ विजुलो वनवासकः ।**

**वनवासी मलघ्नश्च मलहन्ता षडाह्वयः ॥१०६॥**
**मधुरः शाल्मलीकन्दो मलसङ्ग्रहरोधजित्**
**शिशिरः पित्तदाहार्तिशोषसन्तापनाशनः ॥१०७॥**

(१) शाल्मलीकन्दक, (२) विजुल, (३) वनवासक, (४) वनवासी, (५) मलघ्न र (६) मलहन्ता : यी छ नाम सिमलको जराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, कब्जियत नाशक र शीतवीर्यको हुन्छ । यसले पित्तविकार, डाह, सुजन र सन्ताप नाश गर्दछ ।

### बाँको (चण्डालकन्द)

**प्रोक्तश्चण्डालकन्दः स्यादेकपत्रो द्विपत्रकः ।**
**त्रिपत्रोऽथ चतुष्पत्रः पञ्चपत्रश्च भेदतः ॥१०८॥**
**चण्डालकन्दो मधुरः कफपित्तास्रदोषजित् ।**
**विषभूतादिदोषघ्नी विज्ञेयश्च रसायनः ॥१०९॥**

बाँको एकपाते, दुईपाते, तीनपाते, चारपाते र पाँचपाते गरी पाँच प्रकारको हुन्छ । यसको कन्द गुलियो तथा कफविकार, पित्तविकार र रक्तविकार नाशक हुन्छ । यसले विषविकार, भूतबाधा

आदि जस्तो दोष नाश गर्दछ । यो रसायनो पान हुन्छ भनो जान्नु पर्दछ ।

### तैलकन्द

**अथ तैलकन्द उक्तो द्रावककन्दस्तिलाङ्कितदलश्च ।**
**करवीरकन्दसञ्ज्ञो ज्ञेयस्तिलचित्रपत्रको बाणैः ॥११०॥**
**लोहद्रावो तैलकन्दः कटूष्णो वातापस्मारापहारी विषारिः ।**
**शोफघ्नः स्याद् बन्धकारी रसस्य द्रागेवासौ देहसिद्धिं विधत्ते ॥१११॥**
**अश्वारिपत्रसङ्काशः तिलबिन्दुसमन्वितः ।**
**संस्निग्धाधस्थभूमिस्थः तिलकन्दोऽतिविस्तृतः ॥११२॥**

तैलकन्द, द्रावककन्द, तिलाङ्कितदल, करवीरकन्द र तिलचित्रपत्रक : यी पाँच नाम तैलकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले फलामलाई पगाल्दछ । यो पिरो, उष्णवीर्यको तथा वातविकार, छारेरोग र विषविकार नाशक हुन्छ । यसले सुजन ठिक गर्दछ । यसले पारोलाई अनेक थरी रसायनका लागि योग्य बनाउँदछ । शरीरलाई शुद्धिकरण गर्दछ । यसको पात करवीरको जस्तो र ससाना थोप्लाले युक्त हुन्छ । यसको गानो धेरै ठूलो हुन्छ । यो उम्रिएको जमिन मुनि ( वरिपरि) चिल्लो हुन्छ ।



### अम्लवल्ली

**त्रिपर्णिका बृहत्पत्री छिन्नग्रन्थिनिका च सा ।**
**कन्दालः कन्दबहुलाऽप्यम्लवल्ली विषापहा ॥११३॥**
**त्रिपर्णी मधुरा शीता श्वासकासविनाशनी ।**
**पित्तप्रकोपशमनी विषव्रणहरा परा ॥११४॥**

त्रिपर्णिका, बृहत्पत्री, छिन्नग्रन्थिनिका, कन्दाल, कन्दबहुला, अम्लवल्ली र विषापहा : यी त्रिपर्णीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा दम, खोकी, पित्तविकार, विषविकार र विशेषतः घाउखटिरा नाशक हुन्छ ।

### मुसलीकन्द

**मुसली तालमूली च सुवहा तालमूलिका ।**
**गोधापदी हेमपुष्पी भूताली दीर्घकन्दिका ॥११५॥**
**मुसली मधुरा शीता वृष्या पुष्टिबलप्रदा ।**

**पिच्छिला कफदा पित्तदाहश्रमहरा परा ॥११६॥**
**मुसली स्याद्द्विधा प्रोक्ता श्वेता चापरसञ्ज्ञका ।**
**श्वेता स्वल्पगुणोपेता अपरा च रसायनी ॥११७॥**

मुसली, तालमूली, सुवहा, तालमूलिका, गोधापदी, हेमपुष्पी, भूताली र दीर्घकन्दिका : यी मुसलीकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, वीर्यवर्धक, पुष्टिदायक, बलदायक, लेस्याइलो, कफविकार गर्ने तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ । मुसली सेतो र कालो गरी दुई किसिमको हुन्छ । सेतो मुसली कम गुनिलो हुन्छ भने कालो मुसली रसायनी हुन्छ ।

**गुच्छाह्वकन्द**

**गुच्छाह्वकन्दस्तवकाह्वकन्दको गुलुच्छकन्दश्च विघण्टिकाभिधः ।**
**गुलुच्छकन्दो मधुरः सुशीतलो वृष्यप्रदस्तर्पणदाहनाशनः ॥११८॥**

गुच्छाह्वकन्द, स्तवकाह्वकन्द, गुलुच्छकन्द र विघण्टिकाकन्द : यी कन्द विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, वीर्यदायक, तृप्तिदायक र डाह नाशक हुन्छ ।



**लक्ष्मणा**

**लक्ष्मणा पुत्रकन्दा च पुत्रदा नागिनी तथा ।**
**नागाह्वा नागपत्री च तुलिनी मञ्जिका च सा ॥**
**अस्रबिन्दुच्छदा चैव सुकन्दा दशधाह्वया ॥११९॥**
**लक्ष्मणा मधुरा शीता स्त्रीवन्ध्यत्वविनाशनी ।**
**रसायनकरी बल्या त्रिदोषशमनी परा ॥१२०॥**

(१) लक्ष्मणा, (२) पुत्रकन्दा, (३) पुत्रदा, (४) नागिनी, (५) नागाह्वा, (६) नागपत्री, (७) तुलिनी, (८) मञ्जिका, (९) अस्रबिन्दुच्छदा र (१०) सुकन्दा : यी दश नाम लक्ष्मणकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कन्द गुलियो, शीतवीर्यको, स्त्रीको बाँझोपना हटाउने, रसायनी, बलदायक र विशेषतः त्रिदोष नाशक हुन्छ ।

**करजोडि**

**हस्तपर्यायपूर्वस्तु जोडिर्वैद्यवरैः स्मृतः ।**
**करजोडिरिति ख्यातो रसबन्धादिवश्यकृत् ॥१२१॥**

हस्तशब्दका पर्यायवाची नामका पछाडि जोडि शब्द आएका शब्दले ओखती विशेषलाई बुझाउँदछ । यो ओखती पारो प्रशोधन गर्न र वशीकरण गर्न प्रयोग हुन्छ ।

**बेथे (वास्तुक)**

**वास्तुकं वास्तु वास्तूकं वस्तुकं हिलमोचिका ।**
**शाकराजो राजशाकश्चक्रवर्तिश्च कीर्तितः ॥१२२॥**
**वास्तुकं तु मधुरं सुशीतलं क्षारमीषदम्लं त्रिदोषजित् ।**
**रोचनं ज्वरहरं महार्शसां नाशनञ्च मलमूत्रशुद्धिकृत् ॥१२३॥**

वास्तुक, वास्तु, वास्तूक, वस्तुक, हिलमोचिका, शाकराज, राजशाक र चक्रवर्ति : यी नाम बेथेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, नुनिलो, हल्का अमिलो र त्रिदोष नाशक हुन्छ । बेथे रोचनी, ज्वरनाशक, पुरानो अल्काई नाशक र मलमूत्र प्रशोधन गर्ने गुणको हुन्छ ।

**अमिलो पालुङ्गो (चुक्रवास्तूक)**



**चुक्रं तु चुक्रवास्तूकं लिकुचं चाम्लवास्तुकम् ।**
**दलाम्लमम्लशाकाख्यमम्लादि हिलमोचिका ॥१२४॥**
**चुक्रं स्यादम्लपत्रन्तु लघूष्णं वातगुल्मनुत् ।**
**रुचिकृद्दीपनं पथ्यं ईषत्पित्तकरं परम् ॥१२५॥**

चुक्र, चुक्रवास्तूक, लिकुच, अम्लवास्तुक, दलाम्ल, अम्लशाकाख्य, अम्लादि र हिलमोचिका : यी अमिलो पालुङ्गोका संस्कृत पर्यायवाची नामहरू हुन् । अमिलो पालुङ्गो अमिलो पात भएको, पचाउन सहज, उष्णवीर्यको तथा वातविकार र गुल्म नाशक हुन्छ । यो रुचिकर, दीपनी, पथ्य र थोरै पित्तविकार गर्ने गुणको हुन्छ ।

**सानो बेथे (चिल्लीवास्तूक)**

**पलाशलोहिता चिल्ली वास्तुका चिल्लिका च सा ।**
**मृदुपत्री क्षारदला क्षारपत्री तु वास्तुकी ॥१२६॥**
**चिल्ली वास्तुकतुल्या च सक्षारा श्लेष्मपित्तनुत् ।**
**प्रमेहमूत्रकृच्छ्रघ्नी पथ्या च रुचिकारिणी ॥१२७॥**

पलाशलोहिता, चिल्ली, वास्तुका, चिल्लिका, मृदुपत्री, क्षारदला, क्षारपत्री र वास्तुकी : यी रातो पात हुने बेथेका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गुण बेथेका जस्तै हुन्छन् । यो नुनिलो हुन्छ । यसले कफविकार, पित्तविकार, प्रमेह र मूत्रकृच्छ्र नाश गर्दछ । यो बेथे पथ्य र रुचिकर हुन्छ ।

बेथे विशेष (श्वेतचिल्ली)

**श्वेतचिल्ली तु वास्तूकी सुपथ्या श्वेतचिल्लिका ।**
**सितचिल्ल्युपचिल्ली च ज्वरघ्नी क्षुद्रवास्तुकी ॥१२८॥**
**श्वेतचिल्ली सुमधुरा क्षारा च शिशिरा च सा ।**
**त्रिदोषशमनी पथ्या ज्वरदोषविनाशनी ॥१२९॥**

श्वेतचिल्ली, वास्तूकी, सुपथ्या, श्वेतचिल्लिका, सितचिल्ली, उपचिल्ली, ज्वरघ्नी र क्षुद्रवास्तुकी : यी सेतो बेथेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, नुनिलो, शीतवीर्यको, त्रिदोषनाशक, पथ्य र ज्वर नाशक हुन्छ ।

बेथे विशेष (शुनकचिल्ली)



**अन्या शुनकचिल्ली स्यात् सुचिल्ली श्वानचिल्लिका ।**
**श्वचिल्ली कटुतीक्ष्णा च कण्डूतिव्रणहारिणी ॥१३०॥**

शुनकचिल्ली, सुचिल्ली, श्वानचिल्लिका र श्वचिल्ली : यी बेथेविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तिक्खर तथा चिलाउने रोग र घाउखटिरा नाशक हुन्छ ।

सजिवनको साग (शिग्रुपत्र)

**शिग्रुपत्रभवं शाकं रुच्यं वातकफापहम् ।**
**कटूष्णं दीपनं पथ्यं क्रिमिघ्नं पाचनं परम् ॥१३१॥**

सजिवनको साग रुचिकर तथा वातविकार र कफविकार नाशक हुन्छ । यो पिरो, उष्णवीर्यको, दीपनी, पथ्य, कीरानाशक र अत्यन्त पाचनी हुन्छ ।

पालुङ्गो (पालक्य)

**पालक्यं तु पलक्यायां मधुरा क्षुरपत्रिका ।**

**सुपुत्रा स्निग्धपत्रा च ग्रामीणा ग्राम्यवल्लभा ॥१३२॥**
**पालक्यमीषत्कटुकं मधुरं पथ्यशीतलम् ।**
**रक्तपित्तहरं ग्राहि ज्ञेयं सन्तर्पणं परम् ॥१३३॥**

पालक्य, पलक्या, मधुरा, क्षुरपत्रिका, सुपुत्रा, स्निग्धपत्रा, ग्रामीणा र ग्राम्यवल्लभा : यी पालुङ्गोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो हल्का पिरो, गुलियो, पथ्य र शीतवीर्यको हुन्छ । यसले रक्तपित्त नाश गर्दछ । यो ग्राही अनि अत्यन्त तृप्तिदायक हुन्छ ।

**सेतो लट्टे (राजशाकिनी)**

**राजाभिधानपूर्वा तु नगाह्वा चापरेण वा ।**
**राजाद्रिः स्याद्राजगिरिर्ज्ञातव्या राजशाकिनी ॥१३४॥**
**राजशाकिनिका रुच्या पित्तघ्नी शीतला च सा ।**
**सैवातिशीतला रुच्या विज्ञेया स्थूलशाकिनी ॥१३५॥**

राजा वा यसका पर्यायवाची शब्दका पछाडि गिरी वा यसका पर्यायवाची शब्द जोडिएका नाम, राजाद्रि, राजगिरी र राजशाकिनी : यी सेतो लट्टेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिकर, पित्तनाशक र शीतवीर्यको हुन्छ । स्थूलशाकिनी जातको लट्टे भने अति नै शीतवीर्यको र रुचिकर हुन्छ ।

**पवै (उपोदकी)**

**उपोदकी कलम्बी च पिच्छिला पिच्छिलच्छदा ।**
**मोहिनी मदशाकश्च विशालाद्या ह्युपोदकी ॥१३६॥**
**उपोदकी कषायोष्णा कटुका मधुरा च सा ।**
**निद्राऽऽलस्यकरी रुच्या विष्टम्भश्लेष्मकारिणी ॥१३७॥**

उपोदकी, कलम्बी, पिच्छिला, पिच्छिलच्छदा, मोहिनी, मदशाक र विशाल-उपोदकी ( वल्ल्युपोदकी) : यी पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, पिरो र गुलियो हुन्छ । यसले निद्रा लगाउँदछ र आलस्य बनाउँदछ । यो रुचिकर, विष्टम्भी र कफविकार गर्ने गुणको हुन्छ ।

**सानो पवै**

**उपोदक्यपरा क्षुद्रा सूक्ष्मपत्रा तु मण्डपी ।**

**रसवीर्यविपाकेषु सदृशी पूर्वया स्वयम् ॥१३८॥**

क्षुद्रोपोदकी, सूक्ष्मपत्रा र मण्डपी : यी सानो पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । रस, वीर्य र विपाकमा यो पवै सरह हुन्छ ।

**बनपवै**

**उपोदकी तृतीया च वन्यजा वनजाह्वया ।**
**वनजोपोदकी तिक्ता कटूष्णा रोचनी च सा ॥१३९॥**

अर्को वनमा हुने वन्यजा र वनजाह्वया नामको पवै तीतो, पिरो, उष्णवीर्यको र रोचनी हुन्छ ।

**पवैविशेष (मूलपोती)**

**मूलपोती क्षुद्रवल्ली पोतिका क्षुद्रपोतिका ।**
**क्षुपोपोदकनाम्नी च वल्लिः शकटपोतिका ॥१४०॥**
**मूलपोती त्रिदोषघ्नी वृष्या बल्या लघुश्च सा ।**
**बलपुष्टिकरी रुच्या जठरानलदीपनी ॥१४१॥**

मूलपोती, क्षुद्रवल्ली, पोतिका, क्षुद्रपोतिका, क्षुपावल्लि, उपोदकवल्लि र शकटपोतिका : यी नाम पवै विशेष वा पवैका लहराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो त्रिदोष नाशक, वीर्यशाली, बलदायक र पचाउन हलुका हुन्छ । यसले बल र पुष्टि दिन्छ । यो रुचिकर र जठराग्निलाई बाल्ने गुणको हुन्छ ।

**वन बेथेविशेष (कुणञ्जर)**

**कुणञ्जरस्त्रिदोषघ्नो मधुरो रुच्यदीपकः ।**
**ईषत्कषायः सङ्ग्राही पित्तश्लेष्मकरो लघुः ॥१४२॥**

वनबेथे विशेष त्रिदोष नाशक, गुलियो, रुचिकर र दीपनी हुन्छ । यो केही टर्रो, ग्राही, पित्तविकार गर्ने, कफविकार गर्ने र पचाउन सहज हुने गुणको हुन्छ ।

**कुसुम वा वनकुसुमको साग (कौसुम्भशाक)**

**कौसुम्भशाकं मधुरं कटूष्णं विण्मूत्रदोषापहरं मदघ्नम् ।**

**दृष्टिप्रसादं कुरुते विशेषाद्रुचिप्रदं दीप्तिकरं च वह्नेः ॥१४३॥**

कुसुमको साग गुलियो, पिरो, उष्णवीर्यको तथा मलमूत्रका विकार र नसा नाशक हुन्छ । यसले दृष्टिक्षमता बढाउँदछ तथा विशेष गरी रुचि र पाचनशक्ति बढाउँदछ ।

### सुपको साग (शतपुष्पादल)

**शतपुष्पादलं सोष्णं मधुरं गुल्मशूलजित् ।**
**वातघ्नं दीपनं पथ्यं पित्तहृद्रुचिदायकम् ॥१४४॥**

सुपको साग उष्णवीर्यको, गुलियो र गुल्म र शूललाई जित्ने गुणको हुन्छ । यो वातविकार नाशक, दीपनी, पथ्य, पित्तविकार नाशक र रुचिदायक हुन्छ ।

### लुँडेको साग (तण्डुलीयपत्र)

**तण्डुलीयकदलं हिममर्शःपित्तरक्तविषकासविनाशि ।**
**ग्राहकञ्च मधुरं च विपाके दाहशोषशमनं रुचिदायि ॥१४५॥**



लुँडेको साग शीतवीर्यको हुन्छ । यसले अल्काई, पित्तविकार, रक्तविकार, विषविकार र खोकी नाश गर्दछ । यो ग्राही, पचेपछि गुलियो तथा डाह, सुजन नाशक एवं रुचिकर हुन्छ ।

### रायोको साग (राजिकापत्र)

**कटूष्णं राजिकापत्रं क्रिमिवातकफापहम् ।**
**कण्ठामयहरं स्वादु वह्निदीपनकारकम् ॥१४६॥**

रायोको साग पिरो र उष्णवीर्यको हुन्छ । यसले कीरा, वातविकार, कफविकार र घाँटीका रोग नाश गर्दछ । यो स्वादिलो र पाचकाग्नि बाल्ने गुणको हुन्छ ।

### सर्सिउँको साग (सर्षपपत्र)

**सार्षपं पत्रमत्युष्णं रक्तपित्तप्रकोपनुत् ।**
**विदाहि कटुकं स्वादु शुक्रहृद्रुचिदायकम् ॥१४७॥**

सर्सिउँको साग अति उष्णवीर्यको तथा रक्तपित्तको प्रकोप नाशक हुन्छ । यो विदाही, पिरो, गुलियो, शुक्रनाशक र रुचिकर हुन्छ ।

चरिअमिलो (चाङ्गेरी)

**चाङ्गेरीशाकमत्युष्णं कटु रोचनपाचनम् ।**
**दीपनं कफवातार्शःसङ्ग्रहण्यतिसारजित् ॥१४८॥**

चरिअमिलो अति उष्णवीर्यको, पिरो, रोचनी, पाचनी र दीपनी हुन्छ । यसले कफविकार, वातविकार, अल्काई, सङ्ग्रहणी र अतिसारलाई जित्दछ ।

नुनढिकी (घोलिका)

**घोला च घोलिका घोली कलन्दुः कवलालुकम् ॥१४९॥**

घोला, घोलिका, घोली, कलन्दु र कवलालुक : यी घोलिकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

क्षेत्रजघोलिका

**क्षेत्रजं लवणं रुच्यमम्लं वातकफापहम् ॥१५०॥**



खेतमा हुने घोलिका नुनिलो, रुचिकर, अमिलो तथा वातविकार र कफविकार नाशक हुन्छ ।

आरामघोलिका

**आरामघोलिका चाम्ला रूक्षा रुच्याऽनिलापहा ।**
**पित्तश्लेष्मकरी चान्या सूक्ष्मा जीर्णज्वरापहा ॥१५१॥**

बगैंचातिर हुने आरामघोलिका नामक घोलिका अमिलो, रुखो, रुचिकर र वातविकार नाशक हुन्छ । यसले पित्तविकार र वातविकार गर्दछ । अर्कोथरी मसिनु खालको सूक्ष्म-आरामघोलिका नामक नुनढिकीले थाङ्ने ज्वर नाश गर्दछ ।

जिरीको साग (जीवन्ती शाक)

**जीवन्ती रक्तनालश्च ताम्रपत्रः सनालकः ।**
**शाकवीरस्तु मधुरो जीवशाकश्च मेषकः ॥१५२॥**
**जीवशाकः सुमधुरो बृंहणो वस्तिशोधनः ।**

दीपनः पाचनो बल्यो वृष्यः पित्तापहारकः ॥१५३॥

जीवन्ती, रक्तनाल, ताम्रपत्र, सनालक, शाकवीर, मधुर, जीवशाक र मेषक : यी जीवन्तीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, पौष्टिक र तल्लोपेट सफा गर्ने गुणको हुन्छ । यो दीपनी, पाचनी, बलदायक र वीर्यवर्धक हुन्छ तथा पित्तविकार नाशक पनि हुन्छ ।

### गन्धे (गौरसुवर्ण शाक)

**गौरसुवर्णं स्वर्णं सुगन्धिकं भूमिजं च वारिजं च ।**
**ह्रस्वं च गन्धशाकं कटुशृङ्गाटञ्च वर्णशाकाङ्कः ॥१५४॥**
**गौरसुवर्णं शिशिरं कफपित्तज्वरापहम् ।**
**पथ्यं दाहरुचिभ्रान्तिरक्तश्रमहरं परम् ॥१५५॥**

(१) गौरसुवर्ण, (२) स्वर्ण, (३) सुगन्धिक, (४) भूमिजं, (५) वारिज, (६) ह्रस्व, (७) गन्धशाक, (८) कटुशृङ्गाट र (९) वर्णशाक : यी नौ नाम गन्धेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको तथा कफविकार, पित्तविकार, जरो नाशक र पथ्य हुन्छ । यसले डाह, अरुचि, भ्रम, रक्तविकार र थकाई नाश गर्दछ ।



### पुनर्नवा र बेथेको साग (वर्षाभू-वसुक)

**वर्षाभूवसुकौ श्लेष्मवह्निमान्द्यानिलापहौ ।**
**पाके रूक्षतरौ गुल्मप्लीहशूलापहारकौ ॥१५६॥**

रातो पुनर्नवा र वर्षाभू : यी दुवै कफविकार, कमजोर पाचनशक्ति र वातविकार नाशक हुन्छन् । यी पचेपछि रुखा हुन्छन् । यिनले गुल्म, फियोसम्बन्धी रोग र शूलरोग नाश गर्दछन् ।

### फञ्जिका आदि पाँच साग

**फञ्जिका जीवनी पद्मा तर्कारी चुचुकः पृथक् ।**
**वातामयहरं ग्राहि दीपनं रुचिदायकम् ॥१५७॥**

चिन्डे, जीवनी, पद्मा, तर्कारी र चुचुकले वातजन्य विकार नाश गर्दछन् । यी ग्राहि, दीपनी र रुचिप्रद हुन्छन् ।

**फञ्ज्यादिपञ्चकं भेण्डा कुणञ्जस्त्रिपुटस्तथा ।**

**इत्यादि वनपत्राणां शाकमेकत्र योजितम् ॥१५८॥**
**दीपनं पाचनं रुच्यं बलवर्णविधायकम् ।**
**त्रिदोषशमनं पथ्यं ग्राहि वृष्यं सुखावहम् ॥१५९॥**

फञ्ज्यादि पाँथ थरी सागमा भेण्डा, कुणञ्ज र त्रिपुट आदि वन्य साग मिसाएर खाए त्यो दीपनी, पाचनी, रुचिकर, बलवर्धक, वर्णवर्धक, त्रिदोषनाशक, पथ्य, ग्राही, वीर्यवर्धक र सुखदायक समेत हुन्छ ।

## कुभिण्डो

**कर्कोटिका च कुष्माण्डी कुम्भाण्डी तु बृहत्फला ।**
**सुफला स्यात्कुम्भफला नागपुष्पफला मुनिः ॥१६०॥**
**मूत्राघातहरं प्रमेहशमनं कृच्छ्राश्मरीच्छेदनं**
**विण्मूत्रग्लपनं तृषार्त्तिशमनं जीर्णाङ्गपुष्टिप्रदम् ।**
**वृष्यं स्वादुतरं त्वरोचकहरं बल्यं च पित्तापहं**
**कुष्माण्डं प्रवरं वदन्ति भिषजो वल्लीफलानां पुनः ॥१६१॥**



(१) कर्कोटिका, (२) कुष्माण्डी, (३) कुम्भाण्डी, (४) बृहत्फला, (५) सुफला, (६) कुम्भफला र (७) नागपुष्पफला : यी सात नाम कुभिन्डोका संस्कृत पर्यायवाची नामहरू हुन् । कुभिन्डोले मूत्राघात (पिसाब बन्द हुने बाह्र थरीको रोग) नाश गर्दछ, प्रमेह (पिसाबसँग मिसिई वीर्य अथवा शरीरका अरू धातु पातलिएर जाने विभिन्न रोगहरू) लाई शान्त पार्दछ तथा कृच्छ्र (मूत्रकृच्छ्र आदि पिसाबसम्बन्धी रोगहरू) र पत्थरीलाई छेदन (एक आपसमा मिली जमेर बसेको कफ आदि दोषलाई आफ्नो तागतले अलग गरी फोर्दछ तर बाहिर निकाल्न सक्ने क्षमता हुन्न) गर्दछ । दिसापिसाब खुलाउँदछ, तिर्खारोग नाश गर्दछ र कमजोर अङ्गलाई पुष्ट बनाउँदछ । यो वीर्यशाली, गुलियो, अरुची नाशक, बलदायक र पित्तविकार नाशक हुन्छ । वैद्यजन कुभिन्डोलाई लहरामा फल्ने फलमध्येमा उत्तम फल हो भन्दछन् ।

## गोरक्षतुम्बी

**गोरक्षतुम्बी गोरक्षी नवालाम्बुर्घटाभिधा ।**
**कुम्भालाम्बुर्घटालाम्बुः कुम्भतुम्बी च सप्तधा ॥१६२॥**
**कुम्भतुम्बी सुमधुरा शिशिरा पित्तहारिणी ।**
**गुरुः सन्तर्पणी रुच्या वीर्यपुष्टिबलप्रदा ॥१६३॥**

(१) गोरक्षतुम्बी, (२) गोरक्षी, (३) नवालाम्बु, (४) घटाम्बु, (५) कुम्भालाम्बु, (६) घटालाम्बु र (

७) कुम्भतुम्बी : यी सात नाम गोरखतुम्बीका संस्कृत पर्यायवाची नामहरू हुन् । गोरखतुम्बी गुलियो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । यो पचाउन कठिन, तृप्तिदायक, रुचिकर तथा वीर्य, पुष्टि र बलदायक हुन्छ ।

### लौका (क्षीरतुम्बी)

**क्षीरतुम्बी दुग्धतुम्बी दीर्घवृत्तफलाभिधा ।**
**इक्ष्वाकुः क्षत्रियवरा दीर्घबीजा महाफला ॥१६४॥**
**क्षीरिणी दुग्धबीजा च दन्तबीजा पयस्विनी ।**
**महावल्ली ह्यलाम्बुश्च श्रमघ्नी शरभूमिता ॥१६५॥**
**तुम्बी सुमधुराः स्निग्धाः पित्तघ्नी गर्भपोषकृत् ।**
**वृष्या वातप्रदा चैव बलपुष्टिविवर्धनी ॥१६६॥**

(१) क्षीरतुम्बी, (२) दुग्धतुम्बी, (३) दीर्घफला, (४) वृत्तफला, (५) इक्ष्वाकु, (६) क्षत्रियवरा, (७) दीर्घबीजा, (८) महाफला, (९) क्षीरिणी, (१०) दुग्धबीजा, (११) दन्तबीजा, (१२) पयस्विनी, (१३) महावल्ली, (१४) अलाम्बु र (१५) श्रमघ्नी : यी पन्ध्र नाम लौकाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, चिल्लो, पित्तविकार नाशक, गर्भलाई पोस्ने, वीर्यवर्धक, वातविकारकारी, बलवर्धक र पुष्टिवर्धक हुन्छ । 

### सानो तीते तुम्बा (भूतुम्बी)

**भूतुम्बी नागतुम्बी च चक्रचापसमुद्भवा ।**
**वल्मीकसम्भवा देवी दिव्यतुम्बी षडाह्वया ॥१६७॥**
**भूतुम्बी कटुकोष्णा च सन्निपातापहारिणी ।**
**दन्तार्गलं दन्तरोधं धनुर्वातादिदोषनुत् ॥१६८॥**

(१) भूतुम्बी, (२) नागतुम्बी, (३) चक्रचापसमुद्भवा, (४) वल्मीकसम्भवा, (५) देवी र (६) दिव्यतुम्बी : यी छ नाम सानो तीते तुम्बाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा सन्निपात, दाँतसम्बन्धी रोग, धनुष्टङ्कार रोग आदि समेत नाशक हुन्छ ।

### तरबुजो (कलिङ्ग)

**मांसलफलः कलिङ्गश्चित्रफलश्चित्रवल्लिकश्चित्रः ।**
**मधुरफलो वृत्तफलो घृणाफलो मांसलो नवधा ॥१६९॥**
**कलिङ्गो मधुरः शीतः पित्तदाहश्रमापहः ।**

**वृष्यः सन्तर्पणो बल्यो वीर्यपुष्टिविवर्धनः ॥१७०॥**

(१) मांसलफल, (२) कलिङ्ग, (३) चित्रफल, (४) चित्रवल्लिक, (५) चित्र, (६) मधुरफल, (७) वृत्तफल, (८) घृणाफल र (९) मांसल : यी नौ नाम तरबुजोका संस्कृत पर्यायवाची नामहरू हुन् । तरबुजो गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ । यो कामशक्तिवर्धक, तृप्तिदायक, बलकारी, वीर्यवर्धक र पुष्टिवर्धक हुन्छ ।

### पाटेतोरियाँ (कोशातकी)

**कोशातकी स्वादुफला सुपुष्पा कर्कोटकी स्यादपि पीतपुष्पा ।**
**धाराफला दीर्घफला सुकोशा धामार्गवः स्यान्नवसञ्ज्ञकोऽयम् ॥१७१॥**
**धाराकोशातकी स्निग्धा मधुरा कफपित्तनुत् ।**
**ईषद्वातकरी पथ्या रुचिकृच्चलवीर्यदा ॥१७२॥**

(१) कोशातकी, (२) स्वादुफला, (३) सुपुष्पा, (४) कर्कोटकी, (५) पीतपुष्पा, (६) धाराफला, (७) दीर्घफला, (८) सुकोशा र (९) धामार्गव : यी नौ नाम पाटेतोरियाँका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चिल्लो, गुलियो तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले थोरै वातविकार गर्दछ । यो पथ्य, रुचिवर्धक र चलायमान- वीर्यदायक हुन्छ ।



### हस्तिकोशातकी

**हस्तिकोशातकी त्वन्या बृहत्कोशातकी तथा ।**
**महाकोशातकी वृत्ता ग्राम्यकोशातकी शराः ॥१७३॥**
**हस्तिकोशातकी स्निग्धा मधुराऽऽध्मानवातकृत् ।**
**वृष्या क्रिमिकरी चैव व्रणसंरोपणी च सा ॥१७४॥**

(१) हस्तिकोशातकी, (२) बृहत्कोशातकी, (३) महाकोशातकी, (४) वृत्ता र (५) ग्राम्यकोशातकी : यी पाँच नाम घिरौँलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चिल्लो, गुलियो तथा आध्मान र वातविकार गर्ने गुणको हुन्छ । घिरौँलो वीर्यवर्धक, पेटमा कीरा पार्ने र घाउ भर्ने गुणको हुन्छ ।

### परबर वा चिचिण्डो (स्वादुपटोली)

**ज्ञेया स्वादुपटोली च पटोली मण्डली च सा ।**
**पटोली मधुरादिः स्यात् प्रोक्ता दीर्घपटोलिका ॥**
**स्निग्धपर्णी स्वादुपूर्वैः पर्यायैश्च पटोलिका ॥१७५॥**

पटोली स्वादुपित्तघ्नी रुचिकृज्ज्वरनाशनी ॥
बलपुष्टिकरीं पथ्या ज्ञेया दीपनपाचनी ॥१७६॥
पटोलपत्रं पित्तघ्नं नालं तस्य कफापहम् ।
फलं त्रिदोषशमनं मूलं चास्य विरेचनम् ॥१७७॥

स्वादुपटोली, पटोली, मण्डली, मधुरपटोली, दीर्घपटोलिका, स्निग्धपर्णी र स्वादु शब्दको पर्यायवाची शब्दका पछाडि पटोली जोडिएका शब्द : यी पटोली (परबर र चिचिण्डो) का संस्कृत पर्यायवाची शब्दहरू हुन् । पटोली गुलियो, पित्तविकार नाशक, रुचिकर र ज्वरनाशक हुन्छ । यसले बल र पुष्टि दिन्छ । यो पथ्य, दीपनी र पाचनी हुन्छ भनी जान्नू । पटोलको पातले पित्तविकार, डाँठले कफविकार र फलले त्रिदोष नाश गर्दछ । यसको जरा विरेचन गराउन प्रयोग हुन्छ ।

गोठाले काँक्रो विशेष (मृगाक्षी)

मृगाक्षी शतपुष्पा च मृगेर्वारुर्मृगादनी ।
चित्रवल्ली बहुफला कपिलाक्षी मृगेक्षणा ॥१७८॥
चित्रा चित्रफला पथ्या विचित्रा मृगचिर्भिटा ।
मरुजा कुम्भसी देवी कट्फला लघुचिर्भिटा ॥

सेन्दिनी च महादेवी वुधैः सा विंशतिर्मताः ॥१७९॥
मृगाक्षी कटुका तिक्ता पाकेऽम्ला वातनाशनी ।
पित्तकृत् पीनसहरा दीपनी रुचिकृत् परा ॥१८०॥

(१) मृगाक्षी, (२) शतपुष्पा, (३) मृगेर्वारु, (४) मृगादनी, (५) चित्रवल्ली, (६) बहुफला, (७) कपिलाक्षी, (८) मृगेक्षणा, (९) चित्रा, (१०) चित्रफला, (११) पथ्या, (१२) विचित्रा, (१३) मृगचिर्भिटा, (१४) मरुजा, (१५) कुम्भसी, (१६) देवी, (१७) कट्फला, (१८) लघुचिर्भिटा, (१९) सेन्दिनी र (२०) महादेवी : यी उन्नाईस नाम मृगको आँखाजस्तो गोठाले काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो काँक्रो पिरो, तीतो, पचेपछि अमिलो र वातविकार नाशक हुन्छ । यसले पित्तविकार बढाउँदछ तथा पिनास नाश गर्दछ । यो दीपनी र अत्यन्त रुचिकर हुन्छ ।

काउछे सिमी (दधिपुष्पी)

दधिपुष्पी खट्वाङ्गी खट्वा पर्यङ्कपादिका कूपा ।
खट्वापादी वंशया काकोली कोलपालिका नवधा ॥१८१॥
दधिपुष्पी कटुमधुरा शिशिरा सन्तापपित्तदोषघ्नी ।
वातामयदोषकरी गुरुस्तथाऽरोचकघ्नी च ॥१८२॥

(१) दधिपुष्पी, (२) खट्वाङ्गी, (३) खट्वा, (४) पर्यङ्कपादिका, (५) कूपा, (६) खट्वापादी, (७) वंश्या, (८) काकोली र (९) कोलपालिका : यी नौ नाम काउछेसिमीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, गुलियो, शीतवीर्यको तथा सन्ताप र पित्तविकार नाशक हुन्छ । यसले वातविकार बढाउँदछ । यो पचाउन कठिन हुन्छ र अरुची नाश गर्दछ ।

### तरबारे सिमी (असिशिम्बी)

**असिशिम्बी खड्गशिम्बी शिम्बी निस्त्रिंशशिम्बिका ।**
**स्थूलशिम्बी महाशिम्बी बृहच्छिम्बी सुशिम्बिका ॥१८३॥**
**असिशिम्बी तु मधुरा कषाया श्लेष्मपित्तजित् ।**
**व्रणदोषापहन्त्री च शीतला रुचिदीपनी ॥१८४॥**

असिशिम्बी, खड्गशिम्बी, शिम्बी, निस्त्रिंशशिम्बिका, स्थूलशिम्बी, महाशिम्बी, बृहच्छिम्बी र सुशिम्बिका : यी तरबारे सिमीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिमी गुलियो, टर्रो तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले घाउखटिराको विकार नाश गर्दछ । यो शीतवीर्यको, रुचिकर र दीपनी हुन्छ ।



### करेलो (कारवल्ली)

**करका कारवल्ली च चीरिपत्रा करिल्लका ।**
**सूक्ष्मवल्ली कण्टफला पीतपुष्पाऽम्बुवल्लिका ॥१८५॥**
**कारवल्ली सुतिक्तोष्णा दीपनी कफवातजित् ।**
**अरोचकहरा चैव रक्तदोषहरी च सा ॥१८६॥**

करका, कारवल्ली, चीरिपत्रा, करिल्लका, सूक्ष्मवल्ली, कण्टफला, पीतपुष्पा र अम्बुवल्लिका : यी करेलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति तीतो, उष्णवीर्यको, दीपनी तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले अरुची र रक्तविकार नाश गर्दछ ।

### चठेल (कर्कोटकी)

**कर्कोटकी स्वादुफला मनोज्ञा च मनस्विनी ।**
**बोधना वन्ध्यकर्कोटी देवी कण्टफलाऽपि च ॥१८७॥**
**कर्कोटकी कटूष्णा च तिक्ता विषविनाशनी ।**
**वातघ्नी पित्तहृच्चैव दीपनी रुचिकारिणी ॥१८८॥**

कर्कोटकी, स्वादुफला, मनोज्ञा, मनस्विनी, बोधना, वन्ध्यकर्कोटी, देवी र कण्टफला : यी चठेलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो र विषविकार नाशक हुन्छ । यसले वातविकार र पित्तविकार पनि नाश गर्दछ । यो दीपनी र रुचिकर हुन्छ ।

### गोलकाँक्री (मधुरबिम्बी)

**अथ भवति मधुरबिम्बी मधुबिम्बी स्वादुतुम्बिका तुण्डी ।**
**रक्तफला रुचिरफला सोष्णफला पीलुपर्णी च ॥१८९॥**
**बिम्बी तु मधुरा शीता पित्तश्वासकफापहा ।**
**असृग्ज्वरहरा रम्या कासजिद्गृहबिम्बिका ॥१९०॥**

मधुरबिम्बी, मधुबिम्बी, स्वादुतुम्बिका, तुण्डी, रक्तफला, रुचिरफला, सोष्णफला र पीलुपर्णी : यी गोलकाँक्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा पित्तविकार, दम र कफविकार नाशक हुन्छ । यसले रक्तविकार र ज्वर पनि नाश गर्दछ । सुन्दर हुन्छ र खोकीलाई जित्दछ ।

### भटमास (निष्पावी)



**निष्पावी ग्रामजादिः स्यात् फलिनी नखपूर्विका ।**
**मण्डपी फलिका शिम्बी ज्ञेया गुच्छफला च सा ॥**
**विशालफलिका चैव निष्पाविश्चिपिटा तथा ॥१९१॥**

निष्पावी, ग्रामजादि, फलिनी, नखपूर्विका, मण्डपी, फलिका, शिम्बी, गुच्छफला, विशालफलिका, निष्पावि र चिपिटा : यी भटमासका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### डोलो सिमी (वृत्तनिष्पाविका)

**अन्याङ्गुलीफला चैव नखनिष्पाविका स्मृता ।**
**वृत्तनिष्पाविका ग्राम्या नखपुच्छफला शराः ॥१९२॥**

(१) अङ्गुलीफला, (२) नखनिष्पाविका, (३) वृत्तनिष्पाविका, (४) ग्राम्या र (५) नखपुच्छफला : यी पाँच नाम डोलो सिमीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**दुई प्रकारका निष्पावका गुण**

**निष्पावौ द्वौ हरिच्छुभ्रौ कषायौ मधुरौ रसौ ।**
**कण्ठशुद्धिकरौ मेध्यौ दीपनौ रुचिकारकौ ॥**
**सङ्ग्राहि समवीर्यं स्यादीषच्छ्रेष्ठं द्वितीयकम् ॥१९३॥**

दुवै निष्पाव हरयो र सेतो मिश्रित रङ्का, टर्रा र गुलिया हुन्छन् । यिनले घाँटी सफा गर्ने र दिमागको ग्रहण गर्ने क्षमता बढाउने काम गर्दछन् । यी दीपनी, रुचिकर र ग्राहि हुन्छन् । दुवै निष्पाव वीर्यमा समान भएपनि दोश्रो निष्पाव (डोलो सिमी) केही उत्तम हुन्छ ।

**भन्टा (वार्ताकी)**

**वार्ताकी कण्टवृन्ताकी कण्टालुः कण्टपत्रिका ।**
**निद्रालुर्मांसलफला वृन्ताकी च महोटिका ॥१९४॥**
**चित्रफला कण्टकिनी महती कट्फला च सा ।**
**मिश्रवर्णफला नीलफला रक्तफला तथा ॥**
**शाकश्रेष्ठा वृत्तफला नृपप्रियफलस्मृतिः ॥१९५॥**
**वार्ताकी कटुका रुच्या मधुरा पित्तनाशिनी ।**
**बलपुष्टिकरी हृद्या गुरुर्वातेषु निन्दिता ॥१९६॥**



वार्ताकी, कण्टवृन्ताकी, कण्टालु, कण्टपत्रिका, निद्रालु, मांसलफला, वृन्ताकी, महोटिका, चित्रफला, कण्टकिनी, महती, कट्फला, मिश्रवर्णफला, नीलफला, रक्तफला, शाकश्रेष्ठा, वृत्तफला र नृपप्रियफल : यी भन्टाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, रुचिकर, गुलियो र पित्तविकार नाशक हुन्छ । यसले बल र पुष्टि दिन्छ । यो मुटुका लागि हितकर, पचाउन कठिन र वातविकारमा निन्दनीय मानिन्छ ।

**फर्सी (डङ्गरी)**

**डङ्गरी डाङ्गरी चैव दीर्घेर्वारुश्च डङ्गरिः ।**
**डङ्गारी नागशुण्डी च गजदन्तफला मुनिः ॥१९७॥**
**डङ्गरी शीतला रुच्या दाहपित्तास्रदोषजित् ।**
**शोषहृत्तर्पणी गौल्या जाड्यहा मूत्ररोधनुत् ॥१९८॥**

(१) डङ्गरी, (२) डाङ्गरी, (३) दीर्घेर्वारु, (४) डङ्गरि, (५) डङ्गारी, (६) नागशुण्डी र (७) गजदन्तफला

: यो सात नाम फर्सीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, रुचिकर तथा डाह, पित्तविकार र रक्तविकार नाशक हुन्छ । यसले सुजन पनि नाश गर्दछ । यो गुलियो, शरीरको जडता हटाउने र पिसाब रोकिने रोग ठिक गर्ने गुणको हुन्छ ।

**कैँडो एवं पाकेको फर्सीको गुण**

**बालं डाङ्गरिकं फलं सुमधुरं शीतं च पित्तापहं**
**तृष्णादाहनिबर्हणं च रुचिकृत् सन्तर्पणं पुष्टिदम् ।**
**वीर्योन्मेषकरं बलप्रदमिदं भ्रान्तिश्रमध्वंसनं**
**पक्वं चेत् कुरुते तदेव मधुरं तृड्दाहरक्तं गुरु ॥१९९॥**

फर्सीको कैँडो गुलियो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । यसले तिर्खा र डाह नाश गर्दछ । यो रुचिकर, तृप्तिदायक र पुष्टिदायक हुन्छ । यसले वीर्यलाई सक्रिय बनाउने, बल दिने तथा भ्रम र थकाई नाश गर्ने काम गर्दछ । पाकेको फर्सीले पनि यिनै लाभ दिन्छ । यो गुलियो हुन्छ । यसले तिर्खा, डाह र रक्तविकार नाश गर्दछ एवं यो पचाउन कठिन हुन्छ ।

**खरबुजो (वृत्तकर्कटी)**



**अथ षड्भुजा (खरबुजा) मधुफला षड्रेखा वृत्तकर्कटी तिक्ता ।**
**तिक्तफला मधुपाका वृत्तेर्वारुश्च षण्मुखा नवधा ॥२००॥**
**तिक्तं बाल्ये तदनु मधुरं किञ्चिदम्लं च पाके**
**निष्पक्वं चेत्तदमृतसमं तर्पणं पुष्टिदायि ।**
**वृष्यं दाहश्रमविशमनं मूत्रशुद्धिं च धत्ते**
**पित्तोन्मादापहरकफदं षड्भुजं वीर्यकारि ॥२०१॥**

(१) षड्भुजा (खरबुजा), (२) मधुफला, (३) षड्रेखा, (४) वृत्तकर्कटी, (५) तिक्ता, (६) तिक्तफला, (७) मधुपाका, (८) वृत्तेर्वारु र (९) षण्मुखा : यी नौ नाम खरबुजोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कलिलोमा तीतो, पछि गुलियो । पाकेपछि (वा पचेपछि) थोरै अमिलो हुन्छ । राम्ररी पाकेको खरबुजो अमृतसमान, तृप्तिदायक र पुष्टिदायक हुन्छ । यो वीर्यवर्धक, डाह र थकाई नाशक एवं पिसाबलाई सफा बनाउने गुणको हुन्छ । खरबुजोले पित्तविकार र पागलपन नाश गर्दछ, कफविकार गर्दछ र वीर्यवर्धक हुन्छ ।

**काँक्रो (कर्कटी)**

**अथ कर्कटी कटुदला छर्द्यायनिका च पीनसा मूत्रफला ।**

**त्रपुसी च हस्तिपर्णी लोमशकण्टा च मूत्रला नगामिता ॥२०२॥**
**कर्कटी मधुरा शीता त्वक्तिक्ता कफपित्तजित् ।**
**रक्तदोषकरा पक्वा मूत्ररोधार्तिनाशनी ॥२०३॥**
**मूत्रावरोधशमनं बहुमूत्रकारि कृच्छ्राश्मरीप्रशमनं विनिहन्ति पित्तम् ।**
**वान्तिश्रमघ्नबहुदाहनिवारि रुच्यं श्लेष्मापहं लघु च कर्कटिकाफलं स्यात् ॥२०४॥**

(१) कर्कटी, (२) कटुदला, (३) छर्द्यायनिका, (४) पीनसा, (५) मूत्रफला, (६) त्रपुसी, (७) हस्तिपर्णी, (८) लोमशकण्टा र (९) मूत्रला : यी नौ नाम काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । काँक्रो गुलियो र शीतवीर्यको हुन्छ । यसको बोक्रो तीतो हुन्छ । यसले कफविकार र पित्तविकारलाई जित्दछ तथा रक्तविकार गर्दछ । पाकेको काँक्रोले पिसाब रोकिने रोग नाश गर्दछ । यसले पिसाबको रोकावटलाई शान्त पार्दछ र धेरै पिसाब लगाउँदछ । कृच्छ्र र पत्थरी शान्त पार्दछ अनि पित्तविकारलाई नाश गर्दछ । वाकवाकी र थकाई नाश गर्दछ तथा अति नै डाह हुँदा शान्त बनाउँदछ । यसको फल रुचिकर, कफविकार नाशक र पचाउन सहज हुन्छ ।

### काँक्रोविशेष (त्रपुसी)

**त्रपुसी पीतपुष्पी कण्टालुस्त्रपुसकर्कटी ।**
**बहुफला कोशफला सा तुन्दिलफला मुनिः ॥२०५॥**
**स्यात्त्रपुसीफलं रुच्यं मधुरं शिशिरं गुरु ।**
**भ्रमपित्तविदाहार्तिवान्तिहृद्बहुमूत्रदम् ॥२०६॥**

(१) त्रपुसी, (२) पीतपुष्पी, (३) कण्टालु, (४) त्रपुसकर्कटी, (५) बहुफला, (६) कोशफला र (७) तुन्दिलफला : यी सात नाम घिरौंलो जस्तो काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिकर, गुलियो, शीतवीर्यको, पचाउन कठिन तथा भ्रम, पित्तविकार, डाह र वाकवाकी नाशक हुन्छ । यसले पिसाब धेरै लगाउँदछ ।

### काँक्रोविशेष (एर्वारु)

**एर्वारुः कर्कटी प्रोक्ता व्यालपत्रा च लोमशा ।**
**स्थूला तोयफला चैव हस्तिदन्तफला मुनिः ॥२०७॥**
**एर्वारुकं पित्तहरं सुशीतलं मूत्रामयघ्नं मधुरं रुचिप्रदम् ।**
**सन्तापमूर्छाऽपहरं सुतृप्तिदं वातप्रकोपाय घनं तु सेवितम् ॥२०८॥**

(१) एर्वारु, (२) कर्कटी, (३) व्यालपत्रा, (४) लोमशा, (५) स्थूला, (६) तोयफला र (७) हस्तिदन्तफला : यी सात नाम तीते काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पित्तविकार

नाशक, शीतवीर्यको, पिसाबसम्बन्धी रोग नाशक, गुलियो र रुचिप्रद हुन्छ । यसले पीडा (वा जरो) र बेहोसीपन नाश गर्दछ । तृप्ति दिन्छ तर धेरै खाए वातविकार गर्दछ ।

### काँक्रोविशेष (बालुकी)

**अथ बालुकी बहुफला स्निग्धफला क्षेत्रकर्कटी क्षेत्ररुहा ।**
**मधुरफला शारदिका क्षुद्रेर्वारुश्च पीतपुष्पिका ॥२०९॥**
**वालुकी मधुरा शीताऽऽध्मानहृद्य श्रमापहा ।**
**पित्तप्रशमनी रुच्या कुरुते कासपीनसौ ॥२१०॥**
**वालुकानि च सर्वाणि दुर्जराणि गुरूणि च ।**
**मन्दानलं प्रकुर्वन्ति वातरक्तहराणि च ॥२११॥**
**स्याद् बालुकी शरदि वर्षजदोषकर्त्री हेमन्तजा तु खलु पित्तहरा च रुच्या ।**
**क्षिप्रं करोति खलु पीनसार्द्धपक्वा पक्वा त्वतीव मधुरा कफकारिणी च ॥२१२॥**

बालुकी, बहुफला, स्निग्धफला, क्षेत्रकर्कटी, क्षेत्ररुहा, मधुरफला, शारदिका, क्षुद्रेर्वारु र पीतपुष्पिका : यी बालुकीका संस्कृत पर्यायवाची नामहरू हुन् । बालुकी गुलियो, शीतवीर्यको, आध्मान नाशक र थकाई मेटाउने गुणको हुन्छ । यसले पित्तविकारलाई साम्य पार्दछ, रुची जगाउँदछ तथा खोकी र पिनास लगाउँदछ । सबै खालका बालुकी ढिलो पच्ने र पचाउन कठिन हुने गुणका हुन्छन् । यिनले पाचनशक्तिलाई कमजोर पार्दछन् तथा वातविकार र रक्तविकारलाई नाश गर्दछन् । बालुकीले वर्षा ऋतुमा दोष जम्मा गरी शरद ऋतुमा वातविकार बढाउँदछ । हेमन्त ऋतुमा हुने बालुकी निश्चय नै पित्तविकार नाशक र रुचिकर हुन्छ । नपाकेको बालुकीले तत्काल नै पिनास हुन्छ । पाकेको बालुकी अति गुलियो र कफविकार गर्ने गुणको हुन्छ ।



### काँक्रोविशेष (चीनकर्कटी)

**चीनकर्कटिका ज्ञेया बीजकर्कटिका तथा ।**
**सुदीर्घा राजिलफला बाणैः कुलककर्कटी ॥२१३॥**
**चीनकर्कटिका रुच्या शिशिरा पित्तनाशनी ।**
**मधुरा तृप्तिदा हृद्या दाहशोषापहारिणी ॥२१४॥**

(१) चीनकर्कटिका, (२) बीजकर्कटिका, (३) सुदीर्घा, (४) राजिलफला र (५) कुलककर्कटी : यी पाँच नाम  चीनकर्कटीकाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिप्रद, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । यो काँक्रो गुलियो, तृप्तिदायक, मुटुका लागि हितकर तथा डाह र सुजन नाशक हुन्छ ।

### काँक्रोविशेष (चिर्भिटा)

**स्यात् चिर्भिटा सुचित्रा चित्रफला क्षेत्रचिर्भिटा पाण्डुफला ।**
**पथ्या च रोचनफला चिर्भिटिका कर्कटिका ग्रहसङ्ख्या ॥२१५॥**
**बाल्ये तिक्ता चिर्भिटा किञ्चिदम्ला गौल्योपेता दीपनी सा च पाके ।**
**शुष्का रूक्षा श्लेष्मवातारुचिघ्नी जाड्यघ्नी सा रोचनी दीपनी च ॥२१६॥**

(१) चिर्भिटा, (२) सुचित्रा, (३) चित्रफला, (४) क्षेत्रचिर्भिटा, (५) पाण्डुफला, (६) पथ्या, (७) रोचनफला, (८) चिर्भिटिका र (९) कर्कटिका : यी नौ नाम चिर्भिटाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो फल कलिलो हुँदा तीतो र थोरै अमिलो तथा पाकेपछि गुलियो र दीपनी हुन्छ । सुकेको यसको फल रुखो तथा कफविकार, वातविकार, अरुची र शरीरको लाटोपन नाशक हुन्छ । यो रोचनी र दीपनी हुन्छ ।

### काँक्रोविशेष (शशाण्डुली)

**शशाण्डुली बहुफला तण्डुली क्षेत्रसम्भवा ।**
**क्षुद्राम्ला लोमशफला धूम्रवृत्तफला च सा ॥२१७॥**
**शशाण्डुली तिक्तकटुश्च कोमला कट्वम्लयुक्ता जरठा कफापहा ।**
**पाके तु साम्ला मधुरा विदाहकृत् कफश्च शुष्का रुचिकृच्च दीपनी ॥२१८॥**

शशाण्डुली, बहुफला, तण्डुली, क्षेत्रसम्भवा, क्षुद्राम्ला, लोमशफला र धूम्रवृत्तफला : यी शशाण्डुलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो काँचोमा तीतो, पिरो, अमिलो, पचाउन कठिन र कफविकार नाशक हुन्छ । पाकेको शशाण्डुली अमिलो, गुलियो, डाहकारी र कफविकार गर्ने गुणको हुन्छ । सुकेको शशाण्डुली भने रुचीकर र दीपनी हुन्छ ।

### काँक्रोविशेष (कुडुहुञ्ची)

**कुडुहुञ्ची श्रीफलिका प्रतिपत्रफला च सा ।**
**शुभ्रवी कारवी चैव प्रोक्ता बहुफला तथा ॥२१९॥**
**क्षुद्रकारलिका प्रोक्ता ज्ञेया कन्दलता तथा ।**
**क्षुद्रादिकारवल्ली च प्रोक्ता सा च नवाह्वया ॥२२०॥**
**कुडुहुञ्ची कटुरुष्णा तिक्ता रुचिकारिणी च दीपनदा ।**
**रक्तानिलदोषकरी पथ्याऽपि च सा फले प्रोक्ता ॥२२१॥**
**कारलीकन्दमर्शोघ्नं मलरोधविशोधनम् ।**

**योनिनिगतदोषघ्नं गर्भस्रावविषापहम् ॥२२२॥**

कुडुहुञ्ची, श्रीफलिका, प्रतिपत्रफला, शुभ्रवी, कारवी, बहुफला, क्षुद्रकारलिका, कन्दलता र क्षुद्रादिकारवल्ली : यी नौ नाम कुडुहुञ्चीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो, रुचिप्रद र दीपनी हुन्छ । यसको फलले रक्तविकार र वातविकार गर्दछ तर पथ्य हुन्छ । यसको कन्दले अल्काई, दिसाको अवरोध, योनिका रोग, गर्भपतन हुने रोग र विषविकार नाश गर्दछ ।

डा.सतिश चन्द्र साङ्ख्यधर : कुडुहुञ्चीको ल्याटिन नाम ***Momordica tuberosa (Roxb). Cogn.*** वा ***M. cymbalaria Fenzl ex. Naud.*** हो भनी बेङ्गलेरको एउटा प्रतिवेदनमा उल्लेख भएको छ । त्रपुस (काँक्रो) वर्गका उपर्युक्त अन्य फलका बारेमा थप अनुसन्धान गरी निर्णयमा पुग्नु पर्ने देखिन्छ ।

**वर्गप्रशस्ति**

**इति मूलकन्दफलपत्रसुन्दरक्रमनामतद्गुणनिरूपणोल्वणम् ।**
**अवलोक्य वर्गमिममामयोचितामगदप्रयुक्तिमवबुध्यतां बुधः ॥२२३॥**



यो अध्यायमा जरा, कन्दमूल, फल र पातको गुण र समानार्थी शब्द सहित सुन्दर वर्णन समावेश भएको छ । यो अध्याय पढेर विद्वान चिकित्सकले आफ्ना रोगीहरूका लागि उपयुक्त ओखती छान्न सक्दछन् ।

**मन्दाग्निमरोचकिनं येऽपि शिलामाशयन्ति निजशक्त्या ।**
**तेषां शाकानामयमाश्रयभूः शाकवर्ग इति कथितः ॥२२४॥**

यो अध्याय त्यस्ता जडीबुटीहरुको भण्डार हो जुन जडीबुटीको असरले जस्तोसुकै पेटका रोग र पाचनशक्ति भएका बिरामीले ढुङ्गालाई समेत पचाउन सक्दछ, यसैले यस अध्यायको नाम शाकवर्ग भनी राखिएको हो ।

**लब्धान्योऽन्यसहायवैद्यककुलाच्छङ्काकलङ्कापनुत्**
**दसैक्यावतरोऽयमित्यविरतं सन्तः प्रशंसन्ति यम् ।**
**तस्य श्रीनृहरेः कृताववसितो यो मूलकादिर्महान्वर्गो-**
**ऽसावभिधानकोशपरिषच्चूडामणौ सप्तमः ॥२२५॥**

प्रख्यात वैद्यहरुको एकआपसको सहयोगमा सबै शङ्कास्पद खण्डहरूलाइ स्पष्ट पार्दै यस समयका सत्पुरुषहरूबाट पृथ्वीमा अश्विनीकुमारका अवतार भनी निरन्तर प्रसिद्ध भइरहेका नरहरीले आज तीमध्येको एउटा कार्य पूरा गरेका छन् । यो वर्गमध्येको ठूलो मूलकादि नामक सातौं वर्ग शब्दकोषहरुको मूल कोष हो ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ मूलकादिनाम सप्तमो वर्गः ॥७॥**

श्री नरहरि पण्डितद्धारा लिखित राजनिघण्टु अन्तर्गत मूलकादि नामक सातौं अध्यायको मोहन प्रसाद सापकोटाद्धारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।७।

## शाल्मल्यादिवर्ग

**शाल्मली तस्य निर्यासो रोहितश्चैकवीरकः ।**
**पारिभद्रोऽथ खदिरस्त्रिधाऽरिः खादिरः स्मृतः ॥१॥**
**शमीद्वयं च बर्बुरद्वितयञ्चाऽरिमेदकः ।**
**पक्वाण्डेङ्गुदिका प्रोक्ता निष्पत्री च स्नुही द्विधा ॥२॥**
**कन्थारिका त्रिधैरण्डो घोण्टा वल्लीकरञ्जकः ।**
**कारिका मदनस्त्रेधा बिल्वान्तरस्तरट्टिका ॥३॥**
**श्रीवल्ली कुञ्जिका चैव रामकाण्डस्तथाऽपरः ।**
**सयावनालौ द्विशरौ मुञ्जकाशौ द्विधा कुशः ॥४॥**
**वल्वजा कुतृणौ चाथ नलौ दूर्वा चतुर्विधा ।**
**कुन्दुरो भूतृणो ज्ञेय उखल इक्षुदर्भकः ॥५॥**
**गोमूत्री शिल्पी निश्रेणी गमोटी मज्जरास्तथा ।**
**गिरिभूर्वंशपत्री च मन्थानः पल्लिवाहकः ॥६॥**
**पटुतृणशुको ज्ञेयः त्रिपण्यान्धः त्रिगुण्डकः ।**
**कसेरुश्चणिका प्रोक्ता गुण्डाला शूलिका तथा ॥**
**परिपेलं हिज्जुलश्च सेवालश्च शराङ्कधा ॥७॥**

यस वर्गमा शाल्मली, मोचरस, रोहित, एकवीर, पारिभद्र, तीन थरी खदिर, अरि, दुई थरी खदिरका सार, तीन थरी शमी, दुई थरी बबुर, अरिमेदक, पक्वाण्ड, इङ्गुदी, निष्पत्री, दुई थरी स्नुही, कन्थारिका, तीन थरी एरण्ड, घोण्टा, वल्लीकरञ्ज, कारिका, तीन थरी मदनफल, बिल्वान्तर, तरटी श्रविल्ली, निकुञ्जिका, रामकाण्ड, दुई थरी यावनाल, दुई थरी द्विशर, मुञ्ज, काश, दुई थरी कुश, दुई थरी दर्भ, बल्वजा, दुई थरी कुतृण, दुई थरी नल, चार थरी दूर्वा, कुन्दुरू, भूतृण, उखल, इक्षुदर्भक, गोमूत्रिका, शिल्पिका, निःश्रेणि, गमोटी, मज्जरा, गिरिभू, वंशपत्री, मन्थानक, पल्लिवाह, पटुतृण, शुक, तीन थरी पण्यान्ध, गुण्डक, कसेरु, चणिका, गुण्डाला, शूलिका, परिपेल, हिज्जुल र सेवा गरी उनन्साठी वटा वृक्ष एवं वनस्पतिका बारेमा बताइएको छ ।

### सिमल (शाल्मली)

**शाल्मलिश्चिरजीवी स्यात् पिच्छिलो रक्तपुष्पकः ।**
**कुक्कुटी तूलवृक्षश्च मोचाख्यः कण्टकद्रुमः ॥८॥**
**रक्तफलो रम्यपुष्पो बहुवीर्य्यो यमद्रुमः ।**
**दीर्घद्रुमः स्थूलफलो दीर्घायुस्तिथिभिर्मितः ॥९॥**

**शाल्मली पिच्छिलो वृष्यो बल्यो मधुरशीतलः ।**
**कषायश्च लघुः स्निग्धः शुक्रश्लेष्मविवर्द्धनः ॥१०॥**
**तद्रसस्तद्गुणो ग्राही कषायः कफनाशकः ।**
**पुष्पं तद्वच्च निर्दिष्टं फलं तस्य तथाविधम् ॥११॥**

(१) शाल्मलि, (२) चिरजीवी, (३) पिच्छिल, (४) रक्तपुष्पक, (५) कुक्कुटी, (६) तूलवृक्ष, (७) मोचा, (८) कण्टकद्रुम, (९) रक्तफल, (१०) रम्यपुष्प, (११) बहुवीर्य्य, (१२) यमद्रुम, (१३) दीर्घद्रुम, (१४) स्थूलफल र (१५) दीर्घायु : यी पन्ध्र नाम सिमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो लेस्याइलो, वीर्यवर्धक, बलप्रद, गुलियो र शीतल गर्ने गुणको हुन्छ । सिमल टर्रो, पचाउन सहज, चिल्लो तथा शुक्र र कफ बढाउने खालको हुन्छ । यसको रसमा पनि यिनै गुण हुन्छन् । यो रस ग्राही, टर्रो र कफनाशक हुन्छ । फूल र फलमा पनि यिनै गुण हुन्छन् ।

### सिमलको खोटो (मोचरस)

**मोचरसो मोचस्तु मोचस्रावश्च मोचनिर्यासः ।**
**पिच्छिलसारः सुरसः शाल्मलिवेष्टश्च मोचसारश्च ॥१२॥**
**मोचरसस्तु कषायः कफवातहरो रसायनो योगात् ।**
**बलपुष्टिवर्णवीर्यप्रज्ञाऽऽयुर्देहसिद्धिदो ग्राही ॥१३॥**

मोचरस, मोच, मोचस्राव, मोचनिर्यास, पिच्छिलसार, सुरस, शाल्मलिवेष्ट र मोचसार : यी सिमलको खोटोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खोटो टर्रो, कफविकार र वातविकार नाशक तथा उपयुक्त ओखतीमा मिसाउँदा रसायनी समेत हुन्छ । यो खोटो बलप्रद, पुष्टिदायक, वर्णमा निखार लेराउने, वीर्यवर्धक, बुद्धिवर्धक तथा आयुवर्धक हुन्छ । यसले शरीरका सबै अङ्गका लागि सिद्धिदायक हुन्छ । सिमलको खोटो ग्राहि हुन्छ ।

### गुराँस (रोहितक)

**रोहीतको रोहितकश्च रोहितः कुशाल्मलिर्दाडिमपुष्पसञ्ज्ञकः ।**
**सदाप्रसूनः स च कूटशाल्मलिर्विरोचनः शाल्मलिको नवाह्वयः ॥१४॥**
**सप्ताह्वः श्वेतरोहितः सितपुष्पः सिताह्वयः ।**
**शिताङ्गः शुक्लरोहितो लक्ष्मीवान् जनवल्लभः ॥१५॥**
**रोहितकौ कटुस्निग्धौ कषायौ च सुशीतलौ ।**
**क्रिमिदोषव्रणप्लीहरक्तनेत्रामयापहौ ॥१६॥**

(१) रोहीतक, (२) रोहितक, (३) रोहित, (४) कुशाल्मलि, (५) दाडिमपुष्पक, (६) सदाप्रसून, (७) कूटशाल्मलि, (८) विरोचन र (९) शाल्मलिक : यी नौ नाम गुराँसका संस्कृत पर्यायवाची नामहरू हुन् । सप्ताह्व, श्वेतरोहित, सितपुष्प, सिताह्वय, शिताङ्ग, शुक्लरोहित, लक्ष्मीवान् र जनवल्लभ : यी सेतो गुराँसका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै गुराँस पिरा, चिल्ला, टर्रा र शीतल गर्ने गुणका हुन्छन् । यिनले कीराजन्य विकार, घाउखटिरा, फियोका रोग, रक्तविकार र आँखाका रोग नाश गर्दछन् ।

### एकलेबिर (एकवीर)

**एकवीरो महावीरः सकृद्वीरः सुवीरकः ।**
**एकादिवीरपर्यायैर्वीरश्चेति षडाह्वयः ॥१७॥**
**एकवीरो भवेच्चोष्णः कटुकस्तोदवातनुत् ।**
**गृध्रसीकटिपृष्ठादिशूलपक्षाभिघातनुत् ॥१८॥**

(१) एकवीर, (२) महावीर, (३) सकृद्वीर, (४) सुवीरक, (५) एकादिवीर र (६) वीर : यी छ नाम एकवीरका संस्कृत पर्यायवाची नामहरू हुन् । एकवीर उष्णवीर्यको, पिरो, दुःखनाशक र वातविकार नाशक हुन्छ । यसले गृध्रसी रोग, कम्मर र ढाडका शूल, तथा पक्षाघात समेत ठिक गर्दछ ।



### फलेदो (पारिभद्र)

**अथ भवति पारिभद्रो मन्दारः पारिजातको निम्बतरुः ।**
**रक्तकुसुमः क्रिमिघ्नो बहुपुष्पो रक्तकेसरो वसवः ॥१९॥**
**पारिभद्रः कटूष्णः स्यात् कफवातनिकृन्तनः ।**
**अरोचकहरः पथ्यो दीपनश्चापि कीर्तितः ॥२०॥**

(१) पारिभद्र, (२) मन्दार, (३) पारिजातक, (४) निम्बतरु, (५) रक्तकुसुम, (६) क्रिमिघ्न, (७) बहुपुष्प र (८) रक्तकेसर : यी आठ नाम फलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । फलेदो पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले अरुची हटाउँदछ । यो पथ्य र दीपनी पनि हुन्छ भनिएको छ ।

### खयर (खदिर)

**खदिरो बालपत्रश्च खाद्यपत्रीक्षितीक्षमाः ।**
**सुशल्यो वक्रकण्टश्च यज्ञाङ्गो दन्तधावनः ॥२१॥**
**गायत्री जिह्मशल्यश्च कण्टी सारद्रुमस्तथा ।**

**कुष्ठारिर्बहुसारश्च मेध्यः सप्तदशाह्वयः ॥२२॥**
**खदिरस्तु रसे तिक्तः शीतः पित्तकफापहः ।**
**पाचनः कुष्ठकासास्रशोफकण्डूव्रणापहः ॥२३॥**

(१) खदिर, (२) बालपत्र, (३) खाद्य, (४) पत्री, (५) क्षिती, (६) क्षमा, (७) सुशल्य, (८) वक्रकण्ट, (९) यज्ञाङ्ग, (१०) दन्तधावन, (११) गायत्री, (१२) जिह्मशल्य, (१३) कण्टी, (१४) सारद्रुम, (१५) कुष्ठारि, (१६) बहुसार र (१७) मेध्य : यी सत्र नाम खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा तीतो, शीतवीर्यको तथा पित्तविकार र कफविकार नाशक हुन्छ । यो पाचनी तथा कुष्ठ, खोकी, रक्तविकार, सुजन, चिलाउने रोग र घाउखटिरा नाशक समेत हुन्छ ।

**सेतो खयर (शिला)**

**खदिरः श्वेतसारोऽन्यः कार्मुकः कुब्जकण्टकः ।**
**सोमसारो नेमिवृक्षः सोमवल्कः पथिद्रुमः ॥२४॥**
**श्वेतस्तु खदिरस्तिक्तः कषायः कटुरुष्णकः ।**
**कण्डूतिभूतकुष्ठघ्नः कफवातव्रणापहः ॥२५॥**

श्वेतसार, कार्मुक, कुब्जकण्टक, सोमसार, नेमिवृक्ष, सोमवल्क र पथिद्रुम : यी अर्को थरी खयर अर्थात् सेतो खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो खयर तीतो, टर्रो, पिरो र उष्णवीर्यको हुन्छ । यसले चिलाउने रोग, भूतबाधा, कुष्ठ, कफविकार, वातविकार र घाउखटिरा नाश गर्दछ ।

**रातो खयर (रक्तखदिर)**

**स रक्तो रक्तसारश्च सुसारस्ताम्रकण्टकः ।**
**स प्रोक्तो बहुशल्यश्च याज्ञिकः कुष्ठतोदनः ॥**
**यूपद्रुमोऽस्रखदिरोऽपरुश्च दशधा स्मृतः ॥२६॥**
**कटूष्णो रक्तखदिरः कषायो गुरुतिक्तकः ।**
**आमवातास्रवातघ्नो व्रणभूतज्वरापहः ॥२७॥**

(१) रक्त, (२) रक्तसार, (३) सुसार, (४) ताम्रकण्टक, (५) बहुशल्य, (६) याज्ञिक, (७) कुष्ठतोदन, (८) यूपद्रुम, (९) अस्रखदिर र (१०) अपरु : यी दश नाम रातो खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खयर पिरो, उष्णवीर्यको, टर्रो, पचाउन कठिन र तीतो हुन्छ । यसले आमविकार, वातविकार, रक्तविकार, घाउखटिरा, भूतबाधा र ज्वर नाश गर्दछ ।

**गनाउने खयर (विट्खादिर)**

**विट्खदिरः काम्भोजी कालस्कन्धश्च गोरटो मरुजः ।**
**पत्रतरुर्बहुसारः संसारः खादिरो ग्रहैर्महासारः ॥२८॥**
**विट्खदिरः कटुरुष्णस्तिक्तो रक्तव्रणोत्थदोषहरः ।**
**कण्डूतिविषविसर्पज्वरकुष्ठोन्मादभूतघ्नः ॥२९॥**

(१) विट्खदिर, (२) काम्भोजी, (३) कालस्कन्ध, (४) गोरट, (५) मरुज, (६) पत्रतरु, (७) बहुसार, (८) संसार र (९) महासार : यी नौ नाम गनाउने खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खयर पिरो, उष्णवीर्यको, तीतो तथा रक्तविकार र घाउखटिराजन्य विकार नाशक हुन्छ । यसले चिलाउने रोग, विषविकार, विसर्प, ज्वर, कुष्ठ, पागलपन र भूतबाधा नाश गर्दछ ।

**लहरे खयर (अरि)**

**अरिः सन्दानिका दाला ज्ञेया खदिरपत्रिका ।**
**अरिः कषायकटुका तिक्ता रक्तार्तिपित्तनुत् ॥३०॥**

अरि, सन्दानिका, दाला र खदिरपत्रिका : यी नाम लहरे खयरविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खयर टर्रो, पिरो, तीतो तथा रक्तविकार र पित्तविकार नाशक हुन्छ ।

**कत्था (खादिरसार)**

**खादिरः खदिरोद्भूतस्तत्सारो रङ्गदः स्मृतः ।**
**ज्ञेयः खदिरसारश्च तथा रङ्गः षडाह्वयः ॥३१॥**
**कटुकः खादिरः सारस्तिक्तोष्णः कफवातहृत् ।**
**व्रणकण्ठामयघ्नश्च रुचिकृद्दीपनः परः ॥३२॥**

(१) खादिर, (२) खदिरोद्भूत, (३) तत्सार, (४) रङ्गद, (५) खदिरसार र (६) रङ्ग : यी छ नाम कत्थाका संस्कृत पर्यायवाची नामहरू हुन् । कत्था पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले घाउखटिरा र घाँटीका रोग निको पार्दछ । यो रुचीप्रद र अत्यन्त दीपनी हुन्छ ।

**शमी**

**शमी शान्ता तुङ्गा कचरिपुफला केशमथनी**

शिवेशा नौलक्ष्मीस्तपनतनुनष्टा शुभकरी ।
हविर्गन्धा मेध्या दुरितशमनी शङ्कुफलिका
सुभद्रा मङ्गल्या सुरभिरथ शापापशमनी ॥३३॥
भद्राऽथ शङ्करी ज्ञेया केशहन्त्री शिवाफला ।
सुपत्रा सुखदा चैव पञ्चविंशाभिधा मता ॥३४॥
शमी रूक्षा कषाया च रक्तपित्तातिसारजित् ।
तत्फलं तु गुरु स्वादु तिक्तोष्णं केशनाशनम् ॥३५॥

(१) शमी, (२) शान्ता, (३) तुङ्गा, (४) कचरिपुफला, (५) केशमथनी, (६) शिवा, (७) ईशा, (८) नौ, (९) लक्ष्मी, (१०) तपनतनुनष्टा, (११) शुभकरी, (१२) हविर्गन्धा, (१३) मेध्या, (१४) दुरितशमनी, (१५) शङ्कुफलिका, (१६) सुभद्रा, (१७) मङ्गल्या, (१८) सुरभि, (१९) शापापशमनी, (२०) भद्रा, (२१) शङ्करी, (२२) केशहन्त्री, (२३) शिवाफला, (२४) सुपत्रा र (२५) सुखदा : यी पच्चीस नाम शमीका संस्कृत पर्यायवाची नामहरू हुन् । शमी रुखो, टर्रो तथा रक्तपित्त र अतिसारलाई जित्ने गुणको हुन्छ । यसको फल पचाउन कठिन, स्वादिलो, तीतो, उष्णवीर्यको र कपाल नाश गर्ने गुणको हुन्छ ।

**शमीविशेष (शान्ता)**



द्वितीया तु शमी शान्ता शुभा भद्राऽपराजिता ।
जया च विजया चैव पूर्वोक्तगुणसंयुता ॥३६॥

शमी, शान्ता, शुभा, भद्रा, अपराजिता, जया र विजया : यी दोश्रो थरी शमीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शमीमा पनि शमीकै गुणहरू हुन्छन् ।

**बबुर (बर्बुर)**

बर्बुरो युगलाक्षश्च कण्टालुस्तीक्ष्णकण्टकः ।
गोशृङ्गः पङ्क्तिबीजश्च दीर्घकण्टः कफान्तकः ॥
दृढबीजः श्वासभक्ष्यो ज्ञेयश्चेति दशाह्वयः ॥३७॥
बर्बुरस्तु कषायोष्णः कफकासामयापहः ।
आमरक्तातिसारघ्नः पित्तदाहार्तिनाशनः ॥३८॥

(१) बर्बुर, (२) युगलाक्ष, (३) कण्टालु, (४) तीक्ष्णकण्टक, (५) गोशृङ्ग, (६) पङ्क्तिबीज, (७) दीर्घकण्ट, (८) कफान्तक, (९) दृढबीज र (१०) श्वासभक्ष्य : यी दश नाम बबुरका संस्कृत

पर्यायवाची नामहरू हुन् । बबुर टर्रो, उष्णवीर्यको तथा कफविकार, खोकी र आमविकार नाशक हुन्छ । यसले आमजन्य रक्तविकार, अतिसार, पित्तविकार र डाह नाश गर्दछ ।

## जालबर्बुर

**जालबर्बुरकस्त्वन्यश्छत्राकः स्थूलकण्टकः ।**
**सूक्ष्मशाखस्तनुच्छायो रन्ध्रकण्टः षडाह्वयः ॥३९॥**
**जालबर्बुरको रूक्षो वातामयविनाशकृत् ।**
**पित्तकृच्च कषायोष्णः कफहृद्दाहकारकः ॥४०॥**

(१) जालबर्बुरक, (२) छत्राक, (३) स्थूलकण्टक, (४) सूक्ष्मशाख, (५) तनुच्छाय र (६) रन्ध्रकण्ट : यी छ नाम जालबर्बुरका संस्कृत पर्यायवाची नामहरू हुन् । जालबर्बुर रुखो तथा वातविकार र आमविकार नाशक हुन्छ । यसले पित्तविकार गर्दछ । यो टर्रो, उष्णवीर्यको तथा कफविकार नाशक र डाहकारक हुन्छ ।

## इरिमेद

डा.सतिश चन्द्र साङ्ख्यधर : नरहरीले बिट्खदिरको बारेमा वर्णन गरि सकेका छन् । इरिमेदका धेरै कुरा सोही बिट्खदिरसँग मिल्दछन् । यहाँ बेग्लै उल्लेख गर्नुको कारण जान्न सकिएन ।

**इरिमेदोऽरिमेदश्च गोधास्कन्धोऽरिमेदकः ।**
**अहिमेदोऽहिमारश्च पूतिमेदोऽहिमेदकः ॥४१॥**
**अरिमेदः कषायोष्णस्तिक्तो भूतविनाशकः ।**
**शोफातिसारकासघ्नो विषवीसर्पनाशनः ॥४२॥**

इरिमेद, अरिमेद, गोधास्कन्ध, अरिमेदक, अहिमेद, अहिमार, पूतिमेद र अहिमेदक : यी अरिमेदका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, तीतो र भूतबाधा नाशक हुन्छ । यसले सुजन, अतिसार, खोकी, विषविकार र वीसर्प नाश गर्दछ ।

## पाखरी (पक्वाण्ड)

**पक्वाण्डः पञ्चकृत् पञ्चवर्धनः पञ्चरक्षकः ।**
**दृष्ट्यञ्जनविधौ शस्तः कटुः जीर्णज्वरापहः ॥४३॥**

पक्वाण्ड, पञ्चकृत्, पञ्चवर्धन र पञ्चरक्षक : यी पाखरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो

गाजल बनाउनका लागि उपयोगी, पिरो स्वादको र थाङ्नेजरो नाशक हुन्छ ।

## चिउरी (इङ्गुदी)

**इङ्गुदी हिङ्गुपत्रश्च विषकण्टोऽनिलान्तकः ।**
**गौरस्तूक्तः सुपत्रश्च शूलारिस्तापसद्रुमः ॥४४॥**
**तीक्ष्णकण्टस्तैलफलः पूतिगन्धो विगन्धकः ।**
**ज्ञेयः क्रोष्टुफलश्चैव वह्नीन्दुगणिताह्वयः ॥४५॥**
**इङ्गुदी मदगन्धिः स्यात् कटूष्ण फेनिलालघुः ।**
**रसायनी हन्ति जन्तुवातामयकफव्रणान् ॥४६॥**

(१) इङ्गुदी, (२) हिङ्गुपत्र, (३) विषकण्ट, (४) अनिलान्तक, (५) गौर, (६) सुपत्र, (७) शूलारि, (८) तापसद्रुम, (९) तीक्ष्णकण्ट, (१०) तैलफल, (११) पूतिगन्ध, (१२) विगन्धक र (१३) क्रोष्टुफल : यी तेह्र नाम चिउरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मदिरा गनाए जसरी गनाउँदछ । चिउरी पिरो, उष्णवीर्यको, फिँज आउने र पचाउन हलुका हुने गुणको हुन्छ । यो रसायनी हुनुका साथै यसले कीरा, वातविकार, आमविकार, कफविकार र घाउखटिरा ठिक गर्दछ ।



## करीर (निष्पत्रक)

**निष्पत्रकः करीरश्च करीरग्रन्थिलस्तथा ।**
**कृकरो गूढपत्रश्च करकस्तीक्ष्णकण्टकः ॥४७॥**
**करीरमाध्मानकरं कषायं कटूष्णमेतत् कफकारि भूरि ।**
**श्वासानिलारोचकसर्वशूलविच्छर्दिखर्जूव्रणदोषहारि ॥४८॥**

निष्पत्रक, करीर, करीरग्रन्थिल, कृकर, गूढपत्र, करक र तीक्ष्णकण्टक : यी करीरका संस्कृत पर्यायवाची नामहरू हुन् । करीरले आध्मान गर्दछ । यो टर्रो, पिरो, उष्णवीर्यको र धेरै नै कफविकार गर्ने गुणको हुन्छ । यसले दम, वातविकार, अरुची, सबै खालका शूल, वाकवाकी, लुतो र घाउखटिरा नाश गर्दछ ।

## सिउँडी (स्नुही)

**स्नुही सुधा महावृक्षः क्षीरी निस्त्रिंशपत्रिका ।**
**शाखाकण्टश्च गुण्डाख्यः सेहुण्डो वज्रकण्टकः ॥४९॥**
**बहुशाखो वज्रवृक्षो वातारिः क्षीरकाण्डकः ।**
**भद्रो व्याघ्रनखश्चैव नेत्रारिर्दण्डवृक्षकः ॥**

**समन्तदुग्धो गण्डीरो ज्ञेयः स्नुक्चेति विंशतिः ॥५०॥**
**स्नुहीरुष्णा पित्तदाहकुष्ठवातप्रमेहनुत् ।**
**क्षीरं वातविषाध्मानगुल्मोदरहरं परम् ॥५१॥**
**स्नुहीरान्या त्रिधारा स्यात्तिस्रो धारास्तु यत्र सा ।**
**पूर्वोक्तगुणवत्येषा विशेषाद्रससिद्धिदा ॥५२॥**

(१) स्नुही, (२) सुधा, (३) महावृक्ष, (४) क्षीरी, (५) निस्त्रिंशपत्रिका, (६) शाखाकण्ट, (७) गुण्डाख्य, (८) सेहुण्ड, (९) वज्रकण्टक, (१०) बहुशाख, (११) वज्रवृक्ष, (१२) वातारि, (१३) क्षीरकाण्डक, (१४) भद्र, (१५) व्याघ्रनख, (१६) नेत्रारि, (१७) दण्डवृक्षाक, (१८) समन्तदुग्ध, (१९) गण्डीर र (२०) स्नुक् : यी बीस नाम सिउँडीका संस्कृत पर्यायवाची नामहरू हुन् । सिउँडी उष्णवीर्यको हुन्छ । यसले पित्तविकार, डाह, कुष्ठ, वातविकार र प्रमेह नाश गर्दछ । यसको दूध वातविकार, विषविकार, आध्मान, गुल्म र पेटका रोग नाशक हुन्छ । अर्को थरी त्रिधारा नामक तीन पाटा वा धार हुने सिउँडीमा पनि उल्लेखित गुण हुन्छन् । विशेषतः यो सिउँडी पारो प्रशोधनका लागि प्रयोग हुन्छ ।

पाते सिउँडी (कन्थारी)

**कन्थारी कथरी कन्था दुर्धर्षा तीक्ष्णकण्टका ।**
**तीक्ष्णगन्धा क्रूरगन्धा दुष्प्रवेशाऽष्टकाभिधा ॥५३॥**
**कन्थारी कटुतिक्तोष्णा कफवातनिकृन्तनी ।**
**शोफघ्नी दीपनी रुच्या रक्तग्रन्थिरुजापहा ॥५४॥**

(१) कन्थारी, (२) कथरी, (३) कन्था, (४) दुर्धर्षा, (५) तीक्ष्णकण्टका, (६) तीक्ष्णगन्धा, (७) क्रूरगन्धा र (८) दुष्प्रवेशा : यी आठ नाम कन्थारीका पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले सुजन नाश गर्दछ । यो दीपनी, रुचिप्रद तथा रक्तविकार र गाँठा (जोर्नी) सम्बन्धी रोग नाशक पनि हुन्छ ।

सेतो अँडिर (श्वेतैरण्ड)

**श्वेतैरण्डः सितैरण्डश्चित्रो गन्धर्वहस्तकः ।**
**आमण्डस्तरुणः शुक्लो वातारिर्दीर्घदण्डकः ॥**
**पञ्चाङ्गुलो वर्धमानो रुबुको द्वादशाह्वयः ॥५५॥**

(१) श्वेतैरण्ड, (२) सितैरण्ड, (३) चित्र, (४) गन्धर्वहस्तक, (५) आमण्ड, (६) तरुण, (७) शुक्ल, (८) वातारि, (९) दीर्घदण्डक, (१०) पञ्चाङ्गुल, (११) वर्धमान र (१२) रुबुक : यी बाह्र नाम

सेतो अँडिरका संस्कृत पर्यायवाची नाम हुन् ।

### रातो अँडिर (रक्तैरण्ड)

**रक्तैरण्डोऽपरो व्याघ्रो हस्तिकर्णो रुबुस्तथा ।**
**उरुबुको नागकर्णश्चञ्चुरुत्तानपत्रकः ॥५६॥**
**करपर्णो याचनकः स्निग्धो व्याघ्रदलस्तथा ।**
**तत्करश्चित्रबीजश्च ह्रस्वैरण्डस्त्रिपञ्चधा ॥५७॥**

(१) रक्तैरण्ड, (२) व्याघ्र, (३) हस्तिकर्ण, (४) रुबु, (५) उरुबुक, (६) नागकर्ण, (७) चञ्चु, (८) उत्तानपत्रक, (९) करपर्ण, (१०) याचनक, (११) स्निग्ध, (१२) व्याघ्रदल, (१३) तत्कर, (१४) चित्रबीज र (१५) ह्रस्वैरण्ड : यी पन्ध्र नाम रातो अँडिरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### अँडिरका गुण

**श्वेतैरण्डः स कटुकरसस्तिक्त उष्णः कफार्तिध्वंसं**
**धत्ते ज्वरहरमरुत्कासहारी रसार्हः ।**
**रक्तैरण्डः श्वयथुपचनः वान्तिरक्तार्तिपाण्डु-**
**भ्रान्तिश्वासज्वरकफहरोऽरोचकघ्नो लघुश्च ॥५८॥**

सेतो अँडिर पिरो, तीतो, उष्णवीर्यको र कफविकार नाशक हुन्छ । यसले ज्वर, वातविकार र खोकी नाश गर्दछ । यो पारो प्रशोधनमा समेत उपयोगी हुन्छ । रातो अँडिरले श्वयथु ठिक गर्दछ । यसले वाकवाकी, रक्तविकार, पाण्डु, भ्रम, दम, ज्वर र कफविकार तथा अरुची पनि नाश गर्दछ ।

### मोटो अँडिर (स्थूलैरण्ड)

**स्थूलैरण्डो महैरण्डो महापञ्चाङ्गुलादिकः ।**
**स्थूलैरण्डो गुणाढ्यः स्याद्रसवीर्यविपक्तिषु ॥५९॥**

स्थूलैरण्ड, महैरण्ड र महापञ्चाङ्गुल : यी मोटो खालको अँडिरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रस, वीर्य र विपाकमा अन्य अँडिरभन्दा उत्तम हुन्छ ।

### हाडे बयर (घोण्टा)

**घोण्टा बदरिका घोटी गोलिका शत्रुकण्टकः ।**

**कर्कटी च तुरङ्गी च तुरगाह्वाऽष्टधा स्मृता ॥६०॥**
**घोटिका कटुकोष्णा च मधुरा वातनाशनी ।**
**व्रणकण्डूतिकुष्ठासृग्दोषश्वयथुहारिणी ॥६१॥**

(१) घोण्टा, (२) बदरिका, (३) घोटी (घोटिका), (४) गोलिका, (५) शत्रुकण्टक, (६) कर्कटी, (७) तुरङ्गी र (८) तुरग : यी आठ नाम हाडे बयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, गुलियो र वातविकार नाशक हुन्छ । यसले घाउखटिरा, चिलाउने रोग, कुष्ठ, रक्तविकार र श्वयथु नाश गर्दछ ।

**करञ्जविशेष (लताकरञ्ज)**

**लताकरञ्जो दुःस्पर्शो वीरास्यो वज्रवीरकः ।**
**धनदाक्षः कण्टफलः कुबेराक्षश्च सप्तधा ॥६२॥**
**लताकरञ्जपत्रं तु कटूष्णं कफवातनुत् ।**
**तद्बीजं दीपनं पथ्यं शूलगुल्मव्यथापहम् ॥६३॥**

(१) लताकरञ्ज, (२) दुःस्पर्शा, (३) वीरास्य, (४) वज्रवीरक, (५) धनदाक्ष, (६) कण्टफल र (७) कुबेराक्ष : यी सात नाम लताकरञ्जका संस्कृत पर्यायवाची नामहरू हुन् । लताकरञ्जको पात पिरो उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसको बीज दीपनी, पथ्य तथा शूल र गुल्म रोग नाशक हुन्छ ।

**कारी**

**कारी तु कारिका कार्या गिरिजा कटुपत्रिका ।**
**तत्रैका कण्टकारी स्यादन्या त्वाकर्षकारिका ॥६४॥**
**कारी कषायमधुरा द्विविधा पित्तनाशिनी ।**
**दीपनी ग्राहिणी रुच्या कण्ठशोधकरी गुरुः ॥६५॥**

कारी, कारिका, कार्या, गिरिजा र कटुपत्रिका : यी कारी नामक विरुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको कण्टकारी र आकर्षकारिका गरी दुई जात हुन्छ । स्वाद अनुसार पनि टर्रो र गुलियो गरी दुई जात हुन्छ । कारीले पित्तविकार नाश गर्दछ । यो दीपनी, ग्राही, रुचिप्रद, घाँटी सफा गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

## मइनफल (मदनफल)

**मदनः शल्यकैडर्यः पिण्डी धाराफलस्तथा ।**
**तरटः करहाटश्च राहुः पिण्डातकः स्मृतः ॥६६॥**
**कण्टालो विषमुष्टिश्च छर्दनो विषपुष्पकः ।**
**घण्टालो मादनो हर्षो घण्टाख्यो वस्तिरोधनः ॥**
**ग्रन्थिफलो गोलफलो मदनाह्वश्च विंशतिः ॥६७॥**
**मदनः कटुतिक्तोष्णः कफवातव्रणापहः ।**
**शोफदोषापहश्चैव वमने च प्रशस्यते ॥६८॥**

(१) मदन, (२) शल्यकैडर्य, (३) पिण्डी, (४) धाराफल, (५) तरट, (६) करहाट, (७) राहु, (८) पिण्डातक, (९) कण्टाल, (१०) विषमुष्टि, (११) छर्दन, (१२) विषपुष्पक, (१३) घण्टाल, (१४) मादन, (१५) हर्ष, (१६) घण्टाख्य, (१७) वस्तिरोधन, (१८) ग्रन्थिफल, (१९) गोलफल र (२०) मदन शब्दका पर्यायवाची शब्दहरू : यी बीस नाम मइनफलका संस्कृत पर्यायवाची नामहरू हुन् । मइनफल पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार, वातविकार र घाउखटिरा नाशक हुन्छ । यसले सुजन र सुजनजन्य विकार नाश गर्दछ । यो वान्ता गराउन उपयोगी हुन्छ ।



## मइनफलविशेष (महापिण्डीतक)

**वाराहोऽन्यः कृष्णवर्णो महापिण्डीतको महान् ।**
**स्निग्धपिण्डीतकश्चान्यः स्थूलवृक्षफलस्तथा ॥६९॥**
**अन्यौ च मदनौ श्रेष्ठौ कटुतिक्तरसान्वितौ ।**
**छर्दनौ कफहृद्रोगपक्वामाशयशोधनौ ॥७०॥**

अर्कोथरी कालो वाराह वा महापिण्डीतक नामक ठूलो जातको मइनफल हुन्छ । अर्को स्निग्धपिण्डीतक वा स्थूलवृक्षफल नामक मइनफल पनि हुन्छ । यी मइनफल पिरा र तीता हुन्छन् । यिनले बान्ता गराउँदछन् र कफविकार नाश गर्दछन् तथा आमाशयलाई सफा पार्दछन् ।

## वीरतरु (बिल्वान्तर)

**बिल्वान्तरश्चीरवृक्षः क्षुधाकुशलसञ्ज्ञकः ।**
**दीर्घमूलो वीरवृक्षः कृच्छारिश्च षडाह्वयः ॥७१॥**
**बिल्वान्तरः कटूष्णश्च कृच्छ्रघ्नः सन्धिशूलनुत् ।**
**वह्निदीप्तिकरः पथ्यो वातामयविनाशनः ॥७२॥**

(१) बिल्वान्तर, (२) चीरवृक्ष, (३) क्षुधाकुशल, (४) दीर्घमूल, (५) वीरवृक्ष र (६) कृच्छारि : यी छ नाम वीरतरुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कृच्छ्र र जोर्नीका शूलरोग नाशक हुन्छ । यसले जठराग्निलाई बाल्दछ । यो पथ्य र वातविकार नाशक हुन्छ ।

## तरटी

**तरटी तारटी तीव्रा खर्बुरा रक्तबीजका ।**
**तरटी तिक्तमधुरा गुरुर्बल्या कफापहा ॥७३॥**

तरटी, तारटी, तीव्रा, खर्बुरा र रक्तबीजका : यी तरटीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, गुलियो, पचाउन कठिन, बलप्रदायक र कफविकार नाशक हुन्छ ।

## श्रीवल्ली

**श्रीवल्ली शिववल्ली च कण्टवल्ली च शीतला ।**
**अम्ला कट्फलाऽश्वत्था दुरारोहा च साऽष्टधा ॥७४॥**
**श्रीवल्ली कटुकाऽम्ला च वातशोफकफापहा ।**
**तत्फलं तैललेपघ्नमत्यम्लं रुचिकृत् परम् ॥७५॥**



(१) श्रीवल्ली, (२) शिववल्ली, (३) कण्टवल्ली, (४) शीतला, (५) अम्ला, (६) कट्फला, (७) अश्वत्था र (८) दुरारोहा : यी आठ नाम श्रीवल्लीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, अमिलो तथा वातविकार, सुजन र कफविकार नाशक हुन्छ । यसको फलले तेलको मालिश निखार्दछ, अति अमिलो हुन्छ र अत्यन्त रुचिप्रद हुन्छ ।

## निकुञ्जिका

**अन्या निकुञ्जिकाम्लाख्या कुञ्जिका कुञ्जवल्लरी ।**
**निकुञ्जिका बुधैरुक्ता श्रीवल्लीसदृशी गुणैः ॥७६॥**

निकुञ्जिकाम्ला, कुञ्जिका र कुञ्जवल्लरी : यी अर्को थरी श्रीवल्लीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको गुण पनि श्रीवल्लीको जस्तै हुन्छ भनी विद्वानहरूले बताएका छन् ।

## मुजविशेष (रामशर)

**अपर्वदण्डो दीर्घश्च रामबाणो नृपप्रियः ।**
**रामकाण्डो रामशरो रामस्येषुश्च सप्तधा ॥७७॥**
**रामकाण्डजमूलं स्यादीषदुष्णं रुचिप्रदम् ।**
**रसे चाम्लकषायश्च पित्तकृत् कफवातहृत् ॥७८॥**

(१) अपर्वदण्ड, (२) दीर्घ, (३) रामबाण, (४) नृपप्रिय, (५) रामकाण्ड, (६) रामशर र (७) राम : यी सात नाम मुजविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुजको जरा केही उष्णवीर्यको र रुचिप्रदायक हुन्छ । यसको रस अमिलो, टर्रो, पित्तविकार गर्ने तथा कफविकार र वातविकार नाश गर्ने गुणको हुन्छ ।

## जुनेलो (यावनाल)

**यावनालोऽथ नदीजो दृढत्वग्वारिसम्भवः ।**
**यावनालनिभश्चैव खरपत्रः षडाह्वयः ॥७९॥**
**यावनालशरमूलमीषन्मधुररुच्यकम् ।**
**शीतं पित्ततृषापघ्नं पशूनामबलप्रदम् ॥८०॥**

(१) यावनाल, (२) नदीज, (३) दृढत्वक्, (४) वारिसम्भव, (५) यावनालनिभ र (६) खरपत्र : यी छ नाम जुनेलोका संस्कृत पर्यायवाची नामहरू हुन् । जुनेलोको जरा केही गुलियो र रुचिप्रद हुन्छ । यो शीतवीर्यको, पित्तविकार नाशक र तिर्खा नाशक हुन्छ । यो पशुका लागि बलप्रदायक हुँदैन ।

## मुजविशेष (शर)

**शरो बाण इषुः काण्ड उत्कटः सायकः क्षुरः ।**
**इक्षुरः क्षुरिकापत्रो विशिखश्च दशाभिधः ॥८१॥**
**स्थूलोऽन्यः स्थूलशरो महाशरः स्थूलसायकमुखाख्यः ।**
**इक्षुरकः क्षुरपत्रो बहुमूलो दीर्घमूलको मुनिभिः ॥८२॥**
**शरद्वयं स्यान्मधुरं सुतिक्तं कोष्णं कफभ्रान्तिमदापहारि ।**
**बलञ्च वीर्यञ्च करोति नित्यं निषेवितं वातकरञ्च किञ्चित् ॥८३॥**

(१) शर, (२) बाण, (३) इषु, (४) काण्ड, (५) उत्कट, (६) सायक, (७) क्षुर, (८) इक्षुर, (९) क्षुरिकापत्र र (१०) विशिख : यी दश नाम एकथरी मुजका तथा (१) स्थूलशर, (२) महाशर, (३) स्थूलसायकमुख, (४) इक्षुरक, (५) क्षुरपत्र, (६) बहुमूल र (७) दीर्घमूलक : यी सात नाम अर्को

थरी मुजका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै मुज गुलियो, तीतो, उष्णवीर्यका तथा कफविकार, भ्रम र मद नाशक हुन्छन् । यिनले बल र वीर्य बढाउँदछन् । सधैं खाए थोरै वातविकार बढाउँदछन् ।

### मुजविशेष (मुञ्ज)

**मुञ्जो मौञ्जीतृणाख्यः स्याद्ब्रह्मण्यस्तेजसाह्वयः ।**
**वानीरजो मुञ्जनकः शारी दर्भाह्वयश्च सः ॥८४॥**
**दूरमूलो दृढतृणो दृढमूलो बहुप्रजः ।**
**रञ्जनः शत्रुभङ्गश्च स्याच्चतुर्दशसञ्ज्ञकः ॥८५॥**
**मुञ्जस्तु मधुरः शीतः कफपित्तजदोषजित् ।**
**ग्रहरक्षासु दीक्षासु पावनो भूतनाशनः ॥८६॥**

(१) मुञ्ज, (२) मौञ्जीतृण, (३) ब्रह्मण्य, (४) तेजस, (५) वानीरज, (६) मुञ्जनक, (७) शारी, (८) दर्भ, (९) दूरमूल, (१०) दृढतृण, (११) दृढमूल, (१२) बहुप्रज, (१३) रञ्जन र (१४) शत्रुभङ्ग : यी चौध नाम मुजका संस्कृत पर्यायवाची नामहरू हुन् । मुज गुलियो, शीतवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यो मुज ग्रहबाधामा र दीक्षामा पवित्र हुन्छ । यसले भूतबाधा पनि नाश गर्दछ ।



### काँस (काश)

**काशः काण्डेक्षुरिक्ष्वारिः काकेक्षुर्वायसेक्षुकः ।**
**इक्षुरश्चेक्षुकाण्डश्च शारदः सितपुष्पकः ॥८७॥**
**नादेयो दर्भपत्रश्च लेखनः(नी) काण्डकाण्डकः ।**
**कण्ठालङ्कारकश्चैव ज्ञेयः पञ्चदशाह्वयः ॥८८॥**
**काशश्च शिशिरो गौल्यो रुचिकृत् पित्तदाहनुत् ।**
**तर्पणो बलकृद्वृष्य आमशोषक्षयापहः ॥८९॥**

(१) काश, (२) काण्डेक्षु, (३) इक्ष्वारि, (४) काकेक्षु, (५) वायसेक्षुक, (६) इक्षु, (७) इक्षुकाण्ड, (८) शारद, (९) सितपुष्पक, (१०) नादेय, (११) दर्भपत्र, (१२) लेखनः(नी), (१३) काण्डकाण्डक र (१४) कण्ठालङ्कारक : यी पन्ध्र नाम काँसका संस्कृत पर्यायवाची नामहरू हुन् । काँस शीतवीर्यको, गुलियो, रुचिकर तथा पित्तविकार र डाह नाशक हुन्छ । यसले तृप्ति र बल दिन्छ तथा आमविकार, सुजन र क्षयरोग पनि नाश गर्दछ ।

### काँसविशेष (अशिरी)

**अन्योऽशिरी मिशिर्गण्डा अश्वालो नीरजः शरः ।**
**मिशिर्मधुरशीतः स्यात् पित्तदाहक्षयापहः ॥९०॥**

अशिरी, मिशि, गण्डा, नीरज र शर : यी काँशविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो काँश गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह र क्षयरोग नाशक हुन्छ ।

### सेतो कुश (सितदर्भ)

**सितदर्भो ह्रस्वकुम्भः पूतो यज्ञियपत्रकः ।**
**वज्रो ब्रह्मपवित्रश्च तीक्ष्णो यज्ञस्य भूषणः ॥**
**सूचीमुखः पुण्यतृणो वह्निः पूततृणो द्विषट् ॥९१॥**
**यज्ञमूलं हिमं रुच्यं मधुरं पित्तनाशनम् ।**
**रक्तज्वरतृषाश्वासकामलादोषशोषकृत् ॥९२॥**

(१) सितदर्भ, (२) ह्रस्वकुम्भ, (३) पूत, (४) यज्ञियपत्रक, (५) वज्र, (६) ब्रह्मपवित्र, (७) तीक्ष्णा, (८) यज्ञभूषण, (९) सूचीमुख, (१०) पुण्यतृण, (११) वह्निः र (१२) पूततृण : यी बाह्र नाम सेतो कुशका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कुशको जरा शीतवीर्यको, रुचिप्रद, गुलियो र पित्तनाशक हुन्छ । यसले रक्तविकार, ज्वर, तिर्खा, दम र कमलपित्तजन्य विकारलाई सोस्ने काम गर्दछ ।

### कुश (हरिद्दर्भ)

**कुशोऽल्पः शरपत्रश्च हरिद्दर्भः पृथुच्छदः ।**
**शारी च रूक्षदर्भश्च दीर्घपत्रः पवित्रकः ॥९३॥**
**दर्भौ द्वौ च गुणे तुल्यौ तथाऽपि च सितोऽधिकः ।**
**यदि श्वेतकुशाभावस्त्वपरं योजयेद्भिषक् ॥९४॥**

शरपत्र, हरिद्दर्भ, पृथुच्छद, शा(शी)री, रूक्षदर्भ, दीर्घपत्र र पवित्रक : यी कुशका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै थरी कुश समान गुणका हुन्छन् ता पनि सेतो कुश बढी गुनिलो हुन्छ । सेतो कुश नपाउँदा मात्र वैद्यले अर्को कुशको प्रयोग गर्नू ।

### बाबियो (बल्वजा)

**बल्वजा दृढपत्री च तृणेक्षुस्तृणबल्वजा ।**
**मौञ्जीपत्रा दृढतृणा पानीयाश्वा दृढक्षुरा ॥९५॥**
**बल्वजा मधुरा शीता पित्तदाहतृषापहा ।**
**वातप्रकोपणी रुच्या कण्ठशुद्धिकरो परा ॥९६॥**

बल्वजा, दृढपत्री, तृणेक्षु, तृणबल्वजा, मौञ्जीपत्रा, दृढतृणा, पानीयाश्वा र दृढक्षुरा : यी नाम बाबियोका संस्कृत पर्यायवाची नामहरू हुन् । बाबियो गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह र तिर्खा नाशक हुन्छ । यसले वातविकार बढाउँदछ । बाबियो रुचिप्रद र अति नै घाँटी प्रशोधक हुन्छ ।

### नेपाले उशीर (कुतृण)

**कुतृणं कत्तृणं भूतिर्भूतिकं रोहिषं तृणम् ।**
**श्यामकं ध्यामकं पूतिर्मुद्गलं वदग्धकम् ॥९७॥**
**कुतृणं दशनामाढ्यं कटुतिक्तकफापहम् ।**
**शस्त्रशल्यादिदोषघ्नं बालग्रहविनाशनम् ॥९८॥**

(१) कुतृण, (२) कत्तृण, (३) भूति, (४) भूतिक, (५) रोहिषतृण, (६) श्यामक, (७) ध्यामक, (८) पूति, (९) मुद्गल र (१०) दवदग्धक : यी दश नाम नेपाले उशीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उशीर पिरो, तीतो र कफविकार नाशक हुन्छ । यसले हातहतियार र किला आदिको विकार तथा बालकको ग्रहबाधा पनि विनाश गर्दछ ।

### उशीरविशेष (दीर्घरोहिषतृण)

**अन्यद्रोहिषकं दीर्घं दृढकाण्डो दृढच्छदम् ।**
**द्राघिष्ठं दीर्घनालश्च तिक्तसारश्च कुत्सितम् ॥९९॥**
**दीर्घरोहिषकं तिक्तं कटूष्णं कफवातजित् ।**
**भूतग्रहविषघ्नं च व्रणक्षतविरोपणम् ॥१००॥**

दीर्घरोहिषक, दीर्घ, दृढकाण्ड, दृढच्छद, द्राघिष्ठ, दीर्घनाल, तिक्तसार र कुत्सित : यी ठुलो जातको नेपाले उशीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उशीर तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले भूतबाधा, ग्रहबाधा र विषविकार नाश गर्दछ तथा घाउखटिरा भर्दछ ।

### नर्कट वा निगालो (नल)

**नालो नडो नलश्चैव कुक्षिरन्ध्रोऽथ कीचकः ।**
**वंशान्तरश्च धमनः शून्यमध्यो विभीषणः ॥१०१॥**
**छिद्रान्तो मृदुपत्रश्च रन्ध्रपत्रो मृदुच्छदः ।**
**नालवंशः पोटगल इत्यस्याह्वास्त्रिपञ्चधा ॥१०२॥**
**नलः शीतकषायश्च मधुरो रुचिकारकः ।**
**रक्तपित्तप्रशमनो दीपनो वीर्यवृद्धिदः ॥१०३॥**

(१) नाल, (२) नड, (३) नल, (४) कुक्षिरन्ध्र, (५) कीचक, (६) वंशान्तर, (७) धमन, (८) शून्यमध्य, (९) विभीषण, (१०) छिद्रान्त, (११) मृदुपत्र, (१२) रन्ध्रपत्र, (१३) मृदुच्छद, (१४) नालवंश र (१५) पोटगल : यी पन्ध्र नाम नर्कट अथवा निगालोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, टर्रो, गुलियो र रुचिप्रद हुन्छ । यसले रक्तपित्त नाश गर्दछ । यो दीपनी र वीर्यवर्धक हुन्छ ।

### द्यौनिगालो (महानल)



**अन्यो महानलो वन्यो देवनालोत्तमोः नलः ।**
**स्थूलनालः स्थूलदण्डः सुरनालः सुरद्रुमः ॥१०४॥**
**देवनालोऽतिमधुरो वृष्य ईषत्कषायकः ।**
**नलः स्यादधिको वीर्ये शस्यते रसकर्मणि ॥१०५॥**

महानल, वन्य, देवनाल, नलोत्तम, स्थूलनाल, स्थूलदण्ड, सुरनाल र सुरद्रुम : यी ठूलो खालको देउनिगालोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो निगालो अति गुलियो, वीर्यवर्धक र थोरै टर्रो पनि हुन्छ । देउनिगालो अधिक वीर्यशाली र पारो प्रशोधनमा उपयोगी हुन्छ ।

### दुबो (नीलदूर्वा)

**स्यान्नीलदूर्वा हरिता च शाम्भवी श्यामा च शान्ता शतपर्विकाऽमृता ।**
**पूता शतग्रन्थिरनुष्णवल्लिका शिवा शिवेष्टाऽपि च मङ्गला जया ॥१०६॥**
**सुभगा भूतहन्त्री च शतमूला महौषधी ।**
**अमृता विजया गौरी शान्ता स्यादेकविंशतिः ॥१०७॥**
**नीलदूर्वा तु मधुरा तिक्ता शिशिररोचनी ।**

**रक्तपित्तातिसारघ्नी कफवातज्वरापहा ॥१०८॥**

(१) नीलदूर्वा, (२) हरिता, (३) शाम्भवी, (४) श्यामा, (५) शान्ता, (६) शतपर्विका, (७) अमृता, (८) पूता, (९) शतग्रन्थि, (१०) अनुष्णवल्लिका, (११) शिवा, (१२) शिवेष्टा, (१३) मङ्गला, (१४) जया, (१५) सुभगा, (१६) भूतहन्त्री, (१७) शतमूला, (१८) महौषधी, (१९) अमृता, (२०) विजया, (२१) गौरी र (२२) शान्ता : यी बीस नाम (शान्ता र अमृता दोहोरिएको, एक्काईस भनिएको) नीलो दूबोका संस्कृत पर्यायवाची नामहरू हुन् । नीलो दूबो गुलियो, तीतो, शीतवीर्यको र रुचिप्रद हुन्छ । यसले रक्तपित्त, अतिसार, कफविकार, वातविकार र ज्वर नाश गर्दछ ।

## सेतो दूबो (श्वेतदूर्वा)

**स्याद्गोलोमी श्वेतदूर्वा सिताख्या चण्डा भद्रा भार्गवी दुर्मरा च ।**
**गौरी विघ्नेशानकान्ताऽप्यनन्ता श्वेता दिव्या श्वेतकाण्डा प्रचण्डा ॥१०९॥**
**सहस्रवीर्या च सहस्रकाण्डा सहस्रपर्वा सुरवल्लभा च ।**
**शुभा सुपर्वा च सितच्छदा च स्वच्छा च कच्छान्तरुहाऽब्धिहस्ता ॥११०॥**
**श्वेतदूर्वाऽतिशिशिरा मधुरा वान्तिपित्तजित् ।**
**आमातिसारकासघ्नी रुच्या दाहतृषापहा ॥१११॥**



(१) गोलोमी, (२) श्वेतदूर्वा, (३) सिता, (४) चण्डा, (५) भद्रा, (६) भार्गवी, (७) दुर्मरा, (८) गौरी, (९) विघ्नेशानकान्ता, (१०) अनन्ता, (११) श्वेता, (१२) दिव्या, (१३) श्वेतकाण्डा, (१४) प्रचण्डा, (१५) सहस्रवीर्या, (१६) सहस्रकाण्डा, (१७) सहस्रपर्वा, (१८) सुरवल्लभा, (१९) शुभा, (२०) सुपर्वा, (२१) सितच्छदा, (२२) स्वच्छा, (२३) कच्छान्तरुहा र (२४) अब्धिहस्ता : यी चौबीस नाम सेतो दूबोका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो दूबो अती नै शीतवीर्यको हुन्छ । यो गुलियो तथा वाकवाकी र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले आमविकार, अतिसार र खोकी नाश गर्दछ । यो रुचिप्रद हुन्छ । यसले डाह र तिर्खा पनि नाश गर्दछ ।

## लहरे दूबो (मालादूर्वा)

**मालादूर्वा वल्लिदूर्वाऽलिदूर्वा मालाग्रन्थिर्ग्रन्थिला ग्रन्थिदूर्वा ।**
**मूलग्रन्थिर्वल्लरी ग्रन्थिमूला रोहत्पर्वा पर्ववल्ली सिताख्या ॥११२॥**
**वल्लिदूर्वा सुमधुरा तिक्ता च शिशिरा च सा ।**
**पित्तदोषप्रशमनी कफवान्तितृषापहा ॥११३॥**

मालादूर्वा, वल्लिदूर्वा, अलिदूर्वा, मालाग्रन्थि, ग्रन्थिला, ग्रन्थिदूर्वा, मूलग्रन्थि, वल्लरी, ग्रन्थिमूला, रोहत्पर्वा, पर्ववल्ली र सिता शब्दका पर्यायवाची शब्दहरू : यी नाम लहरे दूबोका संस्कृत

पर्यायवाची नामहरू हुन् । यो गुलियो, तातो, शीतवीर्यको तथा पित्तविकार, कफविकार, वाकवाकी र तिर्खा नाशक हुन्छ ।

### घोडे दूबो (गण्डालीदूर्वा)

**गण्डाली स्याद्गण्डदूर्वाऽतितीव्रा मत्स्याक्षी स्याद्वारुणी मीननेत्रा ।**
**श्यामाग्रन्थि ग्रन्थिला ग्रन्थिपर्णी सूचीपत्रा श्यामकाण्डा जलस्था ॥११४॥**
**शकुलाक्षी कलाया च चित्रा पञ्चदशाह्वया ॥११५॥**
**गण्डदूर्वा तु मधुरा वातपित्तज्वरापहा ।**
**शिशिरा द्वन्द्वदोषघ्नी भ्रमतृष्णाश्रमापहा ॥११६॥**

(१) गण्डाली, (२) गण्डदूर्वा, (३) अतितीव्रा, (४) मत्स्याक्षी, (५) वारुणी, (६) मीननेत्रा, (७) श्यामाग्रन्थि, (८) ग्रन्थिला, (९) ग्रन्थिपर्णी, (१०) सूचीपत्रा, (११) श्यामकाण्डा, (१२) जलस्था, (१३) शकुलाक्षी (१४) कलाया र (१५) चित्रा : यी पन्ध्र नाम घोडे दूबोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दूबो गुलियो तथा वातविकार, पित्तविकार र ज्वर नाशक हुन्छ । यो शीतवीर्यको, त्रिदोषमध्ये दुई दोष मिलेर हुने विकार, भ्रम, तिर्खा र थकाई नाशक हुन्छ ।

### दूबोका सामान्य गुण (दूर्वासामान्यगुण)

**दूर्वाः कषाया मधुराश्च शीताः पित्तात्तृषाऽरोचकवान्तिहन्त्र्यः ।**
**सदाहमूर्च्छाग्रहभूतशान्तिश्लेष्मश्रमध्वंसनतृप्तिदाश्च ॥११७॥**

दूबो टर्रो, गुलियो, शीतवीर्यको तथा पित्तविकार, तिर्खा, अरुची र वाकवाकी नाशक हुन्छ । यसले डाह, बेहोसीपन, ग्रहबाधा र भूतबाधालाई शान्त पार्दछ । दूबोले कफविकार र थकाई नाश गर्दछ । यो तृप्तिदायक पनि हुन्छ ।

### सिरु (कुन्दुरु)

**कुन्दुरुष्कन्दुरो रुण्डी दीर्घपत्रः खरच्छदः ।**
**रसाभः क्षेत्रसम्भूतः सुतृष्णो मृगवल्लभः ॥११८॥**
**गौल्यं कुन्दुरुमूलञ्च शीतं पित्तातिसारनुत् ।**
**प्रशस्तं शोधनानाञ्च बलपुष्टिविवर्धनम् ॥११९॥**

कुन्दुरु, कन्दुर, रुण्डी, दीर्घपत्र, खरच्छद, रसाभ, क्षेत्रसम्भूत, सुतृष्ण र मृगवल्लभ : यी नाम सिरुका संस्कृत पर्यायवाची नामहरू हुन् । सिरुको जरा गुलियो, शीतवीर्यको तथा पित्तविकार र

अतिसार नाशक हुन्छ । धातु, औखती आदि प्रशोधनका लागि यो उत्तम हुन्छ । यसले बल र पुष्टि पनि बढाउँदछ ।

**पिर्रे विशेष (भूतृण)**

**भूतृणो रोहिषो भूतिर्भूतिकोऽथ कुटुम्बकः ।**
**मालातृणः सुमाली च छत्रोऽतिच्छत्रकस्तथा ॥१२०॥**
**गुह्यबीजः सुगन्धश्च गुलालः पुंस्त्वविग्रहः ।**
**बधिरश्चातिगन्धश्च शृङ्गरोहः रसेन्दुकः ॥१२१॥**
**भूतृणं कटुतिक्तञ्च वातसन्तापनाशनम् ।**
**हन्ति भूतग्रहावेशान्विषदोषाँश्च दारुणान् ॥१२२॥**

(१) भूतृण, (२) रोहिष, (३) भूति, (४) भूतिक, (५) कुटुम्बक, (६) मालातृण, (७) सुमाली, (८) छत्र, (९) अतिच्छत्रक, (१०) गुह्यबीज, (११) सुगन्ध, (१२) गुलाल, (१३) पुंस्त्वविग्रह, (१४) बधिर, (१५) अतिगन्ध र (१६) शृङ्गरोह : यी सोह्र नाम पिर्रेविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो हुन्छ । यसले वातविकार जन्य डाह, भूतबाधा, ग्रहबाधा र कडा खालको विषविकार पनि नाश गर्दछ ।



**सानो पिर्रे झार (गन्धतृण)**

**सुगन्धभूतृणश्चान्यः सुरसः सुरभिस्तथा ।**
**गन्धतृणः सुगन्धश्च मुखवासः षडाह्वयः ॥१२३॥**
**गन्धतृणं सुगन्धि स्यादीषत्तिक्तं रसायनम् ।**
**स्निग्धं मधुरशीतञ्च कफपित्तश्रमापहम् ॥१२४॥**

सुगन्धभूतृण, सुरस, सुरभि, गन्धतृण, सुगन्ध र मुखवास : यी नाम सानो पिर्रे झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सुगन्धी, थोरै तीतो र रसायनी हुन्छ । यो झार चिल्लो, गुलियो, शीतवीर्यको तथा कफविकार, पित्तविकार र थकाई नाशक हुन्छ ।

**खर (उखल)**

**उखलो भूरिपत्रश्च सुतृणश्च तृणोत्तमः ।**
**उखलो बलदो रुच्यः पशूनां सर्वदा हितः ॥१२५॥**

उखल, भूरिपत्र, सुतृण र तृणोत्तम : यी खरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बलदायक,

रुचिप्रद र पशुका लागि सधैं हितकर हुन्छ ।

**बन्सो (इक्षुदर्भा)**

**इक्षुदर्भा सुदर्भा च पत्रालुस्तृणपत्रिका ॥१२६॥**
**इक्षुदर्भा सुमधुरा स्निग्धा चेषत्कषायका ।**
**कफपित्तहरा रुच्या लघुः सन्तर्पणी स्मृता ॥१२७॥**

इक्षुदर्भा, सुदर्भा, पत्रालु र तृणपत्रिका : यी नाम बन्सोका संस्कृत पर्यायवाची नामहरू हुन् । बन्सो गुलियो, चिल्लो र थोरै टर्रो हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । यो रुचिप्रद, पचाउन हलुका र तृप्तिदायक हुन्छ ।

**घाँस विशेष (गोमूत्रिका)**

**गोमूत्रिका रक्ततृणा क्षेत्रजा कृष्णभूमिजा ।**
**गोमूत्रिका तु मधुरा वृष्या गोदुग्धप्रदायिनी ॥१२८॥**

गोमूत्रिका, रक्ततृणा, क्षेत्रजा र कृष्णभूमिजा : यी घाँस विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, वीर्यवर्धक र गाईको दूध बढाउने गुणको हुन्छ ।

**झारविशेष (शिल्पिका)**

**शिल्पिका शिल्पिनी शीता क्षेत्रजा च मृदुच्छदा ।**
**शिल्पिका मधुरा शीता तद्बीजं बलवृष्यदम् ॥१२९॥**

शिल्पिका, शिल्पिनी, शीता, क्षेत्रजा र मृदुच्छदा : यी झारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र शीतवीर्यको हुन्छ । यसको बीजले बल र वीर्य बढाउँदछ ।

**घाँसविशेष (निःश्रेणिका)**

**निःश्रेणिका श्रेणिका च नीरसा वनवल्लरी ।**
**निःश्रेणिका नीरसोष्णा पशूनामबलप्रदा ॥१३०॥**

निःश्रेणिका, श्रेणिका, नीरसा र वनवल्लरी : यी घाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो घाँस रसहीन, उष्णवीर्यको र पशुलाई बल नदिने गुणको हुन्छ ।

### झारविशेष (गर्भौटिका)

**गर्भौटिका सुनीला च जरडी च जलाश्रया ॥१३१॥**
**जरडी मधुरा शीता सारणी दाहहारिणी ।**
**रक्तदोषहरा रुच्या पशूनां दुग्धदायिनी ॥१३२॥**

गर्भौटिका, सुनीला, जरडी र जलाश्रया : यी झारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो झार गुलियो, शीतवीर्यको, मलमूत्र तलतिर सार्ने, डाह नाशक, रक्तविकार नाशक, रुचिप्रद र पशुको दूध बढाउने गुणको हुन्छ ।

### घाँसविशेष (मज्जर)

**मज्जरः पवनः प्रोक्तः सुतृणः स्निग्धपत्रकः ।**
**मृदुग्रन्थिश्च मधुरो धेनुदुग्धकरश्च सः ॥१३३॥**

मज्जर, पवन, सुतृण र स्निग्धपत्रक : यी घाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गाँठाहरू कोमल हुन्छन् । यो गुलियो हुन्छ । यसले गाईको दूध बढाउँदछ ।

### घाँसविशेष (तृणाढ्य)

**तृणाढ्यं पर्वततृणं पत्राढ्यञ्च मृगप्रियम् ।**
**बलपुष्टिकरं रुच्यं पशूनां सर्वदा हितम् ॥१३४॥**

तृणाढ्य, पर्वततृण, पत्राढ्य र मृगप्रिय : यी घाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बलदायक, पुष्टिदायक, रुचिप्रद र पशुका लागि सदैव हितकर हुन्छ ।

### बाँसपाते झार (वंशपत्री)

**वंशपत्री वंशदला जीरिका जीर्णपत्रिका ।**
**वंशपत्री सुमधुरा शिशिरा पित्तनाशनी ॥**
**रक्तदोषहरा रुच्या पशूनां दुग्धदायिनी ॥१३५॥**

वंशपत्री, वंशदला, जीरिका र जीर्णपत्रिका : यी बाँसपाते झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो झार गुलियो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । यसले रक्तविकार नाश गर्दछ । यो

पशुको दूध बढाउने गुणको हुन्छ ।

### पाटे घाँस (मन्थानक)

**मन्थानकस्तु हरितो दृढमूलस्तृणाधिपः ।**
**स्निग्धो धेनुप्रियो दोग्धा मधुरो बहुवीर्यकः ॥१३६॥**

मन्थानक, हरित, दृढमूल र तृणाधिप : यी पाटेघाँसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चिल्लो, गाईलाई मनपर्ने, दूध बढाउने, गुलियो र धेरै पौष्टिक हुन्छ ।

### घाँसविशेष (पल्लिवाह)

**पल्लिवाहो दीर्घतृणः सुपत्रस्ताम्रवर्णकः ।**
**अदृढः शाकपत्रादिः पशूनामबलप्रदः ॥१३७॥**

पल्लिवाह, दीर्घतृण, सुपत्र र ताम्रवर्णक : यी घाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका साग, पात आदि नरम हुन्छन् र यो पशुका लागि बलदायक हुँदैन ।



### घाँसविशेष (लवणतृण, नुनढिकी)

**लवणतृणं लोणतृणं तृणाम्लं पटुतृणकमम्लकाण्डञ्च ।**
**पटुतृणकं क्षाराम्लं कषायस्तन्यमश्ववृद्धिकरम् ॥१३८॥**

लवणतृण, लोणतृण, तृणाम्ल, पटुतृणक र अम्लकाण्ड : यी घाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो घाँस नुनिलो, अमिलो र टर्रो हुन्छ । यसले दूध बढाउँदछ । यो घोडालाई बढाउने गुणको हुन्छ ।

### झारविशेष (पण्यान्ध)

**पण्यान्धः कङ्गुणीपत्रः पण्यान्धा पणधा च सा ॥१३९॥**
**पण्यान्धा समवीर्या स्यात् तिक्ता क्षारा च सारिणी ।**
**तत्कालशस्त्रघातस्य व्रणसंरोपणी परा ॥१४०॥**
**दीर्घा मध्या तथा ह्रस्वा पण्यान्धा त्रिविधा स्मृता ।**
**रसवीर्यविपाके च मध्यमा गुणदायिका ॥१४१॥**

पण्यान्ध, कङ्गुणीपत्र, पण्यान्धा र पणधा : यी झारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो हल्का वीर्यशाली, तीतो, नुनिलो र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ । हातहतियार काटेका आलो घाउ यसले अत्यन्त चाँडै भर्दछ । लामो, मझौला र छोटो गरी यो तीन किसिमको हुन्छ । रस, वीर्य र विपाकमा मझौला खालको बढी गुनिलो हुन्छ ।

### गुँदि झार विशेष (गुण्डतृण)

**गुण्डस्तु काण्डगुण्डः स्याद् दीर्घकाण्डस्त्रिकोणकः ।**
**छत्रगुच्छोऽसिपत्रश्च नीलपत्रस्त्रिधारकः ॥१४२॥**
**वृत्तगुण्डोऽपरो वृत्तो दीर्घनालो जलाश्रयः ।**
**तत्र स्थूलो लघुश्चान्यस्त्रिधाऽयं द्वादशाभिधः ॥१४३॥**
**गुण्डास्तु मधुराः शीताः कफपित्तातिसारहाः ।**
**दाहरक्तहरास्तेषां मध्ये स्थूलतरोऽधिकः ॥१४४॥**

गुण्ड, काण्डगुण्ड, दीर्घकाण्ड, त्रिकोणक, छत्रगुच्छ, असिपत्र, नीलपत्र र त्रिधारक : यी गुँदि झारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । वृत्तगुण्ड, वृत्त, दीर्घनाल र जलाश्रय : यी अर्कोथरी गुँदि झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो झार मोटो, मझौला र सानो गरी पुनः तीन किसिमको हुन्छ । यसरी यसका जम्मा बाह्र पर्यायवाची नाम हुन्छन् । यो गुँदि झार गुलियो, शीतवीर्यको तथा कफविकार, पित्तविकार र अतिसार नाशक हुन्छ । यसले डाह र रक्तविकार पनि नाश गर्दछ । तीन थरी गुँदि झारमध्ये मझौला र मोटो झार बढी गुनिलो हुन्छ ।

### कसेरु (गुण्डकन्द)

**गुण्डकन्दः कसेरुः स्यात् क्षुद्रमुस्ता कसेरुका ।**
**शूकरेष्टः सुगन्धिश्च सुकन्दो गन्धकन्दकः ॥१४५॥**
**कसेरुकः कषायोऽल्पमधुरोऽतिखरस्तथा ।**
**रक्तपित्तप्रशमनः शीतो दाहश्रमापहः ॥१४६॥**

गुण्डकन्द, कसेरु, क्षुद्रमुस्ता, कसेरुका, शूकरेष्ट, सुगन्धि, सुकन्द र गन्धकन्दक : यी कसेरुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, थोरै गुलियो र अति रुखो हुन्छ । यसले रक्तपित्त, डाह र थकाई नाश गर्दछ । यो शीतवीर्यको हुन्छ ।

### कुटुलिकोसा (चणिका)

**चणिका दुग्धदा गौल्या सुनीला क्षेत्रजा हिमा ।**

**वृष्या बल्याऽतिमधुरा बीजैः पशुहिता तृणैः ॥१४७॥**

चणिका, दुग्धदा, गौल्या, सुनीला, क्षेत्रजा र हिमा : यी कुटुलीकोसाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको बीज वीर्यवर्धक, बलदायक र अति गुलियो हुन्छ । यसको घाँस पशुका लागि लाभदायक हुन्छ ।

### जलपाडरी (गुण्डासिनी)

**गुण्डासिनी तु गुण्डा गुण्डाला गुच्छमूलका चिपिटा ।**
**तृणपत्री जलवासा पृथुला सुविष्टरा च नवाह्वा ॥१४८॥**
**गुण्डासिनी कटुः स्वादे पित्तदाहश्रमापहा ।**
**तिक्तोष्णा श्वयथुघ्नी च व्रणदोषनिबर्हणी ॥१४९॥**

गुण्डासिनी, गुण्डा, गुण्डाला, गुच्छमूलका, चिपिटा, तृणपत्री, जलवासा, पृथुला र सुविष्टरा : यी जलपाडरी विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो स्वादको तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ । यो पाडरी तीतो, उष्णवीर्यको तथा श्वयथु र घाउखटिराको विकार नाशक पनि हुन्छ ।



डा.सतिश चन्द्र साङ्ख्यधर : नरहरीले अध्याय पाँचको श्लोक १२८ मा यसबारेमा लेखिसकेको अवस्थामा यहाँ पुनः लेखिनुले यो सोही वनस्पतिको फरक जात हो कि जस्तो बुझिन्छ ।

### घाँसविशेष (शूलपत्री)

**शूली तु शूलपत्री स्यादशाखा धूम्रमूलिका ।**
**जलाश्रया मृदुलता पिच्छिला महिषीप्रिया ॥१५०॥**
**शूली तु पिच्छिला चोष्णा गुरुर्गौल्या बलप्रदा ।**
**पित्तदाहहरा रुच्या दुग्धवृद्धिप्रदायिका ॥१५१॥**

शूली, शूलपत्री, अशाखा, धूम्रमूलिका, जलाश्रया, मृदुलता, पिच्छिला र महिषीप्रिया : यी घाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो लेस्याइलो, उष्णवीर्यको, पचाउन कठिन, गुलियो र बलप्रदायक हुन्छ । यसले पित्तविकार र डाह नाश गर्दछ । यो रुचिप्रद र दूध बढाउने गुणको हुन्छ ।

### मोथाविशेष (पारिपेल्ल)

**परिपेल्लं प्लवं धान्यं गोपुटं स्यात् कुटन्नटम् ।**
**सितपुष्पं दासपुरं गोनर्दं जीर्णबुध्नकम् ॥१५२॥**
**परिपेल्लं कटूष्णञ्च कफमारुतनाशनम् ।**
**व्रणदाहामशूलघ्नं रक्तदोषहरं परम् ॥१५३॥**

परिपेल्ल, प्लव, धान्य, गोपुट, कुटन्नट, सितपुष्प, दासपुर, गोनर्द र जीर्णबुध्नक : यी मोथेविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार, वातविकार, घाउखटिरा, डाह, शूल र विशेषतः रक्तविकार नाशक हुन्छ ।

### समुद्रफल (हिज्जल)

**हिज्जलोऽथ नदीकान्तो जलजो दीर्घपत्रकः ।**
**नदीजो निचुलो रक्तः कार्मुकः कथितश्च सः ॥१५४॥**
**हिज्जलः कटुरुष्णश्च पवित्रो भूतनाशनः ।**
**वातामयहरो नानाग्रहसञ्चारदोषजित् ॥१५५॥**



हिज्जल, नदीकान्त, जलज, दीर्घपत्रक, नदीज, निचुल, रक्त र कार्मुक : यी समुद्रफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, पवित्र तथा भूतबाधा, वातविकार, आमविकार र अनेकौं ग्रहबाधा नाशक हुन्छ ।

### सिवाँली (शैवाल)

**शैवालं जलनीली स्यात्च्छैवलं जलजं च तत् ।**
**शैवालं शीतलं स्निग्धं सन्तापव्रणनाशनम् ॥१५६॥**

शैवाल, जलनीली शैवल र जलज : यी सिवाँलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, चिल्लो तथा डाह र घाउखटिरा नाशक हुन्छ ।

### वर्गप्रशस्ति

**इत्थं नानाकण्टकिविटपिप्रस्तावव्याख्यातैरण्डादिकतृणविस्ताराढ्यम् ।**
**वर्गं विद्वान् वैद्यकविषयप्रावीण्यज्ञेयं पण्यारण्यकगुणमीयाद्वैद्यः ॥१५७॥**

यसरी यस अध्यायमा विभिन्न प्रकारका काँडेदार वृक्ष, झाडी, वनस्पति, झार, नकट, घाँस आदिलाई विस्तृत ढङ्गले प्रस्तुत गरिएको छ, जसले गर्दा विद्वान चिकित्सकलाई यथार्थमै विज्ञ बनाउनेछ । यसले उसका विषय (ज्ञान) लाई सही तरिकाले राखी कुन ओखती वनजङ्गलबाट र कुन ओखती बजारबाट लिने भन्ने सम्बन्धमा उसको क्षमता विकास गर्नेछ ।

**दुर्वारां विकृतिं स्वसेवनविदां भिन्दन्ति ये भूयसा**
**दुर्वाहाश्च हठेन कण्टकितया सूक्ष्माश्च ये केचन ।**
**तेषामेष महागमान्तरभुवामारण्यकानां किल**
**क्रूरातङ्कभयार्तनिर्वृतिकरो वर्गः सतां सम्मतः ॥१५८॥**

यस अध्यायमा ती जडिबुटीहरूको बारेमा विस्तृत वर्णन भएको छ, जुन जडिबुटीहरू काँडा भएका कारण बोक्न पनि कठिन हुन्छन् । जसले त्यस्ता ओखतीको प्रयोग विधि जानेको छ उसका लायि यी जडिबुटीहरू अझैपनि रोगिका कठिन रोग निको पार्न सक्षम हुन्छन् । यी जडिबुटी सबै जङ्गलका हुन् तथा यिनको उचित प्रयोगले डरलाग्दा रोगलाई र त्यसको पीडा अनि डरबाट त्रसित मानिसहरूलाई विजय हासिल गराउँदछ भन्ने कुरामा विद्वानहरू एकमत छन् ।

**द्विजानां यो राजा जयति रचयन्नोषधिगणं**
**प्रतीतोऽयं नृणाममृतकरतां धारयति च ।**
**अमुष्यायं वर्गो नृहरिकृतिनः काङ्क्षति कृतौ**
**स्थितिं शाल्मल्यादिर्वसुभिरभिधाशेखरमणौ ॥१५९॥**

नरहरि पण्डितले लेखेको अभिधान चूडामणि नामक ग्रन्थमा साल्मल्यादि वर्ग नामक यो आठौं अध्याय सबै शब्दकोशहरूको मूल श्रोत हो । यसरी नरहरि पण्डितको अभिधान चूडामणिको ग्रन्थमा यो सबै शब्दकोशहरूको मूलका रूपमा शाल्मल्यादि वर्ग नामक आठौं वर्ग यहाँ उपस्थित छ । जसले सबै ओखती बनाउँदछन् ती द्विजहरूका राजा (नरहरि) तिनका दुःखलाई नाश गरेर पालनपोषण गर्दै अमर बनाउँदछन् । तिनै नरहरिले आफ्नो ग्रन्थ अभिधान चूडामणिमा यो शब्दकोषहरूको मूल शाल्मल्यादि वर्ग नामक आठौं वर्ग समावेश गरेका छन् ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ शाल्मल्यादिनाम अष्टमो वर्गः ॥८॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत शाल्मल्यादि नामक आठौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।८।**

## प्रभद्रादिवर्ग
## प्रभद्रादिवर्गद्रव्य

प्रभद्रः पञ्चधा प्रोक्तः काश्मर्यो लघुपूर्वकः ।
द्विरग्निमन्थः श्योनाकद्वितयं चाजशृङ्गिका ॥१॥
काश्मर्याश्मन्तकश्चाथ कर्णिकारद्वयं तथा ।
वृश्चिकाली च कुटजस्तद्बीजञ्च शिरीषकः ॥२॥
करञ्जः षड्विधोऽङ्कोलो नीलः सर्जाश्वकर्णकौ ।
तालः श्रीतालहिन्तालमाडास्तलस्तमालकः ॥३॥
चतुर्विधः कदम्बोऽथ वानीरः कुम्भिवेतसः ।
धवश्च धन्वनो भूर्जस्तिनिशश्च ततोऽर्जुनः ॥४॥
हरिद्रुदग्धाशाखोटाः शाकोऽथो शिंशपात्रयम् ।
असनत्रयं च वरुणः पुत्रजीवश्च पिण्डिका ॥५॥
कारस्करोऽथ कटभ्यौ क्षवको देवसर्षपः ।
डहुर्विकङ्कतश्चेति स्वराब्धिगणिताः क्रमात् ॥६॥

यस वर्गमा पाँच प्रकारका प्रभद्र, लघुकाश्मरी, दुई थरी अग्निमन्थ, दुई थरी श्योनाक, अजशृङ्गिका, काश्मरी, अश्मन्तक, दुई थरी कर्णिकार, वृश्चिकाली, कुटज, इन्द्रयव, शिरीषक, छ प्रकारका करञ्ज, अङ्कोल, नील, सर्ज, अश्वकर्णक, ताल, श्रीताल, हिन्ताल, माड, तल, तमालक, चार थरी कदम्ब, वानीर, कुम्भी, वेतस, धव, धन्वन, भूर्ज, तिनिश, अर्जुन, हरिद्रु, दग्धा, शाखोट, शाक, तीन थरी शिंशपा, तीन थरी असन, वरुण, पुत्रजीव, पिण्डिका, कारस्कर, कटभी, श्वेतादि कटभी, क्षवक, देवसर्षप, डहु र विकङ्कत गरी सतचालीस विरुवाको क्रमैले वर्णन गरिएको छ ।

### नीम (प्रभद्र)

अथ निगदितः प्रभद्रः पिचुमन्दः पारिभद्रको निम्बः ।
काकफलः कीरेष्टो नेताऽरिष्टश्च सर्वतोभद्रः ॥७॥
धमनो विशीर्णपर्णी पवनेष्टः पीतसारकः शीतः ।
वरतिक्तोऽरिष्टफलो ज्येष्ठामालकश्च हिङ्गुनिर्यासः ॥८॥
छर्दनश्चाग्निधमनो ज्ञेया नाम्नान्तु विंशतिः ॥९॥
प्रभद्रकः प्रभवति शीततिक्तकः कफव्रणक्रिमिवमिशोफशान्तये ।
बलासभिद्बहुविषपित्तदोषजिद्विशेषतो हृदयविदाहशान्तिकृत् ॥१०॥

(१) प्रभद्र, (२) पिचुमन्द, (३) पारिभद्रक, (४) निम्ब, (५) काकफल, (६) कीरेष्ट, (७) नेता, (८) अरिष्ट, (९) सर्वतोभद्र, (१०) धमन, (११) विशीर्णपर्णी, (१२) पवनेष्ट, (१३) पीतसारक, (१४) शीत, (१५) वरतिक्त, (१६) अरिष्टफल, (१७) ज्येष्ठामालक, (१९) हिङ्गुनिर्यास, (२०) छर्दन र (२१) अग्निधमन : यी बीस नाम नीमका संस्कृत पर्यायवाची नामहरू हुन् । नीम शीतवीर्यको, तीतो तथा कफविकार, घाउखटिरा, कीरा, वाकवाकी र सुजनलाई शान्त पार्ने गुणको हुन्छ । यसले कफविकार, कडा विषको असर र पित्तविकारलाई जित्दछ । नीमले विशेषतः मुटुजन्य डाहलाई शान्त पार्दछ ।

### बकाइनु (महानिम्ब)

**महानिम्बो मदोद्रेकः कार्मुकः केशमुष्टिकः ।<br>काकाण्डो रम्यकोऽक्षीरो महातिक्तो हिमद्रुमः ॥११॥<br>महानिम्बस्तु शिशिरः कषायः कटुतिक्तकः ।<br>अस्रदाहबलासघ्नो विषमज्वरनाशनः ॥१२॥**

महानिम्ब, मदोद्रेक, कार्मुक, केशमुष्टिक, काकाण्ड, रम्यक, अक्षीर, महातिक्त र हिमद्रुम : यी बकाइनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, टर्रो, पिरो र तीतो हुन्छ । यसले रक्तविकार, डाह, कफविकार र विषमज्वर नाश गर्दछ ।



### पर्वते नीम (कैडर्य)

**कैडर्य्योऽन्यो महानिम्बो रामणो रमणस्तथा ।<br>गिरिनिम्बो महारिष्टः शुक्लशालः कफाह्वयः ॥१३॥<br>कैडर्यः कटुकस्तिक्तः कषायः शीतलो लघुः ।<br>सन्तापशोषकुष्ठास्रक्रिमिभूतविषापहः ॥१४॥**

कैडर्य्यो, महानिम्ब, रामण, रमण, गिरिनिम्ब, महारिष्ट, शुक्लशाल र कफाह्वय : यी महानिम्बविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नीम पिरो, तीतो, टर्रो, शीतवीर्यको र पचाउन सहज हुन्छ । यसले डाह, सुजन, कुष्ठ, रक्तविकार, कीरा, भूतबाधा र विषविकार नाश गर्दछ ।

### चिराइतो (भूनिम्ब)

**भूनिम्बो नार्यतिक्तः स्यात् कैरातो रामसेनकः ।<br>कैराततिक्तको हैमः काण्डतिक्तः किरातकः ॥१५॥**

**भूनिम्बो वातलस्तिक्तः कफपित्तज्वरापहः ।**
**व्रणसंरोपणः पथ्यः कुष्ठकण्डूतिशोफनुत् ॥१६॥**

भूनिम्ब, अनार्यतिक्त, कैरात, रामसेनक, कैराततिक्तक, हैम, काण्डतिक्त र किरातक : यी नाम चिराइतोका संस्कृत पर्यायवाची नामहरू हुन् । चिराइतोले वातविकार गर्दछ । यो तीतो हुन्छ । यसले कफविकार, पित्तविकार र ज्वर नाश गर्दछ । चिराइतोले घाउ भर्ने काम गर्दछ । यो पथ्य हुन्छ । यसले कुष्ठ, चिलाउने रोग र सुजन ठिक गर्दछ ।

### नेपाली चिराइतो (नेपालनिम्ब)

**नेपालनिम्बो नैपालस्तृणनिम्बो ज्वरान्तकः ।**
**नाडीतिक्तोऽर्धतिक्तश्च निद्रारिः सन्निपातहा ॥१७॥**
**नेपालनिम्बः शीतोष्णो योगवाही लघुस्तथा ।**
**तिक्तोऽतिकफपित्तास्रशोफतृष्णाज्वरापहः ॥१८॥**

नेपालनिम्ब, नैपाल, तृणनिम्ब, ज्वरान्तक, नाडीतिक्त, अर्धतिक्त, निद्रारि र सन्निपातहा : यी नेपाली चिराइतोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चिराइतो शीत वा उष्णवीर्यको, योगवाही, पचाउन सहज, तीतो तथा कफविकार, पित्तविकार, रक्तविकार, सुजन, तिर्खारोग र ज्वर नाशक हुन्छ ।

### काफल (कण्डूल)

**कण्डूलः कृष्णगर्भश्च सोमवल्कप्रचेतसी ।**
**भद्रावती महाकुम्भी कैडर्यो रामसेनकः ॥१९॥**
**कुमुदा चोग्रगन्धश्च भद्रा रञ्जनकस्तथा ।**
**कुम्भी च लघुकाश्मर्यः श्रीपर्णी च त्रिपञ्चधा ॥२०॥**
**कट्फलः कटुरुष्णश्च कासश्वासज्वरापहः ।**
**उग्रदाहहरो रुच्यो मुखरोगशमप्रदः ॥२१॥**

(१) कण्डूल, (२) कृष्णगर्भ, (३) सोमवल्क, (४) प्रचेतसी, (५) भद्रावती, (६) महाकुम्भी, (७) कैडर्य, (८) रामसेनक, (९) कुमुदा, (१०) उग्रगन्ध, (११) भद्रा, (१२) रञ्जनक, (१३) कुम्भी, (१४) लघुकाश्मर्यः र (१५) श्रीपर्णी : यी पन्ध्र नाम काफलका संस्कृत पर्यायवाची नामहरू हुन् । काफल पिरो, उष्णवीर्यको तथा खोकी, दम, ज्वर र कडा खालको डाह नाशक हुन्छ । यो रुचिप्रद र मुखका रोगलाई शान्त पार्ने गुणको हुन्छ ।

### ठूलो गिनेरी (अग्निमन्थ)

**अग्निमन्थोऽग्निमथनस्तर्कारी वैजयन्तिका ।**
**वह्निमन्थोऽरणी केतुः श्रीपर्णी कर्णिका जया ॥**
**नादेयी विजयाऽनन्ता नदी यावत् त्रयोदश ॥२२॥**
**तर्कारी कटुरुष्णा च तिक्ताऽनिलकफापहा ।**
**शोफश्लेष्माग्निमान्द्यार्शोविड्बन्धाध्माननाशनी ॥२३॥**

(१) अग्निमन्थ, (२) अग्निमथन, (३) तर्कारी, (४) वैजयन्तिका, (५) वह्निमन्थ, (६) अरणी, (७) केतु, (८) श्रीपर्णी, (९) कर्णिका, (१०) जया, (११) नादेयी, (१२) विजया, (१३) अनन्ता र (१४) नदी : यी चौध (तेह्र भनिएको) नाम ठुलो गिनेरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो तथा वातविकार, कफविकार, सुजन, कफजन्य असर, कमजोर पाचनशक्ति, अल्काई, कब्जियत र आध्मान नाशक हुन्छ ।

### सानो गिनेरी (क्षुद्राग्निमन्थ)

**क्षुद्राग्निमन्थस्तपनो विजया गणिकारिका ।**
**अरणिर्लघुमन्थश्च तेजोवृक्षस्तनुत्वचा ॥२४॥**
**अग्निमन्थद्वयं चैव तुल्यं वीर्यरसादिषु ।**
**तत् प्रयोगानुसारेण योजयेत् स्वमनीषया ॥२५॥**

क्षुद्राग्निमन्थ, तपन, विजया, गणिकारिका, अरणि, लघुमन्थ, तेजोवृक्ष र तनुत्वचा : यी सानो गिनेरीका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै गिनेरी वीर्य, रस आदिमा समान हुन्छन् । वैद्यले आवश्यकता अनुसार स्वविवेकले यिनको प्रयोग गर्नू ।

### टटलो (श्योनाकद्वय)

**श्योनाकः शुकनासश्च कट्वङ्गोऽथ कटम्भरः ।**
**मयूरजङ्घोऽरलुकः प्रियजीवः कुटन्नटः ॥२६॥**
**श्योनाकः पृथुशिम्बोऽन्यो भल्लको दीर्घवृन्तकः ।**
**पीतवृक्षश्च टेण्टूको भूतसारो मुनिद्रुमः ॥२७॥**
**निःसारः फल्गुवृन्ताकः पूतिपत्रो वसन्तकः ।**
**मण्डूकपर्णः पीताङ्गो जम्बूकः पीतपादकः ॥२८॥**
**वातारिः पीतकः शोणः कुटनश्च विरेचनः ।**

**भ्रमरेष्टो बर्हिजङ्घो नेत्रनेत्रामिताभिधः ॥२९॥**
**श्योनाकयुगलं तिक्तं शीतलञ्च त्रिदोषजित् ।**
**पित्तश्लेष्मातिसारघ्नं सन्निपातज्वरापहम् ॥३०॥**
**टेण्टुफलं कटूष्णञ्च कफवातहरं लघु ।**
**दीपनं पाचनं हृद्यं रुचिकृल्लवणाम्लकम् ॥३१॥**

(१) श्योनाक, (२) शुकनास, (३) कट्वङ्ग, (४) कटम्भर, (५) मयूरजङ्घ, (६) अरलुक, (७) प्रियजीव र (८) कुटन्नट : यी टटलोको तथा (१) पृथुशिम्ब, (२) भल्लक, (३) दीर्घवृन्तक, (४) पीतवृक्ष, (५) टेण्टूक, (६) भूतसार, (७) मुनिद्रुम, (८) निःसार, (९) फल्गुवृन्ताक, (१०) पूतिपत्र, (११) वसन्तक, (१२) मण्डूकपर्ण, (१३) पीताङ्ग, (१४) जम्बूक, (१५) पीतपादक(प), (१६) वातारि, (१७) पीतक, (१८) शोण, (१९) कुटन, (२०) विरेचन, (२१) भ्रमरेष्ट र (२२) बर्हिजङ्घ : यी बाईस नाम सानो जातको टटलोका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै टटला तीता, शीतवीर्यका तथा त्रिदोषलाई जित्ने गुणका हुन्छन् । यिनले पित्तविकार, कफविकार, अतिसार र सन्निपात ज्वर नाश गर्दछन् । टटलोको फल पिरो, उष्णवीर्यको, कफविकार र वातविकार नाशक, पचाउन सहज, दीपनी, पाचनी, मुटुका लागि हितकर, रुचिप्रद तथा नुनिलो र अमिलो हुन्छ ।

**भेडासिङ्गी (अजशृङ्गी)**



**अजशृङ्गी मेषशृङ्गी वर्तिका सर्पदंष्ट्रिका ।**
**चक्षुष्या तिक्तदुग्धा च पुत्रश्रेणी विषाणिका ॥३२॥**
**अजशृङ्गी कटुस्तिक्ता कफार्शःशूलशोफजित् ।**
**चक्षुष्या श्वासहृद्रोगविषकासार्तिकुष्ठजित् ॥३३॥**
**अजशृङ्गीफलं तिक्तं कटूष्णं कफवातजित् ।**
**जठरानलकृत् हृद्यं रुचिरं लवणाम्लकम् ॥३४॥**

अजशृङ्गी, मेषशृङ्गी, वर्तिका, सर्पदंष्ट्रिका, चक्षुष्या, तिक्तदुग्धा, पुत्रश्रेणी र विषाणिका : यी भेडासिङ्गीका संस्कृत पर्यायवाची नामहरू हुन् । भेडासिङ्गी पिरो, तीतो तथा कफविकार, अल्काई, शूल र सुजन माथि विजय हासिल गर्ने गुणको हुन्छ । यो आँखाका लागि हितकर तथा दम, मुटका रोग, विषविकार, खोकी र कुष्ठ माथि पनि जित हासिल गर्ने खालको हुन्छ । भेडासिङ्गीको फल तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले पाचनशक्ति बढाउँदछ, मुटुलाई फाइदा गर्दछ र रुची जगाउँदछ । यो नुनिलो र अमिलो हुन्छ ।

**खमारी (काश्मर्य)**

**स्यात् काश्मर्यः काश्मरी कृष्णवृन्ता हीरा भद्रा सर्वतोभद्रिका च ।**

**श्रीपर्णी स्यात् सिन्धुपर्णी सुभद्रा कम्भारी सा कट्फला भद्रपर्णी ॥३५॥**
**कुमुदा च गोपभद्रा विदारिणी क्षीरिणी महाभद्रा ।**
**मधुपर्णी स्वभद्रा कृष्णा श्वेता च रोहिणी गृष्टिः ॥३६॥**
**स्थूलत्वचा मधुमती सुफला मेदिनी महाकुमुदा ।**
**सुदृढत्वचा च कथिता विज्ञेयोनत्रिंशतिर्नाम्नाम् ॥३७॥**
**काश्मरी कटुका तिक्ता गुरूष्णा कफशोफनुत् ।**
**त्रिदोषविषदाहार्तिज्वरतृष्णास्रदोषजित् ॥३८॥**

(१) काश्मर्य, (२) काश्मरी, (३) कृष्णवृन्ता, (४) हीरा, (५) भद्रा, (६) सर्वतोभद्रिका, (७) श्रीपर्णी, (८) सिन्धुपर्णी, (९) सुभद्रा, (१०) कम्भारी, (११) कट्फला, (१२) भद्रपर्णी, (१३) कुमुदा, (१४) गोपभद्रा, (१५) विदारिणी, (१६) क्षीरिणी, (१७) महाभद्रा, (१८) मधुपर्णी, (१९) स्वभद्रा, (२०) कृष्णा, (२१) श्वेता, (२२) रोहिणी, (२३) गृष्टि, (२४) स्थूलत्वचा, (२५) मधुमती, (२६) सुफला, (२७) मेदिनी, (२८) महाकुमुदा र (२९) सुदृढत्वचा : यी उनन्तीस नाम खमारीका संस्कृत पर्यायवाची नामहरू हुन् । खमारी पिरो, तीतो, पचाउन कठिन, उष्णवीर्यको तथा कफविकार र सुजन नाशक हुन्छ । यसले त्रिदोष, विषविकार, डाह, ज्वर, तिर्खारोग र रक्तविकार माथि विजय हासिल गर्दछ ।



### रातो कोइरालो (अश्मन्तक)

**अश्मन्तकश्चेन्दुकश्च कुद्दालश्चाम्लपत्रकः ।**
**श्लक्ष्णत्वक् पीलुपत्रश्च स्मृतो यमलपत्रकः ॥३९॥**
**अश्मान्तकेन्दुशफरी शिलान्तश्चाम्बुदः स्मृतः ।**
**पाषाणान्तक इत्युक्तो वह्निचन्द्रमिताह्वयः ॥४०॥**
**अश्मन्तकः स्यान्मधुरः कषायः सुशीतलः पित्तहरः प्रमेहजित् ।**
**विदाहतृष्णाविषमज्वरापहो विषार्तिविच्छर्दिहरश्च भूतजित् ॥४१॥**

(१) अश्मन्तक, (२) इन्दुक, (३) कुद्दाल, (४) अम्लपत्रक, (५) श्लक्ष्णत्वक्, (६) पीलुपत्र, (७) यमलपत्रक, (८) अश्मान्तक, (९) इन्दुशफरी, (१०) शिलान्त, (११) अम्बुद र (१२) पाषाणान्तक : यी बाह्र (तेह्र भनिएको) नाम रातो कोइरालोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, टर्रो, शीतवीर्यको, पित्तनाशक र प्रमेहलाई जित्ने गुणको हुन्छ । यसले डाह, तिर्खारोग, विषमज्वर, विषविकार र वाकवाकी नाश गर्दछ । यसले भूतबाधालाई जित्दछ ।

### राजवृक्ष (कर्णिकार)

**अथ भवति कर्णिकारो राजतरुः प्रग्रहश्च कृतमालः ।**

सुफलश्च परिव्याधो व्याधिरिपुः पङ्क्तिबीजको वसुसञ्ज्ञः ॥४२॥
कर्णिकारो रसे तिक्तः कटूष्णः कफशूलहृत् ।
उदरकृमिमेहघ्नो व्रणगुल्मनिवारणः ॥४३॥

(१) कर्णिकार, (२) राजतरु, (३) प्रग्रह, (४) कृतमाल, (५) सुफल, (६) परिव्याध, (७) व्याधिरिपु र (८) पङ्क्तिबीजक : यी आठ नाम राजवृक्षका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार, शूल, पेटका कीरा, प्रमेह, घाउखटिरा र गुल्म नाशक हुन्छ ।

राजवृक्षविशेष (आरग्वध)

आरग्वधोऽन्यो मन्थानो रोचनश्चतुरङ्गुलः ।
अरिवतो (आरेवतो) दीर्घफलो व्याधिघातो नृपद्रुमः ॥४४॥
हेमपुष्पो राजतरुः कण्डूघ्नश्च ज्वरान्तकः
अरुजः स्वर्णपुष्पश्च स्वर्णद्रुमः कुष्ठसूदनः ॥४५॥
कर्णाभरणकः प्रोक्तो महाराजद्रुमः स्मृतः ।
कर्णिकारो महादिः स्यात् प्रोक्तश्चैकोनविंशतिः ॥४६॥
आरग्वधोऽतिमधुरः शीतः शूलापहारकः ।

ज्वरकण्डूकुष्ठमेहकफविष्टम्भनाशनः ॥४७॥

(१) आरग्वध, (२) मन्थान, (३) रोचन, (४) चतुरङ्गुल, (५) आरेवत, (६) दीर्घफल, (७) व्याधिघात, (८) नृपद्रुम, (९) हेमपुष्प, (१०) राजतरु, (११) कण्डूघ्न, (१२) ज्वरान्तक, (१३) अरुज, (१४) स्वर्णपुष्प, (१५) स्वर्णद्रुम, (१६) कुष्ठसूदन, (१७) कर्णाभरणक, (१८) महाराजद्रुम र (१९) महाकर्णिकार : यी उन्नाईस नाम राजवृक्षाविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो राजवृक्ष अति गुलियो, शीतवीर्यको तथा शूल, ज्वर, चिलाउने रोग, कुष्ठ, प्रमेह, कफविकार र विष्टम्भ नाशक हुन्छ ।

भेडासिङ्गी (वृश्चिकाली)

वृश्चिकाली विषाणी च विषघ्नी नेत्ररोगहा ।
उष्ट्रि(ष्टि)काप्यलिपर्णी च दक्षिणावर्तकी तथा ॥४८॥
कलिकाप्यागमावर्ता देवलाङ्गुलिका तथा ।
करभा भूरिदुग्धा च कर्कशा चामरा च सा ॥४९॥
स्वर्णपुष्पा युग्मफला तथा क्षीरविषाणिका ।
प्रोक्ता भासुरपुष्पा च वसुचन्द्रसमाह्वया ॥५०॥

**वृश्चिकाली कटुस्तिक्ता सोष्णा हृद्वक्त्रशुद्धिकृत् ।**
**रक्तपित्तहरा बल्या विबन्धारोचकापहा ।।५१।।**

(१) वृश्चिकाली, (२) विषाणी, (३) विषघ्नी, (४) नेत्ररोगहा, (५) उष्ट्रिका, (६) अलिपर्णी, (७) दक्षिणावर्तकी, (८) कलिका, (९) आगमावर्ता, (१०) देवलाङ्गुलिका, (११) करभा, (१२) भूरिदुग्धा, (१३) कर्कशा, (१४) चामरा, (१५) स्वर्णपुष्पा, (१६) युग्मफला, (१७) क्षीरविषाणिका र (१८) भासुरपुष्पा : यी अठार नाम भेडासिङ्गीका संस्कृत पर्यायवाची नामहरू हुन् । भेडासिङ्गी पिरो, तीतो, उष्णवीर्यको तथा मुटु र मुखलाई सफा गर्ने गुणको हुन्छ । यसले रक्तपित्त नाश गर्दछ, बल दिन्छ तथा विबन्ध र अरुची नाश गर्दछ ।

### ठुलोकुरो (कुटज)

**कुटजः कौटजः शक्रो वत्सको गिरिमल्लिका ।**
**कलिङ्गो मल्लिकापुष्पः प्रावृष्यः शक्रपादपः ।।५२।।**
**वरतिक्तो यवफलः सङ्ग्राही पाण्डुरद्रुमः ।**
**प्रावृषेण्यो महागन्धः स स्यात् पञ्चदशाभिधः ।।५३।।**
**कुटजः कटुतिक्तोष्णः कषायश्चातिसारजित् ।**
**तत्रासितोऽस्रपित्तघ्नस्त्वग्दोषार्शोनिकृन्तनः ।।५४।।**

(१) कुटज, (२) कौटज, (३) शक्र, (४) वत्सक, (५) गिरिमल्लिका, (६) कलिङ्ग, (७) मल्लिकापुष्प, (८) प्रावृष्य, (९) शक्रपादप, (१०) वरतिक्त, (११) यवफल, (१२) सङ्ग्राही, (१३) पाण्डुरद्रुम, (१४) प्रावृषेण्य र (१५) महागन्ध : यी पन्ध्र नाम ठुलोकुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । ठुलोकुरो पिरो, तीतो, उष्णवीर्यको, टर्रो र अतिसारलाई जित्ने गुणको हुन्छ । कालो जातको ठुलोकुरोले रक्तपित्त, छालाका रोग र अल्काई नाश गर्दछ ।

### ठुलोकुरोको बीज वा इन्द्रजौ (इन्द्रयव)

**इन्द्रयवा तु शक्राह्वा शक्रबीजानि वत्सकः ।**
**तथा वत्सकबीजानि भद्रजा कुटजाफलम् ।।५५।।**
**ज्ञेया भद्रयवा चैवं बीजान्ता कुटजाभिधा ।**
**तथा कलिङ्गबीजानि पर्यायैर्दशधाभिधा ।।५६।।**
**इन्द्रयवा कटुस्तिक्ता शीता कफवातरक्तपित्तहरा ।**
**दाहातिसारशमनी नानाज्वरदोषशूलमूलघ्नी ।।५७।।**

(१) इन्द्रयव, (२) शक्र र यसका पर्यायवाची नाम, (३) शक्रबीज, (४) वत्सक, (५) वत्सकबीज, (

६) भद्रजा, (७) कुटजाफलम्, (८) भद्रयवा, (९) कुटजबीज र (१०) कालिङ्गबीज : यी दश नाम ठूलोकुरोको बीजका संस्कृत पर्यायवाची नामहरू हुन् । इन्द्रजौ पिरो, तीतो, शीतवीर्यको तथा कफविकार, वातविकार र रक्तपित्त नाशक हुन्छ । यसले डाह र अतिसारलाई शान्त पार्दछ तथा अनेक प्रकारका ज्वर-विकार र शूलको जरैदेखि नाश गर्दछ ।

### शिरीष

**शिरीषः शीतपुष्पश्च भण्डिको मृदुपुष्पकः ।**
**शुकेष्टो बर्हिपुष्पश्च विषहन्ता सुपुष्पकः ॥५८॥**
**उद्दानकः शुकतरुर्ज्ञेयो लोमशपुष्पकः ।**
**कपीतनः कलिङ्गश्च श्यामलः शङ्खिनीफलः ॥**
**मधुपुष्पस्तथा वृत्तपुष्पः सप्तदशाह्वयः ॥५९॥**
**शिरीषः कटुकः शीतो विषवातहरः परः ।**
**पामासृक्कुष्ठकण्डूतित्वग्दोषस्य विनाशनः ॥६०॥**

(१) शिरीष, (२) शीतपुष्प, (३) भण्डिक, (४) मृदुपुष्पक, (५) शुकेष्ट, (६) बर्हिपुष्प, (७) विषहन्ता, (८) सुपुष्पक, (९) उद्दानक, (१०) शुकतरु, (११) लोमशपुष्पक, (१२) कपीतन, (१३) कलिङ्ग, (१४) श्यामल, (१५) शङ्खिनीफल, (१६) मधुपुष्प र (१७) वृत्तपुष्प : यी सत्र नाम शिरीषका संस्कृत पर्यायवाची नामहरू हुन् । शिरीष पिरो, शीतवीर्यको तथा उत्तम तरिकाले विषविकार र वातविकार नाश गर्ने गुणको हुन्छ । यसले पामा, रक्तविकार, कुष्ठ, चिलाउने रोग र छालाका विकारहरू नाश गर्दछ ।

### सानो पाङ्गो (करञ्ज)

**करञ्जो नक्तमालश्च पूतिकश्चिरबिल्वकः ।**
**पूतिपर्णी वृद्धफलो रोचनश्च प्रकीर्यकः ॥६१॥**
**करञ्जः कटुरुष्णश्च चक्षुष्यो वातनाशनः ।**
**तस्य स्नेहोऽतिस्निग्धश्च वातघ्नः स्थिरदीप्तिदः ॥६२॥**

करञ्ज, नक्तमाल, पूतिक, चिरबिल्वक, पूतिपर्णी, वृद्धफल, रोचन र प्रकीर्यक : यी सानो पाङ्गोका संस्कृत पर्यायवाची नामहरू हुन् । सानो पाङ्गो पिरो, उष्णवीर्यको, आँखाका लागि हितकर र वातविकार नाशक हुन्छ । यसको तेल अति चिल्लो, वातविकार नाशक र (छालालाई) लामो समयसम्म चम्किलो बनाई राख्ने गुणको हुन्छ ।

### डल्ले पाङ्गो (घृतकरञ्ज)

**अन्यो घृतकरञ्जः स्यात् प्रकीर्यो घृतपर्णकः ।**
**स्निग्धपत्रस्तपस्वी च विषारिश्च विरोचनः ॥६३॥**
**घृतकरञ्जः कटूष्णो वातहृद् व्रणनाशनः ।**
**सर्वत्वग्दोषशमनो विषस्पर्शविनाशनः ॥६४॥**

घृतकरञ्ज, प्रकीर्य, घृतपर्णक, स्निग्धपत्र, तपस्वी, विषारि र विरोचन : यी अर्को खालको पाङ्गो अर्थात् डल्ले-पाङ्गोका संस्कृत पर्यायवाची नामहरू हुन् । डल्लो पाङ्गो पिरो, उष्णवीर्यको तथा वातविकार र घाउखटिरा नाशक हुन्छ । यसले सबै खालका छालाका विकार शान्त पार्दछ र विषको स्पर्शजन्य विकार नाश गर्दछ ।

### चेप्टे पाङ्गो (महाकरञ्ज)

**ज्ञेयो महाकरञ्जोऽन्यः षड्ग्रन्थो हस्तिचारिणी ।**
**उदकीर्या(र्ण) विषघ्नी च काकघ्नी मदहस्तिनी ॥**
**अङ्गारवल्ली शार्ङ्गेष्टा(ष्ठा) मधुसत्ताऽवमायिनी ॥६५॥**
**हस्तिरोहणकश्चैव ज्ञेयो हस्तिकरञ्जकः ।**
**सुमनाः काकभाण्डी च मदमत्तश्च षोडश ॥६६॥**
**महाकरञ्जस्तीक्ष्णोष्णः कटुको विषनाशनः ।**
**कण्डूविचर्चिकाकुष्ठत्वग्दोषव्रणनाशनः ॥६७॥**

(१) महाकरञ्ज, (२) षड्ग्रन्थ, (३) हस्तिचारिणी, (४) उदकीर्या(र्ण), (५) विषघ्नी, (६) काकघ्नी, (७) मदहस्तिनी, (८) अङ्गारवल्ली, (९) शार्ङ्गेष्टा(ष्ठा), (१०) मधुसत्ता, (११) अवमायिनी, (१२) हस्तिरोहणक, (१३) हस्तिकरञ्जक, (१४) सुमना, (१५) काकभाण्डी र (१६) मदमत्त : यी सोह्र नाम चेप्टे पाङ्गोका संस्कृत पर्यायवाची नामहरू हुन् । चेप्टे पाङ्गो तिक्खर, उष्णवीर्यको, पिरो र विषविकार नाशक हुन्छ । यसले चिलाउने रोग, विचर्चिका, कुष्ठ, छालाका (अन्य) विकार र घाउखटिरा नाश गर्दछ ।

### बल्ढ्याङ्गो (पूतिकरञ्ज)

**प्रकीर्यो रजनीपुष्पः सुमनाः पूतिकर्णिकः ।**
**पूतिकरञ्जः कैडर्यः कलिमाल(र)श्च सप्तधा ॥६८॥**

(१) प्रकीर्य, (२) रजनीपुष्प, (३) सुमना, (४) पूतिकर्णिक, (५) पूतिकरञ्ज, (६) कैडर्य र (७)

कालमाल(र) : यी सात नाम बल्ढयाङ्ग्रोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रामरिठो (गुच्छकरञ्ज)

**अन्यो गुच्छकरञ्जः स्निग्धदलो गुच्छपुच्छ(ष्प)को नन्दी ।**
**गुच्छी च मातृनन्दी सानन्दी दन्तधावनो वसवः ॥६९॥**
**करञ्जः कटुतिक्तोष्णो विषवातार्त्तिकृन्तनः ।**
**कण्डूविचर्चिकाकुष्ठस्पर्शत्वग्दोषनाशनः ॥७०॥**

(१) गुच्छकरञ्ज, (२) स्निग्धदल, (३) गुच्छपुच्छ(ष्प)क, (४) नन्दी, (५) गुच्छी, (६) मातृनन्दी, (७) सानन्दी र (८) दन्तधावन : यी आठ नाम रामरिठोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा विषविकार र वातविकार नाशक हुन्छ । यसले चिलाउने रोग, विचर्चिका, कुष्ठ र संसर्ग(स्पर्श)जन्य छालाका रोगहरू नाश गर्दछ ।

### रीठाकरञ्ज

**रीठाकरञ्जंवन्यो गुच्छलो गुच्छपुष्पकः ।**
**रीठा गुच्छफलोऽरिष्टो मङ्गल्यः कुम्भबीजकः ॥**
**प्रकीर्यः सोमवल्कश्च फेनिलो रुद्रसञ्ज्ञकः ॥७१॥**
**रीठाकरञ्जस्तिक्तोष्णः कटुः स्निग्धश्च वातजित् ।**
**कफघ्नः कुष्ठकण्डूतिविषविस्फोटनाशनः ॥७२॥**

(१) रीठाकरञ्जक, (२) गुच्छल, (३) गुच्छपुष्पक, (४) रीठा, (५) गुच्छफल, (६) अरिष्ट, (७) मङ्गल्य, (८) कुम्भबीजक, (९) प्रकीर्य, (१०) सोमवल्क र (११) फेनिल : यी एघार नाम रिठोका संस्कृत पर्यायवाची नामहरू हुन् । रिठो तीतो, उष्णवीर्यको, पिरो, चिल्लो र वातविकार नाशक हुन्छ । यसले कफविकार, कुष्ठ, चिलाउने रोग, विषविकार र विस्फोट रोग नाश गर्दछ ।

### अङ्कुल (अङ्कोल)

**अङ्कोलः कोठ(ट)रो रेची गूढपत्रो निकोचकः ।**
**गुप्तस्नेहः पीतसारो मदनो गूढमल्लिका ॥७३॥**
**पीतस्ताम्रफलो ज्ञेयो दीर्घकालो गुणाढ्यकः ।**
**कोलको लम्बकर्णश्च गन्धपुष्पश्च रोचनः ॥**
**विज्ञानतैलगर्भश्च स्मृतिसङ्ख्याभिधः स्मृतः ॥७४॥**

**अङ्कोलः कटुकः स्निग्धो विषलूतादिदोषनुत् ।**
**कफानिलहरः सूतः शुद्धिकृद्रेचनीयकः ॥७५॥**

(१) अङ्कोल, (२) कोट(ठ)र, (३) रेची, (४) गूढपत्र, (५) निकोचक, (६) गुप्तस्नेह, (७) पीतसार, (८) मदन, (९) गूढमल्लिका, (१०) पीत, (११) ताम्रफल, (१२) दीर्घकाल, (१३) गुणाढ्यक, (१४) कोलक, (१५) लम्बकर्ण, (१६) गन्धपुष्प, (१७) रोचन र (१८) विज्ञानतैलगर्भ : यी अठार नाम अङ्कुलका संस्कृत पर्यायवाची नामहरू हुन् । अङ्कुल पिरो, चिल्लो तथा विषविकार, लुतो, कफविकार र वातविकार नाशक हुन्छ । यसले पारोलाई प्रशोधन गर्दछ । यो रेचनी हुन्छ ।

**निर (नीलवृक्ष)**

**नीलस्तु नीलवृक्षो वातारिः शोफनाशनो नखनामा ।**
**नखवृक्षश्च नखालुर्नखप्रियो दिग्गजेन्द्रमितसञ्ज्ञः ॥७६॥**
**नीलवृक्षस्तु कटुकः कषायोष्णो लघुस्तथा ।**
**वातामयप्रशमनो नानाश्वयथुनाशनः ॥७७॥**

(१) नील, (२) नीलवृक्ष, (३) वातारि, (४) शोफनाशन, (५) नखनामा, (६) नखवृक्ष, (७) नखालु र (८) नखप्रिय : यी आठ नाम निरका संस्कृत पर्यायवाची नामहरू हुन् । नीर पिरो, टर्रो, उष्णवीर्यको, पचाउन सहज तथा वातविकार शान्त पार्ने गुणको हुन्छ । यसले अनेक किसिमका श्वयथु नाश गर्दछ ।

**साल (सर्ज)**

**सर्जः सर्जरसः शालः कालकूटो रजोद्भवः ।**
**वल्लीवृक्षश्चीरपर्णो रालः कार्श्योऽजकर्णकः ॥७८॥**
**वस्तकर्णः कषायी च ललनो गन्धवृक्षकः ।**
**वंशश्च शालनिर्यासो दिव्यसारः सुरेष्टकः ॥**
**शूरोऽग्निवल्लभश्चैव यक्षधूपः सुसिद्धकः ॥७९॥**
**सर्जस्तु कटुतिक्तोष्णो हिमः स्निग्धोऽतिसारजित् ।**
**पित्तास्रदोषकुष्ठघ्नः कण्डूविस्फोटवातजित् ॥८०॥**

सर्ज, सर्जरस, शाल, कालकूट, रजोद्भव, वल्लीवृक्ष, चीरपर्ण, राल, कार्श्य, अजकर्णक, वस्तकर्ण, कषायी, ललन, गन्धवृक्षक, वंश, शालनिर्यास, दिव्यसार, सुरेष्टक, शूर, अग्निवल्लभ, यक्षधूप र सुसिद्धक : यी नाम सालका संस्कृत पर्यायवाची नामहरू हुन् । साल पिरो, तीतो, उष्ण एवं शीत

वीर्यको (योगवाही ?), चिल्लो र अतिसारलाई जित्ने गुणको हुन्छ । यसले पित्तविकार, रक्तविकार र कुष्ठ नाश गर्दछ तथा चिलाउने रोग, विस्फोट र वातविकारलाई जित्दछ ।

### अश्वकर्ण

**जरणद्रुमोऽश्वकर्णस्ताक्ष्र्यप्रसवश्च शस्यसंवरणः ।**
**धन्यश्च दीर्घपर्णः कुशिकतरुः कौशिकश्चापि ॥८१॥**
**अश्वकर्णः कटुस्तिक्तः स्निग्धः पित्तास्रनाशनः ।**
**ज्वरविस्फोटकण्डूघ्नः शिरोदोषार्तिकृन्तनः ॥८२॥**

जरणद्रुम, अश्वकर्ण, ताक्ष्र्य, प्रसव, शस्यसंवरण, धन्य, दीर्घपर्ण, कुशिकतरु र कौशिक : यी अश्वकर्ण वृक्षका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, चिल्लो तथा पित्तविकार र रक्तविकार नाशक हुन्छ । यसले ज्वर, विस्फोट, चिलाउने रोग र टाउकाका रोग नाश गर्दछ ।

### ताड (तालद्रुम)

**तालस्तालद्रुमः पत्री दीर्घस्कन्धो ध्वजद्रुमः ।**
**तृणराजो मधुरसो मदाढ्यो दीर्घपादपः ॥८३॥**
**चिरायुस्तरुराजश्च गजभक्ष्यो दृढच्छदः ।**
**दीर्घपत्रो गुच्छपत्रोऽप्यासवद्रुश्च षोडश ॥८४॥**
**तालश्च मधुरः शीतपित्तदाहश्रमापहः ।**
**सरश्च कफपित्तघ्नो मदकृद्दाहशोषनुत् ॥८५॥**

(१) ताल, (२) तालद्रुम, (३) पत्री, (४) दीर्घस्कन्ध, (५) ध्वजद्रुम, (६) तृणराज, (७) मधुरस, (८) मदाढ्य, (९) दीर्घपादप, (१०) चिरायु, (११) तरुराज, (१२) गजभक्ष्य, (१३) दृढच्छद, (१४) दीर्घपत्र, (१५) गुच्छपत्र र (१६) आसवद्रु : यी सोह्र नाम ताडका संस्कृत पर्यायवाची नामहरू हुन् । ताड गुलियो, शीतवीर्यको तथा पित्तविकारजन्य डाह र थकाई नाशक हुन्छ । यसले मलमूत्रलाई तलतिर सार्दछ तथा कफविकार र पित्तविकारलाई नाश गर्दछ । यसले नसा लगाउँदछ तथा डाह र सुजन ठिक गर्दछ ।

### ताडविशेष (श्रीताल)

**श्रीतालो मधुतालश्च लक्ष्मीतालो मृदुच्छदः ।**
**विशालपत्रो लेखार्हो मसीलेख्यदलस्तथा ॥**
**शिरालपत्रकश्चैव याम्योद्भूतो नवाह्वयः ॥८६॥**

**श्रीतालो मधुरोऽत्यन्तमीषच्चैव कषायकः ।**
**पित्तजित् कफकारी च वातमीषत् प्रकोपयेत् ॥८७॥**

(१) श्रीताल, (२) मधुताल, (३) लक्ष्मीताल, (४) मृदुच्छद, (५) विशालपत्र, (६) लेखार्ह, (७) मसीलेख्यदल, (८) शिरालपत्रक र (९) याम्योद्भूत : यी नौ नाम ताडविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ताड गुलियो, हल्का टर्रो र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले कफविकार र थोरै वातविकार पनि गर्दछ ।

## ताडविशेष (हिन्ताल)

**हिन्तालः स्थूलतालश्च वल्कपत्रो बृहद्दलः ।**
**गर्भस्रावी लतातालो भीषणो बहुकण्टकः ॥८८॥**
**स्थिरपत्रो द्विधालेख्यः शिरापत्रः स्थिराङ्घ्रिपः ।**
**अम्लसारो बृहत्तालः स्याच्चतुर्दशधाऽभिधः ॥८९॥**
**हिन्तालो मधुराम्लश्च कफकृत् पित्तदाहनुत् ।**
**श्रमतृष्णापहारी च शिशिरो वातदोषनुत् ॥९०॥**



(१) हिन्ताल, (२) स्थूलताल, (३) वल्कपत्र, (४) बृहद्दल, (५) गर्भस्रावी, (६) लताताल, (७) भीषण, (८) बहुकण्टक, (९) स्थिरपत्र, (१०) द्विधालेख्य, (११) शिरापत्र, (१२) स्थिराङ्घ्रिप, (१३) अम्लसार र (१४) बृहत्ताल : यी चौध नाम ताडविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ताड गुलियो, अमिलो, कफविकार गर्ने तथा पित्तविकार र डाह नाश गर्ने गुणको हुन्छ । यसले थकाई र तिर्खारोग नाश गर्दछ । यो शीतवीर्यको हुन्छ र यसले वातविकारजन्य डाह पनि नाश गर्दछ ।

## ताडविशेष (माडवृक्ष)

**माडो माडद्रुमो दीर्घो ध्वजवृक्षो वितानकः ।**
**मद्यद्रुमो मोहकारी मदद्रुर्ऋजुरङ्कधा ॥९१॥**
**माडस्तु शिशिरो रुच्यः कषायः पित्तदाहकृत् ।**
**तृष्णापहो मरुत्कारी श्रमहृत् श्लेष्मकारकः ॥९२॥**

(१) माड, (२) माडद्रुम, (३) दीर्घ, (४) ध्वजवृक्ष, (५) वितानक, (६) मद्यद्रुम, (७) मोहकारी, (८) मदद्रु र (९) ऋजु : यी नौ नाम ताडविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ताड शीतवीर्यको, रुचिप्रद, टर्रो तथा पित्तविकार र डाह गर्ने गुणको हुन्छ । यसले तिर्खारोग नाश गर्दछ तर वातविकार गर्दछ । यसले थकाई नाश गर्दछ तर कफविकार गर्दछ ।

## किम्बु (तूल)

**तूलं तूदं ब्रह्मकाष्ठं ब्राह्मणेष्टं च यूपकम् ।**
**ब्रह्मदारु सुपुष्पं च सुरूपं नीलवृन्तकम् ॥**
**क्रमुकं विप्रकाष्ठं च मृदुसारं द्विभूमितम् ॥९३॥**
**तूलं तु मधुराम्लं स्यात् वातपित्तहरं सरम् ।**
**दाहप्रशमनं वृष्यं कषायं कफनाशनम् ॥९४॥**

(१) तूल, (२) तूद, (३) ब्रह्मकाष्ठ, (४) ब्राह्मणेष्ट, (५) यूपक, (६) ब्रह्मदारु, (७) सुपुष्प, (८) सुरूप, (९) नीलवृन्तक, (१०) क्रमुक, (११) विप्रकाष्ठ र (१२) मृदुसार : यी बाह्र नाम किम्बुका संस्कृत पर्यायवाची नामहरू हुन् । किम्बु गुलियो र अमिलो हुन्छ । यसले वातविकार र पित्तविकार नाश गर्दछ तथा मलमूत्रलाई तलतिर सार्दछ । यसले डाह शान्त गर्दछ । यो वीर्यशाली, टर्रो र कफविकार नाशक हुन्छ ।

## सतिसाल (तमाल)

**तमालो नीलतालः स्यात्कालस्कन्धस्तमालकः ।**
**नीलध्वजश्च तापिच्छः कालतालो महाबलः ॥९५॥**
**तमालो मधुरो बल्यो वृष्यश्च शिशिरो गुरुः ।**
**कफपित्ततृषादाहश्रमभ्रान्तिकरः परः ॥९६॥**

तमाल, नीलताल, कालस्कन्ध, तमालक, नीलध्वज, तापिच्छ, कालताल र महाबल : यी सतिसालका संस्कृत पर्यायवाची नामहरू हुन् । सतिसाल गुलियो, बलदायक, वीर्यवर्धक, शीतवीर्यको र पचाउन कठिन हुने गुणको हुन्छ । यसले कफविकार, पित्तविकार, तिर्खारोग, डाह, थकाई र तिव्र तरिकाले भ्रम गराउँदछ ।

## कदम (कदम्ब)

**कदम्बो वृत्तपुष्पश्च सुरभिर्ललनाप्रियः ।**
**कादम्बर्यः सिन्धुपुष्पो मदाढ्यः कर्णपूरकः ॥९७॥**
**कदम्बस्तिक्तकटुकः कषायो वातनाशनः ।**
**शीतलः कफपित्तार्तिनाशनः शुक्रवर्द्धनः ॥९८॥**

कदम्ब, वृत्तपुष्प, सुरभि, ललनाप्रिय, कादम्बर्य, सिन्धुपुष्प, मदाढ्य र कर्णपूरक : यी कदमका

संस्कृत पर्यायवाची नामहरू हुन् । कदम तीतो, पिरो, टर्रो र वातविकार नाशक हुन्छ । यो शीतवीर्यको, कफविकार नाशक, पित्तविकार नाशक र शुक्रवर्धक हुन्छ ।

### कदमविशेष (धाराकदम्ब)

**धाराकदम्बः प्रावृष्यः पुलकी भृङ्गवल्लभः ।**
**मेघागमप्रियो नीपः प्रावृषेण्यः कदम्बकः ॥९९॥**

धाराकदम्ब, प्रावृष्य, पुलकी, भृङ्गवल्लभ, मेघागमप्रिय, नीप, प्रावृषेण्य र कदम्बक : यी धाराकदम्बका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कदमविशेष (धूलीकदम्ब)

**धूलीकदम्बः क्रमुकप्रसूनः परागपुष्पी बलभद्रसञ्ज्ञकः ।**
**वसन्तपुष्पो मकरन्दवासो भृङ्गप्रियो रेणुकदम्बकोऽष्टौ ॥१००॥**

धूलीकदम्ब, क्रमुकप्रसून, परागपुष्पी, बलभद्रसञ्ज्ञक, वसन्तपुष्प, मकरन्दवास, भृङ्गप्रिय र रेणुकदम्बक : यी आठ नाम धूलीकदम्बका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### कदमविशेष (भूमिकदम्ब)

**भूमिकदम्बो भूनिम्बो भूमिजो भृङ्गवल्लभः ।**
**लघुपुष्पो वृत्तपुष्पो विषघ्नो व्रणहारकः ॥१०१॥**

भूमिकदम्ब, भूनिम्ब, भूमिज, भृङ्गवल्लभ, लघुपुष्प, वृत्तपुष्प, विषघ्न र व्रणहारक : यी नाम भूमिकदम्बका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### तीन थरी कदमका गुण

**त्रिकदम्बाः कटुर्वर्ण्या विषशोफहरा हिमाः ।**
**कषायाः पित्तलास्तिक्ता वीर्यवृद्धिकराः पराः ॥१०२॥**

उपरोक्त तीन प्रकारका कदम पिरा, वर्णदायक तथा विषविकार र सुजन नाशक एवं शीतवीर्यका हुन्छन् । यी टर्रा, पित्तविकार गर्ने, तीता र अत्यन्त वीर्यवर्धक हुन्छन् ।

### पानीबेत (वानीर)

**वानीरो वृत्तपुष्पश्च शाखालो जलवेतसः ।**
**व्याधिघातः परिव्याधो नादेयो जलसम्भवः ॥१०३॥**
**वानीरस्तिक्तशिशिरो रक्षोघ्नो व्रणशोधनः ।**
**पित्तास्रकफदोषघ्नः सङ्ग्राही च कषायकः ॥१०४॥**

वानीर, वृत्तपुष्प, शाखाल, जलवेतस, व्याधिघात, परिव्याध, नादेय र जलसम्भव : यी पानीबेतका संस्कृत पर्यायवाची नामहरू हुन् । पानीबेत तीतो, शीतवीर्यको तथा ग्रहबाधा नाशक एवं घाउखटिरा प्रशोधक हुन्छ । यसले पित्तविकार, रक्तविकार र कफविकार नाश गर्दछ । यो ग्राही र टर्रो हुन्छ ।

### कुम्भी

**कुम्भी रोमालुविटपी रोमशः पर्पटद्रुमः ।**
**कुम्भी कटुः कषायोष्णो ग्राही वातकफापहः ॥१०५॥**

कुम्भी, रोमालुविटपी, रोमश र पर्पटद्रुम : यी कुम्भी (?) का संस्कृत पर्यायवाची नामहरू हुन् । कुम्भी पिरो, टर्रो, उष्णवीर्यको, ग्राही तथा वातविकार नाशक र कफविकार नाशक हुन्छ ।

### बेत (वेतस)

**वेतसो निचुलो ज्ञेयो वञ्जुलो दीर्घपत्रकः ।**
**कलनो मञ्जरीनम्रः सुषेणो गन्धपुष्पकः ॥१०६॥**
**वेतसः कटुकः स्वादुः शीतो भूतविनाशनः ।**
**पित्तप्रकोपणो रुच्यो विज्ञेयो दीपनः परः ॥**
**रक्तपित्तोद्भवं रोगं कुष्ठदोषं च नाशयेत् ॥१०७॥**

वेतस, निचुल, वञ्जुल, दीर्घपत्रक, कलन, मञ्जरीनम्र, सुषेण र गन्धपुष्पक : यी बेतका संस्कृत पर्यायवाची नामहरू हुन् । बेत पिरो, गुलियो, शीतवीर्यको, भूतबाधा नाशक र पित्तविकार गर्ने गुणको हुन्छ । यो रुचिप्रद र अत्यन्त दीपनी हुन्छ । यसले रक्तपित्तजन्य र कुष्ठजन्य विकारलाई नाश गर्दछ ।

### बड धयँरो (धव)

**धवो दृढतरुर्गौरः कषायो मधुरत्वचः ।**
**शुक्लवृक्षः पाण्डुतरुर्धवलः पाण्डुरो नव ॥१०८॥**
**धवः कषायः कटुकः कफघ्नोऽनिलनाशनः ।**
**पित्तप्रकोपणो रुच्यो विज्ञेयो दीपनः परः ॥१०९॥**

(१) धव, (२) दृढतरु, (३) गौर, (४) कषाय, (५) मधुरत्वच, (६) शुक्लवृक्ष, (७) पाण्डुतरु, (८) धवल र (९) पाण्डुर : यी नौ नाम बडधयँरोका संस्कृत पर्यायवाची नामहरू हुन् । बडधयँरो टर्रो, पिरो तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले पित्तविकार गर्दछ । यो रुचिकर र अत्यन्त दीपनी हुन्छ भनी जान्नू ।

### दबदबे (धन्वन)

**धन्वनो रक्तकुसुमो धनुवृक्षो महाबलः ।**
**रुजापहः पिच्छलको रूक्षः स्वादुफलश्च सः ॥११०॥**
**धन्वनः कटुकोष्णश्च कषायः कफनाशनः ।**
**दाहशोषकरो ग्राही कण्ठामयशमप्रदः ॥१११॥**

धन्वन, रक्तकुसुम, धनुवृक्ष, महाबल, रुजापह, पिच्छलक, रूक्ष र स्वादुफल : यी दबदबेका संस्कृत पर्यायवाची नामहरू हुन् । दबदबे पिरो, उष्णवीर्यको, टर्रो र कफविकार नाशक हुन्छ । यसले डाह र सुजन गर्दछ । यो ग्राही र घाँटीको रोग शान्त पार्ने गुणको हुन्छ ।

### भोजपात (भूर्ज)

**भूर्जो वल्कद्रुमो भुर्जः सुचर्मा भूर्जपत्रकः ।**
**चित्रत्वग्बिन्दुपत्रश्च रक्षापत्रो विचित्रकः ॥**
**भूतघ्नो मृदुपत्रश्च शैलेन्द्रस्थो द्विभूमितः ॥११२॥**
**भूर्जः कटुकषायोष्णो भूतरक्षाकरः परः ।**
**त्रिदोषशमनः पथ्यो दुष्टकौटिल्यनाशनः ॥११३॥**

(१) भूर्ज, (२) वल्कद्रुम, (३) भुर्ज, (४) सुचर्मा, (५) भूर्जपत्रक, (६) चित्रत्वक्, (७) बिन्दुपत्र, (८) रक्षापत्र, (९) विचित्रक, (१०) भूतघ्न, (११) मृदुपत्र र (१२) शैलेन्द्रस्थ : यी बाह्र नाम भोजपातका संस्कृत पर्यायवाची नामहरू हुन् । भोजपात पिरो, टर्रो, उष्णवीर्यको तथा उत्तम तरिकाले

भूतबाधाबाट रक्षा गर्ने गुणको हुन्छ । यसले त्रिदोशलाइ शान्त पार्दछ । यो पथ्य हुन्छ । यसले खराब खालका छलकपट (लागछोप) नाश गर्दछ ।

### तिनिश

**तिनिशः स्यन्दनश्चक्री शताङ्गः शकटो रथः ।**
**रथिको भस्मगर्भश्च मेषी जलधरो दश ॥११४॥**
**तिनिशस्तु कषायोष्णः कफरक्तातिसारजित् ।**
**ग्राहको दाहजननो वातामयहरः परः ॥११५॥**

(१) तिनिश, (२) स्यन्दन, (३) चक्री, (४) शताङ्ग, (५) शकट, (६) रथ, (७) रथिक, (८) भस्मगर्भ, (९) मेषी र (१०) जलधर : यी दश नाम तिनिशका संस्कृत पर्यायवाची नामहरू हुन् । तिनिश टर्रो, उष्णवीर्यको तथा कफविकार, रक्तविकार र अतिसारलाई जित्ने गुणको हुन्छ । यो ग्राही र डाहकारी हुन्छ । यसले वातजन्य रोगहरू राम्ररी निको पार्दछ ।

### काउलो (अर्जुन)

**अर्जुनः शम्बरः पार्थश्चित्रयोधी धनञ्जयः ।**
**वैरान्तकः किरीटी च गाण्डीवी शिवमल्लकः ॥११६॥**
**सव्यसाची नदीसर्जः कर्णारिः कुरुवीरकः ।**
**कौन्तेय इन्द्रसूनुश्च वीरद्रुः कृष्णसारथिः ॥**
**पृथाजः फाल्गुनो धन्वी ककुभश्चैकविंशतिः ॥११७॥**
**अर्जुनस्तु कषायोष्णः कफघ्नो व्रणनाशनः ।**
**पित्तश्रमतृषार्तिघ्नो मारुतामयकोपनः ॥११८॥**

(१) अर्जुन, (२) शम्बर, (३) पार्थ, (४) चित्रयोधी, (५) धनञ्जय, (६) वैरान्तक, (७) किरीटी, (८) गाण्डीवी, (९) शिवमल्लक, (१०) सव्यसाची, (११) नदीसर्ज, (१२) कर्णारि, (१३) कुरुवीरक, (१४) कौन्तेय, (१५) इन्द्रसूनु, (१६) वीरद्रु, (१७) कृष्णसारथि, (१८) पृथाज, (१९) फाल्गुन, (२०) धन्वी र (२१) ककुभ : यी एक्काईस नाम काउलोका संस्कृत पर्यायवाची नामहरू हुन् । काउलो टर्रो, उष्णवीर्यको तथा कफविकार र घाउखटिरा नाशक हुन्छ । यसले पित्तविकार, थकाई र तिर्खारोग नाश गर्दछ तर वातविकार बढाउँदछ ।

### कर्मा (हरिद्रु)

**हरिद्रुः पीतदारुः स्यात् पीतकाष्ठश्च पीतकः ।**

**कदम्बकः सुपुष्पश्च सुराह्वः पीतकद्रुमः ॥११९॥**
**हरिद्रुः शीतलस्तिक्तो मङ्गल्यः पित्तवान्तिजित् ।**
**अङ्गकान्तिकरो बल्यो नानात्वग्दोषनाशनः ॥१२०॥**

हरिद्रु, पीतदारु, पीतकाष्ठ, पीतक, कदम्बक, सुपुष्प, सुराह्व र पीतकद्रुम : यी कर्माका संस्कृत पर्यायवाची नामहरू हुन् । कर्मा शीतवीर्यको, तीतो, मङ्गलदायक तथा पित्तविकार र वाकवाकीलाई जित्ने गुणको हुन्छ । यसले शरीरका अङ्गमा चमक लेराउँदछ, बल दिन्छ र अनेक प्रकारका छालाका रोग नाश गर्दछ ।

## दमौरो (दग्धा)

**दग्धा दग्धरुहा प्रोक्ता दग्धिका च स्थलेरुहा ।**
**रोमशा कर्कशदला भस्मरोहा सुदग्धिका ॥१२१॥**
**दग्धा कटुकषायोष्णा कफवातनिकृन्तनी ।**
**पित्तप्रकोपणी चैव जठरानलदीपनी ॥१२२॥**

दग्धा, दग्धरुहा, दग्धिका, स्थलेरुहा, रोमशा, कर्कशदला, भस्मरोहा र सुदग्धिका : यी दमौरोका संस्कृत पर्यायवाची नामहरू हुन् । दमौरो पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार पूर्णरूपमा नाश गर्ने गुणको हुन्छ । यसले पित्तविकार बढाउँदछ र जठराग्निलाई बाल्दछ ।



## खाक्सी (शाखोट)

**शाखोटः स्याद्भूतवृक्षो गवाक्षी यूकावासी भूर्जपत्रश्च पीतः ।**
**कौशिक्योऽजक्षीरनाशश्च सूक्तस्तिक्तोष्णोऽयं पित्तकृद्वातहारी ॥१२३॥**

शाखोट, भूतवृक्ष, गवाक्षी, यूकावासी, भूर्जपत्र, पीत, कौशिक्य र अजक्षीरनाश : यी खाक्सीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खाक्सी तीतो, उष्णवीर्यको, पित्तविकार गर्ने र वातविकार नाश गर्ने गुणको हुन्छ ।

## टिक (शाक)

**शाकः क्रकचपत्रः स्यात् खरपत्रोऽतिपत्रकः ।**
**महीसहः श्रेष्ठकाष्ठः स्थिरसारो गृहद्रुमः ॥१२४॥**
**शाकस्तु सारकः प्रोक्तः पित्तदाहश्रमापहः ।**

**कफघ्नं मधुरं रुच्यं कषायं शाकवल्कलम् ॥१२५॥**

शाक, क्रकचपत्र, खरपत्र, अतिपत्रक, महीसह, श्रेष्ठकाष्ठ, स्थिरसार र गृहद्रुम : यी टिकका संस्कृत पर्यायवाची नामहरू हुन् । टिकमा मलमूत्र तलतिर सार्ने गुण हुन्छ भनिएको छ । यसले पित्तविकार, डाह, थकाई र कफविकार नाश गर्दछ । यसको बोक्रा गुलियो, रुचिकर र टर्रो हुन्छ ।

### कालो सिसौ (कृष्णशिंशपा)

**शिंशपा तु महाश्यामा कृष्णसारा च धूम्रिका ।**
**तीक्ष्णसारा च धीरा च कपिला कृष्णशिंशपा ॥१२६॥**
**श्यामादिशिंशपा तिक्ता कटूष्णा कफवातनुत् ।**
**नष्टाजीर्णहरा दीप्या शोफातीसारहारिणी ॥१२७॥**

शिंशपा, महाश्यामा, कृष्णसारा, धूम्रिका, तीक्ष्णसारा, धीरा, कपिला र कृष्णशिंशपा : यी नाम कालो सिसौका संस्कृत पर्यायवाची नामहरू हुन् । कालो सिसौ तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले अजीर्ण नाश गर्दछ, यो दीपनी हुन्छ तथा यसले सुजन र अतिसार पनि नाश गर्दछ ।



### सेतो सिसौ (श्वेतशिंशपा)

**शिंशपाऽन्या श्वेतपत्रा सिताह्वादिश्च शिंशपा ।**
**श्वेतादिशिंशपा तिक्ता शिशिरा पित्तदाहनुत् ॥१२८॥**

श्वेतपत्रा, सितशिंशपा र श्वेतशिंशपा : यी सेतो सिसौका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिसौ तीतो, शीतवीर्यको तथा पित्तविकार र डाह नाशक हुन्छ ।

### कैलो सिसौ (कपिला शिंशपा)

**कपिला शिंशपा चान्या पीता कपिलशिंशपा ।**
**सारिणी कपिलाक्षी च भस्मगर्भा कुशिंशपा ॥१२९॥**
**कपिला शिंशपा तिक्ता शीतवीर्या श्रमापहा ।**
**वातपित्तज्वरघ्नी च छर्दिहिक्काविनाशिनी ॥१३०॥**

कपिला शिंशपा, पीता, कपिलशिंशपा, सारिणी, कपिलाक्षी, भस्मगर्भा र कुशिंशपा : यी कैलो सिसौका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सिसौ तीतो, शीतवीर्यको र थकाई नाशक हुन्छ ।

यसले वातविकार, पित्तविकार, ज्वर, वाकवाकी र बाडुली नाश गर्दछ ।

### तीन थरी सिसौका गुण

**शिंशपात्रितयं वर्ण्यं हिमशोफविसर्पजित् ।**
**पित्तदाहप्रशमनं बल्यं रुचिकरं परम्॥१३१॥**

तीनै थरी सिसौ वर्णमा निखार लेराउने, शीतवीर्यका तथा सुजन र विसर्पलाई जित्ने गुणका हुन्छन् । यिनले पित्तविकार र डाहलाई शान्त पार्दछन् र बल दिन्छन् । यी अत्यन्त रुचिप्रद हुन्छन् ।

### विजयशाल (असनवृक्ष)

**असनस्तु महासर्जः सौरिर्बन्धूकपुष्पकः ।**
**प्रियको बीजवृक्षश्च नीलकः प्रियशालकः ॥१३२॥**
**असनः कटुरुष्णश्च तिक्तो वातार्तिदोषनुत् ।**
**सारको गलदोषघ्नो रक्तमण्डलनाशनः ॥१३३॥**

असन, महासर्ज, सौरि, बन्धूकपुष्पक, प्रियक, बीजवृक्ष, नीलक र प्रियशालक : यी विजयशालका संस्कृत पर्यायवाची नामहरू हुन् । विजयशाल पिरो, उष्णवीर्यको, तीतो तथा वातविकार नाशक हुन्छ । यसले मलमूत्रलाई तलतिर सार्दछ, घाँटीको रोग तथा रक्तमण्डल रोग (Urticaria) नाश गर्दछ ।

### नीलो विजयशाल (असनविशेष)

**द्वितीयो नीलबीजः स्यान्नीलपत्रः सुनीलकः ।**
**नीलद्रुमो नीलसारो नीलनिर्यासको रसैः ॥१३४॥**
**बीजवृक्षौ कटू शीतौ कषायौ कुष्ठनाशनौ ।**
**सारकौ कण्डुदद्रुघ्नौ श्रेष्ठस्तत्रासितस्तयोः ॥१३५॥**

(१) नीलबीज, (२) नीलपत्र, (३) सुनीलक, (४) नीलद्रुम, (५) नीलसार र (६) नीलनिर्यासक : यी छ नाम नीलो विजयसालका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै विजयसाल पिरा, शीतवीर्यका, टर्रा र कुष्ठ नाशक हुन्छन् । यिनले मलमूत्रलाई तलतिर सार्दछन् तथा चिलाउने रोग र दाद नाश गर्दछन् । यी दुईमध्ये नीलो विजयसाल उत्तम हुन्छ ।

## सिंप्लिकान (वरुण)

**वरुणः श्वेतपुष्पश्च तिक्तशाकः कुमारकः ।**
**श्वेतद्रुमः साधुवृक्षः तमालो मारुतापहः ॥१३६॥**
**वरुणः कटुरुष्णश्च रक्तदोषहरः परः ।**
**शीर्षवातहरः स्निग्धो दीप्यो विद्रधिवातजित् ॥१३७॥**

वरुण, श्वेतपुष्प, तिक्तशाक, कुमारक, श्वेतद्रुम, साधुवृक्ष, तमाल र मारुतापह : यी सिप्लिकानका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको र विशेषतः रक्तविकार नाशक हुन्छ । यसले टाउकाको वातविकार नाश गर्दछ । यो चिल्लो, दीपनी तथा विद्रधि र वातविकारलाई जित्ने गुणको हुन्छ ।

## पुत्रञ्जीवा

**पुत्रजीवः पवित्रश्च गर्भदः सुतजीवकः ।**
**कुटजीवोऽपत्यजीवः सिद्धिदोऽपत्यजीवकः ॥१३८॥**
**पुत्रजीवो हिमो वृष्यः श्लेष्मदो गर्भजीवकः ।**
**चक्षुष्यः पित्तशमनो दाहतृष्णानिवारणः ॥१३९॥**

पुत्रजीव, पवित्र, गर्भद, सुतजीवक, कुटजीव, अपत्यजीव, सिद्धिद र अपत्यजीवक : यी पुत्रञ्जीवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, वीर्यवर्धक, कफविकार गर्ने, गर्भलाई जीवित राख्ने, आँखाका लागि हितकर, पित्तविकार शान्त पार्ने तथा डाह र तिर्खारोग नाश गर्ने गुणको हुन्छ ।

## ठुलो मइनफल वा पिडार (महापिण्डीतरु)

**महापिण्डीतरुः प्रोक्तः श्वेतपिण्डीतकश्च सः ।**
**करहाटः क्षुरश्चैव शस्त्रकोशतरुः सरः ॥१४०॥**
**पिण्डीतरुः कषायोष्णस्त्रिदोषशमनोऽपि च ।**
**चर्मरोगापहश्चैव विशेषाद्रक्तदोषजित् ॥१४१॥**

महापिण्डीतरु, श्वेतपिण्डीतक, करहाट, क्षुर, शस्त्रकोशतरु र सर : यी पिडारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, त्रिदोषलाई शान्त पार्ने, छालाका रोग नाशक र विशेषतः रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

### कुचिला (कारस्कर)

**कारस्करस्तु किम्पाको विषतिन्दुर्विषद्रुमः ।**
**गरद्रुमो रम्यफलः कुपाकः कालकूटकः ॥१४२॥**
**कारस्करः कटूष्णश्च तिक्तः कुष्ठविनाशनः ।**
**वातामयास्रकण्डूतिकफामार्शोव्रणापहः ॥१४३॥**

कारस्कर, किम्पाक, विषतिन्दु, विषद्रुम, गरद्रुम, रम्यफल, कुपाक र कालकूटक : यी नाम कुचिलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, तीतो र कुष्ठ नाशक हुन्छ । यसले वातविकार, रक्तविकार, चिलाउने रोग, कफविकार, अल्काई र घाउखटिरा नाश गर्दछ ।

### कालो कराही (कटभी)

**कटभी नाभिका शौण्डी पाटली किणिही तथा ।**
**मधुरेणुः क्षुद्रशामा कैडर्यः श्यामला नव ॥१४४॥**

(१) कटभी, (२) नाभिका, (३) शौण्डी, (४) पाटली, (५) किणिही, (६) मधुरेणु, (७) क्षुद्रशामा, (८) कैडर्य र (९) श्यामला : यी नौ नाम कालो कराहीका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### सेतो कराही (श्वेतकटभी)

**शितादिकटभी श्वेता किणिही गिरिकर्णिका ।**
**शिरीषपत्रा कालिन्दी शतपादी विषघ्निका ॥**
**महाश्वेता महाशौण्डी महादिकटभी तथा ॥१४५॥**

शितकटभी, श्वेता, किणिही, गिरिकर्णिका, शिरीषपत्रा, कालिन्दी, शतपादी, विषघ्निका, महाश्वेता, महाशौण्डी र महाकटभी : यी नाम सेतो कराहीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुई थरी कराहीका गुण (कटभीद्वय गुण)

**कटभी भवेत् कटूष्णा गुल्मविषाध्मानशूलदोषघ्नी ।**
**वातकफाजीर्णरुजाशमनी श्वेता च तत्र गुणयुक्ता ॥१४६॥**

कराही पिरो, उष्णवीर्यको तथा गुल्म, विषविकार, आध्मान र शूलविकार नाशक हुन्छ । यसले वातविकार, कफविकार र अजीर्ण रोगलाई शान्त पार्दछ । सेतो कराही अधिक गुनिलो हुन्छ ।

### छिउँके झार (क्षवक)

**क्षवकः क्षुरकस्तीक्ष्णः क्रूरो भूताङ्कुशः क्षवः ।**
**राजोद्वेजनसञ्ज्ञश्च भूतद्रावी ग्रहाह्वयः ॥१४७॥**
**भूताङ्कुशस्तीव्रगन्धः कषायोष्णः कटुस्तथा ।**
**भूतग्रहादिदोषघ्नः कफवातनिकृन्तनः ॥१४८॥**

(१) क्षवक, (२) क्षुरक, (३) तीक्ष्ण, (४) क्रूर, (५) भूताङ्कुश, (६) क्षव, (७) राजोद्वेजन र (८) भूतद्रावी : यी आठ नाम (नौ भनिएको) छिउँके झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कडा गन्ध आउने, टर्रो, उष्णवीर्यको र पिरो हुन्छ । यसले भूतबाधा, ग्रहबाधा, कफविकार र वातविकार नाशक गर्दछ ।

### देवसर्षप

**देवसर्षपकश्चाक्षो बदरो रक्तमूलकः ।**
**सुरसर्षपकश्चैन्द्रस्तथा सूक्ष्मदलः स्मृतः ॥**
**सर्षपो निर्जरादिः स्यात् कुरराङ्घ्रिर्नवाभिधः ॥१४९॥**
**देवसर्षपनामा तु कटूष्णः कफनाशनः ।**
**जन्तुदोषहरो रुच्यो वक्त्रामयविशोधनः ॥१५०॥**

(१) देवसर्षपक, (२) अक्ष, (३) बदर, (४) रक्तमूलक, (५) सुरसर्षपक, (६) ऐन्द, (७) सूक्ष्मदल, (८) निर्जरसर्षप र (९) कुरराङ्घ्रि : यी नौ नाम देवसर्षपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, कफविकार नाशक, जन्तुजन्य विकार नाशक, रुचिप्रद र मुखका रोग प्रशोधक हुन्छ ।

### बडहर (लकुच)

**लकुचो लिकुचः शालः कषायी दृढवल्कलः ।**
**डहुः कार्श्यश्च शूरश्च स्थूलस्कन्धो नवाह्वयः ॥१५१॥**
**लकुचः स्वरसे तिक्तः कषायोष्णो लघुस्तथा ।**
**कफदोषहरो दाही मलसङ्ग्रहदायकः ॥१५२॥**

(१) लकुच, (२) लिकुच, (३) शाल, (४) कषायी, (५) दृढवल्कल, (६) डहु, (७) कार्श्य, (८) शूर र (९) स्थूलस्कन्ध : यी नौ नाम बडहरका संस्कृत पर्यायवाची नामहरू हुन् । बडहर तीतो, टर्रो,

उष्णवीर्यको र पचाउन सहज हुने गुणको हुन्छ । यसले कफविकार नाश गर्दछ । यो डाह र कब्जियत गर्ने खालको हुन्छ ।

**विकङ्कत**

**विकङ्कतो व्याघ्रपादो ग्रन्थिलः स्वादुकण्टकः ।**
**कण्ठपादो बहुफलो गोपघोण्टा स्रुवद्रुमः ॥१५३॥**
**मृदुफलो दन्तकाष्ठो यज्ञीयो ब्रह्मपादपः ।**
**पिण्डरोहिणकः पूतः किङ्किणी च त्रिपञ्चधा ॥१५४॥**
**विकङ्कतोऽम्लमधुरः पाकेऽतिमधुरो लघुः ।**
**दीपनः कामलास्रघ्नः पाचनः पित्तनाशनः ॥१५५॥**

विकङ्कत, व्याघ्रपाद, ग्रन्थिल, स्वादुकण्टक, कण्ठपाद, बहुफल, गोपघोण्टा, स्रुवद्रुम, मृदुफल, दन्तकाष्ठ, यज्ञीय, ब्रह्मपादप, पिण्डरोहिणक, पूत र किङ्किणी : यी पन्ध्र नाम विकङ्कतका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, गुलियो, पाकेपछि धेरै गुलियो, पचाउन सहज, दीपनी, कमलपित्त नाशक, रक्तविकार नाशक, पाचनी र पित्तविकार नाशक हुन्छ ।



**वर्गप्रशस्ति**

**इत्थं वन्यमहीरुहाह्वयगुणाभिख्यानमुख्यानया**
**भङ्ग्या भङ्गुरिताभिधान्तरमहाभोगश्रिया भास्वरम् ।**
**वैद्यो वै द्यतु वर्गमेनमखिलं विज्ञाय वैज्ञानिकः**
**प्रज्ञालोकविजृम्भणेन सहसा स्वैरं गदानां गणम् ॥१५६॥**

यसप्रकार यो वन्य-वृक्षसम्बन्धी अध्यायमा ती वृक्षको नाम, गुण, कार्य र प्रयोगका बारेमा विवरण सहित व्याख्या गरिएको छ । यस्तो विशाल ज्ञानको महिमा नै हतियार भएका चिकित्सकले यो अध्यायको पूर्ण ज्ञान पाएपछि विभिन्न रोगहरूलाई तत्काल निको पारी आफ्नो बुद्धिमता अवश्य प्रकट गर्नेछन् ।

**ये वृश्चन्ति नृणां गदान् गुरुतरानाक्रम्य वीर्यासिना**
**ये स्थित्वापि वने गुणेन सरुजां स्वेनावनं तन्वते ।**
**तेषामेष महानसीममहिमा वन्यात्मनां वासभू-**
**र्वृक्षाणां भणितो भिषग्भिरसमो यो वृक्षवर्गाख्यया ॥१५७॥**

यस अध्यायमा बताइएका ती वृक्षहरू जसले आफ्ना सांक्रिय सिद्धान्त र गुणरूपी तरबार मार्फत रोगीका गम्भीर रोगहरू शान्त पार्दछ । घना जङ्गलमा भएका वृक्षहरूले आफ्ना बहुमूल्य र लाभदायक गुणहरू मार्फत मानवजातिका नजिकै रहेको आफ्नो वासस्थानलाई अतिक्रमण गर्नुको सट्टा विस्तार गर्दछन् ।

**यः काश्मीरकुलोज्ज्वलाम्बुजवनीहंसोऽपि संसेव्यते**
**नित्योल्लासितनीलकण्ठमनसः प्रीत्याद्यभग्नश्रिया ।**
**तस्यायं नवमः कृतौ नरहरेर्वर्गः प्रभद्रादिको**
**भद्रात्मन्यभिधानशेखरशिखाचूडामणौ संस्थितः ॥१५८॥**

निष्कलङ्क र प्रसिद्ध काश्मिरी परिवारका कुलीन वंशज ती नरहरी, जसले अझै पनि माया र आनन्दका गुणहरू अविरलरूपमा भोगिरहेका छन्, जसको मन र मस्तिष्कमा शिवभक्तिको आनन्द भरिएको छ, उनले आफ्नो ग्रन्थ अभिधान चूडामणीमा रहेको प्रभद्रादि वर्ग नामक नवौं वर्ग यहाँ पूर्ण गर्नु हुन्छ ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ प्रभद्रादिनाम नवमो वर्गः ॥९॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत प्रभद्रादि नामक नवौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।९।**

# करवीरादिवर्ग
## करवीरादिवर्गद्रव्य

चतुर्धा करवीरोऽथ धत्तूरस्त्रितयं तथा ।
कोविदारोऽब्धिरर्कः स्यान्नमेरुः किंशुकस्तथा ॥१॥
पुन्नागस्तिलकोऽगस्त्यः पाटल्यौ च द्विधा स्मृते ।
अशोकश्चम्पको धन्वी केतकी द्विविधा तथा ॥२॥
सिन्दूरी च तथा जाती मुद्गरः शतपत्रिका ।
मल्लिका च चतुर्धा स्याद्वासन्ती नवमल्लिका ॥३॥
अतिमुक्तो द्विधा यूथी कुब्जको मुचकुन्दकः ।
करुणी माधवी चाथ गणिकारी च कुन्दकः ॥४॥
बककेविकबन्धूकास्त्रिसन्धिश्च जपा तथा ।
प्रोक्ता भ्रमरमारी च तरुण्यम्लानकस्तथा ॥५॥
किङ्किरातोऽथ बालाख्यो भिण्टिका चोष्ट्रकाण्डिका ।
तगरं दमनद्वन्द्वं तुलसी मरुवो द्विधा ॥६॥
अर्जकश्च चतुर्गङ्गापत्री पाची च बालकः ।

बर्बरो मञ्चिकापत्रः प्रोक्ताचारामशीतला ॥७॥
अथ कमलपुण्डरीकाह्वयकोकनदानि पद्मिनी चैव ।
पद्माक्षं च मृणालं तत्कन्दः केसरश्च तथा ॥८॥
उत्पलकुमुदकुवलयमुत्पलिनीचाङ्कवसुमित्या ।
उत्तंसनाम्निवर्गे द्रव्याण्यत्रोपदिश्यन्ते ॥९॥

यस वर्गमा चार थरी करवीर, तीन थरी धतुरो, कोविदार, चार थरी अर्क, नमेरु, किंशुक, पुन्नाग, तिलक, तिलक त्वक्, अगस्त्य, दुई थरी पाटली, अशोक, चम्पक, क्षुद्र चम्पक, बकुल, दुई थरी केतकी, सिन्दूरी, जाती, मुद्गर, शतपत्रिका, चार थरी मल्लिका, वासन्ती, नवमल्लिका, अतिमुक्ता, दुई थरी यूथी, कुब्जक, मुचकुन्दक, करुणी, माधवी, गणिकारी, कुन्दक, बक, केविक, बन्धूक, त्रिसन्धि, जपा, भ्रमरमारी, दुई थरी तरुणी, अम्लानक, किङ्किरात, बाला चार, उष्ट्रकाण्डिका, तगर, दुई थरी दमन, तुलसी, दुई थरी मरुव, चार थरी अर्जक, गङ्गापत्री, पाची, बालक, बर्बर, मञ्चिकापत्र, आराशीतला, कमल, पुण्डरीक, कोकनद, नीलकमल, पद्मिनी, पद्माक्ष, मृणाल, शालूक, केसर, उत्पल, कुमुद, कुवलय, उत्पलिनी गरी जम्मा उनान्नब्बे थरी द्रव्यका बारेमा उपदेश दिइएको छ ।

## करवीर

**करवीरो महावीरो हयमारोऽश्वमारकः ।**
**हयघ्नः प्रतिहासश्च शतकुन्दोऽश्वरोधकः ॥१०॥**
**हयारिर्वीरकः कुन्दः शकुन्दः श्वेतपुष्पकः ।**
**अश्वान्तकस्तथाऽश्वघ्नो नखराह्वोऽश्वनाशकः ॥११॥**
**स्थलादिकुमुदः प्रोक्तो दिव्यपुष्पो हरप्रियः ।**
**गौरीपुष्पः सिद्धपुष्पस्त्रिकराह्वः प्रकीर्तितः ॥१२॥**
**करवीरः कटुस्तीक्ष्णः कुष्ठकण्डूतिनाशनः ।**
**व्रणार्तिविषविस्फोटशमनोऽश्वमृतिप्रदः ॥१३॥**

(१) करवीर, (२) महावीर, (३) हयमार, (४) अश्वमारक, (५) हयघ्न, (६) प्रतिहास, (७) शतकुन्द, (८) अश्वरोधक, (९) हयारि, (१०) वीरक, (११) कुन्द, (१२) शकुन्द, (१३) श्वेतपुष्पक, (१४) अश्वान्तक, (१५) अश्वघ्न, (१६) नखराह्व एवं नङका पर्यायवाची शब्दहरू, (१७) अश्वनाशक, ( १८) स्थलकुमुद, (१९) दिव्यपुष्प, (२०) हरप्रिय, (२१) गौरीपुष्प र (२२) सिद्धपुष्प : यी बाईस ( तेईस भनिएको) नाम करवीरका संस्कृत पर्यायवाची नामहरू हुन् । करवीर पिरो, तिक्खर तथा कुष्ठ र चिलाउने रोग नाशक हुन्छ । यसले घाउखटिरा, विषविकार र विस्फोट रोगलाई शान्त पार्दछ तथा घोडालाई भने मार्दछ । 

### रातो करवीर (रक्तकरवीर)

**रक्तकरवीरकोऽन्यो रक्तप्रसवो गणेशकुसुमश्च ।**
**चण्डीकुसुमः क्रूरो भूतद्रावी रविप्रियो मुनिभिः ॥१४॥**
**रक्तस्तु करवीरः स्यात् कटुस्तीक्ष्णो विशोधकः ।**
**त्वग्दोषव्रणकण्डूतिकुष्ठहारी विषापहः ॥१५॥**

(१) रक्तकरवीर, (२) रक्तप्रसव, (३) गणेशकुसुम, (४) चण्डीकुसुम, (५) क्रूर, (६) भूतद्रावी र (७) रविप्रिया : यी सात नाम रातो करवीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो करवीर पिरो, तिक्खर र प्रशोधक हुन्छ । यसले छालाका रोग, घाउखटिरा, चिलाउने रोग, कुष्ठ र विषविकार नाश गर्दछ ।

### पहेँलो र कालो करवीर

**पीतकरवीरकोऽन्यः पीतप्रसवः सुगन्धिकुसुमश्च ।**

**कृष्णस्तु कृष्णकुसुमश्चतुर्विधोऽयं गुणे तुल्यः ॥१६॥**

पीतकरवीर, पीतप्रसव र सुगन्धिकुसुम : यी पहेँलो करवीरका तथा कृष्णकुसुम : यो कालो करवीरको संस्कृत पर्यायवाची नाम हो । चारै थरीका करवीर समान गुणका हुन्छन् ।

## धतुरो (धत्तूर)

**धत्तूरः कितवो धूर्त उन्मत्तः कनकाह्वयः ।**
**शठो मातुलकः श्यामो मदनः शिवशेखरः ॥१७॥**
**खर्जूरघ्नः काहलापुष्प खलः कण्टफलस्तथा ।**
**मोहनः कलभोन्मत्तः शैव श्चाष्टादशाह्वयः ॥१८॥**
**धत्तूरः कटुरुष्णश्च कान्तिकारी व्रणार्तिनुत् ।**
**त्वग्दोषखर्जूकण्डूतिज्वरहारी भ्रमप्रदः ॥१९॥**

(१) धत्तूर, (२) कितव, (३) धूर्त, (४) उन्मत्त, (५) कनकाह्वय, (६) शठ, (७) मातुलक, (८) श्याम, (९) मदन, (१०) शिवशेखर, (११) खर्जूरघ्न, (१२) काहलापुष्प, (१३) खल, (१४) कण्टफल, (१५) मोहन, (१६) कलभ, (१७) उन्मत्त र (१८) शैव : यी सत्र (उन्मत्त दोहोरिएको, अठार भनिएको) नाम धतुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । धतुरो, पिरो, उष्णवीर्यको, वर्णमा चमक लेराउने र घाउखटिरा नाश गर्ने गुणको हुन्छ । यसले छालाका रोग, लुतो, चिलाउने रोग र ज्वर नाश गर्दछ तथा नसा लगाउँदछ ।

## कालो धतुरो (कृष्णधत्तूर)

**कृष्णधत्तूरकः सिद्धः कनकः सचिवः शिवः ।**
**कृष्णपुष्पो विषारातिः क्रूरधूर्तश्च कीर्तितः ॥२०॥**

कृष्णधत्तूरक, सिद्ध, कनक, सचिव, शिव, कृष्णपुष्प, विषाराति, क्रूर र धूर्त : यी कालो धतुरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## राजधत्तूर

**राजधत्तूरकश्चान्यो राजधूर्तो महाशठः ।**
**निश्रेणिपुष्पको भ्रान्तो राजस्वर्णः षडाह्वयः ॥२१॥**

(१) राजधत्तूरक, (२) राजधूर्त, (३) महाशठ, (४) निश्रेणि, (५) पुष्पक, (६) भ्रान्त र (७) राजस्वर्ण

: यी सात नाम (छ भाँनएको) राजधतुरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**धतुरोका गुण**

**सितनीलकृष्णलोहितपीतप्रसवाश्च सन्ति धत्तूराः ।**
**सामान्यगुणोपेतास्तेषु गुणाढ्यस्तु कृष्णकुसुमः ॥२२॥**

सेतो, नीलो, कालो, रातो र पहेँलो फूल फुल्ने धतुरो पनि हुन्छ । सामान्यतः सबैको समान गुण हुन्छ तर कालो धतुरो बढी गुनिलो हुन्छ ।

**कोइरालो (कोविदार)**

**कोविदारः काञ्चनारः कुद्दालः कनकारकः ।**
**कान्तपुष्पश्च करकः कान्तारो यमलच्छदः ॥२३॥**
**पीतपुष्पः सुवर्णारो गिरिजः काञ्चनारकः ।**
**युग्मपत्रो महापुष्पः स्याच्चतुर्दशधाभिधः ॥२४॥**
**कोविदारः कषायः स्यात्सङ्ग्राही व्रणरोपणः ।**
**दीपनः कफवातघ्नो मूत्रकृच्छ्रनिबर्हणः ॥२५॥**

(१) कोविदार, (२) काञ्चनार, (३) कुद्दाल, (४) कनकारक, (५) कान्तपुष्प, (६) करक, (७) कान्तार, (८) यमलच्छद, (९) पीतपुष्प, (१०) सुवर्णार, (११) गिरिज, (१२) काञ्चनारक, (१३) युग्मपत्र र (१४) महापुष्प : यी चौध नाम कोइरालोका संस्कृत पर्यायवाची नामहरू हुन् । कोइरालो टर्रो, ग्राही र घाउखटिरा भर्ने गुणको हुन्छ । यो दीपनी तथा कफविकार, वातविकार र मूत्रकृच्छ्र नाशक हुन्छ ।

**आँक (अर्क)**

**अर्कः क्षीरदलः पुष्पी प्रतापः क्षीरकाण्डकः ।**
**विक्षीरो भास्करः क्षीरी खर्जूघ्नः शिवपुष्पकः ॥२६॥**
**भञ्जनः क्षीरपर्णी स्यात् सविता च विकीरणः ।**
**सूर्याह्वश्च सदापुष्पो रविरास्फोटकस्तथा ॥**
**तूलफलः शुकफलो विंशत्येकसमाह्वयः ॥२७॥**
**अर्कस्तु कटुरुष्णश्च वातजिद्दीपनीयकः ।**
**शोफव्रणहरः कण्डूकुष्ठकृमिविनाशनः ॥२८॥**

(१) अर्क, (२) क्षीरदल, (३) पुष्पा, (४) प्रताप, (५) क्षीरकाण्डक, (६) विक्षीर, (७) भास्कर, (८) क्षीरी, (९) खर्जूघ्न, (१०) शिवपुष्पक, (११) भञ्जन, (१२) क्षीरपर्णी, (१३) सविता, (१४) विकीरण, (१५) सूर्या र सूर्यका पर्यायवाची शब्द, (१६) सदापुष्प, (१७) रवि, (१८) आस्फोटक, (१९) तूलफल र (२०) शुकफल : यी बीस नाम आँकका संस्कृत पर्यायवाची नामहरू हुन् । आँक पिरो, उष्णवीर्यको, वातविकारलाई जित्ने र दीपन गुणको हुन्छ । यसले सुजन, घाउखटिरा, चिलाउने रोग, कुष्ठ र कीरा नाश गर्दछ ।

### सेतो आँक (शुक्लार्क)

**शुक्लार्कस्तपनः श्वेतः प्रतापश्च सितार्ककः ।**
**सुपुष्पः शङ्करादिः स्यादत्यर्कौ वृत्तमल्लिका ॥२९॥**
**श्वेतार्कः कटुतिक्तोष्णो मलशोधनकारकः ।**
**मूत्रकृच्छ्रास्रशोफार्तिव्रणदोषविनाशनः ॥३०॥**

शुक्लार्क, तपन, श्वेत, प्रताप, सितार्कक, शङ्करसुपुष्प, अत्यर्क र वृत्तमल्लिका : यी सेतो आँकका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो आँक पिरो, तीतो, उष्णवीर्यको र शरीरको मल-शोधक हुन्छ । यसले मूत्रकृच्छ्र, रक्तविकार, सुजन र घाउखटिरा विनाश गर्दछ ।



### राज-आँक (राजार्क)

**राजार्को वसुकोऽलर्को मन्दारो गणरूपकः ।**
**एकाष्ठीलः सदापुष्पो ज्ञेयोऽत्र सप्तसम्मितः ॥३१॥**
**राजार्कः कटुतिक्तोष्णः कफमेदोविषापहः ।**
**वातकुष्ठव्रणान् हन्ति शोफकण्डूविसर्पनुत् ॥३२॥**

(१) राजार्क, (२) वसुक, (३) अलर्क, (४) मन्दार, (५) गणरूपक, (६) एकाष्ठील र (७) सदापुष्प : यी सात नाम राज-आँकका संस्कृत पर्यायवाची नामहरू हुन् । राज-आँक पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार, बोसोविकार र विषविकार नाशक हुन्छ । यसले वातविकार, कुष्ठ, घाउखटिरा, सुजन, चिलाउने रोग र विसर्प नाश गर्दछ ।

### सेतो आँकविशेष (श्वेतमन्दार)

**श्वेतमन्दारकस्त्वन्यः पृथ्वीकुरवकः स्मृतः ।**
**दीर्घपुष्पः सितालर्को दीर्घात्यर्कः शराह्वयः ॥३३॥**
**श्वेतमन्दारकोऽत्युष्णस्तिक्तो मलविशोधनः ।**

**मूत्रकृच्छ्रव्रणान् हन्ति कृमीनत्यन्तदारुणान् ॥३४॥**

(१) श्वेतमन्दारक, (२) पृथ्वीकुरवक, (३) दीर्घपुष्प, (४) सितालर्क र (५) दीर्घात्यर्क : यी पाँच नाम सेतो आँकविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो आँक अति उष्णवीर्यको, तीतो र शरीरको मल प्रशोधन गर्ने गुणको हुन्छ । यसले मूत्रकृच्छ्र, घाउखटिरा र कडा खालका पेटका कीरा नाश गर्दछ ।

### चाँपविशेष (नमेरु)

**नमेरुः सुरपुन्नागः सुरेष्टः सुरपर्णिका ।**
**सुरतुङ्गश्च पञ्चाह्वः पुन्नागगुणसंयुतः ॥३५॥**

(१) नमेरु, (२) सुरपुन्नाग, (३) सुरेष्ट, (४) सुरपर्णिका र (५) सुरतुङ्ग : यी पाँच नाम चाँपविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गुण पुन्नाग (चाँपको एक जात) का जस्तै हुन्छन् ।

### पलाँस

**पलाशः किंशुकः पर्णो वातपोथोऽथ याज्ञिकः ।**

**त्रिपर्णो वक्रपुष्पश्च पूतद्रुर्ब्रह्मवृक्षकः ॥**
**ब्रह्मोपनेता काष्ठद्रुः पर्यायैकादश स्मृताः ॥३६॥**
**पलाशस्तु कषायोष्णः क्रिमिदोषविनाशनः ।**
**तद्बीजं पामकण्डूतिदद्रुत्वग्दोषनाशकृत् ॥३७॥**
**तस्य पुष्पञ्च सोष्णञ्च च कण्डूकुष्ठार्तिनाशनम् ।**
**रक्तः पीतः सितो नीलः कुसुमैस्तु विभज्यते ॥३८॥**
**किंशुकैर्गुणसाम्येऽपि सितो विज्ञानदः स्मृतः ॥३९॥**

(१) पलाश, (२) किंशुक, (३) पर्ण, (४) वातपोथ, (५) याज्ञिक, (६) त्रिपर्ण, (७) वक्रपुष्प, (८) पूतद्रु, (९) ब्रह्मवृक्षक, (१०) ब्रह्मोपनेता र (११) काष्ठद्रु : यी एघार नाम पलाँसका संस्कृत पर्यायवाची नामहरू हुन् । पलाँस टर्रो, उष्णवीर्यको तथा कीराजन्य विकार नाश गर्ने गुणको हुन्छ । यसको बीजले लुतो, चिलाउने रोग, दाद र छालाको रोग नाश गर्दछ । यसको फूल उष्णवीर्यको हुन्छ र यसले लुतो र कुष्ठ नाश गर्दछ । फूलका आधारमा पलाँसलाई रातो, पहेँलो, सेतो र नीलो भनी वर्गीकरण गरिन्छ । सबै पलाँस समान गुणका भएपनि सेतो पलाँस अधिक गुनिलो हुन्छ भनिएको छ ।

## पुन्नाग

**पुन्नागः पुरुषस्तुङ्गः पुन्नामा पाटलः पुमान् ।**
**रक्तपुष्पो रक्तरेणुररुणोऽयं नवाह्वयः ॥४०॥**
**पुन्नागो मधुरः शीतः सुगन्धिः पित्तनाशकृत् ।**
**भूतविद्रावणश्चैव देवतानां प्रसादनः ॥४१॥**

(१) पुन्नाग, (२) पुरुष, (३) तुङ्ग, (४) पुन्नामा, (५) पाटल, (६) पुमान्, (७) रक्तपुष्प, (८) रक्तरेणु र (९) अरुण : यी नौ नाम पुन्नागका संस्कृत पर्यायवाची नामहरू हुन् । पुन्नाग गुलियो, शीतवीर्यको, सुगन्धी र पित्तविकार नाशक हुन्छ । यसले भूतबाधा नाश गर्दै दैवी आशिर्वाद दिने गर्दछ ।

## तिल्को (तिलक)

**तिलको विशेषकः स्यान्मुखमण्डनकश्च पुण्ड्रकः पुण्ड्रः ।**
**स्थिरपुष्पः छिन्नरुहो दग्धरुहो रेचकश्च मृतजीवी ॥४२॥**
**तरुणीकटाक्षकामो वासन्तः सुन्दरोऽभीष्टः ।**
**भालविभूषणसञ्ज्ञो विज्ञेयः पञ्चदशनामा ॥४३॥**
**तिलको मधुरः स्निग्धो वातपित्तकफापहः ।**
**बलपुष्टिकरो हृद्यो लघुर्मेदोविवर्धनः ॥४४॥**
**तिलकत्वक् कषायोष्णा पुंस्त्वघ्नी दन्तदोषनुत् ।**
**क्रिमिशोफव्रणान् हन्ति रक्तदोषविनाशनी ॥४५॥**

(१) तिलक, (२) विशेषक, (३) मुखमण्डनक, (४) पुण्ड्रक, (५) पुण्ड्र, (६) स्थिरपुष्प, (७) छिन्नरुह, (८) दग्धरुह, (९) रेचक, (१०) मृतजीवी, (११) तरुणीकटाक्षकाम, (१२) वासन्त, (१३) सुन्दर, (१४) अभीष्ट र (१५) भालविभूषण : यी पन्ध्र नाम तिल्कोका संस्कृत पर्यायवाची नामहरू हुन् । तिल्को गुलियो, चिल्लो तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले बल र पुष्टि दिन्छ । यो मुटुका लागि हितकर, पचाउन सहज र बोसो वर्धक हुन्छ । तिल्कोको बोक्रा टर्रो, उष्णवीर्यको, पुरुषत्व नाशक र दाँतका रोग नाशक हुन्छ । यसले कीरा, सुजन, घाउखटिरा र रक्तविकार नाश गर्दछ ।

## अगस्ति (अगस्त्य)

**अगस्त्यः शीघ्रपुष्पः स्यात् अगस्तिस्तु मुनिद्रुमः ।**
**व्रणारिदीर्घफलको वक्रपुष्पः सुरप्रियः ॥४६॥**

**सितपीतनीललोहितकुसुमविशेषाच्चतुर्विधोऽगस्तिः ।**
**मधुरशिशिरस्त्रिदोषश्रमकासविनाशनश्च भूतघ्नः ॥४७॥**
**अगस्त्यं शिशिरं गौल्यं त्रिदोषघ्नं श्रमापहम् ।**
**बलासकासवैवर्ण्यभूतघ्नञ्च बलापहम् ॥४८॥**

अगस्त्य, शीघ्रपुष्प, अगस्ति, मुनिद्रुम, व्रणारि, दीर्घफल, वक्रपुष्प र सुरप्रिय (देवप्रिय) : यी नाम अगस्तिका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो, पहेँलो, नीलो र रातो फूल विशेष फुल्ने आधारमा अगस्ति चार प्रकारको हुन्छ । अगस्ति गुलियो, शीतवीर्यको तथा त्रिदोष, थकाई, खोकी र भूतबाधा नाशक हुन्छ । यो शीतवीर्यको, गुलियो तथा त्रिदोष, थकाई, कफविकार, खोकी, शरीरको रङ्ग उड्ने रोग, भूतबाधा र बल नासक हुन्छ ।

## पाडरी (पाटली)

**पाटली ताम्रपुष्पी च कुम्भिका रक्तपुष्पिका ।**
**वसन्तदूती चामोघा स्थाली च विटवल्लभा ॥**
**स्थिरगन्धाऽम्बुवासी च कालवृन्तीन्दुभूह्वया ॥४९॥**
**पाटली तु रसे तिक्ता कटूष्णा कफवातजित् ।**
**शोफाध्मानवमिश्वासशमनी सन्निपातनुत् ॥५०॥**



(१) पाटली, (२) ताम्रपुष्पी, (३) कुम्भिका, (४) रक्तपुष्पिका, (५) वसन्तदुती, (६) अमोघा, (७) स्थाली, (८) विटवल्लभा, (९) स्थिरगन्धा, (१०) अम्बुवासी र (११) कालवृन्ती : यी एघार नाम पाडरीका संस्कृत पर्यायवाची नामहरू हुन् । पाडरी रसमा तीतो र पिरो हुन्छ । यो उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले सुजन, आध्मान, वाकवाकी र दमलाई शान्त पार्नुका साथै सन्निपातलाई निको पार्दछ ।

## सेतो पाडरी (काष्ठपाटला)

**सितपाटलिका चान्या सितकुम्भी फलेरुहा ।**
**सिता मोघा कुबेराक्षी सिताह्वा काष्ठपाटला ॥**
**पाटली धवला प्रोक्ता ज्ञेया वसुमिताह्वया ॥५१॥**
**सितपाटलिका तिक्ता गुरूष्णा वातदोषजित् ।**
**वमिहिक्काकफघ्नी च श्रमशोषापहारिका ॥५२॥**

(१) सितपाटलिका, (२) सितकुम्भी, (३) फलेरुहा, (४) सिता, (५) मोघा, (६) कुबेराक्षी, (७)

सिताह्वा र (८) काष्ठपाटला : यी आठ नाम सेतो पाडरीका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो पाडरी तीतो, पचाउन कठिन, उष्णवीर्यको तथा वातविकार नाशक हुन्छ । यसले वाकवाकी, बाडुली, कफविकार, थकाई र सुजन पनि नाश गर्दछ ।

## अशोक

**अशोकः शोकनाशः स्याद्विशोको वञ्जुलद्रुमः ।**
**मधुपुष्पोऽपशोकश्च कङ्केलिः केलिकस्तथा ॥५३॥**
**रक्तपल्लवकश्चित्रो विचित्रः कर्णपूरकः ।**
**सुभगः स्मराधिवासो दोषहारी प्रपल्लवः ॥५४॥**
**रागीतरुर्हेमपुष्पो रामावामङ्घ्रिघातकः ।**
**पिण्डीपुष्पो नटश्चैव पल्लवद्रुर्द्विविंशतिः ॥५५॥**
**अशोकः शिशिरो हृद्यः पित्तदाहश्रमापहः ।**
**गुल्मशूलोदराध्माननाशनः क्रिमिका(हा)रकः ॥५६॥**

(१) अशोक, (२) शोकनाश, (३) विशोक, (४) वञ्जुलद्रुम, (५) मधुपुष्प, (६) अपशोक, (७) कङ्केलि, (८) केलिक, (९) रक्तपल्लवक, (१०) चित्र, (११) विचित्र, (१२) कर्णपूरक, (१३) सुभग, (१४) स्मराधिवास, (१५) दोषहारी, (१६) प्रपल्लव, (१७) रागीतरु, (१८) हेमपुष्प, (१९) रामावामङ्घ्रिघातक, (२०) पिण्डीपुष्प, (२१) नट र (२२) पल्लवद्रु : यी बाईस नाम अशोकका संस्कृत पर्यायवाची नामहरू हुन् । अशोक शीतवीर्यको, मुटुका लागि हितकर तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ । यसले गुल्म, शूल, पेटका रोग र आध्मान नाश गर्दछ तर कीरा पार्दछ । ( पेटका रोग नाश गर्ने ओखतीले पेटमा कीरा पार्दछ भन्दा युक्तिसङ्गत हुँदैन । यसैले छपन्नौ श्लोकको अन्तिममा कृमिकारकको साटो कृमिहारक पाठ उपयुक्त हुने देखिन्छ) ।



## चाँप (चम्पक)

**चम्पकः स्वर्णपुष्पश्च चाम्पेयः शीतलच्छदः ।**
**सुभगो भृङ्गमोही च शीतलो भ्रमरातिथिः ॥५७॥**
**सुरभिर्दीपपुष्पश्च स्थिरगन्धोऽतिगन्धकः ।**
**स्थिरपुष्पो हेमपुष्पः पीतपुष्पस्तथाऽपरः ॥**
**हेमाह्वः सुकुमारस्तु वनदीपोऽष्टभूह्वयः ॥५८॥**
**तत्कलिका गन्धफली बहुगन्धा गन्धमोदिनी त्रेधा ॥५९॥**
**चम्पकः कटुकस्तिक्तः शिशिरो दाहनाशनः ।**
**कुष्ठकण्डूव्रणहरो गुणाढ्यो राजचम्पकः ॥६०॥**

(१) चम्पक, (२) स्वर्णपुष्प, (३) चाम्पेय, (४) शीतलच्छद, (५) सुभग, (६) भृङ्गमोही, (७) शीतल, (८) भ्रमरातिथि, (९) सुरभि, (१०) दीपपुष्प, (११) स्थिरगन्ध, (१२) अतिगन्धक, (१३) स्थिरपुष्प, (१४) हेमपुष्प र (१५) पीतपुष्प : यी चाँपका तथा (१६) हेमाह्व, (१७) सुकुमार र (१८) वनदीप : यी अर्को थरी चाँपका गरी जम्मा अठार नाम चाँपका संस्कृत पर्यायवाची नामहरू हुन् । चाँपको कोपिलालाई संस्कृतमा गन्धफली, बहुगन्धा र गन्धमोदिनी भनिन्छ । चाँप पिरो, तीतो, शीतवीर्यको र डाह नाशक हुन्छ । यसले कुष्ठ, लुतो र घाउखटिरा नाश गर्दछ । राज-चाँप सबभन्दा बढी गुनिलो हुन्छ ।

### वनचाँप (क्षुद्रचम्पक)

**क्षुद्रादिचम्पकस्त्वन्यः स ज्ञेयो नागचम्पकः ।**
**फणिचम्पकनागाह्वश्चम्पको वनजः शराः ॥६१॥**
**वनचम्पकः कटूष्णो वातकफध्वंसनो वर्ण्यः ।**
**चक्षुष्यो व्रणरोपी वह्निस्तम्भं करोति योगगुणात् ॥६२॥**

(१) क्षुद्रादिचम्पक, (२) नागचम्पक, (३) फणिचम्पक, (४) नागका पर्यायवाची शब्दका पछाडि चम्पक जोडिएका शब्द र (५) वनज(चम्पक) : यी पाँच नाम वनचाँपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वनचाँप पिरो, उष्णवीर्यको तथा वातविकार र कफविकार नाशक तथा वर्णमा निखार लेराउने गुणको हुन्छ । यसले आँखालाई फाइदा गर्दछ, घाउ भर्दछ र भोकलाई वा पाचनशक्तिलाई रोक्दछ ।



### मौलसिरी (बकुल)

**बकुलस्तु सीधुगन्धः स्त्रीमुखमधुदोहलश्च मधुपुष्पः ।**
**सुरभिर्भ्रमरानन्दः स्थिरकुसुमः केसरश्च शारदिकः ॥६३॥**
**करकः सीधुसञ्ज्ञस्तु विशारदो गूढपुष्पको धन्वी ।**
**मदनो मद्यामोदश्चिरपुष्पश्चेति सप्तदशसञ्ज्ञः ॥६४॥**
**बकुलः शीतलो हृद्यो विषदोषविनाशनः ।**
**मधुरश्च कषायश्च मदाढ्यो हर्षदायकः ॥६५॥**
**बकुलकुसुमञ्च रुच्यं क्षीराढ्यं सुरभि शीतलं मधुरम् ।**
**स्निग्धकषायं कथितं मलसङ्ग्रहकारकं चैव ॥६६॥**

(१) बकुल, (२) सीधुगन्ध, (३) स्त्रीमुखमधुदोहल, (४) मधुपुष्प, (५) सुरभि, (६) भ्रमरानन्द, (७) स्थिरकुसुम, (८) केसर, (९) शारदिक, (१०) करक, (११) सीधु (सिन्धु ? )र यसका पर्याय, (१२)

विशारद, (१३) गूढपुष्पक, (१४) धन्वी, (१५) मदन, (१६) मद्यामोद र (१७) चिरपुष्प : यी सत्र नाम मौलसिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । मौलसिरी शीतवीर्यको, मुटुका लागि हितकर र विषविकार नाशक हुन्छ । यो गुलियो, टर्रो, नसालु र आनन्ददायक हुन्छ । मौलसिरीको फूल रुचिप्रद, दूधवर्धक, सुन्दर वा सुगन्धी, शीतवीर्यको, गुलियो, चिल्लो, टर्रो र कब्जियत गराउने गुणको हुन्छ ।

### सेतो केत्तुके (श्वेतकेतकी)

**केतकी तीक्ष्णपुष्पा च विफला धूलिपुष्पिका ।**
**मेध्या कण्टदला चैव शिवद्विष्टा नृपप्रिया ॥६७॥**
**क्रकचा दीर्घपत्रा च स्थिरगन्धा तु पांशुला**
**गन्धपुष्पेन्दुकलिका दलपुष्पा त्रिपञ्चधा ॥६८॥**

(१) केतकी, (२) तीक्ष्णपुष्पा, (३) विफला, (४) धूलिपुष्पिका, (५) मेध्या, (६) कण्टदला, (७) शिवद्विष्टा, (८) नृपप्रिया, (९) क्रकचा, (१०) दीर्घपत्रा, (११) स्थिरगन्धा, (१२) पांशुला, (१३) गन्धपुष्प, (१४) इन्दुकलिका र (१५) दलपुष्पा : यी पन्ध्र नाम सेतो केत्तुकेका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### पहेँलो केत्तुके (स्वर्णकेतकी)

**स्वर्णादि केतकी त्वन्या ज्ञेया सा हेमकेतकी ।**
**कनकप्रसवा पुष्पी हैमी छिन्नरुहा तथा ॥**
**विष्टरुहा स्वर्णपुष्पी कामखङ्गदला च सा ॥६९॥**

स्वर्णकेतकी, हेमकेतकी, कनकप्रसवा, पुष्पी, हैमी, छिन्नरुहा, विष्टरुहा, स्वर्णपुष्पी र कामखङ्गदला : यी पहेँलो केत्तुकेका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुई थरी केतकीका गुण

**केतकीकुसुमं वर्ण्यं केशदौर्गन्ध्यनाशनम् ।**
**हेमाभं मदनोन्मादवर्धनं सौख्यकारि च ॥७०॥**
**तस्याः स्तनोऽतिशिशिरः कटुः पित्तकफापहः ।**
**रसायनकरो बल्यो देहदार्ढ्यकरः परः ॥७१॥**

केत्तुकेको फूलले शरीरको वर्णमा निखार लेराउँदछ र कपालको दुर्गन्ध हटाउँदछ । पहेँलो

केतकीको फूलले कामोत्तेजना र पागलपन बढाउँदछ । यै सुखदायी पनि हुन्छ । केत्तुकेको काण्ड अति शीतवीर्यको, पिरो तथा पित्तविकार र कफविकार नाश गर्दछ । यो रसायनी, बलदायक र शरीरलाई अत्यन्त दृढ बनाउने गुणको हुन्छ ।

(केही विद्वानहरूले भाले जातको केतकीलाई सेतो केतकी र पोथी जातको केतकीलाई स्वर्णकेतकी भनी बताएका छन्) ।

## रोहिणी (सिन्दूरी)

**सिन्दूरी वीरपुष्पश्च तृणपुष्पी करच्छदः ।**
**सिन्दूरपुष्पी शोणादिपुष्पी षडाह्वयः स्मृतः ॥७२॥**
**सिन्दूरी कटुका तिक्ता कषाया श्लेष्मवातजित् ।**
**शिरोऽर्तिशमनी भूतनाशा चण्डीप्रिया भवेत् ॥७३॥**

(१) सिन्दूरी, (२) वीरपुष्प, (३) तृणपुष्पी, (४) करच्छद, (५) सिन्दूरपुष्पी र (६) शोणादिपुष्पी : यी छ नाम रोहिणीका संस्कृत पर्यायवाची नामहरू हुन् । रोहिणी पिरो, तीतो, टर्रो तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले टाउकाका रोग शान्त पार्नुका साथै भूतबाधा नाश गर्दछ । यो फूल देवीलाई असाध्य मन पर्दछ ।



## चमेली (जाती)

**जाती सुरभिगन्धा स्यात् सुमना तु सुरप्रिया ।**
**चेतकी सुकुमारा तु सन्ध्यापुष्पी मनोहरा ॥७४॥**
**राजपुत्री मनोज्ञा च मालती तैलभाविनी ।**
**जनेष्टा हृद्यगन्धा च नामान्यस्याश्चतुर्दश ॥७५॥**
**मालती शीततिक्ता स्यात् कफघ्नी मुखपाकनुत् ।**
**कुड्मलं नेत्ररोगघ्नं व्रणविस्फोटकुष्ठनुत् ॥७६॥**

(१) जाती, (२) सुरभिगन्धा, (३) सुमना, (४) सुरप्रिया, (५) चेतकी, (६) सुकुमारा, (७) सन्ध्यापुष्पी, (८) मनोहरा, (९) राजपुत्री, (१०) मनोज्ञा, (११) मालती, (१२) तैलभाविनी, (१३) जनेष्टा र (१४) हृद्यगन्धा : यी चौध नाम चमेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । चमेली शीतवीर्यको, तीतो तथा कफविकार र मुखका ससाना घाउ नाशक हुन्छ । यसको कोपिलाले आँखाका रोग, घाउखटिरा, विस्फोट र कुष्ठरोग नाश गर्दछ ।

## बेली (मुद्गर)

**मुद्गरो गन्धसारस्तु सप्तपत्रश्च कर्दमी ।**
**वृत्तपुष्पोऽतिगन्धश्च गन्धराजो विटप्रियः ॥**
**गेयप्रियो जनेष्टश्च मृगेष्टो रुद्रसम्मितः ॥७७॥**
**मुद्गरो मधुरः शीतः सुरभिः सौख्यदायकः ।**
**मनोज्ञो मधुपानन्दकारी पित्तप्रकोपहृत् ॥७८॥**

(१) मुद्गर, (२) गन्धसार, (३) सप्तपत्र, (४) कर्दमी, (५) वृत्तपुष्प, (६) अतिगन्ध, (७) गन्धराज, (८) विटप्रिय, (९) गेयप्रिय, (१०) जनेष्ट र (११) मृगेष्ट : यी एघार नाम बेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको, सुगन्धि र सुखदायक हुन्छ । यसले मानिसको मनलाई र भ्रमरालाई आनन्द दिन्छ तथा पित्तविकारलाई नाश गर्दछ ।

## गुलाफ (शतपत्री)

**शतपत्री तु सुमना सुशीता शिववल्लभा ।**
**सौम्यगन्धा शतदला सुवृत्ता शतपत्रिका ॥७९॥**
**शतपत्री हिमा तिक्ता कषाया कुष्ठनाशनी ।**
**मुखस्फोटहरा रुच्या सुरभिः पित्तदाहनुत् ॥८०॥**

शतपत्री, सुमना, सुशीता, शिववल्लभा, सौम्यगन्धा, शतदला, सुवृत्ता र शतपत्रिका : यी नाम गुलाफका संस्कृत पर्यायवाची नामहरू हुन् । गुलाफ शीतवीर्यको, तीतो, टर्रो र कुष्ठनाशक हुन्छ । यसले मुखका खटिरा नाश गर्नुका साथै रुचि पनि जगाउँदछ । यो सुगन्धि र कुष्ठनाशक हुन्छ ।

## लहरे बेली (मल्लिका)

**मल्लिका भद्रवल्ली तु गौरी च वनचन्द्रिका ।**
**शीतभीरुः प्रिया सौम्या नारीष्टा गिरिजा सिता ॥**
**मल्ली च दमयन्ती च चन्द्रिका मोदिनी मनुः ॥८१॥**
**मल्लिका कटुतिक्ता स्याच्चक्षुष्या मुखपाकनुत् ।**
**कुष्ठविस्फोटकण्डूतिविषव्रणहरा परा ॥८२॥**

(१) मल्लिका, (२) भद्रवल्ली, (३) गौरी, (४) वनचन्द्रिका, (५) शीतभीरु, (६) प्रिया, (७) सौम्या, (८) नारीष्टा, (९) गिरिजा, (१०) सिता, (११) मल्ली, (१२) दमयन्ती, (१३) चन्द्रिका र (१४) मोदिनी : यी चौध नाम लहरेबेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बेली पिरो, तीतो,

आँखाका लागि हितकर र मुखमा ससाना घाउ नाशक हुन्छ । यसले कुष्ठ, विस्फोट, चिलाउने रोग, विषविकार र घाउखटिरा राम्ररी निको पार्दछ ।

### मोतिया (वल्लिका)

**वल्लिका मोदिनी चान्या वटपत्रा कुमारिका ।**
**सुगन्धाढ्या वृत्तपुष्पा मुक्ताभा वृत्तमल्लिका ॥८३॥**
**नेत्ररोगापहन्त्री स्यात् कटूष्णा वृत्तमल्लिका ।**
**व्रणघ्नी गन्धबहला दारयत्यास्यजान् गदान् ॥८४॥**

वल्लिका, मोदिनी तथा वटपत्रा, कुमारिका, सुगन्धाढ्या, वृत्तपुष्पा, मुक्ताभा र वृत्तमल्लिका यी : मोतिया फूलका संस्कृत पर्यायवाची नामहरू हुन् । मोतिया फूलले आँखाका रोग नाश गर्दछ । यो पिरो र उष्णवीर्यको हुन्छ । यसले घाउखटिरा र मुखका रोग नाश गर्दछ । यो फूल अत्यन्त सुगन्धित हुन्छ ।

### बर्खे-बेली (वार्षिका)

**वार्षिका त्रिपुटा त्र्यस्रा सुरूपा सुलभा प्रिया ।**
**श्रीवल्ली षट्पदानन्दा मुक्तबन्धा नवाभिधा ॥८५॥**
**वार्षिका शिशिरा हृद्या सुगन्धिः पित्तनाशनी ।**
**कफवातविषस्फोटक्रिमिदोषामनाशनी ॥८६॥**

(१) वार्षिका, (२) त्रिपुटा, (३) त्र्यस्रा, (४) सुरूपा, (५) सुलभा, (६) प्रिया, (७) श्रीवल्ली, (८) षट्पदानन्दा र (९) मुक्तबन्धा : यी नौ नाम वर्षेबेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बेली शीतवीर्यको, मुटुका लागि हितकर, सुगन्धि र पित्तविकार नाशक हुन्छ । यसले कफविकार, वातविकार, विषविकार, खटिरा र कीराजन्य रोग नाश गर्दछ ।

### बनबेलीको भेद

**सा दीर्घवर्तुलपुष्पविशेषादनेकनिर्देशा ।**
**मृगमदवासा त्वन्या कस्तूरीमल्लिका ज्ञेया ॥८७॥**
**प्रातर्विकस्वरैका सायोद्भिदुराऽपि मल्लिका काऽपि ।**
**वनमल्लिका नु सा स्यादास्फोटा किन्तु समगुणोपेता ॥८८॥**

लामा, बाटुला आदि जस्ता फूलमा हुने विभिन्नताका आधारमा बेलीका अनेक जात हुन्छन् । अर्को

थरी कस्तूरी जस्तो बास्ना आउने बेली हुन्छ जसलाई कस्तूरीमल्लिका (बियाँमा कस्तूरीको बास्ना आउने एक प्रकारको लता; लताकस्तूरी; कस्तूरीमल्लिका; कस्तूरीवल्लिका-नेपाली बृहत् शब्दकोश) । अर्को प्रातर्विकस्वरा र योद्भिदुरा नामका बेली पनि हुन्छन् । यसैगरी वनबेली र आस्फोटा नामका बेली पनि हुन्छन् । यी सबै बेली समान गुणका हुन्छन् ।

### सानो नेवारी (वासन्ती)

**वासन्ती प्रहसन्ती वसन्तजा माधवी महाजातिः ।**
**शीतसहा मधुबहला वसन्तदूती च वसुनाम्नी ॥८९॥**
**वासन्ती शिशिरा हृद्या सुरभिः श्रमहारिणी ।**
**धम्मिल्लामोदिनी मन्दमदनोन्माददायिनी ॥९०॥**

(१) वासन्ती, (२) प्रहसन्ती, (३) वसन्तजा, (४) माधवी, (५) महाजाति, (६) शीतसहा, (७) मधुबहला र (८) वसन्तदूती : यी आठ नाम सानो नेवारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो फूल शीतवीर्यको, मुटुका लागि हितकर, सुगन्धी र थकाई नाशक हुन्छ । यो फूल गजरा बनाएर चुल्ठो सजाउन सुन्दर हुन्छ । यसले नजानिदो किसिमले बिस्तारै कामवासना जगाउँदछ ।

### नेवारी फूल (नवमल्लिका)



**नवमल्लिकाऽतिमोदा ग्रैष्मी ग्रीष्मोद्भवा च सा ।**
**सप्तला सुकुमारा च सुरभी सूचिमल्लिका ॥९१॥**
**सुगन्धा शिखरिणी स्यान्नेवाली चेन्दुभूह्वया ।**
**नवमल्लिकाऽतिशैत्या सुरभिः सर्वरोगहृत् ॥९२॥**

(१) नवमल्लिका, (२) अतिमोदा, (३) ग्रैष्मी, (४) ग्रीष्मोद्भवा, (५) सप्तला, (६) सुकुमारा, (७) सुरभी, (८) सूचिमल्लिका, (९) सुगन्धा, (१०) शिखरिणी र (११) नेवाली : यी एघार नाम नेवारी फूलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो फूल अति शीतवीर्यको, सुगन्धी र सबै रोग नाशक हुन्छ ।

### अतिमुक्ता

**सैवातिमुक्तकाख्या पुण्ड्रकनाम्नी च काचिदुक्ताऽन्या ।**
**मदनी भ्रमरानन्दा कामकान्ता च पञ्चाख्या ॥९३॥**
**अतिमुक्तः कषायः स्याच्छिशिरः श्रमनाशनः ।**
**पित्तदाहज्वरोन्मादहिक्काच्छर्दिनिवारणः ॥९४॥**

नेवारी फूललाई नै (१) अतिमुक्तक वा (२) पुण्ड्रक पनि भन्दछन् । यसैलाई (३) मदनी, (४) भ्रमरमनन्दा र (५) कामकान्ता समेत भनिन्छ । यसरी यसका पाँच संस्कृत पर्यायवाची नामहरू हुन्छन् । यो फूल टर्रो, शीतवीर्यको र थकाई नाशक हुन्छ । यसले पित्तविकार, डाह, ज्वर, उन्माद, बाडुली र वाकवाकी ठिक गर्दछ ।

### जुही (यूथिका)

**यूथिका गणिकाऽम्बष्ठा मागधी बालपुष्पिका ।**
**मोदनी बहुगन्धा च भृङ्गानन्दा गजाह्वया ॥९५॥**

(१) यूथिका, (२) गणिका, (३) अम्बष्ठा, (४) मागधी, (५) बालपुष्पिका, (६) मोदनी, (७) बहुगन्धा र (८) भृङ्गानन्दा : यी आठ नाम जुहीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पहेँलो जुही (सुवर्णयूथिका)

**अन्या यूथी सुवर्णाह्वा सुगन्धा हेमयूथिका ।**
**युवतीष्टा व्यक्तगन्धा शिखण्डी नागपुष्पिका ॥९६॥**

**हरिणी पीतयूथी च पोतिका कनकप्रभा ।**
**मनोहरा च गन्धाढ्या प्रोक्ता त्रयोदशाह्वया ॥९७॥**

(१) सुवर्णाह्वा, (२) सुगन्धा, (३) हेमयूथिका, (४) युवतीष्टा, (५) व्यक्तगन्धा, (६) शिखण्डी, (७) नागपुष्पिका, (८) हरिणी, (९) पीतयूथी, (१०) पोतिका, (११) कनकप्रभा, (१२) मनोहरा र (१३) गन्धाढ्या : यी तेह्र नाम पहेँलो जुहीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुई थरी जुहीका गुण

**यूथिकायुगलं स्वादु शिशिरं शर्करार्तिनुत् ।**
**पित्तदाहतृषाहारि नानात्वग्दोषनाशनम् ॥९८॥**

यी दुई जुही गुलिया, शीतवीर्यका र पत्थरी नाशक हुन्छन् । यिनले पित्तविकार, डाह, तिर्खारोग र अनेक प्रकारका छालाका रोग निको पार्दछन् ।

### जुहीका जात (यूथिकाभेद)

**सितपीतनीलमेचकनाम्न्याः कुसुमेन यूथिकाः कथिताः ।**

तिक्ताहिमापित्तकफामयज्वरघ्न्यो व्रणादिदोषहराः ॥९९॥
सर्वासां यूथिकानां तु रसवीर्यादिसाम्यता ।
सुरूपं तु सुगन्धाढ्यं स्वर्णयूथ्या विशेषतः ॥१००॥

सेता, पहैँला, नीला र गाढा नीला गरी फूलका आधारमा जुहीका जात हुन्छन् । यी तीता, शीतवीर्यका तथा पित्तविकार, कफविकार, ज्वर, घाउखटिरा आदि रोग नाशक हुन्छन् । रस, वीर्य आदिमा सबै प्रकारका जुही समान गुणका हुने भए पनि सुन्दरता र सुगन्धका दृष्टिले पहैँलो जुही उत्तम हुन्छ ।

### बाह्रमासे गुलाफ (कुब्जक)

कुब्जको भद्रतरुणो वृत्तपुष्पोऽतिकेसरः ।
महासहः कण्टकाढ्यः खर्वोऽलिकुलसङ्कुलः ॥१०१॥
कुब्जकः सुरभिः शीतो रक्तपित्तकफापहः ।
पुष्पं तु शीतलं वर्ण्यं दाहघ्नं वातपित्तजित् ॥१०२॥

कुब्जक, भद्रतरुण, वृत्तपुष्प, अतिकेसर, महासह, कण्टकाढ्य, खर्व र अलिकुलसङ्कुल : यी बाह्रमासे गुलाफका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सुगन्धी, शीतवीर्यको तथा रक्तपित्त र कफविकार नाशक हुन्छ । यसको फूल शीतवीर्यको, वर्णमा निखार लेराउने, डाह नाशक तथा वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ ।

### मुचुकुन्द

मुचकुन्दो बहुपत्रः सुदलो हरिवल्लभः सुपुष्पश्च ।
अर्घ्यार्हो लक्ष्मणको रक्तप्रसवश्च वसुनामा ॥१०३॥
मुचकुन्दः कटुतिक्तः कफकासविनाशनश्च कण्ठदोषहरः ।
त्वग्दोषशोफशमनो व्रणपामाविनाशनश्चैव ॥१०४॥

(१) मुचकुन्द, (२) बहुपत्र, (३) सुदल, (४) हरिवल्लभ, (५) सुपुष्प, (६) अर्घ्यार्ह, (७) लक्ष्मणक र (८) रक्तप्रसव : यी आठ नाम मुचकुन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । मुचकुन्द पिरो, तीतो तथा कफविकार, खोकी र घाँटीका रोग नाशक हुन्छ । यसले छालाका रोग र सुजनलाई शान्त पार्दछ तथा घाउखटिरा र पामालाई नाश गर्दछ ।

## फूलविशेष (करुणी)

**करुणी ग्रीष्मपुष्पी स्याद्रक्तपुष्पी च वारुणी ।**
**राजप्रिया राजपुष्पी सूक्ष्मा च ब्रह्मचारिणी ॥१०५॥**
**करुणी कटुतिक्तोष्णा कफमारुतनाशिनी ।**
**आध्मानविषविच्छर्दिजत्रूर्ध्वश्वासहारिणी ॥१०६॥**

करुणी, ग्रीष्मपुष्पी, रक्तपुष्पी, वारुणी, राजप्रिया, राजपुष्पी, सूक्ष्मा र ब्रह्मचारिणी : यी करुणी नामक फूलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले आध्मान, विषविकार, वाकवाकी र जत्रु (खगाल्नु) भन्दा माथिको दमलाई नाश गर्दछ ।

## माधवी लता (माधवी)

**माधवी चन्द्रवल्ली च सुगन्धा भ्रमरोत्सवा ।**
**भृङ्गप्रिया भद्रलता भूमिमण्डपभूषणी ॥१०७॥**
**माधवी कटुका तिक्ता कषाया मदगन्धिका ।**
**पित्तकासव्रणान् हन्ति दाहशोषविनाशिनी ॥१०८॥**

माधवी, चन्द्रवल्ली, सुगन्धा, भ्रमरोत्सवा, भृङ्गप्रिया, भद्रलता र भूमिमण्डपभूषणी : यी नाम माधवी लता वा लहरे चमेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, टर्रो र मदिराको गन्ध आउने गुणको हुन्छ । यसले पित्तविकार, खोकी, घाउखटिरा, डाह र सुजन नाश गर्दछ ।

## गणिकारी

**गणिकारी काञ्चनिका काञ्चनपुष्पी वसन्तदूती च ।**
**गन्धकुसुमाऽतिमोदा वासन्ती मदमादिनी चैव ॥१०९॥**
**गणिकारी सुरभितरा त्रिदोषशमनी च दाहशोषहरा ।**
**कामक्रीडाऽऽडम्बरशम्बरहरचापलप्रसरा ॥११०॥**

गणिकारी, काञ्चनिका, काञ्चनपुष्पी, वसन्तदूती, गन्धकुसुमा, अतिमोदा, वासन्ती र मदमादिनी : यी गणिकारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सुगन्धी तथा त्रिदोष, डाह र सुजन नाशक हुन्छ । यसले मैथुन क्षमता, घमण्ड र भाग्य नाश गर्दछ तथा चञ्चलता बढाउँदछ ।

## कुन्दपुष्प (कुन्द)

**कुन्दस्तु मकरन्दश्च महामोदो मनोहरः ।**
**मुक्तापुष्पः सदापुष्पस्तारपुष्पोऽट्टहासकः ॥**
**दमनो वनहासश्च मनोज्ञो रुद्रसम्मितः ॥१११॥**
**कुन्दोऽतिमधुरः शीतः कषायः कैश्यभावनः ।**
**कफपित्तहरश्चैव सरो दीपनपाचनः ॥११२॥**

(१) कुन्द, (२) मकरन्द, (३) महामोद, (४) मनोहर, (५) मुक्तापुष्प, (६) सदापुष्प, (७) तारपुष्प, (८) अट्टहासक, (९) दमन, (१०) वनहास र (११) मनोज्ञ : यी एघार नाम कुन्दपुष्पका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति गुलियो, शीतवीर्यको, टर्रो र कपाल उमार्ने गुणको हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । यो पुष्प मलमूत्रलाई तलतिर सार्ने, दीपनी र पाचनी हुन्छ ।

## ठुलो मौलसिरी (बक)

**बकः पाशुपतः शैवः शिवपिण्डश्च सुव्रतः ।**
**वसुकश्च शिवाङ्कश्च शिवेष्टः क्रमपूरकः ॥**
**शिवमल्ली शिवाह्लादः शाम्भवो रविसम्मितः ॥११३॥**
**वकोऽतिशिशिरस्तिक्तो मधुरो मधुगन्धकः ।**
**पित्तदाहकफश्वासश्रमहारी च दीपनः ॥११४॥**

(१) बक, (२) पाशुपत, (३) शैव, (४) शिवपिण्ड, (५) सुव्रत, (६) वसुक, (७) शिवाङ्क, (८) शिवेष्ट, (९) क्रमपूरक, (१०) शिवमल्ली, (११) शिवाह्लाद र (१२) शाम्भव : यी बाह्र नाम ठुलो मौलसिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति शीतवीर्यको, तीतो, गुलियो र मदिराको गन्ध आउने गुणको हुन्छ । यसले पित्तविकार, डाह, कफविकार, दम र थकाई नाश गर्दछ । यो दीपनी हुन्छ ।

## केविका (फूलविशेष)

**केविका कविका केवा भृङ्गारिर्नृपवल्लभा ।**
**भृङ्गमारी महागन्धा राजकन्याऽलिमोहिनी ॥११५॥**
**केविका मधुरा शीता दाहपित्तश्रमापहा ।**
**वातश्लेष्मरुजां हन्त्री पित्तच्छर्दिविनाशिनी ॥११६॥**

केविका, कविका, केवा, भृङ्गारि, नृपवल्लभा, भृङ्गमारी, महागन्धा, राजकन्या र अलिमोहिनी : यी

कविकाका संस्कृत पर्यायवाची नामहरू हुन् । कविका गुलियो, शीतवीर्यको तथा डाह, पित्तविकार र थकाई नाशक हुन्छ । यसले वातविकार, कफविकार र पित्तजन्य वाकवाकी नाश गर्दछ ।

### दोपहरिया (बन्धूक)

**बन्धूको बन्धुजीवः स्यादोष्ठपुष्पोऽर्कवल्लभः ।**
**मध्यन्दिनो रक्तपुष्पो रागपुष्पो हरिप्रियः ॥११७॥**
**असितसितपीतलोहितपुष्पविशेषाच्चतुर्विधो बन्धूकः ।**
**ज्वरहारी विविधग्रहपिशाचशमनः प्रसादनः सवितुः स्यात् ॥११८॥**

बन्धूक, बन्धुजीव, ओष्ठपुष्प, अर्कवल्लभ, मध्यन्दिन, रक्तपुष्प, रागपुष्पो र हरिप्रिय : यी दोपहरियाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो प्रायः कालो, सेतो, पहेँलो र रातो फूल फुल्ने गरी चार प्रकारको हुन्छ । यसले ज्वर, अनेक थरी ग्रहबाधा र पिशाचबाधा शान्त पार्दछ । यो फूलले सूर्यलाई प्रसन्न पार्दछ ।

### त्रिसन्धि (फूलविशेष)

**त्रिसन्धिः सान्ध्यकुसुमा सन्धिवल्ली सदाफला ।**

**त्रिसन्ध्यकुसुमा कान्ता सुकुमारा च सन्धिजा ॥११९॥**
**त्रिसन्धिस्त्रिविधा ज्ञेया रक्ता चान्या सिताऽसिता ।**
**कफकासहरा रुच्या त्वग्दोषशमनी परा ॥१२०॥**

त्रिसन्धि, सान्ध्यकुसुमा, सन्धिवल्ली, सदाफला, त्रिसन्ध्यकुसुमा, कान्ता, सुकुमारा र सन्धिजा : यी त्रिसन्धिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रातो, सेतो र कालो गरी तीन प्रकारको हुन्छ । यसले कफविकार र खोकी नाश गर्दछ । यो रुचिप्रद र विशेषतः छालाको रोग शान्त पार्ने गुणको हुन्छ ।

### जपाकुसुम (जपा)

**जपाख्या ओड्रकाख्या च रक्तपुष्पी जवा च सा ।**
**अर्कप्रिया रक्तपुष्पी प्रातिका हरिवल्लभा ॥१२१॥**
**जपा तु कटुरुष्णा स्यादिन्द्रलुप्तकनाशकृत् ।**
**विच्छर्दिजन्तुजननी सूर्याराधनसाधनी ॥१२२॥**

जपा, ओड्रका, रक्तपुष्पी, जवा, अर्कप्रिया, रक्तपुष्पी (दोहोरिएको) प्रातिका र हरिवल्लभा : यी

जपाकुसुमका संस्कृत पर्यायवाची नामहरू हुन् । जपाकुसुम पिरो, उष्णवीर्यको र कपाल झर्ने रोग नाशक हुन्छ । यसले वाकवाकी लगाउँदछ र पेटमा कीरा पार्दछ । यो सूर्यको पूजाका लागि उपयोगी मानिन्छ ।

### भ्रमरारि (फूलविशेष)

**भ्रमरारिर्भृङ्गमारी भृङ्गारिर्मांसपुष्पिका ।**
**कुष्ठारिर्भ्रमरी चैव ज्ञेया यष्टिलता मुनिः ॥१२३॥**
**तिक्ता भ्रमरमारी स्याद्वातश्लेष्मज्वरापहा ।**
**शोफकण्डूतिकुष्ठघ्नी व्रणदोषास्थिदोषनुत् ॥१२४॥**

(१) भ्रमरारि, (२) भृङ्गमारी, (३) भृङ्गारि, (४) मांसपुष्पिका, (५) कुष्ठारि, (६) भ्रमरी र (७) यष्टिलता : यी सात नाम भ्रमरारि नामक फूलविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो तथा वातविकार, कफविकार र ज्वर नाशक हुन्छ । यसले सुजन, चिलाउने रोग, कुष्ठ, घाउखटिरा र हाडका विकार पनि नाश गर्दछ ।

### तरुणी (फूलविशेष)



**तरुणी सहा कुमारी गन्धाढ्या चारुकेसरा भृङ्गेष्टा ।**
**रामतरुणी तु सुदला बहुपत्रा भृङ्गवल्लभा च दशाह्वा ॥१२५॥**
**तरुणी शिशिरा स्निग्धा पित्तदाहज्वरापहा ।**
**मधुरा मुखपाकघ्नी तृष्णाविच्छर्दिवारिणी ॥१२६॥**

(१) तरुणी, (२) सहा, (३) कुमारी, (४) गन्धाढ्या, (५) चारुकेसरा, (६) भृङ्गेष्टा, (७) रामतरुणी, (८) सुदला, (९) बहुपत्रा र (१०) भृङ्गवल्लभा : यी दश नाम तरुणी नामक विरुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, चिल्लो तथा पित्तविकार, डाह र ज्वर नाशक हुन्छ । यो गुलियो, मुखका ससाना खटिरा नाशक तथा तिर्खारोग र वाकवाकी शान्त पार्ने गुणको हुन्छ ।

### राजतरुणी (फूलविशेष)

**महती तु राजतरुणी महासहा वर्ण्यपुष्पकोऽम्लानः ।**
**अमितालकः सुपुष्पः सुवर्णपुष्पश्च सप्ताह्वः ॥१२७॥**
**विज्ञेया राजतरुणी कषाया कफकारिणी ।**
**चक्षुष्या हर्षदा हृद्या सुरभिः सुरवल्लभा ॥१२८॥**

(१) राजतरुणी, (२) महासहा, (३) वण्यपुष्पक, (४) अम्लान, (५) आमतालक, (६) सुपुष्प र (७) सुवर्णपुष्प : यी सात नाम ठूलो जातको तरुणीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र कफविकार गर्ने गुणको हुन्छ भनी जान्नू । यो आँखाका लागि हितकर, आनन्ददायक, मुटुका लागि हितकर, सुगन्धी र देव-प्रिय हुन्छ ।

### रातो कटसरैया (कुरबक)

**अथ रक्ताम्लानः स्याद्रक्तसहाख्यः स चापरिम्लानः ।**
**रक्तामलान्तकोऽपि च रक्तप्रसवश्च कुरबकश्चैव ॥१२९॥**
**रामालिङ्गनकामो रागप्रसवो मधूत्सवः प्रसवः ।**
**सुभगो भ्रमरानन्दः स्यादित्ययमिन्दुचन्द्रमितः ॥१३०॥**
**उष्णः कटुः कुरवको वातामयशोफनाशनो ज्वरनुत् ।**
**आध्मानशूलकासश्वासार्तिप्रशमनो वर्ण्यः ॥१३१॥**

(१) रक्ताम्लान, (२) रक्तसह, (३) अपरिम्लान, (४) रक्तामलान्तक, (५) रक्तप्रसव, (६) कुरबक, (७) रामालिङ्गनकामा, (८) रागप्रसव, (९) मधूत्सव, (१०) प्रसव, (११) सुभग र (१२) भ्रमरानन्द : यी बाह्र नाम रातो कटसरैयाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, पिरो तथा वातविकार, सुजन र ज्वर नाशक हुन्छ । यसले आध्मान, शूल, खोकी र दम शान्त पार्दछ तथा शरीरको वर्णमा निखार लेराउँदछ ।

### पहेँलो कटसरैया (किङ्किरात)

**पीतः स किङ्किरातः पीताम्लानः कुरण्टकः कनकः ।**
**पीतकुरवः सुपीतः स पीतकुसुमश्च सप्तसञ्ज्ञकः स्यात् ॥१३२॥**
**किङ्किरातः कषायोष्णस्तिक्तश्च कफवातजित् ।**
**दीपनः शोफकण्डूतिरक्तत्वग्दोषनाशनः ॥१३३॥**

(१) किङ्किरात, (२) पीताम्लान, (३) कुरण्टक, (४) कनक, (५) पीतकुरव, (६) सुपीत र (७) पीतकुसुम : यी सात नाम पहेँलो कटसरैयाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, उष्णवीर्यको, तीतो तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यो दीपनी तथा सुजन, चिलाउने रोग, रक्तविकार र छालाका विकार नाशक पनि हुन्छ ।

### नीलो कटसरैया (आर्तगल)

**नीलपुष्पा तु सा दासी नीलाम्लानस्तु छादनः ।**

**बाला चाऽऽर्तगला चैव नीलपुष्पा च षड्विधा ॥१३४॥**
**आर्तगला कटुस्तिक्ता कफमारुतशूलनुत् ।**
**कण्डूकुष्ठव्रणान् हन्ति शोफत्वग्दोषनाशनी ॥१३५॥**

(१) नीलपुष्पा, (२) दासी, (३) नीलाम्लान, (४) छादन, (५) बाला र (६) आर्तगला : यी छ नाम नीलो कटसरैयाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो तथा कफविकार, वातविकार र शूल नाशक हुन्छ । यसले लुतो, कुष्ठ, घाउखटिरा, सुजन र छालाका विकार नाश गर्दछ ।

### कटसरैयाका थप नाम तथा गुणहरू

**कण्टः कुरण्टो झिण्टी सा वन्यसहचरी तु सा पीता ।**
**शोणी कुरवकनाम्नी कण्टकिनी शोणझिण्टिका चैव ॥१३६॥**
**साऽन्या तु नीलझिण्टी नीलकुरण्टश्च नीलकुसुमा च ।**
**बाणी बाणा दासी कण्टाऽऽर्तगला च सप्तसञ्ज्ञा स्यात् ॥१३७॥**
**झिण्टिकाः कटुकास्तिक्ता दन्तामयशान्तिदाश्च शूलघ्न्यः ।**
**वातकफशोफकासत्वग्दोषविनाशकारिण्यः ॥१३८॥**

कण्ट, कुरण्ट, झिण्टी र वन्यसहचरी : यी पहेँलो कटसरैयाका; शोणीकुरवक, कण्टकिनी र शोणझिण्टिका : यी रातो कटसरैयाका तथा (१) नीलझिण्टी, (२) नीलकुरण्ट, (३) नीलकुसुमा, (४) बाणी, (५) बाणा, (६) दासी र (७) कण्टार्तगला : यी सात नाम नीलो कटसरैयाका पर्यायवाची नामहरू हुन् । यी कटसरैया पिरा, तीता, दाँतका रोग शान्त पार्ने र शूल नाशक हुन्छन् । यी वातविकार, कफविकार, सुजन, खोकी र छालाका रोग नाशका कारण हुने गर्दछन् ।

### उष्ट्रकाण्डी

**उष्ट्रकाण्डी रक्तपुष्पी ज्ञेया करभकाण्डिका ।**
**रक्ता लोहितपुष्पी च वर्णपुष्पी षडाह्वया ॥१३९॥**
**उष्ट्रकाण्डी तु तिक्तोष्णा रुच्या हृद्रोगहारिणी ।**
**तद्बीजं मधुरं शीतं वृष्यं सन्तर्पणं स्मृतम् ॥१४०॥**

(१) उष्ट्रकाण्डी, (२) रक्तपुष्पी, (३) करभकाण्डिका, (४) रक्ता, (५) लोहितपुष्पी र (६) वर्णपुष्पी : यी छ नाम उँटकटेरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको, रुचिप्रद र मुटुका रोग नाशक हुन्छ । यसको बीज गुलियो, शीतवीर्यको, वीर्यवर्धक र तृप्तिदायक हुन्छ ।

### तगर

**तगरं कुटिलं वक्रं विनम्रं कुञ्चितं नतम् ।**
**शठश्च नहुषाख्यश्च दद्रुहस्तश्च बर्हणम् ॥१४१॥**
**पिण्डीतगरकं चैव पार्थिवं राजहर्षणम् ।**
**कालानुसारकं क्षत्रं दीनं जिह्मं मुनीन्दुधा ॥१४२॥**
**तगरं शीतलं तिक्तं दृष्टिदोषविनाशनम् ।**
**विषार्तिशमनं पथ्यं भूतोन्मादभयापहम् ॥१४३॥**

(१) तगर, (२) कुटिल, (३) वक्र, (४) विनम्र, (५) कुञ्चित, (६) नत, (७) शठ, (८) नहुष, (९) दद्रुहस्त, (१०) बर्हण, (११) पिण्डीतगरक, (१२) पार्थिव, (१३) राजहर्षण, (१४) कालानुसारक, (१५) क्षत्र, (१६) दीन र (१७) जिह्म : यी सत्र नाम तगरका संस्कृत पर्यायवाची नामहरू हुन् । तगर शीतवीर्यको, तीतो र दृष्टिदोष नाशक हुन्छ । यसले विषविकारलाई शान्त पार्दछ । यो पथ्य हुनुका साथै यसले भूतजन्य उन्माद र भय नाश गर्दछ ।

### दमना (दमन)

**अथ दमनकस्तु दमनो दान्तो गन्धोत्कटो मुनिर्जटिलः ।**
**दण्डी च पाण्डुरागो ब्रह्मजटा पुण्डरीकश्च ॥१४४॥**
**तापसपत्रः पत्री पवित्रको देवशेखरश्चैव ।**
**कुलपत्रश्च विनीतस्तपस्विपत्रश्च सप्तधात्रीकः ॥१४५॥**
**दमनः शीतलतिक्तः कषायकटुकश्च कुष्ठदोषहरः ।**
**द्वन्द्वत्रिदोषशमनो विषविस्फोटविकारहरणः स्यात् ॥१४६॥**

(१) दमनक, (२) दमन, (३) दान्त, (४) गन्धोत्कट, (५) मुनि, (६) जटिल, (७) दण्डी, (८) पाण्डुराग, (९) ब्रह्मजटा, (१०) पुण्डरीक, (११) तापसपत्र, (१२) पत्री, (१३) पवित्रक, (१४) देवशेखर, (१५) कुलपत्र, (१६) विनीत र (१७) तपस्विपत्र : यी सत्र नाम दमनाका संस्कृत पर्यायवाची नामहरू हुन् । दमना शीतवीर्यको, तीतो, टर्रो, पिरो र कुष्ठविकार नाशक हुन्छ । यसले त्रिदोषमध्ये दुई वटा मिलेर वा तीन वटै मिलेर गर्ने दोषलाई शान्त पार्दछ । यसले विषविकार, विस्फोटजन्य विकार नाश गर्दछ ।

### वनदमना (दमनाविशेष)

**अन्यश्च वन्यदमनो वनादिनामा च दमनपर्यायः ।**
**वीर्यस्तम्भनकारी बलदायी चाऽऽमदोषहारी च ॥१४७॥**

वन शब्दका पछाडि दमन पर्याय जोडिएर आएका शब्दले अर्को थरी वनदमनालाई बुझाउँदछ । यसले वीर्यलाई रोक्दछ, बल दिन्छ र आमजन्य विकार नाश गर्दछ ।

### तुलसी

**तुलसी सुभगा तीव्रा पावनी विष्णुवल्लभा ।**
**सुरेज्या सुरसा ज्ञेया कायस्था सुरदुन्दुभी ॥१४८॥**
**सुरभिर्बहुपत्री च मञ्जरी सा हरिप्रिया ।**
**अपेतराक्षसी श्यामा गौरी त्रिदशमञ्जरी ॥**
**भूतघ्नी पूतपत्री च ज्ञेया चैकोनविंशतिः ॥१४९॥**
**तुलसी कटुतिक्तोष्णा तुलसी श्लेष्मवातजित् ।**
**जन्तुभूतकृमिहरा रुचिकृद्वातशान्तिकृत् ॥१५०॥**

(१) तुलसी, (२) सुभगा, (३) तीव्रा, (४) पावनी, (५) विष्णुवल्लभा, (६) सुरेज्या, (७) सुरसा, (८) कायस्था, (९) सुरदुन्दुभी, (१०) सुरभि, (११) बहुपत्री, (१२) मञ्जरी, (१३) हरिप्रिया, (१४) अपेतराक्षसी, (१५) श्यामा, (१६) गौरी, (१७) त्रिदशमञ्जरी, (१८) भूतघ्नी र (१९) पूतपत्री : यी उन्नाईस नाम तुलसीका संस्कृत पर्यायवाची नामहरू हुन् । तुलसी पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार वातविकारलाई जित्ने गुणको हुन्छ । यसले भूतबाधा र कीरा नाश गर्दछ । यो रुचिप्रद र वातविकारलाई शान्त पार्ने गुणको हुन्छ ।

### कृष्णतुलसी

**कृष्णा तु कृष्णतुलसी श्वेता लक्ष्मीः सिताह्वया ॥१५१॥**
**कासवातक्रिमिवमिभूतापहारिणी पूता ॥१५२॥**

सामान्यतः कृष्णाको पछाडि तुलसी जोडेर कृष्णतुलसी भएजस्तै श्वेता, लक्ष्मी र सिताका पर्यायवाची शब्दका पछाडि तुलसी जोड्नाले तुलसीका पर्यायवाची शब्द बन्दछन् । तुलसीले खोकी, वातविकार, कीरा, वाकवाकी र भूतबाधा नाश गर्नुका साथै पवित्र समेत पार्दछ ।

### मरुवा (मरुवक)

**मरुवः खरपत्रस्तु गन्धपत्रः फणिज्जकः ।**
**बहुवीर्यः शीतलकः सुराह्वश्च समीरणः ॥१५३॥**
**जम्बीरः प्रस्थकुसुमो ज्ञेयो मरुवकस्तथा ।**

**आजन्मसुरभिपत्रो मरीचश्च त्रयोदश ॥१५४॥**
**द्विधा मरुवकः प्रोक्तो श्वेतश्चैव सितेतरः ।**
**श्वेतो भेषजकार्ये स्यादपरः शिवपूजने ॥१५५॥**
**मरुवः कटुतिक्तोष्णः कृमिकुष्ठविनाशनः ।**
**विड्बन्धाध्मानशूलघ्नो मान्द्यत्वग्दोषनाशनः ॥१५६॥**

(१) मरुव, (२) खरपत्र, (३) गन्धपत्र, (४) फणिज्जक, (५) बहुवीर्य, (६) शीतलक, (७) सुराह्व, (८) समीरण, (९) जम्बीर, (१०) प्रस्थकुसुम, (११) मरुवक, (१२) आजन्मसुरभिपत्र र (१३) मरीच : यी तेह्र नाम मरुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो र कालो गरी मरुवा दुई प्रकारको हुन्छ । सेतो ओखतीका लागि र कालो शिवको पूजा गर्न प्रयोग गरिन्छ । मरुवा पिरो, तीतो, उष्णवीर्यको तथा कीरा र कुष्ठ नाशक हुन्छ । यसले कब्जियत, आध्मान, शूल, कमजोर पाचनशक्तिको रोग र छालाका रोग नाश गर्दछ ।

## तुलसी विशेष (अर्जक)

**अर्जकः क्षुद्रतुलसी क्षुद्रपर्णी मुखार्जकः ।**
**उग्रगन्धश्च जम्बीरः कुठेरश्च कठिञ्जरः ॥१५७॥**



अर्जक, क्षुद्रतुलसी, क्षुद्रपर्णी, मुखार्जक, उग्रगन्ध, जम्बीर, कुठेर र कठिञ्जर : यी सानो जातको तुलसीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## तुलसी विशेष (सितार्जक)

**सितार्जकस्तु वैकुण्ठो वटपत्रः कुठेरकः ।**
**जम्बीरो गन्धबहुलः सुमुखः कटुपत्रकः ॥१५८॥**

सितार्जक, वैकुण्ठ, वटपत्र, कुठेरक, जम्बीर, गन्धबहुल, सुमुख र कटुपत्रक : यी सानो सेतो तुलसीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## तुलसी विशेष (कृष्णार्जक)

**कृष्णार्जकः कालमालो मालूकः कृष्णमालुकः ।**
**स्यात् कृष्णमल्लिका प्रोक्ता गरघ्नो वनबर्बरः ॥१५९॥**

कृष्णार्जक, कालमाल, मालूक, कृष्णमालुक, कृष्णमल्लिका, गरघ्न र वनबर्बर : यी कालो सानो

जातको तुलसीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### तीन थरी साना तुलसीका गुण (अर्जकत्रयगुण)

**त्रयोऽर्जकाः कटूष्णाः स्युः कफवातामयापहाः ।**
**नेत्रामयहरा रुच्याः सुखप्रसवकारकाः ॥१६०॥**

तीन थरी तुलसी पिरा, उष्णवीर्यका तथा कफविकार र वातविकार नाशक हुन्छन् । यिनले आँखाको रोग नाश गर्दछन्, रुची बढाउँदछन् र आनन्दसँग सुत्केरी गराउँदछन् ।

### वनबर्बरिका

**वनबर्बरिकाऽन्या तु सुगन्धिः सुप्रसन्नकः ।**
**दोषोत्क्लेशी विषघ्नश्च सुमुखः सूक्ष्मपत्रकः ॥**
**निद्रालुः शोफहारी च सुवक्त्रश्च दशाह्वयः ॥१६१॥**
**वनबर्बरिका चोष्णा सुगन्धा कटुका च सा ।**
**पिशाचवान्तिभूतघ्नी घ्राणसन्तर्पणी परा ॥१६२॥**



(१) वनबर्बरिका, (२) सुगन्धि, (३) सुप्रसन्नक, (४) दोषोत्क्लेशी, (५) विषघ्न, (६) सुमुख, (७) सूक्ष्मपत्रक, (८) निद्रालु, (९) शोफहारी र (१०) सुवक्त्र : यी दश नाम वनतुलसीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, सुगन्धी, पिरो तथा पिशाच, वाकवाकी र भूतबाधा नाशक हुन्छ । यसले नाकलाई पूर्णरूपमा सन्तुष्ट वा तृप्त पार्दछ ।

### गङ्गापत्री (?)

**गङ्गापत्री तु पत्री स्यात् सुगन्धा गन्धपत्रिका ।**
**गङ्गापत्री कटूष्णा च वातजिद्व्रणरोपणी ॥१६३॥**

पत्री, सुगन्धा र गन्धपत्रिका : यी गङ्गापत्री (?) का पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, वातविकारलाई जित्ने तथा  घाउ भर्ने गुणको हुन्छ ।

### लहराविशेष (पाची)

**पाची मरकतपत्री हरितलता हरितपत्रिका पत्री ।**
**सुरभिर्मल्लारिष्टा गारुत्मतपत्रिका चैव ॥१६४॥**

**पाची कटुतिक्तोष्णा सकषाया वातदोषहन्त्री च ।**
**ग्रहभूतविकारकारी त्वग्दोषप्रशमनी व्रणेषु हिता ॥१६५॥**

पाची, मरकतपत्री, हरितलता, हरितपत्रिका, पत्री, सुरभि, मल्लारिष्टा र गारुत्मतपत्रिका : यी पाची (?) का संस्कृत पर्यायवाची नामहरू हुन् । पाची पिरो, तीतो, उष्णवीर्यको र टर्रो हुन्छ । यसले वातविकार नाश गर्दछ । यसले ग्रहबाधा र भूतबाधा गर्दछ । पाचीले छालाका रोग निको पार्दछ र यो घाउखटिरामा हितकारी हुन्छ ।

## सुगन्धबाल (बालक)

**बालकं वारिपर्यायैरुक्तं ह्रीबेरकं तथा ।**
**केश्यं वज्रमुदीच्यञ्च पिङ्गं च ललनाप्रियम् ॥**
**बालञ्च कुन्तलोशीरं कचामोदं शशीन्दुधा ॥१६६॥**
**बालकं शीतलं तिक्तं पित्तवान्तितृषापहम् ।**
**ज्वरकुष्ठातिसारघ्नं केश्यं श्वित्रव्रणापनुत् ॥१६७॥**

(१) बालक, (२) वारि (जल)का पर्यायवाची शब्द, (३) ह्रीबेरक, (४) केश्य, (५) वज्र, (६) उदीच्य, (७) पिङ्ग, (८) ललनाप्रिय, (९) बाल, (१०) कुन्तलोशीर र (११) कचामोद : यी एघार नाम सुगन्धबालका संस्कृत पर्यायवाची नामहरू हुन् । सुगन्धबाल शीतवीर्यको, तीतो तथा पित्तविकार, वाकवाकी र तिर्खा नाशक हुन्छ । यसले ज्वर, कुष्ठ र अतिसारलाई नाश गर्दछ तथा कपाललाई फाइदा गर्दछ । यसले सेतो कुष्ठ र घाउखटिरा ठिक गर्दछ ।

## कालो बाबरी (बर्बर)

**बर्बरः सुमुखश्चैव गरघ्नः कृष्णबर्बरः ।**
**सुकन्दनो गन्धपत्रः पूतगन्धः सुरार्हकः ॥१६८॥**
**बर्बरः कटुकोष्णश्च सुगन्धिर्वान्तिनाशनः ।**
**विसर्पविषविध्वंसी त्वग्दोषशमनस्तथा ॥१६९॥**

बर्बर, सुमुख, गरघ्न, कृष्णबर्बर, सुकन्दन, गन्धपत्र, पूतगन्ध र सुरार्हक : यी कालो बाबरी (?) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, सुगन्धि र वाकवाकी नाशक हुन्छ । यसले विसर्प र विषविकार नाश गर्दछ तथा छालाका रोगलाई शान्त पार्दछ ।

## सुरपर्ण

सुरपर्णं देवपर्णं वीरपर्णं सुगन्धिकम् ।
मञ्चिपत्रं सूक्ष्मपत्रं देवार्हं गन्धपत्रकम् ॥१७०॥
कटूष्णं सुरपर्णञ्च क्रिमिश्वासबलासजित् ।
दीपनं कफवातघ्नं वर्ण्यं बालहितं तथा ॥१७१॥

सुरपर्ण, देवपर्ण, वीरपर्ण, सुगन्धिक, मञ्चिपत्र, सूक्ष्मपत्र, देवार्ह र गन्धपत्रक : यी सुरपर्णका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कीरा, दम र कफविकारलाई जित्ने गुणको हुन्छ । यो दीपनी, कफविकार नाशक, वातविकार नाशक, वर्ण-दायक र बालकका लागि हितकारी हुन्छ ।

## सिलाम (आरामशीतला)

आरामशीतला नन्दा शीतला सा सुनन्दिनी ।
रामा चैव महानन्दा गन्धाढ्यारामशीतला ॥१७२॥
आरामशीतला तिक्ता शीतला पित्तहारिणी ।
दाहशोषप्रशमनी विस्फोटव्रणरोपणी ॥१७३॥

आरामशीतला, नन्दा, शीतला, सुनन्दिनी, रामा, महानन्दा, गन्धाढ्या र रामशीतला : यी सिलामका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, शीतवीर्यको, पित्तविकार नाशक, डाह र सुजनलाई शान्त पार्ने तथा विस्फोट नाशक एवं घाउ भर्ने गुणको हुन्छ ।

## कमल

पाथोजं कमलं नभञ्च नलिनाम्भोजाम्बुजन्माम्बुजं
श्रीपद्माम्बुरुहाब्जपद्मजलजान्यम्भोरुहं सारसम् ।
पङ्केजं सरसीरुहं च कुटपं पाथोरुहं पुष्करं
वार्जं तामरसं कुशेशयकजे कञ्जारविन्दे तथा ॥१७४॥
शतपत्रं बिसकुसुमं सहस्रपत्रं महोत्पलं वारिरुहम् ।
सरसिजसलिलजपङ्केरुहराजीवानि वेदवह्निमितानि ॥१७५॥
कमलं शीतलं स्वादु रक्तपित्तश्रमार्तिनुत् ।
सुगन्धि भ्रान्तिसन्तापशान्तिदं तर्पणं परम् ॥१७६॥

(१) पाथोज, (२) कमल, (३) नभ, (४) नालिन, (५) अम्भोज, (६) अम्बुजन्मा, (७) अम्बुज, (८) श्री, (९) पद्मा, (१०) अम्बुरुह, (११) अब्ज, (१२) पद्म, (१३) जलजा, (१४) अम्भोरुह, (१५) सारस, (१६) पङ्केज, (१७) सरसीरुह, (१८) कुटप, (१९) पाथोरुह, (२०) पुष्कर, (२१) वार्ज, (२२) तामरस, (२३) कुशेशयकज, (२४) कञ्ज, (२५) अरविन्द, (२६) शतपत्र, (२७) बिसकुसुम, (२८) सहस्रपत्र, (२९) महोत्पल, (३०) वारिरुह, (३१) सरसिज, (३२) सलिलज, (३३) पङ्केरुह र (३४) राजीव : यी चौंतीस नाम कमलका संस्कृत पर्यायवाची नामहरू हुन् । कमल शीतवीर्यको, स्वादिलो तथा रक्तविकार, पित्तविकार र थकाई नाशक हुन्छ । यो सुगन्धी तथा भ्रम र सन्तापलाई शान्त पार्ने एवं अत्यन्त तृप्तिदायक हुन्छ ।

### सेतो कमल (पुण्डरीक)

**पुण्डरीकं श्वेतपत्रं सिताब्जं श्वेतवारिजम् ।**
**हरिनेत्रं शरत्पद्मं शारदं शम्भुवल्लभम् ॥१७७॥**
**पुण्डरीकं हिमं तिक्तं मधुरं पित्तनाशनम् ।**
**दाहास्रश्रमदोषघ्नं पिपासादोषनाशनम् ॥१७८॥**

पुण्डरीक, श्वेतपत्र, सिताब्ज, श्वेतवारिज, हरिनेत्र, शरत्पद्म, शारद र शम्भुवल्लभ : यी सेतो कमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कमल शीतवीर्यको, तीतो, गुलियो र पित्तविकार नाशक हुन्छ । यसले डाह, रक्तविकार, थकाई र तिर्खारोग नाश गर्दछ ।

### रातो कमल (कोकनद)

**कोकनदमरुणकमलं रक्ताम्भोजं च शोणपद्मं च ।**
**रक्तोत्पलमरविन्दं रविप्रियं रक्तवारिजं वसवः ॥१७९॥**
**कोकनदं कटुतिक्तं मधुरं शिशिरं च रक्तदोषहरम् ।**
**पित्तकफवातशमनं सन्तर्पणकारणं वृष्यम् ॥१८०॥**

(१) कोकनद, (२) अरुणकमल, (३) रक्ताम्भोज, (४) शोणपद्म, (५) रक्तोत्पल, (६) अरविन्द, (७) रविप्रिय र (८) रक्तवारिज : यी आठ नाम रातो कमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कमल पिरो, तीतो, गुलियो, शीतवीर्यको तथा रक्तविकार नाशक हुन्छ । यसले पित्तविकार, कफविकार र वातविकारलाई शान्त पार्दछ । यो तृप्तिदायक र वीर्यवर्धक हुन्छ ।

### नीलकमल

**उत्पलं नीलकमलं नीलाब्जं नीलपङ्कजम् ।**

**नीलपद्म च बाणाह्व नीलादिकमलाभिधम्॥१८१॥**
**नीलाब्जं शीतलं स्वादु सुगन्धि पित्तनाशकृत् ।**
**रुच्यं रसायने श्रेष्ठं देहदार्ढ्यं च कैश्यदम्॥१८२॥**

(१) उत्पल, (२) नीलकमल, (३) नीलाब्ज, (४) नीलपङ्कज र (५) नीलपद्म : यी पाँच नाम नीलकमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कमल शीतवीर्यको, गुलियो, सुगन्धी र पित्तविकार नाशक हुन्छ । यो रुचीप्रद, उत्तम रसायनी, शरीरलाई स्थिर राख्ने र कपालका लागि हितकर हुन्छ ।

### अन्य कमलका गुण

**ईषत्श्वेतं पद्मं नलिनं च तदुक्तमीषदारक्तम् ।**
**उत्पलमीषन्नीलं त्रिविधमितीदं भवेत् कमलम्॥१८३॥**
**उत्पलादिरयं दाहरक्तपित्तप्रसादनः ।**
**पिपासादाहहृद्रोगच्छर्दिमूर्छाहरो गणः ॥१८४॥**

हल्का सेतो रङको कमललाई पद्म, केही रातो कमललाई नलिन र केही नीलो देखिने कमललाई उत्पल भनिन्छ । यसरी कमल तीन थरिका हुन्छन् । यी उत्पल आदि कमलले डाह र रक्तपित्त नाश गर्दछन् । यी सबै कमलले तिर्खा, डाह, मुटुका रोग, वाकवाकी र बेहोस हुने रोग पनि नाश गर्दछन् ।

### कमलको पूरा बोट (पद्मिनी)

**पद्मिनी नलिनी प्रोक्ता कूटपिन्यब्जिनी तथा ।**
**इत्थं तत् पद्मपर्यायनाम्नी ज्ञेया प्रयोगतः ॥१८५॥**
**पद्मिनी मधुरा तिक्ता कषाया शिशिरा परा ।**
**पित्तकृमिशोषवान्तिभ्रान्तिसन्तापशान्तिकृत्॥१८६॥**

पद्मिनी, नलिनी, कूटपिनी र अब्जिनी : यी पद्मिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । पद्मिनी गुलियो, तीतो, टर्रो र अति नै शीतवीर्यको हुन्छ । यसले पित्तविकार, कीरा, सुजन, वाकवाकी, भ्रम र डाहलाई शान्त पार्दछ ।

### कमलको बीज (पद्मबीज)

**पद्मबीजन्तु पद्माक्षं गालोढ्यं कन्दली च सा ।**

**भेडा क्रौञ्चादनी क्रौञ्चा श्यामा स्यात् पद्मकर्कटी ॥१८७॥**
**पद्मबीजं कटु स्वादु पित्तच्छर्दिहरं परम् ।**
**दाहास्रदोषशमनं पाचनं रुचिकारकम् ॥१८८॥**

पद्मबीज, पद्माक्ष, गालोढ्य, कन्दली, भेडा, क्रौञ्चादनी, क्रौञ्चा, श्यामा र पद्मकर्कटी : यी कमलको बीजका संस्कृत पर्यायवाची नामहरू हुन् । कमलको बीज पिरो, गुलियो तथा विशेषतः पित्तविकार र वाकवाकी नाशक हुन्छ । यसले डाह र रक्तविकारलाई शान्त पार्दछ । यो पाचनी र रुचिप्रद हुन्छ ।

### कमलको डाँठ (मृणाल)

**मृणालं पद्मनालञ्च मृणाली च मृणालिनी ।**
**बिसञ्च च पद्मतन्तुश्च बिसिनी नलिनीरुहम् ॥१८९॥**
**मृणालं शिशिरं तिक्तं कषायं पित्तदाहजित् ।**
**मूत्रकृच्छ्रविकारघ्नं रक्तवान्तिहरं परम् ॥१९०॥**

मृणाल, पद्मनाल, मृणाली, मृणालिनी, बिस, पद्मतन्तु, बिसिनी र नलिनीरुह : यी कमलको डाँठका संस्कृत पर्यायवाची नामहरू हुन् । कमलको डाँठ शीतवीर्यको, तीतो, टर्रो तथा पित्तविकार र डाहलाई जित्ने गुणको हुन्छ । यसले मूत्रकृच्छ्रका विकार, रक्तविकार र वाकवाकी नाश गर्दछ ।

### कमलको गानो (शालूक)

**पद्मकन्दस्तु शालूकं पद्ममूलं कटाह्वयम् ।**
**शालीनं च जलालूकं स्यादित्येवं षडाह्वयम् ॥१९१॥**
**शालूकं कटु विष्टम्भि रूक्षं रुच्यं कफापहम् ।**
**कषायं कासपित्तघ्नं तृष्णादाहनिवारणम् ॥१९२॥**

(१) पद्मकन्द, (२) शालूक, (३) पद्ममूल, (४) कटाह्वय, (५) शालीन र (६) जलालूक : यी छ नाम कमलको गानोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, विष्टम्भि, रुखो, रुचिप्रद र कफविकार नाशक हुन्छ । यो टर्रो तथा खोकी, पित्तविकार, तिर्खा डाह नाशक पनि हुन्छ ।

### कमलको केसर (किञ्जल्क)

**किञ्जल्कं मकरन्दञ्च केसरं पद्मकेसरम् ।**
**किञ्जं पीतं परागं च तुङ्गं चाम्पेयकं नव ॥१९३॥**

**किञ्जल्कं मधुरं रूक्षं कटु चास्यव्रणापहम् ।**
**शिशिरं रुच्यपित्तघ्नं तृष्णादाहनिवारणम् ॥१९४॥**

(१) किञ्जल्क, (२) मकरन्द, (३) केसर, (४) पद्मकेसर, (५) किञ्ज, (६) पीत, (७) पराग, (८) तुङ्ग र (९) चाम्पेयक : यी नौ नाम कमलको केसरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो केसर गुलियो, रुखो, पिरो तथा मुखका घाउ नाशक हुन्छ । यो शीतवीर्यको, रुचिप्रद तथा पित्तविकार, तिर्खारोग र डाह नाशक हुन्छ ।

### राती फुल्ने नीलकमल (उत्पल)

**अनूष्णं चोत्पलं चैव रात्रिपुष्पं जलाह्वयम् ।**
**हिमाब्जं शीतजलजं निशाफुल्लञ्च सप्तधा ॥१९५॥**
**उत्पलं शिशिरं स्वादु पित्तरक्तार्तिदोषनुत् ।**
**दाहश्रमवमिभ्रान्तिक्रिमिज्वरहरं परम् ॥१९६॥**

(१) अनूष्ण, (२) उत्पल, (३) रात्रिपुष्प, (४) जलाह्वय, (५) हिमाब्ज, (६) शीतजलज र (७) निशाफुल्ल : यी सात नाम नीलकमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, गुलियो तथा पित्तविकार र रक्तविकार नाशक हुन्छ । यसले विशेषतः डाह, थकाई, वाकवाकी, भ्रम, कीरा र ज्वर नाश गर्दछ ।

### सेतो चन्द्रकमल (कुमुद)

**धवलोत्पलन्तु कुमुदं कह्लारं कैरवं च शीतलकम् ।**
**शशिकान्तमिन्दुकमलं चन्द्राब्जं चन्द्रिकाऽम्बुजं च नव ॥१९७॥**
**कुमुदं शीतलं स्वादु पाके तिक्तं कफापहम् ।**
**रक्तदोषहरं दाहश्रमपित्तप्रशान्तिकृत् ॥१९८॥**

(१) धवलोत्पल, (२) कुमुद, (३) कह्लार, (४) कैरव, (५) शीतलक, (६) शशिकान्त, (७) इन्दुकमल, (८) चन्द्राब्ज, (९) चन्द्रिकाम्बुज : यी नौ नाम सेतो चन्द्रकमलका संस्कृत पर्यायवाची नामहरू हुन् । कुमुद शीतवीर्यको, गुलियो, पचेपछि तीतो र कफविकार नाशक हुन्छ । यसले रक्तविकार नाश गर्दछ तथा डाह, थकाई र पित्तविकारलाई शान्त पार्दछ ।

### नीलोत्पल

**नीलोत्पलमुत्पलकं कुवलयमिन्दीवरञ्च कन्दोत्थम् ।**

**सौगन्धिकं सुगन्धं कुड्मलकं चासितोत्पलं नवधा ॥१९९॥**
**नीलोत्पलमतिस्वादु शीतं सुरभि सौख्यकृत् ।**
**पाके तु तिक्तमत्यन्तं रक्तपित्तापहारकम् ॥२००॥**

नीलोत्पल, उत्पलक, कुवलय, इन्दीवर, कन्दोत्थ, सौगन्धिक, सुगन्ध, कुड्मलक र असितोत्पल : यी नीलकमलका संस्कृत पर्यायवाची नामहरू हुन् । नीलकमल अति गुलियो, शीतवीर्यको, सुगन्धी र सुखदायक हुन्छ । यो पचेपछि तीतो हुन्छ । यो कमलले उत्तम किसिमले रक्तपित्त नाश गर्दछ ।

## उत्पलिनी

**उत्पलिनी कैरविणी कुमुद्वती कुमुदिनी च चन्द्रेष्टा ।**
**कुवलयिनीन्दीवरिणी नीलोत्पलिनी च विज्ञेया ॥२०१॥**
**उत्पलिनी हिमतिक्ता रक्तामयहारिणी च पित्तघ्नी ।**
**तापकफकासतृष्णाश्रमवमिशमनी च विज्ञेया ॥२०२॥**

उत्पलिनी, कैरविणी, कुमुद्वती, कुमुदिनी, चन्द्रेष्टा, कुवलयिनी, इन्दीवरिणी र नीलोत्पलिनी : यी उत्पलिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो तथा रक्तविकार र पित्तविकार नाशक हुन्छ । यसले डाह, कफविकार, खोकी, तिर्खा, थकाई र वाकवाकीलाई शान्त पार्दछ ।

## फूलको रस (पुष्पद्रव)

**पुष्पद्रवः पुष्पसारः पुष्पस्वेदश्च पुष्पजः ।**
**पुष्पनिर्यासकश्चैव पुष्पाम्बुजः षडाह्वयः ॥२०३॥**
**पुष्पद्रवः सुरभिशीतकषायगौल्यो दाहश्रमातिवमिमोहमुखामयघ्नः ।**
**तृष्णार्तिपित्तकफदोषहरः सरश्च सन्तर्पणश्चिरमरोचकहारकश्च ॥२०४॥**

(१) पुष्पद्रव, (२) पुष्पसार, (३) पुष्पस्वेद, (४) पुष्पज, (५) पुष्पनिर्यासक र (६) पुष्पाम्बुज : यी छ नाम फूलको रसका संस्कृत पर्यायवाची नामहरू हुन् । फूलको रस सुगन्धी, शीतवीर्यको, टर्रो, गुलियो तथा डाह, थकाई, वाकवाकी, मोह र मुखका रोग नाशक हुन्छ । यसले तिर्खारोग, पित्तविकार र कफविकार नाश गर्दछ तथा मलमूत्रलाई तलतिर सार्दछ । यसले धेरै बेरसम्म तृप्त पार्नुका साथै अरुची पनि नाश गर्दछ ।

चमेली आदिको बास्ना आउने समय

जाती भाति मृदुर्मनोज्ञमधुरामोदा मुहूर्तद्वयं
द्वैगुण्येन च मल्लिका मदकरी गन्धाधिका यूथिका ।
एकाहं नवमालिका मदकरं चाह्नां त्रयं चम्पकं
तीव्रामोदमथाष्टवासरमितामोदान्विता केतकी ॥२०५॥

मनलाई मन्द तरिकाले आनन्द दिने किसिमले चमेली दुई मुहूर्तसम्म बास्ना आउँदछ । बेली त्यसको दोब्बर समयसम्म बास्ना आउँदछ । जूही त्योभन्दा केही बढीसमयसम्म र ठुलो नेवारी फूल एक दिनसम्म बास्ना आउँदछ । चाँप तीन दिनसम्म र केतकी कडा आनन्द दिने गरी आठ दिनसम्म बास्ना आउँदछ ।

वर्गप्रशस्ति

इत्थं नानाप्रथितसुमनःपत्रपद्माभिधान
संस्थानोक्तिप्रगुणिततया तद्गुणाख्याप्रवीणम् ।
वाचोयुक्तिस्थिरपरिमलं वर्गमेनं पठित्वा
नित्यामोदैर्मुखसरसिजं वासयत्याशु वैद्यः ॥२०६॥

एउटा चिकित्सकलाई आफ्नो विषयमा पूर्ण जानकार बनाउने गरी यस अध्यायमा धेरै पात, फूल र कमलका बारेमा समानार्थी शब्द, वासस्थान र गुणसहित वर्णन गरिएको छ । यसरी यस अध्यायमा बताइएका कुराको ज्ञान पाएपछि एक चिकित्सक गहिरो ज्ञान सहितका आफ्ना उत्कृष्ट विचारहरू फैलाउन सक्दछ ।

स्थैर्यं शैलशिलोपमान्यपि शनैरासाद्य तद्भावनां
भेद्यत्वं यमिनां मनांस्यपि ययुः पुष्पाशुगस्याशुगैः ।
तेषां भूषयतां सुरादिकशिरः पत्रप्रसूनात्मनां
वर्गोऽयं वसतिर्मता सुमनसामुत्तंसवर्गाख्यया ॥२०७॥

पहाडका चट्टानजस्तै कामदेवका बाणरूपी फूलहरू पनि आफ्ना प्रभावका कारण अटल हुने गर्दछन् । यो अध्याय ती फूलहरूको वासस्थान हो जुन फूलहरू देवताका शिरमा सजाइने गरिन्छ । यसैले यो अध्यायलाई उत्तंस-वर्ग भनिएको हो । अर्थात् यो अध्याय मुकुटमा जडिने गहना जस्तै हो ।

लोकान् स्पर्शनयोगतः प्रसृमराण्यामोदयन्त्यञ्जसा

**प्रोत्फुल्लानि च यद्यशांसि विशदान्यत्तंसयन्ते दिशः ।**
**तस्यायं दशमः कृतौ स्थितिमगाद्वर्गो नृसिंहेशितुः**
**सूरीन्दोः करवीरकादिरभिधासम्भारचूडामणौ ॥२०८॥**

यसरी यहाँ नरहरीद्वारा अध्याय दश उपस्थित गराइएको छ । जसको पूर्णरूपमा फुलेको ज्ञानको प्रसिद्धिरूपी बास्नाले सारा संसारको कुनाकुनालाई सुगन्धित बनाएको छ अनि जसको ज्ञानरूपी स्पर्शले मानिसहरूका सुस्त दिमागलाई उत्साहजनक तरिकाले उज्यालो बनाएको छ । विद्वानमा अग्रणी र बहुमुखी प्रतिभाका धनी श्री नरहरी पण्डितद्वारा लिखित अभिधान चूडामणि नामक ग्रन्थमा करवीरादि वर्ग नामक दशौं वर्ग पूर्ण भयो ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ करवीरादिनाम दशमो वर्गः ॥१०॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत करवीरादि नामक दशौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१०।**

## आम्रादिवर्ग

### आम्रादिवर्ग द्रव्य

आम्राः पञ्चविधाः प्रोक्ता जम्बूश्चैव चतुर्विधा ।
पनसः कदलो चाब्धिः नारिकेलद्वयं तथा ॥१॥
खर्जूरो पञ्चधा चैव चारो भल्लातरायणी ।
दाडिमं तिन्दुकौ चाथो अक्षोटः पीलुको द्विधा ॥२॥
पारेवते मधूकं तु द्विधा भव्यारुके क्रमात्
द्राक्षा त्रिधाऽथ कर्मारः परुषः पिप्पलो वटः ॥३॥
वटी चाश्वत्थिका प्लक्षस्तथा चोदुम्बरस्त्रिधा ।
तत्त्वचा बदरश्चाब्धि बीजपूरं त्रिधा मतम् ॥४॥
आमलक्यो द्विधा चैव चिञ्चा चिञ्चारसस्तथा ।
आम्रातकोऽथ नारङ्गो निम्बूर्जम्बीरकद्वयम् ॥५॥
कपित्थस्तुम्बरश्चाथ रुद्राक्षो बिल्वशल्लकी ।
कतकः कर्कटश्चैव द्विधा श्लेष्मातकस्तथा ॥६॥
मुष्ककः करमर्दश्च तथा तेजःफलस्तथा ।

विकण्टकः शिवा सप्ताप्यक्षः पूगोऽष्टधा स्मृतः ॥७॥
सप्तधा नागवल्ली स्याच्चूर्णं चैवाष्टधा स्मृतम् ।
उक्ता आम्रादिके वर्गे शून्यचन्द्रेन्दुसङ्ख्यया ॥८॥

यो आम्रादिक वर्गमा पाँच थरी आँप, चार थरी जम्बू, पनस, चार थरी कदली, दुई थरी नरिवल, पाँच थरी खर्जूर, चार, भल्लातक, राजादनी, दाडिम, दुई थरी तिन्दुक, अक्षोट, दुई थरी पीलुक, दुई थरी पारेवत, दुई थरी मधूक, भव्य, आरुक, तीन थरी द्राक्षा, कर्मार, परुष, पिप्पल, वट, वटी, अश्वत्थिका, प्लक्ष, तीन थरी उदुम्बर, त्यसको त्वचा, चार थरी बदर, तीन थरी बीजपूर, दुई थरी आमलकी, चिञ्चा, चिञ्चारस, आम्रातक, नारङ्ग, निम्बू, दुई थरी जम्बीरक, कपित्थ, तुम्बर, रुद्राक्ष, बिल्व, शल्लकी, कतक, कर्कट, दुई थरी श्लेष्मातक, मुष्कक, करमर्द, तेजःफल, विकण्टक, सात थरी शिवा, अक्ष, आठ थरी पूग, सात थरी नागवल्ली र आठ थरी चूर्ण गरी जम्मा एक सय दश वनस्पतिका बारेमा बताइएको छ ।

### आँप (आम्र)

आम्रः कामशरश्चूतो रसालः कामवल्लभः ।
कामाङ्गः सहकारश्च कीरेष्टो माधवद्रुमः ॥९॥

**भृङ्गाभीष्टः सीधुरसो मधूली कोकिलोत्सवः ।**
**वसन्तदूतोऽम्लफलो मदाढ्यो मन्मथालयः ॥१०॥**
**मध्वावासः सुमदनः पिकरागो नृपप्रियः ।**
**प्रियाम्बुः कोकिलावासः स प्रोक्तस्त्रिकराह्वयः ॥११॥**
**आम्रः कषायाम्लरसः सुगन्धिः कण्ठामयघ्नोऽग्निकरश्च बालः ।**
**पित्तप्रकोपानिलरक्तदोषप्रदः पटुत्वादि रुचिप्रदश्च ॥१२॥**

(१) आम्र, (२) कामशर, (३) चूत, (४) रसाल, (५) कामवल्लभ, (६) कामाङ्ग, (७) सहकार, (८) कीरेष्ट, (९) माधवद्रुम, (१०) भृङ्गाभीष्ट, (११) सीधुरस, (१२) मधूली, (१३) कोकिलोत्सव, (१४) वसन्तदूत, (१५) अम्लफल, (१६) मदाढ्य, (१७) मन्मथालय, (१८) मध्वावास, (१९) सुमदन, (२०) पिकराग, (२१) नृपप्रिय, (२२) प्रियाम्बु र (२३) कोकिलावास : यी तेईस नाम आँपका संस्कृत पर्यायवाची नामहरू हुन् । आँप टर्रो, अमिलो र सुगन्धी हुन्छ । यसले घाँटीका रोग नाश गर्दछ, कलिलो आँपले पाचनशक्ति बढाउँदछ तर सँगसँगै पित्तविकार, वातविकार र रक्तविकार पनि बढाउँदछ । यसमा हुने नुनिलोपनले रुची बढाउँदछ ।

**बालं पित्तानिलकफकरं तच्च बद्धास्थि तादृक्-**
**पक्वं दोषत्रितयशमनं स्वादु पुष्टिं गुरुञ्च ।**

**दत्ते धातुप्रचयमधिकं तर्पणं कान्तिकारि**
**ख्यातं तृष्णाश्रमशमकृतौ चूतजातं फलं स्यात् ॥१३॥**

कलिलो आँपले पित्तविकार, वातविकार र कफविकार गर्दछ । छिप्पिएको आँपमा पनि यिनै गुण हुन्छन् । पाकेको आँपले भने त्रिदोष नाश गर्दछ । पाकेको आँप गुलियो, पुष्टिदायक र पचाउन कठिन हुन्छ । यसले अत्यधिक मात्रामा शरीरका धातु बढाउँदछ, तृप्त पार्दछ र शरीरमा कान्ति लेराउँदछ । यसले तिर्खा र थकाई पनि नाश गर्दछ ।

### बिज्नु (कोशाम्र)

**कोशाम्रश्च घनस्कन्धो वनाम्रो जन्तुपादपः ।**
**क्षुद्राम्रश्चेति रक्ताम्रो लाक्षावृक्षः सुरक्तकः ॥१४॥**
**कोशाम्रमम्लमनिलापहरं कफार्तिपित्तप्रदं गुरु विदाहविशोफकारि ।**
**पक्वं भवेन् मधुरमीषदपारमम्लं पट्वादियुक्तरुचिदीपनपुष्टिबल्यम् ॥१५॥**

कोशाम्र, घनस्कन्ध, वनाम्र, जन्तुपादप, क्षुद्राम्र, रक्ताम्र, लाक्षावृक्ष र सुरक्तक : यी कोशाम्रका संस्कृत पर्यायवाची नामहरू हुन् । यो आँप अमिलो, वातविकार नाशक, कफविकार र पित्तविकार

बढाउने, पचाउन कठिन, डाहकारी र सुजन गराउने गुणको हुन्छ । पाकेको कोशाम्र केही गुलियो भएपनि धेरै अमिलो हुन्छ । यसमा नुन आदि मिसाएमा (वा अचार बनाएमा) यो रुचिप्रद, दीपनी, पुष्टिदायक र बलदायक हुन्छ ।

### कलमी आँप (राजाम्र)

**राजाम्रोऽन्यो राजफलः स्मराम्रः कोकिलोत्सवः ।**
**मधुरः कोकिलानन्दः कामेष्टो नृपवल्लभः ॥१६॥**

राजाम्र, राजफल, स्मराम्र, कोकिलोत्सव, मधुर, कोकिलानन्द, कामेष्ट र नृपवल्लभ : यी कलमी आँपका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मालदह आँप (महाराजाम्र)

**अन्यो महाराजचूतो महाराजाम्रकस्तथा ।**
**स्थूलाम्रो मन्मथावासः कङ्को नीलकपित्थकः ॥१७॥**
**कामायुधः कामफलो राजपुत्रो नृपात्मजः ।**
**महाराजफलः कामो महाचूतस्त्रयोदश ॥१८॥**

(१) महाराजचूत, (२) महाराजाम्रक, (३) स्थूलाम्र, (४) मन्मथावास, (५) कङ्क, (६) नीलकपित्थक, (७) कामायुध, (८) कामफल, (९) राजपुत्र, (१०) नृपात्मज, (११) महाराजफल, (१२) काम र (१३) महाचूत : यी तेह्र नाम मालदह आँपका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### आँपविशेष (मध्वाम्र)

**तस्यापि श्रेष्ठतोऽन्याम्रो रसालो बद्धपूर्वकः ।**
**ज्ञेयश्चक्रलताम्रश्च मध्वाम्रः सितजाम्रकः ॥**
**वनेज्यो मन्मथानन्दो मदनेच्छाफलो मुनिः ॥१९॥**

(१) बद्धरसाल, (२) चक्रलताम्र, (३) मध्वाम्र, (४) सितजाम्रक, (५) वनेज्य, (६) मन्मथानन्द र (७) मदनेच्छाफल : यी सात नाम मालदह आँपभन्दा पनि श्रेष्ठ आँपविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## कलमी आँपका गुण (राजाम्रगुण)

**राजाम्राः कोमलाः सर्वे कट्वम्लाः पित्तदाहदाः ।**
**सुपक्वाः स्वादुमाधुर्याः पुष्टिवीर्यबलप्रदाः ॥२०॥**
**राजाम्रेषु त्रिषु प्रोक्तं साम्यमेव रसाधिकम् ।**
**गुणाधिकं तु विज्ञेयं पर्यायादुत्तरोत्तरम् ॥२१॥**
**बालं राजफलं कफास्रपवनश्वासार्तिपित्तप्रदं**
**मध्यं तादृशमेव दोषबहुलं भूयः कषायाम्लकम् ।**
**पक्वश्चेन्मधुरं त्रिदोषशमनं तृष्णाविदाहश्रम-**
**श्वासारोचकमोचकं गुरु हिमं वृष्यातिचूताह्वयम् ॥२२॥**

सबै खालका कलमी आँप (कलमी, महाराजाम्र र मध्वाम्र) नरम, पिरा, अमिला, पित्तविकार गर्ने र डाहकारी हुन्छन् । राम्ररी पाकेका यी आँप गुलिया, मिठा तथा पुष्टिदायक, वीर्यवर्धक र बलवर्धक हुन्छन् । माथि बताइएका तीन प्रकारका कलमी आँप रसमा तलमाथि भएपनि समान खालका हुन्छन् । राजाम्र, महाराजाम्र र बद्धरसाल क्रमशः बढी गुनिला हुन्छन् । कलिला कलमी आँपले कफविकार, रक्तविकार, वातविकार, दम र पित्तविकार बढाउँदछ । छिप्पिएका यी आँपमा पनि ककलिलोमा जस्तै दोष बढी हुन्छ । यी आँप टर्रा र अमिला हुन्छन् । यी आँप पाकेका छन् भने गुलिया, त्रिदोषनाशक तथा तिर्खारोग, डाह, थकाई, दम र अरुची नाशक हुन्छन् । यी पचाउन कठिन, शीतवीर्यका र अति वीर्यवर्धक हुन्छन् ।



### आँपका अन्य भागका गुण

**आम्रत्वचा कषाया च मूलं सौगन्धि तादृशम् ।**
**रुच्यं सङ्ग्राहि शिशिरं पुष्पं तु रुचिदीपनम् ॥२३॥**

आँपको बोक्रो टर्रो र जरा सुगन्धी हुन्छ । यी रुचिवर्धक, ग्राही र शीतवीर्यका हुन्छन् । आँपको फूल रुचीवर्धक र दीपनी हुन्छ ।

### जामुन (जम्बू)

**जम्बूस्तु सुरभिपत्रा नीलफला श्यामला महास्कन्धा ।**
**राजार्हा राजफला शुकप्रिया मेघमोदिनी नवाह्वा ॥२४॥**
**जम्बूः कषायमधुरा श्रमपित्तदाहकण्ठार्तिशोषशमनी क्रिमिदोषहन्त्री ।**
**श्वासातिसारकफकासविनाशनी च विष्टम्भिनी भवति रोचनपाचनी च ॥२५॥**

(१) जम्बू, (२) सुरभिपत्रा, (३) नीलफला, (४) श्यामला, (५) महास्कन्धा, (६) राजार्हा, (७) राजफला, (८) शुकप्रिया र (९) मेघमोदिनी : यी नौ नाम जामुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । जामुनु टर्रो, गुलियो तथा थकाई, पित्तविकार, डाह, घाँटीका रोग र सुजनलाई शान्त पार्ने गुणको हुन्छ । यसले कीराजन्य विकार, दम, अतिसार, कफविकार र खोकी नाश गर्दछ । यो कब्जियत गराउने, रोचनी र पाचनी हुन्छ ।

### फणिर (महाजम्बू)

**महाजम्बू राजजम्बूः स्वर्णमाता महाफला ।**
**शुकप्रिया कोकिलेष्टा महानीला बृहत्फला ॥२६॥**
**महाजम्बूरुष्णा समधुरकषाया श्रमहरा**
**निरस्यत्यास्यस्थं झटिति जडिमानं स्वरकरी ।**
**विधत्ते विष्टम्भं शमयति च शोषं वितनुते**
**श्रमातीसारार्तिश्वसितकफकासप्रशमनम् ॥२७॥**

महाजम्बू, राजजम्बू, स्वर्णमाता, महाफला, शुकप्रिया, कोकिलेष्टा, महानीला र बृहत्फला : यी नाम फणिरका संस्कृत पर्यायवाची नामहरू हुन् । फणिर उष्णवीर्यको, गुलियो, टर्रो र थकाई नाशक हुन्छ । यसले मुखको लाटोपन वा रस थाहा नपाउने अवस्थालाई तुरुन्त ठिक गर्दछ र स्वर खुलाउँदछ । यसले कब्जियत गराउँदछ र शरीरको सुजनलाई बसाउँदछ । फणिरले थकाई र अतिसारको पीडा, दम, कफविकार र खोकीलाई शान्त पार्दछ ।

### काठे जामनु (काकजम्बू)

**काकजम्बूः काकफला नादेयी काकवल्लभा ।**
**भृङ्गेष्टा काकनीला च ध्वाङ्क्षजम्बूर्धनप्रिया ॥२८॥**
**काकजम्बूः कषायाम्ला पाके तु मधुरा गुरुः ।**
**दाहश्रमातिसारघ्नी वीर्यपुष्टिबलप्रदा ॥२९॥**

काकजम्बू, काकफला, नादेयी, काकवल्लभा, भृङ्गेष्टा, काकनीला, ध्वाङ्क्षजम्बू र धनप्रिया : यी काठे जामुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो जामुनु टर्रो, अमिलो र पाकेपछि (वा पचेपछि) गुलियो हुन्छ । काठेजामुनु पचाउन कठिन तथा डाह, थकाई र अतिसार नाशक हुन्छ । यसले वीर्य, पुष्टि र बल दिन्छ ।

## भूमिजम्बू

अन्या च भूमिजम्बूर्ह्रस्वफला भृङ्गवल्लभा ह्रस्वा ।
भूजम्बूर्भ्रमरेष्टा पिकभक्षा काष्ठजम्बूश्च ॥३०॥
भूमिजम्बूः कषाया च मधुरा श्लेष्मपित्तनुत् ।
हृद्या सङ्ग्राहिहृत्कण्ठदोषघ्नी वीर्यपुष्टिदा ॥३१॥

भूमिजम्बू, ह्रस्वफला, भृङ्गवल्लभा, ह्रस्वा, भूजम्बू, भ्रमरेष्टा, पिकभक्षा र काष्ठजम्बू : यी भुइँजामुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । भुइँजामुनु टर्रो र गुलियो हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । यो मुटुका लागि हितकर, ग्राही, मुटु र घाँटीका रोग नाशक तथा वीर्यवर्धक र पुष्टिदायक हुन्छ ।

## कटहर (पनस)

पनसस्तु महासर्जः फलिनः फलवृक्षकः ।
स्थूलः कण्टफलश्चैव स्यान्मूलफलदः स्मृतः ॥
अपुष्पफलदः पूतफलो ह्यङ्कमितस्तथा ॥३२॥
पनसं मधुरं सुपिच्छिलं गुरु हृद्यं बलवीर्यवृद्धिदम् ।
श्रमदाहविशोषनाशनं रुचिकृद्ग्राहि च दुर्जरं परम् ॥३३॥
ईषत्कषायं मधुरं तद्बीजं वातलं गुरु ।
तत्फलस्य विकारघ्नं रुच्यं त्वग्दोषनाशनम् ॥३४॥
बालं तु नीरसं हृद्यं मध्यपक्वं तु दीपनम् ।
रुचिदं लवणाद्युक्तं पनसस्य फलं स्मृतम् ॥३५॥

(१) पनस, (२) महासर्ज, (३) फलिन, (४) फलवृक्षक, (५) स्थूल, (६) कण्टफल, (७) मूलफलद, (८) अपुष्पफलद र (९) पूतफल : यी नौ नाम कटहरका संस्कृत पर्यायवाची नामहरू हुन् । कटहर गुलियो, लेस्याइलो, पचाउन कठिन, मुटुका लागि हितकर तथा बल एवं वीर्य बढाउने गुणको हुन्छ । यसले थकाई, डाह र सुजन नाश गर्दछ । यो रुचिप्रद, ग्राही र अति नै ढिलो पच्ने गुणको हुन्छ । कटहर थोरै टर्रो र गुलियो हुन्छ । यसका गेडाले वातविकार गर्दछ र पचाउन कठिन हुन्छ । कटहरको फलले विकार नाश गर्दछ, रुचि जगाउँदछ र छालाको रोग नाश गर्दछ । कलिलो कटहर रसहीन हुन्छ । यो मुटुका लागि हितकर हुन्छ । छिप्पिएको कटहर दीपनी हुन्छ । कटहरको फललाई रुचिप्रद र नुनिलो रसले युक्त फल भनी बताइएको छ ।

## केरा (कदली)

**कदली सुफला रम्भा सुकुमारा सकृत्फला ।**
**मोचा गुच्छफला हस्तिविषाणी गुच्छदन्तिका ॥३६॥**
**काष्ठीरसा च निःसारा राजेष्टा बालकप्रिया ।**
**ऊरुस्तम्भा भानुफला वनलक्ष्मीश्च षोडश ॥३७॥**
**बालं फलं मधुरमल्पतया कषायं**
**पित्तापहं शिशिररुच्यमथापि नालम् ।**
**पुष्पं तदप्यनुगुणं कृमिहारि कन्दं**
**पर्णं च शूलशमकं कदलीभवं स्यात् ॥३८॥**
**रम्भापक्वफलं कषायमधुरं बल्यञ्च शीतं तथा**
**पित्तं चास्रविमर्दनं गुरुतरं पथ्यं न मन्दानले ।**
**सद्यः शुक्रविवृद्धिदं क्लमहरं तृष्णापहं कान्तिदं**
**दीप्ताग्नौ सुखदं कफामयकरं सन्तर्पणं दुर्जरम् ॥३९॥**

(१) कदली, (२) सुफला, (३) रम्भा, (४) सुकुमारा, (५) सकृत्फला, (६) मोचा, (७) गुच्छफला, (८) हस्तिविषाणी, (९) गुच्छदन्तिका, (१०) काष्ठीरसा, (११) निस्सारा, (१२) राजेष्टा, (१३) बालकप्रिया, (१४) ऊरुस्तम्भा, (१५) भानुफला र (१६) वनलक्ष्मी : यी सोह्र नाम केराका संस्कृत पर्यायवाची नामहरू हुन् । कलिलो केराको फल थोरै गुलियो र अधिक टर्रो हुन्छ । यो फलले पित्तविकार नाश गर्दछ । केराको भेट्नु शीतवीर्यको र रुचिप्रद हुन्छ । केराका फूलमा पनि यिनै गुण हुन्छन् । यसको जरामा हुने गानुले पेटका कीरा मार्दछ । केराको पातले शूल रोगलाई शान्त पार्दछ । पाकेको केरा टर्रो, गुलियो, बलदायक र शीतवीर्यको हुन्छ । यसले पित्तविकार र रक्तविकारलाई नियन्त्रण गर्दछ । केरा अति नै पचाउन कठिन हुन्छ र कमजोर पाचनशक्ति हुने मानिसका लागि यो पथ्य हुँदैन । यसले तुरुन्त शुक्र वृद्धि गर्दछ, थकाई मार्दछ, तिर्खा मेट्दछ र शरीरलाई चम्काउँदछ । बलियो पाचनशक्ति हुनेहरूका लागि केरा सुखदायक हुन्छ । यसले कफविकार गर्दछ । यसले तृप्ति दिन्छ तर ढिलो पच्दछ ।

## काठेकेरा (काष्ठकदली)

**काष्ठकदली सुकाष्ठा वनकदली काष्ठिका शिलारम्भा ।**
**दारुकदली फलाढ्या वनमोचा चाश्मकदली च ॥४०॥**
**स्यात्काष्ठकदली रुच्या रक्तपित्तहरा हिमा ।**
**गुरुर्मन्दाग्निजननी दुर्जरा मधुरा परा ॥४१॥**

काष्ठकदली, सुकाष्ठा, वनकदली, काष्ठिका, शिलारम्भा, दारुकदली, फलाढ्या, वनमोचा र अश्मकदली : यी काठेकेराका संस्कृत पर्यायवाची नामहरू हुन् । काठेकेरा रुचिप्रद, रक्तपित्त नाशक र शीतवीर्यको हुन्छ । यो पचाउन कठिन, पाचनशक्तिलाई कमजोर बनाउने, ढिलो पच्ने र अति नै गुलियो हुने गुणको हुन्छ ।

### वनकेरा (गिरिकदली)

**गिरिकदली गिरिरम्भा पर्वतमोचाऽप्यरण्यकदली च ।**
**बहुबीजा वनरम्भा गिरिजा गजवल्लभाऽभिहिता ॥४२॥**
**गिरिकदली मधुरहिमा बलवीर्यविवृद्धिदायिनी रुच्या ।**
**तृट्पित्तदाहशोषप्रशमनकर्त्री च दुर्जरा च गुरुः ॥४३॥**

गिरिकदली, गिरिरम्भा, पर्वतमोचा, अरण्यकदली, बहुबीजा, वनरम्भा, गिरिजा र गजवल्लभा : यी वनकेराका संस्कृत पर्यायवाची नामहरू हुन् । वनकेरा गुलियो, शीतवीर्यको, बल र वीर्य वर्धक तथा रुचिप्रद हुन्छ । यसले तिर्खा, पित्तविकार, डाह र सुजनलाई शान्त पार्दछ । यो ढिलो पच्दछ र पचाउन कठिन हुन्छ ।

### सुनकेरा (सुवर्णकदली)



**अन्या सुवर्णकदली सुवर्णरम्भा च कनकरम्भा च ।**
**पीता सुवर्णमोचा चम्पकरम्भा सुरम्भिका सुभगा ॥४४॥**
**हेमफला स्वर्णफला कनकस्तम्भा च पीतरम्भा च ।**
**गौरा च गौररम्भा काञ्चनकदली सुरप्रिया षड्भूः ॥४५॥**
**सुवर्णमोचा मधुरा हिमा च स्वल्पाशने दीपनकारिणी च ।**
**तृष्णापहा दाहविमोचनी च कफावहा वृष्यकरी गुरुश्च ॥४६॥**

(१) सुवर्णकदली, (२) सुवर्णरम्भा, (३) कनकरम्भा, (४) पीता, (५) सुवर्णमोचा, (६) चम्पकरम्भा, (७) सुरम्भिका, (८) सुभगा, (९) हेमफला, (१०) स्वर्णफला, (११) कनकस्तम्भा, (१२) पीतरम्भा, (१३) गौरा, (१४) गौररम्भा, (१५) काञ्चनकदली र (१६) सुरप्रिया : यी सोह्र नाम घिउकेराका संस्कृत पर्यायवाची नामहरू हुन् । घिउकेरा गुलियो, शीतवीर्यको र थोरै खाँदा दीपनी पनि हुन्छ । यसले तिर्खा, डाह र कफविकार नाश गर्दछ । यो वीर्यवर्धक र पचाउन कठिन हुन्छ ।

### नरिवल (नारिकेल)

**नारिकेलो रसफलः सुतुङ्गः कूर्चशेखरः ।**

**दृढनीलो नीलतरुमङ्गल्योच्चतरुस्तथा ॥४७॥**
**तृणराजः स्कन्धतरुर्दाक्षिणात्यो दुरारुहः ।**
**लाङ्गली त्र्यम्बकफलस्तथा दृढफलस्थितिः ॥४८॥**
**नारिकेलो गुरुः स्निग्धः शीतः पित्तविनाशनः ।**
**अर्धपक्वस्तृषाशोषशमनो दुर्जरः परः ॥४९॥**

नारिकेल, रसफल, सुतुङ्ग, कूर्चशेखर, दृढनील, नीलतरु, मङ्गल्य, उच्चतरु, तृणराज, स्कन्धतरु, दाक्षिणात्य, दुरारुह, लाङ्गली, त्र्यम्बकफल र दृढफल : यी नरिवलका संस्कृत पर्यायवाची नामहरू हुन् । नरिवल पचाउन कठिन, चिल्लो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । आधा पाकेको नरिवलले तिर्खा र सुजनलाई शान्त पार्दछ तर अति नै ढिला पच्दछ ।

**नरिवल-पानी**

**नारिकेलसलिलं लघु बल्यं शीतलञ्च मधुरं गुरु पाके**
**पित्तपीनसतृषाश्रमदाहशान्ति शोषशमनं सुखदायि ।**
**पक्वमेतदपि किञ्चिदिहोक्तं पित्तकारि रुचिदं मधुरं च**
**दीपनं बलकरं गुरु वृष्यं वीर्यवर्धनमिदं तु वदन्ति ॥५०॥**



नरिवलको पानी पचाउन सहज, बलदायक, शीतवीर्यको, गुलियो र पचेपछिको रस पचाउन कठिन हुने गुणको हुन्छ । यसले पित्तविकार, पिनास, तिर्खा, थकाई र डाहलाई शान्त पार्दछ । यसले सुजनलाई बसाउँदछ र सुखदायक हुन्छ । पाकेको नरिवलको पानीमा पनि केही मात्रामा यिनै गुण हुन्छन् । यो पानी पित्तविकार गर्ने रुचि जगाउने र गुलियो स्वादको हुन्छ । यो दीपनी, बलदायक, पचाउन कठिन, तागतिलो र वीर्यवर्धक हुन्छ पनि भन्दछन् ।

**सुकेको नरिवल**

**खुबरं नारिकेलस्य स्निग्धं गुरु च दुर्जरम् ।**
**दाहविष्टम्भदं रुच्यं बलवीर्यविवर्धनम् ॥५१॥**

सुकेको नरिवलको गुदी चिल्लो, पचाउन कठिन र ढिलो पच्ने गुणको हुन्छ । यसले डाह र कब्जियत गराउँदछ । यो नरिवलले रुची, बल र वीर्य बढाउँदछ ।

**मानचङ्गी नरिवल (मधुनारिकेल)**

**मधुनारिकेलकोऽन्यो माध्वीकफलश्च मधुफलीऽसितजफलः ।**

**माक्षिकफलो मृदुफलो बहुकूर्चो ह्रस्वफलश्च वसुगुणिताह्वः ॥५२॥**
**मधुरं मधुनारिकेलमुक्तं शिशिरं दाहतृषार्तिपित्तहारि ।**
**बलपुष्टिकरं च कान्तिमग्र्यां कुरुते वीर्यविवर्धनं च रुच्यम् ॥५३॥**
**माध्वीकं नारिकेलं फलमतिमधुरं दुर्जरं जन्तुकारि**
**स्निग्धं वातातिसारश्रमशमनमथ ध्वंसनं वह्निदीप्तेः ।**
**आमश्लेष्मप्रकोपं जनयति कुरुते चारुकान्तिं बलञ्च**
**स्थैर्यं देहस्य धत्ते घनमदनकलावर्धनं पित्तनाशम् ॥५४॥**

मधुनारिकेलक, माध्वीकफल, मधुफली, असितजफल, माक्षिकफल, मृदुफल, बहुकूर्च र ह्रस्वफल : यी मानचङ्गी नरिवलका संस्कृत पर्यायवाची नामहरू हुन् । मानचङ्गी नरिवल गुलियो, शीतवीर्यको तथा डाह, तिर्खा र पित्तविकार नाशक हुन्छ । यो बल र पुष्टि दायक, छालामा चमक लेराउने, वीर्य बढाउने र रुचिप्रद गुणको हुन्छ । यो नरिवलको फल अति गुलियो, ढिलो पच्ने, पेटका कीरा पार्ने, चिल्लो तथा वातविकार, अतिसार र थकाई नाशक हुन्छ । यसले पाचनशक्तिलाई कमजोर बनाउँदछ । यसले आमविकार र कफविकार गर्दछ तथा शरीरलाई बल दिने र छालामा चमक लेराउने काम गर्दछ । यसले शरीरलाई स्थिर बनाई राख्दछ । यसले मैथुन-शक्ति बढाउँदछ तथा पित्तविकार नाश गर्दछ ।



### खजूर (खर्जूरी)

**खर्जूरी तु खरस्कन्धा दुष्प्रधर्षा दुरारुहा ।**
**निःश्रेणी च कषाया च यवनेष्टा हरिप्रिया ॥५५॥**
**खर्जूरी तु कषाया च पक्वा गौल्यकषायका ।**
**पित्तघ्नी कफदा चैव क्रिमिकृद् वृष्यबृंहणी ॥५६॥**

खर्जूरी, खरस्कन्धा, दुष्प्रधर्षा, दुरारुहा, निःश्रेणी, कषाया, यवनेष्टा र हरिप्रिया : यी खजुरका संस्कृत पर्यायवाची नामहरू हुन् । खजुर टर्रो हुन्छ । पाकेपछि यो गुलियो र टर्रो हुन्छ । यसले पित्तविकार नाश गर्दछ, कफविकार गर्दछ तथा पेटमा कीरा पार्दछ । यो वीर्यवर्धक र पौष्टिक हुन्छ ।

### गुलियो खजुर (मधुखर्जूरी)

**मधुखर्जूरी त्वन्या मधुकर्कटिका च कोलकर्कटिका ।**
**कण्टकिनी मधुफलिका माध्वी मधुरा च मधुरखर्जूरी ॥५७॥**
**मधुखर्जूरी मधुरा वृष्या सन्तापपित्तशान्तिकरी ।**
**शिशिरा च जन्तुकरी बहुवीर्यविवर्धनं तनुते ॥५८॥**

मधुखर्जूरी, मधुकर्कटिका, कोलकर्कटिका, कण्टकिनी, मधुफलिका, माध्वी, मधुरा र मधुरखर्जूरी : यी गुलियो खजुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खजुर गुलियो, वीर्यवर्धक तथा डाह र पित्तविकारलाई शान्त पार्ने गुणको हुन्छ । यो शीतवीर्यको, पेटमा कीरा पार्ने र धेरै र गुणस्तरीय वीर्यवर्धक हुन्छ ।

### सानो जातको खजुर (भूखर्जूरी)

**भूखर्जूरी भुक्ता वसुधाखर्जूरिका च भूमिखर्जूरी ।**
**भूखर्जूरी मधुरा शिशिरा च विदाहपित्तहरा ॥५९॥**

भूखर्जूरी, भुक्ता, वसुधा, खर्जूरिका र भूमिखर्जूरी : यी सानो जातको खजुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो खजुर गुलियो, शीतवीर्यको तथा डाह र पित्तविकार नाशक हुन्छ ।

### पिण्डखर्जूरी

**दीप्या च पिण्डखर्जूरी स्थलपिण्डा मधुस्रवा ।**
**फलपुष्पा स्वादुपिण्डा हयभक्ष्या स्वराभिधा ॥६०॥**



(१) दीप्या, (२) पिण्डखर्जूरी, (३) स्थलपिण्डा, (४) मधुस्रवा, (५) फलपुष्पा, (६) स्वादुपिण्डा र (७) हयभक्ष्या : यी सात नाम पिण्डखर्जुरिकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### राजखर्जूरी

**तथाऽन्या राजखर्जूरी राजपिण्डा नृपप्रिया ।**
**मुनिखर्जूरिका वन्या राजेष्टा रिपुसम्मिता ॥६१॥**

राजखर्जूरी, राजपिण्डा, नृपप्रिया, मुनिखर्जूरिका, वन्या, राजेष्टा र रिपुसम्मिता : यी खजुरविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुई थरी पिण्डखजुरका गुण

**पिण्डखर्जूरिकायुग्मं गौल्यं स्वादे हिमं गुरु ।**
**पित्तदाहार्तिश्वासघ्नं श्रमहृद्वीर्यवृद्धिदम् ॥६२॥**
**दाहघ्नी मधुराऽस्रपित्तशमनी तृष्णार्तिदोषापहा**

**शीता श्वासकफश्रमोदयहरा सन्तर्पणी पुष्टिदा ।**
**वह्नेर्मान्द्यकरी गुरुर्विषहरा हृद्या च दत्ते बलं**
**स्निग्धा वीर्यविवर्धनी च कथिता पिण्डाख्यखर्जूरिका ॥६३॥**

दुवै थरी पिण्डखजुरको स्वाद गुलियो हुन्छ । यी शीतवीर्यका, पचाउन कठिन तथा पित्तविकार, डाह, दम र थकाई नाशक एवं वीर्यवर्धक हुन्छन् । यिनले डाह नाश गर्दछन् । यी खजुर गुलिया र रक्तपित्तलाई शान्त पार्ने गुणका हुन्छन् । यिनले तिर्खारोग नाश गर्दछन् । यी शीतवीर्यका हुन्छन् । यिनले दम, कफविकार, थकाई र पेटका रोग नाश गर्दछन् । यी तृप्ति र पुष्टिदायक हुन्छन् । यी खजुरले पाचनशक्तिलाई कमजोर पार्दछन् तथा पचाउन कठिन हुन्छन् । यिनले विषविकार नाश गर्दछन् । यी मुटुका लागि हितकर, बलदायक, चिल्ला र वीर्यवर्धक हुन्छन् भनिएको छ ।

चिरौंजी (पियाल)

**चारः खद्रुः खरस्कन्धो ललनश्चारकस्तथा ।**
**बहुवल्कः प्रियालश्च नवद्रुस्तापसप्रियः ॥**
**स्नेहबीजश्चोपवटो भक्षबीजः करेन्दुधा ॥६४॥**
**चारस्य च फलं पक्वं वृष्यं गौल्याम्लकं गुरु ।**

**तद्बीजं मधुरं वृष्यं पित्तदाहार्तिनाशनम् ॥६५॥**

(१) चार, (२) खद्रु, (३) खरस्कन्ध, (४) ललन, चारक, बहुवल्क, प्रियाल, नवद्रु, तापसप्रिय, स्नेहबीज, उपवट र भक्षबीज : यी बाह्र नाम करौंजीका संस्कृत पर्यायवाची नामहरू हुन् । चिरौंजीको पाकेको फल वीर्यवर्धक, गुलियो, अमिलो र पचाउन कठिन हुन्छ । यसको बीज गुलियो, वीर्यवर्धक तथा पित्तविकार र डाह नाशक हुन्छ ।

भलायो (भल्लातक)

**भल्लातकोऽग्निर्दहनस्तपनोऽरुष्करोऽनलः ।**
**कृमिघ्नस्तैलबीजश्च वातारिः स्फोटबीजकः ॥६६॥**
**पृथग्बीजो धनुर्बीजो (धनुर्वृक्षो भल्लातो बीजपादपः ।**
**वह्निर्वरतरुश्चेति विज्ञेयः षोडशाह्वयः ॥६७॥**
**भल्लातकः कटुस्तिक्तः कषायोष्णः कृमीञ्जयेत् ।**
**कफवातोदरानाहमेहदुर्नामनाशनः ॥६८॥**
**भल्लातस्य फलं कषायमधुरं कोष्णं कफार्तिश्रम-**
**श्वासानाहविबन्धशूलजठराध्मानक्रिमिध्वंसनम् ।**

**तन्मज्जा च विशोषदाहशमनी पित्तापहा तर्पणी**
**वातारोचकहारिदीप्तिजननी पित्तापहा त्वञ्जसा ॥६९॥**

(१) भल्लातक, (२) अग्नि, (३) दहन, (४) तपन, (५) अरुष्कर, (६) अनल, (७) कृमिघ्न, (८) तैलबीज, (९) वातारि, (१०) स्फोटबीजक, (११) पृथग्बीज, (१२) धनुर्बीज, (१३) भल्लात, (१४) बीजपादप, (१५) वह्नि र (१६) वरतरु : यी सोह्र नाम भलायोका संस्कृत पर्यायवाची नामहरू हुन् । भलायो पिरो, तीतो, टर्रो, उष्णवीर्यको र कीरामाथि जित हासिल गर्ने गुणको हुन्छ । यसले कफविकार, वातविकार, पेटका रोग, आनाह, प्रमेह र अल्काई नाश गर्दछ । भलायोको फल टर्रो, गुलियो, उष्णवीर्यको तथा कफविकार, थकाई, दम, आनाह, विबन्ध, शूल, पेटका रोग, आध्मान र पेटका कीरा नाशक हुन्छ । यसको गेडा भित्रको गुदी (मज्जा) सुजन र डाहलाई शान्त पार्ने, पित्तनाशक र तृप्तिदायक हुन्छ । यसले वातविकार र अरुची नाश गर्दछ तथा पाचनशक्ति बढाउँदछ । यो गुदीले अति चाँडो पित्तविकार नाश गर्दछ ।

## खिर्नी (राजादन)

**राजादनो राजफलः क्षीरवृक्षो नृपद्रुमः ।**
**निम्बबीजो मधुफलः कपीष्टो माधवोद्भवः ॥७०॥**
**क्षीरी गुच्छफलः प्रोक्तः शुकेष्टो राजवल्लभः ।**
**श्रीफलोऽथ दृढस्कन्धः क्षीरशुक्लस्त्रिपञ्चधा ॥७१॥**
**राजादनी तु मधुरा पित्तहृद् गुरुतर्पणी ।**
**वृष्या स्थौल्यकरी हृद्या सुस्निग्धा मेहनाशकृत् ॥७२॥**

(१) राजादन, (२) राजफल, (३) क्षीरवृक्ष, (४) नृपद्रुम, (५) निम्बबीज, (६) मधुफल, (७) कपीष्ट, (८) माधवोद्भव, (९) क्षीरी, (१०) गुच्छफल, (११) शुकेष्टा, (१२) राजवल्लभ, (१३) श्रीफल, (१४) दृढस्कन्ध र (१५) क्षीरशुक्ल : यी पन्ध्र नाम खिर्नीका संस्कृत पर्यायवाची नामहरू हुन् । खिर्नी गुलियो, पित्तविकार नाशक, पचाउन कठिन र तृप्तिदायक हुन्छ । यो वीर्यवर्धक, मोटो बनाउने, मुटुका लागि हितकर, अति चिल्लो र प्रमेह नाशक हुन्छ ।

## दारिम

**दाडिमो दाडिमीसारः कुट्टिमः फलषाडवः ।**
**करको रक्तबीजश्च सुफलो दन्तबीजकः ॥७३॥**
**मधुबीजः कुचफलो रोचनः शूकवल्लभः ।**
**मणिबीजस्तथा वल्कफलो वृत्तफलश्च सः ॥**

**सुनीलो नीलपत्रश्च ज्ञेयः सप्तदशाह्वयः ॥७४॥**

(१) दाडिम, (२) दाडिमीसार, (३) कुट्टिम, (४) फलषाडव, (५) करक, (६) रक्तबीज, (७) सुफल, (८) दन्तबीजक, (९) मधुबीज, (१०) कुचफल, (११) रोचन, (१२) शूकवल्लभ, (१३) मणिबीज, (१४) वल्कफल, (१५) वृत्तफल, (१६) सुनील र (१७) नीलपत्र : यी सत्र नाम दारिमका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## दारिमका गुण

**दाडिमं मधुरमम्लकषायं कासवातकफपित्तविनाशि ।**
**ग्राहि दीपनकरं च लघूष्णं शीतलं श्रमहरं रुचिदायि ॥७५॥**

दारिम गुलियो, अमिलो र टर्रो हुन्छ । यसले खोकी, वातविकार, कफविकार र पित्तविकार नाश गर्दछ । यो ग्राही, दीपनी, पचाउन सहज, उष्णवीर्यको, शीतल गर्ने, थकाई नाश गर्ने र रुचि बढाउने गुणको हुन्छ ।

## दारिमका जात



**दाडिमं द्विविधमीरितमार्यैरम्लमेकमपरं मधुरं च ।**
**तत्र वातकफहारि किलाम्लं तापहारि मधुरं लघु पथ्यम् ॥**
**(अम्लं कषायं मधुरं वातघ्नं ग्राहि दीपनम्) ॥७६॥**

पहिलेका विद्वानहरूले अमिलो र गुलियो गरी दारिम दुई प्रकारको हुन्छ भनी बताएका छन् । अमिलो दारिमले वातविकार र कफविकार नाश गर्दछ भने गुलियो दारिमले डाह नाश गर्दछ तथा पचाउन सहज र पथ्य हुन्छ । (दारिम अमिलो, टर्रो, गुलियो, वातविकार नाशक, ग्राही र दीपनी हुन्छ) ।

## तिँदु (तिन्दुक)

**तिन्दुको नीलसारश्च कालस्कन्धोऽतिमुक्तकः ।**
**स्फूर्जकः रामणश्चैव स्फूर्जनः स्यन्दनाह्वयः ॥७७॥**
**तिन्दुकस्तु कषायः स्यात् सङ्ग्राही वातकृत्परः ।**
**पक्वस्तु मधुरः स्निग्धो दुर्जरः श्लेष्मलो गुरुः ॥७८॥**

तिन्दुक, नीलसार, कालस्कन्ध, अतिमुक्तक, स्फूर्जक, रामण, स्फूर्जन र स्यन्दन : यी तिँदुका

संस्कृत पर्यायवाची नामहरू हुन् । तिँदु टर्रो, ग्राही र वातविकार बढाउने गुणको हुन्छ । पाकेको तिँदु गुलियो, चिल्लो, ढिलो पच्ने, कफविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

### कुचिला (काकतिन्दुक)

**तिन्दुकोऽन्यः काकपीलुः काकाण्डः काकतिन्दुकः ।**
**काकस्फूर्जश्च काकेन्दुः काकाह्वः काकबीजकः ॥७९॥**
**तिन्दुकश्च कषायोऽम्लो गुरुर्वातविकारकृत् ।**
**पक्वस्तु मधुरः किञ्चित् कफकृत्पित्तवान्तिहृत् ॥८०॥**

काकपीलु, काकाण्ड, काकतिन्दुक, काकस्फूर्ज, काकेन्दु, काकाह्व र काकबीजक : यी सानो तिँदुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तिँदु टर्रो, अमिलो, पचाउन कठिन र वातविकार बढाउने गुणको हुन्छ । पाकेको यो तिँदु गुलियो हुन्छ । यसले थोरै कफविकार गर्दछ तथा पित्तविकार र वाकवाकी नाश गर्दछ ।

### हाडे ओखर (अक्षोट)

**अक्षोटः पार्वतीयश्च फलस्नेहो गुडाशयः ।**
**कीरेष्टः कन्दरालश्च मधुमज्जा बृहच्छदः ॥८१॥**
**अक्षोटो मधुरो बल्यो स्निग्धोष्णो वातपित्तजित् ।**
**रक्तदोषप्रशमनः शीतलः कफकोपनः ॥८२॥**

अक्षोट, पार्वतीय, फलस्नेह, गुडाशय, कीरेष्ट, कन्दराल, मधुमज्जा र बृहच्छद : यी हाडे ओखरका संस्कृत पर्यायवाची नामहरू हुन् । ओखर गुलियो, बलदायक, चिल्लो, उष्णवीर्यको तथा वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले रक्तविकारलाई शान्त पार्दछ । यसले पचेपछि शीतल गर्दछ र कफविकार बढाउँदछ ।

### दाँते ओखर (पीलु)

**पीलुः शीतः सहस्रांशी धानी गुडफलस्तथा ।**
**विरेचनफलः शाखी श्यामः करभवल्लभः ॥८३॥**
**अङ्काह्वः कटुकः पीलुः कषायो मधुराम्लकः ।**
**सरः स्वादुश्च गुल्मार्शःशमनो दीपनः परः ॥८४॥**

(१) पीलु, (२) शीत, (३) सहस्रांशी, (४) धानी, (५) गुडफल, (६) विरेचनफल, (७) शाखी, (८)

श्याम र (९) करभवल्लभ : यी नौ नाम दाँतेओखरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ओखर पिरो, टर्रो, गुलियो र अमिलो हुन्छ । यसले मलमूत्रलाई तलतिर सार्दछ । यो स्वादिलो हुन्छ । यसले गुल्म र अल्काईलाई शान्त पार्दछ । यो अत्यन्त दीपनी हुन्छ ।

### ठुलो दाँते ओखर (बृहत्पीलु)

**अन्यश्चैव बृहत्पीलुर्महापीलुर्महाफलः ।**
**राजपीलुर्महावृक्षो मधुपीलुः षडाह्वयः ॥८५॥**
**मधुरस्तु महापीलुर्वृष्यो विषविनाशनः ।**
**पित्तप्रशमनो रुच्य आमघ्नो दीपनीयकः ॥८६॥**

(१) बृहत्पीलु, (२) महापीलु, (३) महाफल, (४) राजपीलु, (५) महावृक्ष र (६) मधुपीलु : यी छ नाम ठुलो दाँते ओखरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ओखर गुलियो, वीर्यवर्धक र विषविकार नाशक हुन्छ । यसले पित्तविकारलाई शान्त पार्दछ, रुची जगाउँदछ र आमविकार नाश गर्दछ । यो दीपनी हुन्छ ।

### नासपाती (पारेवत)



**पारेवतं तु रैवतमारेवतकञ्च किञ्च रैवतकम् ।**
**मधुफलममृतफलाख्यं पारेवतकञ्च सप्ताह्वम् ॥८७॥**
**पारेवतं तु मधुरं क्रिमिवातहारि**
**वृष्यं तृषाज्वरविदाहहरं च हृद्यम् ।**
**मूर्छाभ्रमश्रमविशोषविनाशकारि**
**स्निग्धश्च रुच्यमुदितं बहुवीर्यदायि ॥८८॥**

(१) पारेवत, (२) रैवत, (३) आरेवतक, (४) रैवतक, (५) मधुफल, (६) अमृतफल र (७) पारेवतक : यी सात नाम पारेवतका संस्कृत पर्यायवाची नामहरू हुन् । पारेवत गुलियो तथा कीरा र वातविकार नाशक हुन्छ । यो वीर्यवर्धक तथा तिर्खा, ज्वर र डाह नाशक एवं मुटुका लागि हितकर हुन्छ । यसले बेहोसी, भ्रम, थकाई र सुजन नाश गर्दछ । यो चिल्लो, रुचिप्रद र अति वीर्यवर्धक हुन्छ ।

### स्याउ (महापारेवत)

**महापारेवतं चान्यत् स्वर्णपारेवतं तथा ।**
**साम्राणिजं खारिकं च रक्तरैवतकञ्च तत् ॥**

बृहत्पारेवतं प्रोक्तं द्वीपजं द्वीपखर्जूरी ॥८९॥
महापारेवतं गौल्यं बलकृत् पुष्टिवर्धनम् ।
वृष्यं मूर्छाज्वरघ्नञ्च पूर्वोक्तादधिकं गुणैः ॥९०॥

महापारेवत, स्वर्णपारेवत, साम्राणिज, खारिक, रक्तरैवतक, बृहत्पारेवत, द्वीपज र द्वीपखर्जूरी : यी महापारेवतका संस्कृत पर्यायवाची नामहरू हुन् । महापारेवत गुलियो, बलदायक र पुष्टिवर्धक हुन्छ । यो वीर्यवर्धक तथा बेहोसीपन र ज्वर नाशक हुन्छ । यो पारेवतभन्दा बढी गुनिलो हुन्छ ।

## महुवा (मधूक)

मधूको मधुवृक्षः स्यात् मधुष्ठीलो मधुस्रवः ।
गुडपुष्पो लोध्रपुष्पो वानप्रस्थश्च माधवः ॥९१॥
मधुकं मधुरं शीतं पित्तदाहश्रमापहम् ।
वातलं जन्तुदोषघ्नं वीर्यपुष्टिविवर्धनम् ॥९२॥

मधूक, मधुवृक्ष, मधुष्ठीला, मधुस्रव, गुडपुष्प, लोध्रपुष्प, वानप्रस्थ र माधव : यी महुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । महुवा गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह र थकाई नाशक हुन्छ । महुवाले वातविकार गर्दछ तथा कीराजन्य विकार नाश गर्दछ । महुवाले वीर्यलाई पुष्ट पार्दै बढाउँदछ ।

## पानी महुवा (जलमधूक)

अन्यो जलमधूको मङ्गल्यो दीर्घपत्रको मधुपुष्पः ।
क्षौद्रप्रियः पतङ्गः कीरेष्टो गैरिकाक्षश्च ॥९३॥
ज्ञेयो जलमधूकस्तु मधुरो व्रणनाशनः ।
वृष्यो वान्तिहरः शीतो बलकारी रसायनः ॥९४॥

जलमधूक, मङ्गल्य, दीर्घपत्रक, मधुपुष्प, क्षौद्रप्रिय, पतङ्ग, कीरेष्ट र गैरिकाक्ष : यी पानीमहुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । पानी महुवा गुलियो र घाउखटिरा नाशक हुन्छ । यो वीर्यवर्धक, वाकवाकी नाशक, शीतवीर्यको, बलवर्धक तथा रसायनी हुन्छ ।

## महुवाका फूल र फलका गुण

मधूकपुष्पं मधुरञ्च वृष्यं हृद्यं हिमं पित्तविदाहहारि ।
फलञ्च वातामयपित्तनाशि ज्ञेयं मधूकद्वयमेवमेतत् ॥९५॥

महुवाको फूल गुलियो, वीर्यवर्धक, मुटुका लागि हितकर, शीतवीर्यको तथा पित्तविकार र डाह नाशक हुन्छ । यसको फल वातविकार र पित्तविकार नाशक हुन्छ । यसरी दुई प्रकारका महुवाका बारेमा जान्नू ।

**रामफल (भव्य)**

**भवं भव्यं भविष्यञ्च भावनं वक्त्रशोधनम् ।**
**तथा पिच्छलबीजञ्च तच्च लोमफलं मतम् ॥९६॥**
**भव्यमम्लं कटूष्णञ्च बालं वातकफापहम् ।**
**पक्वं तु मधुराम्लं च रुचिकृत्सामशूलहृत् ॥९७॥**

भव, भव्य, भविष्य, भावन, वक्त्रशोधन, पिच्छलबीज र लोमफल : यी रामफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो फल अमिलो, पिरो र उष्णवीर्यको हुन्छ । कलिलो रामफलले वातविकार र कफविकार नाश गर्दछ । पाकेको रामफल गुलियो, अमिलो, रुचिप्रद र आमजन्य शूललाई नाश गर्ने गुणको हुन्छ ।

**आरु (आरुकम्)**



**आरुकं वीरसेनं च वीरं वीरारुकं तथा ।**
**तत्र विद्याच्चतुर्जाती पत्रपुष्पादिभेदतः ॥९८॥**
**आरुकाणि च सर्वाणि मधुराणि हिमानि च ।**
**अर्शःप्रमेहगुल्मास्रदोषविध्वंसनानि च ॥९९॥**

आरुक, वीरसेन, वीर र वीरारुक : यी आरुका संस्कृत पर्यायवाची नामहरू हुन् । पात र फूल आदिमा हुने विभिन्नताका आधारमा यो चार प्रकारको हुन्छ । सबै खालका आरु गुलिया, शीतवीर्यका तथा अल्काई, प्रमेह, गुल्म र रक्तविकार नाशक हुन्छन् ।

**दाख वा अङ्गुर (द्राक्षा)**

**द्राक्षा चारुफला कृष्णा प्रियाला तापसप्रिया ।**
**गुच्छफला रसाला च ज्ञेयाऽमृतफला च सा ॥१००॥**
**द्राक्षाऽतिमधुराऽम्ला च शीता पित्तार्तिदाहजित् ।**
**मूत्रदोषहरा रुच्या वृष्या सन्तर्पणी परा ॥१०१॥**

द्राक्षा, चारुफला, कृष्णा, प्रियाला, तापसप्रिया, गुच्छफला, रसाला र अमृतफला : यी दाख वा अङ्गुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति गुलियो, अमिलो, शीतवीर्यको तथा पित्तविकार र डाहलाई जित्ने गुणको हुन्छ । यसले पिसासम्बन्धी रोग नाश गर्दछ, रुची र वीर्य बढाउँदछ तथा अती तृप्तिदायक हुन्छ ।

### मुनक्का (मृद्वीका)

**अन्या कपिलद्राक्षा मृद्वीका गोस्तनी च कपिलफला ।**
**अमृतरसा दीर्घफला मधुवल्ली मधुफला मधूली च ॥१०२॥**
**हरिता च हारहूरा सुफला मृद्वी हिमोत्तरापथिका ।**
**हैमवती शतवीर्या काश्मीरी गजराजमहिगणिता ॥१०३॥**
**गोस्तनी मधुरा शीता हृद्या च मदहर्षणी ।**
**दाहमूर्छाज्वरश्वासतृषाहृल्लासनाशिनी ॥१०४॥**

(१) कपिलद्राक्षा, (२) मृद्वीका, (३) गोस्तनी, (४) कपिलफला, (५) अमृतरसा, (६) दीर्घफला, (७) मधुवल्ली, (८) मधुफला, (९) मधूली, (१०) हरिता, (११) हारहूरा, (१२) सुफला, (१३) मृद्वी, (१४) हिमोत्तरा, (१५) पथिका, (१६) हैमवती, (१७) शतवीर्या र (१८) काश्मीरी : यी अठार नाम मुनक्काका संस्कृत पर्यायवाची नामहरू हुन् । मुनक्का गुलियो, शीतवीर्यको, मुटुका लागि हितकर, मददायक तथा डाह, बेहोसी, ज्वर, दम, तिर्खा र छातीको थकावट वा बाडुली नाशक हुन्छ ।

### किसमिस (काकलीद्राक्षा)

**अन्या सा काकलीद्राक्षा जम्बुका च फलोत्तमा ।**
**लघुद्राक्षा च निर्बीजा सुवृत्ता रुचिकारिणी ॥**
**शिशिरा श्वासहृल्लासनाशिनी जनवल्लभा ॥१०५॥**

काकलीद्राक्षा, जम्बुका, फलोत्तमा, लघुद्राक्षा, निर्बीजा, सुवृत्ता र रुचिकारिणी : यी किसमिसका संस्कृत पर्यायवाची नामहरू हुन् । किसमिस शीतवीर्यको हुन्छ । यसले दम र छातीको थकावट वा बाडुली नाश गर्दछ । यसलाई सबैले मन पराउँदछन् ।

### अङ्गुरको अवस्था अनुसारको फल

**द्राक्षाबालफलं कटूष्णविशदं पित्तास्रदोषप्रदं**
**मध्यं चाम्लरसं रसान्तरगते रुच्यातिवह्निप्रदम् ।**

**पक्वं चेन्मधुरं तथाऽम्लसहितं तृष्णास्रपित्तापहं**
**पक्वं शुष्कतमं श्रमार्तिशमनं सन्तर्पणं पुष्टिदम् ॥१०६॥**

अङ्गुरका चिचिलो फल पिरो, उष्णवीर्यको, सुन्दर तथा पित्तविकार र रक्तविकार गर्ने गुणको हुन्छ । छिप्पिएको अङ्गुर अमिलो हुन्छ । यस्तो अङ्गुर अरु कुरामा मिसाएर खाए यो रुचिप्रद र पाचनशक्ति बढाउने गुणको हुन्छ । पाकेको ताजा अङ्गुर गुलियो, अमिलो मिसिएको तथा तिर्खा, रक्तविकार र पित्तविकार नाशक हुन्छ । पाकेर सुकेको अङ्गुर थकाई नाशक, तृप्तिदायक र पुष्टिदायक हुन्छ ।

## अङ्गुरका अन्य गुण

**शीता पित्तास्रदोषं दमयति मधुरा स्निग्धपाकाऽतिरुच्या**
**चक्षुष्या श्वासकासश्रमवमिशमनी शोफतृष्णाज्वरघ्नी ।**
**दाहाध्मानभ्रमादीनपनयति परा तर्पणी पक्वशुष्का**
**द्राक्षा सुक्षीणवीर्यानपि मदनकलाकेलिदक्षान्विधत्ते ॥१०७॥**

अङ्गुर शीतवीर्यको हुन्छ । यसले पित्तविकार र रक्तविकार नियन्त्रण गर्दछ । यो गुलियो, चिल्लो र पाकेपछि अति रुचिकर हुन्छ । अङ्गुर आँखाका लागि हितकारी तथा दम, खोकी, थकाई र वाकवाकीलाई शान्त पार्ने गुणको हुन्छ । यसले सुजन, तिर्खा र ज्वर नाश गर्दछ । यसले उत्तम तरिकाले डाह, आध्मान, भ्रम आदिबाट छुटकारा दिलाउँदछ । यो तृप्तिदायक हुन्छ । पाकेर सुकाइएको अङ्गुरले कमजोर बनेको वीर्यलाई पनि सहवास-सुखका लागि योग्य बनाउँदछ ।

## कमरख (कर्मरक)

**कर्मारः कर्मरकः पीतफलः कर्मरश्च मुद्गरकः ।**
**मुद्गरफलश्च धाराफलकस्तु कर्मारकश्चैव ॥१०८॥**
**कर्मारकोऽम्ल उष्णश्च वातहृत्पित्तकारकः ।**
**पक्वस्तु मधुराम्लः स्यात् बलपुष्टिरुचिप्रदः ॥१०९॥**

कर्मार, कर्मरक, पीतफल, कर्मर, मुद्गरक, मुद्गरफल, धाराफलक र कर्मारक : यी कमरखका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, उष्णवीर्यको तथा वातविकार नाशक र पित्तविकार बढाउने गुणको हुन्छ । पाकेको अमरख गुलियो, अमिलो तथा बलदायक, पुष्टिदायक र रुचिप्रद हुन्छ ।

## फाल्सा (परूषक)

**परूषकं तीलपर्णं गिरिपीलु परावरम् ।**
**नीलमण्डलमल्पास्थि परुषञ्च परुस्तथा ॥११०॥**
**परूषमम्लं कटुकं कफार्तिजिद्वातापहं तत्फलमेव पित्तदम् ।**
**सोष्णञ्च पक्वं मधुरं रुचिप्रदं पित्तापहं शोफहरञ्च पीतम् ॥१११॥**

परूषक, तीलपर्ण, गिरिपीलु, परावर, नीलमण्डल, अल्पास्थि, परुष र परु : यी फाल्साका संस्कृत पर्यायवाची नामहरू हुन् । फाल्सा अमिलो, पिरो तथा कफविकारलाई जित्ने गुणको हुन्छ । यसले वातविकार नाश गर्दछ । फाल्साको फलले पित्तविकार गर्दछ र यो उष्णवीर्यको समेत हुन्छ । पाकेको फल गुलियो, रुचिप्रद तथा पित्तविकार र सुजन नाशक हुन्छ ।

## पिपल (अश्वत्थ)

**अश्वत्थश्चाच्युतावासश्चलपत्रः पवित्रकः ।**
**शुभदो बोधिवृक्षश्च याज्ञिको गजभक्षकः ॥११२॥**
**श्रीमान् क्षीरद्रुमो विप्रो मङ्गल्यः श्यामलश्च सः ।**
**पिप्पलो गुह्यपुष्पश्च सेव्यः सत्यः शुचिद्रुमः ॥**
**चैत्यद्रुमो धर्मवृक्षो ज्ञेयो विंशतिसञ्ज्ञकः ॥११३॥**
**पिप्पलः सुमधुरस्तु कषायः शीतलश्च कफपित्तविनाशी ।**
**रक्तदाहशमनः स हि सद्यो योनिदोषहरणः किल पक्वः ॥११४॥**
**अश्वत्थवृक्षस्य फलानि पक्वान्यतीवहृद्यानि च शीतलानि ।**
**कुर्वन्ति पित्तास्रविषार्तिदाहविच्छर्दिशोषारुचिदोषनाशम् ॥११५॥**

(१) अश्वत्थ, (२) अच्युतावास, (३) चलपत्र, (४) पवित्रक, (५) शुभद, (६) बोधिवृक्ष, (७) याज्ञिक, (८) गजभक्षक, (९) श्रीमान्, (१०) क्षीरद्रुम, (११) विप्र, (१२) मङ्गल्य, (१३) श्यामल, (१४) पिप्पल, (१५) गुह्यपुष्प, (१६) सेव्य, (१७) सत्य, (१८) शुचिद्रुम, (१९) चैत्यद्रुम र (२०) धर्मवृक्ष : यी बीस नाम पिप्पलका संस्कृत पर्यायवाची नामहरू हुन् । पिप्पल गुलियो, टर्रो, शीतवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले रक्तविकारजन्य डाहलाई शान्त पार्दछ । यसको पाकेको फलले योनिका रोगहरू निश्चय नै तुरुन्त निको पार्दछ । पिप्पलको पाकेको फल मुटुका लागि अति नै हितकारी र शीतवीर्यको हुन्छ । यो फलले पित्तविकार, रक्तविकार, विषविकार, डाह, वाकवाकी, सुजन र अरुची नाश गर्दछ ।

## बर (वट)

**स्यादथ वटो जटालो न्यग्रोधो रोहिणोऽवरोही च ।**
**विटपी रक्तफलश्च स्कन्धरुहो मण्डली महाच्छायः ॥११६॥**
**शृङ्गी यक्षावासो यक्षतरुः पादरोहिणो नीलः ।**
**क्षीरी शिफारुहः स्याद्बहुपादः स तु वनस्पतिर्नवभूः ॥११७॥**
**वटः कषायो मधुरः शिशिरः कफपित्तजित् ।**
**ज्वरदाहतृषामोहव्रणशोफापहारकः ॥११८॥**

(१) वट, (२) जटाल, (३) न्यग्रोध, (४) रोहिण, (५) अवरोही, (६) विटपी, (७) रक्तफल, (८) स्कन्धरुह, (९) मण्डली, (१०) महाच्छाय, (११) शृङ्गी, (१२) यक्षावास, (१३) यक्षतरु, (१४) पादरोहिण, (१५) नील, (१६) क्षीरी, (१७) शिफारुह, (१८) बहुपाद र (१९) वनस्पति : यी उन्नाईस नाम बरका संस्कृत पर्यायवाची नामहरू हुन् । बर टर्रो, गुलियो, शीतवीर्यको र कफविकारलाई जित्ने गुणको हुन्छ । यसले ज्वर, डाह, तिर्खा, मोह, घाउखटिरा र सुजन नाश गर्दछ ।

## दूधे बर (नदीवट)

**नदीवटो यज्ञवृक्षः सिद्धार्थो वटको वटी ।**
**अमरा सङ्गिनी चैव क्षीरकाष्ठा च कीर्तिता ॥११९॥**
**वटी कषायमधुरा शिशिरा पित्तहारिणी ।**
**दाहतृष्णाश्रमश्वासविच्छर्दिशमनी परा ॥१२०॥**

नदीवट, यज्ञवृक्ष, सिद्धार्थ, वटक, वटी, अमरा, सङ्गिनी र क्षीरकाष्ठा : यी दूधे बरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सानो जातको बर टर्रो, गुलियो, शीतवीर्यको र पित्तविकार नाशक हुन्छ । यसले विशेषत डाह, तिर्खारोग, थकाई, दम र वाकवाकीलाई शान्त पार्दछ ।

## सानु पिपल (अश्वत्थी)

**अश्वत्थी लघुपत्री स्यात् पवित्रा ह्रस्वपत्रिका ।**
**पिप्पलिका वनस्था च क्षुद्रा चाश्वत्थसन्निभा ॥१२१॥**
**अश्वत्थिका तु मधुरा कषाया चास्रपित्तजित् ।**
**विषदाहप्रशमनी गुर्विण्या हितकारिणी ॥१२२॥**

अश्वत्थी, लघुपत्री, पवित्रा, ह्रस्वपत्रिका, पिप्पलिका, वनस्था, क्षुद्रा र अश्वत्थसन्निभा : यी सानु

पिपलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिपल गुलियो, टर्रो तथा रक्तपित्तलाई जित्ने गुणको हुन्छ । यसले विषविकार र डाहलाई शान्त पार्दछ । यो गर्भिणीका लागि हितकर हुन्छ ।

### पाखरी (प्लक्ष)

**प्लक्षः कपीतनः क्षीरी सुपार्श्वोऽथ कमण्डलुः ।**
**शृङ्गी वरोहशाखी च गर्दभाण्डः कपीतकः ॥**
**दृढप्ररोहः प्लवकः प्लवङ्गश्च महाबलः ॥१२३॥**
**प्लक्षश्चैवापरो ह्रस्वः सुशीतः शीतवीर्यकः ।**
**पुण्ड्रो महाऽवरोहश्च ह्रस्वपर्णस्तु पिम्परिः ॥**
**भिदुरो मङ्गलच्छायो ज्ञेयो द्वाविंशधाभिधः ॥१२४॥**
**प्लक्षः कटुकषायश्च शिशिरो रक्तदोषजित् ।**
**मूर्छाभ्रमप्रलापघ्नो ह्रस्वप्लक्षो विशेषतः ॥१२५॥**

प्लक्ष, कपीतन, क्षीरी, सुपार्श्व, कमण्डलु, शृङ्गी, वरोहशाखी, गर्दभाण्ड, कपीतक, दृढप्ररोह, प्लवक, प्लवङ्ग र महाबल : यी पहिलो थरी पाखरीका तथा ह्रस्वप्लक्ष, सुशीत, शीतवीर्यक, पुण्ड्र, महाअवरोह, ह्रस्वपर्ण, पिम्परि, भिदुर र मङ्गलच्छाय : यी दोश्रो थरी पाखरीका गरी जम्मा बाईस नाम पाखरीका संस्कृत पर्यायवाची नामहरू हुन् । पाखरी पिरो, टर्रो, शीतवीर्यको तथा रक्तविकारलाई जित्ने गुणको हुन्छ । सानो पाखरीले विशेषत बेहोसीपन, भ्रम र बकवास गर्ने रोग निको पार्दछ ।



### डुम्री (उदुम्बर)

**उदुम्बरः क्षीरवृक्षो हेमदुग्धः सदाफलः ।**
**कालस्कन्धो यज्ञयोग्यो यज्ञीयः सुप्रतिष्ठितः ॥१२६॥**
**शीतवल्को जन्तुफलः पुष्पशून्यः पवित्रकः ।**
**सौम्यः शीतफलश्चेति मनुसञ्ज्ञः समीरितः ॥१२७॥**
**उदुम्बरं कषायं स्यात् पक्वं तु मधुरं हिमम् ।**
**कृमिकृत्पित्तरक्तघ्नं मूर्छादाहतृषापहम् ॥१२८॥**
**औदुम्बरं फलमतीव हिमं सुपक्वं पित्तापहं च मधुरं श्रमशोफहारि ।**
**आमं कषायमतिदीपनरोचनं च मांसस्य वृद्धिकरमस्रविकारहारि ॥१२९॥**

(१) उदुम्बर, (२) क्षीरवृक्ष, (३) हेमदुग्ध, (४) सदाफल, (५) कालस्कन्ध, (६) यज्ञयोग्य, (७) यज्ञीय, (८) सुप्रतिष्ठित, (९) शीतवल्क, (१०) जन्तुफल, (११) पुष्पशून्य, (१२) पवित्रक, (१३)

सौम्य र (१४) शीतफल : यी चौध नाम डुम्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । डुम्री टर्रो तर पाकेपछि गुलियो हुन्छ । यो शीतवीर्यको, पेटमा कीरा पार्ने तथा पित्तविकार, रक्तविकार, बेहोसी, डाह र तिर्खा नाशक हुन्छ । डुम्रीको फल अत्यन्त शीतवीर्यको हुन्छ । राम्ररी पाकेको यो फलले पित्तविकार नाश गर्दछ । यो गुलियो हुन्छ र यसले थकाई र सुजन नाश गर्दछ । काँचो फल टर्रो, अति नै दीपनी र रोचनी हुन्छ । यसले मासु बढाउनुका साथै रक्तविकारलाई नाश पनि गर्दछ ।

**खनायो (नद्युदुम्बर)**

**नद्युदुम्बरिका चान्या लघुपत्रफला तथा ।**
**प्रोक्ता लघुहेमदुग्धा लघुपूर्वसदाफला ॥१३०॥**
**लघ्वाद्युम्बराह्वा स्याद्बाणाह्वा च प्रकीर्तिता ।**
**रसवीर्यविपाकेषु किञ्चिन्न्यूना च पूर्वतः ॥१३१॥**

(१) नद्युदुम्बरिका, (२) लघुपत्रफला, (३) लघुहेमदुग्धा, (४) लघुसदाफला र (५) लघुउदुम्बर : यी पाँच नाम खनायोका संस्कृत पर्यायवाची नामहरू हुन् । रस, वीर्य र विपाकमा यो डुम्रीभन्दा केही कम गुनिलो हुन्छ ।

**काठेडुम्री वा खस्रेतो (काकोदुम्बरिका)**



**कृष्णोदुम्बरिका चान्या खरपत्री च राजिका ।**
**उदुम्बरी च कठिना कुष्ठघ्नी फल्गुवाटिका ॥१३२॥**
**अजाक्षी फल्गुनी चैव मलपूश्चित्रभेषजा ।**
**काकोदुम्बरिका चैव ध्वाङ्क्षनाम्नी त्रयोदश ॥१३३॥**
**काकोदुम्बरिका शीता पक्वा गौल्याऽम्लिका कटुः ।**
**त्वग्दोषपित्तरक्तघ्नी तद्वल्कं चातिसारजित् ॥१३४॥**
**उदुम्बरत्वचा शीता कषाया व्रणनाशिनी ।**
**गुर्विणी गर्भसंरक्षे हिता स्तन्यप्रदायिनी ॥१३५॥**

(१) कृष्णोदुम्बरिका, (२) खरपत्री, (३) राजिका, (४) उदुम्बरी, (५) कठिना, (६) कुष्ठघ्नी, (७) फल्गुवाटिका, (८) अजाक्षी, (९) फल्गुनी, (१०) मलपू, (११) चित्रभेषजा, (१२) काकोदुम्बरिका र (१३) ध्वाङ्क्ष : यी तेह्र नाम खस्रेतोका संस्कृत पर्यायवाची नामहरू हुन् । खस्रेतो शीतवीर्यको हुन्छ । पाकेपछि यो गुलियो, अमिलो र पिरो हुन्छ । यसले छालाका रोग, पित्तविकार र रक्तविकारलाई नाश गर्दछ । खस्रेतोको रूखको बोक्राले अतिसारलाई जित्दछ । यो शीतवीर्यको, टर्रो र घाउखटिरा नाशक हुन्छ । यो गर्भिणीको गर्भ संरक्षणका लागि हितकर तथा दूधबर्धक हुन्छ ।

### बयर (बदर)

**बदरो बदरी कोली कर्कन्धूः कोलफेनिलौ ।**
**सौवीरको गुडफलो बालेष्टः फलशैशिरः ॥१३६॥**
**दृढबीजो वृत्तफलः कण्टकी वक्रकण्टकः ।**
**सुवीजः सुफलः स्वच्छः सुरसः स्मृतिसम्मितः ॥१३७॥**
**बदरं मधुरं कषायमम्लं परिपक्वं मधुराम्लमुष्णमेतत् ।**
**कफकृत्पचनातिसाररक्तश्रमशोषार्तिविनाशनं च रुच्यम् ॥१३८॥**
**बदरस्य पत्रलेपो ज्वरदाहविनाशनः ।**
**त्वचा विस्फोटशमनी बीजं नेत्रामयापहम् ॥१३९॥**

(१) बदर, (२) बदरी, (३) कोली, (४) कर्कन्धू, (५) कोल, (६) फेनिल, (७) सौवीरक, (८) गुडफल, (९) बालेष्ट, (१०) फलशैशिर, (११) दृढबीज, (१२) वृत्तफल, (१३) कण्टकी, (१४) वक्रकण्टक, (१५) सुवीज, (१६) सुफल, (१७) स्वच्छ र (१८) सुरस : यी अठार नाम वयरका संस्कृत पर्यायवाची नामहरू हुन् । बयर गुलियो, टर्रो र अमिलो हुन्छ । राम्ररी पाकेको बयर गुलियो, अमिलो र उष्णवीर्यको हुन्छ । यसले कफविकार गर्दछ, पचाउँदछ तथा अतिसार, रक्तविकार, थकाई र सुजन नाश गर्दछ । यो रुचिप्रद हुन्छ । बयरको पातको लेप दल्नाले ज्वर र डाह नाश हुन्छ । यसको बोक्राले विस्फोटलाई शान्त पार्दछ । बयरको बीजले आँखाका रोगहरू नाश गर्दछ ।



### राजबयर (राजबदर)

**राजबदरो नृपेष्टो नृपबदरो राजवल्लभश्चैव ।**
**पृथुकोलस्तनुबीजो मधुरफलो राजकोलश्च ॥१४०॥**
**राजबदरः सुमधुरः शिशिरो दाहार्तिपित्तवातहरः ।**
**वृष्यश्च वीर्यवृद्धिं कुरुते शोषश्रमं हरते ॥१४१॥**

राजबदर, नृपेष्ट, नृपबदर, राजवल्लभ, पृथुकोल, तनुबीज, मधुरफल र राजकोल : यी राजबयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बयर अति गुलियो, शीतवीर्यको तथा डाह र पित्तविकार नाशक हुन्छ । यो पौष्टिक, वीर्यवर्धक तथा सुजन र थकाई नाशक पनि हुन्छ ।

### बयरविशेष (भूबदरी)

**भूबदरी क्षितिबदरी वल्लीबदरी च बदरिवल्ली च ।**

**बहुफलिका लघुबदरी बदरफली सूक्ष्मबदरी च ॥१४२॥**
**भूबदरी मधुराऽम्ला कफवातविकारहारिणी पथ्या ।**
**दीपनपाचनकर्त्री किञ्चित् पित्तास्रकारिणी रुच्या ॥१४३॥**

भूबदरी, क्षितिबदरी, वल्लीबदरी, बदरिवल्ली, बहुफलिका, लघुबदरी, बदरफली र सूक्ष्मबदरी : यी बयरविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बयर गुलियो, अमिलो तथा कफविकार र वातविकार नाशक एवं पथ्य हुन्छ । यो दीपनी, पाचनी, थोरै पित्तविकार र रक्तविकार गर्ने तथा रुचिप्रद हुन्छ ।

### बयरविशेष (लघुबदर)

**सूक्ष्मफलो लघुबदरो बहुकण्टः सूक्ष्मपत्रको दुःस्पर्शः ।**
**मधुरः शम्बराहारः शिखिप्रियश्चैव निर्दिष्टः ॥१४४॥**
**लघुबदरं मधुराम्लं पक्वं कफवातनाशनं रुच्यम् ।**
**स्निग्धं तु जन्तुकारकमीषत्पित्तार्तिदाहशोषघ्नम् ॥१४५॥**

सूक्ष्मफल, लघुबदर, बहुकण्ट, सूक्ष्मपत्रक, दुःस्पर्श, मधुर, शम्बराहार र शिखिप्रिय : यी बयरविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बयर गुलियो र अमिलो हुन्छ । पाकेपछिको यो बयरले कफविकार र वातविकार नाश गर्दछ तथा रुचि बढाउँदछ । यो चिल्लो, पेटमा कीरा पार्ने तथा केही हदसम्म पित्तविकार, डाह र सुजन नाश गर्ने गुणको हुन्छ ।

### बिमिरो (बीजपूरक)

**बीजपूरो बीजपूर्णः पूर्णबीजस्तु केसरः ।**
**बीजकः केसराम्लश्च मातुलुङ्गः सुपूरकः ॥१४६॥**
**रुचको बीजफलको जन्तुघ्नो दन्तुरत्वचः ।**
**पूरको रोचनफलो द्विदेवमुनिसम्मितः ॥१४७॥**
**बीजपूरफलमम्लकटूष्णं श्वासकासशमनं पचनं च ।**
**कण्ठशोधनपरं लघु हृद्यं दीपनं च रुचिकृज्जरणं च ॥१४८॥**

(१) बीजपूर, (२) बीजपूर्ण, (३) पूर्णबीज, (४) केसर, (५) बीजक, (६) केसराम्ल, (७) मातुलुङ्ग, (८) सुपूरक, (९) रुचक, (१०) बीजफलक, (११) जन्तुघ्न, (१२) दन्तुरत्वच, (१३) पूरक र (१४) रोचनफल : यी चौध नाम बिमिरोका संस्कृत पर्यायवाची नामहरू हुन् । बिमिरो फल अमिलो, पिरो, उष्णवीर्यको तथा दम र खोकी शान्त पार्ने एवं पाचक हुन्छ । यसले उत्कृष्ट तरिकाले घाँटी

सफा गर्दछ । यो पचाउन सहज, मुटुका लागि हितकर, दीपनी, रुचिप्रद र पचाउने गुणको हुन्छ ।

### बिमिरोका विशेष गुण

**बालं पित्तमरुत्कफास्रकरणं मध्यं च तादृग्विधं**
**पक्वं वर्णकरं च हृद्यमथ तत् पुष्णाति पुष्टिं बलम् ।**
**शूलाजीर्णविबन्धमारुतकफश्वासार्तिमन्दाग्निजित्**
**कासारोचकशोफशान्तिदमिदं स्यान्मातुलुङ्गं सदा ॥१४९॥**

कलिलो बिमिरोले पित्तविकार, वातविकार, कफविकार र रक्तविकार गर्दछ । छिप्पिएको बिमिरोमा पनि यिनै गुण हुन्छन् । पाकेको बिमिरो शरीरको वर्णमा निखार लेराउने, मुटुका लागि हितकर तथा पुष्टिदायक र बलदायक हुन्छ । यसले शूल, अजीर्ण, विबन्ध, वातविकार, कफविकार, दम र कमजोर पाचनशक्ति हुने रोगलाई जित्दछ । पाकेको बिमिरोले सधैं खोकी, अरुची र सुजनलाई शान्त पार्दछ ।

### बिमिरोका अन्य भागको गुण

**त्वक्तिक्ता दुर्जरा स्यात् कृमिकफपवनध्वंसिनी स्निग्धमुष्णं**

**मध्यं शूलार्तिपित्तप्रशमनमखिलारोचकघ्नं च गौल्यम् ।**
**वातार्तिघ्नं कटूष्णं जठरगदहरं केसरं दीप्यमम्लं**
**बीजं तिक्तं कफार्शःश्वयथुशमकरं बीजपूरस्य पथ्यम् ॥१५०॥**

बिमिरो फलको बोक्रा तीतो हुन्छ । यसले कीरा, कफविकार र वातविकार नाश गर्दछ । यो चिल्लो र उष्णवीर्यको हुन्छ । विमिरो फलको बीचको भागले शूल, पित्तविकार र सबै खालका अरुची नाश गर्दछ । यो भाग गुलियो हुन्छ । यसको केसरले वातविकार नाश गर्दछ । यो पिरो र उष्णवीर्यको हुन्छ । केसरले पेटका रोग नाश गर्दछ । यो दीपनी र अमिलो हुन्छ । बिमिरोको बीज तीतो हुन्छ । यसले कफविकार, अल्काई र श्वयथुलाई शान्त पार्दछ । यो पथ्य पनि हुन्छ ।

### बनबिमिरो (वनबीजपूरक)

**वनबीजपूरकोऽन्यो वनजो वनपूरकश्च वनबीजः ।**
**अत्यम्ला गन्धाढ्या वनोद्भवा देवदूती च ॥१५१॥**
**पीता च देवदासी देवेष्टा मातुलुङ्गिका चैव ।**
**पवनी महाफला च स्यादियमिति वेदभूमिमिता ॥१५२॥**
**अम्लः कटूष्णो वनबीजपूरो रुचिप्रदो वातविनाशनश्च ।**

**स्यादम्लदोषकृमिनाशकारी कफापहः श्वासनिषूदनश्च ॥१५३॥**

(१) वनबीजपूरक, (२) वनज, (३) वनपूरक, (४) वनबीज, (५) अत्यम्ला, (६) गन्धाढ्या, (७) वनोद्भवा, (८) देवदूती, (९) पीता, (१०) देवदासी, (११) देवेष्टा, (१२) मातुलुङ्गिका, (१३) पवनी र (१४) महाफला : यी चौध नाम बनबिमिरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, पिरो, उष्णवीर्यको, रुचिप्रद र वातविकार नाशक हुन्छ । यसले अमलपित्त, कीरा, कफविकार र दम नाश गर्दछ ।

मधुबिमिरो (मधुबीजपूरक)

**अथ मधुरबीजपूरो मधुपर्णी मधुरकर्कटी मधुवल्ली ।**
**मधुकर्कटी मधुरफला महाफला वर्धमाना च ॥१५४॥**
**मधुकर्कटी मधुरा शिशिरा दाहनाशनी ।**
**त्रिदोषशमनी रुच्या वृष्या च गुरुदुर्जरा ॥१५५॥**

मधुरबीजपूर, मधुपर्णी, मधुरकर्कटी, मधुवल्ली, मधुकर्कटी, मधुरफला, महाफला र वर्धमाना : यी नाम मधुबिमिरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको र डाहनाशक हुन्छ । यसले त्रिदोषलाई शान्त पार्दछ, रुचि जगाउँदछ र वीर्यवृद्धि गर्दछ । यो पचाउन कठिन हुन्छ र ढिलो पच्दछ ।

अमला (आमलकी)

**आमलकी वयस्था च श्रीफला धात्रिका तथा ।**
**अमृता च शिवा शान्ता शीताऽमृतफला तथा ॥१५६॥**
**जातीफला च धात्रेयी ज्ञेया धात्रीफला तथा ।**
**वृष्या वृत्तफला चैव रोचनी च चतुर्दश ॥१५७॥**
**आमलकं कषायाम्लं मधुरं शिशिरं लघु ।**
**दाहपित्तवमीमेहशोफघ्नं च रसायनम् ॥१५८॥**
**कटु मधुरकषायं किञ्चिदम्लं कफघ्नं**
**रुचिकरमतिशीतं हन्ति पित्तास्रतापम् ।**
**श्रमवमनविबन्धाध्मानविष्टम्भदोष-**
**प्रशमनममृताभं चामलक्याः फलं स्यात् ॥१५९॥**

(१) आमलकी, (२) वयस्था, (३) श्रीफला, (४) धात्रिका, (५) अमृता, (६) शिवा, (७) शान्ता, (८)

शीता, (९) अमृतफला, (१०) जातीफला, (११) धात्रेयी, (१२) धात्रीफला, (१३) वृष्या, (१४) वृत्तफला र (१५) रोचनी : यी पन्ध्र (चौध भनिएको) नाम अमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । अमला टर्रो, अमिलो, गुलियो, शीतवीर्यको र पचाउन सहज हुने गुणको हुन्छ । यसले डाह, पित्तविकार, वाकवाकी, प्रमेह र सुजन नाश गर्दछ । यो रसायनी हुन्छ । यो पिरो, गुलियो, टर्रो र केही अमिलो तथा कफविकार नाशक हुन्छ । अमला रुचिप्रद, अति नै शीतवीर्यको तथा पित्तविकार र रक्तविकारले गर्ने डाह नाशक हुन्छ । यसको फलले थकाई, वाकवाकी, कब्जियत, आध्मान र विष्टम्भलाई शान्त पार्दछ ।

### काठे अमला (काष्ठधात्रीफल)

**अन्यच्चामलकं प्रोक्तं काष्ठधात्रीफलं तथा ।**
**क्षुद्रामलकमित्युक्तं क्षुद्रजातीफलञ्च तत् ॥१६०॥**
**काष्ठधात्रीफलं स्वादे कषायं कटुकं तथा ।**
**शीतं पित्तास्रदोषघ्नं पूर्वोक्तमधिकं गुणैः ॥१६१॥**

काष्ठधात्रीफल, क्षुद्रामलक र क्षुद्रजातीफल : यी अर्कोथरी अमला अर्थात् काठेअमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमलाको स्वाद टर्रो र पिरो हुन्छ । यो अमला शीतवीर्यको तथा पित्तविकार र रक्तविकार नाशक हुन्छ । यो पूर्वोक्त अमलाभन्दा बढी गुनिलो हुन्छ ।



### अमिली (चिञ्चा)

**चिञ्चा तु चुक्रिका चुक्रा साम्लिका शाकचुक्रिका ।**
**अम्ली सुतिन्तिडी चाम्ला चुक्रीका च नवाभिधा ॥१६२॥**
**चिञ्चाऽत्यम्ला भवेदामा पक्वा तु मधुराम्लिका ।**
**वातघ्नी पित्तदाहास्रकफदोषप्रकोपणी ॥१६३॥**
**अम्लिकायाः फलं त्वाममत्यम्लं लघु पित्तकृत् ।**
**पक्वं तु मधुराम्लं स्याद्भेदि विष्टम्भवातजित् ॥१६४॥**
**पक्वचिञ्चाफलरसो मधुराम्लो रुचिप्रदः ।**
**शोफपाककरो लेपाद्व्रणदोषविनाशनः ॥१६५॥**
**चिञ्चापत्रञ्च शोफघ्नं रक्तदोषव्यथापहम् ।**
**तस्याः शुष्कत्वचाक्षारं शूलमन्दाग्निनाशनम् ॥१६६॥**

(१) चिञ्चा, (२) चुक्रिका, (३) चुक्रा, (४) अम्लिका, (५) शाकचुक्रिका, (६) अम्ली, (७) तिन्तिडी, (८) अम्ला र (९) चुक्री(का) : यी नौ नाम अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । काँचो

आँमलो आँत नै आँमलो हुन्छ तर पाकेपछि अमलो र गुलियो हुन्छ । आँमलोले वातविकार नाश गर्दछ तर पित्तविकार, डाह, रक्तविकार र कफविकार बढाउँदछ । अमिलीको काँचो फल अति अमिलो, पचाउन सहज र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको अमिली गुलियो र अमिलो हुन्छ । यो भेदनी हुन्छ र यसले विष्टम्भ र वातविकारलाई जित्दछ । पाकेको अमिलीको रस अमिलो र गुलियो हुन्छ । यसले रुचि जगाउँदछ र सुजनलाई पकाउँदछ । यो रस दल्नाले घाउखटिराको विकार नाश हुन्छ । अमिलीको पातले सुजन तथा रक्तविकारजन्य पीडा नाश गर्दछ । यसको सुकेको बोक्राको क्षारले शूल र कमजोर पाचनशक्तिलाई नाश गर्दछ ।

### अमिलीको रस (अम्लसार)

**अम्लसारस्तु शाकाम्लं चुक्राम्लं चाम्लचुक्रिका ।**
**चिञ्चाम्लमम्लचूडश्च चिञ्चारसोऽपि सप्तधा ॥१६७॥**
**अम्लसारस्त्वतीवाम्लो वातघ्न कफदाहकृत् ।**
**साम्येन शर्करामिश्रो दाहपित्तकफार्तिनुत् ॥१६८॥**

(१) अम्लसार, (२) शाकाम्ल, (३) चुक्राम्ल, (४) अम्लचुक्रिका, (५) चिञ्चाम्ल, (६) अम्लचूड र (७) चिञ्चारस : यी सात नाम अमिलीको रसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रस अति नै अमिलो, वातविकार नाशक तथा कफविकार र डाहकारक हुन्छ । बराबर मात्रामा सखर वा चिनी मिसाएपछि यसले डाह, पित्तविकार कफविकार नाश गर्दछ ।



### अमारो (आम्रातक)

**आम्रातकः पीतनकः कपिचूतोऽम्लवाटकः ।**
**शृङ्गी कपी रसाढ्यश्च तनुक्षीरः कपिप्रियः ॥१६९॥**
**आम्रातकं कषायाम्लमामहृत्कण्ठहर्षणम् ।**
**पक्वन्तु मधुराम्लाढ्यं स्निग्धं पित्तकफापहम् ॥१७०॥**

आम्रातक, पीतनक, कपिचूत, अम्लवाटक, शृङ्गी, कपी, रसाढ्य, तनुक्षीर र कपिप्रिय : यी अमारोका संस्कृत पर्यायवाची नामहरू हुन् । अमारो टर्रो, अमिलो, आमविकार नाशक र घाँटीका लागि सुखदायक हुन्छ । पाकेको अमारो गुलियो र अमिलो हुन्छ । यो चिल्लो हुन्छ । यसले पित्तविकार र कफविकारलाई नियन्त्रण गर्दछ ।

### सुन्तला (नारङ्ग)

**नारङ्गस्यान्नागरङ्गः सुरङ्गस्त्वग्गन्धश्चैरावतो वक्त्रवासः ।**

**योगीरङ्गो योगरङ्गः सुरङ्गो गन्धाढ्योऽयं गन्धपत्रो रवीष्टः ॥१७१॥**
**नारङ्गं मधुरं चाम्लं गुरूष्णञ्चैव रोचनम् ।**
**वातामक्रिमिशूलघ्नं श्रमहृद्बलरुच्यदम् ॥१७२॥**

नारङ्ग, नागरङ्ग, सुरङ्ग, त्वग्गन्ध, ऐरावत, वक्त्रवास, योगीरङ्ग, योगरङ्ग, सुरङ्ग ( दोहोरिएको), गन्धाढ्य, गन्धपत्र र रवीष्ट : यी सुन्तलाका संस्कृत पर्यायवाची नामहरू हुन् । सुन्तला गुलियो, अमिलो, पचाउन कठिन, उष्णवीर्यको र रोचनी हुन्छ । यसले वातविकार, आमविकार, कीरा, शूल र थकाई नाश गर्दछ । यसले बल दिन्छ र रुचि जगाउँदछ ।

## कागती (निम्बूक)

**निम्बूकः स्यादम्लजम्बीरकाख्यो वह्निर्दीप्यो वह्निबीजोऽम्लसारः ।**
**दन्ताघातः शोधनो जन्तुमारी निम्बूकः स्याद्रोचनो रुद्रसञ्ज्ञः ॥१७३॥**
**निम्बूफलं प्रथितमम्लरसं कटूष्णं गुल्मामवातहरमाग्निविवृद्धिकारि ।**
**चक्षुष्यमेतदथ कासकफार्तिकण्ठविच्छर्दिहारि परिपक्वमतीव रुच्यम् ॥१७४॥**

(१) निम्बूक, (२) अम्ल, (३) जम्बीर, (४) वह्निर्दीप्य, (५) वह्निबीज, (६) अम्लसार, (७) दन्ताघात, (८) शोधन, (९) जन्तुमारी, (१०) निम्बूक (दोहोरिएको) र (११) रोचना : यी एघार नाम कागतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको फल अमिलो, पिरो र उष्णवीर्यको हुन्छ । यसले गुल्म र वातविकार नाश गर्दछ तथा पाचनशक्ति बढाउँदछ । यो आँखाका लागि हितकर हुन्छ । यसले खोकी, कफविबार, घाँटीका रोग र वाकवाकी नाश गर्दछ । पाकेको कागती भने अती रुचिवर्धक हुन्छ ।

## ज्यामिर (जम्बीर)

**जम्बीरो दन्तशठो जम्भो जम्भीरजम्भलौ चैव ।**
**रोचनको मुखशोधी जाड्यारिर्जन्तुजिन्नवधा ॥१७५॥**
**जम्बीरस्य फलं रसेऽम्लमधुरं वातापहं पित्तकृत्**
**पथ्यं पाचनः रोचनं बलकरं वह्नेर्विवृद्धिप्रदम् ।**
**पक्वञ्चेन्मधुरं कफार्तिशमनं पित्तास्रदोषापनुत्**
**वर्ण्यं वीर्यविवर्धनञ्च रुचिकृत्पुष्टिप्रदं तर्पणम् ॥१७६॥**

जम्बीर, दन्तशठ, जम्भ, जम्भीर, जम्भल, रोचनक, मुखशोधी, जाड्यारि र जन्तुजित् : यी ज्यामिरका संस्कृत पर्यायवाची नामहरू हुन् । ज्यामिर फलको रस अमिलो, गुलियो, वातविकार नाशक र पित्तविकार गर्ने गुणको हुन्छ । यो पथ्य, पाचनी, रोचनी, बलदायक र पाचनशक्ति

बढाउने खालको हुन्छ । पाकेको ज्यामिर गुलियो, कफविकार शान्त पार्ने तथा पित्तविकार र रक्तविकार ठिक गर्ने गुणको हुन्छ । ज्यामिरले वर्णमा निखार लेराउने, वीर्य बढाउने, रुचि जगाउने, पुष्टि प्रदान गर्ने र तृप्त पार्ने काम गर्दछ ।

### चाक्सी वा मौसम वा जुनार (मधुजम्बीर)

**अन्यो मधुजम्बीरो मधुजम्भो मधुरजम्भलश्चैव ।**
**शङ्खद्रावी शर्करकः पित्तद्रावी च षट्सञ्ज्ञः ॥१७७॥**
**मधुरो मधुजम्बीरो शिशिरः कफपित्तनुत् ।**
**शोषघ्नस्तर्पणो वृष्यः श्रमघ्नः पुष्टिकारकः ॥१७८॥**

(१) मधुजम्बीर, (२) मधुजम्भ, (३) मधुरजम्भल, (४) शङ्खद्रावी, (५) शर्करक र (६) पित्तद्रावी : यी छ नाम मधुजम्बीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले सुजन पनि नाश गर्दछ । यो वीर्यवर्धक, थकाई नाशक र पुष्टिकारक हुन्छ ।

### कैथ (कपित्थ)



**मालूरस्तु कपित्थो मङ्गल्यो नीलमल्लिका च दधि ।**
**ग्राहिफलश्चिरपाकी ग्रन्थिफलो कचफलो दधिफलश्च ॥१७९॥**
**गन्धफलश्च कपीष्टो वृत्तफलः करभवल्लभश्चैव ।**
**दन्तशठः कठिनफलः करण्डफलकश्च सप्तदशसञ्ज्ञः ॥१८०॥**

(१) मालूर, (२) कपित्थ, (३) मङ्गल्य, (४) नीलमल्लिका, (५) दधि, (६) ग्राहिफल, (७) चिरपाकी, (८) ग्रन्थिफल, (९) क(कु)चफल, (१०) दधिफल, (११) गन्धफल, (१२) कपीष्ट, (१३) वृत्तफल, (१४) करभवल्लभ, (१५) दन्तशठ, (१६) कठिनफल र (१७) करण्डफलक : यी सत्र नाम कैथका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कैथका गुण

**कपित्थो मधुराम्लश्च कषायस्तिक्तशीतलः ।**
**वृष्यः पित्तानिलं हन्ति सङ्ग्राही व्रणनाशनः ॥१८१॥**
**आमं कपित्थाम्लोष्णां कफघ्नं ग्राहि वातलम् ।**
**दोषत्रयहरं पक्वं मधुराम्लरसं गुरु ॥१८२॥**

कैथ गुलियो, अमिलो, टर्रो, तीतो र शीतवीर्यको हुन्छ । यो वीर्यवर्धक, पित्तविकार र वातविकार नाशक, ग्राही र घाउखटिरा नाशक हुन्छ । काँचो कैथ अमिलो, उष्णवीर्यको, कफविकार नाशक, ग्राही र वातविकार गर्ने गुणको हुन्छ । पाकेको कैथ त्रिदोष नाशक, गुलियो र अमिलो स्वादको तथा पचाउन कठिन हुने गुणको हुन्छ ।

### कैथका अन्य गुण

**आमं कण्ठरुजं कपित्थमधिकं जिह्वाजडत्वावहं**
**तद्दोषत्रयवर्धनं विषहरं सङ्ग्राहकं रोचकम् ।**
**पक्वं श्वासवमिश्रमक्लमहरं हिक्काऽपनोदक्षमं**
**सर्वं ग्राहि रुचिप्रदं च कथितं सेव्यं ततः सर्वदा ॥१८३॥**

काँचो कैथ घाँटीका रोगका लागि र विशेषत जिब्रोको लाटो पन हटाउनका लागि ओखती हुन्छ । यसले त्रिदोष बढाउँदछ र विषविकार नाशक गर्दछ । यो ग्राही र रोचक हुन्छ । पाकेको कैथले दम, वाकवाकी, थकाई र मानसिक थकाई नाश गर्दछ । यसले बाडुलीलाई रोक्दछ । सम्पूर्णरूपमा यो ग्राही र रुचिप्रद हुन्छ, यसैले सधैँ खाने गर्नु भनिएको छ ।

### टिमुर (तुम्बरु)



**तुम्बरुः सौरभः सौरो वनजः सानुजो द्विजः ।**
**तीक्ष्णवल्कस्तीक्ष्णफलस्तीक्ष्णपत्रो महामुनिः ॥**
**स्फुटफलः सुगन्धिश्च स प्रोक्तो द्वादशाह्वयः ॥१८४॥**
**तुम्बरुर्मधुरस्तिक्तः कटूष्णः कफवातनुत् ।**
**शूलगुल्मोदराध्मानकृमिघ्नो वह्निदीपनः ॥१८५॥**

(१) तुम्बरु, (२) सौरभ, (३) सौर, (४) वनज, (५) सानुज, (६) द्विज, (७) तीक्ष्णवल्क, (८) तीक्ष्णफल, (९) तीक्ष्णपत्र, (१०) महामुनि, (११) स्फुटफल र (१२) सुगन्धि : यी बाह्र नाम टिमुरका संस्कृत पर्यायवाची नामहरू हुन् । टिमुर गुलियो, तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले शूल, गुल्म, पेटका रोग, आध्मान र पेटका कीरा नाश गर्दछ तथा जठराग्निलाई बाल्दछ ।

### रुद्राक्ष

**रुद्राक्षश्च शिवाक्षश्च शर्वाक्षो भूतनाशनः ।**
**पावनो नीलकण्ठाक्षो हराक्षश्च शिवप्रियः ॥१८६॥**

**रुद्राक्षमम्लमुष्णं च वातघ्नं कफनाशनम् ।**
**शिरोऽर्तिशमनं रुच्यं भूतग्रहविनाशनम् ॥१८७॥**

रुद्राक्ष, शिवाक्ष, शर्वाक्ष, भूतनाशन, पावन, नीलकण्ठाक्ष, हराक्ष र शिवप्रिय : यी रुद्राक्षका संस्कृत पर्यायवाची नामहरू हुन् । रुद्राक्ष अमिलो, उष्णवीर्यको तथा वातविकार र कफविकार नाशक हुन्छ । रुद्राक्षले टाउकाका रोगलाई शान्त पार्नुका साथै रुची जगाउँदछ तथा भूतबाधा र ग्रहबाधा नाश गर्दछ ।

बेल (बिल्व)

**बिल्वः शल्यो हृद्यगन्धः शलाटुः शाण्डिल्यः स्याच्छ्रीफलः कर्कटाह्वः ।**
**शैलूषः स्याच्छैवपत्रः शिवेष्टः पत्रश्रेष्ठो गन्धपत्रस्त्रिपत्रः ॥१८८॥**
**लक्ष्मीफलो गन्धफलो दुरारुहस्त्रिशाकपत्रस्त्रिशिखः शिवद्रुमः ।**
**सदाफलः सत्फलदः सुभूतिकः समीरसारः शिखिनेत्रसञ्ज्ञितः ॥१८९॥**
**बिल्वस्तु मधुरो हृद्यः कषायः पित्तजित् गुरुः ।**
**कफज्वरातिसारघ्नो रुचिकृद्दीपनः परः ॥१९०॥**
**बिल्वमूलं त्रिदोषघ्नं मधुरं लघु वातनुत् ।**
**फलं तु कोमलं स्निग्धं गुरु सङ्ग्राहि दीपनम् ॥१९१॥**
**तदेव पक्वं विज्ञेयं मधुरं सरसं गुरु ।**
**कटुतिक्तकषायोष्णं सङ्ग्राहि च त्रिदोषजित् ॥१९२॥**



(१) बिल्व, (२) शल्य, (३) हृद्यगन्ध, (४) शलाटु, (५) शाण्डिल्य, (६) श्रीफल, (७) कर्कटाह्व, (८) शैलूष, (९) शैवपत्र, (१०) शिवेष्ट, (११) पत्रश्रेष्ठ, (१२) गन्धपत्र, (१३) त्रिपत्र, (१४) लक्ष्मीफल, (१५) गन्धफल, (१६) दुरारुह, (१७) त्रिशाकपत्र, (१८) त्रिशिख, (१९) शिवद्रुम, (२०) सदाफल, (२१) सत्फलद, (२२) सुभूतिक र (२३) समीरसार : यी तेईस नाम बेलका संस्कृत पर्यायवाची नामहरू हुन् । बेल गुलियो, मुटुका लागि हितकर, टर्रो, पित्तविकारलाई जित्ने र पचाउन कठिन हुने गुणको हुन्छ । यसले कफविकार, ज्वर र अतिसारलाई नाश गर्दछ । यो रुचिप्रद र अत्यन्त दीपनी हुन्छ । बेलको जरा त्रिदोषनाशक, गुलियो, पचाउन सहज र वातविकार नाशक हुन्छ । बेलको फल कोमल, चिल्लो, पचाउन कठिन, ग्राही र दीपनी हुन्छ । यसैगरी बेलको पाकेको फल गुलियो रसको र पचाउन कठिन हुन्छ । यो पिरो, तीतो, टर्रो, उष्णवीर्यको, ग्राही र त्रिदोषनाशक हुन्छ ।

## काँडे सल्लो (सल्लकी)

**सल्लकः सल्लकी सल्ली सुगन्धा सुरभिस्रवा ।**
**सुरभिर्गजभक्ष्या च सुवहा गजवल्लभा ॥१९३॥**
**गन्धमूला मुखामोदा सुश्रीका जलविक्रमा ।**
**हृद्या कुण्टरिका चैव प्रोक्ता त्र्यस्रफला च सा ॥**
**छिन्नरुहा गन्धफला ज्ञेया चाष्टादशाह्वया ॥१९४॥**
**सल्लकी तिक्तमधुरा कषाया ग्राहिणी परा ।**
**कुष्ठास्रकफवातार्शोव्रणदोषार्तिनाशिनी ॥१९५॥**

(१) सल्लक, (२) सल्लकी, (३) सल्ली, (४) सुगन्धा, (५) सुरभिस्रवा, (६) सुरभि, (७) गजभक्ष्या, (८) सुवहा, (९) गजवल्लभा, (१०) गन्धमूला, (११) मुखामोदा, (१२) सुश्रीका, (१३) जलविक्रमा, (१४) हृद्या, (१५) कुण्टरिका, (१६) त्र्यस्रफला, (१७) छिन्नरुहा र (१८) गन्धफला : यी अठार नाम काँडे सल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सल्लो तीतो, गुलियो, टर्रो र अत्यन्त ग्राही हुन्छ । यसले कुष्ठ, रक्तविकार, कफविकार, वातविकार, अल्काई र घाउखटिरा नाश गर्दछ ।



## निर्मली (कतक)

**कतकोऽम्बुप्रसादश्च कतस्तिक्तफलस्तथा ।**
**रुच्यस्तु छेदनीयश्च ज्ञेयो गुडफलः स्मृतः ॥**
**प्रोक्तः कतफलस्तिक्तमरीचश्च नवाह्वयः ॥१९६॥**
**कतकः कटुतिक्तोष्णश्चक्षुष्यः कृमिदोषनुत् ।**
**रुचिकृच्छूलदोषघ्नो बीजमम्बुप्रसादनः ॥१९७॥**

(१) कतक, (२) अम्बुप्रसाद, (३) कत, (४) तिक्तफल, (५) रुच्य, (६) छेदनीय, (७) गुडफल, (८) कतफल र (९) तिक्तमरीच : यी नौ नाम निर्मलीका संस्कृत पर्यायवाची नामहरू हुन् । निर्मली पिरो, तीतो, उष्णवीर्यको, आँखाका लागि हितकर र कीराजन्यविकार नाशक हुन्छ । यो रुचिप्रद र शूलविकार नाशक हुन्छ । यसको बीज पानी प्रशोधन गर्न उपयोगी हुन्छ ।

## जङ्गली अमला विशेष (कर्कट)

**कर्कटः कार्कटः कर्कः क्षुद्रधात्री च स स्मृतः ।**
**क्षुद्रामलकसञ्ज्ञश्च प्रोक्तः कर्कफलश्च षट् ॥१९८॥**

**कार्कटं तु फलं रुच्यं कषायं दीपनं परम् ।**
**कफपित्तहरं ग्राहि चक्षुष्यं लघु शीतलम् ॥१९९॥**

(१) कर्कट, (२) कार्कट, (३) कर्क, (४) क्षुद्रधात्री, (५) क्षुद्रामलक र (६) कर्कफल : यी छ नाम जङ्गली अमलाविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमलाको फल रुचिप्रद, टर्रो र अत्यन्त दीपनी हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । यो ग्राही, आँखाका लागि हितकर, पचाउन सहज र शीतवीर्यको हुन्छ ।

### लप्सी (श्लेष्मातक)

**श्लेष्मातको बहुवारः पिच्छलो द्विजकुत्सितः ।**
**शेलुः शीतफलः शीतः शाकटः कर्बुदारकः ॥**
**भूतद्रुमो गन्धपुष्पः ख्यात एकादशाह्वयः ॥२००॥**
**श्लेष्मातकः कटुहिमो मधुरः कषायः स्वादुश्च पाचनकरः क्रिमिशूलहारी ।**
**आमास्रदोषमलरोधबहुव्रणार्तिविस्फोटशान्तिकरणः कफकारकश्च ॥२०१॥**

(१) श्लेष्मातक, (२) बहुवार, (३) पिच्छल, (४) द्विजकुत्सित, (५) शेलु, (६) शीतफल, (७) शीत, (८) शाकट, (९) कर्बुदारक, (१०) भूतद्रुम र (११) गन्धपुष्प : यी एघार नाम लप्सीका संस्कृत पर्यायवाची नामहरू हुन् । लप्सी पिरो, शीतवीर्यको, गुलियो, टर्रो, स्वादिलो, पाचक तथा कीरा र शूल नाशक हुन्छ । यसले आमविकार, रक्तविकार, कब्जियत, कडा खालका घाउखटिरा र विस्फोटलाई शान्त पार्दछ । लप्सीले कफविकार गर्दछ ।

### सानो बोहरी (भूकर्बुदार)

**भूकर्बुदारकश्चान्यः क्षुद्रश्लेष्मातकस्तथा ।**
**भूशेलुर्लघुशेलुश्च पिच्छलो लघुपूर्वकः ॥**
**लघुशीतः सूक्ष्मफलो लघुभूतद्रुमश्च सः ॥२०२॥**
**भूकर्बुदारो मधुरः क्रिमिदोषविनाशनः ।**
**वातप्रकोपणः किञ्चित्सशीतः स्वर्णमारकः ॥२०३॥**

भूकर्बुदारक, क्षुद्रश्लेष्मातक, भूशेलु, लघुशेलु, लघुपिच्छल, लघुशीत, सूक्ष्मफल र लघुभूतद्रुम : यो सानो बोहरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र कीराजन्यविकार नाशक हुन्छ । यसले वातविकार बढाउँदछ, थोरै शीतवीर्यको हुन्छ र सुनलाई प्रशोधन गर्न (स्वर्णभस्म बनाउन) सहयोगी हुन्छ ।

### लोधविशेष (मुष्कक)

**मुष्कको मोचको मुष्को मोक्षको मुञ्चकस्तथा ।**
**गौलिको मेहनश्चैव क्षारवृक्षश्च पाटलिः ॥२०४॥**
**विषापहो जटालश्च वनवासी सुतीक्ष्णकः ।**
**श्वेतः कृष्णश्च स द्वेधा स्यात्त्रयोदशसञ्ज्ञकः ॥२०५॥**
**मुष्ककः कटुकोऽम्लश्च रोचनः पाचनः परः ।**
**प्लीहगुल्मोदरार्तिघ्नो द्विधा तुल्यगुणान्वितः ॥२०६॥**

(१) मुष्कक, (२) मोचक, (३) मुष्क, (४) मोक्षक, (५) मुञ्चक, (६) गौलिक, (७) मेहन, (८) क्षारवृक्ष, (९) पाटलि, (१०) विषापह, (११) जटाल, (१२) वनवासी र (१३) सुतीक्ष्णक : यी तेह्र नाम लोधविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सेतो र कालो गरी दुई किसिमको हुन्छ । यो पिरो, अमिलो, रोचनी र अत्यन्त पाचनी हुन्छ । यसले फियोका रोग, गुल्म र पेटका रोग नाश गर्दछ । दुवै बुढेत्रोका गुण उस्तै हुन्छन् ।

### करौंजी (करमर्द)

**करमर्दः सुषेणश्च कराम्लः करमर्दकः ।**
**अविघ्नः पाणिमर्दश्च कृष्णपाकफलो मुनिः ॥२०७॥**
**करमर्दः सतिक्ताम्लो बालो दीपनदाहकः ।**
**पक्वस्त्रिदोषशमनोऽरुचिघ्नो विषनाशनः ॥२०८॥**

(१) करमर्द, (२) सुषेण, (३) कराम्ल, (४) करमर्दक, (५) अविघ्न, (६) पाणिमर्द र (७) कृष्णपाकफल : यी सात नाम करौंजीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो र अमिलो हुन्छ । कलिलो करौंजी दीपनी र डाहकारी हुन्छ । पाकेको करौंजी त्रिदोष शान्त पार्ने, अरुची नाशक र विषविकार नाशक हुन्छ ।

### तेजफल

**तेजःफलो बहुफलस्तथोक्तः शाल्मलीफलः ।**
**फलस्तीक्ष्णादिसंयुक्तः फलान्तस्तवकादिकः ॥**
**स्तेयीफलो गन्धफलः कण्टवृक्षः प्रकीर्तितः ॥२०९॥**
**तेजःफलः कटुस्तीक्ष्णः सुगन्धिर्दीपनः परः ।**
**वातश्लेष्माऽरुचिघ्नश्च बालरक्षाकरः परः ॥२१०॥**

तेजःफल, बहुफल, शाल्मलीफल, तीक्ष्ण र यसका पर्यायका पछाडि फल जोडिएका शब्द, स्तवक र यसका पर्यायका पछाडि फल जोडिएका शब्द, स्तेयीफल, गन्धफल र कण्टवृक्ष : यी तेजफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तिक्खर, सुगन्धी र अत्यन्त दीपनी हुन्छ । यसले वातविकार, कफविकार र अरुची नाश गर्दछ तथा भूतादि बाधाबाट उत्तम तरिकाले बालबालिकालाई रक्षा गर्दछ ।

### विकण्टक (मयल ?)

**विकण्टको मृदुफलो ग्रन्थिलः स्वादुकण्टकः ।**
**गोकण्टकः काकनाशो व्याघ्रपादो घनद्रुमः ॥२११॥**
**गर्जाफलो घनफलो मेघस्तनितोद्भवश्च मुदिरफलः ।**
**प्रावृष्यो हास्यफलः स्तनितफलः पञ्चदशसञ्ज्ञः ॥२१२॥**
**विकण्टकः कषायः स्यात् कटू रूक्षो रुचिप्रदः ।**
**दीपनः कफहारी च वस्त्ररङ्गविधायकः ॥२१३॥**

(१) विकण्टक, (२) मृदुफल, (३) ग्रन्थिल, (४) स्वादुकण्टक, (५) गोकण्टक, (६) काकनाश, (७) व्याघ्रपाद, (८) घनद्रुम, (९) गर्जाफल, (१०) घनफल, (११) मेघस्तनितोद्भव, (१२) मुदिरफल, (१३) प्रावृष्य, (१४) हास्यफल र (१५) स्तनितफल : यी पन्ध्र नाम विकण्टकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, पिरो, रुखो, रुचिप्रद, दीपनी, कफविकार नाशक र कपडा रङ्गाउन उपयोगी हुन्छ ।



### हर्रो (हरीतकी)

**हरीतकी हैमवती जयाऽभया शिवाऽव्यथा चेतनिका च रोहिणी ।**
**पथ्या प्रपथ्याऽपि च पूतनाऽमृता जीवप्रिया जीवनिका भिषग्वरा ॥२१४॥**
**जीवन्ती प्राणदा जीव्या कायस्था श्रेयसी च सा ।**
**देवी दिव्या च विजया वह्निनेत्रमिताभिधा ॥२१५॥**

(१) हरीतकी, (२) हैमवती, (३) जया, (४) अभया, (५) शिवा, (६) अव्यथा, (७) चेतनिका (चेतना), (८) रोहिणी, (९) पथ्या, (१०) प्रपथ्या, (११) पूतना, (१२) अमृता, (१३) जीवप्रिया, (१४) जीवनिका, (१५) भिषग्वरा, (१६) जीवन्ती, (१७) प्राणदा, (१८) जीव्या, (१९) कायस्था, (२०) श्रेयसी, (२१) देवी, (२२) दिव्या र (२३) विजया : यी तेईस नाम हर्रोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## हर्रोका गुण

**हरीतकी पञ्चरसा च रेचनी कोष्ठामयघ्नी लवणेन वर्जिता ।**
**रसायनी नेत्ररुजापहारिणी त्वगामयघ्नी किल योगवाहिनी ॥२१६॥**

हर्रोमा नुनिलो बाहेकका अन्य पाँच रस हुन्छन् । यो रेचनी र पेटका (कलेजो, फोक्सो आदि समेत) रोग नाशक हुन्छ । हर्रो रसायनी, आँखाका रोग र छालाका रोग नाशक र योगवाहिनी हुन्छ ।

## हर्रोका रस

**बीजास्थितिक्ता मधुरा तदन्तस्त्वग्भागतः सा कटुरुष्णवीर्या ।**
**मांसांशतश्चाम्लकषाययुक्ता हरीतकी पञ्चरसा स्मृतेयम् ॥२१७॥**

हर्रोको बीजको बाहिरी भाग गुलियो तथा बीजको भित्री भाग पिरो र उष्णवीर्यको हुन्छ । गुदी अमिलो र टर्रो हुन्छ । यसरी हर्रोमा पाँच रस हुने गर्दछन् ।

## हर्रोका प्रकार



**हरीतक्यमृतोत्पन्ना सप्तभेदैरुदीरिता ।**
**तस्या नामानि वर्णांश्च वक्ष्याम्यथ यथाक्रमम् ॥२१८॥**
**विजया रोहिणी चैव पूतना चामृताऽभया ।**
**जीवन्ती चेतनी चेति नाम्ना सप्तविधा मता ॥२१९॥**
**अलावुनाभिर्विजया सुवृत्ता रोहिणी मता ।**
**स्वल्पत्वक् पूतना ज्ञेया स्थूलमांसाऽमृता स्मृता ॥२२०॥**
**पञ्चास्रा चाभया ज्ञेया जीवन्ती स्वर्णवर्णभाक् ।**
**त्र्यस्रान्तु चेतकीं विद्यादित्यासां रूपलक्षणम् ॥२२१॥**

अमृतबाट उत्पन्न भएको हर्रो सात प्रकारको हुन्छ भनिएको छ । अब म तिनका नाम र रङ क्रमैले बताउँदछु । विजया, रोहिणी, पूतना, अमृता, अभया, जीवन्ती र चेतनी : यी सात प्रकारका हर्रो हुन् । तुम्बे लौकाको जस्तो नाइटो हुने हर्रोलाई विजया, गोलो हुनेलाई रोहिणी, पातलो बोक्रा हुनेलाई पूतना, मोटो वा धेरै गुदी हुनेलाई अमृता, पाँच वटा धर्का हुनेलाई अभया, सुनजस्तो पहेँलो वर्णको हुनेलाई जीवन्ती र तीन धर्सा हुनेलाई चेतकी भनी जान्नू । यी हर्रोका रूप र लक्षण हुन् ।

## हर्रोको प्राप्तिस्थान

विन्ध्याद्रौ विजया हिमाचलभवा स्याच्चेतकी पूतना
सिन्धौ स्यादथ रोहिणी तु विजया जाता प्रतिस्थानके ।
चम्पायाममृताऽभया च जनिता देशे सुराष्ट्राह्वये
जीवन्ती च हरीतकी निगदिता सप्तप्रभेदा बुधैः ॥२२२॥

विन्ध्यपर्वतमा विजया, हिमाचलमा चेतकी, सिन्धमा पूतना, रोहिणी र विजया सबैतिर, चम्पामा अमृता र अभया तथा सौराष्ट्रमा जीवन्ती जातको हर्रो हुन्छ । यसरी विद्वानहरूले सात जातका हर्रोका बारेमा बताएका छन् ।

## जात अनुसारका हर्रोको प्रयोग

सर्वप्रयोगे विजया च रोहिणी क्षतेषु लेपेषु तु पूतनोदिता ।
विरेचने स्यादमृता गुणाधिका जीवन्तिका स्यादिह जीर्णरोगजित् ॥२२३॥
स्याच्चेतकी सर्वरुजापहारिका नेत्रामयघ्नीमभयां वदन्ति ।
इत्थं यथायोगमियं प्रयोजिता ज्ञेया गुणाढ्या न कदाचिदन्यथा ॥२२४॥



सबै खालका ओखतीमा विजया र रोहिणी, लेप लगाउन पूतना, विरेचन गराउन अमृता, दीर्घरोग नाश गर्न जीवन्ती, सबै रोग नाश गर्न चेतकी र आँखाका रोगका लागि अभया जातको हर्रो प्रयोग गर्नु पर्दछ भन्दछन् । यसरी यथायोग्य गुण अनुसार विचार गरेर हर्रो प्रयोग गर्नाले यो प्रभावकारी हुन्छ हुन्छ, यसमा कहिल्यै अन्यथा हुँदैन ।

## हर्रोका विशेष गुण

चेतकी च धृता हस्ते यावत् तिष्ठति देहिनः ।
तावद्विरेच्यते वेगात्तत्प्रभावान्न संशयः ॥२२५॥
सप्तानामपि जातीनां प्रधानं विजया स्मृता ।
सुखप्रयोगसुलभा सर्वव्याधिषु शस्यते ॥२२६॥

मानिसले हातमा चेतकी जातको हर्रो समाएर जबसम्म बस्दछ तबसम्म त्यो हर्रोको प्रभावले गर्दा निश्चय नै बेगले दिसा भइरहन्छ । सात जातका हर्रोमध्ये विजया जातको हर्रो सबभन्दा उत्तम हुन्छ । यो सर्वसुलभ हुन्छ र सबै रोगमा प्रयोग गर्न हुन्छ ।

### हर्रो छान्ने तरिका

**क्षिप्ताप्सु निमज्जति या सा ज्ञेया गुणवती भिषग्वर्यैः ।**
**यस्या यस्या भूयो निमज्जनं सा गुणाढ्या स्यात्॥२२७॥**

पानीमा हाल्दा डुब्ने हर्रोलाई उत्तम हर्रो भनिन्छ । पटकपटक डुबाउँदा पनि डुबिरहने खालको हर्रोलाई उत्कृष्ट वैद्यजनले सर्वोत्तम हर्रो हो भनी जान्नू ।

### हरीतकी शब्दको अर्थ

**हरते प्रसभं व्याधीन् भूयस्तरति यद्वपुः ।**
**हरीतकी तु सा प्रोक्ता तत्र कीर्दीप्तिवाचकः ॥२२८॥**

"हरीतकी" त्यसलाई भनिन्छ जसले रोगलाई सजिलैसँग हटाई शरीरलाई पुनः रोग लाग्नबाट बचाउँदछ । "की" ले चमकलाई बुझाउँदछ ।

### हर्रो खान नहुने अवस्था



**हरीतकी तु तृष्णायां हनुस्तम्भे गलग्रहे ।**
**शोषे नवज्वरे जीर्णे गुर्विण्यां नैव शस्यते ॥२२९॥**

तिर्खा लागेका बेलामा, चिउँडो र कन्चटका बीचको हाड नचल्ने रोग हुँदा (हनुस्तम्भ), कफ बढेर सास फेर्न असजिलो पार्ने घाँटीको रोग (गलग्रह) हुँदा, कुनै पनि किसिमका क्षयरोग (शोष) हुँदा, नयाँ ज्वरमा, कमजोर हुँदा र गर्भिणी हुँदा हर्रो खानु फाइदाजनक हुँदैन ।

### बर्रो (विभीतक)

**विभीतकस्तैलफलो भूतावासः कलिद्रुमः ।**
**संवर्तकस्तु वासन्तः कल्किवृक्षो बहेडकः ॥२३०॥**
**हार्यः कर्षफलः कल्किधर्मघ्नोऽक्षोऽनिलघ्नकः ।**
**विभीतकश्च कासघ्नः स प्रोक्तः षोडशाह्वयः ॥२३१॥**
**विभीतकः कटुस्तिक्तः कषायोष्णः कफापहः ।**
**चक्षुष्यः पलितघ्नश्च विपाके मधुरो लघुः ॥२३२॥**

(१) विभीतक, (२) तैलफल, (३) भूतावास, (४) कलिद्रुम, (५) संवर्तक, (६) वासन्त, (७)

कलिकवृक्ष, (८) बहेडक, (९) हार्य, (१०) कर्षफल, (११) कलिक, (१२) धर्मघ्न, (१३) अक्ष, (१४) अनिलघ्नक, (१५) विभीतक र (१६) कासघ्न : यी सोह्र नाम बर्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । बर्रो पिरो, तीतो, टर्रो, उष्णवीर्यको र कफ नाशक हुन्छ । यो आँखाका लागि हितकर र उमेर नपुगी कपाल फुल्ने रोग नाशक हुन्छ । यो पचेपछि (वा पाकेपछि) गुलियो हुन्छ । बर्रो पचाउन सहज हुन्छ ।

**सुपारीको रूख (पूग)**

**पूगस्तु पूगवृक्षश्च क्रमुको दीर्घपादपः ।**
**वल्कतरुर्दृढबल्कश्चिक्कणश्च मुनिर्ह्वयः ॥२३३॥**
**पूगवृक्षस्य निर्यासो हिमः सम्मोहनो गुरुः ।**
**विपाके सोष्णकक्षारः साम्लो वातघ्नपित्तलः ॥२३४॥**

(१) पूग, (२) पूगवृक्ष, (३) क्रमुक, (४) दीर्घपादप, (५) वल्कतरु, (६) दृढबल्क र (७) चिक्कण : यी सात नाम सुपारी (रूख) का संस्कृत पर्यायवाची नामहरू हुन् । सुपारीको चोप शीतवीर्यको, मोहनी लगाउने र पचाउन कठिन हुने गुणको हुन्छ । पचेपछि सुपारी उष्णवीर्यको हुन्छ । यसको क्षार अमिलो, वातविकार नाशक र पित्तविकार गराउने गुणको हुन्छ ।



**सुपारी (पूगफल)**

**पूगन्तु चिक्कणी चिक्का चिक्कणं श्लक्ष्णकं तथा ।**
**उद्वेगं क्रमुकफलं ज्ञेयं पूगफलं वसु ॥२३५॥**

(१) पूग, (२) चिक्कणी, (३) चिक्का, (४) चिक्कण, (५) श्लक्ष्णक, (६) उद्वेग, (७) क्रमुकफल र (८) पूगफल : यी आठ नाम सुपारीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सेरी च मधुरा रुच्या कषायाम्ला कटुस्तथा ।**
**पथ्या च कफवातघ्नी सारिका मुखदोषनुत् ॥२३६॥**

सेरी (?) जातको सुपारी गुलियो, रुचिप्रद, टर्रो, अमिलो र पिरो हुन्छ । यो पथ्य, कफविकार र वातविकार नाशक, मलमूत्रलाई तलतिर सार्ने तथा मुखका रोग नाशक हुन्छ ।

**तैल्वणं मधुरं रुच्यं कण्ठशुद्धिकरं लघु ।**
**त्रिदोषशमनं दीप्यं रसालं पाचनं समम् ॥२३७॥**

तेल्वण जातको सुपारी गुलियो, रुचिप्रद, घाँटी सफा गर्ने र पचाउन हलुका हुने गुणको हुन्छ । यसले त्रिदोषलाई शान्त पार्दछ । यो दीपनी र पचाउन चाहिने रस उत्सर्जन गर्ने गुणको हुन्छ ।

**गौल्यं गुहागरं श्लक्ष्णं कषायं कटु पाचनम् ।**
**विष्टम्भजठराध्मानहरणं द्रावकं लघु ॥२३८॥**

गुहागर नामक देशमा हुने गौल्य जातको सुपारी नरम, टर्रो, पिरो र पाचनी हुन्छ । यसले विष्टम्भ, पेटका रोग र आध्मान नाश गर्दछ । यसले पाचक रस निकाल्दछ । यो पचाउन सहज हुन्छ ।

**घोण्टा कटुकषायोष्णा कठिना रुचिकारिणी ।**
**मलविष्टम्भशमनी पित्तहृद्दीपनी च सा ॥२३९॥**

घोण्टा जातको सुपारी पिरो, टर्रो, उष्णवीर्यको, कडा र रुचिप्रद हुन्छ । यसले कब्जियतलाई शान्त पार्दछ र पित्तविकार नाश गर्दछ । यो दीपनी हुन्छ ।

**पूगीफलं चेउलसञ्ज्ञकं यत्तत्कोङ्कणेषु प्रथितं सुगन्धि ।**
**श्लेष्मापहं दीपनपाचनञ्च बलप्रदं पुष्टिकरं रसाढ्यम् ॥२४०॥**



कोङ्कण देशमा हुने चेउल नामक सुपारी सुगन्धित हुन्छ । यसले कफविकार नाश गर्दछ । यो दीपनी, पाचनी, बलदायक, पुष्टिकर र रस निकाल्ने गुणको हुन्छ ।

**यत् कोङ्कणे वल्लिगुलाभिधानकं ग्रामोद्भवं पूगफलं त्रिदोषनुत् ।**
**आमापहं रोचनरुच्यपाचनं विष्टम्भतुन्दामयहारि दीपनम् ॥२४१॥**

कोङ्कण देशकै ग्रामिण इलाकामा पाइने बल्लिगुला नामक सुपारीले त्रिदोष नाश गर्दछ । यसले आमविकार पनि नाश गर्दछ । यो रोचनी, रुचिकर र पाचनी हुन्छ । यसले विष्टम्भ र पेटका रोग नाश गर्दछ । यो दीपनी हुन्छ ।

**चन्द्रापुरोद्भवं पूगं कफघ्नं मलशोधनम् ।**
**कटु स्वादु कषायं च रुच्यं दीपनपाचनम् ॥२४२॥**

चन्द्रापुर नामक देशमा हुने सुपारी कफविकार नाशक, दिसा सफा गर्ने, पिरो, स्वादिलो, टर्रो, रुचिप्रद, दीपनी र पाचनी हुन्छ ।

**आन्ध्रदेशोद्भवं पूगं कषायं मधुरं रसे ।**

**वातोजिद्वक्त्रजाड्यघ्नमीषदम्लं कफापहम् ॥२४३॥**

आन्ध्रदेशमा हुने सुपारी टर्रो, गुलियो, वातविकारलाई जित्ने, मुखको लाटोपन नाश गर्ने, थोरै अमिलो र कफविकार नाशक हुन्छ ।

**पूगं सम्मोहकृत्सर्वं कषायं स्वादु रेचनम् ।**
**त्रिदोषशमनं रुच्यं वक्त्रक्लेदमलापहम् ॥२४४॥**

सबै खालका सुपारी सम्मोहक, टर्रा, स्वादिला, रेचनी, त्रिदोषनाशक, रुचिप्रद तथा मुख एवं पसिनाजन्य मल नाशक हुन्छन् ।

**आमं पूगं कषायं मुखमलशमनं कण्ठशुद्धिं विधत्ते**
**रक्तामश्लेष्मपित्तप्रशमनमुदराध्मानहारं सरञ्च ।**
**शुष्कं कण्ठामयघ्नं रुचिकरमुदितं पाचनं रेचनं स्यात्-**
**तत्पर्णेनायुतं चेत्झटिति वितनुते पाण्डुवातञ्च शोषम् ॥२४५॥**

काँचो सुपारी टर्रो, मुखको मल नाशक, घाँटी सफा गर्ने तथा रक्तविकार, आमविकार, कफविकार र पित्तविकारलाई शान्त पार्ने गुणको हुन्छ । यसले पेटका रोग र आध्मान नाश गर्दछ तथा मलमूत्रलाई तलतिर सार्दछ । सुकेको सुपारीले घाँटीका रोग निको पार्दछ । यो रुचिप्रद, पाचनी र रेचनी हुन्छ । यो पानको पातमा मिसाएर नखाए यसले पाण्डु, वातविकार र सुजन गराउँदछ ।

**पान (नागवल्ली)**

**अथ भवति नागवल्ली ताम्बूली फणिलता च सप्तशिरा ।**
**पर्णलता फणिवल्ली भुजगलता भक्ष्यपत्री च ॥२४६॥**
**नागवल्ली कटुस्तीक्ष्णा तिक्ता पीनसवातजित् ।**
**कफकासहरा रुच्या दाहकृद्दीपनी परा ॥२४७॥**

नागवल्ली, ताम्बूली, फणिलता, सप्तशिरा, पर्णलता, फणिवल्ली, भुजगलता र भक्ष्यपत्री : यी पानका संस्कृत पर्यायवाची नामहरू हुन् । पान पिरो, तिक्खर, तीतो तथा पिनास र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले कफविकार र खोकीलाई नाश गर्दछ । यो रुचिप्रद, डाहकारी र अत्यन्त दीपनी हुन्छ ।

**सा श्रीवाटाम्लादिवाटादिनानाग्रामस्तोमस्थानभेदाद्विभिन्ना ।**
**एकाऽप्येषा देशमृत्स्नाविशेषान्नानाकारं याति काये गुणे च ॥२४८॥**

पान गाउँ वा स्थान अनुसार अनेक जातको हुन्छ । यो समान भएपनि उत्पन्न हुने स्थान (देश) को माटो अनुसार विभिन्न आकार र गुणको हुने गर्दछ ।

**श्रीवाटी मधुरा तीक्ष्णा वातपित्तकफापहा ।**
**रसाढ्या सुरसा रुच्या विपाके शिशिरा स्मृता ॥२४९॥**

श्रीवाटी नामक पान गुलियो,  तिक्खर तथा वातविकार, पित्तविकार र कफविकार नाशक हुन्छ । यो रसकारी, रसिलो, रुचिप्रद र पचेपछि शीतवीर्यको हुन्छ ।

**स्यादम्लवाटी कटुकाम्लतिक्ता तीक्ष्णा तथोष्णा मुखपाककर्त्री ।**
**विदाहपित्तास्रविकोपनी च विष्टम्भदा वातनिबर्हणी च ॥२५०॥**

अम्लवाटी जातको पान पिरो, अमिलो, तीतो, तिक्खर, उष्णवीर्यको र मुखलाई पकाउने गुणको हुन्छ । यसले डाह गर्दछ तथा पित्तविकार र रक्तविकार बढाउँदछ । यो विष्टम्भी हुन्छ । यसले वातविकार नाश गर्दछ ।

**सतसा मधुरा तीक्ष्णा कटुरुष्णा च पाचनी ।**

**गुल्मोदराध्मानहरा रुचिकृद्दीपनी परा ॥२५१॥**

सतसा जातको पान गुलियो, तिक्खर, पिरो, उष्णवीर्यको र पाचनी हुन्छ । यसले गुल्म, पेटका रोग र आध्मान नाश गर्दछ । यो रुचिप्रद र अत्यन्त दीपनी हुन्छ ।

**गुहागरे सप्तशिरा प्रसिद्धा तत्पर्णजूर्णाऽतिरसाऽतिरुच्या ।**
**सुगन्धि तीक्ष्णा मधुराऽतिहृद्या सन्दीपनी पुंस्त्वकराऽतिबल्या ॥२५२॥**

गुहागरमा हुने प्रसिद्ध सप्तशिरा जातको पानका धेरै रसिला र अति रुचिप्रद पात हुन्छन् । यो सुगन्धी, तिक्खर, गुलियो, मुटुका लागि अति नै लाभदायक, तृप्तिदायक तथा पुरुषत्व र बल अति बढाउने गुणको हुन्छ ।

**नाम्नाऽन्याऽम्लसिरा सुतीक्ष्णमधुरा रुच्या हिमा दाहनुत्-**
**पित्तोद्रेकहरा सुदीपनकरी बल्या मुखामोदिनी ।**
**स्त्रीसौभाग्यविवर्धिनी मदकरी राज्ञां सदा वल्लभा**
**गुल्माध्मानविबन्धजिच्च कथिता सा मालवे तु स्थिता ॥२५३॥**

अर्को अम्लोसरा नामक पान पान हुन्छ जुन् अति तिक्खर, गुलियो, रुचिप्रद, शीतवीर्यको र डाह नाशक हुन्छ । यसले पित्तविकार बढ्न दिँदैन , यो दीपनी, बलदायक र मुखलाई आनन्द दिने गुणको हुन्छ । यसले स्त्रीको सौभाग्य बढाउँदछ र नसा दिन्छ । यो राजाका लागि सधैं प्रिय हुन्छ । यसले गुल्म, आध्मान र विबन्धलाई जित्दछ । यो पान मालव देशमा हुन्छ भनिन्छ ।

**आन्ध्रे पटुलिका नाम कषायोष्णा कटुस्तथा ।**
**मलापकर्षा कण्ठस्य पित्तकृद्वातनाशनी ॥२५४॥**

आन्ध्र देशमा हुने पटुलिका जातको पान टर्रो, उष्णवीर्यको, पिरो, घाँटीमा भएको पित्तजन्य विकार तलतिर सार्ने र वातविकार नाश गर्ने गुणको हुन्छ ।

**ह्वेसणीया कटुस्तीक्ष्णा हृद्या दीर्घदला च सा ।**
**कफवातहरा रुच्या कटुर्दीपनपाचनी ॥२५५॥**

ह्वेसणीया जातको पान पिरो, तिक्खर, मुटुका लागि हितकर, लामा पात भएको, कफविकार र वातविकार नाश गर्ने, रुचिप्रद, पिरो, दीपनी र पाचनी हुन्छ ।

**सद्यस्त्रोटितभक्षितं मुखरुजाजाड्यावहं दोषकृत्**
**दाहारोचकरक्तदायि मलकृद्विष्टम्भि वान्तिप्रदम् ।**
**यद्भूयो जलपानपोषितरसं तच्चेच्चिराते त्रोटितं**
**ताम्बूलीदलमुत्तमञ्च रुचिकृद्वर्ण्यं त्रिदोषार्तिनुत् ॥२५६॥**

भर्खर टिपिएको पानको पात खानाले मुखमा रोग र जडता गराउँदछ । यसले डाह, अरुची, रक्तविकार, कब्जियत र बान्ता गराउँदछ । रामैरी छिप्पिएको र पानीमा लामो समय ढड्याइएको पानको पात उत्तम हुन्छ । यस्तो पान रुचिप्रद, वर्णमा निखार लेराउने र त्रिदोष नाशक हुन्छ ।

**कृष्णं पर्णं तिक्तमुष्णं कषायं धत्ते दाहं वक्त्रजाड्यं मलञ्च ।**
**शुभ्रं पर्णं श्लेष्मवातामयघ्नं पथ्यं रुच्यं दीपनं पाचनञ्च ॥२५७॥**

पानको कालो पात तीतो, उष्णवीर्यको, टर्रो, डाहकारी, मुख लटट्याउने र कब्जियत गराउने गुणको हुन्छ । पानको सेतो पात कफविकार र वातविकार नाशक, पथ्य, रुचिप्रद, दीपनी र पाचनी हुन्छ ।

**शिरा पर्णस्य शैथिल्यं कुर्यात्तस्यास्रहृद्रसः ।**
**शीर्णं त्वग्दोषदं तस्य भक्षिते च शितं सदा ॥२५८॥**

पानको पातमा रहेको भेट्नु र रेसाले शिथिल गराउँदछ, यसको रसले रगत नाश गर्दछ । सडेको पानको पातले हमेसा छालाका रोग र शीत-रोग निकाल्दछ ।

**अनिधाय मुखे पर्णं पूगं खादति यो नरः ।**
**मतिभ्रंशो दरिद्रोः स्यादन्ते स्मरति नो हरिम् ॥२५९॥**

पानको पातमा नमिसाई जुन मानिसले सुपारी खान्छ उसको बुद्धिभ्रष्ट हुन्छ । उ दरिद्र हुन्छ र मरणकालमा भगवानलाई सम्झन पनि सक्दैन ।

**पर्णाधिक्ये दीपनी रङ्गदात्री पूगाधिक्ये रूक्षदा कृच्छ्रदात्री ।**
**साराधिक्ये खादिरे शोषदात्री चूर्णाधिक्ये पित्तकृत् पूतिगन्धा ॥२६०॥**

पान खाँदा पात बढी भए त्यो दीपनी र छालामा रङ्ग दिने हुन्छ, सुपारी बढी भए रुखो र कृच्छ्ररोग दायक हुन्छ, कैथको मात्रा बढी भए शरीर सुकाउँदछ र अन्य चूर्ण बढी भए पित्तविकार दायक र गन्ध दायक हुन्छ ।

### पानमा हालिने धुलो (चूर्ण)



**चूर्णं चार्जुनवृक्षजं कफहरं गुल्मघ्नमर्काह्वयं**
**शोफघ्नं कुटजं करञ्जजनितं वातापहं रुच्यदम् ।**
**पित्तघ्नं जलजं बलाग्निरुचिदं शैलाह्वयं पित्तदं**
**स्फाटिक्यं दृढदन्तपङ्क्तिजननं शुक्त्यादिजं रूक्षदम् ॥२६१॥**

पानमा हालिने धुलो काहुलोको भए कफविकार र आँकको भए गुल्मरोग नाश गर्दछ । ठुलोकुरोको भए सुजन र करौंजीको भए वातविकार नाशगरी रुची जगाउँदछ । कमलको भए पित्तविकार नाश गर्दछ तथा बल, पाचनशक्ति र रुचि बढाउँदछ । शिलाजित भए पित्तविकार गर्दछ । स्फटिकको भए दाँतको लहरलाई बलियो पार्दछ तथा सिपि आदिको भए रुखो हुन्छ ।

### वर्गप्रशस्ति

**इत्थं नानाफलतरुलतानामतत्तद्गुणादि-**
**व्यक्ताख्यानप्रगुणरचनाचारुसौरभ्यसारम् ।**
**वर्गं वक्त्राम्बुरुहवलभीलास्यलीलारसालं**
**विद्यावैद्यः खलु सफलयेदेतमाम्नायभूम्ना ॥२६२॥**

आयुर्वेदका विद्यार्थी वा प्रशिक्षार्थीहरू अनेक थरी फल, लहराका नाम, गुण आदिका बारेमा नरहरिको शब्दभण्डारले सुसज्जित यो अध्याय अध्ययन पश्चात् आफ्ना नियमित अभ्यास र प्रयोग मार्फत राजाका दरबारमा उपचारको चमत्कार देखाउँदै यो आम्रादि वर्गलाई सार्थक बनाउन सकून् ।

**यान्युपभुञ्जानानां स भवति संसारपादपः सफलः ।**
**तेषामेष फलानां वर्गः फलवर्ग इति कथितः ॥२६३॥**

फलहरूको सम्पत्तिलाई मूर्त रूप दिने हुनाले फलवर्ग भनी नाम दिइएको यो अध्यायमा उल्लेखित कुराको प्रयोगले मानिस आफ्नो जन्मलाई सार्थक बनाउन सफल हुन्छ ।

**यस्याजस्रविकस्वरामलयशःप्राग्भारपुष्पोद्गमः**
**साश्चर्यं विबुधेप्सितानि फलति श्रीमान् करः स्वर्द्रुमः ।**
**तस्यायं कवितुः कृतौ नरहरेराम्रादिरेकादशो**
**वर्गः स्वर्गसभाभिषग्भिरभिधाचूडामणावीरितः ॥२६४॥**

अभिधान चूडामणी नामक ग्रन्थको आम्रादी वा फलवर्ग नामक यो एघारौं अध्याय (पहिले) अश्विनीकुमारले लेखेका थिए । फलफूल र लताहरूको विवरण, गुण र उपयोगलाई झल्काउने गरी (शेधभर्ना गर्ने गरी) राजा नरहरिको आनन्दमय हातबाट लिखित कल्पवृक्षको जस्तै मानवीय चाहनाहरू पूरा गर्न सक्ने अपार क्षमता भएको यो आम्रादी वर्गमा अब पूर्ण भएको छ ।



**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ आम्रादिवर्गः एकादशः ॥११॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत आम्रादि नामक एघारौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।११।**

## चन्दनादिवर्गः

**श्रीखण्डं शबरं पीतं पत्राङ्गं रक्तचन्दनम् ।**
**बर्बरं हरिगन्धं च चन्दनं सप्तधा स्मृतम् ॥१॥**
**देवदारु द्विधा प्रोक्तं चीडा सप्तच्छदस्तथा ।**
**सरलः कुङ्कुमं कङ्गुः कस्तूरी रोचना तथा ॥२॥**
**कर्पूरौ स्याज्जवादिस्तु नन्दी च जातिपत्रिका ।**
**जातीफलञ्च कक्कोलं लवङ्गं स्वादुरुच्यते ॥३॥**
**अगरुश्च त्रिधा मांसी तुरुष्को गुग्गुलुस्त्रिधा ।**
**रालः कुन्दुरुकः कुष्ठं सारिवा तु द्विधा नखौ ॥४॥**
**स्पृक्का स्थौणेयकं चैव मुरा शैलेयचोरकः ।**
**पद्मप्रपौण्डरीके च लामज्जं रोहिणी द्विधा ॥**
**श्रीवेष्टोशीरनलिका मुनिबाणमिताह्वयाः ॥५॥**

यस वर्गमा श्रीखण्ड (सेतो चन्दन), शबर, पीत, पत्राङ्ग, रक्तचन्दन, बर्बर र हरिगन्ध गरी सात प्रकारका चन्दन; दुई थरी देवदारु, चीडा, सप्तच्छद, सरल, कुङ्कुम, कङ्गु, कस्तूरी, रोचना, दुई थरी कर्पूर, जवादि कस्तूरी, नन्दी, जातिपत्रिका, जातीफल, कक्कोल, लवङ्ग, स्वादु, तीन प्रकारका अगरु, मांसी, तुरुष्क, तीन थरी गुग्गुलु, राल, कुन्दुरुक, कुष्ठ, सारिवा, दुई प्रकारका नखी, स्पृक्का, स्थौणेयक, मुरा, शैलेय, चोरक, पद्म, प्रपौण्डरीक, लामज्ज, दुई थरी रोहिणी, श्रीवेष्ट, उशीर र नलिका गरी जम्मा सन्ताउन्न थरी (मुनिबाण) विरुवा (आदि) का बारेमा बताइएको छ ।



### सेतो चन्दन (श्वेतचन्दन)

**श्रीखण्डं चन्दनं प्रोक्तं महार्हं श्वेतचन्दनम् ।**
**गोशीर्षं तिलपर्णञ्च मङ्गल्यं मलयोद्भवम् ॥६॥**
**गन्धराजं सुगन्धञ्च सर्पावासञ्च शीतलम् ।**
**गन्धाढ्यं गन्धसारञ्च भद्रश्रीर्भोगिवल्लभम् ॥**
**शीतगन्धो मलयजं पावनञ्चाङ्कभूह्वयम् ॥७॥**
**श्रीखण्डं कटुतिक्तशीतलगुणं स्वादे कषायं कियत्**
**पित्तभ्रान्तिवमिज्वरक्रिमितृषासन्तापशान्तिप्रदम् ।**
**वृष्यं वक्त्ररुजापहं प्रतनुते कान्तिं तनोर्देहिनां**
**लिप्तं सुप्तमनोजसिन्धुरमदारम्भादिसंरम्भदम् ॥८॥**

(१) श्रीखण्ड, (२) चन्दन, (३) महार्ह, (४) श्वेतचन्दन, (५) गोशीर्ष, (६) तिलपर्ण, (७) मङ्गल्य, (

८) मलयोद्भव, (९) गन्धराज, (१०) सुगन्ध, (११) सर्पावास, (१२) शीतल, (१३) गन्धाढ्य, (१४) गन्धसार, (१५) भद्रश्री, (१६) भोगिवल्लभ, (१७) शीतगन्ध, (१८) मलयज र (१९) पावन : यी उन्नाईस (अङ्कभू) नाम सेतो चन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो चन्दन पिरो, तीतो, शीतवीर्यको र केही टर्रो हुन्छ । यसले पित्तविकार, भ्रम, वाकवाकी, ज्वर, पेटका कीरा, तिर्खारोग र डाहलाई शान्त पार्दछ । यो वीर्यवर्धक, मुखका रोग नाशक र शरीरको चमक बढाउने गुणको हुन्छ । यो चन्दन शरीरमा दल्ने गरे यसले लुकेको कामवासनालाई जगाउँदछ ।

### चन्दनको पहिचान

**श्रेष्ठं कोटरकर्परोपकलितं सुग्रन्थि सङ्गौरवं**
**छेदे रक्तमयं तथा च विमलं पीतञ्च यद्घर्षणे ।**
**स्वादे तिक्तकटुः सुगन्धबहुलं शीतं यदल्पं गुणे**
**क्षीणञ्चार्धगुणान्वितं तु कथितं तच्चन्दनं मध्यमम् ॥९॥**

रुखको धोत्रो परेको भित्री भाग वा टोड्कोबाट लिइएको, कडा खालको, राम्रा गाँठा भएको, गह्रौं, कोट्याउँदा रातो र घोट्दा सेतोमा हल्का पहेँलो रङ मिसिएको जस्तो लेप बन्ने चन्दन उत्तम सेतो चन्दन हो । यो चन्दन तीतो र पिरो, अधिक सुगन्धी र शीतवीर्यको हुन्छ । यी गुणमध्ये कम गुण भएको चन्दनलाई अल्पगुणको तथा आधा गुण भएको चन्दनलाई मध्यम गुणको भनिन्छ ।

### सेतो चन्दनको प्रकार

**चन्दनं द्विविधं प्रोक्तं बेट्टसुक्वडिसञ्ज्ञकम् ।**
**वेट्टं तु सार्द्रविच्छेदं स्वयं शुष्कं तु सुक्वडि ॥१०॥**

काँचोमा काटेर सुकाइएको (वेट्ट) र सुकेको रूखबाट निकालिएको (सुक्वडि) गरी सेतो चन्दन दुई प्रकारको हुन्छ ।

**मलयाद्रिसमीपस्थाः पर्वता वेट्टसञ्ज्ञकाः ।**
**तज्जातं चन्दनं यत्तु वेट्टवाच्यं क्वचिन्मते ॥११॥**

कसैकसैले “मलयपर्वतको छेउमा वेट्ट नामक पर्वतशृङ्खला छ र त्यहाँ हुने सेतो चन्दनलाई वेट्टचन्दन भनिन्छ” पनि भनेका छन् ।

**वेट्टचन्दनमतीव शीतलं दाहपित्तशमनं ज्वरापहम् ।**
**छर्दिमोहतृषिकुष्ठतैमिरोत्कासरक्तशमनं च तिक्तकम् ॥१२॥**

वेट्टचन्दन अति नै शीतल (वा शीतवीर्यको), डाह र पित्तविकारलाई शान्त पार्ने, ज्वर नाशक तथा वाकवाकी, मोह, तिर्खारोग, कुष्ठ, धमिलो देखिने आँखाको रोग र रक्तविकार नाशक एवं तीतो स्वादको हुन्छ ।

**सुक्कडिचन्दनं तिक्तं कृच्छ्रपित्तास्रदाहनुत् ।**
**शैत्यं सुगन्धदं चार्द्रं शुष्कं लेपे तदन्यथा ॥१३॥**

सुक्कडिचन्दन तीतो तथा कृच्छ्र, पित्तविकार र रक्तविकार नाशक हुन्छ । चन्दन वेट्ट हुँदा सुगन्धका लागि तथा सुक्कडि हुँदा लेपका लागि उपयुक्त हुने गर्दछ ।

### चन्दनविशेष (शबरचन्दन)

**नातिपीतं कैरातं शबरश्चन्दनं सुगन्धम् ।**
**वन्यश्च गन्धकाष्ठं किरातकान्तश्च शैलगन्धं च ॥१४॥**
**कैरातमुष्णं कटुशीतलश्च श्लेष्मानिलघ्नं श्रमपित्तहारि ।**
**विस्फोटपामादिकनाशनश्च तृषापहं तापविमोहनाशि ॥१५॥**



नातिपीत (गाढा पहेँलो नहुने), कैरात, शबर, चन्दन, सुगन्ध, वन्य, गन्धकाष्ठ, किरातकान्त र शैलगन्ध : यी शबरचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चन्दन उष्णवीर्यको, पिरो, शीतल गर्ने तथा कफविकार, वातविकार र थकाई नाशक हुन्छ । यसले विस्फोट, पामा आदि रोग तथा तिर्खारोग, डाह र मोह पनि नाश गर्दछ ।

### पहेँलो चन्दन (पीतचन्दन)

**पीतगन्धं तु कालीयं पीतकं माधवप्रियम् ।**
**कालीयकं पीतकाष्ठं बर्बरं पीतचन्दनम् ॥१६॥**
**पीतं च शीतलं तिक्तं कुष्ठश्लेष्मानिलापहम् ।**
**कण्डूविचर्चिकादद्रुकृमिहृत्कान्तिदं परम् ॥१७॥**

पीतगन्ध, कालीय, पीतक, माधवप्रिय, कालीयक, पीतकाष्ठ, बर्बर र पीतचन्दन : यी पहेँलो चन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चन्दन शीतवीर्यको, तीतो तथा कुष्ठ, कफविकार र वातविकार नाशक हुन्छ । यसले लुतो, विचर्चिका, दाद र कीरा नाश गर्दछ । यो शरीरलाई अत्यन्त चम्काउने गुणको हुन्छ ।

### चन्दनविशेष, बकचन्दन (पतङ्ग)

**पत्तङ्गं चैव पत्राङ्गं रङ्गकाष्ठं सुरङ्गदम् ।**
**पत्राढ्यं पत्ररङ्गं भार्यावृक्षश्च रक्तकः ॥१८॥**
**लोहितं रक्तकाष्ठं च रागकाष्ठं कुचन्दनम् ।**
**पट्टरञ्जनकं चैव सुरङ्गं च चतुर्दश ॥१९॥**
**पत्राङ्गं कटुकं रूक्षमम्लं शीतं तु गौल्यकम् ।**
**वातपित्तज्वरघ्नं च विस्फोटोन्मादभूतहृत् ॥२०॥**

(१) पत्तङ्ग, (२) पत्राङ्ग, (३) रङ्गकाष्ठ, (४) सुरङ्गद, (५) पत्राढ्य, (६) पत्ररङ्ग, (७) भार्यावृक्ष, (८) रक्तक, (९) लोहित, (१०) रक्तकाष्ठ, (११) रागकाष्ठ, (१२) कुचन्दन, (१३) पट्टरञ्जनक र (१४) सुरङ्ग : यी चौध नाम पतङ्ग नामक चन्दनविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चन्दन पिरो, रुखो, अमिलो, शीतवीर्यको, गुलियो तथा वातविकार, पित्तविकार, ज्वर, विस्फोट, पागलपन र भूतबाधा नाशक हुन्छ ।

### रक्तचन्दन

**रक्तचन्दनमिदं च लोहितं शोणितं च हरिचन्दनं हिमम् ।**
**रक्तसारमथ ताम्रसारकं क्षुद्रचन्दनमथार्कचन्दनम् ॥२१॥**
**रक्तचन्दनमतीव शीतलं तिक्तमीक्षणगदास्रदोषनुत् ।**
**भूतपित्तकफकासज्वरभ्रान्तिजन्तुवमिजित्तृषापहम् ॥२२॥**

रक्तचन्दन, लोहित, शोणित, हरिचन्दन, हिम, रक्तसार, ताम्रसारक, क्षुद्रचन्दन र अर्कचन्दन : यी नाम रक्तचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । रक्तचन्दन अति नै शीतल गर्ने (वा शीतवीर्यको) हुन्छ । यो तीतो तथा आँखाका रोग र रक्तविकार नाशक हुन्छ । यसले भूतबाधा, पित्तविकार, कफविकार, खोकी, ज्वर, भ्रम, कीरा र वाकवाकीलाई जित्दछ तथा यसले तिर्खा नाश गर्दछ ।

### चन्दनविशेष (बर्बर)

**बर्बरोत्थं बर्बरकं श्वेतबर्बरकं तथा ।**
**शीतं सुगन्धि पित्तारि सुरभि चेति सप्तधा ॥२३॥**
**बर्बरं शीतलं तिक्तं कफमारुतपित्तजित् ।**
**कुष्ठकण्डूव्रणान् हन्ति विशेषाद्रक्तदोषजित् ॥२४॥**

बर्बरोत्थ, बर्बरक, श्वेतबर्बरक, शीत, सुगन्धि, पित्तारि र सुरभि : यी सात नाम चन्दनविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चन्दन शीतवीर्यको, तीतो तथा कफविकार, वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले कुष्ठ, लुतो र घाउखटिरालाई नाश गर्दछ । विशेषत यसले रक्तविकारलाई जित्दछ ।

## हरिचन्दन

**हरिचन्दनं सुरार्हं हरिगन्ध चन्द्रचन्दनं दिव्यम् ।**
**दिविजं च महागन्धं नन्दनजं लोहितञ्च नवसञ्ज्ञम् ॥२५॥**
**हरिचन्दनं तु दिव्यं तिक्तहिमं तदिह दुर्लभं मनुजैः ।**
**पित्ताटोपविलोपि च चन्दनवच्छ्रमशोषमान्द्यतापहरम् ॥२६॥**

(१) हरिचन्दन, (२) सुरार्ह, (३) हरिगन्ध, (४) चन्द्रचन्दन, (५) दिव्य, (६) दिविज, (७) महागन्ध, (८) नन्दनज र (९) लोहित : यी नौ नाम हरिचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । हरिचन्दन दैवी चन्दन हो । यो तीतो, शीतवीर्यको, मानिसका लागि पाउन दुर्लभ, पित्तविकार र पेट कराउने रोग हटाउने तथा चन्दनले जसरी नै थकाई, सुजन, कमजोरी र डाह नाश गर्ने गुणको हुन्छ ।



## चन्दनका गुण

**(सर्वाण्येतानि तुल्यानि रसतो वीर्यतस्तथा ।**
**गन्धेन तु विशेषः स्यात् पूर्वं श्रेष्ठतमं गुणैः ॥)**
**चन्दनानि समानानि रसतो वीर्यतस्तथा ।**
**भिद्यन्ते किन्तु गन्धेन तत्राऽऽद्यं गुणवत्तरम् ॥२७॥**

(माथि उल्लेखित) सबै चन्दनहरू रस र वीर्यमा समान हुन्छन् । तर बास्नाका लागि भने क्रमशः पहिले पहिले बताइएका चन्दन उत्तम हुन्छन् ।

## देवदार (देवदारु)

**देवदारु सुरदारु दारुकं स्निग्धदारुरमरादिदारु च ।**
**भद्रदारु शिवदारु शाम्भवं भूतहारि भवदारु रुद्रवत् ॥२८॥**
**स्निग्धदारु स्मृतं तिक्तं स्निग्धोष्णं श्लेष्मवातजित् ।**
**आमदोषविबन्धार्शःप्रमेहज्वरनाशनम् ॥२९॥**

देवदारु, सुरदारु, दारुक, स्निग्धदारु, अमरादिदारु, भद्रदारु, शिवदारु, शाम्भव, भूतहारि, भवदारु र रुद्रका पर्यायवाची शब्दका पछाडि दारु पर्याय जोडिएका शब्द : यी देवदारका संस्कृत पर्यायवाची नामहरू हुन् । देवदार तीतो, चिल्लो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले आमविकार, विबन्ध, अल्काई, प्रमेह र ज्वरलाई नाश गर्दछ ।

### देवदारविशेष (देवकाष्ठ)

**देवकाष्ठं पूतिकाष्ठं भद्रकाष्ठं सुकाष्ठकम् ।**
**अस्निग्धदारुकञ्चैव काष्ठदारु षडाह्वयम् ॥३०॥**
**देवकाष्ठन्तु तिक्तोष्णं रूक्षं श्लेष्मानिलापहम् ।**
**भूतदोषापहं धत्ते लिप्तमङ्गेषु कालिकम् ॥३१॥**
**देवदारु द्विधा ज्ञेयं तत्राद्यं स्निग्धदारुकम् ।**
**द्वितीयं काष्ठदारु स्याद्द्वयोर्नामान्यभेदतः ॥३२॥**

(१) देवकाष्ठ, (२) पूतिकाष्ठ, (३) भद्रकाष्ठ, (४) सुकाष्ठक, (५) अस्निग्धदारुक र (६) काष्ठदारु : यी छ नाम देवदारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, उष्णवीर्यको, रुखो तथा कफविकार र वातविकार नाशक हुन्छ । शरीरमा दलेका बेलामा यसले भूतबाधा नाश गर्दछ । देवदार पहिलो चिल्लो देवदार र दोश्रो काठे देवदार गरी दुई प्रकारका हुन्छन् । यी दुईका नाम मात्र फरक हुन् (गुणमा भिन्नता छैन) ।

### गोब्रेसल्लो (चीडा)

**चीडा च दारुगन्धा गन्धवधूर्गन्धमादनी तरुणी ।**
**तारा च भूतमारी मङ्गल्या तु कपाटिनी ग्रहभीतिजित् ॥३३॥**
**चीडा कटूष्णा कासघ्नी कफजिद्दीपनी परा ।**
**अत्यन्तसेविता सा तु पित्तदोषभ्रमापहा ॥३४॥**

चीडा, दारुगन्धा, गन्धवधू, गन्धमादनी, तरुणी, तारा, भूतमारी, मङ्गल्या, कपाटिनी र ग्रहभीतिजित् : यी गोब्रेसल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको, खोकी नाशक, कफविकारलाई जित्ने र अत्यन्त दीपनी हुन्छ । यसको धेरै सेवन गर्नाले पित्तविकार र भ्रम गर्दछ ।

**छांतवन (सप्तपर्ण)**

**सप्तपर्णः पत्रवर्णः शुक्तिपर्णः सुपर्णकः ।**
**सप्तच्छदो गुच्छपुष्पोऽयुग्मपर्णो मुनिच्छदः ॥३५॥**
**बृहत्त्वग्बहुपर्णश्च तथा शाल्मलिपत्रकः ।**
**मदगन्धो गन्धिपर्णो विज्ञेयो वह्निभूमितः ॥३६॥**
**सप्तपर्णस्तु तिक्तोष्णस्त्रिदोषघ्नश्च दीपनः ।**
**मदगन्धो निरुन्धेऽयं व्रणरक्तामयक्रिमीन् ॥३७॥**

(१) सप्तपर्ण, (२) पत्रवर्ण, (३) शुक्तिपर्ण, (४) सुपर्णक, (५) सप्तच्छद, (६) गुच्छपुष्प, (७) अयुग्मपर्ण, (८) मुनिच्छद, (९) बृहत्त्वक्, (१०) बहुपर्ण, (११) शाल्मलिपत्रक, (१२) मदगन्ध र (१३) गन्धिपर्ण : यी तेह्र (वह्निभूमि) नाम छतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । छतिवन तीतो, उष्णवीर्यको, त्रिदोष नाशक, दीपनी, मदिराको गन्ध आउने तथा घाउखटिरा, रक्तविकार, आमविकार र कीरा नाशक हुन्छ ।

**सल्लो (सरल)**

**सरलस्तु पूतिकाष्ठं तुम्बी पीतद्रुरुत्थितो दीपतरुः ।**
**स स्निग्धदारुसञ्ज्ञः स्निग्धो मारीचपत्रको नवधा ॥३८॥**
**सरलः कटुतिक्तोष्णः कफवातविनाशनः ।**
**त्वग्दोषशोफकण्डूतिव्रणघ्नः कोष्ठशुद्धिदः ॥३९॥**

(१) सरल, (२) पूतिकाष्ठ, (३) तुम्बी, (४) पीतद्रु, (५) उत्थित, (६) दीपतरु, (७) स्निग्धदारु, (८) स्निग्ध र (९) मारीचपत्रक : यी नौ नाम सल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् । सल्लो पिरो, तीतो, उष्णवीर्यको तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले छालाका रोग, सुजन, चिलाउने रोग र घाउखटिरा नाश गर्दछ तथा पेटभित्रका अङ्ग सफा पार्दछ ।

**केशर (कुङ्कुम)**

**ज्ञेयं कुङ्कुममग्निशेखरमसृक्काश्मीरजं पीतकं**
**काश्मीरं रुधिरं वरं च पिशुनं रक्तं शठं शोणितम् ।**
**बाह्लीकं घुसृणं वरेण्यमरुणं कालेयकं जागुडं**
**कान्तं वह्निशिखं च केसरवरं गौरं कराक्षीरितम् ॥४०॥**
**कुङ्कुमं सुरभि तिक्तकटूष्णं कासवातकफकण्ठरुजाघ्नम् ।**

**मूर्धशूलविषदोषनाशनं रोचनं च तनुकान्तिकारकम् ॥४१॥**

(१) कुङ्कुम, (२) अग्निशेखर, (३) असृक्, (४) काश्मीरज, (५) पीतक, (६) काश्मीर, (७) रुधिर, (८) वर, (९) पिशुन, (१०) रक्त, (११) शठ, (१२) शोणित, (१३) बाह्लीक, (१४) घुसृण, (१५) वरेण्य, (१६) अरुण, (१७) कालेयक, (१८) जागुड, (१९) कान्त, (२०) वह्निशिख, (२१) केसरवर र (२२) गौर : यी बाईस (कराक्षी) नाम केशरका संस्कृत पर्यायवाची नामहरू हुन् । केशर सुगन्धी, तीतो, पिरो, उष्णवीर्यको तथा खोकी, वातविकार, कफविकार, घाँटीका रोग, टाउकाको शूल र विषविकार नाशक हुन्छ । यो रुचिप्रद र शरीरमा चमक लेराउने गुणको हुन्छ ।

## तृणकुङ्कुम

**तृणकुङ्कुमं तृणास्रं गन्धितृणं शोणितं च तृणपुष्पम् ।**
**गन्धाधिकं तृणोत्थं तृणगौरं लोहितं च नवसञ्ज्ञम् ॥४२॥**
**तृणकुङ्कुमं कटूष्णं कफमारुतशोफनुत् ।**
**कण्डूतिपामाकुष्ठामदोषघ्नं भास्वरं परम् ॥४३॥**

(१) तृणकुङ्कुम, (२) तृणास्र, (३) गन्धितृण, (४) शोणित, (५) तृणपुष्प, (६) गन्धाधिक, (७) तृणोत्थ, (८) तृणगौर र (९) लोहित : यी नौ नाम तृणकुङ्कुमका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, उष्णवीर्यको तथा कफविकार, वातविकार, चिलाउने रोग, पामा, कुष्ठ र आमविकार नाशक हुन्छ । यसले शरीरलाई अत्यन्त चम्किलो बनाउँदछ ।

## प्रियङ्गु

**प्रियङ्गुः फलिनी श्यामा प्रियवल्ली फलप्रिया ।**
**गौरी गोवन्दनी वृत्ता कारम्भा कङ्गुकङ्गुनी ॥४४॥**
**भङ्गुरा गौरवल्ली च सुभगा पर्णभेदिनी ।**
**शुभा पीता च मङ्गल्या श्रेयसी चाङ्कभूमिता ॥४५॥**
**प्रियङ्गुः शीतला तिक्ता दाहपित्तास्रदोषजित् ।**
**वान्तिभ्रान्तिज्वरहरा वक्त्रजाड्यविनाशनी ॥४६॥**

(१) प्रियङ्गु, (२) फलिनी, (३) श्यामा, (४) प्रियवल्ली, (५) फलप्रिया, (६) गौरी, (७) गोवन्दनी, (८) वृत्ता, (९) कारम्भा, (१०) कङ्गु, (११) कङ्गुनी, (१२) भङ्गुरा, (१३) गौरवल्ली, (१४) सुभगा, (१५) पर्णभेदिनी, (१६) शुभा, (१७) पीता, (१८) मङ्गल्या र (१९) श्रेयसी : यी उन्नाईस नाम प्रियङ्गुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो तथा डाह, पित्तविकार र

रक्तविकारलाई जित्ने गुणको हुन्छ । यो प्रियङ्गुले वाकवाकी, भ्रम, ज्वर र मुखको लाटोपन नाश गर्दछ ।

## कस्तूरी

**कस्तूरी मृगनाभिस्तु मदनी गन्धचेलिका ।**
**वेधमुख्या च मार्जाली सुभगा बहुगन्धदा ॥४७॥**
**सहस्रवेधी श्यामा स्यात् कामानन्दा मृगाण्डजा ।**
**कुरङ्गनाभी ललिता मदो मृगमदस्तथा ॥**
**श्यामली काममोदी च विज्ञेयाऽष्टादशाह्वया ॥४८॥**
**कस्तूरी सुरभिस्तिक्ता चक्षुष्या मुखरोगजित् ।**
**किलासकफदौर्गन्ध्यवातालक्ष्मीमलापहा ॥४९॥**

(१) कस्तूरी, (२) मृगनाभि, (३) मदनी, (४) गन्धचेलिका, (५) वेधमुख्या, (६) मार्जाली, (७) सुभगा, (८) बहुगन्धदा, (९) सहस्रवेधी, (१०) श्यामा, (११) कामानन्दा, (१२) मृगाण्डजा, (१३) कुरङ्गनाभी, (१४) ललिता, (१५) मद, (१६) मृगमद, (१७) श्यामली र (१८) काममोदी : यी अठार नाम कस्तूरीका संस्कृत पर्यायवाची नामहरू हुन् । कस्तूरी सुगन्धी, तीतो, आँखाका लागि हितकर, मुखका रोगलाई जित्ने तथा किलास, कफविकार, शरीरको दुर्गन्ध, वातविकार, अलक्ष्मी र मल नाशक हुन्छ ।

## कस्तूरीका प्रकार

**कपिला पिङ्गला कृष्णा कस्तूरी त्रिविधा क्रमात् ।**
**नेपालेऽपि च काश्मीरे कामरूपे च जायते ॥५०॥**
**साऽप्येका खरिका ततश्च तिलका ज्ञेया कुलित्थाऽपरा**
**पिण्डाऽन्याऽपि च नायिकेति च परा या पञ्चभेदाभिधा ।**
**सा शुद्धा मृगनाभितः क्रमवशादेषा क्षितीशोचिता**
**पक्षत्यादिदिनत्रयेषु जनिता कस्तूरिका स्तूयते ॥५१॥**
**चूर्णाकृतिस्तु खरिका तिलका तिलाभा**
**कौलत्थबीजसदृशा च कुलित्थका च ।**
**स्थूला ततः कियदियं किल पिण्डिकाख्या**
**तस्याश्च किञ्चिदधिका यदि नायिका सा ॥५२॥**

रङ अनुसार कैलो (पहेँलो मिसिएको खैरो), पिङ्गला (रातो मिसिएको खैरो) र कालो गरी तीन

प्रकारको हुन्छ । पाइने स्थान अनुसार पनि यो मुख्यतः नेपाली, काश्मिरी र असामी गरी तीन प्रकारको हुन्छ । कस्तूरी खरिका, तिलका, कुलित्था, पिण्डा र नायिका गरी पाँच रूपको हुन्छ । मृगको नाइटोबाट निकालिएका यी पाँच थरी कस्तूरी क्रमशः शुद्ध र राजाका लागि उचित हुन्छन् । पन्ध्रदेखि अठार (वा तीस) दिन लगाएर तयार पारिएको कस्तूरी प्रशंसनीय हुन्छ । धूलोरूपको कस्तूरीलाई खरिका, ससाना चक्की बनाइएका कस्तूरीलाई तिलका, गहत वा चना जस्ता गेडाको आकारमा तयार पारिएको कस्तूरीलाई कुलित्थका, डल्लो आकारको कस्तूरीलाई पिण्डिका र ठूलो डल्लो बनाइएको कस्तूरीलाई नायिका भनिन्छ ।

### असल कस्तूरीका गुण

**स्वादे तिक्ता पिञ्जरा केतकीनां गन्धं धत्ते लाघवं तोलने च ।**
**याऽप्सु न्यस्ता नैव वैवर्ण्यमीयात् कस्तूरी सा राजभोग्याप्रशस्ता ॥५३॥**

स्वादमा तीतो, सुनौलो रङ्को, केतकी जस्तो बास्ना आउने, जोख्दा हलुको र पानीमा हाल्दा पनि रङ नउड्ने कस्तूरी राजाको प्रयोगका लागि योग्य उत्तम कस्तूरी हो ।

**या गन्धं केतकीनामपहरति मदं सिन्धुराणाञ्च वर्णे**
**स्वादे तिक्ता कटुर्या लघुरथ तुलिता मर्दिता चिक्कणा स्यात् ।**
**दाहं या नैति वह्नौ शिमिशिमिति चिरं चर्मगन्धा हुताशे**
**सा कस्तूरी प्रशस्ता वरमृगतनुजा राजते राजभोग्या ॥५४॥**



केतकी जस्तो बास्ना आउने, हात्तीको मद जस्तो सिन्दूरे रङ्को, तीतो एवं पिरो स्वादको, जोख्दा हलुको, माड्दा लेस्याइलो र बाल्दा छालाको गन्ध नआउने गरी चिटचिट गरी विस्तारै विस्तारै बल्ने मृगको शरीरबाट निकालिएको कस्तूरी राजाको उपभोगका लागि उत्तम हुन्छ ।

**बाले जरति च हरिणे क्षीणे रोगिणी च मन्दगन्धयुता ।**
**कामातुरे च तरुणे कस्तूरी बहुलपरिमला भवति ॥५५॥**

बच्चो, बूढो, कमजोर र रोगी मृगको कस्तूरी कम बास्नादार हुन्छ । कामातुर र जवान मृगको कस्तूरी धेरै बास्नादार हुन्छ ।

### नक्कली कस्तूरी

**या स्निग्धा धूमगन्धा वहति विनिहिता पीततां पाथसोऽन्त-**
**र्निःशेषं या निविष्टा भवति हुतवहे भस्मसादेव सद्यः ।**

**या च न्यस्ता तुलायां कलयति गुरुतां मांदता रूक्षताञ्च**
**ज्ञेया कस्तूरिकेयं खलु कृतमतिभिः कृत्रिमा नैव सेव्या ॥५६॥**

चिल्लो, बाल्दा धुवाँ गनाउने, पानीमा हाल्दा पहेँलो हुने, आगोमा हाल्दा चाँडै बल्ने, तराजुमा हालेर जोख्दा गह्रौं हुने र माड्दा रुखो हुने कस्तूरी निश्चय नै नक्कली कस्तूरी हो । यस्तो कस्तूरीको प्रयोग नगर्नू ।

**कस्तूरीको गुणगान**

**शुद्धो वा मलिनोऽस्तु वा मृगमदः किं जातमेतावता को-**
**ऽप्यस्यानवधिश्चमत्कृतिनिधिः सौरभ्यमेको गुणः ।**
**येनासौ स्मरमण्डनैकवसतिर्भाले कपोले गले**
**दोर्मूले कुचमण्डले च कुरुते सङ्गं कुरङ्गीदृशाम् ॥५७॥**

सक्कली वा नक्कली जस्तो कस्तूरी भएपनि के फरक पर्दछ र ? वास्तवमा कस्तूरको महत्वपूर्ण र एउटै गुण भनेको यसको स्वाद हो । यसलाई युवतीका निधारमा, गालामा, घाँटीमा, दुवै हातका कुममा र स्तनमा दल्नाले यसबाट आउने मनमोहक सुगन्धका कारण तीव्र कामवासना जाग्दछ ।



**गोरोचन (गोरोचना)**

**गोरोचना रुचिः शोभा रुचिरा शोभना शुभा ।**
**गौरी च रोचना पिङ्गा मङ्गल्या पिङ्गला शिवा ॥५८॥**
**पीता च गौतमी गव्या वन्दनीया च काञ्चनी ।**
**मेध्या मनोरमा श्यामा रामा भूमिकराह्वया ॥५९॥**
**गोरोचना च शिशिरा विषदोषहन्त्री**
**रुच्या च पाचनकरी कृमिकुष्ठहन्त्री ।**
**भूतग्रहोपशमनं कुरुते च पथ्या**
**शृङ्गारमङ्गलकरी जनमोहिनी च ॥६०॥**

(१) गोरोचना, (२) रुचि, (३) शोभा, (४) रुचिरा, (५) शोभना, (६) शुभा, (७) गौरी, (८) रोचना, (९) पिङ्गा, (१०) मङ्गल्या, (११) पिङ्गला, (१२) शिवा, (१३) पीता, (१४) गौतमी, (१५) गव्या, (१६) वन्दनीया, (१७) काञ्चनी, (१८) मेध्या, (१९) मनोरमा, (२०) श्यामा र (२१) रामा : यी एक्काईस नाम गोरोचनका संस्कृत पर्यायवाची नामहरू हुन् । गोरोचन शीतवीर्यको, विषविकार नाशक, रुचिप्रद, पाचक तथा कीरा र कुष्ठ नाशक हुन्छ । यसले भूतबाधा र ग्रहबाधा शान्त पार्दछ

। यो पथ्य, शृङ्गारका लागि मङ्गलदायक र मानिसलाई लोभ्याउने गुणको हुन्छ ।

## कपुर (कर्पूर)

कर्पूरो घनसारकः सितकरः शीतः शशाङ्कः शिला-
शीतांशुर्हिमवालुका हिमकरः शीतप्रभः शाम्भवः ।
शुभ्रांशुः स्फटिकाभ्रसारमिहिकाताराभ्रचन्द्रेन्दव-
श्चन्द्रालोकतुषारगौरकुमुदान्येकादशाह्वा द्विशः ॥६१॥
पीतासो भीमसेनस्तदनु सितकरः शङ्करावाससञ्ज्ञः
प्रांशुः पिञ्जोऽब्दसारस्तदनु हिमयुता वालुका जूटिका च ।
पश्चादस्यास्तुषारस्तदुपरि सहिमः शीतलः पक्विकाऽन्या
कर्पूरस्येति भेदा गुणरसमहसां वैद्यदृश्येन दृश्याः ॥६२॥
कर्पूरो शिशिरस्तिक्तः स्निग्धश्चोष्णोऽस्रदाहदः ।
चिरस्थो दाहदोषघ्नः स धौतः शुभकृत् परः ॥६३॥

(१) कर्पूर, (२) घनसारक, (३) सितकर, (४) शीत, (५) शशाङ्क, (६) शिला, (७) शीतांशु, (८) हिम, (९) वालुका (हिमवालुका), (१०) हिमकर, (११) शीतप्रभ, (१२) शाम्भव, (१३) शुभ्रांशु, (१४) स्फटिक, (१५) अभ्रसार, (१६) मिहिका, (१७) ताराभ्र, (१८) चन्द्र, (१९) इन्दु, (२०) चन्द्रालोक, (२१) तुषारगौर र (२२) कुमुद : यी बाईस नाम कपूरका संस्कृत पर्यायवाची नामहरू हुन् । पीतास, भीमसेन, सितकर, शङ्करावास, प्रांशु, पिञ्ज, अब्दसार, हिमयुता, वालुका, जूटिका, तुषार, हिम, शीतल र पक्विका : यी कपूरका जातहरू हुन् । यी भेद रस, गुण र वीर्य अनुसारका हुन्छन् त्यसैले वैद्यले आफ्नो बुद्धि लगाएर होसियारीपूर्वक यिनको प्रयोग गर्नुपर्दछ । ताजा कपूर तीतो, चिल्लो, उष्णवीर्यको तथा रक्तविकार र डाह गराउने गुणको हुन्छ । पुरानो कपूर डाह नाश हुन्छ । राम्ररी धोइएको (प्रशोधन गरिएको) कपूर अत्यन्त शुभदायक हुन्छ ।



### उत्पादन हुने बोटको भाग अनुसार कपूरका जात

शिरो मध्यं तलं चेति कर्पूरस्त्रिविधः स्मृतः ।
शिरस्तम्भाग्रसञ्जातं मध्यं पर्णतले तलम् ॥६४॥
भास्वद्विशदपुलकं शिरोजातं तु मध्यमम् ।
सामान्यपुलकं स्वच्छं तले चूर्णं तु गौरकम् ॥६५॥
स्तम्भगर्भस्थितं श्रेष्ठं स्तम्भबाह्ये च मध्यमम् ।
स्वच्छमीषत् हरिद्राभं शुभ्रं तन्मध्यमं स्मृतम् ॥
सुदृढं शुभ्ररूक्षं च पुलकं बाह्यजं वदेत् ॥६६॥

शिर, मध्य र तल गरी कपूर तीन किसिमको हुन्छ । काण्डको माख्लो भागमा हुने कपुरलाई शिर, काण्डको बीच भागमा हुने कपुरलाई मध्य र पातभन्दा मुनि हुने कपुरलाई तल भनिन्छ । जुन कपुर स्वच्छ, हल्का पहेँलो रङ मिसिएको सेतो हुन्छ त्यसलाई मध्य भनिन्छ । बाहिरी भागमा हुने कपुरलाई बाह्यज भनिन्छ । यो कपर कडा, सेतो र रुखो हुन्छ ।

### कपुरका अन्य गुण

**स्वच्छं भृङ्गारपत्रं लघुतरविशदं तोलने तिक्तकश्चेत्**
**स्वादे शैत्यं सुहृद्यं बहलपरिमलामोदसौरभ्यदायि ।**
**निःस्नेहं दार्ढ्यपत्रं शुभतरमिति चेत् राजयोग्यं प्रशस्तं**
**कर्पूरं चान्यथा चेद्बहुतरमशने स्फोटदायि व्रणाय ॥६७॥**

कपुर स्वच्छ, भृङ्गराजका पात जस्ता सेता टुक्रा भएको र हलुका हुनु पर्दछ । यो तीतो, चिसो वा शीतवीर्यको, मुटुका लागि हितकर तथा उत्साहजनक ढङ्गले बास्ना आउने हुन्छ । चिल्लोरहित र बलियो खोल भएको कपुर सबभन्दा शुभदायक र राजाका लागि उपयोगी हुन्छ । यस बाहेकका गुण हुने कपुरको प्रयोग गरिए यसले अधिक मात्रामा खटिरा र फोका निकाल्दछ ।



### चिनियाँ कपुर (चीनक)

**चीनकश्चीनकर्पूरः कृत्रिमो धवलः पटुः ।**
**मेघसारस्तुषारश्च द्वीपकर्पूरजः स्मृतः ॥६८॥**
**चीनकः कटुतिक्तोष्ण ईषच्छीतः कफापहः ।**
**कण्ठदोषहरो मेध्यः पाचनः क्रिमिनाशनः ॥६९॥**

चीनक, चीनकर्पूर, कृत्रिम, धवल, पटु, मेघसार, तुषार र द्वीपकर्पूरज : यी चिनियाँ कपुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कपुर पिरो, तीतो, उष्णवीर्यको, थोरै शीतल, कफविकार नाशक, घाँटीको रोग नाशक, बोसोबर्धक, पाचनी र कीरा नाशक हुन्छ ।

### जवा कस्तूरी

**जवादि गन्धराजं स्यात् कृत्रिमं मृगचर्मजम् ।**
**समूहगन्धं गन्धाढ्यं स्निग्धं सास्नाणिकर्दमम् ॥**
**सुगन्धं तैलनिर्यासं कुटामोदं दशाभिधम् ॥७०॥**
**सौगन्धिकं जवादि स्यात् स्निग्धञ्चोष्णं सुखावहम् ।**

**वाते हितं च राज्ञाञ्च मोहनाह्लादकारणम् ॥७१॥**
**जवादि नीलं सस्निग्धमीषत्पीतं सुगन्धदम् ।**
**आतपे बहुलामोदं राज्ञां योग्यं न चान्यथा ॥७२॥**

जवादि, गन्धराज, कृत्रिम, मृगचर्मज, समूहगन्ध, गन्धाढ्य, स्निग्ध, सास्राणिकर्दम, सुगन्ध, तैलनिर्यास र कुटामोद : यी नाम जवाकस्तुरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सुगन्धी, चिल्लो, उष्णवीर्यको र सुखदायी हुन्छ । यो वातविकारका लागि हितकर उवं धनीहरूका लागि मोहक र आनन्ददायक हुन्छ । नीलो, चिल्लो, हल्का पहेँलो र सुगन्धी जवाकस्तुरी घाममा राख्नाले अति नै आनन्ददायक हुन्छ । यो धनीका लागि योग्य हुन्छ अरुका लागि होइन ।

## टुनी (तूणी)

**तूणीकस्तूणिकस्तूणी पीतकः कच्छपस्तथा ।**
**नन्दी कुठेरकः कान्तो नन्दीवृक्षो नवाह्वयः ॥७३॥**
**नन्दीवृक्षः कटुस्तिक्तः शीतस्तिक्तास्रदाहजित् ।**
**शिरोऽर्तिश्वेतकुष्ठघ्नः सुगन्धिः पुष्टिवीर्यदः ॥७४॥**

(१) तूणीक, (२) तूणिक, (३) तूणी, (४) पीतक, (५) कच्छप, (६) नन्दी, (७) कुठेरक, (८) कान्त र (९) नन्दीवृक्ष : यी नौ नाम टुनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, शीतवीर्यको तथा तीतो हुनाले रक्तविकार र डाहलाई जित्ने गुणको हुन्छ । यसले टाउकाका रोग र सेतोकुष्ठ नाश गर्दछ एवं यो सुगन्धी, पुष्टिदायक र वीर्यवर्धक हुन्छ ।

## जाइपत्री (जातीपत्री)

**जातीपत्री जातिकोशः सुमनःपत्रिकाऽपि सा ।**
**मालतीपत्रिका पञ्चनाम्नी सौमनदा(सा)यिनी ॥७५॥**
**जातीपत्री कटुस्तिक्ता सुरभिः कफनाशनी ।**
**वक्त्रवैशद्यजननी जाड्यदोषनिकृन्तनी ॥७६॥**

(१) जातीपत्री, (२) जातिकोश, (३) सुमनःपत्रिका, (४) मालतीपत्रिका र (५) सौमनदा (सा)यिनी : यी पाँच नाम जाइपत्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । जाइपत्री पिरो, तीतो, सुगन्धी, कफविकार नाशक, मुखलाई स्वच्छ पार्ने र मुखको लाटोपन हटाउने गुणको हुन्छ ।

### जाइफल (जातीफल)

जातीफलं जातिशस्यं शालूकं मालतीफलम् ।
मज्जासारं जातिसारं पुटं च सुमनःफलम् ॥७७॥
जातीफलं कषायोष्णं कटु कण्ठामयार्तिजित् ।
वातातिसारमेहघ्नं लघु वृष्यं च दीपनम् ॥७८॥

जातीफल, जातिशस्य, शालूक, मालतीफल, मज्जासार, जातिसार, पुट र सुमनफल : यी जाइफलका संस्कृत पर्यायवाची नामहरू हुन् । जाइफल टर्रो, उष्णवीर्यको, पिरो, घाँटीका रोगमाथि जित हासिल गर्ने तथा वातविकार, अतिसार र प्रमेह नाशक हुन्छ । यो पचाउन सहज, वीर्यवर्धक र दीपनी हुन्छ ।

### फलकपुर (कङ्कोल)

कक्कोलकं कृतफलं कोलकं कटुकं फलम् ।
विद्वेष्यं स्थूलमरिचं कङ्कोलं माधवोचितम् ॥
कक्कोलं कट्फलं प्रोक्तं मारीचं रुद्रसम्मितम् ॥७९॥
कङ्कोलं कटु तिक्तोष्णं वक्त्रजाड्यहरं परम् ।
दीपनं पाचनं रुच्यं कफवातनिकृन्तनम् ॥८०॥

(१) कक्कोलक, (२) कृतफल, (३) कोलक, (४) कटुकफल, (५) विद्वेष्य, (६) स्थूलमरिच, (७) कक्कोल, (८) माधवोचित, (९) कङ्कोल, (१०) कट्फल र (११) मारीच : यी एघार नाम फलकपुरका संस्कृत पर्यायवाची नामहरू हुन् । फलकपुर पिरो, तीतो, उष्णवीर्यको, उत्कृष्ट तरिकाले मुखको लाटोपन नाशक, दीपनी, पाचनी, रुचिप्रद तथा कफविकार र वातविकार नाशक हुन्छ ।

### ल्वाङ (लवङ्ग)

लवङ्गकलिका दिव्यं लवङ्गं शेखरं लवम् ।
श्रीपुष्पं देवकुसुमं रुचिरं वारिसम्भवम् ॥८१॥
तीक्ष्णपुष्पं तु भृङ्गाङ्गी गीर्वाणकुसुमं तथा ।
पुष्पकं चन्दनादि स्याज्ज्ञेयं च द्वादशाह्वयम् ॥८२॥
लवङ्गं शीतलं तिक्तं चक्षुष्यं भक्तरोचनम् ।
वातपित्तकफघ्नञ्च तीक्ष्णं मूर्धरुजापहम् ॥८३॥
लवङ्गं सोष्णकं तीक्ष्णं विपाके मधुरं हिमम् ।

**वातपित्तकफामघ्नं क्षयकासास्रदोषनुत् ॥८४॥**

(१) लवङ्गकलिका, (२) दिव्य, (३) लवङ्ग, (४) शेखर, (५) लव, (६) श्रीपुष्प, (७) देवकुसुम, (८) रुचिर, (९) वारिसम्भव, (१०) तीक्ष्णपुष्प, (११) भृङ्गाङ्गी, (१२) गीर्वाणकुसुम र (१३) चन्दनपुष्पक : यी तेह्र (बाह्र भनिएको) नाम ल्वाङका संस्कृत पर्यायवाची नामहरू हुन् । ल्वाङ शीतल, तीतो, आँखाका लागि हितकर, खानमा रुची जगाउने, त्रिदोष नाशक, तिक्खर र टाउकाका रोग नाशक हुन्छ । ल्वाङ उष्णवीर्यको तिक्खर हुन्छ र पचेपछि गुलियो र शीतवीर्यको हुन्छ । यसले त्रिदोष, क्षयरोग, खोकी र रक्तविकार नाश गर्दछ ।

### धुपीको चोप (अगरुसार)

**स्वादुस्त्वगरुसारः स्यात्सुधूम्यो गन्धधूमजः ।**
**स्वादुः कटुकषायोष्णः सधूमामोदवातजित् ॥८५॥**

स्वादु, अगरुसार, सुधूम्य र गन्धधूमज : यी धूपीको चोपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, पिरो, टर्रो, र उष्णवीर्यको हुन्छ । यसको धुवाँ बास्नादार हुन्छ र यसले वातविकारलाई जित्दछ ।



### कालो धुपी (कृष्णागरु)

**कृष्णागरु स्यादगरु शृङ्गारं विश्वरूपकम् ।**
**शीर्षं कालागरु केश्यं वसुकं कृष्णकाष्ठकम् ॥**
**धूपार्हं वल्लरं गन्धराजकं द्वादशाह्वयम् ॥८६॥**
**कृष्णागरु कटूष्णं च तिक्तं लेपे च शीतलम् ।**
**पाने पित्तहरं किञ्चित्त्रिदोषघ्नमुदाहृतम् ॥८७॥**

(१) कृष्णागरु, (२) अगरु, (३) शृङ्गार, (४) विश्वरूपक, (५) शीर्ष, (६) कालागरु, (७) केश्य, (८) वसुक, (९) कृष्णकाष्ठक, (१०) धूपार्ह, (११) वल्लर र (१२) गन्धराजक : यी बाह्र नाम कालो धूपीका संस्कृत पर्यायवाची नामहरू हुन् । कालो धूपी पिरो, उष्णवीर्यको, तीतो, लेप दल्दा शीतल गर्ने, खाँदा पित्त विकार नाशक तथा केही हदसम्म त्रिदोषनाशक हुन्छ भनिएको छ ।

### काठेधुपी (काष्ठागरु)

**अन्यागुरु पीतकञ्च लोहं वर्णप्रसादनम् ।**
**अनार्यकमसारञ्च कृमिजग्धञ्च काष्ठकम् ॥८८॥**

**काष्ठागरु कटूष्णञ्च लेपे रूक्षं कफापहम् ॥८९॥**

अन्यागुरु, पीतक, लोह, वर्णप्रसादन, अनार्यक, असार, कृमिजग्ध र काष्ठक : यी नाम काठेधुपीका संस्कृत पर्यायवाची नामहरू हुन् । काठेधुपी पिरो, उष्णवीर्यको, लेप दल्दा रुखो र (खाँदा) कफविकार नाशक हुन्छ ।

### गुजराती धुपी (दाहागरु)

**दाहागरु दहनागरु दाहककाष्ठं च वह्निकाष्ठञ्च ।**
**धूपागरु तैलागरु पुरञ्च पुरमथनवल्लभञ्चैव ॥९०॥**
**दाहागरु कटुकोष्णं केशानां वर्धनं च वर्ण्यं च ।**
**अपनयति केशदोषानातनुते सन्ततं च सौगन्ध्यम् ॥९१॥**

दाहागरु, दहनागरु, दाहककाष्ठ, वह्निकाष्ठ, धूपागरु, तैलागरु, पुर र पुरमथनवल्लभ : यी नाम गुजराती धुपीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो धुपी पिरो, उष्णवीर्यको, कपाल बढाउने, शरीरको वर्णमा निखार लेराउने, कपालका विकारहरु नाश गर्ने र निरन्तर बास्ना आउने गुणको हुन्छ ।



### चमेलीको बास्ना आउने धुपी (मङ्गल्यागरू)

**मङ्गल्या मल्लिका गन्धमङ्गलाऽगरुवाचका ।**
**मङ्गल्या गुरुशिशिरा गन्धाढ्या योगवाहिका ॥९२॥**

मङ्गल्या, मल्लिका, गन्धमङ्गला र अगरुवाची शब्द : यी चमेलीको बास्ना आउने धुपीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो धुपी पचाउन कठिन, शीतवीर्यको, उत्तम बास्ना आउने र योगवाही हुन्छ ।

### जटामसी (जटामांसी)

**मांसी तु जटिला पेशी क्रव्यादी पिशिता मिशी ।**
**केशनी च जटा हिंस्रा जटामांसी च मांसिनी ॥९३॥**
**जटाला नलदा मेषी तामसी चक्रवर्तिनी ।**
**माता भूतजटा चैव जननी च जटावती ॥**
**मृगभक्षाऽपि चेत्येता एकविंशतिधाभिधाः ॥९४॥**

**सुरभिस्तु जटामांसी कषाया कटुशीतला ।**
**कफहृद्भूतदाहघ्नी पित्तघ्नी मोदकान्तिकृत् ॥९५॥**

(१) मांसी, (२) जटिला, (३) पेशी, (४) क्रव्यादी, (५) पिशिता, (६) मिशी, (७) केशनी, (८) जटा, (९) हिंस्रा, (१०) जटामांसी, (११) मांसिनी, (१२) जटाला, (१३) नलदा, (१४) मेषी, (१५) तामसी, (१६) चक्रवर्तिनी, (१७) माता, (१८) भूतजटा, (१९) जननी, (२०) जटावती र (२१) मृगभक्षा : यी एक्काईस नाम जटामसीका संस्कृत पर्यायवाची नामहरू हुन् । जटामसी सुगन्धी, टर्रो, पिरो, शीतवीर्यको तथा कफविकार, डाह र भूतबाधा नाशक हुन्छ । यसले पित्तविकार नाश गर्दछ तथा आनन्द दिन्छ र शरीरलाई चमकिलो बनाउँदछ ।

### जटामसी विशेष (भूतजटा)

**द्वितीया गन्धमांसी च केशी भूतजटा स्मृता ।**
**पिशाची पूतना चैव भूतकेशी च लोमशा ॥**
**जटाला लघुमांसी च ख्याता अङ्कमिताह्वया ॥९६॥**
**गन्धमांसी तिक्तशीता कफकण्ठामयापहा ।**
**रक्तपित्तहरा वर्ण्या विषभूतज्वरापहा ॥९७॥**



(१) गन्धमांसी, (२) केशी, (३) भूतजटा, (४) पिशाची, (५) पूतना, (६) भूतकेशी, (७) लोमशा, (८) जटाला र (९) लघुमांसी : यी नौ नाम जटामसी विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, शीतवीर्यको तथा कफविकार, घाँटीका रोग र रक्तपित्त नाशक हुन्छ । यसले वर्णमा निखार लेराउँदछ तथा विषविकार, भूतबाधा र ज्वर नाश गर्दछ ।

### सानो जटामसी (आकाशमांसी)

**आकाशमांसी सूक्ष्माऽन्या निरालम्बा खसम्भवा ।**
**सेवाली सूक्ष्मपत्री च गौरी पर्वतवासिनी ॥९८॥**
**अभ्रमांसी हिमा शोफव्रणनाडीरुजापहा ।**
**लूतागर्दभजालादिहारिणी वर्णकारिणी ॥९९॥**

आकाशमांसी (अभ्रमांसी), सूक्ष्मा, निरालम्बा, खसम्भवा, सेवाली, सूक्ष्मपत्री, गौरी र पर्वतवासिनी : यी नाम सानो जटामसीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको हुन्छ । यसले सुजन, घाउखटिरा, नसाजन्य रोग र माकुरो आदिको विषले जरो आई शरीर सुन्निने रोगलाई नाश गर्दछ तथा शरीरको वर्णमा निखार लेराउँदछ ।

**शिलारस (तुरुष्क)**

**तुरुष्को यावनो धूम्रो धूम्रवर्णः सुगन्धिकः ।**
**सिह्लकः सिह्लसारश्च पीतसारः कपिस्तथा ॥१००॥**
**पिण्याकः कपिजः कल्कः पिण्डितः पिण्डतैलकः ।**
**करेवरः कृत्रिमको लेपनो मुनिभूह्वयः ॥१०१॥**
**तुरुष्कः सुरभिस्तिक्तः कटुस्निग्धश्च कुष्ठजित् ।**
**कफपित्ताश्मरीमूत्राघातभूतज्वरार्तिजित् ॥१०२॥**

(१) तुरुष्क, (२) यावन, (३) धूम्र, (४) धूम्रवर्ण, (५) सुगन्धिक, (६) सिह्लक, (७) सिह्लसार, (८) पीतसार, (९) कपि, (१०) पिण्याक, (११) कपिज, (१२) कल्क, (१३) पिण्डित, (१४) पिण्डतैलक, (१५) करेवर, (१६) कृत्रिमक र (१७) लेपन : यी सत्र नाम शिलारसका संस्कृत पर्यायवाची नामहरू हुन् । शिलारस सुगन्धी, तीतो, पिरो र चिल्लो हुन्छ । यसले कुष्ठ, कफविकार, पित्तविकार, पत्थरी, मूत्राघात, भूतबाधा र ज्वरलाई जित्दछ ।

**गोकुलधुप (गुग्गुलु)**

**गुग्गुलुर्यवनद्विष्टो भवाभीष्टो निशाटकः ।**
**जटालः कालनिर्यासः पूरो भूतहरः शिवः ॥१०३॥**
**कौशिकः शाम्भवो दुर्गो यातुघ्नो महिषाक्षकः ।**
**देवेष्टो मरुदेश्योऽपि रक्षोहा रूक्षगन्धकः ॥**
**दिव्यस्तु महिषाक्षश्च नामान्येतानि विंशतिः ॥१०४॥**
**गुग्गुलुः कटुतिक्तोष्णः कफमारुतकासजित् ।**
**क्रिमिवातोदरप्लीहशोफार्शोघ्नो रसायनः ॥१०५॥**

(१) गुग्गुलु, (२) यवनद्विष्ट, (३) भवाभीष्ट, (४) निशाटक, (५) जटाल, (६) कालनिर्यास, (७) पूर, (८) भूतहर, (९) शिव, (१०) कौशिक, (११) शाम्भव, (१२) दुर्ग, (१३) यातुघ्न, (१४) महिषाक्षक, (१५) देवेष्ट, (१६) मरुदेश्य, (१७) रक्षोहा, (१८) रूक्षगन्धक, (१९) दिव्य र (२०) महिषाक्ष : यी बीस नाम गोकुलधुपका संस्कृत पर्यायवाची नामहरू हुन् । गोकुलधुप तीतो, उष्णवीर्यको तथा कफविकार, वातविकार र खोकीलाई जित्ने गुणको हुन्छ । यसले कीरा, वातविकार, पेटका रोग, फियोका रोग, सुजन र अल्काई नाश गर्दछ । यो रसायनी हुन्छ ।

**पहेँलो गोकुलधुप (कणगुग्गुलु)**

**गन्धराजः स्वर्णकणः सुवर्णः कणगुग्गुलुः ।**

**कनको वंशपोतश्च सुरसश्च पलङ्कषः ॥१०६॥**
**कणगुग्गुलुः कटूष्णः सुरभिर्वातनाशनः ।**
**शूलगुल्मोदराध्मानकफघ्नश्च रसायनः ॥१०७॥**

गन्धराज, स्वर्णकण, सुवर्ण, कणगुग्गुलु, कनक, वंशपोत, सुरस र पलङ्कष : यी पहैँलो गोकुलधुपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो धुप पिरो, उष्णवीर्यको, सुगन्धी र वातविकार नाशक हुन्छ । यसले शूल, गुल्म, पेटका रोग, आध्मान र कफविकार पनि नाश गर्दछ । यो रसायनी हुन्छ ।

### गोकुलधुप विशेष (भूमिजगुग्गुलु)

**गुग्गुलुश्च तृतीयोऽन्यो भूमिजो दैत्यमेदजः ।**
**दुर्गाह्लाद इडाजात आशादिरिपुसम्भवः ॥**
**मज्जाजो मेदजश्चैव महिषासुरसम्भवः ॥१०८॥**
**गुग्गुलुर्भूमिजस्तिक्तः कटूष्णः कफवातजित् ।**
**उमाप्रियश्च भूतघ्नो मेध्यः सौरभ्यदः सदा ॥१०९॥**

भूमिज, दैत्यमेदज, दुर्गाह्लाद, इडाजात, आशादिरिपुसम्भव, मज्जाज, मेदज र महिषासुरसम्भव : यी गोकुलधुप विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो, उष्णवीर्यको तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यो देवीका लागि प्रिय, भूतबाधा नाशक, दिमागको ग्रहण गर्ने क्षमता बढाउने र सदा सुगन्धी हुन्छ ।

### सालधुप (राल)

**रालः सर्जरसश्चैव शालः कनकलोद्भवः ।**
**ललनः शालनिर्यासो देवेष्टः शीतलस्तथा ॥११०॥**
**बहुरूपः शालरसः सर्जनिर्यासकस्तथा ।**
**सुरभिः सुरधूपश्च यक्षधूपोऽग्निवल्लभः ॥**
**कालः कललजः प्रोक्तो नाम्ना सप्तदशाङ्कितः ॥१११॥**
**रालस्तु शिशिरः स्निग्धः कषायस्तिक्तसङ्ग्रहः ।**
**वातपित्तहरः स्फोटकण्डूतिव्रणनाशनः ॥११२॥**

(१) राल, (२) सर्जरस, (३) शाल, (४) कनकलोद्भव, (५) ललन, (६) शालनिर्यास, (७) देवेष्ट, (८) शीतल, (९) बहुरूप, (१०) शालरस, (११) सर्जनिर्यासक, (१२) सुरभि, (१३) सुरधूप, (१४)

यक्षधूप, (१५) अग्निवल्लभ, (१६) काल र (१७) कललज : यी सत्र नाम सालधुपका संस्कृत पर्यायवाची नामहरू हुन् । सालधुप शीतवीर्यको, चिल्लो, टर्रो र तीतो हुन्छ । यसले वातविकार, पित्तविकार, बिमिरा वा फोका, चिलाउने रोग र घाउखटिरा नाश गर्दछ ।

### काँडे सल्लाको खोटो (कुन्दुरु)

**कुन्दुरुकः सौराष्ट्रः शिखरी कुन्दुरुककुन्दुकस्तीक्ष्णः ।**
**गोपुरको बहुगन्धः पालिन्दो भीषणश्च दशसञ्ज्ञः ॥११३॥**
**कुन्दुरुर्मधुरस्तिक्तः कफपित्तार्तिदाहनुत् ।**
**पाने लेपे च शिशिरः प्रदरामयशान्तिकृत् ॥११४॥**

(१) कुन्दुरुक, (२) सौराष्ट्र, (३) शिखरी, (४) कुन्दुरुक, (५) कुन्दुक, (६) तीक्ष्ण, (७) गोपुरक, (८) बहुगन्ध, (९) पालिन्द र (१०) भीषण : यी दश नाम (कुन्दुरुक दोहोरिएको) काँडे सल्लाको खोटोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तीतो तथा कफविकार, पित्तविकार र डाह ठिक गर्ने गुणको हुन्छ । यो खाँदा वा दल्दा शीतल गर्दछ । यसले प्रदर रोगलाई शान्त पार्दछ ।

### कुट (कुष्ठ)



**कुष्ठं रुजाऽगदो व्याधिरामयं पारिभद्रकम् ।**
**रामं वानीरजं वाप्यं ज्ञेयं त्वग्दोषमुत्पलम् ॥**
**कुत्सञ्च पाटवं चैव पद्मकं मनुसञ्ज्ञकम् ॥११५॥**
**कुष्ठं कटूष्णं तिक्तं स्यात् कफमारुतकुष्ठजित् ।**
**विसर्पविषकण्डूतिखर्जूदद्रुघ्नकान्तिकृत् ॥११६॥**

(१) कुष्ठ, (२) रुजा, (३) अगद, (४) व्याधि, (५) आमय, (६) पारिभद्रक, (७) राम, (८) वानीरज, (९) वाप्य, (१०) त्वग्दोष, (११) उत्पल, (१२) कुत्स, (१३) पाटव र (१४) पद्मक : यी चौध नाम कुटका संस्कृत पर्यायवाची नामहरू हुन् । कुट पिरो, उष्णवीर्यको, तीतो तथा कफविकार, वातविकार र कुष्ठलाई जित्ने गुणको हुन्छ । कुटले विसर्प, विषविकार, चिलाउने रोग, लुतो र दाद नाश गर्दछ तथा शरीरलाई पनि चम्किलो बनाउँदछ ।

### अनन्तमूल (सारिवा)

**सारिवा शारदा गोपा गोपवल्ली प्रतानिका ।**
**गोपकन्या लताऽऽस्फोता श्वेतोक्ता काष्ठसारिवा ॥११७॥**

सारिवा, शारदा, गोपा, गोपवल्ली, प्रतानिका, गोपकन्या, लता, आस्फोता र काष्ठसारिवा : यी सेतो सारिवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कालो सारिवा (कृष्णमूली)

**सारिवाऽन्या कृष्णमूली कृष्णा चन्दनसारिवा ।**
**भद्रा चन्दनगोपा तु चन्दना कृष्णवल्यपि ॥११८॥**

सारिवा, कृष्णमूली, कृष्णा, चन्दनसारिवा, भद्रा, चन्दनगोपा, चन्दना र कृष्णवल्ली : यी कालो सारिवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुई थरी सारिवाका गुण

**सारिवे द्वे तु मधुरे कफवातास्रनाशने ।**
**कुष्ठकण्डूज्वरहरे मेहदुर्गन्धिनाशने ॥११९॥**

दुवै थरी सारिवा गुलिया तथा कफविकार, वातविकार, रक्तविकार, कुष्ठ, लुतो, ज्वर, प्रमेह र दुर्गन्ध नाशक हुन्छन् ।



### नखी (नख)

**नखः कररुहः शिल्पी शुक्तिशङ्खः खुरः शफः ।**
**वलः कोशी च करजो हनुर्नागहनुस्तथा ॥१२०॥**
**पाणिजो बदरीपत्रो धूप्यः पण्यविलासिनी ।**
**सन्धिनालः पाणिरुहः स्यादष्टादशसञ्ज्ञकः ॥१२१॥**
**नखः स्यादुष्णकटुको विषं हन्ति प्रयोजितः ।**
**कुष्ठकण्डूव्रणघ्नश्च भूतविद्रावणः परः ॥१२२॥**

(१) नख, (२) कररुह, (३) शिल्पी, (४) शुक्ति, (५) शङ्ख, (६) खुर, (७) शफ, (८) वल, (९) कोशी, (१०) करज, (११) हनु, (१२) नागहनु, (१३) पाणिज, (१४) बदरीपत्र, (१५) धूप्य, (१६) पण्यविलासिनी, (१७) सन्धिनाल र (१८) पाणिरुह : यी अठार नाम नखीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उष्णवीर्यको, पिरो, विचार लगाएर प्रयोग गर्दा विषविकार नाशक तथा कुष्ठ, लुतो र घाउखटिरा नाशक हुन्छ । यसले राम्रोसँग भूतबाधा नाश गर्दछ ।

## नखीविशेष (चक्री)

**नखोऽन्यः स्याद्बलनखः कूटस्थश्चक्रनायकः ।**
**चक्री चक्रनखस्त्र्यस्रः कालो व्याघ्रनखः स्मृतः ॥१२३॥**
**द्वीपिनखो व्यालनखः खपुटो व्यालपाणिजः ।**
**व्यालायुधो व्यालबलो व्यालखड्गश्च षोडश ॥१२४॥**
**(ग्रहभूतोपशमनं पवित्रं द्वीपिजं नखम् ।)**
**व्यालनखस्तु तिक्तोष्णः कषायः कफवातजित् ।**
**कण्डुकुष्ठव्रणघ्नश्च वर्ण्यः सौगन्ध्यदः परः ॥१२५॥**

(१) नख, (२) बलनख, (३) कूटस्थ, (४) चक्रनायक, (५) चक्री, (६) चक्रनख, (७) त्र्यस्र, (८) काल, (९) व्याघ्रनख, (१०) द्वीपिनख, (११) व्यालनख, (१२) खपुट, (१३) व्यालपाणिज, (१४) व्यालायुध, (१५) व्यालबल र (१६) व्यालखड्ग : यी सोह्र नाम नखीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । द्वीपिज-नखी ग्रहबाधा र भूतबाधा नाशक तथा पवित्र हुन्छ । व्यालनख तीतो, उष्णवीर्यको, टर्रो तथा कफविकार र वातविकारलाई जित्ने गुणको हुन्छ । यसले लुतो, कुष्ठ र घाउखटिरालाई निको पार्दछ । यो शरीरको वर्णमा निखार लेराउने अत्यन्त सुगन्धी हुन्छ ।



## कपुरपाती (स्पृक्का)

**स्पृक्का च देवी पिशुना वधूश्च कोटिर्मनुर्ब्राह्मणिका सुगन्धा ।**
**समुद्रकान्ता कुटिला तथा च मालालिका भूतलिका च लघ्वी ॥१२६॥**
**निर्माल्या सुकुमारा च मालाली देवपुत्रिका ।**
**पञ्चगुप्तिरसृक्प्रोक्ता नखपुष्पी च विंशतिः ॥१२७॥**
**स्पृक्का कटुकषाया च तिक्ता श्लेष्मार्तिकासजित् ।**
**श्लेष्ममेहाश्मरीकृच्छ्रनाशनी च सुगन्धदा ॥१२८॥**

(१) स्पृक्का, (२) देवी, (३) पिशुना, (४) वधू, (५) कोटि, (६) मनु, (७) ब्राह्मणिका, (८) सुगन्धा, (९) समुद्रकान्ता, (१०) कुटिला, (११) मालालिका, (१२) भूतलिका, (१३) लघ्वी, (१४) निर्माल्या, (१५) सुकुमारा, (१६) मालाली, (१७) देवपुत्रिका, (१८) पञ्चगुप्ति, (१९) असृक् र (२०) नखपुष्पी : यी बीस नाम कपुरपातीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, टर्रो, तीतो तथा कफविकार खोकीलाई जित्ने गुणको हुन्छ । यो पाति कफविकार, प्रमेह, पत्थरी र कृच्छ्र नाशक तथा सुगन्धी हुन्छ ।

### लोठसल्लो (स्थौणेयक) ?

**स्थौणेयकं बर्हिशिखं शुकच्छदं मयूरचूडं शुकपुच्छकं तथा ।**
**विकीर्णरोमापि च कीरवर्णकं विकर्णसञ्ज्ञं हरितं नवाह्वयम् ॥१२९॥**
**स्थौणेयं कफपित्तघ्नं सुगन्धि कटुतिक्तकम् ।**
**पित्तप्रकोपशमनं बलपुष्टिविवर्धनम् ॥१३०॥**

(१) स्थौणेयक, (२) बर्हिशिख, (३) शुकच्छद, (४) मयूरचूड, (५) शुकपुच्छक, (६) विकीर्णरोमा, (७) कीरवर्णक, (८) विकर्ण र (९) हरित : यी नौ नाम लोठसल्लो(?) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो कफविकार र पित्तविकार नाशक, सुगन्धी तथा पिरो र तीतो हुन्छ । यसले पित्तविकारलाई शान्त पार्दछ तथा बल र पुष्टि बढाउँदछ ।

### कालो जटामसी (मुरा)

**मुरा गन्धवती दैत्या गन्धाढ्या गन्धमादनी ।**
**सुरभिर्भूरिगन्धा च कुटी गन्धकुटी तथा ॥१३१॥**
**मुरा तिक्ता कटुः शीता कषाया कफपित्तहृत् ।**
**श्वासासृग्विषदाहार्तिभ्रममूर्छातृषापहा ॥१३२॥**

मुरा, गन्धवती, दैत्या, गन्धाढ्या, गन्धमादनी, सुरभि, भूरिगन्धा, कुटी र गन्धकुटी : यी कालो जटामसीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो, शीतवीर्यको, टर्रो तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यो जटामसीले दम, रक्तविकार, डाह, भ्रम, बेहोसीपन र तिर्खारोग नाश गर्दछ ।

### पत्थरकुङ्कुम (शैलेय)

**शैलेयं शिलजं वृद्धं शिलापुष्पं शिलोद्भवम् ।**
**स्थविरं पलितं जीर्णं तथा कालानुसार्यकम् ॥१३३॥**
**शिलोत्थञ्च शिलादद्रुः शैलजं गिरिपुष्पकम् ।**
**शिलाप्रसूनं सुभगं शैलकं षोडशाह्वयम् ॥१३४॥**
**शैलेयं शिशिरं तिक्तं सुगन्धि कफपित्तजित् ।**
**दाहतृष्णावमिश्वासव्रणदोषविनाशनम् ॥१३५॥**

(१) शैलेय, (२) शिलज, (३) वृद्ध, (४) शिलापुष्प, (५) शिलोद्भव, (६) स्थविर, (७) पलित, (८) जीर्ण, (९) कालानुसार्यक, (१०) शिलोत्थ, (११) शिलादद्रु, (१२) शैलज, (१३) गिरिपुष्पक, (१४)

शिलाप्रसून, (१५) सुभग र (१६) शैलक : यी सोह्र नाम पत्थरकुङ्कुमका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो, सुगन्धी तथा कफविकार पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले डाह, तिर्खारोग, वाकवाकी, दम र घाउखटिरा नाश गर्दछ ।

### गन्धपाला विशेष (चोरक)

**चोरकः शङ्कितश्चण्डो दुष्पत्रः क्षेमको रिपुः ।**
**चपलः कितवो धूर्तः पटुर्नीचो निशाचरः ॥१३६॥**
**गणहासः कोपनकश्चौरकः फलचोरकः ।**
**दुष्कुलो ग्रन्थिलश्चैव सुग्रन्थिः पर्णचोरकः ॥**
**ग्रन्थिपर्णो ग्रन्थिदलो ग्रन्थिपत्रस्त्रिनेत्रधा ॥१३७॥**
**चोरकस्तीव्रगन्धोष्णस्तिक्तो वातकफापहः ।**
**नासामुखरुजाजीर्णकृमिदोषविनाशनः ॥१३८॥**

(१) चोरक, (२) शङ्कित, (३) चण्ड, (४) दुष्पत्र, (५) क्षेमक, (६) रिपु, (७) चपल, (८) कितव, (९) धूर्त, (१०) पटु, (११) नीच, (१२) निशाचर, (१३) गणहास, (१४) कोपनक, (१५) चौरक, (१६) फलचोरक, (१७) दुष्कुल, (१८) ग्रन्थिल, (१९) सुग्रन्थि, (२०) पर्णचोरक, (२१) ग्रन्थिपर्ण, (२२) ग्रन्थिदल र (२३) ग्रन्थिपत्र : यी तेईस नाम गन्धपाला विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कडा गन्ध आउने, उष्णवीर्यको, तीतो तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले नाक र मुखका रोगहरू, अजीर्ण र कीराजन्य विकार नाश गर्दछ ।

### पैयुँ (पद्मक)

**पद्मकं पीतकं पीतं मालयं शीतलं हिमम् ।**
**शुभ्रं केदारजं रक्तं पाटलापुष्पसन्निभम् ॥**
**पद्मकाष्ठं पद्मवृक्षं प्रोक्तं स्याद्द्वादशाह्वयम् ॥१३९॥**
**पद्मकं शीतलं तिक्तं रक्तपित्तविनाशनम् ।**
**मोहदाहज्वरभ्रान्तिकुष्ठविस्फोटशान्तिकृत् ॥१४०॥**

(१) पद्मक, (२) पीतक, (३) पीत, (४) मालय, (५) शीतल, (६) हिम, (७) शुभ्र, (८) केदारज, (९) रक्त, (१०) पाटलापुष्पसन्निभ, (११) पद्मकाष्ठ र (१२) पद्मवृक्ष : यी बाह्र नाम पैयुँका संस्कृत पर्यायवाची नामहरू हुन् । पैयुँ शीतवीर्यको, तीतो र रक्तपित्त नाशक हुन्छ । यसले मोह, डाह, ज्वर, भ्रम, कुष्ठ र विस्फोटलाई शान्त पार्दछ ।

धुपी विशेष (प्रपौण्डरीक)

प्रपौण्डरीकं चक्षुष्यं पुण्डर्यं पुण्डरीयकम् ।
पौण्डर्यं च सुपुष्पञ्च सानुजं चानुजं स्मृतम् ॥१४१॥
प्रपौण्डरीकं चक्षुष्यं मधुरं तिक्तशीतलम् ।
पित्तरक्तव्रणान् हन्ति ज्वरदाहतृषापहम् ॥१४२॥

प्रपौण्डरीक, चक्षुष्य, पुण्डर्य, पुण्डरीयक, पौण्डर्य, सुपुष्प, सानुज र अनुज : यी धुपीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो आँखाका लागि हितकर, गुलियो, तीतो र शीतवीर्यको हुन्छ । यसले पित्तविकार, रक्तविकार, घाउखटिरा, ज्वर, डाह र तिर्खारोग नाश गर्दछ ।

लामज्जक (झार विशेष)

लामज्जकं सुनालं स्यादमृणालं लवं लघु ।
इष्टकापथकं शीघ्रं दीर्घमूलं जलाश्रयम् ॥१४३॥
लामज्जकं हिमं तिक्तं मधुरं वातपित्तजित् ।
तृड्दाहश्रममूर्छार्तिरक्तपित्तज्वरापहम् ॥१४४॥



लामज्जक, सुनाल, अमृणाल, लव, लघु, इष्टकापथक, शीघ्र, दीर्घमूल र जलाश्रय : यी लामज्जकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, तीतो, गुलियो तथा वातविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले तिर्खारोग, डाह, थकाई, बेहोसीपन, रक्तपित्त र ज्वर नाश गर्दछ ।

मांसरोहिणी (ऐँसेलु)

मांसरोहिण्यतिरुहा वृत्ता चर्मकषा च सा ।
विकसा मांसरोही च ज्ञेया मांसरुहा मुनिः ॥१४५॥
अन्या मांसी सदामांसी मांसरोहा रसायनी ।
सुलोमा लोमकरणी रोहिणी मांसरोहिका ॥१४६॥
विकसा कटुका तिक्ता तथोष्णा स्वरसादनुत् ।
रसायनप्रयोगाच्च सर्वरोगहरा मता ॥
कषाया ग्राहिणी वर्ण्या रक्तपित्तप्रसादनी ॥१४७॥
रोहिणीयुगलं शीतं कषायं क्रिमिनाशनम् ।
कण्ठशुद्धिकरं रुच्यं वातदोषनिषूदनम् ॥१४८॥

(१) मांसरोहिणी, (२) अतिरुहा, (३) वृत्ता, (४) चर्मकषा, (५) विकसा, (६) मांसरोही र (७) मांसरुहा : यी सात नाम पहिलो थरी मांसरोहिणीका तथा मांसी, सदामांसी, मांसरोहा, रसायनी, सुलोमा, लोमकरणी, रोहिणी र मांसरोहिका : यी अर्को थरी मांसरोहिणीका संस्कृत पर्यायवाची नामहरू हुन् । पहिलो थरी मांसरोहिणी पिरो, तीतो, उष्णवीर्यको र स्वर बसेको ठिक गर्ने गुणको हुन्छ । यसलाई रसायनका रूपमा प्रयोग गर्नाले सबै किसिमका रोग ठिक गर्ने गुणको हुन्छ भनिएको छ । दोश्रो थरी मांसरोहिणी टर्रो, ग्राही, वर्णमा निखार लेराउने र रक्तपित्तलाई शान्त पार्ने गुणको हुन्छ । दुवै थरी रोहिणी शीतवीर्यका, टर्रा, कीरा नाशक, घाँटी सफा गर्ने, रुचिवर्धक र वातविकार नाशक हुन्छन् ।

## तारपिन (श्रीवेष्ट)

**श्रीवेष्टो वृक्षधूपश्च चीडा गन्धो रसाङ्गकः ।**
**श्रीवासः श्रीरसो वेष्टो लक्ष्मीवेष्टस्तु वेष्टकः ॥१४९॥**
**वेष्टसारो रसावेष्टः क्षीरशीर्षः सुधूपकः ।**
**धूपाङ्गस्तिलपर्णश्च सरलाङ्गोऽपि षोडश ॥१५०॥**
**श्रीवेष्टः कटुतिक्तश्च कषायः श्लेष्मपित्तजित् ।**
**योनिदोषरुजाजीर्णव्रणघ्नाध्मानदोषजित् ॥१५१॥**

(१) श्रीवेष्ट, (२) वृक्षधूप, (३) चीडागन्ध, (४) रसाङ्गक, (५) श्रीवास, (६) श्रीरस, (७) वेष्ट, (८) लक्ष्मीवेष्ट, (९) वेष्टक, (१०) वेष्टसार, (११) रसावेष्ट, (१२) क्षीरशीर्ष, (१३) सुधूपक, (१४) धूपाङ्ग, (१५) तिलपर्ण र (१६) सरलाङ्ग : यी सोह्र नाम तारपिनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, टर्रो तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले योनिका रोग, अजीर्ण, घाउखटिरा र आध्मान रोगलाई पनि जित्दछ ।

## खसखस (उशीर)

**उशीरममृणालं स्याज्जलवासं हरिप्रियम् ।**
**मृणालमभयं वीरं वीरणं समगन्धिकम् ॥१५२॥**
**रणप्रियं वारितरं शिशिरं शितिमूलकम् ।**
**वेणीगमूलकं चैव जलामोदं सुगन्धिकम् ॥**
**सुगन्धिमूलकं शुभ्रं बालकं वसुभूह्वयम् ॥१५३॥**
**उशीरं शीतलं तिक्तं दाहश्रमहरं परम् ।**
**पित्तज्वरार्तिशमनं जलसौगन्ध्यदायकम् ॥१५४॥**

(१) उशीर, (२) अमृणाल, (३) जलवास, (४) हारांप्रिय, (५) मृणाल, (६) अभय, (७) वीर, (८) वीरण, (९) समगन्धिक, (१०) रणप्रिय, (११) वारितर, (१२) शिशिर, (१३) शितिमूलक, (१४) वेणीगमूलक, (१५) जलामोद, (१६) सुगन्धिक, (१७) सुगन्धिमूलक, (१८) शुभ्र र (१९) बालक : यी उन्नाईस (अठार भनिएको) नाम खसखसका संस्कृत पर्यायवाची नामहरू हुन् । खसखस शीतवीर्यको, तीतो तथा उत्कृष्ट तरिकाले डाह र थकाई नाश गर्ने गुणको हुन्छ । यसले पित्तविकार र ज्वरलाई शान्त पार्दछ तथा पानीलाई सुगन्धित बनाउँदछ ।

**महारङ्गी (नलिका)**

**नलिका विद्रुमलतिका कपोतबाणा नली च निर्मथ्या ।**
**सुषिरा धमनी स्तुत्या रक्तदला नर्तकी नटी रुद्राः ॥१५५॥**
**नलिका तिक्तकटुका तीक्ष्णा च मधुरा हिमा ।**
**कृमिवातोदरार्त्यर्शः शूलघ्नी मलशोधनी ॥१५६॥**

(१) नलिका, (२) विद्रुमलतिका, (३) कपोतबाणा, (४) नली, (५) निर्मथ्या, (६) सुषिरा, (७) धमनी, (८) स्तुत्या, (९) रक्तदला, (१०) नर्तकी र (११) नटी : यी एघार नाम नलिकाका संस्कृत पर्यायवाची नामहरू हुन् । नलिका तीतो, पिरो, तिक्खर, गुलियो र शीतवीर्यको हुन्छ , यसले कीरा, वातविकार, पेटका रोग, अल्काई र शूल नाश गर्दछ । यो मल प्रशोधक हुन्छ ।



**वर्गप्रशस्ति**

**इत्थं गन्धद्रव्यकदम्बाह्वयवीर्यव्याख्या-**
**वाचोयुक्तिविविक्तोज्ज्वलसर्गम् ।**
**वर्गं वक्त्राम्भोरुहमोदार्हमधीयाथैनं**
**मध्येसंसदसी दीव्यतु वैद्यः ॥१५७॥**

यसरी यस अध्यायमा सूक्ष्मरूपमा सुगन्धका बारेमा बताइएको व्याख्यालाई राम्ररी पढेको एक चिकित्सक सुगन्धित पदार्थका विषयमा निपुणता हासिल गरी विद्वान वैद्यहरूको सभामा प्रशंसित हुन पुग्दछ ।

**ये गन्धयन्ति सकलानि च भूतलानि**
**लोकांश्च येऽपि सुखयन्ति च गन्धलुब्धान् ।**
**तेषामयं मलयजादिसुगन्धिनाम्नां**
**भूर्गन्धवर्ग इति विश्रुतिमेति वर्गः ॥१५८॥**

यस्ता सुगन्धित फूल र पदार्थहरूका लागि समर्पित यो अध्यायको नाम भूगन्ध-वर्ग राखिएको छ, जसले आफ्नो सुगन्ध सारा संसारमा फैलाई सुगन्ध प्रेमीहरूलाई एकदमै लचिलो बनाउँदछ ।

**यस्योच्चैश्चरितानि शीतसुरभीण्यभ्यस्य सत्यात्मनो**
**दुश्चारित्रजना निषङ्गजनितं द्राग्दौःस्थमास्थन् स्वकम् ।**
**तस्यायं कृतिनः कृतौ नरहरेः श्रीचन्दनादिः स्थितिं**
**वर्गो वाञ्छति नामनैगमशिखाभूषामणौ द्वादशः ॥१५९॥**

आयुर्वेदरूपी अग्निको शिखा जस्तै रहेको यो अध्याय त्यस्ता नरहरीले रचना गरेको ग्रन्थको बाह्रौं अध्याय हो जसको धार्मिक, शान्त्वनादायी र उच्च आचरणको अनुशरण गर्नाले खराब चरित्र भएका मानिस पनि आफ्नो खराब स्वभाव त्याग गर्दछन् ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ द्वादशः चन्दनादिवर्गः समाप्तः ॥१२॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत चन्दनादि नामक बाह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१२।**

## सुवर्णादिवर्गः

त्रिस्वर्णरौप्यताम्राणि त्रपु सीसं द्विरीतिका ।
कांस्यायोवर्त्तकं कान्तं किट्टं मुण्डञ्च तीक्ष्णकम् ॥१॥
शिला सिन्दूरभूनागं हिङ्गुलं गैरिकं द्विधा ।
तुवरी हरितालञ्च गन्धकं च शिलाजतु ॥२॥
सिकथकञ्च द्विकासीसं माक्षिकौ पञ्चधाऽञ्जनम् ।
कम्पिल्लतुत्थरसकं पारदो चाभ्रकं चतुः ॥३॥
स्फटी च क्षुल्लकः शङ्खौ कपर्दः शुक्तिका द्विधा ।
खटिनो दुग्धपाषाणो मणिश्च कर्पूराद्यकः ॥४॥
सिकता च द्विकङ्कुष्ठं विमला च द्विधा मता ।
तथाऽऽखुप्रस्तरश्चैव शरवेदमिताह्वयाः ॥५॥

यस अध्यायमा सुन, चाँदी, तामा, त्रपु, सीस, रीति, कांस्य, आवर्त्तक, कान्त, किट्ट, मुण्ड, तीक्ष्णक, शिला, सिन्दूर, भूनाग, हिङ्गुल, गैरिक, तुवरी, हरिताल, गन्धक, शिलाजतु, सिकथक, कासीस, माक्षिक, अञ्जन, कम्पिल्ल, तुथ्क, रसक, पारद, अभ्रक, स्फटी, क्षुल्लक, शङ्ख, कपर्द, शुक्तिका, खटिन, दुग्धपाषाण, कर्पूरमणि, सिकता, कङ्कुष्ठ, विमला, आखुप्रस्तर आदि पैँतालिस (शरवेद) द्रव्यका बारेमा वर्णन गरिएको छ ।



## रत्न र उपरत्न

अथ रत्नं नवं वक्ष्ये पद्मरागादिकं क्रमात् ।
माणिक्यमुक्ताफलविद्रुमाणि गारुत्मतं स्यादथ पुष्परागः ॥६॥
वज्रं च नीलञ्च नव क्रमेण गोमेदवैडूर्ययुतानि तानि ।
स्फटिकञ्च सूर्यकान्तो वैक्रान्तश्चन्द्रकान्तकः ॥
राजावर्तः पेरोजं स्यादुभौ बाणाञ्च सङ्ख्यया ॥७॥

अब म पद्मराग आदि गरिएका नौ प्रकारका रत्नका बारेमा बताउँदछु । ती क्रमैले माणिक, मोति, मुगा, पन्ना, पुष्पराज, हीरा, निलम, गोमेद र वैदुर्य हुन् । यसैगरी स्फटिक, सूर्यकान्त, वैक्रान्त, चन्द्रकान्त, राजावर्त र पेरोज : यी उपरत्नहरू हुन् । राजावर्त र पेरोज नामका धातु पाँच-पाँच किसिमका हुन्छन् ।

## सुन (सुवर्ण)

**स्वर्णं सुवर्णकनकोज्ज्वलकाञ्चनानि कल्याणहाटकहिरण्यमनोहराणि ।**
**गाङ्गेयगैरिकमहारजताग्निवीर्यरुक्माग्निहेमतपनीयकभास्कराणि ॥८॥**
**जाम्बूनदाष्टापदजातरूपपिञ्जानचामीकरकर्बुराणि ।**
**कार्तस्वरापिञ्जरभर्मभूरितेजांसि दीप्तानलपीतकानि ॥९॥**
**मङ्गल्यसौमेरवशातकुम्भशृङ्गारचन्द्राजरजाम्बवानि ।**
**आग्नेयनिष्काग्निशिखानि चेति नेत्राब्धिनिर्धारितनाम हेम ॥१०॥**

(१) स्वर्ण, (२) सुवर्ण, (३) कनक, (४) उज्ज्वल, (५) काञ्चन, (६) कल्याण, (७) हाटक, (८) हिरण्य, (९) मनोहर, (१०) गाङ्गेय, (११) गैरिक, (१२) महारजत, (१३) अग्निवीर्य, (१४) रुक्म, (१५) अग्नि, (१६) हेम, (१७) तपनीयक, (१८) भास्कर, (१९) जाम्बूनद, (२०) अष्टापद, (२१) जातरूप, (२२) पिञ्जान, (२३) चामीकर, (२४) कर्बुर, (२५) कार्तस्वर, (२६) अपिञ्जर, (२७) भर्म, (२८) भूरितेज, (२९) दीप्त, (३०) अनल, (३१) पीतक, (३२) मङ्गल्य, (३३) सौमेरव, (३४) शातकुम्भ, (३५) शृङ्गार, (३६) चन्द्र, (३७) अजर, (३८) जाम्बव, (३९) आग्नेय, (४०) निष्क, (४१) अग्नि र (४२) शिखा : यी बयालीस नाम (अग्नि दोहोरिएको) सुनका संस्कृत पर्यायवाची नामहरू हुन् ।



## सुनका गुण

**स्वर्णं स्निग्धकषायतिक्तमधुरं दोषत्रयध्वंसनं**
**शीतं स्वादु रसायनञ्च रुचिकृच्चक्षुष्यमायुष्प्रदम् ।**
**प्रज्ञावीर्यबलस्मृतिस्वरकरं कान्तिं विधत्ते तनोः**
**सन्धत्ते दुरितक्षयं श्रियमिदं धत्ते नृणां धारणात् ॥११॥**

सुन चिल्लो, टर्रो, तीतो, गुलियो र त्रिदोष नाशक हुन्छ । यो शीतवीर्यको, स्वादिलो, रसायनी, रुचिप्रद, आँखाका लागि हितकर र आयुवर्धक हुन्छ । सुनले बुद्धि, वीर्य, बल, सम्झनाशक्ति र स्वर दिन्छ र शरीरको तेज बढाउँदछ । सुन लगाउँदा यसले मानिसका खराब कुरा (पाप वा खराब बाटो) नाश भई श्री प्राप्ति गराउँदछ ।

## सुनको परीक्षण

**दाहे च रक्तमथ यच्च सितं छिदायां काश्मीरकान्ति च विभाति निकाषपट्टे ।**
**स्निग्धञ्च गौरवमुपैति च यत्तुलायां जात्या तदेव कनकं मृदु रक्तपीतम् ॥१२॥**

बाल्दा वा पोल्दा रातो हुने, काट्दा सेतो देखिने, कपडामा रगड्दा केसर जस्तो रङ भएको देखिने,

चिल्लो, तराजुमा जोख्दा गह्रौं हुने, कोमल र रातो-पहेँलो मिश्रित रङको सुनलाइ असल र शुद्ध सुन भनिन्छ ।

### सुनका किसिम

**तच्चैकं रसवेधजं तदपरं जातं स्वयं भूमिजं**
**किञ्चान्यद्बहुलोहसङ्करभवञ्चेति त्रिधा काञ्चनम् ।**
**तत्राद्यं किल पीतरक्तमपरं रक्तं ततोऽन्यत्तथा**
**मैरालं तदतिक्रमेण तदिदं स्यात् पूर्वपूर्वोत्तमम्॥१३॥**

एक थरी सुन अनेक किसिमले पारो प्रशोधन गरे निकालिन्छ । अर्को जमिन (खानि) मा आफैं उत्पन्न हुन्छ । तेश्रो थरी सुन विभिन्न धातुलाई विभिन्न खालका रसायनिक प्रक्रिया पूरा गरी बनाइने गरिन्छ । यसरी सुन तीन किसिमको हुन्छ । पहिलो थरी सुन रातो-पहेँलो रङको र उत्तम हुन्छ । खानीबाट निकालिने सुन धातु प्रशोधन गरी बनाइने सुनभन्दा उत्तम हुन्छ । तेश्रा थरी सुनको रङ मैराल (नसोचेको कल्पित रङ) हुन्छ । यी तीन प्रकारका सुनमध्ये क्रमशः पहिलो पहिलो उत्तम हुन्छन् ।

### चाँदी (रौप्य)



**रौप्यं शुभ्रं वसुश्रेष्ठं रुचिरं चन्द्रलोहकम् ।**
**श्वेतकं तु महाशुभ्रं रजतं तप्तरूपकम्॥१४॥**
**चन्द्रभूतिः सितं तारं कलधौतेन्दुलोहकम् ।**
**कुप्यं धौतं तथा सौधं चन्द्रहासं मुनीन्दुकम्॥१५॥**
**रौप्यं स्निग्धं कषायाम्लं विपाके मधुरं सरम् ।**
**वातपित्तहरं रुच्यं वलीपलितनाशनम्॥१६॥**
**दाहच्छेदनिकाशेषु सितं स्निग्धञ्च यद्गुरु ।**
**सुघर्षेऽपि च वर्णाढ्यमुत्तमं तदुदीरितम्॥१७॥**

(१) रौप्य, (२) शुभ्र, (३) वसुश्रेष्ठ, (४) रुचिर, (५) चन्द्रलोहक, (६) श्वेतक, (७) महाशुभ्र, (८) रजत, (९) तप्तरूपक, (१०) चन्द्रभूति, (११) सित, (१२) तार, (१३) कलधौत, (१४) इन्दुलोहक, ( १५) कुप्य, (१६) धौत, (१७) सौध र (१८) चन्द्रहास : यी अठार (सत्र भनिएको) नाम चाँदीका संस्कृत पर्यायवाची नामहरू हुन् । चाँदी चिल्लो, टर्रो, अमिलो तथा पचेपछि गुलियो र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ । यसले वातविकार र पित्तविकार नाश गर्दछ, रुचि बढाउँदछ तथा उमेर नपुगी छाला चाउरी पर्न र कपाल फुल्न दिँदैन । पोल्दा र काट्दा सेतो हुने, चिल्लो, गह्रौं र घोट्दा पनि सेतोपन नजाने खालको चाँदीलाई उत्तम चाँदी भनिन्छ ।

### तामा (ताम्र)

**ताम्रं म्लेच्छमुखं शुल्वं तपनेष्टमुदुम्बरम् ।**
**त्र्यम्बकं चारविन्दञ्च रविलोहं रविप्रियम् ॥**
**रक्तं नेपालकञ्चैव रक्तधातुः करेन्दुधा ॥१८॥**
**ताम्रं सुपक्वं मधुरं कषायं तिक्तं विपाके कटु शीतलञ्च ।**
**कफापहं पित्तहरं विबन्धशूलघ्नपाण्डूदरगुल्मनाशि ॥१९॥**
**घनघातसहं स्निग्धं रक्तपत्रामलं मृदु ।**
**शुद्धाकरसमुत्पन्नं ताम्रं शुभमसङ्करम् ॥२०॥**

(१) ताम्र, (२) म्लेच्छमुख, (३) शुल्व, (४) तपनेष्ट, (५) उदुम्बर, (६) त्र्यम्बक, (७) अरविन्द, (८) रविलोह, (९) रविप्रिय, (१०) रक्त, (११) नेपालक र (१२) रक्तधातु : यी बाह्र नाम तामाका संस्कृत पर्यायवाची नामहरू हुन् । राम्ररी प्रशोधन गरिएको तामा (ताम्रभस्म) गुलियो, टर्रो, तीतो तथा पचेपछि पिरो र शीतवीर्यको हुन्छ । यसले कफविकार, पित्तविकार, विबन्ध, शूल, पाण्डु, पेटका रोग र गुल्म नाश गर्दछ । घनको चोट सहने, चिल्लो, रातो पत्ताको, कोमल, शुद्ध खानीबाट निकालिएको र मिसावट नगरिएको तामालाई शुद्ध तामा भनिन्छ ।



### राँग (त्रपु)

**त्रपु त्रपुसमाण्डूकं वङ्गञ्ज मधुरं हिमम् ।**
**कुरूप्यं पिच्चटं रङ्ग पूतिगन्धं दशाह्वयम् ॥२१॥**
**त्रपुसं कटुतिक्तहिमं कषायलवणं सरञ्च मेहघ्नम् ।**
**क्रिमिदाहपाण्डुशमनं कान्तिकरं तद्रसायनञ्चैव ॥२२॥**
**श्वेतं लघु मृदु स्वच्छं स्निग्धमुष्णापहं हिमम् ।**
**सूतपत्रकरं कान्तं त्रपु श्रेष्ठमुदाहृतम् ॥२३॥**

(१) त्रपु, (२) त्रपुस, (३) माण्डूक, (४) वङ्ग, (५) मधुर, (६) हिम, (७) कुरूप्य, (८) पिच्चट, (९) रङ्ग र (१०) पूतिगन्ध : यी दश नाम राँगका संस्कृत पर्यायवाची नामहरू हुन् । राँग पिरो, तीतो, शीतवीर्यको, टर्रो, नुनिलो, मलमूत्रलाई तलतिर सार्ने र प्रमेह नाशक हुन्छ । यसले कीरा, डाह र पाण्डुरोगलाई शान्त पार्दछ , यो शरीरलाई कान्ति दिने र रसायनी हुन्छ । सेतो, हलुका, कोमल, स्वच्छ, चिल्लो, गर्मी नाशक, चिसो वा शीतवीर्यको, पातलो पत्र हुने, तेजिलो राँगलाई उत्तम राँग भनिन्छ ।

### सिसा (सीसक)

सीसकन्तु जडं सीसं यवनेष्टं भुजङ्गमम् ।
योगीष्टं नागपुरगं कुवङ्गं परिपिष्टकम् ॥२४॥
मृदु कृष्णायसं पद्मं तारशुद्धिकरं स्मृतम् ।
सिरावृत्तं च वङ्गं स्याच्चीनपिष्टञ्च षोडश ॥२५॥
सीसन्तु वङ्गतुल्यं स्यात् रसवीर्यविपाकतः ।
उष्णञ्च कफवातघ्नमर्शोघ्नं गुरु लेखनम् ॥२६॥
वर्णे नीलं मृदु स्निग्धं निर्मलञ्च सुगौरवम् ।
रौप्यसंशोधनं क्षिप्रं सीसकञ्च तदुत्तमम् ॥२७॥

(१) सीसक, (२) जड, (३) सीस, (४) यवनेष्ट, (५) भुजङ्गम, (६) योगीष्ट, (७) नागपुरग, (८) कुवङ्ग, (९) परिपिष्टक, (१०) मृदु, (११) कृष्णायस, (१२) पद्म, (१३) तारशुद्धिकर, (१४) सिरावृत्त, (१५) वङ्ग र (१६) चीनपिष्ट : यी सोह्र नाम सिसाका संस्कृत पर्यायवाची नामहरू हुन् । रस, वीर्य र विपाकमा सिसा राँग समान हुन्छ । यो उष्णवीर्यको तथा कफविकार, वातविकार र अल्काई नाशक हुन्छ । सिसा पचाउन कठिन र लेखनी हुन्छ । नीलो रङ्को, कोमल, चिल्लो, सफा, गह्रौं र चाँडै चाँदी प्रशोधन गर्ने खालको सिसालाई उत्तम सिसा भनिन्छ ।



### पित्तल (रीति)

रीतिः क्षुद्रसुवर्णं सिंहलकं पिङ्गलञ्च पित्तलकम् ।
लौहितकमारकुट्टं पिङ्गललोहञ्च पीतकं नवधा ॥२८॥
राजरीतिः काकतुण्डी राजपुत्री महेश्वरी ।
ब्राह्मणी ब्रह्मरीतिश्च कपिला पिङ्गलाऽपि च ॥२९॥
रीतिकायुगलं तिक्तं शीतलं लवणं रसे ।
शोधनं पाण्डुवातघ्नं क्रिमिप्लीहार्तिपित्तजित् ॥३०॥
शुद्धा स्निग्धा मृदुः शीता सुरङ्गा सूत्रपत्रिणी ।
हेमोपमा शुभा स्वच्छा जन्या रीतिः प्रकीर्तिता ॥३१॥

(१) रीति, (२) क्षुद्रसुवर्ण, (३) सिंहलक, (४) पिङ्गल, (५) पित्तलक, (६) लौहितक, (७) आरकुट्ट, (८) पिङ्गललोह र (९) पीतक : यी नौ नाम पित्तलका तथा राजरीति, काकतुण्डी, राजपुत्री, महेश्वरी, ब्राह्मणी, ब्रह्मरीति, कपिला र पिङ्गला : यी पित्तल विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । दुवै थरी पित्तल तीता, शीतवीर्यका र नुनिला हुन्छन् । यी प्रशोधक, पाण्डु र वातविकार नाशक तथा कीरा, फियोको रोग र पित्तविकारलाई जित्ने गुणका हुन्छन् । शुद्ध, चिल्लो, कोमल, शीतवीर्यको

वा चिसो, असल रङको, पातला पाता हुने र सुनजस्तो पहेँलो पित्तल शुभ र स्वच्छ हुन्छ भनिन्छ ।

### काँस (कांस्य)

**कांस्यं सौराष्ट्रिकं घोषं कंसीयं वह्निलोहकम् ।**
**दीप्तं लोहं घोरपुष्पं दीप्तकं सुमनाह्वयम् ॥३२॥**
**कांस्यन्तु तिक्तमुष्णं चक्षुष्यं वातकफविकारघ्नम् ।**
**रूक्षं कषायरुच्यं लघु दीपनपाचनं पथ्यम् ॥३३॥**
**श्वेतं दीप्तं मृदु ज्योतिः शब्दाढ्यं स्निग्धनिर्मलम् ।**
**घनाग्निसहं सूत्राङ्गं कांस्यमुत्तममीरितम् ॥३४॥**

कांस्य, सौराष्ट्रिक, घोष, कंसीय, वह्निलोहक, दीप्त, लोह, घोरपुष्प, दीप्तक र सुमना : यी नाम काँसका संस्कृत पर्यायवाची नामहरू हुन् । काँस तीतो, उष्णवीर्यको, आँखाका लागि हितकर तथा वातविकार र कफविकार नाशक हुन्छ । यो रुखो, टर्रो, रुचिप्रद, पचाउन सहज, दीपनी, पाचनी र पथ्य हुन्छ । सेतो, तेजिलो, कोमल, चम्किलो, बज्ने, चिल्लो, निर्मल, घनको चोट सहने र पातलो पाता बन्ने खालको काँसलाई उत्तम काँस भनिन्छ ।



### फलामविशेष (वर्तलोह)

**वर्तलोहं वर्ततीक्ष्णं वर्तकं लोहसङ्करम् ।**
**नीलिका नीललोहञ्च लोहजं वट्टलोहकम् ॥३५॥**
**इदं लोहं कटूष्णञ्च तिक्तञ्च शिशिरं तथा ।**
**कफहृत्पित्तशमनं मधुरं दाहमेहनुत् ॥३६॥**

वर्तलोह, वर्ततीक्ष्ण, वर्तक, लोहसङ्कर, नीलिका, नीललोह, लोहज र वट्टलोहक : यी नाम वर्तलोहका संस्कृत पर्यायवाची नामहरू हुन् । यो फलाम पिरो, उष्णवीर्यको, तीतो, शीतल तथा कफविकार नाशक र पित्तविकार शान्त पार्ने गुणको हुन्छ । यो गुलियो तथा डाह र प्रमेह नाशक हुन्छ ।

### काँचो फलाम (अयस्कान्त)

**अयस्कान्तं कान्तलोहं कान्तं स्याल्लोहकान्तिकम् ।**
**कान्तायसं कृष्णलोहं महालोहञ्च सप्तधा ॥३७॥**
**स्याद् भ्रामकं तदनु चुम्बकरोमकाख्यं**

स्याच्छेदकाख्यमिति तच्च चतुर्विधं स्यात् ।
कान्ताश्मलोहगुणवृद्धि यथाक्रमेण
दार्ढ्याङ्गकान्तिकचकार्ष्ण्यविरोगदायि ॥३८॥
अयस्कान्तविशेषाः स्युर्भ्रामकाश्चुम्बकादयः ।
रसायनकराः सर्वे देहसिद्धिकराः पराः ॥३९॥
न सूतेन विना कान्तं न कान्तेन विना रसः ।
सूतकान्तसमायोगाद्रसायनमुदीरितम् ॥४०॥

(१) अयस्कान्त, (२) कान्तलोह, (३) कान्त, (४) लोहकान्तिक, (५) कान्तायस, (६) कृष्णलोह र (७) महालोह : यी सात नाम अयस्कान्तका संस्कृत पर्यायवाची नामहरू हुन् । भ्रामक, चुम्बक, रोमक र छेदक गरी अयस्कान्त चार प्रकारको हुन्छ । यी क्रमशः बढी गुनिला हुन्छन् । यसले शरीरलाई बलियो र चम्किलो पार्दछ, कपाल कालो बनाउँदछ र शरीरलाई निरोगी बनाउँदछ । भ्रामक, चुम्बक आदि अयस्कान्त विशेष नै हुन् । यी सबै रसायनी र अति नै शरीर-प्रशोधक हुन्छन् । पारो बिनाको अयस्कान्त र अयस्कान्त बिनाको पारो काम लाग्दैन । यी दुईको समायोजन बाट नै रसायनको काम हुने गर्दछ ।

### फलामको किट (लोहकिट्ट)



लोहकिट्टन्तु किट्टं स्याल्लोहचूर्णमयोमलम् ।
लोहजं कृष्णचूर्णं च कार्ष्ण्यं लोहमलं तथा ॥४१॥
लोहकिट्टं तु मधुरं कटूष्णं क्रिमिवातनुत् ।
पक्तिशूलं मरुच्छूलं मेहगुल्मार्तिशोफनुत् ॥४२॥

लोहकिट्ट, किट्ट, लोहचूर्ण, अयोमल, लोहज, कृष्णचूर्ण, कार्ष्ण्य र लोहमल : यी किटका संस्कृत पर्यायवाची नामहरू हुन् । किट गुलियो, पिरो, उष्णवीर्यको तथा कीरा, वातविकार, पक्तिशूल, मरुच्शूल, प्रमेह, गुल्म र सुजन नाशक हुन्छ ।

### मण्डूर (मुण्डलोह)

मुण्डं मुण्डायसं लोहं दृषत्सारं शिलात्मजम् ।
अश्मजं कृषिलोहञ्च आरं कृष्णायसं नव ॥४३॥

(१) मुण्ड, (२) मुण्डायस, (३) लोह, (४) दृषत्सार, (५) शिलात्मज, (६) अश्मज, (७) कृषिलोह, (८) आर र (९) कृष्णायस : यी नौ नाम मण्डूरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### इस्पात (तीक्ष्णलोह)

**तीक्ष्णं शस्त्रायसं शस्त्रं पिण्डं पिण्डायसं शठम् ।**
**आयसं निशितं तीव्रं लोहखड्गञ्च मुण्डजम् ॥**
**अयश्चित्रायसं प्रोक्तं चीनजं वेदभूमितम् ॥४४॥**

(१) तीक्ष्ण, (२) शस्त्रायस, (३) शस्त्र, (४) पिण्ड, (५) पिण्डायस, (६) शठ, (७) आयस, (८) निशित, (९) तीव्र, (१०) लोहखड्ग, (११) मुण्डज, (१२) अयस्, (१३) चित्रायस र (१४) चीनज : यी चौध नाम इस्पातका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### फलामका सामान्य गुण

**लोहं रूक्षोष्णतिक्तं स्याद्वातपित्तकफापहम् ।**
**प्रमेहपाण्डुशूलघ्नं तीक्ष्णं मुण्डाधिकं स्मृतम् ॥४५॥**

फलाम रुखो, उष्णवीर्यको, तीतो तथा वातविकार, पित्तविकार, कफविकार, प्रमेह, पाण्डु र शूल नाशक हुन्छ । तीक्ष्णलोह मुण्डलोहभन्दा बढी गुनिलो हुन्छ ।



### अशुद्ध धातु

**स्वर्णं सम्यगशोधितं श्रमकरं स्वेदावहं दुःसहं**
**रौप्यं जाठरजाड्यमान्द्यजननं ताम्रं वमिभ्रान्तिदम् ।**
**नागञ्च त्रपु चाङ्गदोषदमयो गुल्मादिदोषप्रदं**
**तीक्ष्णं शूलकरञ्च कान्तमुदितं कार्ष्ण्यामयस्फोटदम् ॥४६॥**
**विशुद्धिहीनौ यदि मुण्डतीक्ष्णौ क्षुधापहौ गौरवगुल्मदायकौ ।**
**कांस्यायसं क्लेदकतापकारकं रीत्यौ च सम्मोहनशोषदायिके ॥४७॥**

राम्ररी प्रशोधन नगरिएको स्वर्णभस्मले थकाउँदछ, धेरै पसिना निकाल्दछ र पचाउन अत्यन्त कठिन हुन्छ । यस्तो रतजभस्मले पाचनशक्ति कमजोर बनाउँदछ भने ताम्रभस्मले वाकवाकी र भ्रम पैदा गराउँदछ । राम्ररी प्रशोधन नगरिएको राँग र सिसाको भस्म खानाले शरीरका अङ्गमा रोग निकाल्दछ भने लोहभस्मले गुल्म आदि जस्ता रोग गराउँदछ । यस्तो खालको कान्तलोह वा मुण्डलोहको भस्म खाए त्यसले कडा तिर्खारोग लगाउँदछ, शरीर भारी हुन्छ र गुल्म निकाल्दछ । यस्तो कांस्यभस्मले मानसिक थकाई र डाह (वा जरो) गराउँदछ । यसैगरी राम्ररी प्रशोधन नगरिएको पित्तलको भस्मले सम्मोहन गराउँदछ र शरीर सुकाउँदछ ।

**मनःशिला**

**मनःशिला स्यात् कुनटी मनोज्ञा शिला मनोह्वाऽपि च नागजिह्वा ।**
**नेपालिका स्यान्मनसश्च गुप्ता कल्याणिका रोगशिला दशाह्वा ॥४८॥**
**मनःशिला कटुः स्निग्धा लेखनी विषनाशनी ।**
**भूतावेशभयोन्मादहारिणी वश्यकारिणी ॥४९॥**

(१) मनःशिला, (२) कुनटी, (३) मनोज्ञा, (४) शिला, (५) मनोह्वा, (६) नागजिह्वा, (७) नेपालिका, (८) मनोगुप्ता, (९) कल्याणिका र (१०) रोगशिला : यी दश नाम मनशिलाका संस्कृत पर्यायवाची नामहरू हुन् । मनशिला पिरो, चिल्लो, लेखनी, विषविकार नाशक तथा भूतबाधा, आवेश, भय र उन्मादलाई हटाउने अनि वशमा पार्ने गुणको हुन्छ ।

**सिन्दूर**

**सिन्दूरं नागरेणुः स्याद्रक्तं सीमन्तकं तथा ।**
**नागजं नागगर्भं च शोणं वीररजः स्मृतम् ॥५०॥**
**गणेशभूषणं सन्ध्या रागं शृङ्गारकं स्मृतम् ।**
**सौभाग्यमरुणं चैव मङ्गल्यं मनुसम्मितम् ॥५१॥**
**सिन्दूरं कटुकं तिक्तमुष्णं व्रणविरोपणम् ।**
**कुष्ठास्रविषकण्डूतिवीसर्पशमनं परम् ॥५२॥**
**सुरङ्गोऽग्निसहः सूक्ष्मः स्निग्धः स्वच्छो गुरुर्मृदुः ।**
**सुवर्णकरजः शुद्धः सिन्दूरो मङ्गलप्रदः ॥५३॥**

(१) सिन्दूर, (२) नागरेणु, (३) रक्त, (४) सीमन्तक, (५) नागज, (६) नागगर्भ, (७) शोण, (८) वीररज, (९) गणेशभूषण, (१०) सन्ध्याराग, (११) शृङ्गारक, (१२) सौभाग्य, (१३) अरुण र (१४) मङ्गल्य : यी चौध नाम सिन्दूरका संस्कृत पर्यायवाची नामहरू हुन् । सिन्दूर पिरो, तीतो, उष्णवीर्यको, घाउ भर्ने तथा विशेषत कुष्ठ, रक्तविकार, विषविकार र चिलाउने रोगलाई शान्त पार्ने गुणको हुन्छ । राम्रो रङको, ताप सहन सक्ने, सूक्ष्म, चिल्लो, स्वच्छ, पचाउन कठिन, नरम र सुनको धुलोजस्तो सिन्दूर शुद्ध र मङ्गलदायक हुन्छ ।

**गँडिउला**

**भूनागः क्षितिनागश्च भूजन्तू रक्तजन्तुकः ।**
**क्षितिजः क्षितिजन्तुश्च भूमिजो रक्ततुण्डकः ॥५४॥**

**भूनागो वज्रमारः स्यान्नानाविज्ञानकारकः ।**
**रसस्य जारणेतूक्तं तत् सत्त्वन्तु रसायनम् ॥५५॥**

भूनाग, क्षितिनाग, भूजन्तु, रक्तजन्तुक, क्षितिज, क्षितिजन्तु, भूमिज, रक्ततुण्डक, भूनाग ( दोहोरिएको) र वज्रमार : यी गँडेउलाका संस्कृत पर्यायवाची नामहरू हुन् । गँडेउला अनेक थरी ओखतीमा प्रयोग हुन्छ । यो पारो प्रशोधन गर्दा गरिने एघारौं संस्कार (जारण) मा घाँस हाल्दा सँगै हालिन्छ । यसको मूल गुण भनेको यो रसायनी (कायाकल्प गर्ने, रिजुभिनेटिङ्ग) हुन्छ ।

### हिङ्गुल

**हिङ्गुलं बर्बरं रक्तं सुरङ्गं सुगरं स्मृतम् ।**
**रञ्जनं दरदं म्लेच्छं चित्राङ्गं चूर्णपारदम् ॥५६॥**
**अन्यच्च मारकं चैव मणिरागं रसोद्भवम् ।**
**रञ्जकं रसगर्भञ्च बाणभूसङ्ख्यसम्मितम् ॥५७॥**
**हिङ्गुलं मधुरं तिक्तमुष्णवातकफापहम् ।**
**त्रिदोषद्वन्द्वदोषोत्थं ज्वरं हरति सेवितम् ॥५८॥**



(१) हिङ्गुल, (२) बर्बर, (३) रक्त, (४) सुरङ्ग, (५) सुगर, (६) रञ्जन, (७) दरद, (८) म्लेच्छ, (९) चित्राङ्ग, (१०) चूर्णपारद, (११) मारक, (१२) मणिराग, (१३) रसोद्भव, (१४) रञ्जक र (१५) रसगर्भ : यी पन्ध्र नाम हिङ्गुलका संस्कृत पर्यायवाची शब्दहरू हुन् । हिङ्गुल गुलियो, तीतो, उष्णवीर्यको तथा वातविकार र कफविकार नाशक हुन्छ । यो खानाले तीन वा दुई दोषजन्य जरो नाश हुन्छ ।

### गेरु (गैरिक)

**गैरिकं रक्तधातुः स्यात् गिरिधातुर्गवेधुकम् ।**
**धातुः सुरङ्गधातुश्च गिरिजं गिरिमृद्भवम् ॥५९॥**
**सुवर्णगैरिकं चान्यत् स्वर्णधातुः सुरक्तकम् ।**
**सन्ध्याभ्रं बभ्रुधातुश्च शिलाधातुः षडाह्वयम् ॥६०॥**
**गैरिकं मधुरं शीतं कषायं व्रणरोपणम् ।**
**विस्फोटार्शोऽग्निदाहघ्नं वरं स्वर्णादिकं शुभम् ॥६१॥**

गैरिक, रक्तधातु, गिरिधातु, गवेधुक, धातु, सुरङ्गधातु, गिरिज र गिरिमृद्भव : यी गेरुका तथा (१) सुवर्णगैरिक, (२) स्वर्णधातु, (३) सुरक्तक, (४) सन्ध्याभ्र, (५) बभ्रुधातु र (६) शिलाधातु : यी छ नाम सुवर्णगेरुका संस्कृत पर्यायवाची नामहरू हुन् । गेरु गुलियो, शीतवीर्यको, टर्रो, घाउ भर्ने

तथा विस्फोट, अल्काइ र पोलेको ठिक गर्ने गुणको हुन्छ । गैरुभन्दा स्वर्णगैरु उत्तम हुन्छ ।

**गोपीचन्दन**

**तुवरी मृच्च सौराष्ट्री मृत्स्ना सङ्गा सुराष्ट्रजा ।**
**भूघ्नी मृतालकं कासी मृत्तिका सुरमृत्तिका ॥**
**स्तुत्या काङ्क्षी सुजाता च ज्ञेया चैव चतुर्दश ॥६२॥**
**तुवरी तिक्तकटुका कषायाम्ला च लेखनी ।**
**चक्षुष्या ग्रहणीछर्दिपित्तसन्तापहारिणी ॥६३॥**

(१) तुवरी, (२) मृत्, (३) सौराष्ट्री, (४) मृत्स्ना, (५) सङ्गा, (६) सुराष्ट्रजा, (७) भूघ्नी, (८) मृतालक, (९) कासी, (१०) मृत्तिका, (११) सुरमृत्तिका, (१२) स्तुत्या, (१३) काङ्क्षी र (१४) सुजाता : यी चौध नाम गोपीचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । गोपीचन्दन तीतो, पिरो, टर्रो, अमिलो र लेखनी गुणको हुन्छ । यो आँखाका लागि हितकर तथा ग्रहणी, वाकवाकी र पित्तजन्य डाह नाशक हुन्छ ।

**हरिताल**



**हरितालं गोदन्तं पीतं नटमण्डनञ्च गौरञ्च ।**
**चित्राङ्गं पिञ्जरकं भवेदालं तालकञ्च तालञ्च ॥६४॥**
**कनकरसं काञ्चनकं बिडालकञ्चैव चित्रगन्धञ्च ।**
**पिङ्गञ्च पिङ्गसारं गौरीललितञ्च सप्तदशसञ्ज्ञम् ॥६५॥**
**हरितालं कटूष्णञ्च स्निग्धं त्वग्दोषनाशनम् ।**
**भूतभ्रान्तिप्रशमनं विषवातरुजार्तिजित् ॥६६॥**

(१) हरिताल, (२) गोदन्त, (३) पीत, (४) नटमण्डन, (५) गौर, (६) चित्राङ्ग, (७) पिञ्जरक, (८) आल, (९) तालक, (१०) ताल, (११) कनकरस, (१२) काञ्चनक, (१३) बिडालक, (१४) चित्रगन्ध, (१५) पिङ्ग, (१६) पिङ्गसार र (१७) गौरीललित : यी सत्र नाम हरितालका संस्कृत पर्यायवाची नामहरू हुन् । हरिताल पिरो, उष्णवीर्यको, चिल्लो र छालाका रोग निको पार्ने गुणको हुन्छ । यसले भूतबाधा र भ्रमलाई शान्त पार्दछ तथा विषविकार र वातविकारलाई जित्दछ ।

**गन्धक**

**गन्धको गन्धपाषाणो गन्धाश्मा गन्धमोदनः ।**
**पूतिगन्धोऽतिगन्धश्च वटसौगन्धिकस्तथा ॥६७॥**

**सुगन्धो दिव्यगन्धश्च गन्धश्च रसगन्धकः ।**
**कुष्ठारिः क्रूरगन्धश्च कीटघ्नः शरभूमितः ॥६८॥**
**गन्धकः कटुरुष्णश्च तीव्रगन्धोऽतिवह्निकृत् ।**
**विषघ्नः कुष्ठकण्डूतिखर्जूत्वग्दोषनाशनः ॥६९॥**
**श्वेतो रक्तश्च पीतश्च नीलश्चेति चतुर्विधः ।**
**गन्धको वर्णतो ज्ञेयो भिन्नो भिन्नगुणाश्रयः ॥७०॥**
**श्वेतः कुष्ठापहारी स्याद्रक्तो लोहप्रयोगकृत् ।**
**पीतो रसप्रयोगार्हो नीलो वर्णान्तरोचितः ॥७१॥**

(१) गन्धक, (२) गन्धपाषाण, (३) गन्धाश्म, (४) गन्धमोदन, (५) पूतिगन्ध, (६) अतिगन्ध, (७) वट, (८) सौगन्धिक, (९) सुगन्ध, (१०) दिव्यगन्ध, (११) गन्ध, (१२) रसगन्धक, (१३) कुष्ठारि, (१४) क्रूरगन्ध र (१५) कीटघ्न : यी पन्ध्र नाम गन्धकका संस्कृत पर्यायवाची नामहरू हुन् । गन्धक पिरो, उष्णवीर्यको, कडा गन्ध आउने, धेरै नै पाचनशक्ति बढाउने तथा विषविकार, कुष्ठ, चिलाउने रोग, लुतो र छालाका अन्य रोग नाशक हुन्छ । सेतो, रातो, पहेँलो र नीलो गरी गन्धक चार प्रकारको हुन्छ । रङ अनुसार यसका गुण पनि फरक फरक हुन्छन् । सेतो कुष्ठनाशक, रातो फलाम आदि धातुको रसायनमा, पहेँलो पारो प्रशोधनका विभिन्न चरणमा र नीलो बाहिरी रङ्ग बदल्नमा प्रयोग हुन्छ ।



### सिलाजित (शिलाजतु)

**शिलाजतु स्यादश्मोत्थं शैलं गिरिजमश्मजम् ।**
**अश्मलाक्षाऽश्मजतुकं जत्वश्मकमिति स्मृतम् ॥७२॥**
**शिलाजतु भवेत्तिक्तं कटूष्णञ्च रसायनम् ।**
**मेहोन्मादाश्मरीशोफकुष्ठापस्मारनाशनम् ॥७३॥**

शिलाजतु, अश्मोत्थ, शैल, गिरिज, अश्मज, अश्मलाक्षा, अश्मजतुक र जत्वश्मक : यी नाम सिलाजितका संस्कृत पर्यायवाची नामहरू हुन् । सिलाजित तीतो, पिरो, उष्णवीर्यको र रसायनी हुन्छ । यसले प्रमेह, पागलपन, पत्थरी, सुजन, कुष्ठ र छारेरोग नाश गर्दछ ।

### मैन (सिक्थ)

**सिक्थकं मधुकं सिक्थं मधुजं मधुसम्भवम् ।**
**मदनकं मधूच्छिष्टं मदनं मक्षिकामलम् ॥७४॥**
**क्षौद्रेयं पीतरागञ्च स्निग्धं माक्षिकजं तथा ।**

**क्षौद्रजं मधुशेषञ्च द्रावकं मांक्षकाश्रयम् ॥**
**मधूषितञ्च सम्प्रोक्तं मधूत्थं चोनविंशति ॥७५॥**
**सिक्थकं कपिलं स्वादु कुष्ठवातार्तिजिन्मृदु ।**
**कटु स्निग्धञ्च लेपेन स्फुटिताङ्गविरोपणम् ॥७६॥**

(१) सिक्थक, (२) मधुक, (३) सिक्थ, (४) मधुज, (५) मधुसम्भव, (६) मदनक, (७) मधूच्छिष्ट, (८) मदन, (९) मक्षिकामल, (१०) क्षौद्रेय, (११) पीतराग, (१२) स्निग्ध, (१३) माक्षिकज, (१४) क्षौद्रज, (१५) मधुशेष, (१६) द्रावक, (१७) मक्षिकाश्रय, (१८) मधूषित र (१९) मधूत्थ : यी उन्नाईस नाम मैनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कैलो, स्वादिलो तथा कुष्ठ र वातविकारलाई जित्ने गुणको हुन्छ । यो नरम, पिरो र चिल्लो हुन्छ । मैनले (कुर्कुच्चा आदि) फुटेका अङ्गलाई ठिक गर्दछ ।

## हीराकसी (धातुकासीस)

**कासीसं धातुकासीसं केसरं हंसलोमशम् ।**
**शोधनं पांशुकासीसं शुभ्रं सप्ताह्वयं मतम् ॥७७॥**
**कासीसं तु कषायं स्यात् शिशिरं विषकुष्ठजित् ।**
**खर्जूक्रिमिहरं चैव चक्षुष्यं कान्तिवर्धनम् ॥७८॥**

(१) कासीस, (२) धातुकासीस, (३) केसर, (४) हंस(तप्त)लोमश, (५) शोधन, (६) पांशुकासीस र (७) शुभ्र : यी सात नाम हीराकसीका संस्कृत पर्यायवाची नामहरू हुन् । हीराकसी टर्रो, शीतवीर्यको तथा विषविकार र कुष्ठलाई जित्ने गुणको हुन्छ । यसले लुतो र कीरा नाश गर्दछ । यो आँखाका लागि हितकर हुन्छ र यसले शरीरको चमक पनि बढाउँदछ ।

## पुष्पकासीस

**द्वितीयं पुष्पकासीसं वत्सकञ्च मलीमसम् ।**
**ह्रस्वं नेत्रौषधं योज्यं विशदं नीलमृत्तिका ॥७९॥**
**पुष्पकासीसकं तिक्तं शीतं नेत्रामयापहम् ।**
**लेपेनात्यामकुष्ठादिनानात्वग्दोषनाशनम् ॥८०॥**

पुष्पकासीस, वत्सक, मलीमस, ह्रस्व, नेत्रौषध, योज्य, विशद र नीलमृत्तिका : यी पुष्कासीसका संस्कृत पर्यायवाची नामहरू हुन् । पुष्पकासीस तीतो, शीतवीर्यको तथा आँखाका रोग नाशक हुन्छ । यसको लेप दल्नाले भर्खर शुरु भएको कुष्ठरोग जस्ता अनेक थरी छालाका रोग नाश गर्दछ ।

## उपधातु (धातुमाक्षिक)

**माक्षिकञ्चैव माक्षीकं पीतकं धातुमाक्षिकम् ।**
**तापीजं ताप्यकं ताप्यमापीतं पीतमाक्षिकम् ॥८१॥**
**आवर्तं मधुधातुः स्यात्क्षौद्रधातुस्तथाऽपरः ।**
**प्रोक्तं माक्षिकधातुश्च वेदभूर्हेममाक्षिकम् ॥८२॥**
**माक्षिकं मधुरं तिक्तमल्पं कटु कफापहम् ।**
**भ्रमहृल्लासमूर्छार्तिश्वासकासविषापहम् ॥८३॥**
**माक्षिकं द्विविधं प्रोक्तं हेमाह्वं तारमाक्षिकम् ।**
**भिन्नवर्णविशेषत्वाद्रसवीर्यादिकं पृथक् ॥८४॥**
**तारवादादिके तारमाक्षिकञ्च च प्रशस्यते ।**
**देहे हेमादिकं शस्तं रोगहृद्बलपुष्टिदम् ॥८५॥**

(१) माक्षिक, (२) माक्षीक, (३) पीतक, (४) धातुमाक्षिक, (५) तापीज, (६) ताप्यक, (७) ताप्य, (८) आपीत, (९) पीतमाक्षिक, (१०) आवर्त, (११) मधुधातु, (१२) क्षुद्रधातु, (१३) माक्षिकधातु र (१४) हेममाक्षिक : यी चौध नाम धातुमाक्षिकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तीतो, थोरै पिरो र कफविकार नाशक हुन्छ । यसले भ्रम, छाती थाकेर लाग्ने बाडुली, बेहोसीपन, दम, खोकी र विषविकार नाश गर्दछ । स्वर्णमाक्षिक र तारकमाक्षिक गरी यो दुई किसिमको हुन्छ । यिनको रङ, रस, वीर्य आदि फरक फरक हुन्छ । तारकमाक्षिक चाँदी बनाउनका लागि तथा रोग नाशक, बल र पुष्टिदायक हुनाले गर्दा स्वर्णमाक्षिक शरीरका लागि उपयोगी हुन्छ ।



## सुर्मा (नीलाञ्जन)

**अञ्जनं यामुनं कृष्णं नादेयं मेचकं तथा ।**
**स्रोतोजं दृक्प्रदं नीलं सौवीरञ्च सुवीरजम् ॥८६॥**
**तथा नीलाञ्जनं चैव चक्षुष्यं वारिसम्भवम् ।**
**कपोतकञ्च कापोतं सम्प्रोक्तं शत्रुभूमितम् ॥८७॥**
**शीतं नीलाञ्चनं प्रोक्तं कटुतिक्तं कषायकम् ।**
**चक्षुष्यं कफवातघ्नं विषघ्नञ्च रसायनम् ॥८८॥**

(१) अञ्जन, (२) यामुन, (३) कृष्ण, (४) नादेय, (५) मेचक, (६) स्रोतोज, (७) दृक्प्रद, (८) नील, (९) सौवीर, (१०) सुवीरज, (११) नीलाञ्जन, (१२) चक्षुष्य, (१३) वारिसम्भव, (१४) कपोतक र (१५) कापोत : यी पन्ध्र नाम सुर्माका संस्कृत पर्यायवाची नामहरू हुन् । सुर्मा शीतवीर्यको, पिरो, तीतो, टर्रो, आँखाका लागि हितकर तथा कफविकार, वातविकार र विषविकार नाशक एवं रसायनी

हुन्छ ।

### कुलत्था (अञ्जन विशेष)

**कुलत्था दृक्प्रसादा च चक्षुष्याऽथ कुलत्थिका ।**
**कुलाली लोचनहिता कुम्भकारी मलापहा ॥८९॥**
**कुलत्थिका तु चक्षुष्या कषाया कटुका हिमा ।**
**विषविस्फोटकण्डूतिव्रणदोषनिबर्हिणी ॥९०॥**

कुलत्था, दृक्प्रसादा, चक्षुष्या, कुलत्थिका, कुलाली, लोचनहिता, कुम्भकारी र मलापहा : यी नाम कुलत्थ (गहत) बाट बनाइने गाजलविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो आँखाका लागि हितकर, टर्रो, पिरो, शीतवीर्यको तथा विषविकार, फोका, चिलाउने रोग र रक्तविकार नाशक हुन्छ ।

### गाजलविशेष (पुष्पाञ्जन)

**पुष्पाञ्जनं पुष्पकेतुः कौसुम्भं कुसुमाञ्जनम् ।**
**रीतिकं रीतिकुसुमं रीतिपुष्पञ्च पौष्पकम् ॥९१॥**
**पुष्पाञ्जनं हिमं प्रोक्तं पित्तहिक्काप्रदाहनुत् ।**
**नाशयेद्विषकासार्तिं सर्वनेत्रामयापहम् ॥९२॥**

पुष्पाञ्जन, पुष्पकेतु, कौसुम्भ, कुसुमाञ्जन, रीतिक, रीतिकुसुम, रीतिपुष्प र पौष्पक : यी नाम पुष्पाञ्जन नामक गाजलविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।  यो शीतवीर्यको हुन्छ भनिएको छ । यसले पित्तविकार, बाडुली, डाह, विषविकार, खोकी र सबै किसिमका आँखाका रोग नाश गर्दछ ।

### रसाञ्जन

**रसाञ्जनं रसोद्भूतं रसगर्भं रसाग्रजम् ।**
**कृतकं बालभैषज्यं दार्वीक्वाथोद्भवं तथा ॥९३॥**
**रसजातं तार्क्ष्यशैलं ज्ञेयं वर्याञ्जनं तथा ।**
**रसनाभं चाग्निसारं द्वादशाह्वञ्च कीर्तितम् ॥९४॥**
**रीत्यां तु ध्मायमानायां तत् किट्टन्तु रसाञ्जनम् ।**
**तदभावे तु कर्तव्यं दार्वीक्वाथसमुद्भवम् ॥९५॥**

(१) रसाञ्जन, (२) रसोद्भूत, (३) रसगर्भ, (४) रसाग्रज, (५) कृतक, (६) बालभैषज्य, (७) दार्वीक्वाथोद्भव, (८) रसजात, (९) तार्क्ष्यशैल, (१०) वर्याञ्जन, (११) रसनाभ र (१२) अग्निसार : यी बाह्र नाम रसाञ्जनका संस्कृत पर्यायवाची नामहरू हुन् । जब राँग धातुलाई आगोमा पोलिन्छ तब त्यसबाट कीट निस्कन्छ । यही कीटलाई रसाञ्जन भनिन्छ । यो नपाउँदा वा नहुँदा चुत्रोको काँढापानीबाट गाजल निकालेर प्रयोग गर्नू ।

### स्रोतोञ्जन

**स्रोतोञ्जनं वारिभवं तथाऽन्यं स्रोतोद्भवं स्रोतनदीभवञ्च ।**
**सौवीरसारञ्च कपोतसारं वल्मीकशीर्षं मुनिसम्मिताह्वम् ॥९६॥**
**स्रोतोञ्जनं शीतकटु कषायं क्रिमिनाशनम् ।**
**रसाञ्जनं रसे योग्यं स्तन्यवृद्धिकरं परम् ॥९७॥**
**वल्मीकशिखराकारं भिन्ननीलाञ्जनप्रभम् ।**
**घर्षे च गैरिकावर्णं श्रेष्ठं स्रोतोञ्जनं च तत् ॥९८॥**

(१) स्रोतोञ्जन, (२) वारिभव, (३) स्रोतोद्भव, (४) स्रोतनदीभव, (५) सौवीरसार, (६) कपोतसार र (७) वल्मीकशीर्ष : यी सात नाम स्रोतोञ्जनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, पिरो, टर्रो र कीरानाशक हुन्छ । यो पारो प्रशोधनका लागि उपयोगी हुन्छ र यसले अत्यन्त प्रधावकारी ढङ्गले दूध बढाउँदछ । धमिराको गोलो जस्तो आकारको, नीलाञ्जन जस्तो रङको र घोट्दा गेरु रङ निस्कने स्रोतोञ्जन उत्तम स्रोतोञ्जन हुन्छ ।

### सिँदुरे (कम्पिल्लक)

**कम्पिल्लकोऽथ रक्ताङ्गो रेची रेचकस्तथा ।**
**रञ्जको लोहिताङ्गञ्च कम्पिल्लो रक्तचूर्णकः ॥९९॥**
**कम्पिल्लको विरेची स्यात् कटुष्णो व्रणनाशनः ।**
**कफकासार्तिहारी च जन्तुक्रिमिहरो लघुः ॥१००॥**

कम्पिल्लक, रक्ताङ्ग, रेची, रेचक, रञ्जक, लोहिताङ्ग, कम्पिल्ल र रक्तचूर्णक : यी सिँदुरेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो विरेचक (दिसा लगाउने), पिरो, उष्णवीर्यको तथा घाउखटिरा, कफविकार, खोकी र जुका आदि कीरा नाशक एवं पचाउन सहज हुन्छ ।

### निलो तुथो (तुत्थ)

**तुत्थं नीलाश्मजं नीलं हरिताश्मञ्च तुत्थकम् ।**

**मयूरग्रीवकं चैव ताम्रगर्भामृतोद्भवम् ॥**
**मयूरतुत्थं सम्प्रोक्तं शिखिकण्ठं दशाह्वयम् ॥१०१॥**
**तुत्थं कटु कषायोष्णं श्वित्रनेत्रामयापहम् ।**
**विषदोषेषु सर्वेषु प्रशस्तं वान्तिकारकम् ॥१०२॥**

(१) तुत्थ, (२) नीलाश्मज, (३) नील, (४) हरिताश्म, (५) तुत्थक, (६) मयूरग्रीवक, (७) ताम्रगर्भ, (८) अमृतोद्भव, (९) मयूरतुत्थ र (१०) शिखिकण्ठ : यी दश नाम निलो तुथोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, टर्रो, उष्णवीर्यको तथा सेतोकुष्ठ र आँखाका रोग नाशक हुन्छ । यो सबै प्रकारका विषविकारका हितकर एवं बान्ताकारक हुन्छ ।

## तुथो विशेष (खर्परीतुत्थ)

**द्वितीयं खर्परीतुत्थं खर्परीरसकं तथा ।**
**चक्षुष्यममृतोत्पन्नं तुत्थं खर्परिका तु षट् ॥१०३॥**
**खर्परी कटुका तिक्ता चक्षुष्या च रसायनी ।**
**त्वग्दोषशमनी रुच्या दीप्या पुष्टिविवर्धनी ॥१०४॥**



(१) खर्परीतुत्थ, (२) खर्परी, (३) रसक, (४) चक्षुष्य, (५) अमृतोत्पन्न र (६) तुत्थ-खर्परिका : यी छ नाम खर्परीतुत्थका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, आँखाका लागि हितकर, रसायनी, छालाको रोगहरू शान्त पार्ने, रुचिप्रद, दीपनी र पुष्टिवर्धक हुन्छ ।

## पारो (पारद)

**पारदो रसराजश्च रसनाथो महारसः ।**
**रसश्चैव महातेजा रसलोहो रसोत्तमः ॥१०५॥**
**सूतराट् चपलो जैत्रः शिवबीजं शिवस्तथा ।**
**अमृतञ्च रसेन्द्रः स्याल्लोकेशो धूर्तरः प्रभुः ॥१०६॥**
**रुद्रजो हरतेजश्च रसधातुरचिन्त्यजः ।**
**खेचरश्चामरः प्रोक्तो देहदो मृत्युनाशनः ॥१०७॥**
**स्कन्दः स्कन्दांशकः सूतो देवो दिव्यरसस्तथा ।**
**प्रोक्तो रसायनश्रेष्ठो यशोदस्त्रित्रिधाह्वयः ॥१०८॥**
**पारदः सकलरोगनाशनः षड्रसो निखिलयोगवाहकः ।**
**पञ्चभूतमय एष कीर्तितो देहलोहपरसिद्धिदायकः ॥१०९॥**
**मूर्छितो हरते व्याधीन् बद्धः खेचरसिद्धिदः ।**

**सर्वांसांद्धकरो नीलो निरुद्धो देहासांद्धदः ॥११०॥**
**विविधव्याधिभयोदयमरणजरासङ्कटेऽपि मर्त्यानाम् ।**
**पारं ददाति यस्मात्तस्मादयमेव पारदः कथितः ॥१११॥**

(१) पारद, (२) रसराज, (३) रसनाथ, (४) महारस, (५) रस, (६) महातेज, (७) रसलोह, (८) रसोत्तम, (९) सूतराट्, (१०) चपल, (११) जैत्र, (१२) शिवबीज, (१३) शिव, (१४) अमृत, (१५) रसेन्द्र, (१६) लोकेश, (१७) धूर्तर, (१८) प्रभु, (१९) रुद्रज, (२०) हरतेज, (२१) रसधातु, (२२) अचिन्त्यज, (२३) खेचर, (२४) चामर, (२५) देहद, (२६) मृत्युनाशन, (२७) स्कन्द, (२८) स्कन्दांशक, (२९) सूत, (३०) देव, (३१) दिव्यरस, (३२) रसायनश्रेष्ठ र (३३)यशोद : यी तेत्तीस नाम पारोका संस्कृत पर्यायवाची नामहरू हुन् । पारोले सबै किसिमका रोग नाश गर्दछ । यसमा छ रस हुन्छन् र यो सबै खाले मिश्रणलाई सफल बनाउने गुणको (योगवाही) हुन्छ । यो पाँच महाभूतले युक्त हुन्छ भनिएको छ । यसले शरीर र फलामलाई सफल बनाउँदछ । यसको भस्मले रोग नाश गर्दछ । थुनिएको पारोले अन्तरिक्ष सम्बन्धी कार्य (उड्ने काम) लाई सफल पार्दछ । थुनिएको पारोले सबै खालका सफलता प्रदान गर्दछ र शरीरलाई पनि सिद्ध पार्दछ । मानिसलाई अनेक प्रकारका रोगको सन्त्रास, मृत्यु, बुढचौली आदि सङ्कटबाट पार लगाउने हुनाले यसलाई पारद भनिएको हो ।

**अभ्रक**



**अभ्रकमभ्रं भृङ्गं व्योमाम्बरमन्तरिक्षमाकाशम् ।**
**बहुपत्रं खमनन्तं गौरीजं गौरिजेयमिति रवयः ॥११२॥**
**श्वेतं पीतं लोहितं नीलमभ्रं चातुर्विध्यं याति भिन्नक्रियार्हम् ।**
**श्वेतं तारे काञ्चने पीतरक्ते नीलं व्याधावर्ग्यमग्र्यं गुणाढ्यम् ॥११३॥**
**नीलाभ्रं दर्दुरो नागः पिनाको वज्र इत्यपि ।**
**चतुर्विधं भवेत्तस्य परीक्षा कथ्यते क्रमात् ॥११४॥**
**यद्वह्नौ निहितं तनोति नितरां भेकारवं दर्दुरो नागः**
**फूत्कुरुते धनुःस्वनमुपादत्ते पिनाकः किल ।**
**वज्रं नैव विकारमेति तदिमान्यासेवमानः क्रमात्**
**गुल्मी च व्रणवांश्च कुत्सितगदी नीरुक्च सञ्जायते ॥११५॥**
**मनोजभावभावितौ यदा शिवौ परस्परम् ।**
**तदा किलाभ्रपारदौ गुहोद्भवौ बभूवतुः ॥११६॥**

(१) अभ्रक, (२) अभ्र, (३) भृङ्ग, (४) व्योम, (५) अम्बर, (६) अन्तरिक्ष, (७) आकाश, (८) बहुपत्र, (९) ख, (१०) अनन्त, (११) गौरीज र (१२) गौरिजेय : यी बाह्र नाम अभ्रकका संस्कृत

पर्यायवाची नामहरू हुन् । अभ्रक सेतो, पहेँलो, रातो र नीलो गरी चार प्रकारको हुन्छ र फरकफरक काम गर्दछ । सेतो अभ्रक चाँदी बनाउन, पहेँलो र रातो अभ्रक सुन बनाउन तथा नीलो अभ्रक रोग निको पार्ने उपचारमा बढी उपयोगी हुन्छ । यी क्रमशः बढी गुनिला हुन्छन् । नीलो अभ्रक पनि दर्दुर, नाग, पिनाक र वज्र गरी चार प्रकारको हुन्छ । यिनको विशेषता र गुणका बारेमा क्रमशः बताइन्छ । जुन नीलो अभ्रख आगोमा बाल्दा भ्यागुतो कराए जसरी टरटर आवाज निकाल्दछ त्यसलाई दर्दुर भनिन्छ । यसरी बाल्दा सर्प सुसाए जस्तो सुसाउने अभ्रकलाई नाग भनिन्छ । बाल्दा धनुषको टङ्कार जस्तो आवाज निस्कने अभ्रकलाई पिनाक भनिन्छ । बाल्दा कुनै पनि किसिमको परिवर्तन नआउने खालको नीलो अभ्रकलाई वज्र भनिन्छ । यी चार थरी अभ्रक क्रमशः गुल्म, घाउखटिरा, पुराना रोग र निरोगिताका लागि उपयोगी हुन्छन् । भनिन्छ कि शिव र पार्वती गुफाभित्र एक आपसमा रासलिलामा संलग्न हुँदा त्यहीँ अभ्रक र पारोको उत्पत्ति भएको थियो ।

## फट्किरी (स्फटिकी)

**स्फटी च स्फटिकी प्रोक्ता श्वेता शुभ्रा च रङ्गदा ।**
**रङ्गदृढा दृढरङ्गा रङ्गाङ्गा वसुसम्मिता ॥११७॥**
**स्फटी च कटुका स्निग्धा कषाया प्रदरापहा ।**
**मेहकृच्छ्रवमीशोष-दोषघ्नी दृढरङ्गदा ॥११८॥**



स्फटी, स्फटिकी, श्वेता, शुभ्रा, रङ्गदा, रङ्गदृढा, दृढरङ्गा र रङ्गाङ्गा : यी आठ नाम स्फटिकका संस्कृत पर्यायवाची नामहरू हुन् । स्फटिक पिरो, चिल्लो, टर्रो र प्रदररोग नाशक हुन्छ । यसले प्रमेह, कृच्छ्र, वाकवाकी र सुकेनास नाश गर्दछ तथा बलियो हुनेगरी रङ्ग दिन्छ ।

## सानो शङ्ख (क्षुल्लक)

**क्षुल्लकः क्षुद्रशङ्खः स्याच्छम्बूको नखशङ्खकः ।**
**क्षुल्लकः कटुकस्तिक्तः शूलहारी च दीपनः ॥११९॥**

क्षुल्लक, क्षुद्रशङ्ख, शम्बूक र नखशङ्खक : यी सानो शङ्खका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, शूलनाशक र दीपनी हुन्छ ।

## शङ्ख

**शङ्खो ह्यर्णोभवः कम्बुर्जलजः पावनध्वनिः ।**
**कुटिलोऽन्तर्महानादः कम्बूः पूतः सुनादकः ॥१२०॥**
**सुस्वरो दीर्घनादश्च बहुनादो हरिप्रियः ।**

**एवं षोडशधा ज्ञेयो धवलो मङ्गलप्रदः ॥१२१॥**
**शङ्खः कटुरसः शीतः पुष्टिवीर्यबलप्रदः ।**
**गुल्मशूलहरः श्वासनाशनो विषदोषनुत् ॥१२२॥**

(१) शङ्ख, (२) अर्णोभव, (३) कम्बु, (४) जलज, (५) पावनध्वनि, (६) कुटिल, (७) अन्तर्महानाद, (८) कम्बू, (९) पूत, (१०) सुनादक, (११) सुस्वर, (१२) दीर्घनाद, (१३) बहुनाद, (१४) हरिप्रिय, (१५) धवल र (१६) मङ्गलप्रद : यी सोह्र नाम शङ्खका संस्कृत पर्यायवाची नामहरू हुन् । शङ्ख पिरो, शीतवीर्यको तथा पुष्टि, वीर्य र बल प्रदान गर्ने गुणको हुन्छ । यसले गुल्म, शूल, दम र विषविकार नाश गर्दछ ।

### क्रिमिशङ्ख

**क्रिमिशङ्खः कृमिजलजः कृमिवारिरुहश्च जन्तुकम्बुश्च ।**
**कथितो रसवीर्याद्यैः कृतधीभिः शङ्खसदृशोऽयम् ॥१२३॥**

क्रिमिशङ्ख, कृमिजलज, कृमिवारिरुह र जन्तुकम्बु : यी क्रिमिशङ्खका संस्कृत पर्यायवाची नामहरू हुन् । रस, वीर्य आदिमा यो शङ्खसमान गुणको हुन्छ ।



### कौडी (कपर्द)

**कपर्दका वराटश्च कपर्दश्च वराटिका ।**
**चराचरश्चरो वर्यो बालक्रीडनकश्च सः ॥१२४॥**
**कपर्दः कटुतिक्तोष्णः कर्णशूलव्रणापहः ।**
**गुल्मशूलामयघ्नश्च नेत्रदोषनिकृन्तनः ॥१२५॥**

कपर्दक, वराट, कपर्द, वराटिका, चराचर, चर, वर्य र बालक्रीडनक : यी कौडीका संस्कृत पर्यायवाची नामहरू हुन् । कौडी पिरो, तीतो, उष्णवीर्यको तथा कानको शूल, गुल्म, शूल र आँखाका रोग नाशक हुन्छ ।

### सिपी

**शुक्तिर्मुक्ताप्रसूश्चैव महाशुक्तिश्च शुक्तिका ।**
**मुक्तास्फोटस्तौतिकन्तु मौक्तिकप्रसवा च सा ॥**
**ज्ञेया मौक्तिकशुक्तिश्च मुक्तामाताङ्कधा स्मृता ॥१२६॥**
**मुक्ताशुक्तिः कटुः स्निग्धा श्वासहृद्रोगहारिणी ।**

**शूलप्रशमनो रुच्या मधुरा दीपनो परा ॥१२७॥**

(१) शुक्ति, (२) मुक्ताप्रसू, (३) महाशुक्ति, (४) शुक्तिका, (५) मुक्तास्फोट, (६) तौतिक, (७) मौक्तिकप्रसवा, (८) मौक्तिकशुक्ति र (९) मुक्तामाता : यी नौ नाम सिपीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, चिल्लो तथा दम र मुटुका रोग नाशक हुन्छ । यसले शूललाई शान्त पार्दछ र रुची जगाउँदछ । यो गुलियो र अत्यन्त दीपनी हुन्छ ।

सानो सिपी (जलशुक्ति)

**जलशुक्तिर्वारिशुक्तिः क्रिमिसूः क्षुद्रशुक्तिका ।**
**शम्बूका जलशुक्तिश्च पुटिका तोयशुक्तिका ॥१२८॥**
**जलशुक्तिः कटुः स्निग्धा दीपनी गुल्मशूलनुत् ।**
**विषदोषहरा रुच्या पाचनो बलदायिनी ॥१२९॥**

जलशुक्ति, वारिशुक्ति, क्रिमिसू, क्षुद्रशुक्तिका, शम्बूका, जलशुक्ति (दोहोरिएको), पुटिका र तोयशुक्तिका : यी जलशुक्तिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, चिल्लो, दीपनी तथा गुल्म, शूल र विषविकार नाशक हुन्छ । यो रुचीप्रद, पाचनी र बलदायक पनि हुन्छ ।



चक (खटिनी)

**खटिनी खटिका चैव खटी धवलमृत्तिका ।**
**सितधातुः श्वेतधातुः पाण्डुमृत् पाण्डुमृत्तिका ॥१३०॥**
**खटिनी मधुरा तिक्ता शीतला पित्तदाहनुत् ।**
**व्रणदोषकफास्रघ्नी नेत्ररोगनिकृन्तनी ॥१३१॥**

खटिनी, खटिका, खटी, धवलमृत्तिका, सितधातु, श्वेतधातु, पाण्डुमृत् र पाण्डुमृत्तिका : यी चकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तीतो, शीतवीर्यको तथा पित्तविकार, डाह, घाउखटिरा, कफविकार, रक्तविकार र आँखाका रोग नाशक हुन्छ ।

खरी वा सिङ्गमर्मर ? (दुग्धपाषाण)

**दुग्धाश्मा दुग्धपाषाणः क्षीरी गोमेदसन्निभः ।**
**वज्राभो दीप्तिकः सौधो दुग्धी क्षीरयवोऽपि च ॥१३२॥**
**दुग्धपाषाणको रुच्य ईषदुष्णो ज्वरापहः ।**
**पित्तहृद्रोगशूलघ्नः कासाध्मानविनाशनः ॥१३३॥**

दुग्धाश्मा, दुग्धपाषाण, क्षीरी, गोमेदसन्निभ, वज्राभ, दीप्तिक, सौध, दुग्धी र क्षीरयव : यी खरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचीप्रद, केही उष्णवीर्यको तथा ज्वर, पित्तविकार, मुटुका रोग, शूल, खोकी र आध्मान नाशक हुन्छ ।

**पत्थरविशेष (कर्पूरमणि)**

**कर्पूरनामभिश्चादावन्ते च मणिवाचकः ।**
**कर्पूरमणिनामाऽयं युक्त्या वातादिदोषनुत् ॥१३४॥**

कपूर र यसका पर्यायवाची शब्दका पछिल्तिर मणि वा यसका पर्यायवाची शब्द जोडिए त्यसले कपूरमणिलाई बुझाउँदछ । यसलाई जुक्ति लगाएर प्रयोग गरिए यसले वातविकार आदि विकार नाश गर्दछ ।

बालुवा (वालुका)

**सिकता वालुका सिक्ता शीतला सूक्ष्मशर्करा ।**
**प्रवाहोत्था महाश्लक्ष्णा सूक्ष्मा पानीयचूर्णका ॥१३५॥**

**वालुका मधुरा शीता सन्तापश्रमनाशिनी ।**
**सेकप्रयोगतश्चैव शाखाशैत्यानिलापहा ॥१३६॥**

सिकता, वालुका, सिक्ता, शीतला, सूक्ष्मशर्करा, प्रवाहोत्था, महाश्लक्ष्णा, सूक्ष्मा र पानीयचूर्णका : यी बालुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । बालुवा गुलियो, शीतवीर्यको तथा डाह र थकाई नाशक हुन्छ । यसलाई सेक्ने काममा प्रयोग गर्दा यसले गोडाको शिथिलता र वातविकार नाश गर्दछ ।

**कङ्कुष्ठ**

**कङ्कुष्ठं कालकुष्ठञ्च विरङ्गं रङ्गदायकम् ।**
**रेचकं पुलकञ्चैव शोधकं कालपालकम् ॥१३७॥**
**कङ्कुष्ठं च द्विधा प्रोक्तं तारहेमाभ्रकं तथा ।**
**कटुकं कफवातघ्नं रेचकं व्रणशूलहृत् ॥१३८॥**

कङ्कुष्ठ, कालकुष्ठ, विरङ्ग, रङ्गदायक, रेचक, पुलक, शोधक र कालपालक : यी कङ्कुष्ठका संस्कृत पर्यायवाची नामहरू हुन् । यो ताराभ्रक र हेमाभ्रक गरी दुई किसिमको हुन्छ । कङ्कुष्ठ पिरो,

कफविकार र वातविकार नाशक, रेचनी तथा घाउखटिरा र शूल नाशक पनि हुन्छ ।

**रूपामक्खी (?) विमल**

**विमलं निर्मलं स्वच्छममलं स्वच्छधातुकम् ।**
**बाणसङ्ख्याभिधं प्रोक्तं तारहेम द्विधा मतम् ॥१३९॥**
**विमलं कटुतिक्तोष्णं त्वग्दोषव्रणनाशनम् ।**
**रसवीर्यादिके तुल्यं वेधे स्याद्भिन्नवीर्यकम् ॥१४०॥**

(१) विमल, (२) निर्मल, (३) स्वच्छ, (४) अमल र (५) स्वच्छधातुक : यी पाँच नाम विमल (रुपामक्खी) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो तार र हेम गरी दुई थरी हुन्छ । यो पिरो, तीतो, उष्णवीर्यको तथा छालाको रोग र घाउखटिरा नाशक हुन्छ । दुवै थरी विमल रस, वीर्य आदीमा समान गुणका हुन्छन् । छेड्ने-विधि वा प्रयोजनमा भने यी फरक वीर्य (शक्ति) का हुने गर्दछन् ।

**चुम्बक**



**मूषकस्याभिधा पूर्वं पाषाणस्याभिधा ततः ।**
**आखुपाषाणनामाऽयं लोहसङ्करकारकः ॥१४१॥**

मूषक र यसका पर्यायवाची शब्दका पछाडि पाषाण र यसका पर्यायवाची नाम जोडिएका शब्दले चुम्बकलाई बुझाउँदछ । यो फलामलाई अन्य धातु बनाउनमा उपयोगी हुन्छ ।

**रत्न**

**धनार्थिनो जनाः सर्वे रमन्तेऽस्मिन्नतीव यत् ।**
**ततो रत्नमिति प्रोक्तं शब्दशास्त्रविशारदैः ॥१४२॥**
**द्रव्यं किञ्चन लक्ष्मीभोग्यं वसुवस्तुसम्पदो वृद्धिः ।**
**श्रीर्व्यवहार्यं द्रविणं धनमर्थो राः स्वापतेयं च ॥१४३॥**
**रत्नं वसुमणिरुपलो दृषद् द्रविणदीप्तवीर्याणि ।**
**रौहिणकमब्धिसारं खानिकमाकरजमित्यभिन्नार्थाः ॥१४४॥**

धनको चाहना गर्ने मानिस यिनमा अति नै आनन्द मान्ने (रम्ने) हुनाले शब्दशास्त्रका पण्डितहरूले यसलाई “रत्न” भनी नामाकरण गरेका हुन् । द्रव्य, किञ्चन, लक्ष्मीभोग्य, वसुवस्तुसम्पद, वृद्धि, श्री,

व्यवहार्य, द्राविण, धन, अर्थ, रा, स्वापतेय, रत्न, वसु, मणि, उपल, दृषद्, द्राविण, दीप्तवीर्य, रौहिणक, अब्धिसार, खानिक र आकरज : यी रत्नका पर्यायवाची नामहरू हुन् (द्रविण दोहोरिएको) ।

**माणिक्य**

**माणिक्यं शोणरत्नञ्च रत्नराड्रविरत्नकम् ।**
**शृङ्गारि रङ्गमाणिक्यं तरलो रत्ननायकः ॥१४५॥**
**रागदृक् पद्मरागश्च रत्नं शोणोपलस्तथा ।**
**सौगन्धिकं लोहितकं कुरुविन्दं शरेन्दुकम् ॥१४६॥**

(१) माणिक्य, (२) शोणरत्न, (३) रत्नराट्, (४) रविरत्नक, (५) शृङ्गारि, (६) रङ्गमाणिक्य, (७) तरल, (८) रत्ननायक, (९) रागदृक्, (१०) पद्मराग, (११) रत्न, (१२) शोणोपल, (१३) सौगन्धिक, (१४) लोहितक र (१५) कुरुविन्द : यी पन्ध्र नाम माणिक्यका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**माणिक्यं मधुरं स्निग्धं वातपित्तप्रणाशनम् ।**
**रत्नप्रयोगप्रज्ञानां रसायनकरं परम् ॥१४७॥**

माणिक्य गुलियो, चिल्लो तथा वातविकार र पित्तविकार नाशक हुन्छ । रत्नको प्रयोग कसरी गर्ने भनी थाहा पाउनेहरूका लागि यो अति नै रसायनी हुन्छ ।

**स्निग्धं गुरुगात्रयुतं दीप्तं स्वच्छं सुरङ्गञ्च ।**
**इति जात्यादिमाणिक्यं कल्याणं धारणात् कुरुते ॥१४८॥**

चिल्लो, गह्रौं, चम्किलो, स्वच्छ र राम्रो रङको (उत्तम) माणिक्यलाई लगाउने गर्नाले मानिसको कल्याण हुन्छ ।

**द्विच्छायमभ्रपिहितं कर्कशशर्करिलं भिन्नधूम्रञ्च ।**
**रागविकलं विरूपं लघु माणिक्यं न धारयेद्धीमान् ॥१४९॥**

बुद्धिमान्ले दुईतिर छाया देखिने, अभ्रक मिसिएको, खस्रो, बालुवा वा पत्थर मिसिएको, रङ्गहीन वा ध्वाँसे रङको, रङ बिग्रेको, रूप बिग्रेको र हलुको खालको माणिक्यलाई नलगाउनू ।

**तद्रक्तं यदि पद्मरागमथ तत् पीतातिरक्तं द्विधा**
**जानीयात् कुरुविन्दकं यदरुणं स्यादेषु सौगन्धिकम् ।**
**तन्नीलं यदि नीलगन्धिकमिति ज्ञेयं चतुर्धा बुधै-**

**माणिक्यं कषघर्षणेऽप्यविकलं रागेण जात्यं जगु ॥१५०॥**

माणिक्य पहेँलो र गाढा रातो गरी दुई किसिमको हुन्छ । पहेँलो रङ्को माणिक्यलाई पद्मराग तथा रातो रङ्को माणिक्यलाई कुरुविन्दक भनिन्छ । कुरुविन्दक पनि रातोमा पहेँलो मिश्रित रङ ( अरुण) (सौगन्धिक) को र नीलो (नीलगन्धिक) गरी दुई किसिमको हुन्छ । यसरी विज्ञहरुले माणिक्य चार थरी हुन्छ भनेका छन् । कसीमा घोट्दा पनि आकार र रङ नबदलिने खालको माणिक्यलाई असल माणिक्य मानिन्छ ।

### मोति

**मुक्ता सौम्या मौक्तिकं मौक्तिकेयं तारं तारा भौतिकं तारका च ।**
**अम्भःसारं शीतलं नीरजञ्च नक्षत्रं स्यादिन्द्ररत्नं वलक्षम् ॥१५१॥**
**मुक्ताफलं बिन्दुफलञ्च मुक्तिका शौक्तेयकं शुक्लमणिः शशिप्रियम् ।**
**स्वच्छं हिमं हैमवतं सुधांशुभं सुधांशुरत्नं शरनेत्रसम्मितम् ॥१५२॥**

(१) मुक्ता, (२) सौम्या, (३) मौक्तिक, (४) मौक्तिकेय, (५) तार, (६) तारा, (७) भौतिक, (८) तारका, (९) अम्भःसार, (१०) शीतल, (११) नीरज, (१२) नक्षत्र, (१३) इन्द्ररत्न, (१४) वलक्ष, (१५) मुक्ताफल, (१६) बिन्दुफल, (१७) मुक्तिका, (१८) शौक्तेयक, (१९) शुक्लमणि, (२०) शशिप्रिय, (२१) स्वच्छ, (२२) हिम, (२३) हैमवत, (२४) सुधांशुभ र (२५) सुधांशुरत्न : यी पच्चीस नाम मोतिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मौक्तिकञ्च मधुरं सुशीतलं दृष्टिरोगशमनं विषापहम् ।**
**राजयक्ष्ममुखरोगनाशनं क्षीणवीर्यबलपुष्टिवर्धनम् ॥१५३॥**

मोति गुलियो, शीतवीर्यको, आँखाका रोग शान्त पार्ने तथा विषविकार, क्षयरोग र मुखका रोग नाशक हुन्छ । यसले खिइएको वीर्य, बल र पुष्टिलाई वृद्धि गर्दछ ।

**नक्षत्राभं वृत्तमत्यन्तमुक्तं स्निग्धं स्थूलं निर्मलं निर्व्रणञ्च ।**
**न्यस्तं धत्ते गौरवं यत्तुलायां तन्निर्मूल्यं मौक्तिकं सौख्यदायि ॥१५४॥**
**यद्विच्छायं मौक्तिकं व्यङ्गकायं शुक्तिस्पर्शं रक्ततां चापि धत्ते ।**
**मत्स्याक्ष्याभं रूक्षमुत्तानिम्नं नैतद्धार्यं धीमता दोषदायि ॥१५५॥**

तारा जस्तै चम्किलो, पूर्ण गोलाकार, चिल्लो, मोटो, स्वच्छ, दागहीन र तराजुमा जोख्दा गह्रौं हुने मोति लगाउनु सुखदायी हुन्छ । छाया देखिने, रूप नमिलेको, सिपि आदि जस्तो र रातो आभाको

मोति अथवा माछाको आँखा जस्तो, खस्रो र घोप्टो परेको मोति बुद्धिमानले नलगाउनू, फाइदा गर्दैन ।

**मातङ्गोरगमीनपोत्रिशिरसस्त्वक्सारशङ्खाम्बुभृत्-**
**शुक्तीनामुदराच्च मौक्तिकमणिः स्पष्टं भवत्यष्टधा ।**
**छायाः पाटलनीलपीतधवलास्तत्रापि सामान्यतः**
**सप्तानां बहुशो न लब्धिरितरच्छौक्तेयकं तूल्वणम् ॥१५६॥**

हात्ती, सर्प, माछा र पोत्रिको टाउकोमा हुने, छाला र बोसोमा हुने, शङ्खमा हुने र सिपीको पेटमा हुने गरी स्पष्टरूपमा मोति आठ प्रकारका हुन्छन् । मोतिको छाया (रङ) रातो, नीलो, पहेँलो र पहेँलो मिश्रित सेतो हुन्छ । अन्य सात प्रकारका मोति सजिलै पाइँदैन । सिपीजन्य मोति सर्वसुलभ र उत्तम हुन्छ ।

**लवणक्षारक्षोदिनि पात्रे गोमूत्रपूरिते क्षिप्तम् ।**
**मर्दितमपि शालितुषैर्यदविकृतं तत्तु मौक्तिकं जात्यम् ॥१५७॥**

नुन एवं क्षार हालिएको भाँडामा गहुँत समेत हालेर राखी माड्दा पनि कुनै विकृति देखा नपर्ने खालको मोति उत्तम मोति हुन्छ ।



मुगा (प्रवाल)

**प्रवालोऽङ्गारकमणिर्विद्रुमोऽम्भोधिपल्लवः ।**
**भौमरत्नश्च रक्ताङ्गो रक्ताङ्कुरो लतामणिः ॥१५८॥**

प्रवाल, अङ्गारकमणि, विद्रुम, अम्भोधिपल्लव, भौमरत्न, रक्ताङ्ग, रक्ताङ्कुर र लतामणि : यी मुगाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**प्रवालो मधुरोऽम्लश्च कफपित्तादिदोषनुत् ।**
**वीर्यकान्तिकरः स्त्रीणां धृतो मङ्गलदायकः ॥१५९॥**

मुगा गुलियो र अमिलो हुन्छ । यसले कफविकार, पित्तविकार आदि विकार नाश गर्दछ । यसले वीर्य र कान्ति बढाउँदछ तथा लगाउनाले स्त्रीलाई मङ्गलदायी हुन्छ ।

**शुद्धं दृढघनं वृत्तं स्निग्धगात्रं सुरङ्गकम् ।**
**समं गुरु शिराहीनं प्रवालं धारयेत् शुभम् ॥१६०॥**

शुद्ध, बलियो, गाढा, गोलो, चिल्लो, राम्रो रङको, एकनासको, गह्रौं र सतह मिलेको मुगा लगाउनु, शुभदायक हुन्छ ।

**गौररङ्गं जलाक्रान्तं वक्रं सूक्ष्मं सकोटरम् ।**
**रूक्षं कृष्णं लघु श्वेतं प्रवालमशुभं त्यजेत् ॥१६१॥**

सेतो सेतो, पानी जस्तो आभा आइरहेको, सूक्ष्म, दाग लागेको, रुखो, कालो, हलुको र सेतो मुगा अशुभ हुन्छ, त्याग गर्नू ।

**बालार्ककिरणरक्ता सागरसलिलोद्भवा प्रवाललता ।**
**या न त्यजति निजरुचिं निकषे घृष्टाऽपि सा स्मृता जात्या ॥१६२॥**

बाल-सूर्यको किरण जस्तो रातो, समुद्री पानीबाट (मुगाको चट्टान) उत्पन्न तथा कसिमा घोट्दा पनि चमक र रङ नजाने खालको मुगालाई उत्तम खालको मुगा भनिन्छ ।

**पन्ना (मरकत)**



**गारुत्मतं मरकतं रौहीणेयं हरिन्मणिः ।**
**सौपर्णं गरुडोद्गीर्णं बुधरत्नाश्मगर्भजम् ॥**
**गरलारिर्वायवालं गारुडं रुद्रसम्मितम् ॥१६३॥**

(१) गारुत्मत, (२) मरकत, (३) रौहीणेय, (४) हरिन्मणि, (५) सौपर्ण, (६) गरुडोद्गीर्ण, (७) बुधरत्न, (८) अश्मगर्भज, (९) गरलारि, (१०) वायवाल र (११) गारुड : यी एघार नाम पन्नाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मरकतं विषघ्नञ्च शीतलं मधुरं रसे ।**
**आमपित्तहरं रुच्यं पुष्टिदं भूतनाशनम् ॥१६४॥**

पन्ना विषविकार नाशक, शीतवीर्यको र गुलियो हुन्छ । यसले आमविकार र पित्तविकार नाश गर्दछ । यो रुचिप्रद, पुष्टिदायक र भूतबाधा नाशक हुन्छ ।

**स्वच्छं गुरु सुच्छायं स्निग्धं गात्रे च मार्दवसमेतम् ।**
**अव्यङ्गं बहुरङ्गं शृङ्गारि मरकतं शुभं बिभृयात् ॥१६५॥**
**शर्करिलकलिलरूक्षं मलिनं लघु हीनकान्ति कल्माषम् ।**

**त्रासयुतं विकृताङ्गं मरकतममरोऽपि नोपभुञ्जीत ॥१६६॥**

स्वच्छ, गह्रौं, मनमोहक प्रतिबिम्ब देखिने, चिल्लो, सतहमा छाम्दा नरम हुने, दाग नभएको र धेरै रङ्ग देखिने पन्ना शुभ हुन्छ, लगाउनू । खस्रो, मिसिएको, रुखो, चमक नआउने, हलुका, तेजहीन, मैलो, डरलाग्दो र खुँडे पन्ना देवताले पनि नलगाउनू ।

**यत् शैवालशिखण्डिशाद्वलहरित्काचैश्च चाषच्छदैः**
**खद्योतेन च बालकीरवपुषा शैरीषपुष्पेण च ।**
**छायाभिः समतां दधाति तदिदं निर्दिष्टमष्टात्मकं**
**जात्यं यत्तपनातपैश्च परितो गारुत्मतं रञ्जयेत् ॥१६७॥**

लेउ, मुजुर, हरियो घाँस, स्फटिक, नीलकण्ठ, जुनकीरि, सुँगा र शिरीषको फूलको प्रतिबिम्ब देखिने पन्नालाई राम्रो पन्ना भनिन्छ । यी सबै प्रतिबिम्ब समानरूपमा आठ वटा कुनाबाट देखिन्छ । असल पन्नाले घाममा वा आगोमा राख्दा चारैतिर रङ फाल्दछ ।

## पुष्पराज

**पीतस्तु पुष्परागः पीतस्फटिकश्च पीतरक्तश्च ।**
**पीताश्मा गुरुरत्नं पीतमणिः पुष्परागश्च ॥१६८॥**

पीत, पुष्पराग, पीतस्फटिक, पीतरक्त, पीताश्मा, गुरुरत्न र पीतमणि : यी पुष्पराजका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पुष्परागोऽम्लशीतश्च वातजिद्दीपनः परः ।**
**आयुः श्रियञ्च प्रज्ञाञ्च धारणात् कुरुते नृणाम् ॥१६९॥**

पुष्पराज अमिलो, शीतवीर्यको, वातविकारलाई जित्ने र अत्यन्त दीपनी हुन्छ । यो रत्न लगाउँदा यसले मानिसहरूको उमेर, धनसम्पत्ति र बुद्धि बढाउँदछ ।

**सच्छायपीतगुरुगात्रसुरङ्गशुद्धं स्निग्धञ्च निर्मलमतीव सुवृत्तशीतम् ।**
**यः पुष्परागममलं कलयेदमुष्य पुष्णाति कीर्तिमतिशौर्यसुखायुरर्थान् ॥१७०॥**

असल पुष्पराजमा पहेँलो प्रतिबिम्ब देखिन्छ । यो गह्रौं, राम्रो रङको, शुद्ध, चिल्लो वा मुलायम, अति कञ्चन, अति गोलो र शीतल गर्ने गुणको हुन्छ । यस्तो निर्मल पुष्पराजले लगाउनेलाई कीर्ति, अति बहादुरी, सुख र आयु दिन्छ ।

**कृष्णबिन्द्वङ्कितं रूक्षं धवलं मलिनं लघु ।**
**विच्छायं शर्कराङ्गाभं पुष्परागं सदोषकम् ॥१७१॥**

काला दाग वा थोप्ला देखिने, रुखो, सेतो, मलिन, हलुका, प्रतिबिम्ब नदेखिने र छाम्दा खस्रो खालको पुष्पराजलाई दोष उब्जाउने पुष्पराज भनिन्छ ।

**घृष्टं निकाषपट्टे यत् पुष्यति रागमधिकमात्मीयम् ।**
**तेन खलु पुष्परागो जात्यतयाऽयं परीक्षकैरुक्तः ॥१७२॥**

कसीमा घोट्दा आफ्नै रङ्गमा बढी चम्कने पुष्पराजलाई रत्नका पारखीहरूले उत्तम खालको पुष्पराज भनी बताएका छन् ।

**हिरा (वज्र)**

**वज्रमिन्द्रायुधं हीरं भिदुरं कुलिशं पविः ।**
**अभेद्यमशिरं रत्नं दृढं भार्गवकं स्मृतम् ॥**
**षट्कोणं बहुधारञ्च शतकोटयब्धिभूमितम् ॥१७३॥**



(१) वज्र, (२) इन्द्रायुध, (३) हीर, (४) भिदुर, (५) कुलिश, (६) पवि, (७) अभेद्य, (८) अशिर, (९) रत्न, (१०) दृढ, (११) भार्गवक, (१२) षट्कोण, (१३) बहुधार र (१४) शतकोटी : यी चौध नाम हिराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वज्रं च षड्रसोपेतं सर्वरोगापहारकम् ।**
**सर्वाघशमनं सौख्यं देहदार्ढ्यं रसायनम् ॥१७४॥**

हिरामा छ रस हुन्छन् र यसले सबै किसिमका रोगहरू नाश गर्दछ । यो सबै पाप नाशक, सुखदायी, शरीरलाई बलियो बनाउने र रसायनी हुन्छ ।

**भस्माङ्गं काकपादञ्च रेखाक्रान्तं तु वर्तुलम् ।**
**अधारं मलिनं बिन्दुसन्त्रासं स्फुटितं तथा ॥**
**नीलाभं चिपिटं रूक्षं तद्वज्रं दोषदं त्यजेत् ॥१७५॥**

खरानी दलेको जस्तो वा मैलो, कागको खुट्टा जस्तो बाङ्गाटिङ्गा धर्का भएको, गोलो, धार नभएको, मलिन, थोप्लाहरू देखिने, फुटेको, नीलो चमक दिने, थेप्चो र रुखो हिरा दोषयुक्त हुन्छ,

नलगाउनू, त्याग्नू ।

श्वेतालोहितपीतमेचकतया छायाश्चतस्रः क्रमात्
विप्रादित्वमिहास्य यत् सुमनसः शंसन्ति सत्यं ततः ।
स्फीतां कीर्तिमनुत्तमां श्रियमिदं धत्ते यथास्वं धृतं
मर्त्यानामयथायथं तु कुलिशं पथ्यं हि नान्यत्ततः ॥१७६॥

सेतो, रातो, पहेँलो र कालो : यी चार थरी प्रतिबिम्ब देखिने हिरा क्रमशः ब्राह्मण आदि वर्ण नामका हिरा हुन् । आआफ्ना वर्ण अनुसारका हिरा लगाउनाले अति उत्तम कीर्ति र ऐश्वर्य प्राप्त हुन्छ । अन्यथा गरी वा उल्टो क्रममा लगाउनाले यसले दुर्भाग्य निम्त्याउन सक्दछ ।

यत्पाषाणतले निकाषनिकरे नोच्चृष्यते निष्ठुरै-
र्यच्चोलूखललोहमुद्गरघनैर्लेखां न यात्याहतम् ।
यच्चान्यन्निजलीलयैव दलयेद्वज्रेण वा भिद्यते
तज्जात्यं कुलिशं वदन्ति कुशलाः श्लाघ्यं महार्घ्यञ्च तत् ॥१७७॥

ढुङ्गामा घोट्दा अथवा ओखलमा राखेर फलामको मुसल, घन आदिले आदिले पिट्दा पनि कतै दाग समेत नलाग्ने र स्वजातिले मात्र (हिराले मात्र) रगडिने वा फुट्ने वा टुक्रिने खालको हिरालाई रत्नका पारखीहरूले लगाउन योग्य र बहुमूल्य हिरा भनी बताएका छन् ।

विप्रः सोऽपि रसायनेषु बलवानष्टाङ्गसिद्धिप्रदो
राजन्यस्तु नृणां वलीपलितजित् मृत्युं जयेदञ्जसा ।
द्रव्याकर्षणसिद्धिदस्तु सुतरां वैश्योऽथ शूद्रो भवेत्
सर्वव्याधिहरस्तदेष कथितो वज्रस्य वर्ण्यो गुणः ॥१७८॥

विप्र जातको हिरा रसायन कार्यमा उपयोगी हुन्छ र यसले बल तथा आठ प्रकारका सिद्धि प्रदान गर्दछ । क्षत्रिय जातको हिरा मानिसका लागि समय नभई छाला चाउरी पर्ने, कपाल फुल्ने जस्ता समस्या नाश गर्ने एवं ठिक तरिकाले प्रयोग हुँदा काललाई समेत नाश गर्ने गुणको हुन्छ । वैश्य वर्णको हिराले धनलाई आफूतिर तान्ने शक्ति प्रदान गर्दछ । शूद्र वर्णको हिराले सबै खालका रोग नाश गर्दछ । यी हिराका वर्ण अनुसारका गुण हुन् ।

नीलमणि (नील)

नीलस्तु सौरिरत्नं स्यान्नीलाश्मा नीलरत्नकः ।
नीलोपलस्तृणग्राही महानीलः सुनीलकः ॥

**मसारोमन्द्रनील स्याद्गल्लकः पद्मरागजः ॥१७९॥**

नील, सौरिरत्न, नीलाश्मा, नीलरत्नक, नीलोपल, तृणग्राही, महानील, सुनीलक, मसार, इन्द्रनील, गल्लर्क र पद्मरागज : यी नीलमणिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**नीलः सतिक्तकोष्णश्च कफपित्तानिलापहः ।**
**यो दधाति शरीरे स्यात् सौरिर्मङ्गलदो भवेत् ॥१८०॥**

नीलमणि तीतो, उष्णवीर्यको र त्रिदोष नाशक हुन्छ । जसले यसलाई शरीरमा धारण गर्दछ उसलाई शनि मङ्गलदायक हुने छन् ।

**न निम्नो निर्मलो गात्रमसृणो गुरुदीप्तिकः ।**
**तृणग्राही मृदुर्नीलो दुर्लभो लक्षणान्वितः ॥१८१॥**
**मृच्छर्कराश्मकलिलो विच्छायो मलिनो लघुः ।**
**रूक्षः स्फुटितमर्तश्च वर्ज्यो नीलः सदोषकः ॥१८२॥**

गहिरो, स्वच्छ, छाम्दा चिल्लो, गह्रौं, चमकदार, घाँसलाई समेत चुम्बकले ताने जसरी आफूतिर तान्ने र नरम खालको लक्षणकारी नीलमणि पाउन दुर्लभ हुन्छ । माटो, बालुवा र पत्थरका कण मिसिएको; प्रतिबिम्ब नदेखिने, मैलो, हलुको, रुखो, फुटेको र सतह नमिलेको नीलमणि दोषदायक हुन्छ, नलगाउनू ।

**सितशोणपीतकृष्णाश्छाया नीले क्रमादिमाः कथिताः ।**
**विप्रादिवर्णसिद्ध्यै धारणमस्यापि वज्रवत् फलवत् ॥१८३॥**
**आस्त्यानं चन्द्रिकास्यन्दं सुन्दरं क्षीरपूरितम् ।**
**यः पात्रं रञ्जयत्याशु स जात्यो नील उच्यते ॥१८४॥**

हिराजस्तै नीलमणि पनि सेतो, रातो, पहेँलो र कालो प्रतिबिम्ब दिने क्रमशः ब्राह्मण आदि चार वर्णको हुन्छ । यो पनि हिरा जसरी नै वर्ण अनुसार लगाउनु सोही (हिरा) अनुसारकै फल दिन्छ । एउटा दूधले भरिएको कचौरामा राखिएको नीलमणिले चारैतिर चन्द्रमाको जसरी नै सुन्दर नीलो किरण फाल्दछ र कचौरालाई पनि नीलो बनाउँदछ । यस्तो खालको नीलमणिलाई राम्रो नीलमणि भनिन्छ ।

**गोमेद**

**गोमेदकस्तु गोमेदो राहुरत्नं तमोमणिः ।**

**स्वभानवः षडाह्वोऽयं पिङ्गस्फटिक इत्यपि ॥१८५॥**

(१) गोमेदक, (२) गोमेद, (३) राहुरत्न, (४) तमोमणि, (५) स्वर्भानु र (६) पिङ्गस्फटिक : यी छ नाम गोमेदका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**गोमेदकोऽम्ल उष्णाश्च वातकोपविकारजित् ।**
**दीपनः पाचनश्चैव धृतोऽयं पापनाशनः ॥१८६॥**

गोमेद अमिलो, उष्णवीर्यको तथा वातविकार नाशक हुन्छ । यो दीपनी र पाचनी हुनुका साथै धारण गर्नेको पापनाशक समेत हुन्छ ।

**गोमूत्राभं यन्मृदु स्निग्धमुग्धं शुद्धच्छायं गौरवं यच्च धत्ते ।**
**हेमारक्तं श्रीमतां योग्यमेतत् गोमेदाख्यं रत्नमाख्यान्ति सन्तः ॥१८७॥**

गहुँत जस्तै हल्का पहेँलो, नरम, चिल्लो, भ्रमदायक निर्मल प्रतिबिम्ब देखिने र सुनजस्तै नजानिदो राता खालको गोमेदलाई रत्नका पारखीहरूले श्रेष्ठ र योग्य गोमेद हो भनी बताएका छन् ।

**पात्रे यत्र न्यस्ते पयः प्रयात्येव गोजलोज्ज्वलताम् ।**

**घर्षेऽप्यहीनकान्तिं गोमेदं तं बुधा विदुर्जात्यम् ॥१८८॥**

गोमेदलाई एउटा पानीले भरिएको भाँडामा राख्दा यसले चारैतिर गहुँत जस्तै चम्किलो प्रकाश फाल्दछ । रगड्दा पनि यसको चमक कम हुँदैन भनेर रत्नका पारखीहरूले बताएका छन् ।

**अरङ्गं श्वेतकृष्णाङ्गं रेखात्रासयुतं लघु ।**
**विच्छायं शर्करागारं गोमेदं विबुधस्त्यजेत् ॥१८९॥**

रङ्गहीन, सेतो वा कालो, धर्का भएको, हलुका, प्रतिबिम्ब नदेखिने र खस्रो खालको गोमेदलाई विद्वानहरूले परित्याग गर्नू ।

## वैदूर्य

**वैडूर्यं केतुरत्नञ्च कैतवं बालवीयजम् ।**
**प्रावृष्यमभ्रलोहञ्च खशब्दाङ्कुरकस्तथा ॥**
**वैडूर्यरत्नं सम्प्रोक्तं ज्ञेयं विडूरजं तथा ॥१९०॥**

वैडूर्य, केतुरत्न, केतव, बालवायज, प्रावृष्य, अभ्रलोह, खशब्दाङ्कुरक, वैडूर्यरत्न र विडूरज : यी वैदूर्यमणिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वैडूर्यमुष्णमम्लञ्च कफमारुतनाशनम् ।**
**गुल्मादिदोषशमनं भूषितञ्च शुभावहम् ॥१९१॥**

यो मणि उष्णवीर्यको, अमिलो तथा कफविकार र वातविकार नाश गर्दछ । यसले गुल्म आदि दोषलाई शान्त पर्दछ । यो लगाउनाले पनि शुभ हुन्छ ।

**एकं वेणुपलाशपेशलरुचा मायूरकण्ठत्विषा**
**माजरिक्षणपिङ्गलच्छविजुषा ज्ञेयं त्रिधा च्छायया ।**

वैदूर्यमणि बाँस वा पलाश जस्तो सुन्दर, मुजुरको घाँटीजस्तो र बिरालाको आँखाजस्तो कैलो प्रतिविम्ब दिने गगरी तीन किसिमको हुन्छ ।

**यद्गात्रे गुरुतां दधाति नितरां स्निग्धं तु दोषोज्झितं**
**वैडूर्यं विमलं वदन्ति सुधियः स्वच्छं च तच्छोभनम् ॥१९२॥**



सधैं शरीर भारी बनाउने, मुलायम, दोष नाशक, स्वच्छ र सुन्दर वैदूर्यलाई विज्ञहरू असल खालको वैदूर्य भन्दछन् ।

**विच्छायं मृच्छिलागर्भं लघु रूक्षञ्च सक्षतम् ।**
**सत्रासं परुषं कृष्णं वैडूर्यं दूरतस्त्यजेत् ॥१९३॥**

प्रतिविम्ब नदेखिने, भित्र बालुवा आदि देखिने, हलुको, रुखो, चोट लागेको, दोषयुक्त, खस्रो र कालो वैदूर्यमणिलाई टाढैबाट त्याग गर्नू ।

**घृष्टं यदात्मना स्वच्छं स्वच्छायां निकषाश्मनि ।**
**स्फुटं प्रदर्शयेदेतद्वैडूर्यं जात्यमुच्यते ॥१९४॥**

कसीमा जति घोट्दै गयो उति चमक निस्कने र सुन्दर बन्दै जाने खालको वैदूर्यमणिलाई उत्तम वैदूर्यमणि भनिन्छ ।

### नवग्रह रत्न

माणिक्यं पद्मबन्धोरतिविमलतमं मौक्तिकं शीतभानो-
र्माहेयस्य प्रवालं मरकतमतुलं कल्पयेदिन्दुसूनोः ।
देवेज्ये पुष्परागं कुलिशमपि कवेर्नीलमर्कात्मजस्य
स्वर्भानोश्चापि गोमेदकमथ विदुरोद्भावितं किन्तु केतोः ॥१९५॥

माणिक सूर्यको, अति निर्मल मोति चन्द्रमाको, मुगा मङ्गलको, पन्ना बुधको, पुष्पराज बृहस्पतिको, हिरा शुक्रको, नीलमणि शनिको, गोमेद राहुको र वैदुर्यमणि केतुको प्रिय रत्न हो ।

इत्थमेतानि रत्नानि तत्तदुद्देशतः क्रमात् ।
यो दद्याद्बिभृयाद्वाऽपि तस्मिन् सानुग्रहा ग्रहाः ॥१९६॥

जुन जुन ग्रहको दोष हुन्छ त्यही त्यही ग्रहलाई मनपर्ने रत्न दान गर्नाले वा लगाउनाले ती ग्रहहरू आफू अनुकूलका हुने गर्दछन् ।

### रत्न लगाउँदा हुने विकृतीको असर



सन्त्यज्य वज्रमेकं सर्वत्रान्यत्र सञ्जाते ।
लाघवमथ कोमलता साधारणदोष एव विज्ञेयः ॥१९७॥

हिरा बाहेक अन्य रत्नमा कोमलता हुने हुँदा लगाउने क्रममा यिनमा आघात भई आउने हलुकोपन वा कोमलता जस्ता दोषलाई सामान्य दोष हो भनी जान्नु पर्दछ ।

### महारत्न, उपरत्न

लोहितकवज्रमौक्तिकमरकतनीला सहोपलाः पञ्च ।
वैदूर्यपुष्परागप्रवालगोमेदकादयोऽर्वाञ्चः ॥१९८॥
गोमेदप्रवालवायव्यं देवेज्यमणीन्दुतरणिकान्ताद्याः ।
नानावर्णगुणाढ्या विज्ञेया स्फटिकजातयः प्राज्ञैः ॥१९९॥

माणिक, हिरा, मोति, पन्ना र नीलमणि : यी पाँच महारत्न हुन् । वैदुर्य, पुष्पराज, मुगा, गोमेद आदिलाई उपरत्न भनिन्छ । गोमेद र मुगालाई वायुजन्य भनिन्छ । पुष्पराज, मोति, माणिक आदि अनेक रङ र गुणका हुन्छन् । विज्ञहरूले यी स्फटिक जातिका रत्न हुन् भनी बताएका छन् ।

## स्फाटिक

**स्फटिकः सितोपलः स्यादमलमणिर्निर्मलोपलः स्वच्छः ।**
**स्वच्छमणिरमलरत्नं निस्तुषरत्नं शिवप्रियं नवधा ॥२००॥**

(१) स्फटिक, (२) सितोपल, (३) अमलमणि, (४) निर्मलोपल, (५) स्वच्छ, (६)ण स्वच्छमणि, (७) अमलरत्न, (८) निस्तुषरत्न र (९) शिवप्रिय : यी नौ नाम स्फटिकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**स्फटिकः समवीर्यश्च पित्तदाहार्तिदोषनुत् ।**
**तस्याक्षमाला जपतां दत्ते कोटिगुणं फलम् ॥२०१॥**

स्फटिक समवीर्य (न उष्ण न त शीत) को हुन्छ । यसले पित्तविकार र डाह नाश गर्दछ । यसको दानाको माला जप्नाले करोड गुना बढी फल पाइन्छ ।

**यद्गङ्गातोयबिन्दुच्छविविमलतमं निस्तुषं नेत्रहृद्यं**
**स्निग्धं शुद्धान्तरालं मधुरमतिहिमं पित्तदाहास्रहारि ।**
**पाषाणैर्यन्निघृष्टं स्फुटितमपि निजां स्वच्छतां नैव जह्यात्**
**तज्जात्यं जात्वलभ्यं शुभमुपचिनुते शैवरत्नं विचित्रम् ॥२०२॥**

गङ्गाको पानीको थोपा जस्तै अति कञ्चन, विकार नभएको, आँखाका लागि फाइदाजनक वा आनन्ददायक, चिल्लो वा मुलायम, भित्रसम्म शुद्ध वा भित्र शुद्ध गराउने, राम्रो वा गुलियो, अति चिसो वा शीतवीर्यको तथा पित्तविकार, डाह र रक्तविकार नाशक, ढुङ्गामा घोट्दा वा फुट्दा पनि आफ्नो स्वच्छता नगुमाउने, यस्तो प्राकृतिक, शुभ र विचित्र खालको स्फटिक सङ्कलन गर्न धेरै नै कठिन हुन्छ ।

## सूर्यकान्तमणि

**अथ भवति सूर्यकान्तस्तपनमणिस्तपनश्च रविकान्तः ।**
**दीप्तोपलोऽग्निगर्भो ज्वलनाश्माऽर्कोपलश्च वसुनामा ॥२०३॥**

(१) सूर्यकान्त, (२) तपनमणि, (३) तपन, (४) रविकान्त, (५) दीप्तोपल, (६) अग्निगर्भ, (७) ज्वलनाश्म र (८) अर्कोपल : यी आठ नाम सूर्यकान्तमणिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सूर्यकान्तो भवेदुष्णो निर्मलश्च रसायनः ।**

**वातश्लेष्महरो मेध्यः पूजनाद्रवितुष्टिदः ॥२०४॥**

सूर्यकान्तमणि उष्णवीर्यको, कञ्चन, रसायनी तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले दिमागको ग्रहण गर्ने क्षमता बढाउँदछ । यसको पूजा गर्दा सूर्य भगवान् प्रसन्न हुन्छन् ।

**शुद्धः स्निग्धो निर्व्रणो निस्तुषोऽन्तर्यो निर्मृष्टो व्योम्नि नैर्मल्यमेति ।**
**यः सूर्यांशुस्पर्शनिष्ठ्यूतवह्निर्जात्यः सोऽयं जायते सूर्यकान्तः ॥२०५॥**

शुद्ध, मुलायम, चोट नलागेको, भित्रसम्म विकाररहीत, माडेर सफा गर्दा आकाश जस्तै निर्मल देखिने र घामतिर देखाएर राखिए त्यसबाट आगो निस्कने खालको मणिलाई सूर्यकान्तमणि भनिन्छ ।

बिल्लौर (वैक्रान्तमणि)

**वैक्रान्तं चैव विक्रान्तं नीचवज्रं कुवज्रकम् ।**
**गोनासः क्षुद्रकुलिशं चूर्णवज्रञ्च गोनसः ॥२०६॥**

वैक्रान्त, विक्रान्त, नीचवज्र, कुवज्रक, गोनास, क्षुद्रकुलिश, चूर्णवज्र र गोनस : यी वैक्रान्तमणिका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**वज्राभावे च वैक्रान्तं रसवीर्यादिके समम् ।**
**क्षयकुष्ठविषघ्नञ्च पुष्टिदं सुरसायनम् ॥२०७॥**

हिरा नपाउँदा विक्रान्तमणिको प्रयोग गर्नू किन कि रस, वीर्य आदिमा यो हिरासमान हुन्छ । यसले क्षयरोग, कुष्ठरोग र विषविकार नाश गर्दछ तथा पुष्टि दिन्छ । यो रसायनी पनि हुन्छ ।

**वज्राकारतयैव प्रसह्य हरणाय सर्वरोगाणाम् ।**
**यद्विक्रान्तिं धत्ते तद्वैक्रान्तं बुधैरिदं कथितम् ॥२०८॥**

वज्र जस्तो भएर सबै खालका रोग हरण गर्ने खालको साहस बोकेको हुनाले विद्वानहरूले यसलाई विक्रान्तमणि नाम राखेका हुन् ।

चन्द्रकान्तमणि

**इन्द्रकान्तश्चन्द्रकान्तश्चन्द्राश्मा चन्द्रजोपलः ।**

**शीताश्मा चान्द्रिकाद्रावः शशिकान्तश्च सप्तधा ॥२०९॥**
**चन्द्रकान्तस्तु शिशिरः स्निग्धः पित्तास्रतापहृत् ।**
**शिवप्रीतिकरः स्वच्छो ग्रहालक्ष्मीविनाशकृत् ॥२१०॥**
**स्निग्धं श्वेतं पीतमात्रासमेतं धत्ते चित्ते स्वच्छतां यन्मुनीनाम् ।**
**यच्च स्रावं याति चन्द्रांशुसङ्गाज्जात्यं रत्नं चन्द्रकान्ताख्यमेतत् ॥२११॥**

(१) इन्द्रकान्त, (२) चन्द्रकान्त, (३) चन्द्राश्मा, (४) चन्द्रजोपल, (५) शीताश्मा, (६) चन्द्रिकाद्राव र (७) शशिकान्त : यी सात नाम चन्द्रकान्तमणिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतवीर्यको, चिल्लो वा मुलायम तथा पित्तविकार, रक्तविकार र डाह नाशक हुन्छ । यो भगवान् शिवलाई मनपर्ने, स्वच्छ तथा ग्रहबाधा र अलक्ष्मी नाशक हुन्छ । मुलायम वा चिल्लो, पहेँलो मिसिएको सेतो र लगाउनाले मुनिजनको चित्तलाई स्वच्छ पार्ने गुणको हुन्छ । जुनको प्रकाशमा राख्दा रस निकाल्ने हुनाले यसको नाम चन्द्रकान्तमणि रहन गएको हो ।

## युँ (राजावर्त)

**राजावर्तः नृपावर्तो राजन्यावर्तकस्तथा ।**
**आवर्तमणिरावर्तः स्यादित्येषः शराह्वयः ॥२१२॥**
**राजावर्तः कटुः स्निग्धः शिशिरः पित्तनाशनः ।**
**सौभाग्यं कुरुते नृणां भूषणेषु प्रयोजितः ॥२१३॥**
**निर्गारमसितमसृणं नीलं गुरु निर्मलं बहुच्छायम् ।**
**शिखिकण्ठसमं सौम्यं राजावर्तं वदन्ति जात्यमणिम् ॥२१४॥**

राजावर्त, नृपावर्त, राजन्यावर्तक, आवर्तमणि र आवर्त : यी पाँच नाम राजावर्तका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, चिल्लो, शीतवीर्यको र पित्तनाशक हुन्छ । गहनाकारूपमा प्रयोग गर्दा यसले मानिसलाई सौभाग्य दिन्छ । गाढा नीलो वा कालो, गह्रौं, निर्मल, धेरै प्रतिबिम्ब देखिने, मयुरको घाँटीजस्तो र आनन्ददायक राजावर्तलाई प्राकृतिक र असल राजावर्त भनिन्छ ।

## फिरोजा

**पेरोजं हरिताश्मञ्च भस्माङ्गं हरितं द्विधा ।**
**पेरोजं सुकषायं स्यान्मधुरं दीपनं परम् ॥२१५॥**
**स्थावरं जङ्गमञ्चैव संयोगाच्च यथा विषम् ।**
**तत्सर्वं नाशयेत् शीघ्रं शूलं भूतादिदोषजम् ॥२१६॥**

पेरोज, हरिताश्म, भस्माङ्ग र हरित : यी पेरोजका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, गुलियो र अत्यन्त दीपनी हुन्छ । स्थावर र जङ्गम गरी यो दुई प्रकारको हुन्छ । यसको संयोग विष समान हुन्छ । यसले अति छिटै भूतबाधाजन्य शूल नाश गर्दछ ।

### अप्रशोधित धातु

**सिद्धाः पारदमभ्रकञ्च विविधान् धातूंश्च लोहानि च**
**प्राहुः किञ्च मणीनपीह सकलान् संस्कारतः सिद्धिदान् ।**
**यत् संस्कारविहीनमेषु हि भवेद्यच्चान्यथा संस्कृतं**
**तन्मर्त्यं विषवन्निहन्ति तदिह ज्ञेया बुधैः संस्क्रियाः ॥२१७॥**
**यान् संस्कृतान् शुभगुणानथ चान्यथा चेद्-**
**दोषांश्च यानपि दिशन्ति रसादयोऽमी ।**
**याश्चेह सन्ति खलु संस्कृतयस्तदेतन्-**
**नात्राभ्यधायि बहुविस्तरभीतिभाग्भिः ॥२१८॥**

प्रशोधन गरिएका पारो, अभ्रक, फलाम आदि विभिन्न धातुहरु सबै राम्ररी प्रशोधन गरेमा मात्र सिद्धिदायक हुन्छन् । यिनै धातु राम्ररी प्रशोधन नगरिएमा वा प्रशोधन नै नगरिएमा विष समान भई ज्यान लिन्छन् भनी जानी विद्वानले यिनको संस्कार (प्रशोधन) गर्नू । यी पारो आदि प्रशोधन हुँदा गुनिला र नहुँदा विकारकारक हुन्छन् । अध्याय ठूलो हुने डरले धातु प्रशोधनका बारेमा यहाँ उल्लेख गरिएन ।



### वर्गप्रशस्ति

**इति लोहधातुरसरत्नतद्भिदाद्यभिधागुणप्रकटनस्फुटाक्षरम् ।**
**अवधार्य वर्गमिममाद्यवैद्यकप्रगुणप्रयोगकुशलो भवेद्बुधः ॥२१९॥**

यसरी यस अध्यायमा फलाम, (अन्य) धातु, पारो, रत्न आदि र तिनका प्रकारका बारेमा विस्तृत रूपमा वर्णन गरिएको छ । यस अध्यायमा बताइएका कुरालाई पूर्ण रूपमा अँगाल्ने एक सचेत विद्यार्थी तिनको प्रयोगका बारेमा पनि दक्ष बन्न सक्नेछ ।

**कुर्वन्ति ये निजगुणेन रसाध्वगेन**
**नृणां जरन्त्यपि वपूंषि पुनर्नवानि ।**
**तेषामयं निवसतिः कनकादिकानां**
**वर्गः प्रसिध्यति रसायनवर्गनाम्ना ॥२२०॥**

रस-वैद्यहरू यस अध्यायमा बताइए बमोजिम प्रशोधन गरिएका सुन आदिको कुशलतापूर्वक प्रयोग गरी बिरामी र वृद्धको शरीरलाई कायाकल्प गर्न सक्षम हुन सक्ने हुनाले यस अध्यायलाई “रसायन वर्ग” भनी पुनः नामाकरण गरिएको छ ।

**नित्यंयस्य गुणाः किलान्तरलसत्कल्याणभूयस्तथा**
**चित्ताकर्षणचञ्चवस्त्रिभुवनं भूम्ना परिष्कुर्वते ।**
**तेनात्रैष कृते नृसिंहकृतिना नामादिचूडामणौ**
**संस्थामेति मितस्त्रयोदशतया वर्गः सुवर्णादिकः ॥२२१॥**

सक्षम र सन्तुष्ट ती नरहरि पण्डित, जसका असाधारण गुणहरूले शिष्यहरूको मनमा सधैं प्रसन्नता पैदा गर्दछ र मन र मस्तिष्कलाई आकर्षण गराउँदै संसार पवित्र बनाउँदछ, यहाँ आफ्नो अभिधान चूडामणि नामक अनुपम ग्रन्थको सुवर्णादि वर्ग नामक तेह्रौं अध्याय पूर्ण गर्दछन् ।

**इति श्रीनरहरिपण्डितविरचिते सुवर्णादिवर्गस्त्रयोदशः ॥१३॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत सुवर्णादि नामक तेह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१३।**

## पानीयादिवर्ग

### पानी

पानीयजीवनवनामृतपुष्कराम्भःपाथोऽम्बुशम्बरपयःसलिलोदकानि ।
आपः कवारुणकबन्धजलानि नीरकीलालवारिकमलानि विषार्णसी च ॥१॥
भुवनं दहनारातिवारस्तोयं सर्वतोमुखं क्षीरम् ।
घनरसनिम्नगमेघप्रसवरसाश्चेति वह्निमिताः ॥२॥
पानीयं मधुरं हिमं च रुचिदं तृष्णाविशोषापहं
मोहभ्रान्तिमपाकरोति कुरुते भुक्तान्नपक्तिं पराम् ।
निद्राऽऽलस्यनिरासनं विषहरं श्रान्तातिसन्तर्पणं
नृणां धीबलवीर्यतुष्टिजननं नष्टाङ्गपुष्टिप्रदम् ॥३॥

(१) पानीय, (२) जीवन, (३) वनामृत, (४) पुष्कराम्भ, (५) पाथ, (६) अम्बु, (७) शम्बर, (८) पय, (९) सलिल, (१०) उदक, (११) आप, (१२) क, (१३) वारुणक, (१४) बन्ध, (१५) जल, (१६) नीर, (१७) कीलाल, (१८) वारि, (१९) कमल, (२०) विष, (२१) अर्णस, (२२) भुवन, (२३) दहन, (२४) आराति, (२५) वार, (२६) तोय, (२७) सर्वतोमुख, (२८) क्षीर, (२९) घनरस, (३०) निम्नग, (३१) मेघप्रसव र (३२) रस : यी बत्तीस (तेत्तीस भनिएको) नाम पानीका संस्कृत पर्यायवाची नामहरू हुन् । पानी गुलियो, शीतवीर्यको, रुचिप्रद तथा तिर्खा र सुकेनाश रोग नाशक हुन्छ । यसले मोह र भ्रम नाश गर्दछ तथा विशेषत खाएको अन्न पचाउँदछ । पानीले निद्रा र आलस्य भगाउँदछ, विषविकार नाश गर्दछ तथा थकाई लाग्दा तृप्ति दिन्छ । मानिसलाई बुद्धि, बल, वीर्य र सन्तुष्टि दिन्छ तथा नष्ट अङ्गलाई पुनः पुष्ट पार्दछ ।



### वर्षाको पानी (दिव्योदक)

दिव्योदकं खरारि स्यादाकाशसलिलं तथा ।
व्योमोदकं चान्तरिक्ष जलं चेष्वभिधाह्वयम् ॥४॥
व्योमोदकं त्रिदोषघ्नं मधुरं पथ्यदं परम् ।
रुच्यं दीपनदं तृष्णाश्रममेहापहारकम् ॥५॥
सद्योवृष्ट्यम्बु भूमिस्थं कलुषं दोषदायकम् ।
चिरस्थितं लघु स्वच्छं पथ्यं स्वादु सुखावहम् ॥६॥

दिव्योदक, खरारि, आकाशसलिल, व्योमोदक र अन्तरिक्ष जल : यी आकाशबाट परेको पानीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो जल त्रिदोष नाशक, गुलियो र अत्यन्त पथ्य हुन्छ । यो

पानी रुचिप्रद, दीपनी तथा तिखो, थकाइ र प्रमेह नाशक हुन्छ । भखर परेको जमिनको पानी प्रदूषित र विकार उत्पन्न गराउने गुणको हुन्छ । लामो समय पछि भने यस्तो पानी पचाउन सहज, स्वच्छ, पथ्य, स्वादिलो र सुखदायक हुन्छ ।

## समुद्रको पानी

**यादोनाथसमुद्रसिन्धुजलदाकूपारपाथोधयः**
**पारावारपयोधिसागरसरिन्नाथाश्च वारां निधिः ।**
**अम्भोराशिसरस्वदम्बुधिनदीनाथाब्धिनित्यार्णवो-**
**दन्वद्वारिधिवार्धयः कधिरपान्नाथोऽपि रत्नाकरः ॥७॥**
**सागरसलिलं विस्रं लवणं रक्तामयप्रदं चोष्णम् ।**
**वैवर्ण्यदोषजननं विशेषाद्दाहार्तिपित्तकरणं च ॥८॥**

यादोनाथ, समुद्र, सिन्धु, जलद, आकूपार, पाथोधि, पारावार, पयोधि, सागर, सरिन्नाथ, वारां निधि, अम्भोराशि, सरस्वान्, अम्बुधि, नदीनाथ, अब्धि, नित्यार्णव, उदन्वान्, वारिधि, वार्धय, कधि, अपांनाथ र रत्नाकर : यी समुद्रका संस्कृत पर्यायवाची नामहरू हुन् । समुद्रको पानी काँचो मासु जस्तो गनाउने, नुनिलो तथा रक्तविकार निकाल्ने र उष्णवीर्यको हुन्छ । यो पानी शरीरको वर्णमा रोग निकाल्ने तथा विशेषत डाह र पित्तविकार गर्ने गुणको हुन्छ ।



## नदीको पानी

**नदी धुनी निर्झरिणी तरङ्गिणी सरस्वती शैवलिनी समुद्रगा ।**
**कूलङ्कषा कूलवती च निम्नगा शैवालिनी सिन्धुरथापगाऽपि च ॥९॥**
**ह्रदिनी समुद्रकान्ता सागरगा ह्रादिनी सरित्कर्षूः ।**
**स्रोतस्विनी मुनीरा रोधोवक्रा च वाहिनी तटिनी ॥१०॥**
**नादेयं सलिलं स्वच्छं लघु दीपनपाचनम् ।**
**रुच्यं तृष्णापहं पथ्यं मधुरं चेषदुष्णकम् ॥११॥**

नदी, धुनी, निर्झरिणी, तरङ्गिणी, सरस्वती, शैवलिनी, समुद्रगा, कूलङ्कषा, कूलवती, निम्नगा, शैवालिनी, सिन्धुरथा, आपगा, ह्रदिनी, समुद्रकान्ता, सागरगा, ह्रादिनी, सरित्, कर्षू, स्रोतस्विनी, मुनीरा, रोधोवक्रा, वाहिनी र तटिनी : यी नदीका संस्कृत पर्यायवाची नामहरू हुन् । नदीको पानी स्वच्छ, पचाउन सहज, दीपनी, पाचनी, रुचिप्रद, तिर्खा मेट्ने, पथ्य, गुलियो र थोरै उष्णवीर्यको हुन्छ ।

## विविध जल

**गङ्गा भानुसुता रेवा चन्द्रभागा सरस्वती ।**
**मधुमती विपाशाऽथ शोणो घर्घरकस्तथा ॥१२॥**
**वेत्रावती क्षौद्रवती पयोष्णी तापी वितस्ता सरयूश्च सिन्धुः ।**
**महाशतद्रुर्ह्यथ गौतमी स्यात् कृष्णा च तुङ्गा च कावेरिकन्या ॥१३॥**
**इत्येवमाद्याः सरितः समस्तास्तडागवापीह्रदकूपकाद्याः ।**
**अन्येऽप्यनूपात्मकदेशभेदाः कौलाभिधानैः स्वयमूहनीयाः ॥१४॥**
**धाराकारादिकातोयमन्तरिक्षोद्भवं तथा ।**
**परीक्ष्येत यथा चोक्तं ज्ञातव्यं जलवेदिभिः ॥१५॥**

गङ्गा, भानुसुता (यमुना), रेवा (नर्मदा), चन्द्रभागा (सिनाव), सरस्वती, मधुमती, विपाशा (व्यास), शोण (सोनभद्रा), घर्घरक (घाघर), वेत्रावती (वेतवा), क्षौद्रवती, पयोष्णी, तापी (तप्ती), वितस्ता (झेलम), सरयू, सिन्धु, महाशतद्रु (शतलज), गौतमी, कृष्णा, तुङ्गा (तुङ्गभद्रा) र कावेरिकन्या ( कावेरी) : यी प्रमुख नदीका नामहरू हुन् । अन्य तलाउ, वापी, दह, कुवा आदिलाई अनूप, जाङ्गल आदि भेदले स्थान, परम्परा आदि अनुसारका नाम वा समूहले जान्नू । अन्तरिक्ष जल धारा जल, कारा जल र अन्तरिक्षोद्भव गरी तीन किसिमको हुन्छ । यो पानी (प्रयोग गर्नु अघि) बताइए बमोजिम जल-विशेषज्ञबाट जँचाउनु पर्दछ ।



## गङ्गा नदीको पानी

**गङ्गा स्वर्गसरिद्वरा त्रिपथगा मन्दाकिनी जाह्नवी**
**पुण्या विष्णुपदी समुद्रसुभगा भागीरथी स्वर्णदी ।**
**त्रिःस्रोता सुरदीर्घिका सुरनदी सिद्धापगा स्वर्धुनी**
**ज्येष्ठा जह्नुसुता च भीष्मजननी शुभ्रा च शैलेन्द्रजा ॥१६॥**
**शीतं स्वादु स्वच्छमत्यन्तरुच्यं पथ्यं पाक्यं पावनं पापहारि ।**
**तृष्णामोहध्वंसनं दीपनं च प्रज्ञां दत्ते वारि भागीरथीयम् ॥१७॥**

गङ्गा, स्वर्गसरित, त्रिपथगा, मन्दाकिनी, जाह्नवी, पुण्या, विष्णुपदी, समुद्रसुभगा, भागीरथी, स्वर्णदी, त्रिःस्रोता, सुरदीर्घिका, सुरनदी, सिद्धापगा, स्वर्धुनी, ज्येष्ठा, जह्नुसुता, भीष्मजननी, शुभ्रा र शैलेन्द्रजा : यी गङ्गा नदीका संस्कृत पर्यायवाची नामहरू हुन् । गङ्गानदीको पानी शीतवीर्यको, मिठो, स्वच्छ, अति रुचिप्रद, पथ्य, पाक्य, पवित्र र पापनाशक हुन्छ । यसले तिर्खा र मोह नाश गर्दछ । यो दीपनी हुन्छ । यो भागीरथीको जलले बुद्धिको विकास गर्दछ ।

### यमुना नदीको पानी

**यमुना तपनतनुजा कलिन्दकन्या यमस्वसा च कालिन्दी ॥१८॥**
**पित्तदाहवमनश्रमापहं स्वादु वातजननं च पाचनम् ।**
**वह्निदीपनकरं विरोचनं यामुनं जलमिदं बलप्रदम् ॥१९॥**

यमुना, तपनतनुजा, कलिन्दकन्या, यमस्वसा र कालिन्दी : यी यमुनानदीका संस्कृत पर्यायवाची नामहरू हुन् । यमुनाको पानीले पित्तविकार, डाह, वाकवाकी र थकाई नाश गर्दछ । जमुनाको यो जल स्वादिलो, वातविकार गर्ने, पाचनी, जठराग्निलाई बाल्ने, रुचि जगाउने र बलप्रदायक गुणको हुन्छ ।

### नर्मदा नदीको पानी

**रेवा मेकलकन्या सोमसुता नर्मदा च विज्ञेया ॥२०॥**
**सलिलं लघु शीतलं सुपथ्यं कुरुते पित्तकफप्रकोपणम् ।**
**सकलामयमर्दनं च रुच्यं मधुरं मेकलकन्यकासमुत्थम् ॥२१॥**

रेवा, मेकलकन्या र सोमसुता : यी नाम नर्मदा नदीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नदीको पानी पचाउन सहज, शीतवीर्यको, अत्यन्त पथ्य तथा पित्तविकार र कफविकार गराउने गुणको हुन्छ । नर्मदाको पानी सबै खाले रोग रोक्न सक्षम छ । यो नदीको पानी रुचिप्रद र मिठो पनि छ ।

### चन्द्रभागा नदीको पानी

**चान्द्रभागसलिलं सुशीतलं दाहपित्तशमनं च वातदम् ॥२२॥**

चान्द्रभाग वा चन्द्रभागा वा चिनाव नदीको पानी शीतवीर्यको, डाह र पित्तविकार शान्त पार्ने तर वातविकार गर्ने गुणको हुन्छ ।

### सरस्वती नदीको पानी

**सरस्वती प्लक्षसमुद्भवा च सा वाक्प्रदा ब्रह्मसती च भारती ।**
**वेदाग्रणीश्चैव पयोष्णिजाता वाणी विशाला कुटिला दशाह्वा ॥२३॥**
**सरस्वतीजलं स्वादु पूतं सर्वरुजापहम् ।**
**रुच्यं दीपनदं पथ्यं देहकान्तिकरं लघु ॥२४॥**

(१) सरस्वती, (२) प्लक्षसमुद्भवा, (३) वाक्प्रदा, (४) ब्रह्मसती, (५) भारती, (६) वेदाग्रणी, (७) पयोष्णिजाता, (८) वाणी, (९) विशाला र (१०) कुटिला : यी दश नाम सरस्वती नदीका संस्कृत पर्यायवाची नामहरू हुन् । सरस्वती नदीको पानी स्वादिलो, पवित्र र सबै रोग नाशक हुन्छ । यो रुचिप्रद, दीपनी, पथ्य, शरीरलाई चम्काउने र पचाउन सहज हुने गुणको हुन्छ ।

### माधुमती नदीको पानी

**चान्द्रभागगुणसाम्यदं जलं किञ्च माधुमतमग्निदीपनम्॥२५॥**

माधुमती (?) नदीको पानी चान्द्रभाग नदीको जस्तै भएपनि यो जठराग्निलाई बाल्ने गुणको समेत हुन्छ ।

### शतद्रु, विपाशा र सिन्दु नदीको जल

**शतद्रोर्विपाशायुजः सिन्धुनद्याः सुशीतं लघु स्वादु सर्वामयघ्नम् ।**
**जलं निर्मलं दीपनं पाचनञ्च प्रदत्ते बलं बुद्धिमेधाऽऽयुषञ्च॥२६॥**



शतद्रु, विपाशा र सिन्धु नदीको पानी अत्यन्त शीतवीर्यको, पचाउन सहज, स्वादिलो र सबै रोग नाशक हुन्छ । यो पानी कञ्चन, दीपनी, पाचनी तथा बल, बुद्धि, दिमागको ग्रहण गर्ने क्षमता र आयु बढाउने गुणको हुन्छ ।

### शोण, घर्घरक र वेत्रावती नदीको पानी

**शोणे घर्घरके जलं तु रुचिदं सन्तापशोषापहं**
**पथ्यं वह्निकरं तथा च बलदं क्षीणाङ्गपुष्टिप्रदम् ।**
**तत्रान्या दधते जलं सुमधुरं कान्तिप्रदं पुष्टिदं**
**वृष्यं दीपनपाचनं बलकरं वेत्रावती तापिनी॥२७॥**

शोण (मध्यप्रदेश, भारत) र घर्घरक नदीको पानी रुचिप्रद तथा डाह र सुकेनास रोग नाशक हुन्छ । यो पानी पथ्य, जठराग्निलाई बाल्ने, बलदायक र खिइएका अङ्गलाई पुष्ट बनाउने गुणको हुन्छ । वेत्रावतीको पानी अति मिठो, कान्तिदायक र पुष्टिदायक हुन्छ । यो पानी वीर्यवर्धक, दीपनी, पाचनी र बलदायक पनि हुन्छ ।

### पयोष्णी नदीको पानी

**पयोष्णीसलिलं रुच्यं पवित्रं पापनाशनम् ।**
**सर्वामयहरं सौख्यं बलकान्तिप्रदं लघु ॥२८॥**

पयोष्णी नदीको पानी रुचिप्रद, पवित्र र पापनाशक हुन्छ । यसले सबै खालका रोग नाश गर्दछ तथा सुख, बल र तेज दिन्छ । यो नदीको पानी पचाउन सहज हुन्छ ।

### वितस्ता नदीको पानी

**वितस्तासलिलं स्वादु त्रिदोषशमनं लघु ।**
**प्रज्ञाबुद्धिप्रदं पथ्यं तापजाड्यहरं परम् ॥२९॥**

वितस्ता नदीको पानी स्वादिलो, त्रिदोलाई शान्त पार्ने, पचाउन सहज, ज्ञान र बुद्धि दायक, पथ्य तथा विशेषत डाह र जडता नाश गर्ने गुणको हुन्छ ।

### सरयू नदीको पानी



**सरयूसलिलं स्वादु बलपुष्टिप्रदायकम् ॥३०॥**

सरयू नदीको पानी स्वादिलो तथा बल र पुष्टि प्रदायक हुन्छ ।

### गोदावरी नदीको पानी

**गोदावरी गौतमसम्भवा सा ब्रह्मादिजाताऽऽप्यथ गौतमी च ॥३१॥**
**पित्तार्तिरक्तार्तिसमीरहारि पथ्यं परं दीपनपापहारि ।**
**कुष्ठादिदुष्टामयदोषहारि गोदावरीवारि तृषानिवारि ॥३२॥**

गौतमसम्भवा, ब्रह्मादिजाता र गौतमी : यी गोदावरी नदीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नदीको पानी पित्तविकार, रक्तविकार र वातविकार नाशक हुन्छ । यो पानी पथ्य, अत्यन्त दीपनी र पापनाशक हुन्छ । यो पानीले कुष्ठ आदि खराब रोगहरूलाई नाश गर्दछ ।

### कृष्णानदीको पानी

**कृष्णानदी कृष्णसमुद्भवा स्यात् सा कृष्णवेणाऽपि च कृष्णगङ्गा ॥३३॥**
**कार्ष्ण्यं जाड्यकरं स्वादु पूतं पित्तास्रकोपनम् ।**

**कृष्णवेणाजलं स्वच्छं रुच्यं दीपनपाचनम् ॥३४॥**

कृष्णानदीलाई कृष्णसमुद्भवा, कृष्णवेणा र कृष्णगङ्गा पनि भनिन्छ । यो नदीको पानी कालोपन भएको, जडता निकाल्ने, स्वादिलो, पवित्र तथा पित्तविकार र रक्तविकार गर्ने गुणको हुन्छ । यो पानी स्वच्छ, रुचिप्रद, दीपनी र पाचनी हुन्छ ।

### भीमरथी आदि नदीको पानी

**मलापहा भीमरथी च घट्टगा यथा च कृष्णाजलसाम्यदा गुणैः ।**
**मलापहाघट्टगयोस्तथाऽपि पथ्यं लघु स्वादुतरं सुकान्तिदम् ॥३५॥**

मलापहा, भीमरथी र घट्टगा नदीको पानीको गुण पनि कृष्णावेणी नदीको पानीको गुण जस्तै हुन्छ । तर पनि मलापहा नदीको पानी तुलनात्मक रूपमा बढी पथ्य, पचाउन सहज, स्वादिलो र शरीरलाई चम्काउने गुणको हुन्छ ।

### तुङ्गभद्रा नदीको पानी

**तुङ्गभद्राजलं स्निग्धं निर्मलं स्वादुदं गुरु ।**

**कण्डूपित्तास्रदं प्रायः सात्म्ये पथ्यकरं परम् ॥३६॥**

तुङ्गभद्रा नदीको पानी चिल्लो, कञ्चन, स्वादिलो, पचाउन कठिन तथा चिलाउने रोग र पित्तविकार निकाल्ने गुणको हुन्छ । यसलाई सात्म्य बनाइएको भए यो अत्यन्त पथ्य हुने गर्दछ ।

### कावेरी नदीको पानी

**कावेरीसलिलं स्वादु श्रमघ्नं लघु दीपनम् ।**
**दद्रुकुष्ठादिदोषघ्नं मेधाबुद्धिरुचिप्रदम् ॥३७॥**

कावेरी नदीको पानी स्वादिलो, थकाई मेटाउने, पचाउन सहज, दीपनी तथा दाद, कुष्ठ आदि रोग नाशक हुन्छ । यो पानीले दिमागको ग्रहण गर्ने क्षमता, बुद्धि र रुचि प्रदान गर्दछ ।

### अन्य नदीका पानीको गुण

**नदीनामित्थमन्यासां देशदोषादिभेदतः ।**
**तत्तद्गुणान्वितं वारि ज्ञातव्यं कृतबुद्धिभिः ॥३८॥**

यहाँ उल्लेख नगरिएका अन्य नदीको पानीको गुण ती नदी बग्ने स्थान, माटोको अवस्था र दोषलाई ज्ञानीहरूले थाहा पाउनु पर्दछ ।

### नदी बहने दिशा अनुसार पानीको गुण

**सर्वा गुर्वी प्राङ्मुखी वाहिनी या लघ्वी पश्चाद्वाहिनी निश्चयेन ।**
**देशे देशे तद्गुणानां विशेषादेषा धत्ते गौरवं लाघवञ्च ॥३९॥**

पूर्वतिर बहने प्रायः सबै नदीको जल पचाउन कठिन हुन्छ । पश्चिमतिर बहने प्रायः सबै नदीको पानी निश्चित रूपमा पचाउन सहज हुन्छ । यसो भए पनि कुन नदीको पानी पचाउन सहज छ र कुन नदीको पानी पचाउन सहज छैन भन्ने कुरा त्यो नदी बहने स्थान अनुसार हुने गर्दछ ।

### स्थान अनुसारका नदीको पानीको गुण

**विन्ध्यात् प्राची याऽप्यवाची प्रतीची या चोदीची स्यान्नदी सा क्रमेण ।**
**वाताटोपं श्लेष्मपित्तार्तिलोपं पित्तोद्रेकं पथ्यपाकञ्च धत्ते ॥४०॥**
**हिमवति मलयाचले च विन्ध्ये प्रभवति सह्यगिरौ च या स्रवन्ती ।**
**सृजति किल शिरोरुजादिदोषानपनुदतेऽपि च पारियात्रजाता ॥४१॥**

विन्ध्य पर्वतको पूर्व, दक्षिण, पश्चिम र उत्तरतिर रहेका नदीको पानी क्रमशः वातविकार गर्ने, कफविकार र पित्तविकार नाशक, पित्तविकार बढाउने तथा पथ्य र पाचक हुन्छ । हिमालय, मलय, विन्ध्य, पारियात्र आदि पर्वतबाट उत्पन्न हुने नदीहरूको पानीले कहिले टाउकाका रोग निकाल्ने त कहिले नाश गर्ने गर्दछ ।

### ऋतु अनुसार नदीका पानीको गुण

**नद्यः प्रावृषिजास्तु पीनसकफश्वासार्तिकासप्रदाः**
**पथ्या वातकफापहाः शरदिजा हेमन्तजा बुद्धिदाः ।**
**सन्तापं शमयन्ति शं विदधते शैशिर्यवासन्तजा-**
**स्तृष्णादाहवमिश्रमार्तिशमदा ग्रीष्मे यथा सद्गुणाः ॥४२॥**

वर्षा ऋतुमा नदीको पानीले पिनास, कफविकार, दम र खोकी निकाल्दछ । शरद् ऋतुको नदीको पानी पथ्य तथा वातविकार र कफविकार नाशक हुन्छ । हेमन्त ऋतुको नदीको पानी बुद्धि प्रदायक हुन्छ । शिशिर र वसन्त ऋतुको नदी पानीले डाह नाश गर्दछ र तिर्खा नाश गर्दछ । ग्रीष्म ऋतुको नदीको पानी तिर्खा, डाह, वाकवाकी र थकाई नाश गर्ने गुणको हुन्छ ।

### ओसिलो स्थानको पानी

**आनूपसलिलं स्वादु स्निग्धं पित्तहरं गुरु ।**
**तनोति पामाकण्डूतिकफवातज्वरामयान् ॥४३॥**

आनूप-स्थानमा हुने पानी स्वादिलो, चिल्लो, पित्तविकार नाशक, पचाउन कठिन तथा पामा, चिलाउने रोग, कफविकार, वातविकार र ज्वर निकाल्न सक्ने गुणको हुन्छ । (पानी वा हिलो भइरहने खालको सिमसार जमिनलाई आनूप भनिन्छ, यसको थप परिभाषा आनूपादि वर्गमा दिइएको छ) ।

### सुक्खा क्षेत्रको पानी

**जाङ्गलंसलिलं स्वादु त्रिदोषघ्नं रुचिप्रदम् ।**
**पथ्यं चायुर्बलंवीर्यं पुष्टिदं कान्तिकृत् परम् ॥४४॥**

सुक्खा स्थानमा हुने पानी स्वादिलो, त्रिदोष नाशक, रुचिप्रद, पथ्य तथा आयु, बल, वीर्य र अत्यन्त कान्ति प्रदायक हुन्छ ।



#### न सुक्खा न त ओसिलो भएका स्थानको (मिश्रित) स्थानको पानी

**साधारणं जलं रुच्यं दीपनं पाचनं लघु ।**
**श्रमं तृष्णापहं वात कफमेदोघ्नपुष्टिदम् ॥४५॥**

मिश्रित-स्थान (न सुक्खा न ओसिलो) को पानी रुचिप्रद, दीपनी, पाचनी, पचाउन सहज तथा थकाई, तिर्खा, वातविकार, कफविकार र बोसोविकार नाशक एवं पुष्टिदायक हुन्छ ।

### माटो अनुसार जलमा हुने गुण

**जातं ताम्रमृदस्तदेव सलिलं वातादिदोषप्रदं**
**देशाज्जाड्यकरं च दुर्जरतरं दोषावहं धूसरम् ।**
**वातघ्नं तु शिलाशिरोत्थममलं पथ्यं लघु स्वादु च**
**श्रेष्ठं श्याममृदस्त्रिदोषशमनं सर्वामयघ्नं पयः ॥४६॥**

रातो माटोमा हुने पानीले वातविकार आदि विकार गर्दछ । ध्वाँसे माटोमा हुने पानी जडता निकाल्ने, पचाउन कठिन र विकार-वाहक हुन्छ । पत्थर र पर्वत हुँदै बहने पानी वातविकार नाशक, निर्मल,

पथ्य, पचाउन सहज र स्वादिलो हुन्छ । कालिमाटीको पानी सबभन्दा उत्तम हुन्छ । यो पानीले त्रिदोषलाई शान्त पार्दछ तथा सबै रोगलाई नाश गर्दछ ।

### गहिरो पोखरीको पानी (ह्रदजल)

**ह्रदवारि वह्निजननं मधुरं कफवातहारि पथ्यं च ॥४७॥**

गहिरो पोखरीको पानी जठराग्नि बाल्ने, मिठो, कफविकार नाशक, वातविकार नाशक र पथ्य गुणको हुन्छ ।

### झर्नाको पानी (प्रस्रवण जल)

**प्रस्रवणजलं स्वच्छं लघु मधुरं रोचनं च दीपनकृत् ॥४८॥**

झर्नाको पानी स्वच्छ, पचाउन सहज, मिठो, रोचनी र दीपनी हुन्छ ।

### सरोवरको पानी (तडागजल)



**तडागसलिलं स्वादु कषायं वातदं कियत् ॥४९॥**

सरोवरको पानी स्वादिलो, टर्रो र थोरै वातविकार गर्ने गुणको हुन्छ ।

### वापीजल

**वापीजलं तु सन्तापि वातश्लेष्मकरं गुरु ॥५०॥**

वापीको पानी डाहकारक, वातविकार गर्ने, कफविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

### कूपजल

**कफघ्नं कूपपानीयं क्षारं पित्तकरं लघु ॥५१॥**

कूपको पानी कफविकार नाशक, नुनिलो, पित्तविकार गर्ने र पचाउन हुने गुणको हुन्छ ।

## औद्भिद जल

**औद्भिदं पित्तशमनं सलिलं लघु च स्मृतम् ॥५२॥**

औद्भिद् पानीले पित्तविकार शान्त पार्दछ र यो पचाउन सहज हुन्छ भनिएको छ ।

## केदार जल

**केदारसलिलं स्वादु विपाके दोषदं गुरु ।**
**तदेव बद्धमुक्तन्तु विशेषाद्दोषदं भवेत् ॥५३॥**

खेतमा जमाइएको पानी स्वादिलो र पचेपछि दोषकारक हुन्छ । यो पचाउन कठिन हुन्छ । यदि यो सबैतिरबाट थुनिएको छ भने यो अझै विकार उब्जाउने गुणको हुन्छ ।

## हंसोदक

**नादेयं नवमृच्चटेषु निहितं सन्तप्तमर्कांशुभि-**
**र्यामिन्यां च निविष्टमिन्दुकिरणैर्मन्दानिलान्दोलितम् ।**
**एलाद्यैः परिवासितं श्रमहरं पित्तोष्णदाहे विषे**
**मूर्छारक्तमदात्येषु च हितं शंसन्ति हंसोदकम् ॥५४॥**



एउटा नयाँ माटाको भाँडो लिनू । यसमा नदीको पानी भरेर दिनभर घाममा र रातभर चन्द्रमाको उज्यालोमा राख्नू । यसरी खुला ठाउँमा राख्दा यो थोरै हावाको सम्पर्कमा रहेको हुनुपर्दछ । यसपछि यो पानीमा अलैंची आदिको धुलो हालेर सुगन्धित बनाउनू । यो पानीले थकाई नाश गर्दछ । यो पानी पित्तविकारमा, गर्मीले डाह हुँदा, विषविकारमा, बेहोसीपनमा, रक्तविकारमा र मदात्यय रोगमा पनि हितकारी हुन्छ । यस्तो हंसोदक नामको पानीलाई सबैले प्रशंसा गर्दछन् ।

## नित्य पानी सेवनका फाइदा

**यः पानीयं पिबति शिशिरं स्वादु नित्यं निशीथे**
**प्रत्यूषे वा पिबति यदि वा घ्राणरन्ध्रेण धीरः ।**
**सोऽयं सद्यः पतगपतिना स्पर्धते नेत्रशक्त्या**
**स्वर्गाचार्यं प्रहसति धिया द्वेष्टि दस्रौ च तन्वा ॥५५॥**

जसले नित्य बिहान र राती सुत्ने बेलामा चिसो र मिठो पानी नाक (वा मुख) ले पिउने गर्दछ, उसले

गरुडका जस्ता आँखा, बृहस्पतिको जस्तो बुद्धि र अश्विनकुमारको जस्तो शरीर पाउँदछ ।

## दूषितजल

**विण्मूत्रारुणनीलिकाविषहतं तप्तं घनं फेनिलं**
**दन्तग्राह्यमनार्तवं सलवणं शैवालकैः संवृतम् ।**
**जन्तुव्रातविमिश्रितं गुरुतरं पर्णौघपङ्काविलं**
**चन्द्रार्कांशुतिरोहितं च न पिबेन्नीरं जडं दोषलम् ॥५६॥**

मलमूत्र परेको, नीर आदि विषालु कुराले विषाक्त भएको, तातेको, बाक्लो, फिँज उठेको, दाँतलाई असजिलो बनाउने, नुनिलो, लेउले घेरिएका स्थानको, जीवजन्तु धेरै भएको, पचाउन कठिन, पातपतिङ्गर र हिलो भएको तथा चन्द्रसूर्यको किरण नपर्ने स्थानको पानी नपिउनू, यस्तो पानीले रोग निकाल्दछ ।

## शीतल जल निषेध

**पार्श्वशूले प्रतिश्याये वातदोषे नवज्वरे ।**
**हिक्काऽऽध्मानादिदोषेषु शीताम्बु परिवर्जयेत् ॥५७॥**

कोखा हान्ने वातको रोग वा कोखाको शूल हुँदा, पिनास लाग्दा, वातजन्य रोग हुँदा, भर्खर जरो आउन शुरु गरेको अवस्थामा, बाडुली लाग्दा, पेट डम्म भएर फुलेको बेलामा जस्ता रोग हुँदा चिसो पानी नपिउनू ।

## शृतशीत जलपान

**धातुक्षये रक्तविकारदोषे वान्त्यस्रमेहे विषविभ्रमेषु ।**
**जीर्णज्वरे शैथिल्यसन्निपाते जलं प्रशस्तं शृतशीतलन्तु ॥५८॥**

धातु खिइएको अवस्थामा, रक्तविकार हुँदा, बान्ता हुँदा वा वाकवाकी लाग्दा, प्रमेहमा, विषविकारमा, भ्रम हुँदा, थाङ्ने जरो आएका बेलामा, सन्निपात भई कमजोर हुँदा तताएर सेलाएको पानी पिउनु लाभदायक हुन्छ ।

## तताएको पानी

**तप्तं पाथः पादभागेन हीनं प्रोक्तं पथ्यं वातजातामयघ्नम् ।**

**अर्धोशोनं नाशयेद्वातपित्तं पादप्रायं तत्तु दोषत्रयघ्नम् ॥५९॥**

उमालेर एक चौथाई घटेपछि सेलाएको पानी पथ्य र वातविकार नाशक हुन्छ । यसरी उमालेर आधा बनाएको पानीले वातविकार र पित्तविकार तथा एक चौथाई बाँकी हुने गरी उमालिएको पानीले त्रिदोष नाश गर्दछ ।

**ऋतु अनुसार उमालेको पानी सेवन**

**हेमन्ते पादहीनन्तु पादार्धोनन्तु शारदे ।**
**प्रावृड्वसन्ते शिशिरे ग्रीष्मे चार्धावशेषितम् ॥६०॥**

उमालेर हेमन्त ऋतुमा एक चौथाई घटेको, शरद् ऋतुमा तीन चौथाई घटेको तथा वर्षा, वसन्त, शिशिर र ग्रीष्म ऋतुमा आधा घटेको पानी पिउनू ।

**ऋतु अनुसारका पानी**

**कौपं प्रास्रवणं वाऽपि शिशिरर्तुवसन्तयोः ।**
**ग्रीष्मे चौडं तु सेवेत दोषदं स्यादतोऽन्यथा ॥६१॥**



इनार र झर्नाको पानी शिशिर र वसन्त ऋतुमा तथा ग्रीष्म ऋतुमा चौड-जल पिउनु अन्यथा हुँदा रोग लाग्दछ ।

**तातो पानी पिउने नियम**

**तप्तं दिवा जाड्यमुपैति नक्तं नक्तं च तप्तं तु दिवा गुरु स्यात् ।**
**दिवा च नक्तं च नृभिस्तदात्वतप्तं जलं युक्तमतो ग्रहीतुम् ॥६२॥**

दिउस तताएको पानी रात परेपछि र रातमा तताएको पानी दिउस हुँदा पचाउन कठिन हुन्छ । यसैले दिउस तताएको पानी दिउस नै र रातमा तताएको पानी रातमा नै पिएर सक्नु पर्दछ । (बढी भए फाल्नु र आवश्यकता अनुसार तताउनू) ।

**अवस्थानुसार जलसेवन**

**उष्णं क्वापि क्वापि शीतं कवोष्णं क्वापि क्वापि क्वाथशीतञ्च पाथः ।**
**इत्थं नृणां पथ्यमेतत् प्रयुक्तं कालावस्थादेहसंस्थानुरोधात् ॥६३॥**

शरीरलाई कहिले तातो, कहिले चिसो र कहिले तताएर चिसो पारिएको जल पथ्य हुन्छ । यसैले मानिसले समय, परिस्थिति र शारीरिक अवस्था अनुसार पानी पिउने गर्नू ।

### राती पिइने तातोपानीका लाभ

**अपनयति पवनदोषं दलयति कफमाशु नाशयत्यरुचिम् ।**
**पाचयति चान्नमनलं पुष्णाति निशीथपीतमुष्णाम्भः ॥६४॥**

राती पिइएको तातो पानीले वातविकार नाश गर्दछ, तुरुन्त कफलाई खुकुलो पार्दछ, अरुचि नाश गर्दछ, खाएको अन्नलाई पचाउँदछ र जठराग्निलाई बाल्दछ ।

### समय अनुसार पानी पिउँदा हुने फाइदा

**रात्रौ पीतमजीर्णदोषशमनं शंसन्ति सामान्यतः**
**पीतं वारि निशाऽवसानसमये सर्वामयध्वंसनम् ।**
**भुक्त्वा तूर्ध्वमिदञ्च पुष्टिजननं प्राक् चेदपुष्टिप्रदं**
**रुच्यं जाठरवह्निपाटवकरं पथ्यञ्च भुक्त्यन्तरे ॥६५॥**

प्रायः रातमा पिइने (धाराको) पानीले अजीर्ण आदि विकारलाई शान्त पार्दछ । बिहान सबेरै पिइएको पानीले सबै प्रकारका रोगहरू नाश गर्दछ । खाना खाएपछि पिइने पानी पुष्टिदायक र खाना खानुअघि पिइएको पानी पुष्टिनाशक हुन्छ । खाना खाँदा बीचमा पिइने पानी जठराग्निलाई बाल्ने र पथ्य गुणको हुन्छ ।

### पिउने पानीको मात्रा

**अत्यम्बुपानान्न विपच्यतेऽन्नमनम्बुपानाच्च स एव दोषः ।**
**तस्मान्नरो वह्निविवर्धनार्थं मुहुर्मुहुर्वारि पिबेदभूरि ॥६६॥**

धेरै पानी पिउनाले खाएको अन्न पच्दैन । पानी पिउँदै नपिउनाले पनि यही समस्या हुन्छ । अतः मानिसले पाचनशक्तिलाई सक्रिय बनाइ राख्न नियमित रूपमा थोरै थोरै पानी पिइरहनु पर्दछ ।

### अन्तरिक्षजल भेद

**जलं चतुर्विधं प्राहुरन्तरिक्षोद्भवं बुधाः ।**

**धारं च कारकं चैव तौषारं हैममित्यपि ॥६७॥**

अन्तरिक्ष जल धार, कारक, तौषार र हैम गरी चार प्रकारको हुन्छ ।

**अन्तरिक्षजल स्वरूप**

**अम्बु वर्षोद्भवं धारं कारं वर्षोपलोद्भवम् ।**
**नीहारतोयं तौषारं हैमं प्रातर्हिमोद्भवम् ॥६८॥**

वर्षामा परेको पानीलाई धार, असिना पग्लिएको पानीलाई कारक, शीतलाई तौषार र हिउँको पानीलाई हैम भनिन्छ ।

**धाराजल**

**धारं च द्विविधं प्रोक्तं गाङ्गसामुद्रभेदतः ।**
**तत्र गाङ्गं गुणाढ्यं स्यात् अदोषं पाचनं परम् ॥६९॥**

धार जल पनि गाङ्ग र सामुद्र गरी दुई किसिमको हुन्छ । यी दुईमध्ये गाङ्ग जल दोषहीन, अत्यन्त पाचनी र बढी गुनिलो हुन्छ ।

**गाङ्गधारा**

**यदा स्यादाश्विने मासि सूर्यः स्वातिविशाखयोः ।**
**तदाम्बु जलदैर्मुक्तं गाङ्गमुक्तं मनीषिभिः ॥७०॥**

असोज महिनामा जब सूर्य स्वाति वा विशाखा नक्षत्रमा हुन्छन् त्यसबेला परेको पानीलाई विद्वानहरूले गाङ्ग-जल भनी बताएका छन् ।

**सामुद्रधारा**

**अन्यदा मृगशीर्षादिनक्षत्रेषु यदम्बुदैः ।**
**अभिवृष्टमिदं तोयं सामुद्रामतिशब्दितम् ॥७१॥**

सूर्य मृगशीर्ष आदि अन्य नक्षत्रमा हुँदा आकाशबाट पर्ने पानीलाई सामुद्र धाराजल भनिन्छ ।

**धारज गाङ्गजल विशेष**

**धाराधरे वर्षति रौप्यपात्रे विन्यस्य शाल्योदनसिद्धपिण्डे ।**
**दध्नोपदिग्धे निहितं मुहूर्तादविक्रियं गाङ्गमथान्यथा स्यात् ॥७२॥**

आकाशबाट परेको पानी चाँदीको भाँडोमा जम्मा पारी त्यसमा मार्सी चामलको भातको डल्लो करिब अठचालीस मिनेटसम्म डुबाएर राख्नू । त्यसपछि पनि भातमा कुनै विकार नआए त्यो गाङ्ग-जल हुन्छ, नत्र हुँदैन ।

**गाङ्गजल**

**गाङ्गं जलं स्वादु सुशीतलं च रुचिप्रदं पित्तकफापहञ्च ।**
**निर्दोषमच्छं लघु तच्च नित्यं गुणाधिकं व्योम्नि गृहीतमाहुः ॥७३॥**

गाङ्ग-जल स्वादिलो, शीतल, रुचिप्रद तथा पित्तविकार र कफविकार नाशक हुन्छ । यो दोषहीन, सफा र पचाउन सहज हुन्छ । दिनहुँ जम्मा गरिएको (ताजा) आकाशबाट परेको पानी बढी गुनिलो हुन्छ ।



**चन्द्रकान्तोद्भव जल**

**चन्द्रकान्तोद्भवं वारि पित्तघ्नं विमलं लघु ।**
**मूर्छापित्तास्रदाहेषु हितं कासमदात्यये ॥७४॥**

चन्द्रकान्तमणि भएको जलमा चन्द्रमाको किरण परेपछि यो पित्तविकार नाशक, कञ्चन, पचाउन सहज तथा बेहोसी, पित्तविकार, रक्तविकार, डाह, खोकी र मदात्ययमा हितकर हुन्छ ।

**सामुद्र जल**

**सामुद्रसलिलं शीतं कफवातप्रदं गुरु ।**
**चित्रायामाश्विने तच्च गुणाढ्यं गाङ्गवद्भवेत् ॥७५॥**

सामुद्र-जल शीतवीर्यको, कफविकार र वातविकार गर्ने तथा पचाउन कठिन हुने गुणको हुन्छ । यो पानी यदि असोजको चित्रा नक्षत्रमा सङ्कलन गरिन्छ भने गाङ्ग-जल समान गुनिलो हुन्छ ।

### भूमिविशेषानुसार जल लक्षण

पतितं भुवि यत्तोयं गाङ्गं सामुद्रमेव वा ।
स्वस्वाश्रयवशाद्गच्छेदन्यदन्यद्रसादिकम् ॥७६॥
अम्लं च लवणं च स्यात् पतितं पार्थिवस्थले ।
आप्ये तु मधुरं प्रोक्तं कटु तिक्तं च तैजसे ॥७७॥
कषायं वायवीये स्यादव्यक्तं नाभसे स्मृतम् ।
तत्र नाभसमेवोक्तमुत्तमं दोषवर्जितम् ॥७८॥

आकाशबाट जमिनमा परेको पानी चाहे त्यो गाङ्ग होस् वा सामुद्र, जमिनको माटो आदि जस्ता उक्त पानीले लिने आश्रयका आधारमा फरक फरक रसको हुने गर्दछ । (पञ्चमहाभूत अनुसार) पार्थिव माटोमा परेको पानी अमिलो र नुनिलो हुन्छ । आप्ये माटोमा परेको पानी गुलियो हुन्छ । तैजस माटोमा परेको पानी पिरो र तीतो हुन्छ । वायव्य माटोमा परेको पानी टर्रो हुन्छ । नभस माटोमा परेको पानीको स्वाद हुँदैन । यो नाभस जल उत्तम र दोषहीन हुन्छ ।

### बृष्ट्यभाव (खडेरी) दोष

यत्र चेदाश्विने मासि नैव वर्षति वारिदः ।
गाङ्गतोयविहीने स्युः काले तत्राधिका रुजः ॥७९॥

असोज महिनामा पानी परेन र गाङ्ग-जल विहीन अवस्था आयो भने अनेक प्रकारका रोगहरू फैलन्छन् ।

### जलसेवन सामान्य नियम

क्वचिदुष्णं क्वचिच्छीतं क्वचित् क्वथितशीतलम् ।
क्वचिद्भेषजसंयुक्तं न क्वचिद्वारि वार्यन्ते ॥८०॥

कहिले तातो, कहिले चिसो, कहिले उमालेर सेलाएको त कहिले ओखती मिसाइएको पानी पिउने गरिन्छ । पानीलाई कतै र कहिल्यै पनि पिउन निषेध गरिन्न ।

### उखु

इक्षवः पञ्चधा प्रोक्ता नानावर्णगुणान्विताः ।
सितः पुण्ड्रः करङ्केक्षुः कृष्णो रक्तश्च ते क्रमात् ॥८१॥

**इक्षुः कर्कटको वंशः कान्तारः सुकुमारकः ।**
**असिपत्रो मधुतृणो वृष्यो गुडतृणो नव ॥८२॥**

सेतो, पुण्ड्र, करङ्क, कालो र रातो गरी अनेक रङ र गुण भएका पाँच प्रकारका उखु हुन्छन् । (१) इक्षु, (२) कर्कटक, (३) वंश, (४) कान्तार, (५) सुकुमारक, (६) असिपत्र, (७) मधुतृण, (८) वृष्य र (९) गुडतृण : यी नौ वटा नाम उखुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### सेतो उखु

**श्वेतेक्षुस्तु सितेक्षुः स्यात् काष्ठेक्षुर्वंशपत्रकः ।**
**सुवंशः पाण्डुरेक्षुश्च काण्डेक्षुर्धवलेक्षुकः ॥८३॥**
**सितेक्षुः कठिनो रुच्यो गुरुश्च कफमूत्रकृत् ।**
**दीपनः पित्तदाहघ्नो विपाके कोष्णदः स्मृतः ॥८४॥**

श्वेतेक्षु, सितेक्षु, काष्ठेक्षु, वंशपत्रक, सुवंश, पाण्डुरेक्षु, काण्डेक्षु र धवलेक्षुक : यी सेतो उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु कडा, रुचिप्रद, पचाउन कठिन तथा कफविकार गर्ने र धेरै पिसाब लगाउने गुणको हुन्छ । यो दीपनी, पित्तविकार नाशक, डाह नाशक र पचेपछि उष्णवीर्यको हुन्छ ।



### पुण्ड्र-उखु

**पुण्ड्रकस्तु रसालः स्याद्रसेक्षुः सुकुमारकः ।**
**कर्बुरो मिश्रवर्णश्च नेपालेक्षुश्च सप्तधा ॥८५॥**
**पुण्ड्रोऽतिमधुरः शीतः कफकृत् पित्तनाशनः ।**
**दाहश्रमहरो रुच्यो रसे सन्तर्पणः परः ॥८६॥**

(१) पुण्ड्रक, (२) रसाल, (३) रसेक्षु, (४) सुकुमारक, (५) कर्बुर, (६) मिश्रवर्ण र (७) नेपालेक्षु : यी सात नाम पुण्ड्र-उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु अति गुलियो, शीतवीर्यको, कफविकार गर्ने, पित्तविकार नाशक, डाह र थकाई नाशक, रुचिप्रद र अति नै तृप्तिदायक रस भएको हुन्छ ।

### करङ्क-उखु

**अन्यः करङ्कशालिः स्यादिक्षुवाटीक्षुवाटिका ।**
**यावनी चेक्षुयोनिश्च रसाली रसदालिका ॥८७॥**

करङ्कशालिर्मधुरः शीतलो रुचिकृन्मृदुः ।
पित्तदाहहरो वृष्यस्तेजोबलविवर्धनः ॥८८॥

करङ्कशालि, इक्षुवाटी, इक्षुवाटिका, यावनी, इक्षुयोनि, रसाली र रसदालिका : यी करङ्क-उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु गुलियो, शीतवीर्यको, रुचिवर्धक, नरम, पित्तविकार र डाह नाशक तथा वीर्य, तेज र बल बढाउने गुणको हुन्छ ।

कालो-उखु

कृष्णेक्षुरिक्षुरः प्रोक्तः श्यामेक्षुः कोकिलाक्षकः ।
श्यामवंशः श्यामलेक्षुः कोकिलेक्षुश्च कथ्यते ॥८९॥
कृष्णेक्षुरुक्तो मधुरश्च पाके स्वादुः सुहृद्यः कटुको रसाढ्यः ।
त्रिदोषहारी शमवीर्यदश्च सुबल्यदायी बहुवीर्यदायी ॥९०॥

कृष्णेक्षु, इक्षुर, श्यामेक्षु, कोकिलाक्षक, श्यामवंश, श्यामलेक्षु र कोकिलेक्षु : यी कालो उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु गुलियो र पचेपछि गुलियो, मुटुका लागि लाभदायक, पिरो र धेरै रस भएको हुन्छ । यसले त्रिदोष नाश गर्दछ । यो बराबर वीर्य (उष्ण र शीत) भएको, राम्रोसँग बल दिने र धेरै वीर्यवर्धक हुन्छ ।



रातो उखु

रक्तेक्षुः सूक्ष्मपत्रश्च शोणो लोहित उत्कटः ।
मधुरो ह्रस्वमूलश्च लोहितेक्षुश्च कीर्तितः ॥९१॥
लोहितेक्षुश्च मधुरः पाके स्याच्छीतलो मृदुः ।
पित्तदाहहरो वृष्यस्तेजोबलविवर्धनः ॥९२॥

रक्तेक्षु, सूक्ष्मपत्र, शोण, लोहित, उत्कट, मधुर, ह्रस्वमूल र लोहितेक्षु : यी रातो उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो उखु पनि गुलियो र पचेपछि शीतवीर्यको र नरम हुन्छ । यसले पित्तविकार र डाह नाश गर्दछ तथा वीर्य, तेज र बल बढाउँदछ ।

उखुको जरा

इक्षुमूलं त्विक्षुनेत्रं तच्च मोरटकं तथा ।
वंशनेत्रं वंशमूलं मोरटं वंशपूरकम् ॥९३॥

इक्षुमूल, इक्षुनेत्र, मोरटक, वंशनेत्र, वंशमूल, मोरट र वंशपूरक : यी उखुको जराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## उखुको विभिन्न भागको स्वाद

**मूलादर्ध्वन्तु मधुरा मध्येऽतिमधुरास्तथा ।**
**इक्षवस्तेऽग्रभागेषु क्रमाल्लवणनीरसाः ॥९४॥**

उखुको जराभन्दा माथि गुलियो, बीचको भाग धेरै गुलियो तथा टुप्पो क्रमशः नुनिलो र रसहीन हुन्छ ।

## उखुको रस पिउने समय

**अभुक्ते पित्तघ्नाश्चैते भुक्ते वातप्रकोपणाः ।**
**भुक्तमध्ये गुरुतरा इतीक्षूणां गुणास्त्रयः ॥९५॥**

खाना खानु अघि खाइएको उखुको रस पित्तविकार नाशक, खाना खाएपछि खाइएको उखुको रस वातविकार गर्ने र खाना खाँदा बीचमा खाइएको उखुको रस पचाउन कठिन हुन्छ । यी उखुका तीन गुण हुन् ।



## चुसिएको उखुको रसका गुण

**वृष्यो रक्तास्रपित्तश्रमशमनपटुः शीतलः श्लेष्मदोऽल्पः**
**स्निग्धो हृद्यश्च रुच्यो रचयति च मुदं मूत्रशुद्धिं विधत्ते ।**
**कान्तिं देहस्य दत्ते बलमति कुरुते बृंहणं तृप्तिदायी**
**दन्तैर्निष्पीड्य काण्डं मृदुयति रसितो मोहनश्चेक्षुदण्डः ॥९६॥**
**पीयूषोपमितं त्रिदोषशमनं स्याद्दन्तनिष्पीडितं**
**तद्वच्चेद्गृहयन्त्रजं तदपरं श्लेष्मानिलघ्नं कियत् ।**
**एतद्वातहरं तु वातजननं जाड्यप्रतिश्यायदं**
**प्रोक्तं पर्युषितं कफानिलकरं पानीयमिक्षूद्भवम् ॥९७॥**

दाँतले चपाएर चुसी खाएको उखु वीर्यवर्धक तथा रक्तविकार, रक्तपित्त र थकाई शान्त पार्ने जस्ता राम्रा गुणको हुन्छ । यो शीतवीर्यको हुन्छ र यसले थोरै कफविकार पनि गर्दछ । यस्तो उखुको रस चिल्लो, मुटुका लागि हितकर, रुचिप्रद, सन्तोषजनक र पिसाबलाई शुद्ध बनाउने गुणको हुन्छ । यो रसले शरीरको चमक बढाउँदछ र अति नै बल दिन्छ । यो पौष्टिक र तृप्तिदायक हुन्छ । उखुको

गँडेलाई दाँतले चपाएर रस चुस्दा सन्तोष र आनन्द प्राप्त हुन्छ । दाँतले चपाएर चुसिएको उखु अमृत समान त्रिदोष नाशक हुन्छ । त्यसैगरी घरेलु यन्त्रमा पेलिएको उखुको रसमा पनि यिनै गुण हुन्छन् । अन्य तरिकाबाट निकालिएको उखुको रसले थोरै मात्रामा कफविकार र वातविकार नाश गर्दछ । वातनाशक भएपनि यस्तो रसले वातविकार गर्न र पिनास लगाउन सक्दछ । बासी उखुको रसले कफविकार र वातविकार गर्दछ भनिएको छ ।

## जुनेलोको बोटको रस (?)

**मधुरं लवणक्षारं स्निग्धं सोष्णं रुचिप्रदम् ।**
**वृष्यं वातकफघ्नं च यावनालेक्षुजं जलम् (यावनालशरात् रसम्) ॥९८॥**

जुनेलोको बोटको रस गुलियो, नुनिलो, क्षारयुक्त, चिल्लो, उष्णवीर्यको र रुचिप्रद हुन्छ । यो रस र वीर्यवर्धक तथा वातविकार र कफविकार नाशक हुन्छ ।

## पाकेको उखुको रस

**पक्वेक्षुरसः स्निग्धः स्यात् कफवातनाशनोऽतिगुरुः ।**
**अतिपाकेन विदाहं तनुते पित्तास्रदोषशोषांश्च ॥९९॥**



पाकेको उखुको रस चिल्लो, कफविकार र वातविकार नाशक तथा पचाउन अति कठिन हुने गुणको हुन्छ । धेरै पाकेको उखुको रसले डाह, पित्तविकार, रक्तविकार र सुकेनास गराउँदछ ।

## खुँदो (गुड)

**गुडः स्यादिक्षुसारश्च मधुरो रसपाकजः ।**
**शिशुप्रियः सितादिः स्यादरुणो रसजः स्मृतः ॥१००॥**
**पित्तघ्नः पवनार्तिजिद्रुचिकरो हृद्यस्त्रिदोषापहः**
**संयोगेन विशेषतो ज्वरहरः सन्तापशान्तिप्रदः ।**
**विण्मूत्रामयशोधनोऽग्निजननः पाण्डुप्रमेहान्तकः**
**स्निग्धः स्वादुतरो लघुः श्रमहरः पथ्यः पुराणो गुडः ॥१०१॥**

गुड, इक्षुसार, मधुर, रसपाकज, शिशुप्रिय, सितादि, अरुण र रसज : यी खुँदोका संस्कृत पर्यायवाची नामहरू हुन् । पुरानो खुँदो पित्तविकार नाशक, वातविकारलाई जित्ने, रुचिकर, मुटुका लागि लाभदायक, त्रिदोष नाशक, अरु ओखतीमा मिसिएपछि विशेषत ज्वर नाशक, डाहलाई शान्त पार्ने तथा मल र मूत्रका रोगलाई शुद्ध बनाउने गुणको हुन्छ । यसले जठराग्निलाई बाल्दछ

तथा पाण्डु र प्रमेहलाई नाश गर्दछ । यो चिल्लो, अति स्वादिलो, पचाउन सहज, थकाइ नाशक र पथ्य हुन्छ ।

## जुनेलोको खुँदो

**स्याद्यावनालरसपाकभवो गुडोऽयं क्षारः कटुः सुमधुरः कफवातहारी ।**
**पित्तप्रदः सततमेष निषेव्यमाणः कण्डूतिकुष्ठजननोऽस्रविदाहहारी ॥१०२॥**

जुनेलोको खुँदो क्षारयुक्त, पिरो, खूब मिठो तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले पित्तविकार गर्दछ । लामो समयसम्म खानाले यसले चिलाउने रोग र कुष्ठरोग गराउँदछ तर रक्तविकारजन्य डाहलाई नाश गर्दछ ।

## चिनी (शर्करा)

**शर्करोक्ता तु मीनाण्डी श्वेता मत्स्यण्डिका च सा ।**
**अहिच्छत्रा तु सिकता सिता चैव गुडोद्भवा ॥१०३॥**
**शर्करा मधुरा शीता पित्तदाहश्रमापहा ।**
**रक्तदोषहरा भ्रान्तिक्रिमिकोपप्रणाशिनी ॥१०४॥**

शर्करा, मीनाण्डी, श्वेता, मत्स्यण्डिका, अहिच्छत्रा, सिकता, सिता र गुडोद्भवा : यी चिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । चिनी गुलियो, शीतवीर्यको तथा पित्तविकार, डाह, थकाई, रक्तविकार, भ्रम र कीराको प्रकोप नाशक हुन्छ ।

## विभिन्न जातका उखुको चिनीका गुण

**स्निग्धा पुण्ड्रकशर्करा हितकरी क्षीणे क्षयेऽरोचके**
**चक्षुष्या बलवर्धिनी सुमधुरा रूक्षा च वंशेक्षुजा ।**
**वृष्या तृप्तिबलप्रदा श्रमहरा श्यामेक्षुजा शीतला**
**स्निग्धा कान्तिकरी रसालजनिता रक्तेक्षुजा पित्तजित् ॥१०५॥**

पुण्ड्रकको चिनी सुकेनाश, क्षयरोग र अरुचीमा हितकर हुन्छ । वंशेक्षुको चिनी आँखाका लागि हितकर, बलबर्धक, गुलियो र रुखो हुन्छ । श्यामेक्षुको चिनी वीर्यवर्धक, तृप्तिदायक, बलप्रदायक, थकाई नाशक र शीतवीर्यको हुन्छ । रक्तेक्षुको चिनी चिल्लो र शरीर चम्काउने गुणको हुन्छ । यो चिनीले पित्तविकारलाई जित्दछ ।

### जुनेलोको चिनी

**यावनाली हिमोत्पन्ना हिमानी हिमशर्करा ।**
**क्षुद्रशर्करिका क्षुद्रा गुड्गुडा जालबिन्दुजा ॥१०६॥**
**हिमजा शर्करा गौल्या सोष्णा तिक्तातिपिच्छिला ।**
**वातघ्नी सारिका रुच्या दाहपित्तास्रदायिनी ॥१०७॥**

यावनाली, हिमोत्पन्ना, हिमानी, हिमशर्करा, क्षुद्रशर्करिका, क्षुद्रा, गुड्गुडा र जालबिन्दुजा : यी जुनेलोको चिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो चिनी गुलियो, उष्णवीर्यको, तीतो र अति लेस्याइलो हुन्छ । यसले वातविकार नाश गर्दछ । यो मलमूत्रलाई तलतिर सार्ने, रुचिप्रद तथा डाह, पित्तविकार र रक्तविकार गर्ने गुणको हुन्छ ।

### मिश्री (सिताखण्ड)

**सितजाऽन्या शर्करजा माधवी मधुशर्करा ।**
**माक्षीकशर्करा प्रोक्ता सिताखण्डश्च खण्डकः ॥१०८॥**
**सिताखण्डोऽतिमधुरश्चक्षुष्यछर्दिनाशनः ।**
**कुष्ठव्रणकफश्वासहिक्कापित्तास्रदोषनुत् ॥१०९॥**

सितजा, शर्करजा, माधवी, मधुशर्करा, माक्षीकशर्करा, सिताखण्ड र खण्डक : यी मिश्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । मिश्री अति गुलियो, आँखाका लागि हितकर र वाकवाकी नाशक हुन्छ । यसले कुष्ठ, घाउखटिरा, कफविकार, दम, बाडुली, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

### दुरालभाको चिनी

**यवासशर्करा त्वन्या सुधा मोदकमोदकः ।**
**तवराजः खण्डसारः खण्डजा खण्डमोदकः ॥११०॥**
**तवराजोऽतिमधुरः पित्तश्रमतृषापहः ।**
**वृष्यो विदाहमूर्छार्ति भ्रान्तिशान्तिकरः सरः ॥१११॥**

यवासशर्करा, सुधा, मोदकमोदक, तवराज, खण्डसार, खण्डजा र खण्डमोदक : यी दुरालभाको चिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति गुलियो तथा पित्तविकार, थकाई र तिर्खा नाशक हुन्छ । यो चिनी वीर्यवर्धक, डाह र बेहोसीपना नाशक, भ्रमलाई शान्त पार्ने र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**ओलमिश्री**

**तवराजोद्भवः खण्डः सुधा मोदकजस्तथा ।**
**खण्डजो द्रवजः सिद्धमोदकामृतसारजः ॥११२॥**
**दाहं निवारयति तापमपाकरोति तृप्तिं नियच्छति निहन्ति च मोहमूर्छाम् ।**
**श्वासं निवारयति तर्पयतीन्द्रियाणि शीतः सदा सुमधुरः खलु सिद्धिखण्डः ॥११३॥**

तवराजोद्भव, खण्ड, सुधा, मोदकज, खण्डज, द्रवज, सिद्धमोदक र अमृतसारज : यी ओलमिश्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले डाहलाई रोक्दछ, जरोलाई धपाउँदछ, तृप्ति दिन्छ तथा मोह र बेहोसीपनलाई नाश गर्दछ । यसले दमलाई रोक्दछ र इन्द्रियलाई तृप्त पार्दछ । यो शीतवीर्यको र सधैं गुलियो हुने गुणको हुन्छ ।

**मह (मधु)**

**महका पर्यायवाची नामहरू :**

**मधु क्षौद्रं च माक्षीकं माक्षिकं कुसुमासवम् ।**
**पुष्पासवं पवित्रञ्च पित्र्यं पुष्परसाह्वयम् ॥११४॥**

मधु, क्षौद्र, माक्षीक, माक्षिक, कुसुमासव, पुष्पासव, पवित्र, पित्र्य र पुष्परस : यी महका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**महका प्रकार**

**माक्षिकं भ्रामरं क्षौद्रं पौत्तिकं छात्रकं तथा ।**
**आर्घ्यमौद्दालकं दालमित्यष्टौ मधुजातयः ॥११५॥**

माक्षिक, भ्रामर, क्षौद्र, पौत्तिक, छात्रक, आर्घ्य, औद्दालक र दाल : यी आठ थरी महका नामहरू हुन् ।

**माक्षिक मह**

**नानापुष्परसाहाराः कपिला वनमक्षिकाः ।**
**याः स्थूलास्ताभिरुत्पन्नं मधुमाक्षिकमुच्यते ॥११६॥**

अनेक थरी फूलको रस बटुल्ने, रातो रङका वनमौरी हुन्छन् । यी ठूला हुन्छन् र यस्ता मौरीको महलाई "मधुमाक्षिक" भनिन्छ ।

**भ्रामर मह**

**ये स्निग्धाञ्जनगोलाभाः पुष्पासवपरायणाः ।**
**भ्रमरैर्जनितं तैस्तु भ्रामरं मधु भण्यते ॥११७॥**

चिल्ला, काला, गोलाकार र फूलको रस मन पराउने भमरा जस्ता मौरीको महलाई "भ्रामर मधु" भनिन्छ ।

**क्षौद्र मह**

**पिङ्गला मक्षिकाः सूक्ष्माः क्षुद्रा इति हि विश्रुताः ।**
**ताभिरुत्पादितं यत्तु तत् क्षौद्रं मधु कथ्यते ॥११८॥**

कैलो रङका साना मौरीलाई क्षुद्र मौरी भनिन्छ । यिनले उत्पादन गरेको महलाई "क्षौद्र मधु" भनिन्छ ।



**पौत्तिक मह**

**अन्नजा मक्षिकाः पिङ्गाः पुत्तिका इति कीर्तिताः ।**
**तज्जातं मधु धीमद्भिः पौत्तिकं समुदाहृतम् ॥११९॥**

अनाजबाट उत्पन्न हुने पहेँला मौरीलाई पुत्तिका भनिन्छ । विद्वानहरूले यस्ता मौरीबाट उत्पादन हुने महलाई "पौत्तिक" भनेका छन् ।

**छात्रक मह**

**छत्राकारन्तु पटलं सरघाः पीतपिङ्गलाः ।**
**यत् कुर्वन्ति तदुत्पन्नं मधु छात्रकमीरितम् ॥१२०॥**

पहेँलो-कैलो रङका हुने र रूखमा छाता आकारका झुण्डिएका घार बनाउने मौरीको महलाई "छात्रक" भनिन्छ ।

### आर्घ्य मह

**मक्षिकास्तीक्ष्णतुण्डा यास्तथा षट्पदसन्निभाः ।**
**तदुद्भूतं यदर्घार्हं तदार्घ्यं मधु वर्ण्यते ॥१२१॥**

तिखो थुतुनु हुने भमरा जस्ता (ठुला) मौरीलाई आर्घ्य (आर्घा) भनिन्छ । यस्ता मौरीको महलाई "आर्घ्य मधु" भनिन्छ ।

### औद्दालक मह

**औद्दालाः कपिलाः कीटा भूमेरुद्दलनाः स्मृताः ।**
**वल्मीकान्तस्तदुत्पन्नमौद्दालकमुदीर्यते ॥१२२॥**

कैलो रङ्का माटो भित्र बस्ने कीरालाई औद्दाल भनिन्छ । धमिराको गोलो जस्तो घार बनाउने यस्ता कीराको महलाई "औद्दालक" भनिन्छ ।

### दाल मह



**इन्द्रनीलदलाकाराः सूक्ष्माश्चिन्वन्ति मक्षिकाः ।**
**यद्वृक्षकोटरान्तस्थं मधु दालमिदं स्मृतम् ॥१२३॥**

नीलमणि जस्तो चम्किलो नीलो रङ्का अति साना मौरीले रूखका टोड्कामा घार बनाई जम्मा गर्ने महलाई "दाल मधु" भनिन्छ ।

**इत्येतस्याष्टधा भेदैरुत्पत्तिः कथिता क्रमात् ।**
**अथ वक्ष्याम्यहं तेषां वर्णवीर्यादिकं क्रमात् ॥१२४॥**

यसरी आठ प्रकारका मह र यसको उत्पत्तिका बारेमा क्रमैले बताइयो । अब यसपछि म ती महको रङ, वीर्य आदि क्रमैले बताउँदछु ।

### जात अनुसार महको रङ

**माक्षिकं तैलवर्णं स्यात् श्वेतं भ्रामरमुच्यते ।**
**क्षौद्रन्तु कपिलाभासं पौत्तिकं घृतसन्निभम् ॥१२५॥**
**आपीतवर्णं छात्रं स्यात् पिङ्गलं चार्घ्यनामकम् ।**

**औद्दालं स्वर्णसदृशमापीतं दालमुच्यते॥१२६॥**

माक्षिक-मह तेल जस्तो रङ्को, भ्रामर सेतो, क्षौद्र रातो र चहकिलो, पौत्तिक घिउ रङ्को, छात्र पहेँलो, आर्घ्य कैलो, औद्दाल सुनजस्तो र दाल-मह पहेँलो रङ्को हुन्छ ।

**जात अनुसार महको स्वाद र गुण**

**माक्षिकं मधुरं रूक्षं लघु श्वासादिदोषनुत् ।**
**भ्रामरं पिच्छिलं रूक्षं मधुरं मुखजाड्यजित्॥१२७॥**
**क्षौद्रं तु शीतं चक्षुष्यं पिच्छिलं पित्तवातहृत् ।**
**पौत्तिकं मधु रूक्षोष्णमस्रपित्तादिदाहकृत्॥१२८॥**
**श्वित्रमेहक्रिमिघ्नञ्च विद्याच्छात्रं गुणोत्तरम् ।**
**आर्घ्यमध्वतिचक्षुष्यं कफपित्तादिदोषहृत्॥१२९॥**
**औद्दालकन्तु कुष्ठादिदोषघ्नं सर्वसिद्धिदम् ।**
**दालं कटु कषायाम्लं मधुरं पित्तदायि च॥१३०॥**

माक्षिक मधु गुलियो, रुखो, पचाउन सहज तथा दम आदि रोग नाशक हुन्छ । भ्रामर मधु लेस्याइलो, रुखो, गुलियो तथा मुखका रोगलाई जित्ने गुणको हुन्छ । क्षौद्र मह शीतवीर्यको, आँखाका लागि हितकर, लेस्याइलो तथा पित्तविकार र वातविकार नाशक हुन्छ । पौत्तिक मधु रुखो, उष्णवीर्यको तथा रक्तपित्त र डाह गराउने गुणको हुन्छ । छात्र मह सेतोकुष्ठ, प्रमेह र कीरा नाशक हुने हुनाले बढी गुनिलो हुन्छ । आर्घ्य मधु आँखाका लागि अति नै हितकर हुन्छ तथा यसले कफविकार, पित्तविकार आदि विकार नाश गर्दछ । औद्दालक मधु कुष्ठ आदि रोग नाशक एवं सबै सिद्धि प्रदायक हुन्छ । दाल मधु पिरो, टर्रो, अमिलो, गुलियो र पित्तविकार गराउने गुणको हुन्छ ।



**नयाँ र पुरानो महका गुण**

**नवं मधु भवेत् स्थौल्यं नातिश्लेष्मकरं परम् ।**
**देहस्थौल्यापहं ग्राहि पुराणं मधु लेखनम्॥१३१॥**

ताजा मह शरीरलाई मोटो बनाउने र धेरै कफविकार पनि नगर्ने गुणको हुन्छ । तर पुरानो मह शरीरलाई दुब्लो बनाउने, ग्राहि र लेखनी हुन्छ ।

## महका गुण

**पक्वं दोषत्रयघ्नं मधु विविधरुजाजाड्यजिह्वाऽऽमयादि-**
**ध्वंसं धत्ते च रुच्यं बलमतिधृतिदं वीर्यवृद्धिं विधत्ते ।**
**आमं चेदामगुल्मामयपवनरुजापित्तदाहास्रदोषं**
**हन्याद्वातञ्च शोषं जनयति नियतं ध्वंसयत्यन्त्रवृद्धिम् ॥१३२॥**

पाकेको (काढ्ने बेला भएको) महले त्रिदोष र जिभ्रोको लाटोपन आदि अनेक प्रकारका रोग नाश गर्दछ । यसले रुची जगाउँदछ र बल दिन्छ । यो महले धेरै धैर्यता दिन्छ र वीर्य पनि बढाउँदछ । काँचो (काढ्ने बेला नभएको) महले आमविकार, गुल्म, वातविकार, पित्तविकार, डाह र रक्तविकार नष्ट गराउँदछ । यस्तो महले वातविकार नाश गर्दछ तथा शरीरलाई सुकाउँदछ । यो मह हर्निया नाशक हुन्छ ।

**व्रणशोधनसन्धाने व्रणसंरोपणादिषु ।**
**साधारण्या मधु हितं तत्तुल्या मधुशर्करा ॥१३३॥**

घाउखटिरा सफा गर्न र भर्न सामान्यत मह हितकारी हुन्छ । चिनीको मह पनि यस सम्बन्धमा मह समान गुणकै हुन्छ । 

**उष्णैः सहोष्णकाले वा स्वयमुष्णमथापि वा ।**
**आमं मधु मनुष्याणां विषवत्तापदायकम् ॥१३४॥**

तातो कुरासँग खाइएको वा गर्मी समयमा काढिएको वा तातेको काँचो महले मानिसलाई विषले जसरी डाह गराउँदछ ।

**कीटकादियुतमम्लदूषितं यच्च पर्युषितकं मधु स्वतः ।**
**कण्टकोटरगतञ्च मेचकं तच्च गेहजनितञ्च दोषकृत् ॥१३५॥**
**दण्डैनिहत्य यदुपात्तमापास्तदंशं तादृग्विधं मधु रसायनयोगयोग्यम् ।**
**हिक्कागुदाङ्कुरत्रिशोफकफव्रणादिदोषापहं भवति दोषदमन्यथा चेत् ॥१३६॥**

कीरा आदि वा अमिलो परेर दूषित भएको, (धेरै) बासी, काँडा परेको र रूखका टोड्काबाट काढिएको तथा घरपालुवा मौरीको कालो मह दोषकारक हुन्छ । मौरीको डसाइबाट बच्दै लौरो आदिले हिर्काएर सोझै प्राप्त गरिने मह रसायन-योग (मिसाएर ओखती बनाउने कार्य) का लागि योग्य हुन्छ । यस्तो महले बाडुली, अल्काई, सुजन, कफविकार र घाउखटिरा आदि रोग नाश गर्दछ । अन्यथा भए त्यो मह दोषकारी हुन्छ ।

## चिनीको मह वा महको चिनी (मधुशर्करा)

**माध्वी सिता मधूत्पन्ना मधुजा मधुशर्करा ।**
**माक्षीकशर्करा चैषा क्षौद्रजा क्षौद्रशर्करा ॥१३७॥**
**यद्गुणं यन्मधु प्रोक्तं तद्गुणा तस्य शर्करा ।**
**विशेषाद्बलवृष्यं च तर्पणं क्षीणदेहिनाम् ॥१३८॥**

माध्वी, सिता, मधूत्पन्ना, मधुजा, मधुशर्करा, माक्षीकशर्करा, क्षौद्रजा र क्षौद्रशर्करा : यी महको चिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । महमा जेजस्ता गुण हुन्छन् त्यसको चिनीमा पनि तिनै गुण हुन्छन् । यो विशेष गरी बल वीर्यदायक तथा दुब्लो मानिसका लागि तृप्तिकारक हुन्छ ।

## मद्य

**मद्यं सुरा प्रसन्ना स्यान्मदिरा वारुणी वरा ।**
**मत्ता कादम्बरी शीता चपला कामिनी प्रिया ॥१३९॥**
**मदगन्धा माध्वीकं मधु सन्धानमासवः ।**
**परिमृ(सृ)ताऽमृता वीरा मेधावी मदनी च सा ॥१४०॥**
**सुप्रतिभा मनोज्ञा च विपाना मोदिनी तथा ।**
**हालाहलगुणाऽरिष्टं सरकोऽथ मधूलिका ॥**
**मदोत्कटा महानन्दा द्वात्रिंशदभिधाः क्रमात् ॥१४१॥**

(१) मद्य, (२) सुरा, (३) प्रसन्ना, (४) मदिरा, (५) वारुणी, (५) वरा, (७) मत्ता, (८) कादम्बरी, (९) शीता, (१०) चपला, (११) कामिनी, (१२) प्रिया, (१३) मदगन्धा, (१४) माध्वीक, (१५) मधु, (१६) सन्धान, (१७) आसव, (१८) परिमृ(सृ)ता, (१८) अमृता, (२०) वीरा, (२१) मेधावी, (२२) मदनी, (२३) सुप्रतिभा, (२४) मनोज्ञा, (२५) विपाना, (२६) मोदिनी, (२७) हालाहलगुणा, (२८) अरिष्ट, (२९) सरक, (३०) मधूलिका, (३१) मदोत्कटा र (३२) महानन्दा : यी बत्तीस वटा नाम मदिराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## मद्यका गुण

**मद्यं सुमधुराम्लं च कफमारुतनाशनम् ।**
**बलदीप्तिकरं हृद्यं सरमेतन्मदावहम् ॥१४२॥**

मदिरा गुलियो र अमिलो स्वादको हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ, बल र तेज

बढाउँदछ, मुटुलाई फाइदा गर्दछ, मलमूत्रलाई तलतिर सार्दछ तथा नसा लगाउँदछ ।

### गौडी, माध्वी, पैष्टी आदि मदिरा

**स्याद्धातकीरसगुडादिकृता तु गौडी पुष्पद्रवादिमधुसारमयी तु माध्वी ।**
**पैष्टी पुनर्विविधधान्यविकारजाता ख्याता मदाधिकातयाऽत्र च पूर्वपूर्वा ॥१४३॥**
**तालादिरसनिर्यासैः सैन्धीं हालां सुरां जगुः ।**
**नानाद्रव्यकदम्बेन मद्यं कादम्बरं स्मृतम् ॥**
**सैन्धी कादम्बरी चैव द्विविधं मद्यलक्षणम् ॥१४४॥**

धयैँरोको रसमा खुँदो हाली बनाइने मदिरालाई गौडी तथा फूल आदि हालेर बनाइने मदिरालाई माध्वी भनिन्छ । अनेक प्रकारका अनाजमा विकार उत्पन्न गरी बनाइने मदिरालाई पैष्टी भनिन्छ । यी तीन थरी मदिराहरू क्रमशः पहिला पहिलाका नसालु हुन्छन् । ताड आदि अनेक थरी रस मिसाएर तयार पारिने मदिरालाई सैन्धी र कदम आदि अनेक पदार्थ मिसाएर बनाइने मदिरालाई कादम्बरी भनिन्छ । सैन्धी र कादम्बरी गरी दुई थरी लक्षण (प्रकार) नै मदिराका लक्षण हुन् ।

### गौडी मदिरा



**गौडी तीक्ष्णोष्णमधुरा वातहृत्पित्तकारिणी ।**
**बलकृद्दीपनी पथ्या कान्तिकृत्तर्पणी परा ॥१४५॥**

गौडी तिक्खर, उष्णवीर्यको, गुलियो, वातविकार नाशक र पित्तविकार गर्ने गुणको हुन्छ । यो बलदायक, दीपनी, पथ्य, कान्तिदायक र अत्यन्त तृप्तिदायक हुन्छ ।

### माध्वी मदिरा

**माध्वी तु मधुरा हृद्या नात्युष्णा पित्तवातहृत् ।**
**पाण्डुकामलगुल्मार्शःप्रमेहशमनी परा ॥१४६॥**

माध्वी गुलियो, मुटुका लागि हितकर, कम उष्णवीर्यको तथा पित्तविकार र वातविकार नाशक हुन्छ । यसले विशेषत पाण्डु, कमलपित्त, गुल्म, अल्काई र प्रमेहलाई शान्त पार्दछ ।

### पैष्टी मदिरा

**पैष्टी कटूष्णा स्यान्मधुरा दीपनी परा ॥१४७॥**

पैष्टी पिरो, उष्णवीर्यको, गुलियो र अत्यन्त दीपनी हुन्छ ।

### सैन्धी मदिरा

**सैन्धी शीता कषायाम्ला पित्तहृद्वातदा च सा ॥१४८॥**

सैन्धी शीतवीर्यको, टर्रो, अमिलो, पित्तविकार नाशक र वातविकार गराउने गुण भएको हुन्छ ।

### ऋतु अनुसार पिउने मदिरा

**गौडी तु शिशिरे पेया पैष्टी हेमन्तवर्षयोः ।**
**शरद्ग्रीष्मवसन्तेषु माध्वी ग्राह्या न चान्यथा ॥१४९॥**

शिशिर ऋतुमा गौडी, हेमन्त र वर्षा ऋतुमा पैष्टी तथा शरद्, ग्रीष्म र वसन्त ऋतुमा माध्वी पिउनु उपयुक्त हुन्छ, अन्यथा नगर्नू ।

### कादम्बरी र माध्वी मदिरा



**कादम्बरीशर्करजादि मद्यं सुशीतलं वृष्यकरं मदाढ्यम् ।**
**माध्वीसमं स्यात्तृणवृक्षजातं मद्यं सुशीतं गुरु तर्पणञ्च ॥१५०॥**

चिनी आदि हाली बनाइने कादम्बरी नामक मदिरा शीतल गर्ने, वीर्यवर्धक र अधिक नसालु हुन्छ । खजुर, नरिवल आदिजस्ता तृणवृक्षबाट बनाइने माध्वी नामक मदिरा शीतल गर्ने, पचाउन कठिन र तृप्तिदायक हुन्छ ।

### ताडी आदि

**सर्वेषां तृणवृक्षाणां निर्यासं शीतलं गुरु ।**
**मोहनं बलकृद्वृष्यं तृष्णासन्तापनाशनम् ॥१५१॥**

सबै खालका तृणवृक्ष (नरिवल, सुपारी, ताड आदि) को चोप (वा मदिरा) शीतल गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ । यसले मोहनी लगाउँदछ, बल र वीर्य बढाउँदछ तथा तिर्खा र डाह नाश गर्दछ ।

### उखु र जौको मदिरा

**ऐक्षवं तु भवेन्मद्यं शिशिरञ्च मदोत्कटम् ।**
**यवधान्यकृतं मद्यं गुरु विष्टम्भदायकम् ॥१५२॥**

उखुको रसबाट बनाइने ऐक्षव नामक मदिरा शीतवीर्यको र अति नसालु हुन्छ । जौजन्य मदिरा पचाउन कठिन र कब्जियत गराउने गुणको हुन्छ ।

### चिनी आदिको मदिरा

**शर्कराधातकीतोये कृतं शीतं मनोहरम् ।**
**शार्करं कथ्यते मद्यं वृष्यं दीपनमोहनम् ॥१५३॥**

चिनी र धयैँरोको रस मिसाएर बनाइने मदिरा शीतवीर्यको र मनोहर हुन्छ । चिनीको मदिरालाई शार्कर भनिन्छ । यो मदिरा वीर्यवर्धक, दीपनी र मोहदायक हुन्छ ।

### नयाँ र पुरानो मदिरा



**मद्यं नवं सर्वविकारहेतुः सर्वन्तु वातादिकदोषदायि ।**
**जीर्णन्तु सर्वं सकलामयघ्नं बलप्रदं वृष्यकरञ्च दीपनम् ॥१५४॥**

नयाँ मदिरा सबै विकारको कारण हुन्छ, यस्ता सबै मदिराले वातविकार आदि विकार गर्दछन् । पुरानो मदिरा सबै सबैखालका रोग नाशक, बलदायक, वीर्यदायक र दीपनी हुन्छन् ।

### मद्यको प्रयोग

**मद्यप्रयोगं कुर्वन्ति शूद्रादिषु महार्तिषु ।**
**द्विजैस्त्रीभिस्तु न ग्राह्यं यद्यप्युज्जीवयेन्मृतम् ॥१५५॥**

सामान्यत शूद्र आदि कडा रोग लाग्दा मदिराको प्रयोग गर्दछन् । ब्राह्मण र स्त्रीले मर्न लाग्दा बाँचिन्छ भने पनि मदिरा नपिउनू ।

### मदिराको वर्गीकरण

**अन्ये द्वादशधा मद्यभेदानाहुर्मनीषिणः ।**

**उक्लेष्वन्तभेवन्तीति नान्यैस्तु पृथगीरिताः ॥१५६॥**

अन्य केही विद्वानले बाह्र प्रकारका मदिराका बारेमा बताएका छन् । ती सबै माथि बताइएका मदिराको वर्गीकरण भित्र पर्ने हुँदा छुट्टै वर्णन गरिएन ।

**वर्गप्रशस्ति**

**इत्थं वार्धिनदीनदह्रदसरःकुल्यादितीरान्तर-**
**प्रक्रान्तेक्षुगुडादिमाक्षिकभिदामद्यप्रभेदानपि ।**
**प्रागस्मात् प्रतिबुध्य नामगुणतो निर्णीतयोगौचिती**
**याथातथ्यवशाद्विनिश्चितमनाः कुर्वीत वैद्यः क्रियाम् ॥१५७॥**

यसरी यो अध्यायमा समुद्र, नदी, ताल, पोखरी, झर्ना, उखु, खुँदो, मह, मदिराका प्रकार आदिका नाम र गुणका बारेमा बताइएको छ । वैद्यले यी सबै कुरा राम्ररी अध्ययन गरी यी द्रव्यको प्रयोग मात्रा र समयका बारेमा निर्णय लिनू । वास्तविकता जानी निश्चित भएर गरिएको प्रयोगले नै तिनलाई आफ्नो क्षेत्रमा दक्ष र प्रसिद्ध बनाउँदछ ।

**यै रस्यामाना हि नृष्णां यथास्वं दोषान्निरस्यन्त्यपि दुर्निरासान् ।**
**तेषां रसानां वसतिः किलायं वर्गः प्रसिद्धो रसवर्गनाम्ना ॥१५८॥**



यो अध्याय त्यस्ता रस वा तरल पदार्थको वासस्थान हो जसको अध्ययन गर्नाले सजिलै हटाउन नसकिने कडा खालका रोगलाई पनि बाहिर निकाल्न सकिन्छ । यसैकारण यो अध्यायलाई रस वर्ग पनि भनिएको हो ।

**निस्पन्दं दुग्धसिन्धावमृतामय समस्तौषधीनां न दोहं**
**तापाहं नो चिकित्सामभिलषति रसं नापि दोषाकरस्य ।**
**लब्ध्वा यत्सौहृद्यं जगति बुधजनस्तेन वर्गः कृतोऽस्मिन्**
**पानीयादिः प्रसिद्धिं व्रजति मनुमितो नामगीमौलिरत्ने ॥१५९॥**

शब्दकोषका लेखकहरुको एक रत्नरूपी पानीयादि वर्ग नामक यो चौधौं अध्याय समाप्त भएको छ । क्षीरसागरमा अलमलिएको अमृत, चन्द्रमाका किरण र अन्तिम निर्णयमा पुग्न नसकेको औषधीको क्षेत्र : यी कसैले पनि गर्न नसकेको रोगको उपचार विद्वानहरूको असल हृदयको सहयोग लिएर म मात्र गर्न सक्दछु ।

**इति श्रीनरहरिपण्डितविरचिते निघण्टुराजे पानीयादिवर्गः चतुर्दशः ॥१४॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत पानीयादि नामक चौधौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१४।

## क्षीरादिवर्ग

### दूध

**क्षीरं पीयूषमूधस्यं दुग्धं स्तन्यं पयोऽमृतम्॥१॥**

क्षीर, पीयूष, ऊस्य, दुग्ध, स्तन्य, पय र अमृत : यी दूधका संस्कृत पर्यायवाची नामहरू हुन्।

### दही

**क्षीरजं दधि तद्रूप्यं विरलं मस्तु तज्जलम्॥२॥**

क्षीरज, दधि, तद्रूप्य र विरल : यी दहीका संस्कृत पर्यायवाची नामहरू हुन्। दहीको पानीलाई मस्तु भनिन्छ।

### नौनी

**दधिजं नवनीतं स्यात् सारो हैयङ्गवीनकम्॥३॥**

दधिज, नवनीत, सार र हैयङ्गवीनक : यी नौनीका संस्कृत पर्यायवाची नामहरू हुन्।

### घिउ

**घृतमाज्यं हविः सर्पिः पवित्रं नवनीतजम्।**
**अमृतं चाभिधारश्च होम्यमायुश्च तैजसम्॥४॥**

घृत, आज्य, हवि, सर्पि, पवित्र, नवनीतज, अमृत, अभिधार, होम्य, आयु र तैजस : यी घिउका संस्कृत पर्यायवाची नामहरू हुन्।

### स्नेह

**म्रक्षणं स्नेहनं स्नेहः स्निग्धता म्रक्ष एव च।**
**अभ्यङ्गोऽभ्यञ्जनञ्चैव चोपडश्च घृतादिकः॥५॥**

म्रक्षण, स्नेहन, स्नेह, स्निग्धता, म्रक्ष, अभ्यङ्ग, अभ्यञ्जन, चोपड र घृतादिक : यी चिल्लोका संस्कृत

पर्यायवाची नामहरू हुन् ।

### तक्र

**तक्रं गोरसजं घोलं कालशेयविलोडितम् ।**
**दण्डाहतमरिष्टोऽम्लमुदश्विन्मथितं द्रवः ॥६॥**

तक्र, गोरसज, घोल, कालशेय, विलोडित, दण्डाहत, अरिष्ट,अम्ल, उदश्वित्, मथित र द्रव : यी तक्रका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### तक्र, मस्तु आदिको परिभाषा

**तक्रं त्रिभागदधिसंयुतमम्बु धीरैरुक्तं दधिद्विगुणवारियुतन्तु मस्तु ।**
**दध्यम्भसी यदि समे तदुदश्विदाहुस्तत् केवलन्तु मथितं मुनयो वदन्ति ॥७॥**

तीन भाग दही र एक भाग पानी मिसाइएको पेयलाई तक्र, पानीभन्दा दोब्बर दही मिसाइएको पेयलाई मस्तु, पानी र दही बराबर मिसाइएको पेयलाई उदश्वित् र सामान्य तरिकाले मथिएको दहीलाई मथित भनिन्छ ।



### गहुँत र गोबर

**गोमूत्रं गोजलं गोम्भो गोनिष्यन्दश्च गोद्रवः ।**
**गोमयं गोपुरीषं स्याद्गोविष्ठा गोमलञ्च तत् ॥८॥**

गोमूत्र, गोजल, गोम्भ, गोनिष्यन्द र गोद्रव : यी गहुँतका तथा गोमय, गोपुरीष, गोविष्ठा र गोमल : यी गाईको गोबरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुग्धप्रद जन्तु

**गोमहिषीछागलाविकगजतुरगखरोष्ट्रमानुषस्त्रीणाम् ।**
**क्षीरादिकगुणदोषौ वक्ष्ये क्रमतो यथायोगम् ॥९॥**

गाई, भैंसी, बाख्री, भेडी, ढोई, घोडी, पोथी गधा, पोथी उँट र स्त्री : यी दूध प्रदान गर्ने जीवहरू हुन् । अब दूध आदिको गुण र दोषका बारेमा क्रमैले बताउँदछु । (सामान्यतः यी जीवको दूध मात्र मानिसले खाने गर्दछ) ।

**गाईको दूध**

**गव्यं क्षीरं पथ्यमत्यन्तरुच्यं स्वादु स्निग्धं पित्तवातामयघ्नम् ।**
**कान्तिप्रज्ञाबुद्धिमेधाङ्गपुष्टिं धत्ते स्पष्टं वीर्यवृद्धिं विधत्ते ॥१०॥**

गाईको दूध पथ्य, अत्यन्त रुचिप्रद, स्वादिलो, चिल्लो, पित्तविकार नाशक, वातविकार नाशक तथा शरीरको चमक, ज्ञान, बुद्धि, दिमागको ग्रहण गर्ने क्षमता र अङ्गलाई पुष्टि गर्ने गुणको हुन्छ । यसले स्पष्ट रूपमा वीर्यवृद्धि गर्दछ ।

**भैंसीको दूध**

**गौल्यन्तु महिषीक्षीरं विपाके शीतलं गुरु ।**
**बलपुष्टिप्रदं वृष्यं पित्तदाहास्रनाशनम् ॥११॥**

भैंसीको दूध गुलियो, पचेपछि शीतवीर्यको, पचाउन कठिन, बलदायक, पुष्टिदायक, वीर्यवर्धक तथा पित्तविकार, डाह र रक्तविकार नाशक हुन्छ ।

**बाख्रीको दूध**



**अजानां लघुकायत्वान्नानाद्रव्यनिषेवणात् ।**
**नात्यम्बुपानाद्व्यायामात् सर्वव्याधिहरं पयः ॥१२॥**

सानो शरीर, अनेक थरीका घाँसपात आदि खाने, थोरै पानी पिउने र कसरत गर्ने हुनाले बाख्रीको दूधले सबै प्रकारका रोग नाश गर्दछ ।

**बाख्रीको दूधको श्रेष्ठता**

**सूक्ष्मादुग्धेति च संवदार्हं गोदुग्धवीर्यात्त्वधिकं गुणे च ।**
**सुक्षीणदेहेषु च पथ्यमुक्तं स्थूलाजदुग्धं किल किञ्चिदूनम् ॥१३॥**

साना जातका बाख्रीको दूध गाईको भन्दा बढी गुनिलो हुन्छ । यो दूध कमजोर मानिसका लागि ( पनि) स्वस्थकर हुन्छ । ठूला जातका बाख्रीको दूध साना जातको बाख्रीको दूधभन्दा कम गुनिलो हुन्छ ।

### भेडीको दूध

**आविकन्तु पयः स्निग्धं कफपित्तहरं परम् ।**
**स्थौल्यमेहहरं पथ्यं लोमशं गुरु वृद्धिदम् ॥१४॥**

भेडीको दूध चिल्लो र विशेषतः कफविकार र पित्तविकार नाशक हुन्छ । यो मोटोपन र प्रमेह नाशक, पथ्य र कपाल बाक्लो तरिकाले बढाउने गुणको हुन्छ ।

### ढोईको दूध

**मधुरं हस्तिनीक्षीरं वृष्यं गुरु कषायकम् ।**
**स्निग्धं स्थैर्यकरं शीतं चक्षुष्यं बलवर्धनम् ॥१५॥**

ढोईको दूध वीर्यवर्धक, पचाउन कठिन, टर्रो, चिल्लो, शरीरलाई स्थिर राख्ने, शीतवीर्यको, आँखाका लागि हितकर र बलवर्धक हुन्छ ।

### घोडीको दूध



**अश्वीक्षीरं तु रूक्षाम्लं लवणं दीपनं लघु ।**
**देहस्थैर्यकरं बल्यं गौरवं कान्तिकृत् परम् ॥१६॥**

घोडीको दूध रुखो, अमिलो, नुनिलो, दीपनी, पचाउन सहज, शरीरलाई स्थिर राख्ने, बलदायक, भारीपन गराउने र शरीरमा अत्यन्त चमक लेराउने गुणको हुन्छ ।

### पोथी गधाको दूध

**बलकृद्गर्दभीक्षीरं वातश्वासहरं परम् ।**
**मधुराम्लरसं रूक्षं दीपनं पथ्यदं स्मृतम् ॥१७॥**

पोथी गधाको दूध बलदायक तथा विशेष गरी वातविकार र दमरोग नाशक हुन्छ । यो गुलियो, अमिलो, रुखो, दीपनी र पथ्य हुन्छ ।

### पोथी उँटको दूध

**उष्ट्रीक्षीरं कुष्ठशोफापहं तत् पित्तार्शोघ्नं तत् कफाटोपहारि ।**

**आनाहार्तिजन्तुगुल्मोदराख्यं श्वासोल्लासं नाशयत्याशु पीतम् ॥१८॥**

पोथी उँटको दूध कुष्ठ, सुजन, पित्तविकार, अल्काई, कफविकार, आनाह, कीरा, गुल्म, पेटका रोग र दम नाशक हुन्छ ।

### महिलाको दूध

**मधुरं मानुषीक्षीरं कषायञ्च हिमं लघु ।**
**चक्षुष्यं दीपनं पथ्यं पाचनं रोचनं च तत् ॥१९॥**

स्त्रीको दूध गुलियो, टर्रो, शीतवीर्यको, पचाउन सहज, आँखाका लागि हितकारी, दीपनी, पथ्य, पाचनी र रोचनी हुन्छ ।

### तताइएको र काँचो दूध

**क्षीरं कासश्वासकोपाय सर्वं गुर्वामं स्यात् प्रायशो दोषदायि ।**
**तच्चेत्तप्तं वर्तितं पथ्यमुक्तं नारीक्षीरं त्वाममेवामयघ्नम् ॥२०॥**



प्रायः सबै जनावरको काँचो दूधले खोकी, दम जस्ता रोग निकाल्दछ र पचाउन पनि कठिन हुन्छ । यो दूध तताएर खाए पथ्य हुन्छ । स्त्रीको ताजा दूध काँचोमै रोगनाशक हुन्छ ।

### दुहुँदा दुहुँदैको तातो दूध

**उक्तं गव्यादिकं दुग्धं धारोष्णममृतोपमम् ।**
**सर्वामयहरं पथ्यं चिरसस्थं तु दोषदम् ॥२१॥**

गाईभैंसीको दुहुँदा दुहुँदैको तातो दूध अमृत समान हुन्छ भनिएको छ । यसले सबै रोग नाश गर्दछ र पथ्य हुन्छ । लामो समय राखेपछि भने काँचो दूध दोषजनक हुन्छ ।

**केऽप्याविकं पथ्यतमं शृतोष्णं क्षीरं त्वजानां शृतशीतमाहुः ।**
**दोहान्तशीतं महिषीपयश्च गव्यं तु धारोष्णमिदं प्रशस्तम् ॥२२॥**

केही विद्वानहरूको विचारमा भेडीको उमालेको दूध पथ्य हुन्छ । बाख्रीको दूध तताएर सेलाएपछि पथ्य हुन्छ । भैंसीको दूध दोहेर सेलाएपछि तथा गाईको दूध दुहुँदादुहुँदैको तातो पथ्य हुन्छ ।

## समय अनुसार दूध सेवन

**वृष्यं बृंहणमग्निवर्धनकरं पूर्वाह्णपीतं पयो**
**मध्याह्ने बलदायकं कफहरं कृच्छ्रस्य विच्छेदकम् ।**
**बाल्ये वह्निकरं ततो बलकरं वीर्यप्रदं वार्धके**
**रात्रौ क्षीरमनेकदोषशमनं सेव्यं ततः सर्वदा ॥२३॥**

बिहान पिइएको दूध वीर्यवर्धक, पौष्टिक र जठराग्निलाई बाल्ने गुणको हुन्छ । मध्याह्नमा पिइएको दूध बलदायक, कफनाशक र कृच्छ्रलाई खुकुल्याउने गुणको हुन्छ । बालक अवस्थामा पिइएको दूधले जठराग्निलाई बाल्दछ, त्यसपछि पिइएको दूधले बल दिन्छ र वृद्धावस्थामा पिइएको जलले वीर्य बढाउँदछ । रातमा पिइएको दूधले अनेक थरी दोष नाश गर्दछ, यसैले सधैं दूध पिउने गर्नू ।

## खराब दूध

**क्षीरं मुहूर्तत्रितयोषितं यदतप्तमेतद्विकृतिं प्रयाति ।**
**उष्णं तु दोषं कुरुते तदूर्ध्वं विषोपमं स्यादुषितं दशानाम् ॥२४॥**

काँचो दूध दोहेको दुई घण्टा चौबीस मिनेट पछि विकृत हुन्छ । एकपटक तताएर राखिएको दूध पनि त्यति समयपछि पुनः तताउँदा दोषयुक्त हुन्छ । पटकपटक तताइएको दूध विषसमान हानिकारक हुन्छ ।

## जरो र दूध

**जीर्णज्वरे कफे क्षीणे क्षीरं स्यादमृतोपमम् ।**
**तदेव तरुणे पीतं विषवद्धन्ति मानुषम् ॥२५॥**

सात दिनभन्दा बढी आएको जरोमा, कफविकार हुँदा र दुब्लाउँदा पिइएको दूध अमृतसमान हुन्छ । तर त्यही दूध जरो आउन शुरु गरेको सात दिन भित्र पिए त्यसले मानिसलाई विषले मारेझैं मार्दछ ।

## दूधमा हालिने पानीको मात्रा

**चतुर्थभागं सलिलं निधाय यत्नाद् यदावर्तितमुत्तमं तत् ।**
**सर्वामयघ्नं बलपुष्टिकारि वीर्यप्रदं क्षीरमतिप्रशस्तम् ॥२६॥**

जांत दूध छ त्यसमा एक चौथाइ पानी हालेर राम्ररी उमालिएको दूध उत्तम हुन्छ । यसले सबै खालका रोग नाश गर्दछ, बल र पुष्टि दिन्छ, वीर्य बढाउँदछ र यो दूध अति नै असल हुन्छ ।

### दूध पिउने नियम

**गव्यं पूर्वाह्णकाले स्यादपराह्णे तु माहिषम् ।**
**क्षीरं सशर्करं पथ्यं यद्वा सात्म्ये च सर्वदा ॥२७॥**

नित्य बिहान गाईको र अपराह्नमा भैंसीको दूध चिनी हालेर वा जे गर्दा सात्म्य हुन्छ त्यसरी पिउनु पथ्य हुन्छ ।

### तताएको र नतताएको दूध

**पित्तघ्नं श्रृतशीतलं कफहरं पक्वं तदुष्णं भवे-**
**च्छीतं यत्तु न पाचितं तदखिलं विष्टम्भदोषप्रदम् ।**
**धारोष्णं त्वमृतं पयः श्रमहरं निद्राकरं कान्तिदं**
**वृष्यं बृंहणमग्निवर्धनमतिस्वादु त्रिदोषापहम् ॥२८॥**



तताएर सेलाएको दूधले पित्तविकार नाश गर्दछ । तताएको तातो दूधले कफविकार नाश गर्दछ । नतताइएको सबै खालको दूधले कब्जियत गराउँदछ । दुहुँदादुहुँदैको तातो दूध अमृत समान हुन्छ । यो दूध थकाई नाशक, निद्रा लगाउने, शरीरमा चमक लेराउने, वीर्यवर्धक, पौष्टिक, जठराग्निलाई बाल्ने, अति मिठो र त्रिदोष नाशक हुन्छ ।

### दूध सेवन विधि

**क्षीरं न युञ्जीत कदाऽप्यतप्तं तप्तं न चैतल्लवणेन सार्धम् ।**
**पिष्टान्नसन्धानकमाषमुद्गकोशातकीकन्दफलादिकैश्च ॥२९॥**

नतताई कहिल्यै दूध नपिउनू । तताइएको दूध नुनसँग नखानू । पिसिएको वा पिँधिएको अन्न, अचार आदि साँधिएका वा मर्चा हाली कुहाइएका खानेकुरा, मास, मुगी, पाटेतोरियाँ वा घिरौंलो, कन्दमूल र फलफूलसँग दूध नपिउनू ।

### दूधसँगै खान नहुने कुरा

**मत्स्यमांसगुडमुद्गमूलकैः कुष्ठमावहति सेवितं पयः ।**

**शाकजाम्बवरसैस्तु सेवितं मारयत्यबुधमाशु सर्पवत्॥३०॥**

माछा, मासु, खुँदो, मुगी र मूलासँग दूध पिउनाले कुष्ठरोग हुन्छ । सागपात वा जामुनुको रससँग दूध खाँदा यसले सर्पले शत्रुलाई मारेजसरी खाने व्यक्तिलाई मार्दछ ।

### दूध सेवनविधि

**स्निग्धं शीतं गुरु क्षीरं सर्वकालं न सेवयेत् ।**
**दीप्ताग्निं कुरुते मन्दं मन्दाग्निं नष्टमेव च॥३१॥**
**नित्यं तीव्राग्निना सेव्यं सुपक्वं माहिषं पयः ।**
**पुष्णन्ति धातवः सर्वे बलपुष्टिविवर्धनम्॥३२॥**

चिल्लो, चिसो र पचाउन कठिन हुने खालको दूध सधैँ पिउनु हुन्न । यसले बलियो पाचनशक्तिलाई कमजोर र कमजोर पाचनशक्तिलाई काम नगर्ने बनाउँदछ । बलियो पाचनशक्ति हुने व्यक्तिले कडा रापमा उमालिएको भैंसीको दूध दिनहुँ पिउने गर्नू । यस्तो दूधले सबै धातुहरूलाई पुष्ट पार्दछ र बल तथा पुष्टि बढाउँदछ ।

### बिहाएको समय र दूध



**क्षीरं गवाजकादेर्मधुरं क्षारं नवप्रसूतानाम् ।**
**रूक्षञ्च पित्तदाहं करोति रक्तामयं कुरुते॥३३॥**

भर्खर बिहाएका गाई, बाख्री आदिको दूध गुलियो, क्षारयुक्त, रुखो, पित्तविकार बढाउने, डाह गराउने र रक्तविकार उत्पन्न गराउने गुणको हुन्छ ।

**मधुरं त्रिदोषशमनं क्षीरं मध्यप्रसूतानाम् ।**
**लवणं मधुरं क्षीरं विदाहजननं चिरप्रसूतानाम्॥३४॥**

बिहाएको केही समयपछिको दूध गुलियो र त्रिदोषनाशक हुन्छ । बिहाएको लामो समय भएका जनावरको दूध नुनिलो, गुलियो र डाह उत्पन्न गराउने गुणको हुन्छ ।

### जनावरको उमेर अनुसार दूधमा हुने गुण

**गुणहीनं निःसारं क्षीरं प्रथमप्रसूतानाम् ।**
**मध्यवयसां रसायनमुक्तमिदं दुर्बलं तु वृद्धानाम्॥३५॥**

पहिलो बेते जनावरको दूध गुणहीन र सारहीन हुन्छ । मध्यम उमेरमा बिहाएका जनावरको दूध रसायनी हुन्छ । बूढो जनावरको दूध बलहीन हुन्छ ।

### गर्भिणी जनावरको दूध

**तासां मासत्रयादूर्ध्वं गुर्विणीनाञ्च यत्पयः ।**
**तद्दाहि लवणं क्षीरं मधुरं पित्तदोषकृत् ॥३६॥**

गर्भ बसेको तीन महिना पछि जनावरको दूध डाह गराउने, नुनिलो, गुलियो र पित्तविकार गराउने गुणको हुन्छ ।

### दूधमा हुने गुणको आधार

**गवादीनां वर्णभेदाद्गुणा दुग्धादिके पृथक् ।**
**कैश्चिदुक्तो विशेषाच्च विशेषो देशभेदतः ॥३७॥**
**देशेषु देशेषु च तेषु तेषु तृणाम्बुनी यादृशदोषयुक्ते ।**
**तत्सेवनादेव गवादिकानां गुणादि दुग्धादिषु तादृशं मतम् ॥३८॥**

गाई आदि जनावरको रङ अनुसार तिनको दूधमा पनि फरकफरक गुण हुन्छ । कसैले दूधको गुणस्तरलाई विशेष गरी वासस्थानले प्रभाव पार्दछ पनि भनेका छन् । देश अनुसार घाँसपात र पानीमा जेजस्तो गुण वा दोष हुन्छ त्यो खानेपिउने जनावरको दूध आदिमा पनि त्यही गुण समावेश हुने गर्दछ ।

### छेना (कीलाट)

**शीतं स्निग्धं गुरुर्गौल्यं वृष्यं पित्तापहं परम् ।**
**ज्ञेया चैवाभिधा तस्य कीलाटन्तु पयःच्छदः ॥३९॥**

छेना शीतवीर्यको, चिल्लो, पचाउन कठिन, गुलियो, वीर्यवर्धक र विशेषत पित्तविकार नाशक हुन्छ भनी जान्नू । कीलाट वा पयःच्छद भनेको छेना हो । (कसैले यसलाई कुराउनी पनि भन्दछन्) ।

### गाईको दही

**दधि गव्यमतिपवित्रं शीतं स्निग्धञ्च दीपनं बलकृत् ।**

**मधुरमरोचकहारि ग्राहि च वातामयघ्नं च ॥४०॥**

गाईको दही अति पवित्र, शीतवीर्यको, चिल्लो, दीपनी, बलदायक, गुलियो, अरुची नाशक, ग्राहि र वातविकार नाशक हुन्छ ।

### भैंसीको दही

**माहिषं मधुरं स्निग्धं श्लेष्मकृद्रक्तपित्तजित् ।**
**बलास्रवर्धनं वृष्यं श्रमघ्नं शोधनं दधि ॥४१॥**

भैंसीको दही गुलियो, चिल्लो, कफविकार गर्ने, रक्तपित्तलाई जित्ने, बल र रगत बढाउने, वीर्यवर्धक, थकाई नाशक र प्रशोधक हुन्छ ।

### बाख्रीको दही

**दध्याजं कफवातघ्नं लघूष्णं नेत्रदोषनुत् ।**
**दुर्नामश्वासकासघ्नं रुच्यं दीपनपाचनम् ॥४२॥**



बाख्रीको दही कफविकार र वातविकार नाशक, पचाउन सहज, उष्णवीर्यको र आँखाका रोग नाशक हुन्छ । यो दही अल्काई, दम र खोकी नाशक; रुचिप्रद, दीपनी र पाचनी हुन्छ ।

### भेडीको दही

**आविकं दधि सुस्निग्धं कफपित्तकरं गुरु ।**
**वाते च रक्तवाते च पथ्यं शोफव्रणापहम् ॥४३॥**

भेडीको दही अति चिल्लो, कफविकार र पित्तविकार गर्ने, पचाउन कठिन, वातविकार र रक्तवातमा पथ्य तथा सुजन र घाउखटिरा नाशक हुन्छ ।

### ढोईको दही

**हस्तिनीदधि कषायलघूष्णं पक्तिशूलशमनं रुचिप्रदम् ।**
**दीप्तिदं खलु बलासगदघ्नं वीर्यवर्धनबलप्रदमुक्तम् ॥४४॥**

ढोइको दही टर्रो, पचाउन सहज, उष्णवीर्यको, पाकेको शूल शान्त पार्ने (?), रुचिप्रद, चमक दिने, कफविकार नाशक, वीर्यवर्धक र बलदायक हुन्छ भनिएको छ ।

### घोडीको दही

**अश्वीदधि स्यान्मधुरं कषायं कफार्तिमूर्च्छाऽऽमयहारि रूक्षम् ।**
**वातात्पदं दीपनकारि नेत्रदोषापहं तत् कथितं पृथिव्याम् ॥४५॥**

घोडीको दही गुलियो, टर्रो तथा कफविकार र बेहोसीपना नाशक र रुखो हुन्छ । यसले थोरै वातविकार गर्दछ । यो दही पृथिवीमा दीपनी र आँखाका रोग नाशक हुन्छ भनिएको छ ।

### पोथी गधाको दही

**गर्दभीदधि रूक्षोष्णं लघु दीपनपाचनम् ।**
**मधुराम्लरसं रुच्यं वातदोषविनाशनम् ॥४६॥**

गधाको दही रुखो, उष्णवीर्यको, पचाउन सहज, दीपनी, पाचनी, गुलियो, अमिलो, रुचिप्रद तथा वातविकार नाशक हुन्छ ।

### पोथी उँटको दही



**औष्ट्रमर्शांसि कुष्ठानि क्रिमिशूलोदराणि च ।**
**निहन्ति कटुकं स्वादु किञ्चिदम्लरसं दधि ॥४७॥**

उँटको दहीले अल्काई, कुष्ठ, पेटका कीरा, शूल र पेटका रोग नाश गर्दछ । यो दही पिरो, गुलियो र थोरै अमिलो हुन्छ ।

### स्त्रीको दही

**विपाके मधुरं बल्यमम्लं सन्तर्पणं गुरु ।**
**चक्षुष्यं ग्रहदोषघ्नं दधि स्त्रीस्तन्यसम्भवम् ॥४८॥**

स्त्रीको दही पचेपछि गुलियो हुन्छ । यो बलदायक, अमिलो, तृप्तिदायक, पचाउन कठिन, आँखाका लागि हितकर र ग्रहबाधा नाशक हुन्छ ।

### दहीका गुण

**दध्यम्लं गुरु वातदोषशमनं सङ्ग्राहि मूत्रावहं**

बल्यं शोफकरञ्च रुच्यशमनं वह्नेश्च शान्तिप्रदम् ।
कासश्वाससुपीनसेषु विषमे शीतज्वरे स्याद्धितं
रक्तोद्रेककरं करोति सततं शुक्रस्य वृद्धिं पराम् ॥४९॥
दधि मधुरमीषदम्लं मधुराम्लं वा हितं न चात्युष्णम् ।
यावद्यावन्मधुरं दोषहरं तावदुक्तमिदम् ॥५०॥

सामान्यतः दही अमिलो, पचाउन कठिन, वातविकारलाई शान्त पार्ने, ग्राहि, पिसाब खुलाउने, बलदायक, सुजन गराउने, रुचीलाई शान्त पार्ने र पाचनशक्तिलाई शान्त बनाउने गुणको हुन्छ । दही खोकी, दम, पिनास, विषमज्वर र शीतज्वरमा हितकर हुन्छ । यसले रगतलाई निरन्तर सक्रिय बनाउँदछ र धेरै शुक्रवृद्धि गर्दछ । अमिलो, गुलियो वा गुलियो-अमिलो दही लाभदायक हुन्छ । तातो दही हितकर हुँदैन । जबसम्म दहीमा गुलियोपन हुन्छ तबसम्म यो हितकारी हुन्छ भनिएको छ ।

दही सेवन विधि

लवणमरिचसर्पिःशर्करामुद्गधात्री
कुसुमरसविहीनं नैतदश्नन्ति नित्यम् ।

न च शरदि वसन्ते नोष्णकाले न रात्रौ
न दधि कफविकारे पित्तदोषेऽपि नाद्यात् ॥५१॥

नुन, मरिच, सर्सिउँ, चिनी, मुगी, अमला वा फूलको रस (मह आदि) नहाली दिनहुँ दही खाने गर्दैनन् । शरद र वसन्त ऋतुमा, गर्मी समयमा, राती, कफविकार हुँदा र पित्तविकार हुँदा पनि दही नखानू ।

त्रिकटुकयुतमेतद्राजिक्काचूर्णमिश्रं कफहरमनिलघ्नं वह्निसन्धुक्षणञ्च ।
तुहिनशिशिरकाले सेवितं चातिपथ्यं रचयति तनुदार्ढ्यं कान्तिमत्त्वं च नृणाम् ॥५२॥

त्रिकटु वा रायोको धुलो मिसाएर खाइने दहीले कफविकार र वातविकार नाश गर्दछ र जठराग्निलाई बाल्दछ । हेमन्त र शिशिर ऋतुमा खाइने दही अति नै पथ्य हुन्छ । यो दहीले मानिसको शरीरलाई बलियो र चम्किलो बनाउँदछ ।

मस्तु

उष्णाम्लं रुचिपक्तिदं क्लमहरं बल्यं कषायं सरं

भुक्तिच्छेदकरं तृषोदरगदप्लीहार्शसां नाशनम् ।
स्रोतःशुद्धिकरं कफानिलहरं विष्टम्भशूलापहं
पाण्डुश्वासविकारगुल्मशमनं मस्तु प्रशस्तं लघु ॥५३॥

मस्तुले रुची र पाचनशक्ति बढाउँदछ, मानसिक थकाई नाश गर्दछ र बल दिन्छ । यो टर्रो, मलमूत्रलाई तलतिर सार्ने, खाएको कुरालाई टुक्रा पार्ने तथा तिर्खा, पेटका रोग, फियोका रोग र अल्काई नाशक हुन्छ । यसले शरीरका स्रोत-ग्रन्थीलाई शुद्ध पार्दछ, कफविकार र वातविकारलाई तथा कब्जियत र शूललाई नाश गर्दछ । मस्तुले पाण्डु, दम र गुल्मलाई शान्त पार्दछ । यो पचाउन सहज हुन्छ ।

## तीन प्रकारका तक्र

उत्क्तं श्लेष्मसमीरहारि मथितं तत् श्लेष्मपित्तापहं
रुच्यं प्राहुरुदश्विदाख्यमधिकं तक्रं त्रिदोषापहम् ।
मन्दाग्नावरुचौ विदाहविषमश्वासार्तिकासादिषु
श्रेष्ठं पथ्यतमं वदन्ति सुधियस्तक्रत्रयं ह्युत्तमम् ॥५४॥

मथित तक्रले कफविकार, वातविकार र पित्तविकार नाश गर्दछ । उदश्वित् तक्रले रुचि बढाउँदछ र त्रिदोष नाश गर्दछ । मस्तु तक्रले कमजोर पाचनशक्तिलाई बलियो बनाउँदछ । यसले डाह, विषविकार, दम र खोकी पनि नाश गर्दछ । तीन थरीका तक्रहरु श्रेष्ठ र पथ्य हुन्छन् भनी विद्वानहरू बताउँदछन् ।

## तक्रका गुण

तक्रं त्रिदोषशमनं रुचिदीपनीयं रुच्यं वमिश्रमहरं क्लमहारि मस्तु ।
बल्यप्रदं पवननाशमुदश्विदाख्यं शस्तं कफश्रममरुद्वमनेषु घोलम् ॥५५॥

तक्रले त्रिदोषलाई शान्त पार्दछ र खानमा रुची प्रदान गर्दछ । यो दीपनी र रुचिकर हुन्छ । मस्तु वाकवाकी, थकाई र मानसिक थकाई नाशक हुन्छ । उदश्वित् बलदायक र वातविकार नाशक हुन्छ । कफविकार, थकाई, वातविकार र वाकवाकी लाग्दा घोल लाभदायक हुन्छ ।

## अमिलो आदि रस अनुसार तक्रमा हुने गुण

अम्लेन वातं मधुरेण पित्तं कफं कषायेण निहन्ति सद्यः ।
यथा सुराणाममृतं हिताय तथा नराणामिह तक्रमाहुः ॥५६॥

तक्रमा हुने अमिलोले वातविकार, गुलियोले पित्तविकार र टर्रोले कफविकार तुरुन्त नाश गर्दछ । जसरी देवताको हितका लागि अमृत हुन्छ त्यसैगरी मानिसका हितका लागि तक्र हुन्छ भनिएको छ ।

### तक्रको प्रयोग

**आमातिसारे च विसूचिकायां वातज्वरे पाण्डुषु कामलेषु ।**
**प्रमेहगुल्मोदरवातशूले नित्यं पिबेत्तक्रमरोचके च ॥५७॥**

आमजन्य अतिसार, विसूचिका, वातज्वर, पाण्डु, कमलपित्त, प्रमेह, गुल्म, पेटका रोग, वातविकार, शूल र अरुची हुँदा दिनहुँ तक्र पिउने गर्नू ।

**शीतकालेऽग्निमान्द्ये च कफे पाण्ड्वामयेषु च ।**
**मार्गोपरोधे कुष्ठादिव्याधौ तक्रं प्रशस्यते ॥५८॥**

जाडो यामममा, पाचनशक्ति कमजोर हुँदा, कफविकार हुँदा, पाण्डु रोगमा, शरीरमा स्रोतग्रन्थीहरू अवरुद्ध हुँदा र कुष्ठ आदि हुँदा तक्र पिउनु उपयुक्त हुन्छ ।



**वातोदरी पिबेत्तक्रं पिप्पलीलवणान्वितम् ।**
**शर्करामरिचोपेतं स्वादु पित्तोदरी पिबेत् ॥५९॥**
**यवानीसैन्धवाजाजी व्योषयुक्तं कफोदरे ।**
**सन्निपातोदरे तक्रं त्रिकटुक्षारसैन्धवम् ॥६०॥**

वातविकार हुने व्यक्तिले पिप्ला र सिधेनुनको धुलो मिसाएर तक्र पिउनू । पित्तविकार हुने व्यक्तिले चिनी र मरिचको धुलो मिसाएर तक्र पिउनू । कफविकार हुने व्यक्तिले ज्वानु, सिधेनुन, जीरा र त्रिकटुको धुलो मिसाएर तक्र पिउनू । सन्निपात हुँदा त्रिकटुको क्षार र सिँधेनुनको धुलो मिसाएर तक्र पिउनू ।

### तक्र खान नहुने अवस्था

**तक्रं दद्यान्नो क्षते नोष्णकाले नो दौर्बल्ये नो तृषामूर्च्छिते च ।**
**नैव भ्रान्तौ नैव पित्तास्रदोषे नैतद्दद्यात् सूतिकायां विशेषात् ॥६१॥**

घाउ वा चोटपटक लागेका व्यक्ति, गर्मी समयमा, कमजोर हुँदा, तिर्खा लाग्दा, बेहोस हुँदा, भ्रम

हुँदा, रक्तपित्त हुँदा र विशेष गरी सुत्केरी महिलालाई तक्र पिउन नदिनू ।

## स्नेहान्वित तक्र

**तक्रं स्नेहान्वितं तुन्द निद्राजाड्यप्रदं गुरु ।**
**अर्धावशिष्टं सामान्यं निःशेषं लघु पथ्यदम् ॥६२॥**

पूरा चिल्लो सहितको तक्रले पेट, निद्रा र लाटोपन बढाउँदछ । यो पचाउन कठिन हुन्छ । आधा चिल्लो भएको तक्रलाई सामान्य तक्र भनिन्छ । चिल्लो नभएको (वा झिकिएको) तक्र पचाउन सहज र पथ्य हुन्छ ।

## गाईको नौनी

**शीतं वर्णबलावहं सुमधुरं वृष्यं च सङ्ग्राहकं**
**वातघ्नं कफहारकं रुचिकरं सर्वाङ्गशूलापहम् ।**
**कासघ्नं श्रमनाशनं सुखकरं कान्तिप्रदं पुष्टिदं**
**चक्षुष्यं नवनीतमुद्धृतनवं गोः सर्वदोषापहम् ॥६३॥**



गाईको ताजा नौनी शीतवीर्यको, वर्ण र बल बर्धक, गुलियो, वीर्यदायक, ग्राहि, वातविकार नाशक, कफविकार नाशक, रुचिप्रद, सबै अङ्गमा हुने शूलरोग नाशक, खोकी नाशक, थकाई नाशक, सुखदायी, चमकदायी, पुष्टिदायक, आँखाका लागि हितकर र सबै रोग नाशक हुन्छ ।

## गाई, भैंसीको नौनी

**गव्यञ्च माहिषञ्चापि नवनीतं नवोद्भवम् ।**
**शस्यते बालवृद्धानां बलकृत् पुष्टिवर्धनम् ॥६४॥**

गाईको वा भैंसीको ताजा नौनी बलदायक र पुष्टिदायक हुने हुनाले बच्चादेखि बूढासम्म सबैलाई उपयोगी हुन्छ ।

## भैंसीको नौनी

**माहिषं नवनीतन्तु कषायं मधुरं रसे ।**
**शीतं वृष्यप्रदं ग्राहि पित्तघ्नं तु बलप्रदम् ॥६५॥**

भैंसीको नौनी टर्रो एवं गुलियो, शीतवीर्यको, वीर्यवर्धक, ग्राहि, पित्तविकार नाशक तथा बलदायक हुन्छ ।

### सानो जातका बाख्रीको नौनी

**लघ्वाजाजन्तु मधुरं कषायञ्च त्रिदोषनुत् ।**
**चक्षुष्यं दीपनं बल्यं नवनीतं हितं सदा ॥६६॥**

सानो जातका बाख्रीको नौनी गुलियो, टर्रो, त्रिदोष नाशक, आँखाका लागि हितकर, दीपनी, बलदायक र सधैँ हितकर हुन्छ ।

### ठुलो जातका बाख्रीको नौनी

**नवनीतं नवोत्थन्तु छागजं क्षयकासजित् ।**
**बल्यं नेत्रामयघ्नं च कफघ्नं दीपनं परम् ॥६७॥**

ठुलो जातको बाख्रीको ताजा नौनी क्षयरोग र खोकीलाई जित्ने, बलदायक, आँखाका रोग नाशक, कफविकार नाशक र अत्यन्त दीपनी हुन्छ ।



### भेडीको नौनी

**आविकं नवनीतन्तु विपाके तु हिमं लघु ।**
**योनिशूले कफे वाते दुर्नाम्नि च हितं सदा ॥६८॥**

भेडीको नौनी पचेपछि शीतवीर्यको हुन्छ । यो पचाउन सहज हुन्छ । योनिको शूल, कफविकार, वातविकार र अल्काईमा यो नौनी सधैँ हितकर हुन्छ ।

### भेडाविशेष (दुम्बा)को नौनी

**ऐडकं नवनीतन्तु कषायं शीतलं लघु ।**
**मेधाहृद्गुरु पुष्ट्यं च स्थौल्यं मन्दाग्निदीपनम् ॥६९॥**

जङ्गली बाख्राको नौनी टर्रो, शीतवीर्यको, पचाउन सहज, बोसो नाशक, पुष्टिदायक, मोटो बनाउने र कमजोर पाचनशक्तिलाई बलियो बनाउने गुणको हुन्छ । (ऐडक : भेडाको आकारको दक्षिणापथमा प्रसिद्ध दुम्बा नामक पशुविशेष, के.यन.स्वामी । दुम्बा : पुच्छरको झुप्पो जाँताको

फग्ल्याँटाजस्तो हुने एक जातको भेडा, नेपाली बृहत् शब्दकोश ।) ।

### ढोईको नौनी

**हस्तिनीनवनीतं तु कषायं शीतलं लघु ।**
**तिक्तं विष्टम्भि जन्तुघ्नं हन्ति पित्तकफक्रिमीन् ।।७०।।**

ढोईको नौनी टर्रो, शीतवीर्यको पचाउन सहज, तीतो, कब्जियत गराउने तथा पेटका ठुला कीरा, पित्तविकार, कफविकार र पेटका साना कीरा नाशक हुन्छ ।

### घोडीको नौनी

**अश्वीयं नवनीतं स्यात् कषायं कफवातजित् ।**
**चक्षुष्यं कटुकं चोष्णमीषद्वातापहारकम् ।।७१।।**

घोडीको नौनी टर्रो, कफविकार र वातविकारलाई जित्ने, आँखाका लागि फाइदाजनक, पिरो, उष्णवीर्यको र थोरै मात्रामा वातविकार नाशक समेत हुन्छ ।



### पोथी गधाको नौनी

**गर्दभीनवनीतन्तु कषायं कफवातनुत् ।**
**बल्यं दीपनदं पाके लघूष्णं मूत्रदोषनुत् ।।७२।।**

पोथी गधाको नौनी टर्रो, कफविकार र वातविकार नाशक, बलदायक, दीपनी, पचेपछि हलुका, उष्णवीर्यको र पिसाबका रोगहरू नाश गर्ने गुणको हुन्छ ।

### पोथी उँटको नौनी

**औष्ट्रन्तु नवनीतं स्याद्विपाके लघु शीतलम् ।**
**व्रणक्रिमिकफास्रघ्नं वातघ्नं विषनाशनम् ।।७३।।**

पोथी उँटको नौनी पचेपछि हलुका हुन्छ । यो शीतवीर्यको तथा घाउखटिरा, कीरा, कफविकार, रक्तविकार, वातविकार र विषविकार नाशक हुन्छ ।

## स्त्रीको नौनी

नवनीतन्तु नारीणां रुच्यं पाके लघु स्मृतम् ।
चक्षुष्यं सर्वरोगघ्नं दीपनं विषनाशनम् ॥७४॥

स्त्रीको नौनी रुचिप्रद, पचेपछि हलुका, आँखाका लागि हितकर, सबै रोग नाशक, दीपनी र विषविकार नाशक हुन्छ ।

## ताजा नौनी

शीतं रुच्यनवोद्धृतं सुमधुरं वृष्यञ्च वातापहं
कासघ्नं क्रिमिनाशनं कफकरं सङ्ग्राहि शूलापहम् ।
बल्यं पुष्टिकरं तृषार्तिशमनं सन्तापविच्छेदनं
चक्षुष्यं श्रमहारि तर्पणकरं दध्युद्भवं पित्तजित् ॥७५॥

ताजा नौनी शीतवीर्यको वा शीतल गर्ने वा चिसो, रुचिप्रद, गुलियो, वीर्यवर्धक तथा वातविकार नाशक हुन्छ । यसले खोकी र पेटका कीरा नाश गर्दछ, कफविकार गर्दछ, ग्राहि हुन्छ र शूलरोग नाश गर्दछ । ताजा नौनी बलदायक, पुष्टिदायक, तिर्खा नाशक र डाह हटाउने गुणको हुन्छ । यो आँखाका लागि हितकर, थकाई नाशक, तृप्तिदायक र पित्तविकारलाई जित्ने गुणको हुन्छ ।

## बासी नौनी

एकाहाद्युषितं प्रोक्तमुत्तरोत्तरगन्धदम् ।
अहृद्यं सर्वरोगाढ्यं दधिजं तद्धृतं स्मृतम् ॥७६॥

एक दिनभन्दा बढी राखिएको बासी नौनी झन् झन् गनाउने हुन्छ। यो मुटुका लागि हानिकारक र सबै खालका रोग निकाल्न सक्ने गुणको हुन्छ ।

## गाईको घिउ

धीकान्तिस्मृतिदायकं बलकरं मेधाप्रदं पुष्टिकृत्
वातश्लेष्महरं श्रमोपशमनं पित्तापहं हृद्यदम् ।
वह्नेर्वृद्धिकरं विपाकमधुरं वृष्यं वपुःस्थैर्यदं
गव्यं हव्यतमं घृतं बहुगुणं भोग्यं भवेद्भाग्यतः ॥७७॥

गाईको घिउले बुद्धि, तेज र सम्झना शक्ति प्रदान गर्दछ । यो बलकारी, दिमागलाई ग्रहण गर्ने क्षमता दिने र शरीरलाई पुष्टि गर्ने गुणको हुन्छ । यसले वातविकार र कफविकार नाश गर्दछ तथा थकाई मेट्दछ । यो पित्तविकार नाशक र मुटुका लागि हितकर हुन्छ । गाईको घिउले जठराग्निलाई बाल्दछ । यो पचेपछि गुलियो, वीर्यवर्धक, शरीरलाई स्थिर अवस्थामा राख्ने र होमका लागि उत्तम हुन्छ । यस्तो बहुगुणकारी गाईको घिउ भाग्यले मात्र खान पाइन्छ ।

### भैंसीको घिउ

**सर्पिर्माहिषमुत्तमं धृतिकरं सौख्यप्रदं कान्तिकृत्**
**वातश्लेष्मनिबर्हणं बलकरं वर्णप्रदाने क्षमम् ।**
**दुर्नामग्रहणीविकारशमनं मन्दानलोद्दीपनं**
**चक्षुष्यं नवगव्यतः परमिदं हृद्यं मनोहारि च ॥७८॥**

भैंसीको शुद्ध घिउ धैर्यप्रदायक, सुखदायक र शरीरको चमक बढाउने गुणको हुन्छ । यसले वातविकार र कफविकार नाश गर्दछ, बल दिन्छ र शरीरको वर्णमा निखार लेराउँदछ । भैंसीको घिउ अल्काई र ग्रहणीलाई शान्त पार्ने, कमजोर पाचनशक्तिलाई बलियो बनाउने, आँखा र मुटुका लागि हितकर एवं मनमोहक हुन्छ ।



### बाख्रीको घिउ

**आजमाज्यन्तु चक्षुष्यं दीपनं बलवर्धनम् ।**
**कासश्वासकफान्तकं राजयक्ष्मसु शस्यते ॥७९॥**

बाख्राको घिउ आँखाका लागि हितकारी, दीपनी, बलवर्धक तथा खोकी, दम र कफविकारलाई अन्त गर्ने गुणको हुन्छ । यो क्षयरोगको उपचारमा उपयोगी हुन्छ ।

### भेडीको घिउ

**पाके लघ्वाविकं सर्पिर्नवं पित्तप्रकोपणम् ।**
**योनिदोषे कफे वाते शोफे कम्पे च तद्धितम् ॥८०॥**

भेडीको घिउ पचेपछि हलुका हुन्छ । ताजा घिउले पित्तविकार गर्दछ । योनिका रोग, कफविकार, वातविकार, सुजन र शरीर काम्ने रोगमा यो घिउ हितकारी हुन्छ ।

### दुम्बाको घिउ

**ऐडकं घृतमतीव गौरवाद्वर्ज्यमिव सुकुमारदेहिनाम् ।**
**बुद्धिपाटवकरं बलावहं सेवितं च कुरुते नृणां वपुः ॥८१॥**

दुम्बाको घिउ अति नै पचाउन कठिन हुने हुनाले कोमल शरीर हुनेहरूका लागि यो घिउ खान उपयुक्त हुँदैन । यसले सेवन गर्ने मानिसको बुद्धिलाई प्रखर बनाउँदछ र शरीरमा बल दिन्छ ।

### ढोईको घिउ

**निहन्ति हस्तिनीसर्पिः कफपित्तविषक्रिमीन् ।**
**कषायं लघु विष्टम्भि तिक्तं चाग्निकरं परम् ॥८२॥**

ढोईको घिउले कफविकार, पित्तविकार, विषविकार र पेटका कीरा नाश गर्दछ । यो घिउ टर्रो, पचाउन सहज, कब्जियत गराउने, तीतो र अत्यन्त जठराग्नि वर्धक हुन्छ ।

### घोडीको घिउ



**अश्वीसर्पिस्तु कटुकं मधुरं च कषायकम् ।**
**ईषद्दीपनदं मूर्च्छा हारि वाताल्पदं गुरु ॥८३॥**

घोडीको घिउ पिरो, गुलियो, टर्रो, थोरै दीपनी, बेहोसीपन नाशक, थोरै वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

### पोथी गधाको घिउ

**घृतं गार्दभिकं बल्यं दीपनं मूत्रदोषनुत् ।**
**पाके लघूष्णवीर्यञ्च कषायं कफनाशनम् ॥८४॥**

गधाको घिउ बलदायक, दीपनी, पिसाबसम्बन्धी रोग नाशक, पचेपछि हलुको, उष्णवीर्यको, टर्रो र कफविकार नाशक हुन्छ ।

### पोथी उँटको घिउ

**घृतमौष्ट्रतु मधुरं विपाके कटुशीतलम् ।**

**कुष्ठक्रिमिहरं वातकफगुल्मोदरापहम् ॥८५॥**

उँटको घिउ गुलियो, पचेपछि पिरो, शीतवीर्यको तथा कुष्ठ, पेटका कीरा, वातविकार, कफविकार, गुल्म र पेटका रोग नाशक हुन्छ ।

### स्त्रीको घिउ

**नारीसर्पिस्तु चक्षुष्यं पथ्यं सर्वामयापहम् ।**
**मन्दाग्निदीपनं रुच्यं पाके लघु विषापहम् ॥८६॥**

स्त्रीको घिउ आँखाका लागि हितकारी, पथ्य, सबै रोग नाशक, कमजोर पाचनशक्तिलाई बलियो बनाउने, रुचिप्रद, पचेपछि हलुका र विषविकार नाशक हुन्छ ।

### पुरानो घिउ

**मदापस्मारमूर्च्छादिशिरःकर्णाक्षिजा रुजः ।**
**सर्पिः पुराणं जयति व्रणशोधनरोपणम् ॥८७॥**



नसा लाग्ने, छारेरोग, बेहोसीपन आदि जस्ता टाउको, कान र आँखाका रोगमा पुरानो घिउ उपयोगी हुन्छ । यो घिउले घाउखटिरा सफा गर्ने र भर्ने काम गर्दछ ।

### घिउका गुण

**आयुर्वृद्धिं वपुषि दृढतां सौकुमार्यं च कान्तिं**
**बुद्धिं धत्ते स्मृतिबलकरं शीतविध्वंसनं च ।**
**पथ्यं बाल्ये वयसि तरुणे वार्धके चातिबल्यं**
**नान्यत्किञ्चिज्जगति गुणदं सर्पिषः पथ्यमस्ति ॥८८॥**

घिउ आयुवर्धक; शरीरलाई बलियो, सुकुमार र चम्किलो बनाउने; बुद्धि प्रदायक, सम्झना शक्ति र बल दिने, चिसो हटाउने र पथ्य गुणको हुन्छ । वालक, जवान र बृद्धलाई पनि यसले अति नै तागत दिन्छ । घिउ जस्तो गुनिलो र पथ्य संसारमा अरु केही छैन ।

### काँजी

**काञ्जिकं काञ्जिका वीरं कुल्माषाभिभवं तथा ।**

**अवन्तिसोमं धान्याम्लमारनालोऽम्लसारकः ॥८९॥**
**काञ्जिकं वातशोफघ्नं पित्तघ्नं ज्वरनाशनम् ।**
**दाहमूर्च्छाश्रमघ्नञ्च शूलाध्मानविबन्धनुत् ॥९०॥**

काञ्जिक, काञ्जिका, वीर, कुल्माषाभिभव, अवन्तिसोम, धान्याम्ल, आरनाल र अम्लसारक : यी काँजीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वातविकार, सुजन, पित्तविकार, ज्वर, डाह, बेहोसीपन, थकाई, शूल, आध्मान र कब्जियत नाशक हुन्छ ।

**काञ्जिकं काञ्जितैलञ्च पलितं वातकारकम् ।**
**दाहकं गात्रशैथिल्यं मर्दनान्न च भक्षणात् ॥९१॥**

काँजीको तेल लगाउनाले कपाल फुल्ने, वातविकार हुने, डाह हुने र शरीर शिथिल हुने जस्ता दोष देखिन्छन् । यी दोष तेल लगाउनाले हुन्छन्, खानाले हुने होइन ।

चुक्रिका (काँजीविशेष)

**चुक्रं सहस्रवेधञ्च रसाम्लं चुक्रवेधकम् ।**
**शाखाम्लभेदनञ्चैवमम्लसारञ्च चुक्रिका ॥९२॥**
**चुक्रं तिक्ताम्लकं स्वादु कफपित्तविनाशनम् ।**
**नासिकागदद्दुर्गन्ध शिरोरोगहरं परम् ॥९३॥**

चुक्र, सहस्रवेध, रसाम्ल, चुक्रवेधक, शाखाम्लभेदन, अम्लसार र चुक्रिका : यी चुक्रका संस्कृत पर्यायवाची नामहरू हुन् । चुक्र तीतो, अमिलो, गुलियो तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले नाकका रोग र दुर्गन्ध तथा विशेषत टाउकाका रोग नाश गर्दछ ।

सौवीरक र तुषोदक

**सौवीरकं सुवीराम्लं ज्ञेयं गोधूमसम्भवम् ।**
**यवाम्लजं यवोत्थं च तुषोत्थं च तुषोदकम् ॥९४॥**

सौवीरक, सुवीराम्ल र गोधूमसम्भव : यी सौवीरकका तथा यवाम्लज, यवोत्थ, तुषोत्थ र तुषोदक : यी तुषोदकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सौवीरकं चाम्लरसं केश्यं मस्तकदोषजित् ।**
**जराशैथिल्यहरणं बलसन्तर्पणं परम् ॥९५॥**

**तण्डुलोत्थं तण्डुलाम्बु कषायं मधुरं लघु ।**
**सङ्ग्राहि विषविच्छर्दितृड्दाहव्रणनाशकृत् ॥**
**तुषाम्बु दीपनं हृद्यं हृत्पाण्डुकृमिरोगनुत् ॥९६॥**

सौवीरक अमिलो, कपालका लागि हितकर, टाउकाका रोगलाई जित्ने, बुढ्यौली र शिथिलता नाशक, बलदायक र अति नै तृप्तिदायक हुन्छ । चामलबाट तयार पारिएको सौवीरकलाई "तण्डुलाम्बु सौवीरक" भनिन्छ । यो सौवीरक, टर्रो, गुलियो, पचाउन सहज, ग्राहि तथा विषविकार, वाकवाकी, तिर्खारोग, डाह र घाउखटिरा नाशक हुन्छ । तुषोदक दीपनी, मुटुका लागि हितकर तथा पाण्डुरोग र पेटका कीरा नाश गर्ने गुणको हुन्छ ।

**भातको काँजी**

**अन्नोदजः शिवरसस्त्र्यहात् पर्युषिते रसे ।**
**दीपनो मधुराम्लस्तु दाहजिल्लघुतर्पणः ॥९७॥**

भातलाई तीन दिनको बासी बनाई त्यसको रसबाट तयार गरिने काँजीविशेषलाई अन्नोदज वा शिवरस भनिन्छ । यो काँजी दीपनी, गुलियो, अमिलो, डाहलाई जित्ने, पचाउन सहज र तृप्तिदायक हुन्छ ।



**गहुँत**

**गोमूत्रं कटुतिक्तोष्णं कफवातहरं लघु ।**
**पित्तकृद्दीपनं मेध्यं त्वग्दोषघ्नं मतिप्रदम् ॥९८॥**

गहुँत पिरो, तीतो, उष्णवीर्यको, कफविकार नाशक, वातविकार नाशक, पचाउन सहज, पित्तविकार बढाउने, दीपनी, सम्झनाशक्ति बढाउने, छालाको रोग नाशक र बुद्धि प्रदायक हुन्छ ।

**भैंसीको मूत्र**

**माहिषं मूत्रमानाहशोफगुल्माक्षिदोषनुत् ।**
**कटूष्णं कुष्ठकण्डूतिशूलोदररुजापहम् ॥९९॥**

भैंसीको मूत्रले आनाह, सुजन, गुल्म र आँखाका रोग नाश गर्दछ । यो पिरो र उष्णवीर्यको हुन्छ । यसले कुष्ठ, चिलाउने रोग, शूल र पेटका रोग नाश गर्दछ ।

### बाख्राको मूत्र

**अजामूत्रं कटूष्णञ्च रूक्षं नाडीविषार्तिजित् ।**
**प्लीहोदरकफश्वास गुल्मशोफहरं लघु ॥१००॥**

बाख्राको मूत्र पिरो, उष्णवीर्यको, रुखो तथा नसाका विकार र विषविकारलाई जित्ने गुणको हुन्छ । यसले फियोका रोग, पेटका रोग, कफविकार, दम, गुल्म र सुजन नाश गर्दछ । यो पचाउन सहज हुन्छ ।

### भेडीको मूत्र

**आविकं तिक्तकटुकं मूत्रमुष्णं च कुष्ठजित् ।**
**दुर्नामोदरशूलास्रशोफमेहविषापहम् ॥१०१॥**

भेडीको मूत्र तीतो, पिरो, उष्णवीर्यको र कुष्ठरोगलाई जित्ने गुणको हुन्छ । यसले अल्काई, पेटको शूल, सुजन, प्रमेह र विषविकार नाश गर्दछ ।

### हात्तीको मूत्र



**हस्तिमूत्रं तु तिक्तोष्णं लवणं वातभूतनुत् ।**
**तिक्तं कषायं शूलघ्नं हिक्काश्वासहरं परम् ॥१०२॥**

हात्तीको मूत्र तीतो, उष्णवीर्यको, नुनिलो तथा वातविकार र भूतबाधा नाशक हुन्छ । यो तीतो, टर्रो, शूल नाशक र विशेषत बाडुली र दम नाशक हुन्छ ।

### घोडाको मूत्र

**अश्वमूत्रं तु तिक्तोष्णं तीक्ष्णं च विषदोषजित् ।**
**वातप्रकोपशमनं पित्तकारि प्रदीपनम् ॥१०३॥**

घोडाको मूत्र तीतो, उष्णवीर्यको, तिक्खर र विषविकारलाई जित्ने गुणको हुन्छ । यसले वातविकारलाई शान्त पार्दछ, पित्तविकार बढाउँदछ र दीपनी हुन्छ ।

### गधाको मूत्र

**खरमूत्रं कटूष्णं च क्षारं तीक्ष्णं कफापहम् ।**
**महावातापहं भूतकम्पोन्मादहरं परम् ॥१०४॥**

गधाको मूत्र पिरो, उष्णवीर्यको, क्षरयुक्त, तिक्खर र कफविकार नाशक हुन्छ । यसले कडा खालको वातविकार, भूतबाधा, काम्ने रोगविशेष र विशेष गरी पागलपनलाई नाश गर्दछ ।

### उँटको मूत्र

**औष्ट्रकं कटु तिक्तोष्णं लवणं पित्तकोपनम् ।**
**बल्यं जठररोगघ्नं वातदोषविनाशनम् ॥१०५॥**

उँटको मूत्र पिरो, तीतो, उष्णवीर्यको, नुनिलो र पित्तविकार गराउने गुणको हुन्छ । यो बलदायक, पेटका रोग नाशक र वातविकार नाशक हुन्छ ।

### मानिसको मूत्र



**मानुषं मूत्रमामघ्नं क्रिमिव्रणविषार्तिनुत् ।**
**तिक्तोष्णं लवणं रूक्षं भूतत्वग्दोषवातजित् ॥१०६॥**

मानिसको पिसाब आमविकार, कीरा, घाउखटिरा र विषविकार नाशक हुन्छ । यो तीतो, उष्णवीर्यको, नुनिलो, रुखो तथा भूतबाधा, छालाका रोग र वातविकार नाशक हुन्छ ।

### गहुँत प्रयोग गरी निको हुने रोगहरू

**शूलगुल्मोदरानाहवातविच्छर्दनादिषु ।**
**मूत्रप्रयोगसाध्येषु गोमूत्रं कल्पयेद्बुधः ॥१०७॥**

शूल, गुल्म, पेटका रोग, आनाह, वातविकार, वाकवाकी आदि ठिक हुने खालका रोगमा विद्वानले ओखतीका रूपमा गहुँतको प्रयोग गर्नू ।

### तेल

**तैलं यत्तिलसर्षपोदितकुसुम्भोत्थातसीधान्यजं**

**यच्चैरण्डकरञ्जकेङ्गुदीफलैर्निम्बाक्षशिग्रवास्थिभिः ।**
**ज्योतिष्मत्यभयोद्भवं मधुरिकाकोशाम्रचिञ्चाभवं**
**कर्पूरत्रपुसादिजञ्च सकलं सिद्धयै क्रमात् कथ्यते ॥१०८॥**

तिल, सर्सिउँ, कुसुम, आलस, अनाज, अँडिर, करञ्ज, अमिलीको फल, नीम, बर, सजिवन, मालकागुनु, हर्रो, मदिसे सुप, सानो जातको आँप, अमिलीका गेडा, कपूर, काँक्रोविशेष आदिबाट निकालिने तेलका विषयमा क्रमशः बताइन्छ ।

### तिलको तेल

**तिलतैलमलङ्करोति केशं मधुरं तिक्तकषायमुष्णतीक्ष्णम् ।**
**बलकृत्कफवातजन्तुखर्जूव्रणकण्डूतिहरं च कान्तिदायि ॥१०९॥**

तिलको तेलले कपाललाई सजाउँदछ । यो गुलियो, तीतो, टर्रो, उष्णवीर्यको र तिक्खर हुन्छ । यो बलदायक तथा कफविकार, वातविकार, कीरा, लुतो, घाउखटिरा र चिलाउने रोग नाशक एवं कान्तिदायक हुन्छ ।



### सर्सिउँको तेल

**सर्षपतैलं तिक्तं कटुकोष्णं वातकफविकारघ्नम् ।**
**पित्तास्रदोषदं क्रिमिकुष्ठघ्नं तिलजवच्च चक्षुष्यम् ॥११०॥**

सर्सिउँको तेल तीतो, पिरो, उष्णवीर्यको तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले रक्तपित्त गराउँदछ तथा कीरा र कुष्ठरोग नाश गर्दछ । यो तिलको तेलजस्तै आँखाका लागि हितकर हुन्छ ।

### कुसुमको तेल

**कुसुम्भतैलं क्रिमिहारि तेजोबलावहं यक्ष्ममलापहं च ।**
**त्रिदोषकृत्पुष्टिबलक्षयं च करोति कण्डूञ्च करोति दृष्टेः ॥१११॥**

कुसुमको तेल कीरा नाशक, तेजोबल दायक, क्षयरोग नाशक र मल नाशक हुन्छ । यसले त्रिदोष गर्दछ तथा पुष्टि र बल घटाउँदछ अनि आँखा चिलाउने रोग निकाल्दछ ।

### आलसको तेल

**मधुरं त्वतसीतैलं पिच्छिलं चानिलापहम् ।**
**मदगन्धि कषायञ्च कफकासापहारकम् ॥११२॥**

आलसको तेल मिठो, लेस्याइलो र वातविकार नाशक हुन्छ । यो मदिरा जस्तो गन्ध दिने, टर्रो तथा कफविकार र खोकी नाशक हुन्छ ।

### अनाजको तेल

**गोधूमयावनालव्रीहियवाद्यखिलधान्यजं तैलम् ।**
**वातकफपित्तशमनं कण्डूकुष्ठादिहारि चक्षुष्यम् ॥११३॥**

गहुँ, जुनेलो, व्रीहि (धान विशेष), जौ आदि समस्त अनाज जन्य तेलले वातविकार, कफविकार पित्तविकारलाई शान्त पार्दछ । यो तेल लुतो, कुष्ठ जस्ता रोग नाशक र आँखाका लागि हितकारी हुन्छ ।

### अँडिरको तेल



**एरण्डतैलं कृमिदोषनाशनं वातामयघ्नं सकलाङ्गशूलहृत् ।**
**कुष्ठापहं स्वादु रसायनोत्तमं पित्तप्रकोपं कुरुतेऽतिदीपनम् ॥११४॥**

अँडिरको तेल कीराजन्य विकार, वातविकार, सबै अङ्गका शूल र कुष्ठरोग नाशक हुन्छ । यो स्वादिलो र उत्तम रसायनी हुन्छ । यसले पित्तविकार गर्दछ र अति नै दीपनी हुन्छ ।

### करञ्जको तेल

**करञ्जतैलं नयनार्तिनाशनं वातामयध्वंसनमुष्णतीक्ष्णकम् ।**
**कुष्ठार्तिकण्डूतिविचर्चिकापहं लेपेन नानाविधचर्मदोषनुत् ॥११५॥**

करञ्जको तेल आँखाका रोग नाशक, वातविकारलाई ध्वस्त बनाउने, उष्णवीर्यको, तिक्खर तथा कुष्ठ, चिलाउने रोग र विचर्चिका रोग नाशक हुन्छ । यो तेल दल्नाले अनेक
प्रकारका छालाका रोगहरू ठिक हुन्छन् ।

**चिउरीको तेल**

**स्निग्धं स्यादिङ्गुदीतैलं मधुरं पित्तनाशनम् ।**
**शीतलं कान्तिदं बल्यं श्लेष्मलं केशवर्धनम् ॥११६॥**

चिउरीको तेल चिल्लो, गुलियो, पित्तविकार नाशक, शीतवीर्यको, कान्तिदायक, बलप्रदायक, कफविकार गर्ने र कपाल बढाउने गुणको हुन्छ ।

**नीमको तेल**

**निम्बतैलं तु नात्युष्णं क्रिमिकुष्ठकफापहम् ॥११७॥**

नीमको तेल धेरै उष्णावीर्य नभएको तथा कीरा, कुष्ठ र कफविकार नाशक हुन्छ ।

**बर्रोको तेल**

**आक्षं स्वादु हिमं केश्यं गुरु पित्तानिलापहम् ॥११८॥**



बर्रोको तेल स्वादिलो, शीतवीर्यको, कपालका लागि हितकर, पचाउन कठिन तथा पित्तविकार र वातविकार नाशक हुन्छ ।

**सजिवनको तेल**

**शिग्रुतैलं कटूष्णञ्च वातजित् कफनाशनम् ।**
**त्वग्दोषव्रणकण्डूतिशोफहारि च पिच्छिलम् ॥११९॥**

सजिवनको तेल पिरो, उष्णवीर्यको, वातविकारलाई जित्ने, कफविकार नाश गर्ने तथा छालाका रोग, घाउखटिरा, चिलाउने रोग र सुजन नाशक हुन्छ । यो लेस्याइलो पनि हुन्छ ।

**मालकागुनुको तेल**

**कटु ज्योतिष्मतीतैलं तिक्तोष्णं वातनाशनम् ।**
**पित्तसन्तापनं मेधा प्रज्ञाबुद्धिविवर्धनम् ॥१२०॥**

मालकागुनुको तेल पिरो, तीतो, उष्णवीर्यको, वातविकार नाशक, पित्तविकार बढाउने तथा दिमागको ग्रहण गर्ने क्षमता, ज्ञान र बुद्धि बढाउने गुणको हुन्छ ।

### हर्रोको तेल

**शीतं हरीतकीतैलं कषायं मधुरं कटु ।**
**सर्वव्याधिहरं पथ्यं नानात्वग्दोषनाशनम् ॥१२१॥**

हर्रोको तेल शीतवीर्यको, टर्रो, गुलियो, पिरो, सबै रोग नाशक, पथ्य र अनेक थरी छालाका रोग नाशक हुन्छ ।

### रायोको तेल

**तीक्ष्णन्तु राजिकातैलं ज्ञेयं वातादिदोषनुत् ।**
**शिशिरं कटु पुंस्त्वघ्नं केश्यं त्वग्दोषनाशनम् ॥१२२॥**

रायोको तेल तिक्खर, वातविकार जस्ता विकार नाशक, शीतवीर्यको, पिरो, पुरुषत्व नाशक, कपालका लागि हितकारी र छालाका रोग नाशक हुन्छ ।

### आँपको तेल



**सरं कोशाम्रजं तैलं क्रिमिकुष्ठव्रणापहम् ।**
**तिक्ताम्लमधुरं बल्यं पथ्यं रोचनपाचनम् ॥१२३॥**

आँपको तेल मलमूत्रलाई तलतिर सार्ने; कीरा, कुष्ठ र घाउखटिरा नाशक, तीतो, अमिलो, गुलियो, बलदायक, पथ्य, रोचनी र पाचनी हुन्छ ।

### अमिलीको तेल

**यच्च चिञ्चाभवं तैलं कटु पाके विलेखनम् ।**
**कफवातहरं रुच्यं कषायं नातिशीतलम् ॥१२४॥**

अमिलीको तेल पिरो र पचेपछि लेखनी हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ । यो रुचिप्रद, टर्रो र थोरै शीतवीर्यको हुन्छ ।

### कपुरको तेल

**कर्पूरतैलहिमतैलसितांशुतैल शीताभ्रतैलतुहिनांशुसुधांशुतैलम् ।**

**कपूरतैलं कटुकोष्णकफामहारि वातामयघ्नरददार्ढ्यदपित्तहारि ॥१२५॥**

कर्पूरतैल, हिमतैल, सितांशुतैल, शीताभ्रतैल, तुहिनांशुतैल र सुधांशुतैल : यी कपुरको तेलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तेल पिरो, उष्णवीर्यको, कफविकार, आमविकार र वातविकार नाशक, दाँत बलियो बनाउने र पित्तविकार नाशक हुन्छ ।

### काँक्रो आदिको तेल

**त्रपुसैर्वारुकचारककुष्माण्डप्रभृतिबीजजं च यत्तैलम् ।**
**तन्मधुरं गुरु शिशिरं केश्यं कफपित्तनाशि कान्तिकरम् ॥१२६॥**

काँक्रो, तीते काँक्रो, चिरौंजी, कुभिण्डो आदिको बियाँबाट बनाइएको तेल गुलियो, पचाउन कठिन, शीतवीर्यको, कपालका लागि हितकर, कफविकार र पित्तविकार नाशक तथा कान्तिदायक हुन्छ ।

### तेलको प्रयोग गर्दाको सावधानी

**तैलं न सेवयेद्धीमान् यस्य कस्य च यद्भवेत् ।**
**विषसाम्यगुणत्वाच्च योगे तत्र प्रयोजयेत् ॥१२७॥**



जे पायो त्यहीको जति पायो त्यति तेल उपयोग गर्न हुँदैन । सबै कुरा जानी आवश्यक मात्रामा मात्र तेल प्रयोग गर्नु पर्दछ नत्र तेल पनि विष समान हानिकारक हुन्छ ।

### विष र तेल उस्तै हुन सक्दछ

**विषस्य तैलस्य न किञ्चिदन्तरं मृतस्य सुप्तस्य न किञ्चिदन्तरम् ।**
**तृणस्य दासस्य न किञ्चिदन्तरं मूर्खस्य काष्ठस्य न किञ्चिदन्तरम् ॥१२८॥**

विष र तेलमा कुनै फरक छैन । यी दुईमा हुने फरक भनेको मरेको र सुतेकोमा कुनै फरक नहुनु जस्तो, मूर्ख र दासमा कुनै फरक नहुनु जस्तो वा मूर्ख र काठमा कुनै फरक नहुनु जस्तै हो । ( अलिकति पनि तलमाथि हुँदा तेलले सर्वस्व जलाइ दिन्छ) ।

### वर्गप्रशस्ति

**इत्थं गवादिकपयःप्रभृतिप्रपञ्च प्रस्ताववर्णिततिलादिकतैलजातम् ।**
**वर्गं निसर्गललितोज्वलशब्दसर्गं बुद्ध्वा भिषक्पतिरशङ्कतया भिषज्येत् ॥१२९॥**

यसरी गाईको दूध र अन्य त्यस्तै दूधजन्य उत्पादनहरू तथा तिलको तेल र अन्य त्यस्तै तेलका बारेमा यस अध्यायमा राम्रोसँग स्पष्ट तरिकाले वर्णन गरिएको छ । यिनका बारेमा सबै जानकारी लिई वैद्यले यी पदार्थ नडराइकन प्रयोग गरुन् ।

**पातारमात्मनः किल यान्ति प्रत्युपचिकीर्षया यानि ।**
**तेषामेव निवासः परिकथितः पेयवर्ग इति कृतिभिः ॥१३०॥**

यो अध्याय आफ्नो ऋण चुक्ता गर्न कृतज्ञ भई आफ्ना रक्षकको सामु उपस्थित हुने महान् आत्माहरुको निवासस्थल हो । यसैले यस अध्यायलाई पेय-वर्ग पनि भनिएको छ ।

**पायं पायं मधुरविमलां शीतलां यस्य कीर्ति-**
**स्रोतोधारां जहति सुजना दुर्जनासङ्गदौस्थ्यम् ।**
**वर्गस्तस्य व्रजति नृहरेर्नामनिर्माणनाम्न-**
**श्चूडारत्ने खलु तिथिमितः क्षीरकादिः समाप्तिम् ॥१३१॥**

विद्वान नरहरीको नाम र कीर्तिरूपी शीतल अमृत बारम्बार पिएर असल भएका मानिसहरू दुष्टको सङ्गतजन्य दुष्प्रभावलाई परित्याग गर्ने गर्दछन् । तिनै नरहरिले लेखेको उत्कृष्ट अभिधान चूडामणि ग्रन्थको क्षीरकादि वर्ग नामक यो अध्याय आजका मितिमा समाप्त हुँदैछ ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ क्षीरादिवर्गः पञ्चदशः समाप्तः ॥१५॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत क्षीरादिवर्ग नामक पन्ध्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१५।**

## शाल्यादि वर्गः

### अनाज

**धान्यं भोग्यञ्च भोगार्हमन्नाद्यं जीवसाधनम् ।**
**तच्च तावत् त्रिधा ज्ञेयं शूकशिम्बीतृणाह्वयम् ॥१॥**

धान्य, भोग्य, भोगार्ह र अन्नाद्य : यी अनाजका संस्कृत पर्यायवाची नामहरू हुन् । अनाज शूक, शिम्बी र तृण गरी तीन प्रकारका हुन्छन् ।

### शुक, शिम्बी र तृण धान्य

**व्रीह्यादिकं यदिह शूकसमन्वितं स्यात्**
**तच्छूकधान्यमथमुद्गमकुष्टकादि ।**
**शिम्बीनिगूढमिति तत् प्रवदन्ति शिम्बी-**
**धान्यं तृणोद्भवतया तृणधान्यमन्यत् ॥२॥**



धान आदि जस्ता बाला वा भुस वा टुँडो हुने अनाजलाई शूकधान्य भनिन्छ । मुगी, वनमुगी आदि जस्ता कोसामा फल्ने अनाजलाई शिम्बीधान्य भनिन्छ । अर्को थरी घाँसपातमा हुने कोदो आदि जस्ता अनाजलाई तृणधान्य भनिन्छ ।

**वातादिदोषशमनं लघु शूकधान्यं**
**तेजोबलातिशयवीर्यविवृद्धिदायि ।**
**शिम्बीभवं गुरु हिमं च विबन्धदायि**
**वातूलकं तु शिशिरं तृणधान्यमाहुः ॥३॥**

शूकधान्यले वातविकार आदि विकारलाई शान्त पार्दछ, पचाउन हलुका हुन्छ तथा तेज, बल र अत्यधिक मात्रामा वीर्य वृद्धि गर्दछ । शिम्बीधान्य पचाउन कठिन, शीतवीर्यको र कब्जियत गराउने गुणको हुन्छ । तृणधान्य वातविकार बढाउने र शीतवीर्यको हुन्छ ।

### शूकधान्यको सङ्ख्या

**देशे देशे शूकधान्येषु सङ्ख्या ज्ञातुं शक्या नैव तद्दैवतैर्वा ।**

**तस्मादेषां येषु भोगोपयोगास्तान्यस्माभिर्व्याक्रियन्ते कियन्ति ॥४॥**

देश नै पिच्छे हुने शुकधान्यको सङ्ख्या थाहा पाउन त्यहाँ रहेका देवताले पनि सक्दैनन् । अतः यी शूकधान्य मध्येमा पनि प्रचलनमा रहेका केही शूकधान्यका बारेमा मात्र यहाँ वर्णन गरिन्छ ।

### शालिधान (शालिधान्य)

**शालयः कलमा रुच्या व्रीहिश्रेष्ठा नृपप्रियाः ।**
**धान्योत्तमाश्च विज्ञेयाः कैदाराः सुकुमारकाः ॥५॥**

शालि, कलमा, रुच्या, व्रीहिश्रेष्ठा, नृपप्रिया, धान्योत्तमा, कैदारा र सुकुमारका : यी नाम शालिधानका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### शालिधान्यका प्रकार

**राजान्नषष्टिकसितेतररक्तमुण्ड स्थूलाणुगन्धनिरपादिकशालिसञ्ज्ञाः ।**
**व्रीहिस्तथेति दशधा भुवि शालयस्तु तेषां क्रमेण गुणनामगणं ब्रवीमि ॥६॥**



राजान्न, षष्टिक, सितेतर, रक्त, मुण्ड, स्थूल, अणु, गन्ध, निरप र व्रीहि गरी पृथ्वीमा दश प्रकारका शालिधान हुन्छन् । ती शालिधानका गुण आदि म क्रमशः बताउँदछु ।

### विभिन्न थरी शालिधान्यका गुण

**राजान्नं दीर्घशूकः खरिपुदिवसजं षष्टिको वर्णतो द्वौ**
**निःशूको मुण्डशालिः स्वगुणविशदितः स्वाभिधानास्त्रयोऽन्ये ।**
**मासैर्योऽन्यस्त्रिभिः स्यात् स भवति निरपो योऽपि वृष्ट्यम्बुसम्भू-**
**रेष स्याद्व्रीहिसञ्ज्ञस्तदिति दशविधाः शालयस्तु प्रसिद्धाः ॥७॥**

राजान्नको टुँडो वा बाला लामो हुन्छ । षष्टिक साठी दिनमा पाक्दछ र रङ अनुसार दुई थरी हुन्छ । टुँडो नहुनेलाई मुण्ड भनिन्छ । अन्य तीन जातका शाली नाम अनुसारकै गुणका हुन्छन् । निरप तीन महिनामा पाक्दछ । व्रीहि लगायत अन्य पाँच थरी शालीलाई भारी वर्षा र प्रशस्त पानी चाहिन्छ । यी प्रसिद्ध दश थरी शालीधान्य हुन् ।

### राजान्न शालि

**शालिर्नवान्नं राजान्नं राजार्हं दीर्घशूककम् ।**

**धान्यश्रेष्ठ राजधान्यं राजेष्टं दीर्घकूरकम्॥८॥**

शालि, नवान्न, राजान्न, राजार्ह, दीर्घशूकक, धान्यश्रेष्ठ, राजधान्य, राजेष्ट र दीर्घकूरक : यी राजान्नका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**राजान्नं तु त्रिदोषघ्नं सुस्निग्धं मधुरं लघु ।**
**दीपनं बलकृत्पथ्यं कान्तिदं वीर्यवर्धनम्॥९॥**

राजान्न त्रिदोष नाशक, अति चिल्लो, गुलियो, पचाउन सहज, दीपनी, बलदायक, पथ्य, कान्तिदायक र वीर्यवर्धक हुन्छ ।

**राजान्नं त्रिविधं स्वशूकभिदया ज्ञेयं सितं लोहितं**
**कृष्णं चेति रसाधिकञ्च तदिदं स्यादौत्तरोत्तर्यतः ।**
**त्रैविध्यादिह तण्डुलाश्च हरिताः श्वेतास्तथा लोहिताः**
**सामान्येन भवन्ति तेऽप्यथ गुणैः स्युः पूर्वपूर्वोत्तराः ॥१०॥**

राजान्न पनि टुँडो वा बाला अनुसार सेतो, रातो र कालो गरी तीन प्रकारको हुन्छ । यी क्रमशः रसिला हुन्छन् । यी धानका चामल पनि क्रमशः हरियो, सेतो र रातो गरी तीन किसिमको हुन्छ । सामान्यतः यी क्रमशः बढी गुनिला हुन्छन् ।



### षष्टिकशालि

**षष्टिकः षष्टिशालिः स्यात् षष्टिजः स्निग्धतण्डुलः ।**
**षष्टिवासरजः सोऽयं ज्ञेयो मासद्वयोद्भवः ॥११॥**

षष्टिक, षष्टिशालि, षष्टिज, स्निग्धतण्डुल, षष्टिवासरज र मासद्वयोद्भव : यी नाम षष्टिकशालिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**गौरो नीलः षष्टिकोऽयं द्विधा स्यादाद्यो रुच्यः शीतलो दोषहारी ।**
**बल्यः पथ्यो दीपनो वीर्यवृद्धिं दत्ते चास्मात्किञ्चिदूनो द्वितीयः ॥१२॥**

षष्टिकशालि रातो मिसिएको सेतो र नीलो गरी दुई थरी हुन्छ । पहिलो रुचिप्रद, शीतवीर्यको र दोषनाशक हुन्छ । यो बलदायक, पथ्य, दीपनी र वीर्यवर्धक हुन्छ । दोश्रो जातको षष्टिकशालि पहिलोभन्दा केही कम गुनिलो हुन्छ ।

## कृष्णशालि

**कृष्णशालिः कालशालिः श्यामशालिः सितेतरः ॥१३॥**
**कृष्णशालिस्त्रिदोषघ्नो मधुरः पुष्टिवर्धनः ।**
**वर्णकान्तिकरो बल्यो दाहजिद्वीर्यवृद्धिकृत् ॥१४॥**

कृष्णशालि, कालशालि, श्यामशालि र सितेतर : यी कृष्णशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो त्रिदोष नाशक, गुलियो, पुष्टिदायक, वर्णमा निखार लेराउने, शरीरमा चमक लेराउने, बलदायक, डाहलाई जित्ने र वीर्यवर्धक हुन्छ ।

## रक्तशालि

**रक्तशालिस्ताम्रशालिः शोणशालिश्च लोहितः ।**
**रक्तशालिः सुमधुरो लघुः स्निग्धो बलावहः ॥१५॥**
**रुचिकृद्दीपनः पथ्यो मुखजाड्यरुजापहः ।**
**सर्वामयहरो रुच्यो पित्तदाहानिलास्रजित् ॥१६॥**

रक्तशालि, ताम्रशालि, शोणशालि र लोहितशालि : यी रक्तशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । रक्तशालि गुलियो, पचाउन सहज, चिल्लो र बलदायक हुन्छ । यो रुचिप्रद, दीपनी, पथ्य, मुखको स्वादहीनता हटाउने, सबै रोग नाशक, रुचिकर तथा पित्तविकार, डाह, वातविकार र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

## मुण्डशालि

**मुण्डशालिर्मुण्डनको निःशूको यवशूकजः ॥१७॥**
**मुण्डशालिस्त्रिदोषघ्नो मधुराम्लो बलप्रदः ॥१८॥**

मुण्डशालि, मुण्डनक, निःशूक र यवशूकज : यी मुण्डशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो त्रिदोष नाशक, गुलियो, अमिलो र बलदायक हुन्छ ।

## स्थूलशालि

**स्थूलशालिर्महाशालिः स्थूलाङ्गः स्थूलतण्डुलः ।**
**एवं गन्धाढ्यशालेश्च नामान्यूह्यानि सूरिभिः ॥१९॥**

स्थूलशालि, महाशालि, स्थूलाङ्ग र स्थूलतण्डुल : यी स्थूलशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । विद्वानले गन्धाढ्यशालीले पनि स्थूलशालिलाई बुझाउँदछ भनेका छन् ।

**महाशालिः स्वादुर्मधुरशिशिरः पित्तशमनो**
**ज्वरं जीर्णं दाहं जठररुजमह्नाय शमयेत् ।**
**शिशूनां यूनां वा यदपि जरतां वा हितकरः**
**सदा सेव्यः सर्वैरनलबलवीर्याणि कुरुते ॥२०॥**

स्थूलशालि स्वादिलो, गुलियो, शीतवीर्यको, पित्तविकार नाशक तथा लामो समय आउने जरो, डाह र पेटका रोगलाई शान्त पार्ने गुणको हुन्छ । यो बालक, जवान र वृद्ध सबैलाई हितकर हुन्छ । पाचनशक्ति, बल र वीर्य बढाउने भएकोले यो शालि सबैबाट सधैं सेवनीय हुन्छ ।

## सूक्ष्मशालि

**सूक्ष्मशालिः सूचिशालिः पोतशालिश्च सूचकः ॥२१॥**
**सूक्ष्मशालिः सुमधुरो लघुः पित्तास्रदाहनुत् ।**
**दीपनः पाचनश्चैव किञ्चिद्वातविकारजित् ॥२२॥**



सूक्ष्मशालि, सूचिशालि, पोतशालि र सूचक(शालि) : यी सूक्ष्मशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मिठो, पचाउन सहज तथा पित्तविकार, रक्तविकार र डाह
नाशक हुन्छ । यो दीपनी, पाचनी र थोरै वातविकारलाई जित्ने गुणको पनि हुन्छ ।

## गन्धशालि

**गन्धशालिस्तु कल्माषो गन्धालुः कलमोत्तमः ।**
**सुगन्धिर्गन्धबहुलः सुरभिर्गन्धतण्डुलः ॥२३॥**
**सुगन्धशालिर्मधुरोऽतिवृष्यदः पित्तश्रमास्रारुचिदाहशान्तिदः ।**
**स्तन्यस्तु गर्भस्थिरताल्पवातदः पुष्टिप्रदश्चाल्पकफश्च बल्यदः ॥२४॥**

गन्धशालि, कल्माष, गन्धालु, कलमोत्तम, सुगन्धि, गन्धबहुल, सुरभि र गन्धतण्डुल : यी गन्धशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, अति वीर्यवर्धक तथा पित्तविकार, थकाई, रक्तविकार, अरुचि र डाहलाई शान्त पार्ने गुणको हुन्छ । यसले दूध बढाउँदछ, गर्भलाई स्थिरता दिन्छ, थोरै वातविकार गर्दछ, पुष्टि दिन्छ, थोरै कफविकार गर्दछ र बल दिन्छ ।

### निरपशालि

**निरपो मधुरः स्निग्धः शीतलो दाहपित्तजित् ।**
**त्रिदोषशमनो रुच्यः पथ्यः सर्वामयापनुत्॥२५॥**

निरपशालि गुलियो, चिल्लो, शीतवीर्यको तथा डाह र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले त्रिदोषलाई शान्त पार्दछ र रुची जगाउँदछ । यो पथ्य र सबै थरी रोग नाशक हुन्छ ।

### सेतो व्रीहिशालि

**व्रीहिर्गौरो मधुरशिशिरः पित्तहारी कषायः**
**स्निग्धो वृष्यः कृमिकफहरस्तापरक्तापहश्च ।**
**पुष्टिं दत्ते श्रमशमनकृद्वीर्यवृद्धिं विधत्ते**
**रुच्योऽत्यन्तं जनयति मुदं वातकृन्मेचकोऽन्यः ॥२६॥**

सेतो व्रीहिशालि गुलियो, शीतवीर्यको, पित्तविकार नाशक, टर्रो, चिल्लो, वीर्यवर्धक, कीरा र कफविकार नाशक, डाह र रक्तविकार नाशक, पुष्टिदायक, थकाई मेटाउने, वीर्यवर्धक, अती रुचिकर र आनन्द दिने गुणको हुन्छ । यसको अन्य मेचक नामक जातले भने वातविकार गर्दछ ।

### शालिका केही थप प्रकारहरू

**मण्डकः स्थूलशालिश्च स्याद्बिम्बशालिकस्तथा ।**
**निजातिशाणहुल्याश्च बिम्बी कौसेन्दुकस्तथा ॥२७॥**
**प्रसाधिका जीरकाख्या सश्यामा मधुरा मता ।**
**राजानां मौलिकस्यापि शालिः स्यादुर्वरी तथा ॥२८॥**
**सूक्ष्मशालिः कुदितिका सुशालिर्गुरुशालयः ।**
**वनशालिर्गुण्डुरूकी क्षीरिका पङ्क्तयः पृथक्॥**
**एतानि शालिनामानि प्रख्यातानि प्रसिद्धतः ॥२९॥**

मण्डक, स्थूलशालि, बिम्बशालि, निजाति, शाणहुलि, बिम्बी, कौसेन्दुक, प्रसाधिका, जीरक, श्यामा, मधुरा, राजशालि, मौलिकशालि, उर्वरी, सूक्ष्मशालि, कुदितिका, सुशालि, गुरुशालि, वनशालि, गुण्डुरूकी, क्षीरिका र पृथक् पङ्क्ति : यी केही प्रसिद्ध शालिधान्यका नामहरू हुन् ।

### व्रीहिषष्टि

**अशोचा पाटला व्रीहिर्व्रीहिको व्रीहिधान्यकः ।**
**व्रीहिसन्धान्यमुद्दिष्टः अर्धधान्यस्तु व्रीहिकः ॥३०॥**
**गर्भे पाकणिकः षष्टिः षष्टिको बलसम्भवः ।**
**सुधान्यं पथ्यकारी च मुपविः प्रज्ञविप्रियः ॥३१॥**

अशोचा, पाटला, व्रीहि, व्रीहिक, व्रीहिधान्यक, व्रीहिसन्धान्य, अर्धधान्यक, व्रीहिक ( दोहोरिएको), गर्भपाकणिक, षष्टि, षष्टिक, बलसम्भव, सुधान्य, पथ्यकारी, मुपवि र प्रज्ञविप्रिय : यी व्रीहिषष्टिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कलमशालि

**शालिस्तु कलमाद्यस्तु कलमो नाकलायकः ।**
**कदम्बपुष्पगन्धश्च कलजातः कलोद्भवः ॥३२॥**
**पित्तश्लेष्मकरो वृष्यः कलमो मधुरस्तथा ॥३३॥**

कलमशालि, कलम, नाकलायक, कदम्बपुष्पगन्ध, कलजात र कलोद्भव : यी कलमशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पित्तविकार र कफविकार गर्दछ । यो वीर्यवर्धक र गुलियो हुन्छ ।

### रक्तशालि विशेष

**लोहितो रक्तशालिः स्यात् काष्ठलोहितशालयः ।**
**रुणाली रुणशालिस्तु रक्तशाल्यः सुशाल्यकः ॥३४॥**
**तृष्णाघ्नो मलकृच्छ्रघ्नो हृद्यस्तु मतिदाः परे ॥३५॥**

लोहित, रक्तशालि, काष्ठशालि, लोहितशालि, रुणाली, रुणशालि, रक्तशाल्य र सुशाल्यक : यी रक्तशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तिर्खारोग नाशक, दिसा लगाउने, कृच्छ्र नाशक, मुटुका लागि हितकर र बुद्धिदायक हुन्छ ।

### सुगन्ध शालि

**महाशालिः सुगन्धा स्यात् सुगन्धा गन्धसम्भवा ।**
**गन्धाढ्या गन्धमाल्या च गन्धानी गन्धमालिनी ॥३६॥**

**सुगन्धा मधुरा हृद्या कफपित्तज्वरास्रजित् ॥३७॥**

महाशालि, सुगन्धा, गन्धसम्भवा, गन्धाढ्या, गन्धमाल्या, गन्धानी र गन्धमालिनी : यी गन्धशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सुगन्धी, गुलियो, मुटुका लागि हितकर तथा कफविकार, पित्तविकार, ज्वर र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

### कुङ्कुम शालि

**जलोद्भवा जलरुहा जलजाता सुजातका ।**
**रक्ताङ्गुलं सुकारश्च कुङ्कुमं समवर्णजा ॥३८॥**
**कुङ्कुमा मधुरा शीता रक्तपित्तातिसारजित् ॥३९॥**

जलोद्भवा, जलरुहा, जलजाता, सुजातका, रक्ताङ्गुल, सुकार, कुङ्कुम र समवर्णजा : यी कुङ्कुमशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतवीर्यको तथा रक्तपित्त र अतिसारलाई जित्ने गुणको हुन्छ ।

### तिलवासिनी शालि



**तिलजा नीलनामा स्याद्दीर्घकृष्णा सुपूजका ।**
**मधुरा च सुगन्धा च तिलवासी निगद्यते ॥४०॥**
**राजादनी राजप्रिया राजभावा मुनिप्रिया ।**
**तिलनी तिलपर्णी च आमगन्धा प्रवासिनी ॥४१॥**
**कफपित्तहराः स्निग्धाः कासश्वासहराः पराः ।**
**शीघ्रपाककरा हृद्या लघवः शुक्रवर्धनाः ॥४२॥**
**कोमलाहारसम्भूतास्तिलवासीमहागुणाः ।**
**पाण्डुरोगेषु शूलेषु चामवाते प्रशस्यते ॥४३॥**

तिलजा, नीलनामा, दीर्घकृष्णा, सुपूजका, मधुरा, सुगन्धा, तिलवासी, राजादनी, राजप्रिया, राजभावा, मुनिप्रिया, तिलनी, तिलपर्णी, आमगन्धा र प्रवासिनी : यी तिलवासिनीशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कफविकार र पित्तविकार नाशक, चिल्लो, विशेषत खोकी र दम नाशक, चाँडै पच्ने, मुटुका लागि हितकर, पचाउन सहज र शुक्रवर्धक हुन्छ । यो नरम आहार धेरै नै गुनिलो हुन्छ । पाण्डु, शूल, आमजन्य र वातविकारमा यो खानु उपयुक्त हुन्छ ।

### वक्तशालि

**वक्तको वक्तशालिः स्यात् दीर्घस्तु आशुकोपितः ।**

**राजप्रिया पथ्यकरा मध्यदेशसमुद्भवा ॥४४॥**
**वक्तिका लघवः प्रोक्ता मुखपाककरास्तथा ॥४५॥**

वक्तक, वक्तशालि, दीर्घ, आशुकोपित, राजप्रिया, पथ्यकरा र मध्यदेशसमुद्भवा : यी वक्तशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका तथा मुखमा ससाना घाउ निकाल्ने गुणको हुन्छ ।

### कलाटकशालि

**कलाटकः कविलः स्याद्भुरुसो गरुडः स्मृतः ।**
**गुरुवको गुरडकः सुखभोजी सुभोजकः ॥४६॥**
**कविलो गन्धकारी च लघुपाककरोऽपि च ।**
**कफपित्तहरः स्वादुः शूलश्वासनिवारणः ॥**
**ग्रहणीगुल्मकुष्ठघ्नो विकलो भोजने शुभः ॥४७॥**

कलाटक, कविल, भुरुस, गरुड, गुरुवक, गुरडक, सुखभोजी र सुभोजक : यी कलाटकशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गनाउने, सजिलै पच्ने, कफविकार र पित्तविकार नाशक, स्वादिलो, शूल र दमलाई शान्त पार्ने, ग्रहणी, गुल्म र कुष्ठ नाशक, दाग नभएको (विकल ?) तथा खानमा असल हुन्छ ।

### कुष्माण्डिकाशालि

**कुष्माण्डिका कुम्भडिका रक्ता सुमधुरा गुरुः ।**
**सुगन्धा दुर्जरा पीता स्थूलतण्डुलकोमला ॥४८॥**

कुष्माण्डिका, कुम्भडिका र रक्ता : यी कुष्माण्डिकाशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, पचाउन कठिन, सुगन्धी, ढिलो पच्ने, पहेँलो रङको, मोटा चामल हुने र नरम गुणको हुन्छ ।

### कुम्भिकाशालि

**कुम्भिका मधुरा स्निग्धा वातपित्तनिबर्हिणी ॥४९॥**

कुम्भिका गुलियो, चिल्लो तथा वातविकार र पित्तविकार नाशक हुन्छ ।

### कौसुम्भी शालि

**सौरभं शुण्डिकः शुण्डी कौसुम्भी कठिनोऽफलः ॥५०॥**
**कौसुम्भी लघुपाका च वातपित्तनिबर्हिणी ॥५१॥**

सौरभ, शुण्डिक, शुण्डी, कौसुम्भी, कठिन र अफल : यी कौसुम्भी शालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचेपछि हलुको हुन्छ र यसले वातविकार र पित्तविकार नाश गर्दछ ।

### उम्पास शालि

**उम्पास उम्पिकाशालिर्मधुरा गुरुतण्डुला ।**
**बहुशूका सुगन्धाढ्या तारुण्यजनवल्लभा ॥५२॥**
**उम्पिका मधुरा स्निग्धा सुगन्धा च कषायका ।**
**पित्तश्लेष्महरा रूक्षा उम्पिकाऽनिलनाशिनी ॥५३॥**

उम्पास, उम्पिकाशालि, मधुरा, गुरुतण्डुला, बहुशूका, सुगन्धाढ्या र तारुण्यजनवल्लभा : यी उम्पासशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, चिल्लो, सुगन्धी, टर्रो, पित्तविकार र कफविकार राशक, रुखो र वातविकार नाशक हुन्छ ।

### पक्षिकशालि

**पक्षिकः पक्षिलावण्यः पक्षिराजो मुनिप्रियः ।**
**स्थूलतण्डुलसम्भूता गन्धो बहलगन्धकृत् ॥५४॥**

पक्षिक, पक्षिलावण्य, पक्षिराज र मुनिप्रिय : यी पक्षिकशालिका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको मोटो चामल हुन्छ तर सुगन्धी र पकाउँदा मिठो बास्ना आउँदछ ।

### उब्जने स्थानविशेषानुसारका शालिधान्यका गुण

**दग्धायामवनौ जाताः शालयो लघुपाकिनः ।**
**किञ्चित् सतिक्ता मधुराः पाचना बलवर्धनाः ॥५५॥**
**केदारा मधुरा वृष्या बल्याः पित्तविवर्धनाः ।**
**ईषत् कषायाल्पमला गुरवः कफनाशनाः ॥५६॥**
**शालयो ये छिन्नरुहा रूक्षास्ते बद्धवर्चसः ॥५७॥**

**रोप्यानिरोप्या लघवः शीघ्रपाका गुणोत्तराः ।**
**विदाहिनो दोषहरा बल्या मूत्रविवर्द्धनाः ॥५८॥**

सुक्खा जमिनमा खेती गरिएको शालि सजिलै पच्दछ । यस्तो चामल केही तीतो, गुलियो, पाचनी र बलवर्धक हुन्छ । खेतमा रोपिने शालि गुलियो तथा वीर्य, बल र पित्त बर्धक हुन्छ । यो चामल थोरै टर्रो, कम दिसा लगाउने, पचाउन कठिन र कफविकार नाशक हुन्छ । एकपटक रोपिएको स्थानमा पुनः उम्रने शालि रुखो र कब्जियत गराउने गुणको हुन्छ । बीउ रोपिने र सोझै छरिने शालि पचाउन सहज, चाँडै पच्ने र गुनिला हुन्छन् । यी डाहकारी, दोष नाशक, बलदायक र पिसाब धेरै लगाउने गुणका हुन्छन् ।

## जुनेलो

**यावनालो यवनालः शिखरो वृत्ततण्डुलः ।**
**दीर्घनालो दीर्घशरः क्षेत्रेक्षुश्चेक्षुपत्रकः ॥५९॥**

यावनाल, यवनाल, शिखर, वृत्ततण्डुल, दीर्घनाल, दीर्घशर, क्षेत्रेक्षु र इक्षुपत्रक : यी जुनेलोका संस्कृत पर्यायवाची नामहरू हुन् ।



## सेतो जुनेलो

**धवलो यावनालस्तु पाण्डुरस्तारतण्डुलः ।**
**नक्षत्राकृतिविस्तारो वृत्तो मौक्तिकतण्डुलः ॥६०॥**
**जूर्णाह्वयो देवधान्यं जूर्णलो बीजपुष्पकः ।**
**जूनलः पुष्पगन्धश्च सुगन्धः सेगुरुन्दकः ॥६१॥**
**धवलो यावनालस्तु गौल्यो बल्यस्त्रिदोषजित् ।**
**वृष्यो रुचिप्रदोऽर्शोघ्नः पथ्यो गुल्मव्रणापहः ॥६२॥**

धवल यावनाल, पाण्डुर, तारतण्डुल, नक्षत्राकृतिविस्तार, वृत्त, मौक्तिकतण्डुल, जूर्णाह्वय, देवधान्य, जूर्णल, बीजपुष्पक, जूनल, पुष्पगन्ध, सुगन्ध र सेगुरुन्दक : यी सेतो जुनेलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो जुनेलो गुलियो, बलदायक र त्रिदोषलाई जित्ने गुणको हुन्छ । यो वीर्यवर्धक, रुचिप्रद, अल्काई नाशक, पथ्य तथा गुल्म र घाउखटिरा नाशक हुन्छ ।

## रातो जुनेलो

**अथ तुवरयावनालस्तुवरश्च कषाययावनालश्च ।**

**स रक्तयावनालो हितलोहितस्तुवरधान्यश्च ॥६३॥**
**तुवरो यावनालस्तु कषायोष्णो विशोफकृत् ।**
**सङ्ग्राही वातशमनो विदाही शोषकारकः ॥६४॥**

तुवरयावनाल, तुवरश्च, कषाययावनाल, रक्तयावनाल, हितलोहित र तुवरधान्य : यी रातो जुनेलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो जुनेलो टर्रो, उष्णवीर्यको, सुजन गराउने, ग्राही, वातविकार शान्त पार्ने, डाहकारी र सुकेनास गराउने गुणको हुन्छ ।

### शारदीय जुनेलो

**शारदो यावनालस्तु श्लेष्मदः पिच्छिलो गुरुः ।**
**शिशिरो मधुरो वृष्यो दोषघ्नो बलपुष्टिदः ॥६५॥**

शारद यावनाल कफविकार गराउने, लेस्याइलो, पचाउन कठिन, शीतवीर्यको, गुलियो, वीर्यवर्धक, दोष नाशक तथा बलदायक र पुष्टिदायक हुन्छ ।

### गहुँ



**गोधूमो बहुदुग्धः स्यादपूपो म्लेच्छभोजनः ।**
**यवनो निस्तुषः क्षीरी रसालः सुमनश्च सः ॥६६॥**

गोधूम, बहुदुग्ध, अपूप, म्लेच्छभोजन, यवन, निस्तुष, क्षीरी, रसाल र सुमन : यी गहुँका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**गोधूमः स्निग्धमधुरो वातघ्नः पित्तदाहकृत् ।**
**गुरुः श्लेष्मामदो बल्यो रुचिरो वीर्यवर्धनः ॥६७॥**

गहुँ चिल्लो, गुलियो, वातविकार नाशक तथा पित्तविकार र डाह गराउने गुणको हुन्छ । यो पचाउन कठिन, कफविकार र आमविकार गराउने, बलदायक, रुचिप्रद र वीर्यवर्धक हुन्छ ।

**स्निग्धोऽन्यो लघुगोधूमो गुरुर्वृष्यः कफापहः ।**
**आमदोषकरो बल्यो मधुरो वीर्यपुष्टिदः ॥६८॥**

अर्को सानो जातको लघुगोधूम पचाउन कठिन, वीर्यवर्धक, कफविकार बढाउने, आमविकार गर्ने, बलदायक, गुलियो तथा वीर्य पुष्ट पार्ने गुणको हुन्छ ।

## जौ

**यवस्तु मेध्यः सितशूकसञ्ज्ञो दिव्योऽक्षतः कञ्चुकिधान्यराजौ ।**
**स्यात्तीक्ष्णशूकस्तुरगप्रियश्च शक्तुर्हयेष्टश्च पवित्रधान्यम् ॥६९॥**
**यवः कषायो मधुरः सुशीतलः प्रमेहजित्तिक्तकफापहारकः ।**
**अशूकमुण्डस्तु यवो बलप्रदो वृष्यश्च नृणां बहुवीर्यपुष्टिदः ॥७०॥**

यव, मेध्य, सितशूक, दिव्य, अक्षत, कञ्चुकि, धान्यराज, तीक्ष्णशूक, तुरगप्रिय, शक्तु, हयेष्ट र पवित्रधान्य : यी जौका संस्कृत पर्यायवाची नामहरू हुन् । जौ टर्रो, गुलियो, शीतवीर्यको, प्रमेहलाई जित्ने, तीतो र कफविकार नाशक हुन्छ । मुडुले-जौ बलदायक, पौष्टिक तथा मानिसलाई धेरै वीर्यदायक र पुष्टिदायक हुन्छ ।

## बाँसका गेडा

**वेणुजो वेणुबीजश्च वंशजो वंशतण्डुलः ।**
**वंशधान्यं च वंशाह्वो वेणुवंशद्विधायवः ॥७१॥**
**शीतः कषायो मधुरस्तु रूक्षो मेहक्रिमिश्लेष्मविषापहश्च ।**
**पुष्टिं च वीर्यञ्च बलञ्च दत्ते पित्तापहो वेणुयवः प्रशस्तः ॥७२॥**

वेणुज, वेणुबीज, वंशज, वंशतण्डुल, वंशधान्य, वंशाह्व र वेणुवंश : यी बाँसका गेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दुई प्रकारको हुन्छ । यो शीतवीर्यको, टर्रो, गुलियो, रुखो तथा प्रमेह, कीरा, कफविकार र विषविकार नाशक हुन्छ । यसले पुष्टि, वीर्य र बल दिन्छ तथा पित्तविकार नाश गर्नमा यो उत्तम हुन्छ ।

## मुगी

**मुद्गस्तु सूपश्रेष्ठः स्याद्वर्णार्हश्च रसोत्तमः ।**
**भुक्तिप्रदो हयानन्दो भूबलो वाजिभोजनः ॥७३॥**

मुद्ग, सूपश्रेष्ठ, वर्णार्ह, रसोत्तम, भुक्तिप्रद, हयानन्द, भूबल र वाजिभोजन : यी मुगीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## कालो मुगी

**कृष्णमुद्गस्तु वासन्तो माधवश्च सुराष्ट्रजः ॥७४॥**

**कृष्णमुद्गस्त्रिदोषघ्नो मधुरो वातनाशनः ।**
**लघुश्च दीपनः पथ्यो बलवीर्याङ्गपुष्टिदः ॥७५॥**

कृष्णमुद्ग, वासन्त, माधव र सुराष्ट्रज : यी कालो मुगीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुगी त्रिदोष नाशक, गुलियो, वात नाशक, पचाउन सहज, दीपनी, पथ्य, बलदायक, वीर्यवर्धक र अङ्गहरू पुष्ट पार्ने गुणको हुन्छ ।

**शारदीय मुगी**

**शारदस्तु हरिन्मुद्गो धूसरोऽन्यश्च शारदः ॥७६॥**
**हरिन्मुद्गः कषायश्च मधुरः कफपित्तहृत् ।**
**रक्तमूत्रामयघ्नश्च शीतलो लघुदीपनः ॥७७॥**

शारद मुद्ग, हरित मुद्ग र शारद धूसर मुद्ग : यी शारदीय मुगीका संस्कृत पर्यायवाची नामहरू हुन् । शारदीय मुगी टर्रो, गुलियो तथा कफविकार, पित्तविकार, रक्तविकार र मूत्रविकार नाशक हुन्छ । यो शीतवीर्यको, पचाउन सहज र दीपनी हुन्छ ।

**फुस्रो मुगी**



**तद्वच्च धूसरो मुद्गो रसवीर्यादिषु स्मृतः ।**
**कषायो मधुरो रुच्यः पित्तवातविबन्धकृत् ॥७८॥**

फुस्रो मुगीको रस, वीर्य आदि गुण शारदीय मुगीको जस्तै हुन्छ । यो टर्रो, गुलियो, रुचिप्रद तथा पित्तविकार, वातविकार र कब्जियत गराउने गुणको हुन्छ ।

**मुगीको रस**

**पित्तज्वरार्तिशमनं लघु मुद्गयूषं सन्तापहारि तदरोचकनाशनञ्च ।**
**रक्तप्रसादनमिदं यदि सैन्धवेन युक्तं तदा भवति सर्वरुजापहारि ॥७९॥**

मुगीको रस ज्वरलाई शान्त पार्ने, पचाउन सहज, डाह र अरुची नाशक र रगतलाई शुद्ध बनाउने गुणको हुन्छ । मुगीको रसमा सिँधेनुन मिसाएपछि यो सबै खालका रोग नाश गर्ने हुन्छ ।

**मास**

**माषस्तु कुरुविन्दः स्याद्धान्यवीरो वृषाकरः ।**

**मांसलश्च बलाढ्यश्च पित्तपश्च पितृजोत्तमः ॥८०॥**

माष, कुरुविन्द, धान्यवीर, वृषाकर, मांसल, बलाढ्य, पित्तप र पितृजोत्तम : यी मासका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**माषः स्निग्धो बहुमलकरः शोषणः श्लेष्मकारी**
**वीर्येणोष्णो झटिति कुरुते रक्तपित्तप्रकोपम् ।**
**हन्याद्वातं गुरुबलकरो रोचनो भक्ष्यमाणः**
**स्वादुर्नित्यं श्रमसुखवतां सेवनीयो नराणाम् ॥८१॥**

मास चिल्लो, धेरै दिसा लगाउने, रसलाई सुकाउने, कफविकार गराउने, उष्णवीर्यको, तुरुन्त रक्तपित्त गराउने, वातविकार नाशक, पचाउन कठिन, बलदायक, खाँदा रोचनी र स्वादिलो हुन्छ । थकाई मेटेर आनन्द लिन चाहने मानिसहरूका लागि यो सधैँ सेवनीय हुन्छ ।

**राज्मा (बोडी विशेष)**

**राजमाषो नीलमाषो नृपमाषो नृपोचितः ॥८२॥**
**कफपित्तहरो रुच्यो वातकृद्बलदायकः ॥८३॥**

राजमाष, नीलमाष, नृपमाष र नृपोचित : यी राज्माका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार र पित्तविकार नाश गर्दछ, रुची जगाउँदछ, वातविकार गर्दछ र बल दिन्छ ।

**चनाका पर्यायवाची नामहरू**

**चणस्तु हरिमन्थः स्यात् सुगन्धः कृष्णकञ्चुकः ।**
**बालभोज्यो वाजिभक्षश्चणकः कञ्चुकी च सः ॥८४॥**

चण, हरिमन्थ, सुगन्ध, कृष्णकञ्चुक, बालभोज्य, वाजिभक्ष, चणक र कञ्चुकी : यी चनाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**चनाका गुण**

**चणको मधुरो रूक्षो मेहजिद्वातपित्तकृत् ।**
**दीप्तिवर्णकरो बल्यो रुच्यश्चाध्मानकारकः ॥८५॥**

चना गुलियो, रुखो, प्रमेहलाई जित्ने तथा वातविकार र पित्तविकार गराउने गुणको हुन्छ । यसले शरीरको कान्ति र वर्णलाई उज्यालो पार्दछ, बल दिन्छ, रुची जगाउँदछ तथा आध्मान पनि गराउँदछ ।

### काँचो चना

**आमश्चणः शीतलरुच्यकारी सन्तर्पणो दाहतृषापहारी ।**
**गौल्योऽश्मरीशोषविनाशकारी कषाय ईषत् कटु वीर्यकारी ॥८६॥**

काँचो चना शीतवीर्यको, रुचिप्रद, तृप्तिदायक तथा डाह र तिर्खारोग नाशक हुन्छ । यो गुलियो हुन्छ । यसले पत्थरी र सुकेनास नाश गर्दछ । यो टर्रो, केही पिरो र वीर्यवर्धक हुन्छ ।

### कालो चना

**कृष्णस्तु चणकः शीतो मधुरः कासपित्तहृत् ।**
**पित्तातिसारकासघ्नो बल्यश्चैव रसायनः ॥८७॥**

कालो चना शीतवीर्यको, गुलियो तथा खोकी र पित्तविकार नाशक हुन्छ । यसले पित्तजन्य अतिसार र खोकी पनि नाश गर्दछ । कालो चना बलदायक र रसायनी हुन्छ ।



### सेतो-रातो चना

**चणो गौरस्तु मधुरो बलकृद्रोचनः परः ।**
**श्वेतो वातकरो रुच्यः पित्तघ्नः शिशिरो गुरुः ॥८८॥**

सेतो-रातो चना गुलियो, बलदायक र अत्यन्त रुचिप्रद हुन्छ । सेतो चना वातविकार गर्ने, रुचिप्रद, पित्तविकार नाशक, शीतवीर्यको र पचाउन कठिन हुने गुणको हुन्छ ।

### भुटेको चना

**सुभृष्टचणको रुच्यो वातघ्नो रक्तदोषकृत् ।**
**वीर्येणोष्णो लघुश्चैव कफशैत्यापहारकः ॥८९॥**

राम्ररी भुटिएको चना रुचिप्रद, वातविकार नाशक, रक्तविकार गर्ने, उष्णवीर्यको, पचाउन सहज तथा कफविकार र चिसो लागेको नाश गर्ने गुणको हुन्छ ।

## चनाको दाल

**चणस्य यूषं मधुरं कषायं कफापहं वातविकारहेतुः ।**
**श्वासोर्ध्ववकासक्लमपीनसानां करोति नाशं बलदीपनत्वम् ॥९०॥**

चनाको दाल वा रस गुलियो, टर्रो, कफविकार नाशक र वातविकार गराउने गुणको हुन्छ । यसले दम, श्वासनलीको माथिल्लो भागमा विकार उत्पन्न भई लाग्ने खोकी, मानसिक थकाई र पिनासलाई नाश गर्दछ । यो बलदायक र दीपनी हुन्छ ।

## चना भिजाइएको पानी

**चणोदकं चन्द्रमरीचिशीतं पीतं प्रगे पित्तरुजापहारि ।**
**पुष्टिप्रदं नैजगुणं च पाके सन्तर्पणं मञ्जुलमाधुरीकम् ॥९१॥**

रातभर चन्द्रमाको किरण पर्नेगरी भिजाएर राखिएको चना-पानी बिहान पिउने गरेमा यसले पित्तजन्य रोगहरू नाश गर्दछ । यो पौष्टिक हुन्छ र पचेपछि आफ्ना गुणहरू देखाउन थाल्दछ । यो तृप्तिदायक र स्वरमा मिठास लेराउने गुणको हुन्छ ।



## वनमुगी

**मकुष्टको मयष्टश्च वनमुद्गः कृमीलकः ।**
**अमृतोऽरण्यमुद्गश्च वल्लीमुद्गश्च कीर्तितः ॥९२॥**
**मकुष्टकः कषायः स्यान्मधुरो रक्तपित्तजित् ।**
**ज्वरदाहहरः पथ्यो रुचिकृत्सर्वदोषहृत् ॥९३॥**

मकुष्टक, मयष्ट, वनमुद्ग, कृमीलक, अमृत, अरण्यमुद्ग र वल्लीमुद्ग : यी वनमुगीका संस्कृत पर्यायवाची नामहरू हुन् । वनमुगी टर्रो, गुलियो, रक्तपित्तलाई जित्ने, ज्वर र डाह नाशक, पथ्य, रुचिप्रद र सबै रोग नाशक हुन्छ ।

## मुसुरो

**मसूरो रागदालिस्तु मङ्गल्यः पृथुबीजकः ।**
**शूरः कल्याणबीजश्च गुरुबीजो मसूरकः ॥९४॥**
**मसूरो मधुरः शीतः सङ्ग्राही कफपित्तजित् ।**
**वातामयकरश्चैव मूत्रकृच्छ्रहरो लघुः ॥९५॥**

मसूर, रागदालि, मङ्गल्य, पृथुबीजक, शूर, कल्याणबीज, गुरुबीज र मसूरक : यी मुसुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । मुसुरो गुलियो, शीतवीर्यको, ग्राहि, कफविकार र पित्तविकारलाई जित्ने, वातविकार गर्ने, मूत्रकृच्छ्र नाशक र पचाउन सहज हुने गुणको हुन्छ ।

**मटरकोसा (कलाय)**

**कलायो मुण्डचणको हरेणुश्च सतीनकः ।**
**त्रासनो नालकः कण्ठी सतीनश्च हरेणुकः ॥९६॥**
**कलायः कुरुते वातं पित्तदाहकफापहः ।**
**रुचिपुष्टिप्रदः शीतः कषायश्चामदोषकृत् ॥९७॥**

कलाय, मुण्डचणक, हरेणु, सतीनक, त्रासन, नालक, कण्ठी, सतीन र हरेणुक : यी मटरकोसाका संस्कृत पर्यायवाची नामहरू हुन् । मटरकोसाले वातविकार गर्दछ तथा पित्तविकार, डाह र कफविकार नाश गर्दछ । यो रुचिप्रद, पुष्टिदायक, शीतवीर्यको, टर्रो र आमविकार गराउने गुणको हुन्छ ।

**खेसरी**



**लङ्का कराला त्रिपुटा काण्डिका रूक्षणात्मिका ॥९८॥**
**लङ्का रुच्या हिमा गौल्या पित्तजिद्वातकृद्गुरुः ॥९९॥**

लङ्का, कराला, त्रिपुटा, काण्डिका र रूक्षणात्मिका : यी खेसरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिप्रद, शीतवीर्यको, गुलियो, पित्तविकारलाई जित्ने, वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

**रहर**

**आढकी तुवरी वर्या करवीरभुजा तथा ।**
**वृत्तबीजा पीतपुष्पा श्वेता रक्ताऽसिता त्रिधा ॥१००॥**
**आढकी तु कषाया च मधुरा कफपित्तजित् ।**
**ईषद्वातकरा रुच्या विदला गुरुग्राहिका ॥१०१॥**
**सा च श्वेता दोषदात्री तु रक्ता रुच्या बल्या पित्ततापादिहन्त्री ।**
**सा श्यामा चेद्दीपनी पित्तदाहध्वंसा बल्यश्चाढकीयूषमुक्तम् ॥१०२॥**

आढकी, तुवरी, वया, करवीरभुजा, वृत्तबीजा र पीतपुष्पा : यी रहरका संस्कृत पर्यायवाची नामहरू हुन् । रहर सेतो, रातो र कालो गरी तीन किसिमको हुन्छ । यो टर्रो, गुलियो तथा कफविकार र पित्तविकारलाई जित्ने गुणको हुन्छ । यसले थोरै वातविकार गर्दछ । यो रुचिप्रद हुन्छ । यसको दाल पचाउन कठिन र ग्राहि हुन्छ । सेतो रहर दोषयुक्त हुन्छ । रातो रहर रुचीप्रद, बलदायक तथा पित्तविकार, जरो आदि नाशक हुन्छ । कालो रहर दीपनी, पित्तविकार र डाह नाशक एवं बलदायक हुन्छ । यी रहरका थोरै पानी हाली पकाइएका दालका लक्षणहरू हुन् ।

**गहत**

**कुलित्थस्ताम्रबीजश्च श्वेतबीजः सितेतरः ॥१०३॥**
**कुलित्थस्तु कषायोष्णो रूक्षो वातकफापहः ॥१०४॥**

कुलित्थ, ताम्रबीज, श्वेतबीज र सितेतर : यी गहतका संस्कृत पर्यायवाची नामहरू हुन् । गहत टर्रो, उष्णवीर्यको, रुखो तथा वातविकार र कफविकार नाशक हुन्छ ।

**बोडी**

**क्षवः क्षुधाऽभिजननश्चपलो दीर्घशिम्बिकः ।**

**सुकुमारो वृत्तबीजो मधुरः क्षवकश्च सः ॥१०५॥**
**क्षवः कषायमधुरः शीतलः कफपित्तहृत् ।**
**वृष्यः श्रमहरो रुच्यः पवनाध्मानकारकः ॥१०६॥**

क्षव, क्षुधाभिजनन, चपल, दीर्घशिम्बिक, सुकुमार, वृत्तबीज, मधुर र क्षवक : यी बोडीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, गुलियो, शीतवीर्यको तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यो वीर्यवर्धक, थकाई नाशक, रुचिप्रद तथा वातविकार र आध्मान गराउने गुणको हुन्छ ।

**सिमी**

**मधुरः श्वेतनिष्पावो माध्वीका मधुशर्करा ।**
**पलङ्कषा स्थूलशिम्बी वृत्ता मधुसिता सिता ॥१०७॥**
**मधुशर्करा सुरुच्या मधुराल्पकषायका ।**
**शिशिरा वातुला बल्याऽप्याध्मानगुरुपुष्टिदा ॥१०८॥**
**सोऽन्यश्च कटुनिष्पावः खर्वुरो नदीजस्तथा ॥१०९॥**
**नदीनिष्पावकस्तिक्तः कटुकोऽस्रप्रदो गुरुः ।**
**वातलः कफदो रूक्षः कषायो विषदोषनुत् ॥११०॥**

मधुर, श्वेतनिष्पाव, माध्वीका, मधुशर्करा, पलङ्कषा, स्थूलशिम्बी, वृत्ता, मधुसिता र सिता : यी सिमीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिप्रद, गुलियो र हल्का टर्रो हुन्छ । यो शीतवीर्यको, वातविकार गर्ने बलदायक, आध्मान गराउने, पचाउन कठिन र पौष्टिक हुन्छ । यसका कटुनिष्पाव, खर्वुर र नदीज गरी अन्य तीन जात हुन्छन् । नदीनिष्पाव तीतो, पिरो, रक्तप्रवाही र पचाउन कठिन हुन्छ । यसले वातविकार र कफविकार बढाउँदछ । यो रुखो, टर्रो र विषविकार नाशक हुन्छ ।

### तिल

**तिलस्तु होमधान्यं स्यात् पवित्रः पितृतर्पणः ।**
**पापघ्नः पूतधान्यश्च जटिलस्तु वनोद्भवः ॥१११॥**
**स्निग्धो वर्णबलाग्निवृद्धिजननस्तन्यानिलघ्नो गुरुः**
**सोष्णः पित्तकरोऽल्पमूत्रकरणः केश्योऽतिपथ्यो व्रणे ।**
**सङ्ग्राही मधुरः कषायसहितस्तिक्तो विपाके कटुः**
**कृष्णः पथ्यतमः सितोऽल्पगुणदः क्षीणास्तथान्येतिलाः ॥११२॥**



तिल, होमधान्य, पवित्र, पितृतर्पण, पापघ्न, पूतधान्य, जटिल र वनोद्भव : यी तिलका संस्कृत पर्यायवाची नामहरू हुन् । तिल चिल्लो; वर्ण, बल र पाचकाग्नि वर्धक; दूध बढाउने, वातविकार नाशक र पचाउन कठिन हुने गुणको हुन्छ । यो उष्णवीर्यको, पित्तविकार गर्ने, थोरै पिसाब लगाउने, कपालका लागि हितकर, घाउखटिरा हुँदा अति पथ्य, ग्राही, गुलियो, टर्रो, तीतो र पचेपछि पिरो हुन्छ । कालो तिल बढी पथ्य हुन्छ । सेतो तिल थोरै गुनिलो हुन्छ । अन्य तिल त्यति गुनिला हुँदैनन् ।

### तिलको छोप (तिलकल्क)

**पललं तिलकल्कं स्यात्तिलचूर्णञ्च पिष्टकम् ॥११३॥**
**पललं मधुरं रुच्यं पित्तास्रबलपुष्टिदम् ॥११४॥**

पलल, तिलकल्क, तिलचूर्ण र पिष्टक : यी तिलको छोपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, रुचिप्रद, पित्तविकार गर्ने, रक्तविकार गर्ने तथा बलदायक र पौष्टिक हुन्छ ।

### तिलको पिना (तिलकिट्ट)

**तिलकिट्टन्तु पिण्याकः खलः स्यात् तिलकल्कजः ॥११५॥**

**पिण्याकः कटुको गौल्यः कफवातप्रमेहनुत्॥११६॥**

तिलकिट्ट, पिण्याक, खल र तिलकल्कज : यी तिलको पिनाका संस्कृत पर्यायवाची नामहरू हुन्। यो पिरो, गुलियो तथा कफविकार, वातविकार र प्रमेह नाशक हुन्छ।

## आलस (अतसी)

**अतसी पिच्छला देवी मदगन्धा मदोत्कटा।**
**उमा क्षुमा हैमवती सुनीला नीलपुष्पिका॥११७॥**
**अतसी मदगन्धा स्यान्मधुरा बलकारिका।**
**कफवातकरी चेषत् पित्तहृत् कुष्ठवातनुत्॥११८॥**

अतसी, पिच्छला, देवी, मदगन्धा, मदोत्कटा, उमा, क्षुमा, हैमवती, सुनीला र नीलपुष्पिका : यी आलसका संस्कृत पर्यायवाची नामहरू हुन्। यो मदिरा जस्तो गन्ध आउने, गुलियो, बलदायक, कफविकार र वातविकार गर्ने तथा थोरै पित्तविकार, कुष्ठजन्य वातविकार नाशक हुन्छ।

## रायो



**आसुरी राजिका राजी रक्तिका रक्तसर्षपः।**
**तीक्ष्णगन्धा मधुरिका क्षवकः क्षुवकः क्षवः॥११९॥**
**आसुरी कटुतिक्तोष्णा वातप्लीहार्तिशूलनुत्।**
**दाहपित्तप्रदा हन्ति कफगुल्मकृमिव्रणान्॥१२०॥**

आसुरी, राजिका, राजी, रक्तिका, रक्तसर्षप, तीक्ष्णगन्धा, मधुरिका, क्षवक, क्षुवक र क्षव : यी रायोका संस्कृत पर्यायवाची नामहरू हुन्। यो पिरो, तीतो, उष्णवीर्यको तथा वातविकार, फियोका रोग र शूल नाशक हुन्छ। यसले डाह र पित्तविकार गर्दछ तथा कफविकार, गुल्म, कीरा र घाउखटिरा नाश गर्दछ।

## काल्तोरी

**राजक्षवकः कृष्णस्तीक्ष्णफला राजराजिका राज्ञी।**
**सा कृष्णसर्षपाख्या विज्ञेया राजसर्षपाख्या च॥१२१॥**
**राजसर्षपकस्तिक्तः कटूष्णो वातशूलनुत्।**
**पित्तदाहप्रदो गुल्मकण्डूकुष्ठव्रणापहः॥१२२॥**

राजक्षवक, कृष्ण, तीक्ष्णफला, राजराजिका, राज्ञी, कृष्णसर्षपा र राजसर्षपा : यी काल्तोरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो, उष्णवीर्यको तथा वातविकार र शूल नाशक हुन्छ । यसले पित्तविकार र डाह गराउँदछ तथा गुल्म, लुतो, कुष्ठ र घाउखटिरा नाश गर्दछ ।

### सर्सिउँ

**तीक्ष्णकश्च दुराधर्षो रक्षोघ्नः कुष्ठनाशनः ।**
**सिद्धप्रयोजनः सिद्धसाधनः सितसर्षपः ॥१२३॥**
**सिद्धार्थः कटुतिक्तोष्णो वातरक्तग्रहापहः ।**
**त्वग्दोषशमनो रुच्यो विषभूतव्रणापहः ॥१२४॥**

तीक्ष्णक, दुराधर्ष, रक्षोघ्न, कुष्ठनाशन, सिद्धप्रयोजन, सिद्धसाधन र सितसर्षप : यी सेतो सर्सिउँका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो, उष्णवीर्यको तथा वातरक्त र ग्रहबाधा नाशक हुन्छ । यसले छालाको रोग शान्त पार्दछ, रुचिप्रद तथा विषविकार, भूतबाधा र घाउखटिरा नाशक हुन्छ ।

### शिम्बी धान्य



**धान्यानां कञ्चुके शिम्बी बीजगुप्तिश्च शाम्भवी ।**
**तद्गुप्तानि च धान्यानि शिम्बीधान्यानि चक्षते ॥१२५॥**

भुसिला कोसा भित्र हुने अनाजलाई शिम्बी, बीजगुप्ति वा शाम्भवी भनिन्छ । यसरी छोपिएको कोसेबालीलाई शिम्बीधान्य भनिन्छ ।

### सामाधान

**श्यामाकः श्यामकः श्यामस्त्रिबीजः स्यादविप्रियः ।**
**सुकुमारो राजधान्यं तृणबीजोत्तमश्च सः ॥१२६॥**
**श्यामाको मधुरः स्निग्धः कषायो लघुशीतलः ।**
**वातकृत्कफपित्तघ्नः सङ्ग्राही विषदोषनुत् ॥१२७॥**

श्यामाक, श्यामक, श्याम, त्रिबीज, अविप्रिय, सुकुमार, राजधान्य र तृणबीजोत्तम : यी सामाधानका संस्कृत पर्यायवाची नामहरू हुन् । सामाधान गुलियो, चिल्लो, टर्रो, पचाउन सहज र शीतवीर्यको हुन्छ । यसले वातविकार गर्दछ तथा कफविकार र पित्तविकार नाश गर्दछ । यो ग्राहि र विषविकार नाशक हुन्छ ।

## कोदो

**कोद्रवः कोरदूषश्च कुद्दालो मदनाग्रजः ।**
**स च देशविशेषेण नानाभेदः प्रकीर्त्तितः ॥१२८॥**
**कोद्रवो मधुरस्तिक्तो व्रणिनां पथ्यकारकः ।**
**कफपित्तहरो रूक्षो मोहकृद्वातलो गुरुः ॥१२९॥**

कोद्रव, कोरदूष, कुद्दाल र मदनाग्रज : यी कोदोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो देश (स्थान) अनुसार अनेक थरीको हुन्छ । कोदो गुलियो, तीतो तथा घाउखटिरा हुनेहरूका लागि पथ्य हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । यो रुखो, मोहदायक, वातविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ ।

## ठूलो जातको कागुनो

**वरकः स्थूलकङ्गुश्च रूक्षः स्थूलप्रियङ्गुकः ॥१३०॥**
**वरको मधुरो रूक्षः कषायो वातपित्तकृत् ॥१३१॥**



वरक, स्थूलकङ्गु, रूक्ष र स्थूलप्रियङ्गुक : यी ठुलो जातको कागुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, रुखो, टर्रो तथा वातविकार र पित्तविकार गर्ने गुणको हुन्छ ।

## कागुनु

**कङ्गुणी कङ्गुनी प्रोक्ता चीनकः पीततण्डुलः ।**
**वातलः सुकुमारश्च स च नानाविधाभिधः ॥१३२॥**
**प्रियङ्गुर्मधुरो रुच्यः कषायः स्वादुशीतलः ।**
**वातकृत् पित्तदाहघ्नो रूक्षो भग्नास्थिबन्धकृत् ॥१३३॥**

कङ्गुणी, कङ्गुनी, चीनक, पीततण्डुल, वातल र सुकुमार : यी कागुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अनेक प्रकारको हुन्छ र यसलाई प्रियङ्गु पनि भनिन्छ । कागुनु गुलियो, रुचिवर्धक, टर्रो, स्वादिलो र शीतवीर्यको हुन्छ । यसले वातविकार गर्दछ तथा पित्तविकार र डाह नाश गर्दछ । यो रुखो र भाँचिएका हाड जोड्नमा उपयोगी हुन्छ ।

## नाभो धान (नीवार)

**नीवारोऽरण्यधान्यं स्यान्मुनिधान्यं तृणोद्भवम् ॥१३४॥**

**नीवारो मधुरः स्निग्धः पवित्रः पथ्यदो लघुः ॥१३५॥**

नीवार, अरण्यधान्य, मुनिधान्य र तृणोद्भव : यी नाभो धानका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, चिल्लो, पवित्र, पथ्य र पचाउन सहज हुन्छ ।

### मडिलो

**रागी तु लाञ्छनः स्याद्बहुदलकणिशश्च गुच्छकणिशश्च ॥१३६॥**
**तिक्तो मधुरकषायः शीतः पित्तास्रनाशनो बलदः ॥१३७॥**

रागी, लाञ्छन, बहुदलकणिश र गुच्छकणिश : यी रागीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, गुलियो, टर्रो, शीतवीर्यको तथा रक्तपित्त नाशक र बलदायक हुन्छ ।

### जई (कुरी वा ओट्स)

**कुरी तु तृणधान्यं स्यान्मधुरं तद्बलप्रदम् ।**
**हरितं वार्धकं पक्वं वाजिनां पुष्टिदायकम् ॥१३८॥**



जई एक गुलियो र बलदायक तृणधान्य हो । यो जब बढेर पाकी हरियो हुन्छ तब यो घोडाका लागि पुष्टिकर हुन्छ ।

### लाजा र धाना

**ये के च व्रीहयो भृष्टास्ते लाजा इति कीर्तिताः ॥१३९॥**
**यवादयश्च ये भृष्टा धानास्ते परिकीर्तिताः ॥१४०॥**
**लाजा च यवधाना च तर्पणी पित्तनाशिनी ।**
**गोधूमयावनालोत्थाः किञ्चिदुष्णाश्च दीपनाः ॥१४१॥**

बालामा फल्ने वा टुँडो भएका वा भुस भएका धान आदि जुनसुकै (सुक्खा) भुटिएका अन्नलाई पनि लाजा भनिन्छ । भुटिएको जौ आदिलाई धाना भनिन्छ । लाजा र धाना दुवै तृप्तिदायक र पित्तविकार नाशक हुन्छन् । भुटेको गहुँ र जुनेलो केही उष्णवीर्यको र दीपनी पनि हुन्छ ।

### आकुला

**तप्तैरपक्वगोधूमैराकुलाः परिकीर्तिताः ।**

**आकुला गुरवो वृष्या मधुराः बलकारिणः ॥१४२॥**

उमालिएको वा भुटिएको नपाकेको गहुँलाई आकुला भनिन्छ । आकुला पचाउन कठिन, वीर्यवर्धक, गुलियो र बलदायक हुन्छ ।

### पृथुका

**व्रीह्योऽप्यर्धपक्वाश्च तप्तास्ते पृथुकाः स्मृताः ।**
**पृथुकाः स्वादवः स्निग्धा हृद्या मदनवर्धनाः ॥१४३॥**

उमालेको वा भुटेको नपाकेको व्रीहिलाई पृथुका भनिन्छ । पृथुका स्वादिलो, चिल्लो, मुटुका लागि हितकर र कामवासना बढाउने गुणको हुन्छ ।

### पुवा

**पूपला मधुराः प्रोक्ता वृष्यास्ते बलदाः स्मृताः ।**
**पित्तहृत्तर्पणा हृद्याः स्निग्धास्ते बलवर्द्धनाः ॥१४४॥**



पुवा गुलियो, वीर्यवर्धक, बलदायक, पित्तविकार नाशक, तृप्तिदायक, मुटुका लागि हितकर, चिल्लो र बलवर्धक हुन्छ ।

### चिउरा (चिपिटा)

**ये चान्ये यावनालाद्याश्चिपिटास्तप्ततण्डुलाः ।**
**शालेययावनालीय-चिपिटाः पुष्टिवर्धनाः ॥१४५॥**

अन्य जुनेलो (मकै, गहुँ, धान) आदि उमालेर भुटी थेप्चो बनाइएका अनाजका दानालाई चिउरा भनिन्छ । शालिधान र जुनेलोको चिउरा पौष्टिक हुन्छ ।

### दुग्धबीजा

**अतप्ततण्डुलास्ते तु दुग्धबीजाः प्रकीर्तिताः ॥१४६॥**
**दुग्धबीजा सुमधुरा दुर्जरा वीर्यपुष्टिदा ॥१४७॥**

नतताइएको वा नउमालेको चामललाई दुग्धबीजा भनिन्छ । यो गुलियो, पचाउन कठिन र वीर्यलाई

पुष्ट बनाउने गुणको हुन्छ ।

### भुटेको चना, मुगी आदि

**तप्तास्तु मुद्गचणकाः सुमनादिलङ्का सद्यस्तृषार्तिरुचिपित्तकृतश्च जग्धाः ।**
**वाताल्पदाः सुखकरा ह्यबलाश्च रूक्षा हृद्या भवन्ति युव-जर्जरबालकानाम् ॥१४९॥**

भुटेको मुगी, चना, गहुँ, खेसरी (?) आदि खानाले तुरुन्त तिर्खा लगाउँदछ, अरुची बढाउँदछ र पित्तविकार गर्दछ । यसले थोरै वातविकार गर्दछ । यो सुखदायक, बल नदिने र रुखो पनि हुन्छ । यी कुरा बालक, जवान र वृद्ध सबैको मुटुका लागि हितकर हुन्छन् ।

### आधा उसिनेका मुगी, गहुँ आदि

**मुद्गगोधूमचणका यावनालादयः स्मृताः ।**
**यदर्द्धपक्वं तद्धान्यं विष्टम्भाध्मानदोषकृत् ॥१५०॥**

आधा उसिनेको मुगी, गहुँ, चना, जुनेलो आदि कब्जियत, आध्मान जस्ता रोग निकाल्ने गुणको हुन्छ ।



### सुक्खा गहुँको पीठो (कर्णिका)

**शुष्कगोधूमचूर्णन्तु कर्णिका समुदाहृता ॥१५१॥**

सुक्खा गहुँको पिठोलाई कर्णिका भनिन्छ ।

### दाल

**स्फोटस्तु चणकादीनां दालिति परिकीर्तिताः ॥१५२॥**

दुई फग्ल्याँटा हुनेगरी पिसिएको चना आदिका गेडालाई दाल भनिन्छ ।

### ताजा अनाज

**पक्वं हरितलूनञ्च धान्यं सर्वगुणावहम् ॥१५३॥**
**शुष्कलूनन्तु निःसारं रूक्षं तत् सत्त्वनाशनम् ॥१५४॥**

पाकेर काटी भित्र्याइएको हरियो (ताजा) अनाजमा सबै गुण हुन्छन् । सुकेको अन्न भने सारहीन र गुणहीन हुन्छ ।

### कोषधान्य (?)

**कोषधान्यं नवं बल्यं मधुरं वत्सरोषितम्॥१५५॥**

नयाँ कोषधान्य (भण्डारण गरिएको अनाज ? ) बलदायक र एक वर्ष पुरानो कोषधान्य गुलियो हुन्छ ।

### नयाँ र पुरानो अनाज

**नवं धान्यमभिष्यन्दि लघु संवत्सरोषितम् ।**
**द्व्यब्दोषितं लघु पथ्यं त्रिवर्षादबलं भवेत्॥१५६॥**
**चणास्तु यवगोधूम-तिलमाषा नवा हिताः ॥१५७॥**
**पुराणा विरसा रूक्षास्त्वहिता दुर्जराबलाः ॥१५८॥**



नयाँ अनाज अभिष्यन्दि हुन्छ । एक वर्ष पुरानो अनाज पचाउन सहज हुन्छ । दुई वर्ष पुरानो अनाज पचाउन सहज र पथ्य हुन्छ । तीन वर्ष पुरानो भएपछि अनाज बलहीन हुन्छ । चना, जौ, गहुँ, तिल, मास नयाँ हितकर हुन्छन् । यी पुराना भएपछि रसहीन, रुखा, अहितकारी, ढिला पच्ने र बल नदिने गुणका हुन्छन् ।

### रोपिएको र आफैं उम्रिएको अनाज

**धान्यं वापितमुत्तमं तदखिलं छिन्नोद्भवं मध्यमं**
**ज्ञेयं यद्यदवापितं तदधमं निःसारदोषप्रदम् ।**
**दग्धायां भुवि यत्नतोऽपि विपिने ये वापिताः शालयो**
**ये च छिन्नभवा भवन्ति खलु ते विण्मूत्रबन्धप्रदाः ॥१५९॥**

रोपिएका सबै अनाज उत्तम हुन्छन् । काटेर पुनः नाभो उम्रेका अनाज मध्यम हुन्छन् । त्यसै उम्रेका अनाज निम्न गुणका, सारहीन र दोषदायक हुन्छन् । सुक्खा माटोमा वा वन आदिमा प्रयत्नपूर्वक रोपिएका शालि आदि र काटेको ठाउँमा पुनः उम्रेका वा पलाएका शालि आदि निश्चय नै मलमूत्रलाई रोक्ने गुणका हुन्छन् ।

**नुनिलो पानीमा उब्जने अनाजको गुण**

**क्षारोदकसमुत्पन्नं धान्यं श्लेष्मरुजापहम् ॥१६०॥**

नुनिलो पानीमा उत्पन्न हुने अनाजले कफविकार नाश गर्दछ ।

**चिल्लो माटोमा उब्जने अनाजको गुण**

**सुस्निग्धमृत्तिकोद्भूतं धान्यमोजोबलावहम् ॥१६१॥**

चिल्लो माटोमा उब्जने अनाजले ओज र बल बढाउँदछ ।

**बलौटे माटोमा उब्जा हुने अनाजको गुण**

**बलपुष्टिप्रभावघ्नं वालुकामृत्तिकोद्भवम् ॥१६२॥**

बलौटे माटोमा उब्जा हुने अनाजले बल र पुष्टि नाश गर्दछ ।



**उत्तम चामल, मासु, पानी र दुग्धपदार्थ**

**धान्यं श्रेष्ठं षष्टिकं राजभोग्यं मांसं त्वाजं तैत्तिरं लावकीयम् ।**
**पानीयं स्यात् कृष्णमृत्स्नासमुत्थं क्षीराज्यादौ गव्यमाजं प्रशस्तम् ॥१६३॥**

धानमा राजाले खाने खालको सठिया धान; मासुमा खसीबोकाको, तित्राको र लाभे चराको मासु; पानीमा कालीमाटीबाट पलाउने मूलको पानी तथा दुग्धपदार्थमा बाख्री र गाईको दुग्धपदार्थ उत्तम हुन्छ ।

**वर्गप्रशस्ति**

**इत्थं प्रसिद्धतरधान्यगुणाभिधानवीर्याभिवर्णनविशृङ्खलवाग्विलासम् ।**
**आम्नायवर्गमिममाशु लभेत वैद्यो विद्यां विषण्णजनजीवनदानधन्याम् ॥१६४॥**

यसरी यस अध्यायमा अधिक प्रसिद्ध अनाजका बारेमा गुण, रङ आदि सहित क्रमैले बताइएको छ । अनाजका उपभोगका प्रचलन र परम्परागत शैलीलाई वैद्यहरूले मान्दै यसको अध्ययनलाई रोगीको उपचार गर्ने उपकरण बनाउन सक्नु पर्दछ ।

**यानि सदा भुज्यन्ते भुञ्जानजनाश्च यानि भुञ्जन्ते ।**
**तेषां खलु धान्यानां वर्गोऽयं भोज्यवर्ग इति कथितः ॥१६५॥**

नित्य उपभोग गरिने तथा विशेष अवसरमा विशेष मानिसले मन पराई उपभोग गर्ने अनेक थरी अनाजका बारेमा यस अध्यायमा विस्तृत रूपमा वर्णन गरिएको छ त्यसैले "धान्य वर्ग" नामक यो अध्यायको नाम "भोज्य वर्ग" भनेर पनि राखिएको छ ।

**येनाचारचणेन मुग्धमधुरश्रीशालिना सन्महा-**
**मानार्हा बहुधान्यसम्पदुचिता सन्नीयते सन्ततम् ।**
**तेन श्रीनृहरीश्वरेण रचिते नामोक्तिचूडामणौ**
**वर्गोऽयं स्थितमेति नूत्नरचनो धान्याह्वयः षोडशः ॥१६६॥**

जसको उत्कृष्ट, मधुर र निर्दोष आचरणले असङ्ख्य ख्याती, धन र सम्मान पाएको छ त्यस्ता सक्षम नरहरि पण्डितले लेखेको नामोक्ति चूडामणि (अभिधान चूडामणि) नामक ग्रन्थको यो धान्यवर्ग नामक सोह्रौं अध्याय पूर्ण भयो ।

**इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ भोज्यवर्गापरनामधान्यवर्गः षोडशः ॥१६॥**



**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत धान्यवर्ग नामक सोह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१६।**

# मांसादि वर्गः

## मासुका पर्यायवाची नाम

**मांसन्तु पिशितं क्रव्यं पलन्तु रस्यमस्रजम् ।**
**पललं जाङ्गलं कीरमामिषञ्च तदुच्यते॥१॥**

मांस, पिशित, क्रव्य, पल, रस्य, अस्रज, पलल, जाङ्गल, कीर र आमिष : यी मासुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## भर्खर मारिएका जीवको मासु

**सद्योहतस्य मांसं श्रेष्ठं हरिणादिकस्य यूनस्तु ।**
**ज्ञेयं सुगन्धि पथ्यं जाङ्गलदेशस्थितस्य पथ्यतमम्॥२॥**

भर्खर मारिएका हरिण आदिको मासु उत्तम हुन्छ । यो मासु सुगन्धि र पथ्य हुन्छ । मासुमध्येमा पनि जङ्गली जनावरको मासु सबभन्दा बढी पथ्य हुन्छ ।



## खान नहुने मासु

**बालस्य वृद्धस्य कृशस्य रोगिणो विषाग्निदग्धस्य मृतस्य चाम्बुषु ।**
**त्याज्यं मृगादेः पिशितं तु तस्य विगन्धि शुष्कञ्च चिरस्थितञ्च॥३॥**

कलिला, बूढा, दुब्ला, रोगी, विषले मरेका, आगोले डढेका, मरेका र पानीमा डुबेर मरेका जनावरको तथा गनाउने, सुकेको र धेरै दिनको बासी मृग आदिको मासु त्याज्य हुन्छ ।

## मासुका सामान्य गुण

**सर्वं मांसं वातविध्वंसि वृष्यं बल्यं रुच्यं बृंहणं तच्च मांसम् ।**
**देशस्थानाच्चात्मसंस्थं स्वभावैर्भूयो नानारूपतां याति नूनम्॥४॥**

सबै खालका मासु वातविकार नाशक, वीर्यवर्धक, बलदायक, रुचिप्रद र पौष्टिक हुन्छन् । जीवको मासु ती बस्ने स्थान, भूगोल र प्राकृतिक वासस्थान अनुसार अनेक रूप र गुणको हुन्छ ।

### जीवको वासस्थान अनुसार तिनको मासुमा हुने गुण

**तत्रानूपीयमांसं गवयरुरुमृगक्रोडगण्डादिकानां**
**स्निग्धं पथ्यं च बल्यं लघु शशशिखराद्युद्भवं जाङ्गलीयम् ।**
**पुष्टिं दीप्तिं च दत्ते रुचिकृदथ लघु स्वादु साधारणीयं**
**वृष्यं बल्यं च रुच्यं रुरुहरिणमृगक्रोडसारङ्गकानाम्॥५॥**
**मांसं सारसहंसरात्रिविरहिक्रौञ्चादिजं शीतलं**
**स्निग्धं वातकफापहं गुरु ततः स्वादु त्रिदोषापहम् ।**
**पथ्यं लावकतित्तिरादिजनितं वृष्यं लघु स्यात् परं**
**चक्रक्रौञ्चमयूरतित्तिरभवं देशत्रयादीदृशम्॥६॥**

पानीमा वा सिमसार क्षेत्रमा बस्ने नीलगाई, रुरु मृग, मृग, बनेल वा बँदेल वा सुङ्गुर, गैँडा आदिको मासु चिल्लो, पथ्य, बलदायक र पचाउन सहज हुन्छ । पहाड, जङ्गल आदिमा हुने खरायो आदि जीवको मासु पौष्टिक, कान्ति दायक तथा रुचिप्रद् हुन्छ । सामान्य जमिनमा बस्ने जीवको मासु पचाउन सहज र स्वादिलो हुन्छ । रुरु मृग, हरिण, मृग, बनेल वा सुङ्गुर र सारङ्ग-मृगको मासु वीर्यवर्धक, बलदायक र रुचिप्रद् हुन्छ । सारस, हाँस,चखेवा, कन्याङकुरुङ आदिको मासु शीतवीर्यको, चिल्लो तथा वातविकार र कफविकार नाशक एवं पचाउन कठिन हुन्छ । लाभे, तित्रो, आदिको मासु स्वादिलो, त्रिदोषनाक र पथ्य हुन्छ । चखेवा, कन्याङकुरुङ, मुजुर, तित्रो आदिको मासु वीर्यवर्धक र पचाउन सहज हुन्छ ।



### जीवको वर्गीकरण

**द्रुतो विलम्बितश्चैव प्लवश्चेति गतैस्त्रयः ।**
**स्थानतोऽपि त्रयस्ते तु बिलस्थलजलाश्रयाः॥७॥**

छिटो हिँड्ने, ढिलो हिँड्ने र पौडने गरी जनावरको तीन प्रकारको गति हुन्छ । वासस्थान अनुसार पनि दुलोमा बस्ने, जमिनमा बस्ने र पानीमा बस्ने गरी तीन प्रकारका जीव हुन्छन् ।

**पुनस्ते तु प्रसहनाः प्रतुदा विष्किरा इति ।**
**स्वभावतस्त्रयः प्रोक्ताः क्रमशो मृगपक्षिणः॥८॥**

ती मृगपक्षी आदि जीव पुनः शिकारी, ठुँगेर खाने र खोस्रेर खाने गरी तीन स्वभावका हुन्छन् ।

**अथैषां क्रमशो लक्ष्म-गुणान्वक्ष्यामि वर्गशः ।**
**एवं नवविधाः प्रोक्तास्त एव मृगपक्षिणः॥९॥**

यसरी नौ प्रकारका मृगपक्षी हुन्छन् । अब यिनीहरूको लक्षण र गुणका बारेमा वर्ग अनुसार बताउँदछु ।

### छिटो हिँड्ने जनावर

**अजशशहरिणादयः स्वयं ये द्रुतगमना द्रुतसञ्ज्ञकाः स्मृतास्ते ।**
**तदुदितपललं च पथ्यबल्यं रचयति वीर्यमदप्रदं लघु स्यात्॥१०॥**

बाख्रा, खरायो, हरिण आदि छिटो हिँड्ने जन्तुलाई छिटो हिँड्ने जन्तु भनिन्छ । छिटो हिँड्ने जन्तुको मासु पथ्य, बलदायक, वीर्यवर्धक, नसालु र पचाउन सहज हुन्छ ।

### ढिलो हिँड्ने जनावर

**गजखड्गमुखा महामृगा निजगत्यैव विलम्बिताः स्मृतास्ते ।**
**बलकृत्पिशितं च पिच्छिलं कफकासानिलमान्द्यदं गुरु स्यात्॥११॥**

हात्ती, गैँडा आदि ठुला जन्तु आफ्नै वजनका कारण ढिलो हिँड्दछन् । ढिलो गतिका जनावरको मासु बलदायक, लेस्याइलो तथा कफविकार, खोकी, वातविकार र पाचनशक्ति कमजोर बढाउने एवं पचाउन कठिन हुने गुणका हुन्छन् ।



### पौडने जीव

**सारसहंसबलाकाश्चक्रक्रौञ्चादयो जले प्लवनात् ।**
**प्लवसञ्ज्ञाः कथितास्ते तन्मांसं गुरूष्णं च बलदायि॥१२॥**

सारस, हाँस, कबुल्ला, चखेवा, कर्‍याङकुरुङ आदि पानीमा पौडने जीवलाई पौडने जीव (प्लव) भनिन्छ ।

### दुलोमा बस्ने जीव

**अहिनकुलशल्यगोधामूषकमुख्या बिलेशयाः कथिताः ।**
**श्वासानिलकासहरं तन्मांसं पित्तदाहकरम्॥१३॥**

सर्प, न्याहुरीमुसो, दुम्सी, गोहोरो, मुसा आदि दुलोमा बस्ने जीवलाई बिलेशय भनिन्छ । दुलोमा बस्ने जीवको मासु दम, वातविकार र खोकी नाशक तथा पित्तविकार र डाह गराउने गुणको हुन्छ ।

### मृगजातका स्थलचर जीव

**क्रोडरुरुकुरङ्गाद्या विविधा ये मृगादयः ।**
**स्थलेशयास्तु ते सर्वे मांसं सर्वगुणावहम् ॥१४॥**

सुँगुर वा बँदेल, रुरु मृग, मृग आदि जमिनका बस्ने मृग जातका सबै जनावरको मासु सर्वगुण सम्पन्न हुन्छ ।

### जलचर जीव

**झषमकरनक्रकर्कटकूर्मप्रमुखा जलेशयाः कथिताः ।**
**मांसं तेषां तु सरं वृष्यं गुरु शिशिरबलसमीरकरम् ॥१५॥**

माछा, मगर गोही, नाक नामक गोही, गँगटो, कछुवा : यी प्रमुख पानीमा बस्ने जीवहरू हुन् । जलचर जीवको मासु मलमूत्रलाई तलतिर सार्ने, वीर्यवर्धक, पचाउन कठिन, शीतवीर्यका, बलदायक र वातविकार गर्ने गुणको हुन्छ ।



### शिकारी जीव

**शार्दूलसिंहशरभर्क्षतरक्षुमुख्या येऽन्ये प्रसह्य विनिहन्त्यभिवर्तयन्ति ।**
**ते कीर्तिताः प्रसहनाः पललं तदीयमर्शःप्रमेहजठरामयजाड्यहारि ॥१६॥**

चितुवा वा बाघ, सिंह, सिंहभन्दा बलियो एक जनावर, भालु, निगाले चितुवा : यी मुख्य शिकारी जनावरहरू हुन् । यिनले आफ्नै वासस्थान वरिपरि रहने अन्य जनावरलाई मारेर खाने गर्दछन् । यिनलाई प्रसहना पनि भनिन्छ । शिकारी जीवको मासुले अल्काई, प्रमेह, पाचनशक्तिसम्बन्धी पेटका रोग र शरीरका अङ्गमा हुने लाटोपन नाश गर्दछ ।

### प्रतुद वर्गका चराको मासु

**भोक्ता निष्कृष्यामिषं स प्रतुदः प्रोक्तो गृध्रश्येनकाकादिको यः ।**
**मांसं तस्य स्वादु सन्तर्पणञ्च स्निग्धं बल्यं पित्तदाहास्रदायि ॥१७॥**

चुच्चोले ठुँगेर मासु खाने गिद्ध, बाज, काग आदिलाई प्रतुद भनिन्छ । प्रतुद वर्गका चराको मासु स्वादिलो, तृप्तिदायक, चिल्लो, बलदायक तथा पित्तविकार र रक्तविकार गराउने गुणको हुन्छ ।

### विष्किर वर्गका चराको मासु

**भक्ष्याश्च कुक्कुटकपोतकतित्तिराद्याः**
**क्षौर्णी विलिख्य नखरैः खलु वर्तयन्ति ।**
**ते विष्किराः प्रकथिताः पिशितं तदीयं**
**वृष्यं कषायमधुरं शिशिरं च रुच्यम् ॥१८॥**

नङ्ग्राले छरेर आहारा खाने कुखुरा, परेवा, तित्रो आदिलाई विष्किरा भनिन्छ । विष्किर वर्गका चराको मासु वीर्यवर्धक, टर्रो, गुलियो, शीतवीर्यको र रुचिप्रद हुन्छ ।

### पक्षीको मासुमा स्थानको असर

**अयमेव गुणो ज्ञेयः पक्षिणां च यथाक्रमम् ।**
**सर्वस्थानविशेषेण सङ्ख्या च गतिरुच्यते ॥१९॥**

पक्षीका विषयमा यिनै गुणहरू जान्नू । यिनको सबै सङ्ख्या (वा जात) का बारेमा भने विचरण गर्ने स्थान अनुसार विभिन्नता हुने गर्दछ ।



### वासस्थान अनुसार मासुको गुण

**यत्र स्थिता ये गतितोऽपि देशादन्यत्र याता मृगपक्षिमुख्याः ।**
**स्वस्वोचितस्थाननिवर्तनेन मांसेऽपि तेषां गुणपर्ययाः स्युः ॥२०॥**

जब एक स्थानमा बसेका पशुपंक्षी बसाइँ सरेर अर्को स्थानमा जान्छन् तब तिनको मासुको गुणस्तर पनि नयाँ स्थान अनुसारकै गुणको हुन्छ ।

### गैंडाको मासु

**मांसं खड्गमृगोत्थं तु बलकृद् बृंहणं गुरु ॥२१॥**

गैंडाको मासु बलदायक, पौष्टिक र पचाउन कठिन हुन्छ ।

### भाले नीलगाईको मासु

**गवयस्यामिषं बल्यं रुच्यं वृष्यञ्च बृंहणम् ॥२२॥**

भाले नीलगाईको मासु बलदायक, रुचिप्रद, वीर्यवर्धक र पौष्टिक हुन्छ ।

**रुरुमृगको मासु**

**रुरुक्रव्यं गुरु स्निग्धं मन्दवह्निबलप्रदम् ॥२३॥**

रुरु मृगको मासु पचाउन कठिन, चिल्लो, पाचनशक्तिलाई कमजोर बनाउने र बलदायक हुन्छ ।

**गोमांस**

**अपूतं गोभवं क्रव्यं गुरु वातकफप्रदम् ॥२४॥**

गोरुको मांस अपवित्र, पचाउन कठिन तथा वातविकार र कफविकार गराउने गुणको हुन्छ ।

**अर्नाको मासु**

**वनमहिषामिषं स्यादीषल्लघु दीपनञ्च बलदायि ॥२५॥**



बनरँगो (अर्ना) को मासु केही पचाउन हलुका, दीपनी र बलदायी हुन्छ ।

**राँगाको मासु**

**ग्रामीणमहिषमांसं स्निग्धं निद्राकरञ्च पित्तहरम् ॥२६॥**

राँगोको मासु चिल्लो, निद्रा लगाउने र पित्तविकार नाशक हुन्छ ।

**हात्तीको मासु**

**हस्तिक्रव्यं गुरु स्निग्धं वातलं श्लेष्मकारकम् ।**
**बहुपुष्टिप्रदं चैव दुर्जरं मन्दवह्निदम् ॥२७॥**

हात्तिको मासु पचाउन कठिन, चिल्लो, वातविकार गर्ने, कफविकार गर्ने, अति पौष्टिक, ढिलो पच्ने र पाचनशक्तिलाई कमजोर बनाउने गुणको हुन्छ ।

### घोडाको मासु

**अश्वमांसं भवेदुष्णं वातघ्नं बलदं लघु ।**
**पित्तदाहप्रदं नृणां तदेतच्चातिसेवनात् ॥२८॥**

घोडाको मासु उष्णवीर्यको, वातविकार नाशक, बलदायक, पचाउन सहज तथा धेरै खाँदा पित्तविकार र डाह गराउने गुणको हुन्छ ।

### उँटको मासु

**उष्ट्रमांसन्तु शिशिरं त्रिदोषशमनं लघु ।**
**बलपुष्टिप्रदं रुच्यं मधुरं वीर्यवर्धनम् ॥२९॥**

उँटको मासु शीतवीर्यको, त्रिदोष शान्त पार्ने, पचाउन सहज, बलखायक, पौष्टिक, रुचिप्रद, गुलियो र वीर्यवर्धक हुन्छ ।

### गधाको मासु



**गर्दभप्रभवं मांसं किञ्चिद्गुरु बलप्रदम् ।**
**रुच्यं तु वन्यजं शैत्यं बहुवीर्यबलप्रदम् ॥३०॥**

गधाको मासु केही पचाउन कठिन, बलदायक र रुचिप्रद तथा बन-गधाको मासु शीतवीर्यको र धेरै वीर्यवर्धक र बलदायक हुन्छ ।

### एणमृगको मासु

**एणस्य मांसं लघुशीतवृष्यं त्रिदोषहृत् षड्रसजञ्च रुच्यम् ॥३१॥**

कालो कृष्णसार मृगको मासु पचाउन सहज, शीतवीर्यको, वीर्यवर्धक, त्रिदोषनाशक, छ रसले युक्त र रुचिप्रद हुन्छ ।

### कुरङ्गमृगको मासु

**कुरङ्गमांसं मधुरञ्च तद्वत् कफापहं मांसदपित्तनाशि ॥३२॥**

पुवाले वा फिका तामा रङको कृष्णसार मृगको मासु त्यस्तै गुलियो, कफविकार नाशक, मासुवर्धक

र पित्तविकार नाशक हुन्छ ।

### सारङ्गमृगको मासु

**सारङ्गं जाङ्गलं स्निग्धं मधुरं लघु वृष्यकम् ॥३३॥**

सारङ्ग मृगको मासु चिल्लो, गुलियो, पचाउन सहज र वीर्यवर्धक हुन्छ ।

### शिखरीमृगको मासु

**शिखरीसम्भवं मांसं लघु हृद्यं बलप्रदम् ॥३४॥**

शिखरी जातको मृगको मासु पचाउन सहज, मुटुका लागि हितकर र बलदायक हुन्छ ।

### बँदेलको मासु

**वराहमांसं गुरु वातहारि वृष्यं बलस्वेदकरं वनोत्थम् ॥३५॥**
**तस्माद्गुरु ग्रामवराहमांसं तनोति मेदो बलवीर्यवृद्धिम् ॥३६॥**



बँदेलको मासु पचाउन कठिन, वातविकार नाशक, वीर्यवर्धक, बलदायक र, पसिना निकाल्ने तथा सुँगुरुको मासु बँदेलको भन्दा पनि पचाउन कठिन तथा बोसो, बल र वीर्य वर्धक हुन्छ ।

### शरश्रृङ्ग मृगको मासु

**शरशृङ्गस्य मांसं तु गुरु स्निग्धं कफप्रदम् ।**
**बल्यं वृष्यकरं पुष्टि-किञ्चिद्वातकरं परम् ॥३७॥**

शरशृङ्ग मृगको मासु पचाउन कठिन, चिल्लो, कफविकार गर्ने, बलदायक, वीर्यवर्धक, केही पौष्टिक र धेरै वातविकार गर्ने गुणको हुन्छ ।

### बाख्राको मासु

**छागमांसं लघु स्निग्धं नातिशीतं रुचिप्रदम् ।**
**निर्दोषं वातपित्तघ्नं मधुरं बलपुष्टिदम् ॥३८॥**

बाख्राको मासु पचाउन सहज, चिल्लो, थोरै शीतवीर्यको, रुचिप्रद, दोषहीन, वातविकार पित्तविकार

नाशक, गुलियो तथा बलदायक र पौष्टिक हुन्छ ।

### पाठाको मासु

**छागपोतभवं मांसं लघु शीतं प्रमेहजित् ।**
**ईषल्लघु बलं दत्ते तदेव तृणचारिणः ॥३९॥**

पाठाको मासु पचाउन सहज, शीतवीर्यको र प्रमेहलाई जित्ने गुणको हुन्छ । चर्ने खालका पाठाको मासु केही पचाउन सहज र बलदायक हुन्छ ।

### भेडोको मासु

**औरभ्रं मधुरं शीतं गुरु विष्टम्भि बृंहणम् ॥४०॥**

भेडाको मासु शीतवीर्यको, पचाउन कठिन, कब्जियत गराउने र पौष्टिक हुन्छ ।

### भेडाभेडीको मासु

**आविकं मधुरं मांसं किञ्चिद्गुरु बलप्रदम् ॥४१॥**

आविकको मासु गुलियो, केही पचाउन कठिन र बलदायक हुन्छ ।

### दुम्सीको मासु

**शल्यमांसं गुरु स्निग्धं दीपनं श्वासकासजित् ॥४२॥**

दुम्सीको मासु पचाउन कठिन, चिल्लो, दीपनी तथा खम र खोकीलाई जित्ने गुणको हुन्छ ।

### न्याहुरीमुसोको मासु

**पिच्छिलं नाकुलं मांसं वातघ्नं श्लेष्मपित्तकृत् ॥४३॥**

न्याहुरीमुसोको मासु लेस्याइलो, वातविकार नाशक तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ ।

**गोहोरोको मासु**

**गोधामांसन्तु वातघ्नं श्वासकासहरञ्च तत् ॥४४॥**

गोहोरोको मासु वातविकार, दम र खोकी नाशक हुन्छ ।

**खरायोको मासु**

**शशमांसं त्रिदोषघ्नं दीपनं श्वासकासजित् ॥४५॥**

खरायोको मासु त्रिदोष नाशक, दीपनी तथा दम र खोकीलाई जित्ने गुणको हुन्छ ।

**दुलामा बस्ने जीवको मासु**

**अन्ये बिलेशया ये स्युः कोकडोन्दुरुकादयः ।**
**मांसञ्च गर्हितं तेषां मान्द्यं गौरवदुर्जरम् ॥४६॥**

दुलामा बस्ने अन्य मलसाँप्रो, मुसो आदि जीवको मासु खान हुँदैन किनकि यो मासुले पाचनशक्ति कमजोर बनाउँदछ । यो मासु पचाउन कठिन हुन्छ र ढिलो पच्दछ ।



**बनकुखुराको मासु**

**आरण्यकुक्कुटक्रव्यं हृद्यं श्लेष्महरं लघु ॥४७॥**

बन कुखुराको मासु मुटुका लागि हितकर, कफविकार नाशक र पचाउन सहज हुन्छ ।

**घरकुखुराको मासु**

**ग्राम्यकुक्कुटजं स्निग्धं वातहृद्दीपनं गुरु ॥४८॥**

घरपालुवा कुखुराको मासु चिल्लो, वातविकार नाशक, दीपनी र पचाउन कठिन हुन्छ ।

**हलेसो चराको मासु**

**हारीतपललं स्वादु कफपित्तास्रदोषजित् ॥४९॥**

हलेसोको मासु स्वादिलो तथा कफविकार, पित्तविकार र रक्तविकारलाई जित्ने गुणको हुन्छ ।

### मलेवाको मासु

**वर्धनं वीर्यबलयोस्तद्वदेव कपोतजम् ॥५०॥**

कपोतको मासु यस्तै (हलेसोको जस्तै) गुणको तथा वीर्य र बल बढाउने गुणको हुन्छ ।

### परेवाको मासु

**पारावतपलं स्निग्धं मधुरं गुरु शीतलम् ।**
**पित्तास्रदाहनुद्बल्यं तथाऽन्यद्वीर्यवृद्धिदम् ॥५१॥**

पारावतको मासु चिल्लो, गुलियो, पचाउन कठिन, शीत वीर्यको तथा पित्तविकार, रक्तविकार र डाह नाशक एवं बलदायक हुन्छ । अन्य जातका परेबाको मासुले सामान्यतः वीर्यवृद्धि गर्दछ ।

### तित्रोको मासु

**स्निग्धं तित्तिरिजं मांसं लघु वीर्यबलप्रदम् ।**
**कषायं मधुरं शीतं त्रिदोषशमनं परम् ॥५२॥**



तित्रोको मासु चिल्लो, पचाउन सहज, वीर्यवर्धक, बलदायक, टर्रो, गुलियो, शीतवीर्यको तथा अत्यन्त प्रभावकारी तरिकाले त्रिदोषलाई शान्त पार्ने गुणको हुन्छ ।

### लाभे चराको मासु

**तद्वच्च लावकं मांसं पथ्यं ग्राहि लघु स्मृतम् ॥५३॥**

यसैगरी लाभे चराको मासु पथ्य, ग्राहि र पचाउन सहज हुन्छ भनिन्छ ।

### बट्टाई चराको मासु

**तद्वच्च वर्तकं मांसं निर्दोषं वीर्यपुष्टिदम् ॥५४॥**

यसैगरी बट्टाई चराको मासु दोषहीन तथा वीर्यवर्धक र पौष्टिक हुन्छ ।

### भँगेरोको मासु

**चटकायाः पलं शीतं लघु वृष्यं बलप्रदम् ॥५५॥**

**तद्वच्चारण्यचटकक्रव्यं लघु च पथ्यदम्॥५६॥**

घर-भँगेराको मासु शीतवीर्यको, पचाउन सहज, वीर्यवर्धक र बलदायक हुन्छ । जङ्गली-भँगेराको मासु पचाउन सहज र पथ्य हुन्छ ।

### सेतो तित्रोको मासु

**चटकात् शीतलं रुच्यं वृष्यं कापिञ्जलामिषम्॥५७॥**

चातक वा सेतो तित्रोको मासु भँगेरोको भन्दा बढी शीतवीर्यको, रुची वर्धक र वीर्यवर्धक हुन्छ ।

### च्याखुराको मासु

**तद्वच्चकोरजं मांसं वृष्यं च बलपुष्टिदम्॥५८॥**

यसैगरी च्याखुराको मासु वीर्यवर्धक, बलदायक र पौष्टिक पनि हुन्छ ।

### चखेवाको मासु



**क्रव्यं तु चक्रवाकस्य लघु स्निग्धं बलप्रदम् ।**
**वह्निकृत्सर्वशूलघ्नमुष्णं वातामयापहम्॥५९॥**

चखेवाको मासु पचाउन सहज, चिल्लो, बलदायक, जठराग्निलाई बाल्ने, सबै खालका शूल नाशक, उष्णवीर्यको र वातविकार नाशक हुन्छ ।

### सारसको मासु

**सारसस्य तु मांसञ्च मधुराम्लकषायकम् ।**
**महातीसारपित्तघ्नं ग्रहण्यर्शोरुजापहम्॥६०॥**

सारसको मासु गुलियो, अमिलो, टर्रो, विशेषत अतीसार नाशक, पित्तविकार नाशक, ग्रहणी नाशक र अल्काई नाशक हुन्छ ।

### जलचर पक्षीको मासु

**स्निग्धहिमं गुरु वृष्यं मांसं जलपक्षिणान्तु वातहरम्॥६१॥**

**तेष्वपि च हंसमांसं वृष्यतमं तिमिरहरणञ्च ॥६२॥**

जलपक्षीको मासु चिल्लो, शीतवीर्यको, पचाउन कठिन, वीर्यवर्धक र वातविकार नाशक हुन्छ । तीमध्येमा पनि हाँसको मासु अति नै वीर्यवर्धक र धमिलो देखिने आँखाको रोग नाशक हुन्छ ।

### बकुल्ला आदिको मासु

**अन्ये बकबलाकाद्या गुरवो मांसभक्षणात् ।**
**अनुक्तं तु मृगादीनां मांसं ग्राह्यं हितादिषु ॥६३॥**

अरु बकुल्ला, पोथी बकुल्ला आदि चराको मासु पचाउन कठिन हुन्छ । अन्य यहाँ नबताइएका मृगादिको मासुका बारेमा शरीरलाई गर्ने फाइदा हेरी उपयोग गर्नू ।

### माछाको मासु

**मत्स्याः स्निग्धोष्णगुरवो वातघ्ना रक्तपित्तदाः ।**
**तत्र कांश्चिदपि ब्रूमो विशेषगुणलक्षणान् ॥६४॥**



प्रायः माछा चिल्ला, उष्णवीर्यका, पचाउन कठिन, वातविकार नाशक र रक्तपित्त गराउने गुणका हुन्छन् । यहाँ केही माछा विशेषका गुण र लक्षण बताउँदछु ।

### माछाका जात

**रोहितो गर्गरो भीरुर्बालको बर्बरस्तथा ।**
**छागलो रक्तमत्स्योऽथ महिषश्चाविलस्तथा ॥६५॥**
**वातूकोऽलोमशा चाऽपि ज्ञेया कर्णवशादयः ।**
**लक्ष्यलक्षणवीर्यादीन् कथयामि यथाक्रमम् ॥६६॥**

रोहित (रोहु), गर्गर, भीरु, बालक, बर्बर, छागल, रक्तमत्स्य, महिष, अविल, वातूक, अलोमश र कर्णवश जातका माछाको लक्षण, गुण आदिका बारेमा क्रमैले बताउँदछु ।

### रोहु माछा

**कृष्णः शल्की श्वेतकुक्षिस्तु मत्स्यो यः श्रेष्ठोऽसौ रोहितो वृत्तवक्त्रः ।**
**कोष्णं बल्यं रोहितस्यापि मांसं वातं हन्ति स्निग्धमाप्नोति वीर्यम् ॥६७॥**

कालो रङ्को, कत्ला हुने, सेतो पेट र गोलो मुख हुने उत्कृष्ट माछालाई रोहित माछा भनिन्छ । यसको मासु उष्णवीर्यको, बलदायक, बातविकार नाशक, चिल्लो र वीर्यवर्धक हुन्छ ।

### गर्गर मत्स्य

**यः पीतवर्णोऽपि च पिच्छिलाङ्गः पृष्ठे तु रेखाबहुलः सशल्कः ।**
**स गर्गरो बर्बरनादरूक्षो जडश्च शीतः कफवातदायी ॥६८॥**

पहेँलो रङ्को, लेस्याइलो शरीर, ढाडमा धेरै रेखा हुने र कत्ला हुने माछालाई गर्गर माछा भनिन्छ । यसले  विशेष आवाज निकालेर शिकारलाई आफूतिर आकर्षित गर्दछ । यसको मासु रुखो, लटचाउने, शीतवीर्यको तथा कफविकार र वातविकार गराउने गुणको हुन्छ ।

### भीरु मत्स्य

**पृष्ठे पक्षौ द्वौ गले पुच्छकं चेत् सर्पाभः स्यात् फूत्कृतो वृत्ततुण्डः ।**
**ज्ञेयः शल्की मत्स्यको भीरुरुक्तः स्निग्धो वृष्यो दुर्जरो वातकारी ॥६९॥**



ढाडमा दुई खखैँटा, घाँटीमा दुई वटा पुच्छर जस्तो हुने, सर्प जस्तो, गोलाकार मुखबाट फुत्कार निकाल्ने र कत्ला भएको माछालाई भीरु मत्स्य भनिन्छ । यसको मासु चिल्लो, वीर्यवर्धक, ढिला पच्ने र वातविकार गर्ने गुणको हुन्छ ।

### बाल मत्स्य

**नातिस्थूलो वृत्तवक्त्रोऽपि शस्तो धत्ते दन्तान् श्मश्रुलो दीर्घकायः ।**
**सन्ध्यायां वा रात्रिशेषे च वर्यः प्रोक्तो बालः पथ्यबल्यः सुवृष्यः ॥७०॥**

ठिक्क मोटो, गोलो मुखभरी दाँत भएको, जुँगा भएको, लामो शरीर हुने र साँझमा वा बिहान सबेरै समाउन (मार्न) उपयुक्त हुने खालको माछालाई बाल मत्स्य भनिन्छ । यसको मासु पथ्य, बलदायक र अत्यन्त वीर्यवर्धक हुन्छ ।

### बर्बर मत्स्य

**पृष्ठे कुक्षौ कण्टकी दीर्घतुण्डः सर्पाभो यः सोऽप्ययं बर्बराख्यः ।**
**वाताटोपं सोऽपि दत्ते जडश्च बल्यः स्निग्धो दुर्जरो वीर्यकारी ॥७१॥**

ढाड र कोखामा काँडा हुने, लामो मुख भएको र सर्प जस्तो माछालाई बर्बर मत्स्य भनिन्छ । यसको मासुले वातविकार गर्दछ र शरीरका अङ्गलाई लाटो पार्दछ । यो मासु बलदायक, चिल्लो, ढिलो पच्ने र वीर्यवर्धक हुन्छ ।

### छागल मत्स्य

**श्वेतं सुकायं समदीर्घवृत्तं निःशल्ककं छागलकं वदन्ति ।**
**गले द्विकण्टः किल तस्य पृष्ठे कण्टः सुपथ्यो रुचिदो बलप्रदः ॥७२॥**

सुन्दर, सेतो, गोलो र लामो शरीर; गलामा दुई र ढाडमा काँडा हुने तथा कत्ला नहुने काछालाई छागल मत्स्य भनिन्छ । यो माछाको मासु पथ्य, रुचिप्रद र बलदायक हुन्छ ।

### रक्त मत्स्य

**यो रक्ताङ्गो नातिदीर्घो न चाल्पो नातिस्थूलो रक्तमत्स्यः स चोक्तः ।**
**शीतो रुच्यः पुष्टिकृद्दीपनोऽसौ नाशं धत्ते किञ्च दोषत्रयस्य ॥७३॥**

न धेरै लामो, न धेरै छोटो, न त धेरै मोटो, यस्तो रातो माछालाई रक्त मत्स्य भनिन्छ । यो माछाको मासु शीतवीर्यको, रुचिप्रद, पौष्टिक, दीपनी र त्रिदोष नाशक हुन्छ ।



### महिष मत्स्य

**यः कृष्णो दीर्घकायः स्यात् स्थूलशल्को बलाधिकः ।**
**मत्स्यो महिषनामाऽसौ दीपनो बलवीर्यदः ॥७४॥**

कालो रङ, लामो शरीर, मोटा कत्ला र धेरै बलियो हुने माछालाई महिष मत्स्य भनिन्छ । यसको मासु दीपनी, बलदायक र वीर्यवर्धक हुन्छ ।

### आविल मत्स्य

**शुक्लाङ्गस्ताम्रपक्षो यः स्वल्पाङ्गश्चाविलाह्वयः ।**
**सुरुच्यो मधुरो बल्यो गुणाढ्यो वीर्यपुष्टिदः ॥७५॥**

सेतो शरीर, तामा जस्तो रङका पखेँटा र सानो शरीर भएको माछालाई आविल मत्स्य भनिन्छ । यो माछाको मासु रुचिप्रद, गुलियो, बलदायक, धेरै गुनिलो र वीर्यलाई पुष्ट पार्ने गुणको हुन्छ ।

### वातूक मत्स्य

**यः स्थूलाङ्गो माहिषाकारको यस्तालुस्थाने नीरजाभां दधाति ।**
**शल्कं स्थूलं यस्य वातूककोऽसौ दत्ते वीर्यं दीपनं वृष्यदायी ॥७६॥**

मोटो शरीर, भैंसी जस्तो आकार, तालुमा नीलो रङ र मोटो कत्ला हुने माछालाई वातूक मत्स्य भनिन्छ । यसको मासु वीर्यवर्धक, दीपनी र पौष्टिक हुन्छ ।

### अलोमश मत्स्य

**वितस्तिमानः श्वेताङ्गः सूक्ष्मशल्कः सुदीपनः ।**
**अलोमशाह्वयो मत्स्यो बलवीर्याङ्गपुष्टिदः ॥७७॥**

एक भित्ता लामो सेतो शरीर र मसिना चम्किला कत्ला हुने माछालाई अलोमश मत्स्य भनिन्छ । यसको मासु बलदायक, वीर्यवर्धक र पौष्टिक हुन्छ ।

### कर्णवशादि मत्स्य



**यो वृत्तगौल्यः कृष्णाङ्गः शल्की कर्णवशाभिधः ॥७८॥**
**दीपनः पाचनः पथ्यो वृष्योऽसौ बलपुष्टिदः ॥७९॥**

गोलो र कालो शरीर, कत्लैकत्ला हुने र आवाजप्रति आकर्षित हुने माछालाई कर्णवश मत्स्य भनिन्छ । यसको मासु दीपनी, पाचनी, पथ्य, वीर्यवर्धक, बलदायक र पौष्टिक हुन्छ ।

### कत्लायुक्त मत्स्य

**निःशल्का निन्दिता मत्स्याः सर्वे शल्कयुता हिताः ।**
**वपुःस्थैर्यकरा वीर्यबलपुष्टिविवर्धनाः ॥८०॥**

कत्ला नहुने माछा निन्दनीय हुन्छ । सबै माछामध्ये कत्ला भएका माछा नै हितकारी हुन्छन् । यस्ता माछा शरीरलाई स्थिर राख्ने, वीर्यवर्धक, बलदायक र पौष्टिक हुन्छन् ।

### दह आदिका माछा

**ह्रदकुल्याजलधिनिर्झरतडागवापीजले च ये मत्स्याः ।**

**ते तु जडा नादेया यथोत्तरं लघुतरास्तु नादेयाः ॥८१॥**

दह, खोला, समुद्र, झर्ना, तलाउ, कुवा र नदीमा हुने माछा लटच्याउने गुणका हुन्छन् , यी क्रमशः पचाउन सहज हुन्छन् । यीमध्ये सबभन्दा पचाउन सहज नदीको माछा हुन्छ ।

**समुद्री माछा**

**क्षाराम्बुमत्स्या गुरवोऽस्रदाहदा विष्टम्भदास्ते लवणार्णवादिजाः ।**
**तानश्नतां स्वादुजलस्थिता अपि ज्ञेया जडास्तेऽपि तथा शृतानिमान् ॥८२॥**

समुद्रको नुनिलो वा क्षरिलो पानीमा हुने माछाको मासु पचाउन कठिन, रक्तविकार र डाह गराउने र कब्जियत गराउने गुणको हुन्छ । यी नुनिला समुद्र र स्वादिलो पानी भएका समुद्रमा भएका माछा पनि शरीर लाटो बनाउने गुणका हुन्छन् नखानू ।

**अन्य मासु**

**शैलाटवीनगरभूजलचारिणो ये ये केऽपि सत्त्वनिवहाः खलु सप्तसङ्ख्याः ।**
**तन्मांसमत्र न वितथ्यमथाभ्यधायि ग्रन्थस्य विस्तरभयाच्च नवोपयोगात् ॥८३॥**



पहाडका, हिमालका, शहरका, स्थलचर, जलचर र जे जति अन्य जनावर छन् ती सात थरी जीवका बारेमा यहाँ ग्रन्थको आकार बढ्ने डरले केही कुरा उल्लेख गरिएन ।

**पकाइएको र भुटेको मासु**

**पक्वं मांसं हितं सर्वं बलवीर्यविवर्धनम् ।**
**भृष्टमांसं विदाहि स्यादस्रवातादिदोषकृत् ॥८४॥**

पकाइएको मासु सबै हितकर हुन्छन् तथा बल र वीर्य बढाउँदछन् । भुटेको मासु डाह, रक्तविकार, वातविकार आदि विकार उत्पन्न गराउने गुणको हुन्छ ।

**भाले र पोथीको मासु**

**पूर्वार्धे पुरुषस्य तद्गुरुतरं पश्चार्धभागः स्त्रियाः**
**स्त्री गुर्वी किल गुर्विणी यदि तथा योषिच्च तुल्या लघुः ।**
**पक्षी चेत् पुरुषो लघुः शृणु शिरःस्कन्धोरुपृष्ठे क्रमात्**

**मांसं यच्च कटिस्थितं तदखिलं गुर्वेव सर्वात्मना ॥८५॥**

भाले जनावरको टाउका पट्टिको आधा भागको र पोथी जनावरको पुच्छर पट्टिको आधा भागको मासु पचाउन कठिन हुन्छ । गर्भिणी जनावरको मासु पचाउन कठिन हुन्छ भने जवान पोथीको मासु पचाउन हलुका हुन्छ । भाले चराको टाउका, काँध, तिघ्रा र ढाडको मासु क्रमशः पचाउन बढी सहज हुन्छ । सबै जीवको कम्मरको मासु पचाउन कठिन हुन्छ ।

### रस, रक्त आदि सप्तधातु र अण्डकोष आदि अङ्ग

**रसरक्तादिधातूनां गुरुः स्यादुत्तरोत्तरम् ।**
**मेढ्रवृक्कयकृन्मांसं वार्षणं चातिमात्रतः ॥८६॥**

रस, रक्त आदि सात धातु क्रमशः बढी पचाउन कठिन हुन्छन् । जननेन्द्रिय, मृगौला, कलेजो र अण्डकोषको मासु अति नै पचाउन कठिन हुन्छ ।

### वर्गप्रशस्ति

**इत्थं प्रतिस्थलविलाम्बुनभःप्रचारप्राण्यङ्गमांसगुणनिर्णयपूर्णमेनम् ।**
**वर्गं विचार्य भिषजा विनियुज्यमानो भुक्त्वाशनं न विकृतिं समुपैति मर्त्यः ॥८७॥**



यस अध्यायमा उल्लेखित स्थलचर, प्वाल वा खोरमा बस्ने, जलचर र गगनचर अनेक जीवको मासुको गुणदोषका बारेमा पढेर चिकित्सकको सल्लाह अनुसार मासु खाने व्यक्तिलाई कहिल्यै रोग लाग्दैन ।

**यस्यासीत् समितिद्विपाधिपबृहत्कुम्भान्तरस्थामिष**
**प्रायाभ्यासपिपासयेव तरुणी नेत्राम्बुधारा द्विषाम् ।**
**तस्यायं पुरुषप्रतापसुहृदः श्रीमन्नृसिंहेशितु-**
**र्वर्गः सप्तदशो निषीदति कृतौ नामादिचूडामणौ ॥८८॥**

त्यस्ता शक्तिशाली व्यक्तिको वीरताका मित्र, जसका शत्रुहरू हात्तीको शिरमा बसेका छन् र युद्ध मैदानको कठोर अभ्यासले गर्दा तिर्खाएका छन् अनि जसका आँखाबाट मासु र तिर्खाले गर्दा आँशुका धारा बगिरहेका छन्, यस्ता सक्षम राजा नरहरिले आफ्नो नामादि चूडामणि नामक ग्रन्थको सत्रौं अध्याय समाप्त गरेका छन् ।

**इति निघण्टुराजापरनाम्नाभिधानचूडामणौ मांसादिवर्गः सप्तदशः समाप्तः ॥१७॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत मांसादिवर्ग नामक सत्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१७।**

# मनुष्यादि वर्ग :

## मानिसका पर्यायवाची नाम

**मनुष्या मानुषा मर्त्या मनुजा मानवा नराः ।**
**द्विपादाश्चेतना भूस्था भूमिजा भूस्पृशो विशः ॥१॥**

मनुष्य, मानुष, मर्त्य, मनुज, मानव, नर, द्विपाद, चेतना, भूस्थ, भूमिज, भूस्पृश र विश : यी मानिसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## पुरुषका पर्यायवी नाम

**पुरुषः पूरुषो ना च नरः पञ्चजनः पुमान् ।**
**अर्थाश्रयोऽधिकारी स्यात् कर्मार्हश्च जनोऽर्थवान् ॥२॥**

पुरुष, पूरुष, ना, नर, पञ्चजन, पुमान्, अर्थाश्रय, अधिकारी, कर्मार्ह, जन र अर्थवान् : यी पुरुषका संस्कृत पर्यायवाची नामहरू हुन् ।



## स्त्रीका पर्यायवाची नाम

**स्त्री योषिद्वनिताऽबला सुनयना नारी च सीमन्तिनी**
**रामा वामदृगङ्गना च ललना कान्ता पुरन्ध्री वधूः ।**
**सुभ्रूः सा वरवर्णिनी च सुतनुस्तन्वी तनुः कामिनी**
**तन्वङ्गी रमणी कुरङ्गनयना भीरुः प्रिया भामिनी ॥३॥**
**योषिन्महेला महिला विलासिनी नितम्बिनी साऽपि च मत्तकाशिनी ।**
**जनी सुनेत्रा प्रमदा च सुन्दरी स्यादञ्चितभ्रूर्ललिता विलासिनी च ॥४॥**
**मानिनी च वरारोहा नताङ्गी च नतोदरा**
**प्रतीपदर्शिनी श्यामा कामिनी दर्शनी च सा ॥५॥**

स्त्री, योषित्, वनिता, अबला, सुनयना, नारी, सीमन्तिनी, रामा, वामदृक्, अङ्गना, ललना, कान्ता, पुरन्ध्री, वधू, सुभ्रू, वरवर्णिनी, सुतनु, तन्वी, तनु, कामिनी, तन्वङ्गी, रमणी, कुरङ्गनयना, भीरु, प्रिया, भामिनी, योषित् (दोहोरिएको), महेला, महिला, विलासिनी, नितम्बिनी, मत्तकाशिनी, जनी, सुनेत्रा, प्रमदा, सुन्दरी, अञ्चितभ्रू, ललिता, विलासिनी (दोहोरिएको), मानिनी, वरारोहा, नताङ्गी, नतोदरा, प्रतीपदर्शिनी, श्यामा, कामिनी (दोहोरिएको) र दर्शनी : यी स्त्रीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पतिका पर्यायवाची नाम

**भर्ता पतिर्वरः कान्तः परिणेता प्रियो गृही ॥६॥**

भर्ता, पति, वर, कान्त, परिणेता, प्रिय र गृही : यी पतिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पत्नीका पर्यायवाची नाम

**भार्या पत्नी प्रिया जाया दाराश्च गृहिणी च सा ॥७॥**

भार्या, पत्नी, प्रिया, जाया, दारा र गृहिणी : यी पत्नीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### नपुंसकका पर्यायवाची नाम

**नपुंसकं भवेत् क्लीबं तृतीया प्रकृतिस्तथा ।**
**षण्ढः पण्डश्च नारी तु पोटा स्त्रीपुंसलक्षणा ॥८॥**



नपुंसक, क्लीब, तृतीया प्रकृति, षण्ढ, पण्ड, नारीपोटा र स्त्रीपुंसलक्षणा : यी नपुंसकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### महारानीका पर्यायवाची नाम

**अथ राज्ञी च पट्टार्हा महिषी राजवल्लभा ॥९॥**

राज्ञी, पट्टार्हा, महिषी र राजवल्लभा : यी महारानीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### भोगका लागि राखिएका रानीका पर्यायवाची नाम

**भोगिन्योऽन्या विलासिन्यः सम्भुङ्क्ते यास्तु पार्थिवः ॥१०॥**
**राजभोग्याः सुमुख्यो यास्ता भट्टिन्य इति स्मृताः ॥११॥**

भोगिनी र विलासिनी : यी राजाको भोगका लागि राखिएका रानीका संस्कृत पर्यायवाची नामहरू हुन् । मुख्य रानीलाई राजभोग्या वा भट्टिन्य भनिन्छ ।

**वेश्याका पर्यायवाची नाम**

**वेश्या तु गणिका भोग्या वारस्त्री स्मरदीपिका ॥१२॥**

वेश्या, गणिका, भोग्या, वारस्त्री र स्मरदीपिका : यी वेश्याका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**ब्राह्मणका पर्यायवाची नाम**

**ब्रह्मा तु ब्राह्मणो विप्रः षट्कर्मा च द्विजोत्तमः ॥१३॥**

ब्रह्मा, ब्राह्मण, विप्र, षट्कर्मा र द्विजोत्तम : यी ब्राह्मणका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**क्षत्रियका पर्यायवाची नाम**

**राजा तु सार्वभौमः स्यात् पार्थिवः क्षत्रियो नृपः ॥१४॥**

राजा, सार्वभौम, पार्थिव, क्षत्रिय र नृप : यी क्षत्रियका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**वैश्यका पर्यायवाची नाम**

**वैश्यस्तु व्यवहर्ता विड् वार्तिको वाणिजो वणिक् ॥१५॥**

वैश्य, व्यवहर्ता, विड्, वार्तिक, वाणिज र वणिक् : यी वैश्यका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शूद्रका पर्यायवाची नाम**

**शूद्रः पज्ञश्चतुर्थः स्याद् द्विजदास उपासकः ॥१६॥**

शूद्र, पज्ञ, चतुर्थ, द्विजदास र उपासक : यी शूद्रका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वर्ण**

**विप्रः क्षत्रो वैश्यशूद्रौ च वर्णाश्चत्वारोऽमी तत्र पूर्वे द्विजाः स्युः ।**
**एषामेव प्रातिलोम्यानुलोम्याज्जायन्तेऽन्या जातयः सङ्करेण ॥१७॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र : यी चार वर्ण हुन् । अघिल्ला तीन वर्णलाई द्विज भनिन्छ । यिनैबाट सुल्टो र उल्टो क्रममा अन्य अनेक वर्णसङ्कर जातिहरू उत्पन्न भएका हुन्छन् ।

### बालक

**बालः पाकोऽर्भको गर्भः पोतकः पृथुकः शिशुः ।**
**शावोऽर्भो बालिशो डिम्भो वटुर्माणवको मतः ॥१८॥**

बाल, पाक, अर्भक, गर्भ, पोतक, पृथुक, शिशु, शाव, अर्भ, बालिश, डिम्भ, वटु र माणवक : यी बालकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### उमेर अनुसार बालकका नाम

**जातोऽर्भकः पक्षदिनेन मासतः पाकस्त्रिभिस्तैरथ पोतकाभिधः ।**
**षड्भिस्तु मासैः पृथुकोऽब्दतः शिशुस्त्रिभिर्वटुर्माणवकश्च सप्तभिः ॥१९॥**
**बालोऽब्दैः पञ्चदशभिः कुमारस्त्रिंशता स्मृतः ।**
**युवा पञ्चाशता वर्षैर्वृद्धः स्याहत्त उत्तरैः ॥२०॥**

पन्ध्र दिनदेखि एक महिनासम्मको बालकलाई अर्भक भनिन्छ । दुई महिना लागेदेखि तीन महिनासम्मको बालकलाई पाक वा पोतक भनिन्छ । चार महिना लागेदेखि छ महिनासम्मको बालकलाई पृथुक भनिन्छ । सात महिना लागेदेखि एक वर्षसम्मको बालकलाई शिशु भनिन्छ । दुई वर्ष लागेदेखि तीन वर्षसम्मको बालकलाई वटु भनिन्छ । चार वर्ष लागेदेखि सात वर्षसम्मको बालकलाई माणवक भनिन्छ । आठ वर्ष लागेदेखि पन्ध्र वर्षसम्मकोलाई वाल भनिन्छ । सोह्र वर्ष लागेदेखि तीस वर्ष सम्मकोलाई कुमार भनिन्छ । एकतीस वर्ष लागेदेखि पचास वर्षसम्मको व्यक्तिलाई युवा भनिन्छ । पचास वर्ष नाघेको व्यक्तिलाई वृद्ध भनिन्छ ।



### कुमार, पौगण्ड आदि

**कौमारं पञ्चमाब्दान्तं पौगण्डं दशमावधि ।**
**कैशोरमापञ्चदशाद्यौवनं तु ततः परम् ॥२१॥**

पाँच वर्ष सम्मकोलाई कुमार, त्यसपछि दश वर्षसम्मकोलाई पौगण्ड, त्यसपछि पन्ध्र वर्षसम्मकोलाई किशोर र पन्ध्र वर्षभन्दा माथिकोलाई युवा भनिन्छ ।

### युवा र वृद्ध

**युवा वयःस्यस्तरुणो वृद्धस्तु स्थविरो जरत् ।**
**प्रवया यातयामश्च जीनो जीर्णश्च जर्जरः ॥२२॥**

युवा, वयस्य र तरुण : यी युवाका तथा वृद्ध, स्थविर, जरत्, प्रवया, यातयाम, जीन, जीर्ण र जर्जर : यी वृद्धका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बालिका**

**बालोत्तानशया डिम्भा स्तनपा च स्तनन्धयी ॥२३॥**

बाला, उत्तानशया, डिम्भा, स्तनपा र स्तनन्धयी : यी नाम बालिकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कन्या**

**कन्या कुमारी गौरी तु नग्निकाऽनागतार्तवा ॥२४॥**

कन्या, कुमारी, गौरी, नग्निका र अनागतार्तवा : यी कुमारीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**युवती**



**सा मध्यमा वयःस्था च युवती सुस्तनी च सा ।**
**चिरण्टी सुवयाः श्यामा प्रौढा दृष्टरजाश्च सा ॥२५॥**

मध्यमा, वयःस्था, युवती, सुस्तनी, चिरण्टी, सुवया, श्यामा, प्रौढा र दृष्टरजा : यी युवतीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**गर्भिणी**

**गुर्विण्यापन्नसत्त्वा स्यादन्तर्वत्नी च गर्भिणी ॥२६॥**

गुर्विणी, आपन्नसत्त्वा, अन्तर्वत्नी र गर्भिणी : यी गर्भवतीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वृद्धा**

**निष्फला जरती वृद्धा स्थविरा च गतार्तवा ॥२७॥**

निष्फला, जरती, वृद्धा, स्थविरा र गतार्तवा : यी वृद्धाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**रजस्वला**

**पुष्पिता मलिना म्लाना पांशुला च रजस्वला ॥२८॥**

पुष्पिता, मलिना, म्लाना, पांशुला र रजस्वला : यी नाम रजस्वलाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बन्ध्या**

**वन्ध्याऽवकेशिनी शून्या मोघपुष्पा वृथाऽऽर्तवा ॥२९॥**

वन्ध्या, अवकेशिनी, शून्या, मोघपुष्पा र वृथार्तवा : यी नाम बन्ध्याका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शरीर**

**तनुस्तनूः संहननं शरीरं कलेवरं क्षेत्रवपुः पुराणि ।**

**गात्रं च मूर्तिर्घनकायदेहावष्टाङ्गपीडानि च विग्रहश्च ॥३०॥**

तनु, तनू, संहनन, शरीर, कलेवर, क्षेत्रवपु, पुराणि, गात्र, मूर्ति, घन, काय, देह, अष्टाङ्ग, पीड र विग्रह : यी शरीरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शरीरका अङ्ग**

**अङ्गमंसः प्रतीकश्चापघनोऽवयवोऽपि च ॥३१॥**

अङ्ग, अंस, प्रतीक, अपघन र अवयव : यी अङ्गका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**टाउको**

**शिरः शीर्षकमुण्ड च मूर्धा मौलिश्च मस्तकम् ।**
**वराङ्गमुत्तमाङ्गञ्च कपालं केशभृत् स्मृतम् ॥३२॥**

शिर, शीर्षक, मुण्ड, मूर्धा, मौलि, मस्तक, वराङ्ग, उत्तमाङ्ग, कपाल र केशभृत् : यी टाउकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कपाल**

**केशाः शिरसिजा बालाः कुन्तला मूर्धजाः कचाः ।**
**चिकुराः करुहाश्चाथ तद्वेष्टाः कवरीमुखाः ॥३३॥**

केशा, शिरसिजा, बाला, कुन्तला, मूर्धजा, कचा, चिकुरा, करुहा, तद्वेष्टा र कवरीमुखा : यी कपालका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**आँखा**

**दृग्दृष्टिर्लोचनं नेत्रं चक्षुर्नयनमम्बकम् ।**
**ईक्षणं ग्रहणं चाक्षि दर्शनञ्च विलोचनम् ॥३४॥**

दृग् दृष्टि, लोचन, नेत्र, चक्षु, नयन, अम्बक, ईक्षण, ग्रहण, अक्षि, दर्शन र विलोचन : यी आँखाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**आँखाको कुना र पुतली**



**अपाङ्गो नेत्रपर्यन्तो नयनोपान्त इत्यपि ।**
**तयोर्मध्यगता तारा बिम्बिनी च कनीनिका ॥३५॥**

अपाङ्ग, नेत्रपर्यन्त र नयनोपान्त : यी आँखाको कुनाका तथा तारा, बिम्बिनी र कनीनिका : यी आँखाका पुतलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**निधार, आँखीभुई, कान आदि**

**भालं ललाटमलिकं कथयन्ति गोधि-**
**र्भ्रूश्चिल्लिका च नयनोर्ध्वगरोमराजिः ।**
**मध्यं तयोर्भवति कूर्चमथ श्रुतिस्तु**
**श्रोतः श्रवः श्रवणकर्णवचोग्रहाश्च ॥३६॥**

भाल, ललाट र अलिक : यी निधारका; गोधि, भ्रू, चिल्लिका र सोमराजि : यी आँखिभुईका; कूर्च : यो दुई आँखीभुईँको बीच भागका तथा श्रुति, श्रोत, श्रव, श्रवण, कर्ण र वचोग्रह : यी कानका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## ओठ

**ओष्ठोऽधरो दन्तवासो दन्तवस्त्रं रदच्छदः ।**
**तयोरुभयतो देशौ यौ प्रान्तौ सृक्कणी च तौ ॥३७॥**

ओष्ठ, अधर, दन्तवास, दन्तवस्त्र र रदच्छद : यी ओठका संस्कृत पर्यायवाची नामहरू हुन् । ओठको दुवै तिरको कुनुलाई सृक्कणी भनिन्छ ।

## नाक

**घ्राणं गन्धवहो घोणा सिङ्घिणी नासिका च सा ॥३८॥**

घ्राण, गन्धवह, घोणा, सिङ्घिणी र नासिका : यी नाकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## कञ्चट र सिङान

**शङ्खः कर्णसमीपः स्यात् सिङ्घाणं नासिकामले ॥३९॥**



कञ्चटलाई शङ्ख र सिङानलाई सिङ्घाण भनिन्छ ।

## मुख

**तुण्डमास्यं मुखं वक्त्रं वदनं लपनानने ॥४०॥**

तुण्ड, आस्य, मुख, वक्त्र, वदन, लपन र आनन : यी मुखका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## चिउँडो र गाला

**ओष्ठाधरस्तु चिबुकं गण्डो गल्लः कपोलकः ॥४१॥**

ओष्ठाधर र चिबुक : यी चिउँडोका तथा गण्ड, गल्ल र कपोलक : यी गालाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## च्यापु र दाँत

**हनूस्तदूर्ध्वं दशनाश्च दन्ता द्विजा रदास्ते रदनास्तथोक्ताः ॥४२॥**

माख्लो च्यापुलाई हनू भनिन्छ । दशन, दन्त, द्विज, रद र रदन : यी दाँतका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**जिभ्रो र तालु**

**जिह्वा रसज्ञा रसना च सोक्ता स्यात् काकुदं तालु च तालुकं च ॥४३॥**

जिह्वा, रसज्ञा र रसना : यी जिभ्रोका तथा काकुद, तालु र तालुक : यी तालुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**किलकिले**

**तदूर्ध्वं सूक्ष्मजिह्वा या घण्टिका लम्बिका च सा ॥४४॥**

सूक्ष्मजिह्वा, घण्टिका र लम्बिका : यी रुद्रघण्टीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**अन्याऽधोमूलजिह्वा स्यात् प्रतिजिह्वोपजिह्विका ॥४५॥**



जिभ्राको फेदमा हुने लिगलिगेलाई संस्कृतमा अधोमूलजिह्वा, प्रतिजिह्वा र उपजिह्विका भनिन्छ ।

**गर्दन**

**अवटुस्तु शिरःपश्चात् सन्धिर्घाटा कृकाटिका ॥४६॥**

टाउकाको पछिल्तिर रहेको गर्दनको उठेको भागलाई संस्कृतमा अवटु, घाटा र कृकाटिका पनि भनिन्छ ।

**ग्रीवा च कन्धरा कन्धिः शिरोधिश्च शिरोधरा ॥४७॥**

ग्रीवा, कन्धरा, कन्धि, शिरोधि र शिरोधरा : यी गर्दनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**घाँटी र लिगलिगे**

**कण्ठो गलो निगालोऽथ घण्टिका गलशुण्ठिका ॥४८॥**

कण्ठ, गल र निगाल : यी घाँटीका तथा घाँण्टिका र गलशुण्ठिका : यी लिगलिगका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### काँध

**धमनी तु शिरांऽसे तु स्कन्धोऽधःशिखरं तथा ॥४९॥**

धमनी र शिरा हुन्छन् । अंस, स्कन्ध र अधशिखर यी काँधका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### खगाल्नु र काखी

**तस्य सन्धिस्तु जत्रु स्यात् कक्षा दोर्मूलसञ्ज्ञका ॥५०॥**

काँधका जोर्नीलाई जत्रु भनिन्छ । कक्ष र दोर्मूल : यी काखीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कोख र ढाड

**तदधस्ताद्भवेत् पार्श्वं पृष्ठं पश्चात्तनोः स्मृतम् ॥५१॥**



काखीभन्दा तलको भागलाई पार्श्व (कोख) भनिन्छ । शरीरको पछिल्तिरको भागलाई पृष्ठ (ढाड) भनिन्छ ।

### पाखुरा

**दोर्दोषा च प्रवेष्टश्च बाहुर्बाहा भुजो भुजा ॥५२॥**

दो, दोषा, प्रवेष्ट, बाहु, बाहा, भुज र भुजा : यी पाखुराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### हात

**पाणिस्तु पञ्चशाखः स्यात् करो हस्तः शयस्तथा ॥५३॥**

पाणि, पञ्चशाख, कर, हस्त र शय : यी हातका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मणिबन्ध र कुहुनु**

**करमूले मणिबन्धो भुजमध्ये कूर्परः कफोणिश्च ॥५४॥**

हातको फेदलाई मणिबन्ध, हातको बीचको जोर्नीलाई कूर्पर वा कफोणि (कुहुनु) भनिन्छ ।

**प्रकोष्ठ र प्रगण्डक**

**तस्मादधः प्रकोष्ठः प्रगण्डकः कूर्परांसमध्यं स्यात् ॥५५॥**

कुहिनुभन्दा मुनिको भागलाई प्रकोष्ठ भनिन्छ । काँध र कुहिनुको बीचको भागलाई चाहीँ प्रगण्डक भनिन्छ ।

**औंला, चोर औंला र औंलाका आँख्ली**

**अङ्गुल्यः करशाखाः स्युः प्रदेशिन्यां तु तर्जनी ।**
**परुः स्यादङ्गुलीसन्धिः पर्वसन्धिश्च कथ्यते ॥५६॥**



अङ्गुली र करशाखा : यी औंलाका संस्कृत पर्यायवाची नामहरू हुन् । प्रदेशिनी र तर्जनी : यी चोर औंलाका संस्कृत पर्यायवाची नामहरू हुन् । परु, अङ्गुलीसन्धि र पर्वसन्धि : यी औंलाका आँख्लीको जोर्नीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पाँच औंला**

**अथाङ्गुष्ठप्रदेशिन्यौ मध्यमाऽनामिका तथा ।**
**कनिष्ठा चेति पञ्च स्युः क्रमेणाङ्गुलयः स्मृताः ॥५७॥**

अङ्गुष्ठ बूढी औंलाको, प्रदेशिनी चोर औंलाको, मध्यमा माझीऔंलाको, अनामिका साहिँली औंलाको तथा कनिष्ठा कान्छी औंलाको संस्कृत नाम हो । यी नाम क्रमैले हातका औंलाहरूका नाम हुन् ।

**नङ**

**कामाङ्कुशाः कररुहाः करजा नखरा नखाः ।**
**पाणिजाङ्गुलिसम्भूताः पुनर्भवपुनर्नवाः ॥५८॥**

कामाङ्कुश, कररुह, करज, नखर, नख, पाणिज अङ्गुलि सम्भूत, पुनर्भव र पुनर्नवा : यी नङका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### हत्केला र रेखा

**करस्याधः प्रपाणिः स्याद्दूर्ध्वं करतलं स्मृतम् ।**
**रेखाः सामुद्रिके ज्ञेयाः शुभाशुभनिवेदिकाः ॥५९॥**

संस्कृतमा हत्केलाको पछिल्तिरको भागलाई प्रपाणि र हत्केलालाई करतल भनिन्छ । ज्योतिषशास्त्र अनुसार शुभ-अशुभ कुरा बताउने हातका धर्कालाई रेखा भनिन्छ ।

### स्तन

**स्तनोरसिजवक्षोजपयोधरकुचास्तथा ॥६०॥**

स्तन, उरसिज, वक्षोज, पयोधर र कुच : यी स्तनका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**स्तनाग्रं चूचुकं वृत्तं शिखा स्तनमुखञ्च तत् ॥६१॥**

स्तनाग्र, चूचुक, वृत्त, शिखा र स्तनमुख : यी दूधको मुन्टोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### छाती

**वक्षो वत्समुरः क्रोडो हृदयं हृद्भुजान्तरम् ॥६२॥**

वक्ष, वत्स, उर, क्रोड, हृदय, हृद् र भुजान्तर : यी छातीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पेट

**कुक्षिः पिचिण्डो जठरं तुन्दं स्यादुदरञ्च तत् ॥६३॥**

कुक्षि, पिचिण्ड, जठर, तुन्द र उदर : यी पेटका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मर्मस्थल र त्रिक

**जीवस्थानं तु मर्म स्यात् कटिप्रान्ते त्रिकं स्मृतम् ॥६४॥**

शरीरको मर्मस्थललाई जीवस्थान वा मर्म भनिन्छ । कम्मरको तल्लो भागलाई कटिप्रान्त वा त्रिक भनिन्छ ।

### नाइटो, तल्लो पेट र गर्भस्थान

**नाभिः स्यादुदरावर्तस्ततोऽधो वस्तिरुच्यते ।**
**वस्तिश्च वातशीर्षं स्याद्गर्भस्थानञ्च तत् स्त्रियाः ॥६५॥**

नाइटोलाई नाभि वा उदरावर्त भनिन्छ । त्यसभन्दा तलको भाग (तल्लो पेट) लाई वस्ति भनिन्छ । नारीको गर्भस्थानलाई वातशीर्ष पनि भनिन्छ ।

### गर्भाशय

**गर्भाशयो जरायुश्च गर्भाधारश्च स्मृतः ॥६६॥**

गर्भाशय, जरायु र गर्भाधार : यी गर्भाशयका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### आमाशय

**नाभिस्तनान्तरं जन्तोरामाशयः इति स्मृतः ॥६७॥**

नाइटो र स्तनका बीचमा रहेको पेटको भित्री भागलाई आमाशय भनिन्छ ।

### पक्वाशय

**पक्वाशयो ह्यधो नाभेर्वस्तिर्मूत्राशयः स्मृतः ॥६८॥**

नाइटो भन्दा तल पक्वाशय, वस्ति र मूत्राशय हुन्छ ।

### कम्मर

**कटिः ककुद्मती श्रोणी नितम्बश्च कटीरकम् ।**
**आरोहं श्रोणिफलकं कलत्रं रसनापदम् ॥६९॥**

कटि, ककुद्मती, श्रोणी, नितम्ब, कटीरक, आरोह, श्रोणिफलक, कलत्र र रसनापद : यी कम्मरका

संस्कृत पर्यायवाची नामहरू हुन् ।

**नितम्ब र जघन**

**नितम्बश्चरमं श्रोणेः स्त्रीणां जघनमग्रतः ॥७०॥**

स्त्रीको कम्मरभन्दा मुनिरहेको पछिल्तिरको भागलाई नितम्ब र अघिल्तिरको भागलाई जघन भनिन्छ ।

**ककुन्दर, स्फिक् र गुदद्वार**

**ककुन्दरौ तु सर्वेषां स्यातां जघनकूपकौ ।**
**कटिप्रोथौ स्फिचौ पायुर्गुदापानं तदासनम् ॥७१॥**

तिघ्राका फिलामा हुने खोपिल्टो भागलाई ककुन्दर वा जघनकूपक भनिन्छ । कम्मर मुनि फैलिएको मांसल भागलाई कटिप्रोथ वा स्फिच भनिन्छ । पायु, गुद, अपान र आसन : यी गुदद्वारका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**भग**

**गुदमुष्कद्वयोर्मध्ये यो भागः स भगः स्मृतः ॥७२॥**

गुदद्वार र अण्डकोषको बीचको भागलाई (पनि) भग भनिन्छ ।

**अण्डकोश**

**मुष्कोऽण्डमण्डकोषश्च वृषणो बीजपेशिका ॥७३॥**

मुष्क, अण्ड, अण्डकोष, वृषण र बीजपेशिका : यी नाम अण्डकोशको संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पुरुष जननेन्द्रिय**

**शिश्नं शेफश्च लिङ्गञ्च मेढ्रं साधनमेहने ॥७४॥**

शिश्न, शेफ, लिङ्ग, मेढ्र, साधन र मेहन : यी नाम पुरुष जननेन्द्रियका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### स्त्री-जननेन्द्रिय

**योनिर्भगो वराङ्गं स्यादुपस्थं स्मरमन्दिरम् ॥७५॥**

योनि, भग, वराङ्ग, उपस्थ र स्मरमन्दिर : यी नाम स्त्री-जननेन्द्रियका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### तिघ्रा, वङ्क्षण र घुँडा

**ऊरू तु सक्थिनी श्रोणिसक्थ्नोः सन्धिस्तु वङ्क्षणः ।**
**जङ्घोरूमध्यपर्व स्याज्जान्वष्ठीवच्च चक्रिका ॥७६॥**

ऊरू र सक्थिनी : यी तिघ्रा वा पिँडौलाका, वङ्क्षणः यो कम्मर र तिघ्राको जोर्नीको तथा पर्व, जानु, अष्ठीवत् र चक्रिका : यी जाँघ र उरुको जोर्नी (घुँडा) का संस्कृत पर्यायवाची नामहरू हुन् ।



### जङ्घा र पिण्डिका

**जङ्घा तु प्रसृता ज्ञेया तन्मध्ये पिण्डिका तथा ॥७७॥**

जङ्घा र प्रसृता : यी तिघ्रा वा पिडौँलाको फराकिलो र मोटो भागको तथा पिण्डिका : यो तिघ्रा वा पिडौँलाको बीच भागको संस्कृत पर्यायवाची नामहरू हुन् ।

### गोलीगाँठो

**जङ्घाऽङ्घ्रिसन्धिग्रन्थौ तु घुटिका गुल्फ इत्यपि ॥७८॥**

तिघ्रा र गोडाको जोर्नी (गोलीगाँठो) लाई घुटिका वा गुल्फ भनिन्छ ।

### कुर्कुचो र गोडाको अगाडिको भाग

**गुल्फस्याधस्तु पार्ष्णिः स्यात् पादाग्रं प्रपदं मतम् ॥७९॥**

गोलिगाँठोभन्दा तल पछिल्तिरको गोडाको भाग अर्थात् कुर्कुचोलाई संस्कृतमा पार्ष्णि भनिन्छ भने

गोलिगाँठाभन्दा तल औंलातिरको गोडाको भागलाई संस्कृतमा पादाग्र वा प्रपद भनिन्छ ।

**गोडा**

**विक्रमश्चरणः पादः पादाङ्घ्रिश्च पदं क्रमः ॥८०॥**

विक्रम, चरण, पाद, पादाङ्घ्रि, पद र क्रम : यी गोडाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**काख**

**क्रोडमङ्कस्तथोत्सङ्गः प्राग्भागो वपुषः स्मृतः ॥८१॥**

क्रोड, अङ्क र उत्सङ्ग : यी शरीरको अगिल्तिरको भाग अर्थात् काखका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**हातका नाप आदि**

**करो भवेत् संहितविस्तृताङ्गुलस्तलश्चपेटः प्रतलः प्रहस्तकः ।**
**मुष्टिर्भवेत् संहृतपिण्डिताङ्गुलावाकुञ्चितोऽग्रे प्रसृतः प्रकीर्तितः ॥८२॥**



हत्केलाको फिँजिएका औंला सहितको अवस्थालाई वा झापटलाई संस्कृतमा चपेट, प्रतल वा प्रहस्तक भनिन्छ । हत्केलाका खुम्च्याएर डल्लो बनाइएको अवस्थालाई वा मुठीलाई संस्कृतमा मुष्टि भनिन्छ । औंला टम्म जोडी केही खुँच्याएर फैलाइएको हत्केलाको अगिल्तिरको अवस्थालाई वा पसरलाई संस्कृतमा प्रसृत भनिन्छ ।

**स्यात् तर्जनी मध्यमिका त्वनामिका कनिष्ठिकाऽङ्गुष्ठयुता यदा तदा ।**
**प्रादेशतालाभिधगोस्रवस्तथा वितस्तिरत्यर्थमिह क्रमादियम् ॥८३॥**

चोर औंलो र बूढी औंलो फिँजाउँदा हुने आकारलाई वा नापो वा कुरेतलाई संस्कृतमा प्रादेश भनिन्छ । माझी औंलो र बूढी औंलो फिँजाउँदा हुने नापलाई संस्कृतमा ताल भनिन्छ । साँहिली औंलो र बूढी औंलो फिँजाउँदा हुने नापलाई संस्कृतमा अभिध भनिन्छ । कान्छी औंलो र बूढी औंलो फिँजाउँदा हुने नापलाई वा बित्तालाई संस्कृतमा गोस्रव वा वितस्ति भनिन्छ ।

**हस्तस्तु विस्तृते पाणावा मध्याङ्गुलिकूर्परम् ॥८४॥**

कुहिनुदेखि माझी औंलाको टुप्पोसम्मको फैलाउँदा हुने नापोलाई संस्कृतमा हस्त भनिन्छ ।

**बद्धमुष्टौ सरत्निः स्यादरत्निरकनिष्ठकः ॥८५॥**

कुहिनुदेखि मुठी बटारेको हातसम्मको नाप अर्थात् मुडीहातलाई संस्कृतमा सरत्नि भनिन्छ । कुहिनुदेखि कान्छी औँलासम्मको फिजाउँदा हुने नापलाई अरत्नि भनिन्छ ।

**व्यामः सहस्तयोः स्यात्तु तिर्यग्बाह्वोर्यदन्तरम् ।**
**ऊर्ध्वं विस्तृतदोष्पाणिर्नृमानं पौरुषं विदुः ॥८६॥**

दुवै हात दुईतिर कुमको सिधा हुने गरी फैलाउँदा एउटा हातको औँलाको टुप्पादेखि अर्को हातको औँलाको टुप्पासम्मको नापलाई संस्कृतमा व्याम भनिन्छ । दुवै हात औँला फिँजाएर टाउको माथि सिधा तन्काएर राख्दा हुने उचाई नै पुरुषको उचाई हो ।

**मर्मस्थान**

**जीवस्थानं तु मर्म स्याज्जीवागारं तदुच्यते ॥८७॥**

जीवस्थान, मर्म र जीवागार : यी मर्मस्थलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मर्मस्थानं च तत्प्रोक्तं भ्रूमध्यादिष्वनेकधा ॥८८॥**

दुवै आँखीभुइँको बीचको भाग आदि अनेक अङ्गलाई मर्मस्थान भनिन्छ ।

**भ्रूमध्यकण्ठगलशङ्खकचांसपृष्ठग्रीवागुदाण्डपदपाणियुगास्थिसन्धीन् ।**
**वैद्याः शरेक्षणमितानि वदन्ति मर्मस्थानानि चाङ्गतिनाशकराणि मर्त्ये ॥८९॥**

दुवै आँखीभुइँको बीचको भाग, घाँटी, गर्दन, दुई तिरका कञ्चट, कच, दुई काँध, जिभ्रो, गुदद्वार, अण्डकोश, दुवै पदपाणि र हाडका जोर्नीहरू समेत गरी जम्मा पच्चीस मर्मस्थलहरू हुन्छन् । यी अत्यन्त महत्वपूर्ण हुन्छन् र यी नाश हुँदा त्यससँग सम्बन्धित अङ्गहरू चल्दैनन् ।

**र्‍याल**

**लाला भवेन्मुखस्रावः मृणिका स्यन्दिनी च सा ॥९०॥**

लाला, मुखस्राव, मृणिका र स्यन्दिनी : यी र्‍याल वा थुकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पसिना र चिप्रा

**स्वेदो घर्मश्च घर्माम्भो दूषिका नेत्रयोर्मलम् ॥९१॥**

स्वेद, घर्म र घर्माम्भ : यी पसिनाका तथा दूषिका : यो चिप्राको संस्कृत पर्यायवाची नाम हो ।

### मल र मूत्र

**मलं विष्ठा पुरीषञ्च विट् किट्टं पूतिकञ्च तत् ।**
**मूत्रं तु गुह्यनिष्यन्दः प्रस्रावः स्रवणं स्रवः ॥९२॥**

मल, विष्ठा, पुरीष, विट्, किट्ट र पूतिक : यी दिसाका तथा मूत्र, गुह्यनिष्यन्द, प्रस्राव, स्रवण र स्रव : यी पिसाबका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### चाउरी

**वली चर्मतरङ्गः स्यात्त्वगूर्मिस्त्वक्तरङ्गकः ॥९३॥**



वली, चर्मतरङ्ग, त्वगूर्मि र त्वक्तरङ्गक (त्वग्रङ्गक) : यी छालामा पर्ने चाउरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### फुलेको कपाल

**पलितञ्च जरालक्ष्म केशशौक्ल्यञ्च तद्भवेत् ॥९४॥**

पलित, जरालक्ष्म र केशशौक्ल्य (केशशौकल्य) : यी कपाल फुल्नुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### सप्त धातु

**रसासृङ्मांसमेदोऽस्थिमज्जानः शुक्रसंयुताः ।**
**शरीरस्थैर्यदाः सम्यक् विज्ञेयाः सप्त धातवः ॥९५॥**

शरीरमा बेग्लाबेग्लै रहँदाको अवस्थामा रस, रगत, मासु, बोसो, हाड, मासी र शुक्रलाई सात धातु भनिन्छ ।

### रस

**रसस्तु रसिका प्रोक्ता स्वेदमाता वपुःस्रवः ।**
**चर्माम्भश्चर्मसारश्च रक्तसूरस्रमातृका ॥९६॥**

रस, रसिका, स्वेदमाता, वपुःस्रव, चर्माम्भ, चर्मसार, रक्तसू र अस्रमातृका : यी रसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रगत

**रक्तास्रं रुधिरं त्वग्जं कीलालक्षतजानि तु ।**
**शोणितं लोहितं चासृक् शोणं लोहञ्च चर्मजम् ॥९७॥**

रक्त, अस्र, रुधिर, त्वग्ज, कीलाल, क्षतज, शोणित, लोहित, असृक्, शोण, लोह र चर्मज : यी रगतका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### मासु

**मांसन्तु पिशितं क्रव्यं पलं तु रस्यमस्रजम् ।**
**पललं जाङ्गलं कीरमामिषञ्च तदुच्यते ॥९८॥**

मांस, पिशित, क्रव्य, पल, रस्य, अस्रज, पलल, जाङ्गल, कीर र आमिष : यी मासुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### बोसो

**मेदस्तु मांससारः स्यान्मांसस्नेहो वसा वपा ॥९९॥**

मेद, मांससार, मांसस्नेह, वसा र वपा : यी बोसोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### हाड

**मेदोजमस्थिधातुः स्यात् कुल्यं कीकसकञ्च तत् ॥१००॥**

मेदोज, अस्थिधातु, कुल्य र कीकसक : यी हाडका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मासी**

**अस्थिसारस्तु मज्जा स्यात्तेजो बीजं तथास्थिजम् ।**
**जीवनं देहसारश्च तथाऽस्थिस्नेहसञ्ज्ञकम् ॥१०१॥**

अस्थिसार, मज्जा, तेज, बीज, अस्थिज, जीवन, देहसार र अस्थिस्नेह : यी मासीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शुक्र**

**शुक्रं पुंस्त्वं रेतो बीजं वीर्यञ्च पौरुषं कथितम् ।**
**इन्द्रियमन्नविकारो मज्जरसो हर्षणं बलञ्चैव ॥१०२॥**

शुक्र, पुंस्त्व, रेत, बीज, वीर्य, पौरुष, इन्द्रिय, अन्नविकार, मज्जरस, हर्षण र बल : यी शुक्रका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**धातु बन्ने क्रम**



**रसादस्रं ततो मांसं मांसान्मेदोऽस्थि तद्भवम् ।**
**अस्थ्नो मज्जा ततः शुक्रमित्थमेषां जनिक्रमः ॥१०३॥**

रसबाट रगत, रगतबाट मासु, मासुबाट हाड, हाडबाट मासी र मासीबाट शुक्र बन्दछ । सात धातु बन्ने क्रम यही हो ।

**फोक्सो आदि**

**तिलकं क्लोम मस्तिष्कं स्नेहस्तु मस्तकोद्भवः ॥१०४॥**

तिलक र क्लोम : यी फोक्सोका संस्कृत पर्यायवाची नामहरू हुन् । मस्तिष्कबाट निस्कने चिल्लो पदार्थलाई मस्तकोद्भव भनिन्छ ।

**आन्द्रा र फियो**

**अन्त्रं पुरीतदाख्यातं प्लीहा गुल्म इति स्मृतः ॥१०५॥**

संस्कृतमा आन्द्रालाई अन्त्र वा पुरीतद् तथा फियोलाई प्लीहा वा गुल्म भनिन्छ ।

### स्नायु, छाला र धमनी

**वसा तु वस्नसा स्नायुर्वत्सोक्ता देहवल्कलम् ।**
**सा त्वक्शिरोधिजा मन्या धमनी धरणी धरा ॥१०६॥**
**तन्तुकी जीवितज्ञा च नाडी सिंही च कीर्त्तिता ॥१०७॥**

वसा, वस्नसा, स्नायु र वत्सा : यी स्नायुका तथा देहवल्कल र त्वक् : यी छालाका संस्कृत पर्यायवाची नामहरू हुन् । शिरोधिजा, मन्या, धमनी, धरणी, धरा, तन्तुकी, जीवितज्ञा, नाडी र सिंही : यी धमनीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ढोडनसो

**कण्डरा तु महास्नायुर्महानाडी च सा स्मृता ॥१०८॥**

कण्डरा, महास्नायु र महानाडी : यी ढोडनसोका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### कङ्काल, ग्रन्थि र कलेजो

**शरीरास्थि तु कङ्कालं स्यात् करङ्कोऽस्थिपञ्जरः ।**
**स्रोतांसि खानि छिद्राणि कालखण्डं यकृन्मतम् ॥१०९॥**

शरीरास्थि, कङ्काल, करङ्क र अस्थिपञ्जर : यी कङ्कालका संस्कृत पर्यायवाची नामहरू हुन् । स्रोतस्, खानि र छिद्र : यी नियमित रूपमा रस आदि धातु ग्रहण गरी नचाहिने कुरा बाहिर निकाल्ने शरीरका ग्रन्थीका संस्कृत पर्यायवाची नामहरू हुन् । कालखण्ड र यकृत् : यी कलेजोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### शरीरमा भएका विभिन्न हाडका नाम

**शिरोऽस्थि तु करोटिः स्यात् शिरस्त्राणं तु शीर्षकम् ।**
**तत् खण्डं खर्परं प्राहुः कपालञ्च तदीरितम् ॥११०॥**
**पृष्ठास्थि तु कसेरुः स्यात् शाखास्थि नलकं स्मृतम् ॥१११॥**
**पार्श्वास्थि पर्शुका प्रोक्तमिति देहाङ्गनिर्णयः ॥११२॥**

टाउकाको पूरा हाडलाई करोटि र शिरको बीचको भागको हाडलाई शिरस्त्राण वा शीर्षक भनिन्छ । टाउकाको कचौरा जस्तो हाडको खण्डलाई वा खप्परलाई खर्पर वा कपाल वा शीर्षखण्ड भनिन्छ । ढाडको हाडलाई कसेरु र नलीहाडलाई नलक भनिन्छ । करङलाई पर्शुका भनिन्छ । यसरी शरीरका अङ्गका बारेमा बताएर सकियो ।

### आत्मा

**आत्मा शरीरी क्षेत्रज्ञः पुद्गलः प्राण ईश्वरः ।**
**जीवो विभुः पुमानीशः सर्वज्ञः शम्भुरव्ययः ॥११३॥**

आत्मा, शरीरी, क्षेत्रज्ञ, पुद्गल, प्राण, ईश्वर, जीव, विभु, पुमान्, ईश, सर्वज्ञ, शम्भु र अव्यय : यी आत्माका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### प्रकृति

**प्रधानं प्रकृतिर्माया शक्तिश्चैतन्यमित्यपि ॥११४॥**

प्रधान, प्रकृति, माया, शक्ति र चैतन्य : यी प्रकृतिका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### अहङ्कार

**अहङ्कारोऽभिमानः स्यादहन्ताऽहम्मतिस्तथा ॥११५॥**

अहङ्कार, अभिमान, अहन्ता र अहंमति : यी अहङ्कारका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मन

**मानसं हृदयं स्वान्तं चित्तं चेतो मनश्च हृत् ॥११६॥**

मानस, हृदय, स्वान्त, चित्त, चेत, मन र हृत् : यी मनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### त्रिगुण

**सत्त्वं रजस्तमश्चेति प्रोक्ताः पुंसस्त्रयो गुणाः ॥११७॥**

सत्व, रज र तम : यी मानिसका तीन गुणका नाम हुन् ।

## इन्द्रिय

**श्रोत्रं त्वग्रसना नेत्रं नासा चेत्यक्षपञ्चकम् ॥११८॥**

कान, छाला, जिभ्रो, आँखा र नाक : यी पाँच ज्ञानेन्द्रियका नाम हुन् ।

**अक्षं हृषीकं करणं बर्हणं विषयीन्द्रियम् ॥११९॥**

अक्ष, हृषीक, करण, बर्हण, विषयी र इन्द्रिय : यी ज्ञानेन्द्रिय र कर्मेन्द्रिय दुवैलाई बुझाउने संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शब्दः स्पर्शो रसो रूपं गन्धश्च विषया अमी ।**
**इन्द्रियार्था गोचरास्ते पञ्चभूतगुणाः खलु ॥१२०॥**

शब्द, स्पर्श, रस, रूप र गन्ध : यी इन्द्रियका विषयहरू हुन् । इन्द्रियार्थ, गोचर र पञ्चभूतगुणा : यी इन्द्रियका विषयहरूको सामूहिक नाम हुन् ।



## पञ्चमहाभूत

**आकाशमनिलस्तोयं तेजः पृथ्वी च तान्यपि ।**
**क्रमेण पञ्च भूतानि कीर्तितानि मनीषिभिः ॥१२१॥**

विद्वानहरूले आकाश, वायु, पानी, तेज र पृथ्वीलाई क्रमैले पञ्चमहाभूत भनी बताएका छन् ।

## वर्गप्रशस्ति

**इत्येष मानुषवयोत्तरवर्णगात्रधात्वङ्गलक्षणनिरूपणपूर्यमाणः ।**
**वर्गः कृतस्तु भिषजां बहुदेहदोषनामा निदानगणनिर्णयधीनिवेशः ॥१२२॥**

यसरी यस अध्यायमा मानिस, तिनको उमेर, वर्ण, शरीरका धातु, धातुका विशेषता आदि असङ्ख्य गुण र दोषका बारेमा चर्चा गरिएको छ । यसले एउटा वैद्यलाई विरामीको रोग पत्ता लगाई उपचार सम्बन्धी निर्णय गर्न अवश्य मद्दत गर्नेछ ।

**इति पशुपतिपादाम्भोजसेवासमाधि-**

**प्रांतसमयसमुत्थानन्दसौख्यैकसीम्ना ।**
**नरहरिकृतिनाऽयं निर्मिते याति नाम-**
**प्रचयमुकुटरत्ने शान्तिमष्टादशाङ्कः ॥१२३॥**

आफ्नो एक मात्र व्रत आफ्ना गुरु भगवान् शिवको सेवा गर्दै आफूलाई समर्पण गर्ने भएका नरहरी पण्डितले लेखेको समानार्थी शब्दहरुको उत्कृष्ट शब्दकोश सहितको ग्रन्थको अठारौं अध्याय समाप्त भएको छ ।

**इति श्रीनराहरिपण्डितविरचिते निघण्टुराजापरनाम्नाभिधानचूडामणौ मनुष्यवर्गोऽष्टादशः ॥१८॥**

**श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत मनुष्यादिवर्ग नामक अठारौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१८।**

# सिंहादि वर्गः

## सिंह

सिंहः पञ्चमुखो नखी मृगपतिर्मानी हरिः केसरी
क्रव्यादो नखरायुधो मृगरिपुः शूरश्च कण्ठीरवः ।
विक्रान्तो द्विरदान्तको बहुबलो दीप्तो बली विक्रमी
हर्यक्षः स च दीप्तपिङ्गल इति ख्यातो मृगेन्द्रश्च सः ॥१॥

सिंह, पञ्चमुख, नखी, मृगपति, मानी, हरि, केसरी, क्रव्याद, नखरायुध, मृगरिपु, शूर, कण्ठीरव, विक्रान्त, द्विरदान्तक, बहुबल, दीप्त, बली, विक्रमी, हर्यक्ष, दीप्तपिङ्गल र मृगेन्द्र : यी सिँहका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## शरभ

महाशृङ्गस्तु शरभो मेघस्कन्धो महामनाः ।
अष्टपादो महासिंहो मनस्वी पर्वताश्रयः ॥२॥



महाशृङ्ग, शरभ, मेघस्कन्ध, महामना, अष्टपाद, महासिंह, मनस्वी र पर्वताश्रय : यी शरभका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## बाघ

व्याघ्रः पञ्चनखो व्यालः शार्दूलोऽथ गुहाशयः ।
तीक्ष्णदंष्ट्रः पुण्डरीको द्वीपी भीरुर्नखायुधः ॥३॥

व्याघ्र, पञ्चनख, व्याल, शार्दूल, गुहाशय, तीक्ष्णदंष्ट्र, पुण्डरीक, द्वीपी, भीरु र नखायुध : यी बाघका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## चितुवा

चित्रकश्चित्रकायः स्यादुपव्याघ्रो मृगान्तकः ।
शूरश्च क्षुद्रशार्दूलश्चित्रव्याघ्रश्च स स्मृतः ॥४॥

चित्रक, चित्रकाय, उपव्याघ्र, मृगान्तक, शूर, क्षुद्रशार्दूल र चित्रव्याघ्र : यी चितुवाका संस्कृत

पर्यायवाची नामहरू हुन् ।

## भालु

**ऋक्षो भल्लूकोऽथ भल्लः सशल्यो दुर्घोषः स्यात् भल्लकः पृष्ठदृष्टिः ।**
**द्राघिष्ठः स्यात् दीर्घकेशश्चिरायुर्ज्ञेयः सोऽयं दुश्चरो दीर्घदर्शी ॥५॥**

ऋक्ष, भल्लूक, भल्ल, सशल्य, दुर्घोष, भल्लक, पृष्ठदृष्टि, द्राघिष्ठ, दीर्घकेश, चिरायु, दुश्चर र दीर्घदर्शी : यी भालुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## हुँडार

**मृगादस्तु स विज्ञेयस्तरक्षुर्घोरदर्शनः ॥६॥**

मृगाद, तरक्षु र घोरदर्शन : यी हुँडारका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## स्याल



**शिवा तु भूरिमायः स्यात् गोमायुर्मृगधूर्तकः ।**
**शृगालो वञ्चकः क्रोष्टा फेरवः फेरुजम्बुकौ ॥**
**शालावृकः शिवालुश्च फेरण्डो व्याघ्रसेवकः ॥७॥**

शिवा, भूरिमाय, गोमायु, मृगधूर्तक, शृगाल, वञ्चक, क्रोष्टा, फेरव, फेरु, जम्बुक, शालावृक, शिवालु, फेरण्ड र व्याघ्रसेवक : यी सबै स्यालका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## ब्वाँसो

**ईहामृगस्तु कोकः स्याद्वृको वत्सादनोऽविभुक् ।**
**गोवत्सारिश्छागलारिश्छागलान्तो जलाश्रयः ॥८॥**

ईहामृग, कोक, वृक, वत्सादन, अविभुक्, गोवत्सारि, छागलारि, छागलान्त र जलाश्रय : यी ब्वाँसोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## कुकुर

**कुक्कुरः सारमेयश्च भषकः श्वानकः शुनः ।**

**भूस्तरो वक्रलाङ्गूलो वृकारी रात्रिजागरः ॥९॥**
**कौलेयको ग्राममृगो मृगारिर्मृगदंशकः**
**शूरः शुनिः शयालुश्च भषः शरदि कामुकः ॥१०॥**

कुक्कुर, सारमेय, भषक, श्वानक, शुन, भूस्तर, वक्रलाङ्गूल, वृकारी, रात्रिजागर, कौलेयक, ग्राममृग, मृगारि, मृगदंशक, शूर, शुनि, शयालु, भष र शरदिकामुक : यी कुकुरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बिरालो**

**बिडालो मूषकारातिः वृषदंशो बिडालकः ।**
**शालावृकश्च मार्जारो मायावी दीप्तलोचनः ॥११॥**

बिडाल, मूषकाराति, वृषदंश, बिडालक, शालावृक, मार्जार, मायावी र दीप्तलोचन : यी बिरालोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**नेति बिरालो**



**अन्यो लोमशमार्जारः पूतिको मारजातकः ।**
**सुगन्धिमूत्रपतनो गन्धमार्जारकश्च सः ॥१२॥**

लोमशमार्जार, पूतिक, मारजातक, सुगन्धिमूत्रपतन र गन्धमार्जार : यी नेति बिरालोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**हात्ती**

**द्विरदगजमतङ्गजेभकुम्भिद्विरदनवारणहस्तिपद्मिनागाः ।**
**करिकरटिविषाणिकुञ्जरास्ते रदनिमदाबलसम्मदद्विपाश्च ॥१३॥**
**भद्रः स्तम्बेरमो दन्ती द्रुमारिः षष्टिहायनः ।**
**मातङ्गः पुष्करी दन्ता बलश्चानेकपस्त्विभः ॥१४॥**

द्विरद, गज, मतङ्ग, इभ, कुम्भि, द्विरदन, वारण, हस्ति, पद्मि, नाग, करि, करटि, विषाणि, कुञ्जर, रदनि, मदाबल, सम्मद, द्विप, भद्र, स्तम्बेरम, दन्ती, द्रुमारि, षष्टिहायन, मातङ्ग, पुष्करी, दन्ताबल, अनेकप र इभ : यी हात्तीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### हात्तीका किसिम

**भद्रो मन्दो मृगश्चेति विज्ञेयास्त्रिविधा गजाः ।**
**वनप्रचारसारूप्य सत्त्वभेदोपलक्षिताः ॥१५॥**

बस्ने वन तथा प्राकृतिक स्वभाव अनुसार भद्र, मन्त र मृग गरी तीन प्रकारका हात्ती हुन्छन् ।

### हात्तीको बच्चा र कडा खालको हात्ती

**स बालः कलभो ज्ञेयो दुर्दान्तो व्याल उच्यते ।**
**प्रभिन्नो गर्जितो भ्रान्तो मत्तो मदकलश्च सः ॥१६॥**

हात्तीको बच्चा (छावा) लाई संस्कृतमा कलभ भनिन्छ । दुर्दान्त, व्याल, प्रभिन्न, गर्जित, भ्रान्त, मत्त र मदकल : यी सजिलै वशमा पार्न नसकिने हात्तीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ढोई

**इभी तु करिणी ज्ञेया हस्तिनी धेनुका वशा ।**

**करेणुः पद्मिनी चैव मातङ्गी वासिता च सा ॥१७॥**

इभी, करिणी, हस्तिनी, धेनुका, वशा, करेणु, पद्मिनी, मातङ्गी र वासिता : यी ढोईका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### गैंडा

**खड्गः खड्गमृगः क्रोधी मुखशृङ्गो मुखेबली ।**
**गण्डको वज्रचर्मा च खड्गी वार्ध्रीणसश्च सः ॥१८॥**

खड्ग, खड्गमृग, क्रोधी, मुखशृङ्ग, मुखेबली, गण्डक, वज्रचर्मा, खड्गी र वार्ध्रीणस : यी गैंडाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### उँट

**उष्ट्रो दीर्घगतिर्बली च करभो दासेरको धूसरो**
**लम्बोष्ठो लवणः क्रमेलक महाजङ्घौ च बीजाङ्घिकः ।**

**दीर्घः शृङ्खलको महानथ महाग्रीवो महाङ्गो महा-**
**नादः सोऽपि महाध्वगः स च महापृष्ठो बलिष्ठश्च सः ॥१९॥**

उष्ट्र, दीर्घगति, बली, करभ, दासेरक, धूसर, लम्बोष्ठ, लवण, क्रमेलक, महाजङ्घा, बीजाङ्घिक, दीर्घ, शृङ्खलक, महानथ, महाग्रीव, महाङ्ग, महानाद, महाध्वग, महापृष्ठ र बलिष्ठ : यी उँटका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**राँगो**

**महिषः कासरः क्रोधी कलुषश्चापि सैरिभः ।**
**लुलापमत्तरक्ताक्षा विषाणी कवली बली ॥२०॥**

महिष, कासर, क्रोधी, कलुष, सैरिभ, लुलाप, मत्त, रक्ताक्ष, विषाणी, कवली र बली : यी राँगोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**भैंसी**

**महिषी मन्दगमना महाक्षीरा पयस्विनी ।**

**लुलापकान्ता कलुषा तुरङ्गद्वेषिणी च सा ॥२१॥**

महिषी, मन्दगमना, महाक्षीरा, पयस्विनी, लुलापकान्ता, कलुषा र तुरङ्गद्वेषिणी : यी भैंसीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**साँढे**

**गौस्तु भद्रो बलीवर्दो दम्यो दान्तः स्थिरो बली ।**
**उक्षाऽनड्वान् ककुद्मान् स्यादृषभो वृषभो वृषः ॥२२॥**
**धुर्यो धुरीणो धौरेयः शाङ्करो हरवाहनः ।**
**रोहिणीरमणो वोढा गोनाथः सौरभेयकः ॥२३॥**

गौ, भद्र, बलीवर्द, दम्य, दान्त, स्थिर, बली, उक्षा, अनड्वान्, ककुद्मान्, ऋषभ, वृषभ, वृष, धुर्य, धुरीण, धौरेय, शाङ्कर, हरवाहन, रोहिणीरमण, वोढा गोनाथ र सौरभेयक : यी साँढेका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वृषभस्तु वृषः प्रोक्तो महोक्षः पुङ्गवो बली ।**

**गोनाथ उक्षा ऋषभो गोप्रियो गोपतिश्च सः ॥२४॥**

वृषभ, वृष, महोक्ष, पुङ्गव, बली, गोनाथ, उक्षा, ऋषभ, गोप्रिय र गोपति : यी पनि साँढेका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**धवलः शबलस्ताम्रश्चित्रश्च धूसरस्तथा ।**
**इत्यादिवर्णभेदेन ज्ञेया गावोऽत्र भेदिताः ॥२५॥**
**विनीतः शिक्षितो दान्तो धूर्यो वोढा च धौरिकः ॥२६॥**

रङ अनुसार सेतो, कालो, प्वाँले, झालेमाले, कैले आदि साँढेहरू हुन्छन् । सधाइएका साँढेलाई संस्कृतमा विनीत, शिक्षित, दान्त, धूर्य, वोढा वा धौरिक भनिन्छ ।

**नजोतेको बहर**

**बालो वत्सतरः प्रोक्तो दुर्दान्तो गडिरुच्यते ॥२७॥**

बाल, वत्सतर, दुर्दान्त र गडि : यी नजोतेको बहरका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**गाई**

**गौर्मातोस्रा शृङ्गिणी सौरभेयी माहेयी स्याद्रोहिणी धेनुरघ्र्या ।**
**दोग्ध्री भद्रा भूरिमत्यानडुह्यौ कल्याणी स्यात् पावनी चार्जुनी च ॥२८॥**

गौ, माता, उस्रा, शृङ्गिणी, सौरभेयी, माहेयी, रोहिणी, धेनु, अघ्र्या, दोग्ध्री, भद्रा, भूरिमती, अनडुही, कल्याणी, पावनी र अर्जुनी : यी गाईका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**नीलगाईको साँढे**

**वनगौर्गवयः प्रोक्तो बलभद्रो महागवः ॥२९॥**

वनगौ, गवय, बलभद्र र महागव : यी नीलगाईको साँढेका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**नीलगाई**

**गवयो वनधेनुः स्यात् सैव भिल्लगवो मता ॥३०॥**

गवय, वनधेनु र भिल्लगव : यी नीलगाईका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**याक र चौंरी**

**चमरो व्यजनो वन्या धेनुगो बालधिप्रियः ।**
**तस्य स्त्री चमरी प्रोक्ता दीर्घबाला गिरिप्रिया ॥३१॥**

चमर, व्यजन, वन्या, धेनुग र बालधिप्रिय : यी याकका तथा चमरी, दीर्घबाला र गिरिप्रिया : यी चौंरी गाईका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बँदेल**

**वराहः स्तब्धरोमा च रोमशः शूकरः किरिः ।**
**वक्रदंष्ट्रः किटिर्दंष्ट्री क्रोडो दन्तायुधो बली ॥३२॥**
**पृथुस्कन्धश्च भूदारः पोत्री घोणान्तभेदनः ।**
**कोलः पोत्रायुधः शूरो बह्वपत्यो रदायुधः ॥३३॥**



वराह, स्तब्धरोमा, रोमश, शूकर, किरि, वक्रदंष्ट्र, किटि, दंष्ट्री, क्रोड, दन्तायुध, बली, पृथुस्कन्ध, भूदार, पोत्री, घोणान्तभेदन, कोल, पोत्रायुध, शूर, बह्वपत्य र रदायुध : यी बँदेलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सुँगुर**

**अन्यस्तु विड्वराहः स्याद्ग्रामीणो ग्रामशूकरः ।**
**ग्राम्यक्रोडो ग्राम्यकोलो विष्ठाशी दारकश्च सः ॥३४॥**

विड्वराह, ग्रामीणशूकर, ग्रामशूकर, ग्राम्यक्रोड, ग्राम्यकोल, विष्ठाशी र दारक : यी सुँगुरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**घोडा**

**घोडाका संस्कृत पर्यायवाची नामहरू**

**अश्वो घोटस्तुरङ्गोऽर्वा तुरगश्च तुरङ्गमः ।**

**वाहो वाजी मुद्गभोजी वीतिः सप्तिश्च सैन्धवः ॥३५॥**
**हरिर्हयश्च धाराटो जवनो जीवनो जवी ।**
**गन्धर्वो वाहनश्रेष्ठः श्रीभ्राताऽमृतसोदरः ॥३६॥**

अश्व, घोट, तुरङ्ग, अर्वा, तुरग, तुरङ्गम, वाह, वाजी, मुद्गभोजी, वीति, सप्ति, सैन्धव, हरि, हय, धाराट, जवन, जीवन, जवी, गन्धर्व, वाहनश्रेष्ठ, श्रीभ्राता र अमृतसोदर : यी घोडाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**घोडाका जात**

**आरट्टसिन्धुजवनायुजपारसीककाम्बोजबाह्लिकमुखा विविधास्तुरङ्गाः ।**
**साम्राणशेफकमुखा अपि देशतः स्युर्वर्णेन तेऽपि च पुनर्बहुधा भवन्ति ॥३७॥**

आरट्ट, सिन्धुज, वनायुज, पारसीक, काम्बोज, बाह्लिकमुख, साम्राण, शेफकमुखा आदि जस्तो घोडाका अनेक जात हुन्छन् । यी पनि देश र रङ अनुसार अनेक थरी हुन्छन् ।

**रङ अनुसारका घोडाका नाम**



**श्वेतः कर्कः सोऽथ रक्तस्तु शोणो हैमः कृष्णो नीलवर्णस्तु नीलः ।**
**शुभ्रैर्नेत्रैर्मल्लिकाक्षो निदिष्टः कृष्णैरुक्तः सोऽयमिन्द्रायुधाख्यः ॥३८॥**
**इत्थं नानावर्णभेदेन वाजी ज्ञातव्योऽयं लोकरूढैः सुधीभिः ।**
**अत्रास्माभिर्न प्रपञ्चः कृतोऽस्मादाजानेयोऽप्यत्र वाजी कुलीनः ॥३९॥**

सेतो घोडालाई कर्क, रातो घोडालाई शोण, कालो घोडालाई हैम, नीलो घोडालाई नील, सेतो आँखा हुने घोडालाई मल्लिकाक्ष र गाढा कालो रङको घोडालाई इन्द्रायुध भनिन्छ । यसरी रङ र चलन अनुसार घोडाको वर्गिकरण गरिएको हुन्छ । यस सम्बन्धमा यस क्षेत्रका विज्ञहरूलाई बढी ज्ञान हुन्छ, त्यसैले हामीले राम्रा जातका घोडाहरूमा (मात्र) ध्यान दिएका छौं ।

**बछडा**

**सुकुलः सुविनीताश्वः किशोरस्तुरगार्भकः ॥४०॥**

सुकुल, सुविनीताश्व, किशोर र तुरगार्भक : यी नाम घोडाको बछडाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### घोडी

**वाजिनी वडवा चापि प्रसूरश्वाऽश्विनी च सा ॥४१॥**

वाजिनी, वडवा, प्रसू, अश्वा र अश्विनी : यी घोडीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### गधा

**गर्दभः शङ्कुकर्णश्च बालेयो रासभः खरः ।**
**भारवाहो भूरिगमश्चक्रीवान्धूसराह्वयः ॥४२॥**

गर्दभ, शङ्कुकर्ण, बालेय, रासभ, खर, भारवाह, भूरिगम, चक्रीवान् र धूसर : यी गधाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### खच्चड

**वेसरस्त्वश्वखरजः सकृद्गर्भोऽध्वगः क्षमी ।**
**सन्तुष्टो मिश्रजः प्रोक्तो मिश्रशब्दोऽतिभारगः ॥४३॥**



वेसर, अश्वखरज, सकृद्गर्भ, अध्वग, क्षमी, सन्तुष्ट, मिश्रज, मिश्र र अतिभारग : यी खच्चडका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### खसी-बोका

**अजो बुक्कश्च मेध्यः स्याल्लम्बकर्णः पशुश्च सः ।**
**छागलो बर्करश्छागस्तुभो बस्तः पयस्वलः ॥४४॥**

अज, बुक्क, मेध्य, लम्बकर्ण, पशु, छागल, बर्कर, छाग, तुभ, बस्त र पयस्वल : यी बोकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### बाख्री

**अजा पयस्विनी भीरुश्छागी मेध्या गलस्तनी ॥४५॥**

अजा, पयस्विनी, भीरु, छागी, मेध्या र गलस्तनी : यी नाम बाख्रीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## भेडो

**मेषो भेडो हुडो मेण्ढ्रः ऊर्णायुरुरणस्तथा ।**
**एडकः शृङ्गिणोऽविः स्यादुरभ्रो रोमशो बली ॥४६॥**
**नानादेशविशेषेण मेषा नानाविधा अमी ॥४७॥**

मेष, भेड, हुड, मेण्ढ्र, ऊर्णायु, रुरण, एडक, शृङ्गिण, अवि, उरभ्र, रोमश र बली : यी भेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । देश (वासस्थान, प्रान्त, जात आदि) अनुसार भेडाहरू अनेक जातका हुन्छन् ।

## मृग

**मृगः कुरङ्गो वातायुः कृष्णसारः सुलोचनः ।**
**हरिणोऽजिनयोनिः स्यादेणः पृषत इत्यपि ॥४८॥**
**ककुवागथ सारङ्गः शाखिशृङ्गश्च चित्तलः ।**
**अन्यश्च भारशृङ्गः स्यात् महाशृङ्गो वनप्रियः ॥४९॥**
**रुरुस्तु रौहिषो रोहो स्यान्न्यङ्कुश्चैव शम्बरः ।**
**नीलकः पृषतश्चैव रङ्कुः शबलपृष्ठकः ॥५०॥**
**शिखर्युपकुरङ्गः स्यात् श्रीकारी च महाजवः ।**
**जवनो वेगिहरिणौ जङ्घालो जाङ्घिकाह्वयः ॥५१॥**

मृग, कुरङ्ग, वातायु, कृष्णसार, सुलोचन, हरिण, अजिनयोनि, एण, पृषत, ककुवाक्, सारङ्ग, शाखिशृङ्ग, चित्तल, भारशृङ्ग, महाशृङ्ग, वनप्रिय, रुरु, रौहिष, रोह, न्यङ्कु, शम्बर, नीलक, पृषत ( दोहोरिएको), रङ्कु, शबलपृष्ठक, शिखरी, उपकुरङ्ग, श्रीकारी, महाजव, जवन, वेगि, हरिण ( दोहोरिएको) , जङ्घाल र जाङ्घिक : यी मृगका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## वानरका संस्कृत पर्यायवाची नामहरू

**वानरो मर्कटः कीशः कपिः शाखामृगो हरिः ।**
**प्लवङ्गमो वनौकाश्च प्लवङ्गः प्लवगः प्लवः ॥५२॥**

वानर, मर्कट, कीश, कपि, शाखामृग, हरि, प्लवङ्गम, वनौका, प्लवङ्ग, प्लवग र प्लव : यी वानरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वानरका जातहरू**

**गोलाङ्गूलस्तु गौरास्यः कपिः कृष्णमुखो हि सः ।**
**मन्दुराभूषणाख्योऽयं विज्ञेयः कृष्णवानरः ॥५३॥**

गोलाङ्गूल, गौरास्यः कपिः, कृष्णमुख, मन्दुराभूषण र कृष्णवानर : यी वानरका जातहरू हुन् ।

**शालक**

**शल्यकः स्यात् शल्यमृगो वज्रशुक्तिर्बिलेशयः ॥५४॥**

शल्यक, शल्यमृग, वज्रशुक्ति र बिलेशय : यी शालकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**शल्योऽन्यः श्वाविदित्युक्तः शली च शलली च सः ॥५५॥**
**शल्यलोम्नि तु विज्ञेया शलली शललं शलम् ॥५६॥**

श्वाविद्, शली र शलली तथा शल्यलोम्नी, शलली, शलल र शल दुई फरक जातका शालकका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**मलसाँप्रो**

**कोकडो जवनः प्रोक्तः कोकोवाचो बिलेशयः ।**
**ज्ञेयश्चमरपुच्छश्च लोमशो धूम्रवर्णकः ॥५७॥**

कोकड, जवन, कोकोवाच, बिलेशय, चमरपुच्छ, लोमश र धूम्रवर्णक : यी मलसाँप्रोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**न्याउरीमुसो**

**नकुलः सूचिरदनः सर्पारिर्लोहिताननः ॥५८॥**

नकुल, सूचिरदन, सर्पारि र लोहितानन : यी न्याउरीमुसोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सर्प**

**दर्वीकरो द्विरसनः पातालनिलयो बली ।**

**नागश्च काद्रवेयश्च वक्रगो दन्दशूककः ॥५९॥**
**चक्षुःश्रवा विषधरो गूढाङ्घ्रिः कुण्डलो फणी ।**
**पन्नगो वायुभक्षश्च भोगी स्याज्जिह्मगश्च सः ॥६०॥**
**सर्पो दंष्ट्री भुजङ्गोऽहिर्भुजगश्च सरीसृपः ।**
**कञ्चुकी दीर्घपुच्छश्च द्विजिह्व उरगश्च सः ॥६१॥**

दर्वीकर, द्विरसन, पातालनिलयी, बली, नाग, काद्रवेय, वक्रग, दन्दशूकक, चक्षुश्रवा, विषधर, गूढाङ्घ्रि, कुण्डली, फणी, पन्नग, वायुभक्ष, भोगी, जिह्मग, सर्प, दंष्ट्री, भुजङ्ग, अहि, भुजग, सरीसृप, कञ्चुकी, दीर्घपुच्छ, द्विजिह्व र उरग : यी सर्पका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**फणिनो धवलाङ्गा ये तेनागा इति कीर्तिताः ।**
**अन्ये रक्तादिवर्णाढ्या बोध्याः सर्पादिनामभिः ॥६२॥**
**गोनसो मण्डलीत्युक्तश्चित्राङ्गो व्यन्तरो भवेत् ॥६३॥**
**कुलिको हरितो ज्ञेयो राजिलं डुण्डुभं विदुः ॥६४॥**

फणा भएको सेतो सर्पलाई नाग भनिन्छ । अन्य रातो आदि रङ्कालाई सामान्यतः सर्प नै भनिन्छ । यस्तै गोनस वा मण्डली, चित्राङ्ग वा व्यन्तर, हरियो रङ्को कुलिक तथा राजिल वा डूण्डुभ जातका सर्पहरू पनि हुन्छन् ।



**अनन्तो वासुकिः पद्मो महापद्मोऽपि तक्षकः ।**
**कर्कोटः कुलिकः शङ्ख इत्यमी नागनायकाः ॥६५॥**
**तद्बान्धवास्तु कुमुद कम्बलाश्वतरादयः ॥६६॥**

अनन्त, वासुकि, पद्म, महापद्म, तक्षक, कर्कोट, कुलिक र शङ्ख : यी प्रमुख नागहरू हुन् । यिनका कुमुद, कम्बल, अश्वतर आदि वंशज हुन्छन् ।

**आपहृत् द्विमुखी चैव धामिणीत्यादयः परे ॥६७॥**

दुईमुखे सर्पलाई आपहृत, द्विमुखी, धामिणी आदि भनिन्छ ।

**मुसा**

**मूषिको मूषकः पिङ्गोऽप्याखुरुन्दुरुको नखी ।**
**खनको बिलकारी च धान्यारिश्च बहुप्रजः ॥६८॥**

मूषिक, मूषक, पिङ्ग, आखु, उन्दुरुक, नखी, खनक, बिलकारी, धान्यारि र बहुप्रज : यी मुसाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ठूलो मुसा

**अन्यो महामूषकः स्यान्मूषी विघ्नेशवाहनः ।**
**महाङ्गः शस्यमारी च भूफलो भित्तिपातनः ॥६९॥**

महामूषक, मूषी, विघ्नेशवाहन, महाङ्ग, शस्यमारी, भूफल र भित्तिपातन : यी ठूलो मुसाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### छुचुन्द्रो

**छुछुन्दरी राजपुत्री प्रोक्तान्या प्रतिमूषिका ।**
**सुगन्धिमूषिका गन्धा शुण्डिनी शुण्डमूषिका ॥७०॥**

छुछुन्दरी, राजपुत्री, प्रतिमूषिका, सुगन्धिमूषिका, गन्धा, शुण्डिनी र शुण्डमूषिका : यी छुचुन्द्रोका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### गोहोरो

**गोधा तु गोधिका ज्ञेया दारुमत्स्याह्वया च सा ।**
**खरचर्मा पञ्चनखी पुलका दीर्घपुच्छिका ॥७१॥**

गोधा, गोधिका, दारुमत्स्या, खरचर्मा, पञ्चनखी, पुलका र दीर्घपुच्छिका : यी गोहोरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### गौधेरक

**गोधाजः स्यात्तु गौधेयो गौधारो गोधिकासुतः ॥७२॥**

गोधाज, गौधेय, गौधार र गोधिकासुत : यी गौधेरकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### बर्बरी (पहिचान हुन बाँकी जीव)

**बर्बरी घोरिका घोरा दीर्घरूपा भयावहा ।**

**स्थूलचञ्चुर्दीर्घपादा सर्पभक्षी गुणारिका ॥७३॥**

बर्बरी, घोरिका, घोरा, दीर्घरूपा, भयावहा, स्थूलचञ्चु, दीर्घपादा, सर्पभक्षी र गुणारिका : यी बर्बरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### माउसुलीविशेष

**ब्राह्मणी गृहगोधा च सुपदी रक्तपुच्छिका ॥७४॥**

ब्राह्मणी, गृहगोधा, सुपदी र रक्तपुच्छिका : यी नाम माउसुली विशेषका संस्कृत पर्यावाची नामहरू हुन् ।

### छेपारो

**सरटः कृकलासः स्यात् प्रतिसूर्यः शयानकः ।**
**वृत्तिस्थः कण्टकागारो दुरारोहद्रुमाश्रयः ॥७५॥**

सरट, कृकलास, प्रतिसूर्य, शयानक, वृत्तिस्थ, कण्टकागार, दुरारोह र द्रुमाश्रय : यी छेपारोका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### छेपारो विशेष

**जाहको गात्रसङ्कोची मण्डली बहुरूपकः ।**
**कामरूपी विरूपी च बिलवासः प्रकीर्तितः ॥७६॥**

जाहक, गात्रसङ्कोची, मण्डली, बहुरूपक, कामरूपी, विरूपी र बिलवास : यी छेपारो विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### माउसुली

**पल्ली नु मुसली प्रोक्ता गृहगोधा गृहालिका ।**
**ज्येष्ठा च कुड्यमत्स्या च पल्लिका गृहगोधिका ॥७७॥**

पल्ली, मुसली, गृहगोधा, गृहालिका, ज्येष्ठा, कुड्यमत्स्या, पल्लिका र गृहगोधिका : यी माउसुलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### माकुरो

**तन्तुवायस्तूर्णनाभो लूता मर्कटकः कृमिः ॥७८॥**

तन्तुवाय, तूर्णनाभ, लूता, मर्कटक र कृमि : यी माकुराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### सानो मुसा

**हालाहला त्वञ्जलिका गिरिका बालमूषिका ॥७९॥**

हालाहला, अञ्जलिका, गिरिका र बालमूषिका : यी नाम सानो मुसाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### बिच्छी

**वृश्चिकः शूककीटः स्यादलिद्रोणश्च वृश्चिके ॥८०॥**



वृश्चिक, शूककीट र अलिद्रोण : यी बिच्छीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कनसुत्लो

**अथ कर्णजलूका स्याच्चित्राङ्गी शतपद्यपि ॥८१॥**

कर्णजलूका, चित्राङ्गी र शतपदी : यी कनसुत्लोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कमिला

**पिपीलकः पिपीलश्च स्त्रीसञ्ज्ञा च पिपीलिका ॥८२॥**

पिपीलक र पिपील : यी कमिलाका संस्कृत पर्यायवाची नामहरू हुन् । पोथी कमिलालाई संस्कृतमा पिपीलिका भनिन्छ ।

रातो सानो कमिला

**उदङ्गा कपिजङ्गिका ज्ञेया तैलपिपीलिका ॥८३॥**

उदङ्गा, कपिजङ्गिका र तैलपिपीलिका : यी घिउकमिलोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

कालो कमिला

**कृष्णाऽन्या च पिपीली तु स्थूला वृक्षरुहा च सा ॥८४॥**

पिपीली, स्थूला र वृक्षरुहा : यी अर्को थरी कालो कमिलोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

उडुस

**मत्कुणो रक्तपायी स्याद्रक्ताङ्गो मञ्चकाश्रयी ॥८५॥**

मत्कुण, रक्तपायी, रक्ताङ्ग र मञ्चकाश्रयी : यी उडुसका संस्कृत पर्यायवाची नामहरू हुन् ।



जलजन्तु

**यादस्तु जलजन्तुः स्याज्जलप्राणी जलेशयः ।**
**तत्रातिक्रूरकर्मा यः स जलव्याल उच्यते ॥८६॥**

जलजन्तु, जलप्राणी र जलेशय : यी जलमा हुने प्राणीका संस्कृत पर्यायवाची नामहरू हुन् । पानीसर्पलाई अतिक्रूरकर्मा वा जलव्याल भनिन्छ ।

माछाका संस्कृत पर्यायवाची शब्दहरू

**मत्स्यो वैसारिणो मीनः पृथुरोमा झषोऽण्डजः ।**
**विसारः शकुली शल्की पाठीनोऽनिमिषस्तिमिः ॥८७॥**

मत्स्य, वैसारिण, मीन, पृथुरोमा, झष, अण्डज, विसार, शकुली, शल्की, पाठीन, अनिमिष र तिमि : यी माछाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

माछाका जात

**राजीवः शकुलः शृङ्गी वागुसः शल्यपल्लवौ ।**

**पाठीनः शकुलश्चैव नद्यावर्तश्च रोहितः ॥८८॥**
**मद्गुरस्तिमिरित्याद्या ज्ञेयास्तद्भेदजातयः ।**
**तद्भेदो मकराख्योऽन्यो मातङ्गमकरोऽपरः ॥८९॥**
**चिलिचिमस्तिमिश्चैव तथाऽन्यश्च तिमिङ्गिलः ।**
**तिमिङ्गिलगिलश्चेति महामत्स्या अमी मताः ॥९०॥**

राजीव, शकुल, शृङ्गी, वागुस, शल्य, पल्लव, पाठीन, शकुल, नद्यावर्त, रोहित, मद्गुर, तिमिर आदि माछाका जात हुन्छन् । यस्तै अर्को मकर र मातङ्गमकर भन्ने पनि जात हुन्छ । चिलिचिम, तिमि, तिमिङ्गिल, तिमिङ्गिलगिल र महामत्स्य : यी ठूलो जातका माछा हुन् ।

**सोंस**

**शिशुकः शिशुमारः स्यात् स च ग्राहो वराहकः ॥९१॥**

शिशुक, शिशुमार, ग्राह र वराहक : यी सोंसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**घडियाल गोही**



**भवेन्नक्रस्तु कुम्भीरो गलग्राहो महाबलः ॥९२॥**

नक्र, कुम्भीर, गलग्राह र महाबल : यी घरियाल गोहीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कछुवा**

**कच्छपः कमठः कूर्मो गूढाङ्गो धरणीधरः ।**
**कच्छेष्टः पल्वलावासो वृत्तः कठिनपृष्ठकः ॥९३॥**

कच्छप, कमठ, कूर्म, गूढाङ्ग, धरणीधर, कच्छेष्ट, पल्वलावास, वृत्त र कठिनपृष्ठक : यी कछुवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**गँगटो**

**कर्कटः स्यात् कर्कटकः कुलीरश्च कुलीरकः ।**
**सन्दंशकः पङ्कवासस्तिर्यग्गामी स चोर्ध्वदृक् ॥९४॥**

कर्कट, कर्कटक, कुलीर, कुलीरक, सन्दंशक, पङ्कवास, तिर्यग्गामी र चोर्ध्वदृक् : यी गँगटोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

भ्यागुतो

**मण्डूको दर्दुरो मण्डो हरिर्भेकश्च लूलकः ।**
**शालूरः स च वर्षाभूः प्लवः कटुरवस्तथा ॥**
**समीडन्यश्च मुण्डी च प्लवङ्गश्च प्लवङ्गमः ॥९५॥**

मण्डूक, दर्दुर, मण्ड, हरि, भेक, लूलक, शालूर, वर्षाभू, प्लव, कटुरव, समीडन्य, मुण्डी, प्लवङ्ग र प्लवङ्गम : यी भ्यागुतोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पीतोऽन्यो राजमण्डूको महामण्डूक इत्यपि ।**
**पीताङ्गः पीतमण्डूको वर्षाघोषो महारवः ॥९६॥**

राजमण्डूक, महामण्डूक, पीताङ्ग, पीतमण्डूक, वर्षाघोष र महारव : यी पहेँलो रङको ठूलो भ्यागुताका संस्कृत पर्यायवाची नामहरू हुन् ।



जलौका

**जलूका तु जलौका स्याद्रक्तपा रक्तपायिनी ।**
**रक्तसन्दोहिका तीक्ष्णा चर्मटी जलजीविनी ॥९७॥**

जलूका, जलौका, रक्तपा, रक्तपायिनी, रक्तसन्दोहिका, तीक्ष्णा, चर्मटी र जलजीविनी : यी जूकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

दात्यूह

**जलकाकस्तु दात्यूहः स च स्यात् कालकण्टकः ॥९८॥**

जलकाक, दात्यूह र कालकण्टक : यी चराविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

जलकपोत

**जलपारावतः कोपी प्रोक्तो जलकपोतकः ॥९९॥**

जलपारावत, कोपी र जलकपोतक : यी परेवाविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**जलजीवको सङ्ख्या**

**स्थले करितुरङ्गाद्या यावन्तः सन्ति जन्तवः ।**
**जलेऽपि ते च तावन्तो ज्ञातव्या जलपूर्वकाः ॥१००॥**

स्थलमा बस्ने हात्ती, घोडा आदि जस्ता जेजति जीव हुन्छन् जलमा बस्ने पनि त्यति नै जीव हुन्छन् भनी जान्नू ।

**चराका पर्यायवाची नामहरू**

**खगविहगविहङ्गमा विहङ्गः पिपतिषुपत्रिपतत्रिपत्रवाहाः ।**
**शकुनिशकुनविष्किराण्डजा विः पतगपतन्नभसङ्गमा नगौकाः ॥१०१॥**
**वाजी पत्ररथः पक्षी द्विजो नीडोद्भवोऽनुगः ।**
**शकुन्तः पतगः पिच्छन् पतङ्गो विकिरश्च सः ॥१०२॥**

खग, विहग, विहङ्गम, विहङ्ग, पिपतिषु, पत्रि, पतत्रि, पत्रवाह, शकुनि, शकुन, विष्किर, अण्डज, वि, पतग, पतन, नभसङ्गम, नगौका, वाजी, पत्ररथ, पक्षी, द्विज, नीडोद्भव, अनुग, शकुन्त, पतग, पिच्छन्, पतङ्ग र विकिर : यी चराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**गिद्ध**

**गृध्रस्ताक्ष्र्यो वैनतेयः खगेन्द्रो भुजगान्तकः ।**
**वक्रतुण्डश्च दाक्षाय्यो गरुत्मान् दूरदर्शनः ॥१०३॥**

गृध्र, ताक्ष्र्य, वैनतेय, खगेन्द्र, भुजगान्तक, वक्रतुण्ड, दाक्षाय्य, गरुत्मान् र दूरदर्शन : यी गिद्धका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बाज**

**श्येनः शशादः क्रव्यादः क्रूरो वेगी खगान्तकः ।**
**कामान्धस्तीव्रसम्पातस्तरस्वी ताक्ष्र्यनायकः ॥१०४॥**

श्येन, शशाद, क्रव्याद, क्रूर, वेगी, खगान्तक, कामान्ध, तीव्रसम्पात, तरस्वी र ताक्ष्र्यनायक : यी

बाजका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### लाहाँचे

**काष्ठकुट्टः काष्ठभञ्जी काष्ठकूटश्च शब्दितः ॥१०५॥**

काष्ठकुट्ट, काष्ठभञ्जी र काष्ठकूट : यी काठफोरुवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### बाजविशेष

**करको नीलपिच्छः स्यात् लम्बकर्णो रणप्रियः ।**
**रणपक्षी पिच्छबाणः स्थूलनीलो भयङ्करः ॥१०६॥**

करक, नीलपिच्छ, लम्बकर्ण, रणप्रिय, रणपक्षी, पिच्छबाण, स्थूलनील र भयङ्कर : यी बाजविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### खैरो बकुल्ला



**कङ्कस्तु लोहपृष्ठः स्यात् सन्दंशवदनः खरः ।**
**रणालङ्करणः क्रूरः स च स्यादामिषप्रियः ॥१०७॥**

कङ्क, लोहपृष्ठ, सन्दंशवदन, खर, रणालङ्करण, क्रूर र आमिषप्रिय : यी खैरो बकुल्लाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### काग

**काकस्तु वायसो ध्वाङ्क्षः काणोऽरिष्टः सकृत्प्रजः ।**
**बलिभुक् बलिपुष्टश्च धूलिजङ्घो निमित्तकृत् ॥१०८॥**
**कौशिकारिश्चिरायुश्च करटो मुखरः खरः ।**
**आत्मघोषो महालोलश्चिरजीवी चलाचलः ॥१०९॥**

काक, वायस, ध्वाङ्क्ष, काण, अरिष्ट, सकृत्प्रज, बलिभुक्, बलिपुष्ट, धूलिजङ्घ, निमित्तकृत्, कौशिकारि, चिरायु, करट, मुखर, खर, आत्मघोष, महालोल, चिरजीवी र चलाचल : यी कागका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**लाटोकोसेरो**

**उलूकस्तामसो धूको दिवान्धः कौशिकः कुविः ।**
**नक्तञ्चरो निशाटश्च काकारिः क्रूरघोषकः ॥१११॥**

उलूक, तामस, धूक, दिवान्ध, कौशिक, कुवि, नक्तञ्चर, निशाट, काकारि र क्रूरघोषक : यी लाटोकोसेरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वल्गुली (चराविशेष)**

**वल्गुली वक्त्रविष्ठा सा दिवान्धा च निशाचरी ।**
**स्वैरिणी च दिवास्वापा मांसेष्टा मातृवाहिनी ॥११२॥**

वल्गुली, वक्त्रविष्ठा, दिवान्धा, निशाचरी, स्वैरिणी, दिवास्वापा, मांसेष्टा र मातृवाहिनी : यी वल्गुली चराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**चमेरो**



**चर्मकी चर्मपक्षी च चर्माङ्गी चर्मगन्धिका ।**
**कृत्याशूकारिणी चर्मी चर्मपत्री च मेलिका ॥**
**दिनान्धा नक्तभोजी च भ्रामणी कर्णिकाह्वया ॥११३॥**

चर्मकी, चर्मपक्षी, चर्माङ्गी, चर्मगन्धिका, कृत्याशूकारिणी, चर्मी, चर्मपत्री, मेलिका, दिनान्धा, नक्तभोजी, भ्रामणी र कर्णिका : यी सबै नाम चमेरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मयूर**

**मयूरश्चन्द्रकी बर्ही नीलकण्ठः शिखी ध्वजी ।**
**मेघानन्दी कलापी च शिखण्डी चित्रपिच्छकः ॥११४॥**
**बर्हिणः प्रचलाकी च शुक्लापाङ्गः शिखावलः ।**
**केकी भुजङ्गभोजी च मेघनादानुलासकः ॥११५॥**

मयूर, चन्द्रकी, बर्ही, नीलकण्ठ, शिखी, ध्वजी, मेघानन्दी, कलापी, शिखण्डी, चित्रपिच्छक, बर्हिण, प्रचलाकी, शुक्लापाङ्ग, शिखावल, केकी, भुजङ्गभोजी, मेघनाद र अनुलासक : यी मुजुरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बर्हभारः कलापः स्याद्बर्हनेत्राणि चन्द्रकाः ।**
**प्रचलाकः शिखा ज्ञेया ध्वनिः केकेति कथ्यते ॥११६॥**

बर्हभार, कलाप, बर्हनेत्र र चन्द्रका : यी मयुरका प्वाँखका संस्कृत पर्यायवाची नामहरू हुन् । मुजुरको सिउरलाई प्रचालक वा शिखा भनिन्छ । मयुरको आवाजलाई केका भनिन्छ ।

**कन्याङकुरुङ**

**कुररः खरशब्दः क्रुङ् क्रौञ्चः पङ्क्तिचरः खरः ॥११७॥**
**नीलक्रौञ्चस्तु नीलाङ्गो दीर्घग्रीवोऽतिजागरः ॥११८॥**

कुरर, खरशब्द, क्रुङ्, क्रौञ्च, पङ्क्तिचर र खर : यी सबै नाम कन्याङकुरुङका संस्कृत पर्यायवाची नामहरू हुन् । नीलो कन्याङकुरुङलाई नीलक्रौञ्च, नीलाङ्ग, दीर्घग्रीव र अतिजागर भनिन्छ ।

**बकुल्लो**

**बकः कङ्को बकोटश्च तीर्थसेवी च तापसः ।**

**मीनघाती मृषाध्यानी निश्चलाङ्घ्रिश्च दाम्भिकः ॥११९॥**

बक, कङ्क, बकोट, तीर्थसेवी, तापस, मीनघाती, मृषाध्यानी, निश्चलाङ्घ्रि र दाम्भिक : यी बकुल्लाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**भँगेरो**

**शकुनी पोतकी श्यामा पाण्डवी श्वेतपक्षिणी ॥१२०॥**

शकुनी, पोतकी, श्यामा, पाण्डवी र श्वेतपक्षिणी : यी भँगेराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पोथी कोइली**

**दुर्गा भगवती चैव सैवोक्ता सत्यपाण्डवी ॥१२१॥**

दुर्गा, भगवती र सत्यपाण्डवी : यी पोथी कोइलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बकुल्लो**

**बलाका विषकण्ठी स्यात् शुष्काङ्गी दीर्घकन्धरा ॥१२२॥**

बलाका, विषकण्ठी, शुष्काङ्गी र दीर्घकन्धरा : यी बकुल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पोथी बकुल्लो**

**घर्मान्तकामुकी श्वेता मेघनादा जलाश्रया ॥१२३॥**

घर्मान्तकामुकी, श्वेता, मेघनादा (मेघानन्दी) र जलाश्रया : यी पोथी बकुल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**चखेवा**

**चक्रः कोकश्चक्रवाको रथाङ्गो भूरिप्रेमा द्वन्द्वचारी सहायः ।**
**कान्तः कामी रात्रिविश्लेषगामी रामावक्षोजोपमः कामुकश्च ॥१२४॥**



चक्र, कोक, चक्रवाक, रथाङ्ग, भूरिप्रेमा, द्वन्द्वचारी, सहाय, कान्त, कामी, रात्रिविश्लेषगामी, रामावक्षोजोपम र कामुक : यी चखेवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सारस**

**सारसो रसिकः कामी नीलाङ्गो भणितारवः ।**
**नीलकण्ठो रक्तनेत्रः काकवाक् कामिवल्लभः ॥१२५॥**

सारस, रसिक, कामी, नीलाङ्ग, भणितारव, नीलकण्ठ, रक्तनेत्र, काकवाक् र कामिवल्लभ : यी सारस (?) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पोथी हुटिटचाउँ (टिट्टिभी)**

**टिट्टिभी पीतपादश्च सदालूता नृजागरः ।**
**निशाचरी चित्रपक्षी जलशायी सुचेतना ॥१२६॥**

टिट्टिभी, पीतपाद, सदालूता, नृजागर, निशाचरी, चित्रपक्षी, जलशायी र सुचेतना : यी पोथी

हुँटट्याउँका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सिमकुखुरो**

**जलकुक्कुटकश्चान्यो जलशायी जलस्थितः ॥१२७॥**

जलकुक्कुटक, जलशायी र जलस्थित : यी सिमकुखुरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**चराविशेष (ठिक)**

**ठिकः पाशगडो ठिक्को जलसार्यतिलाशयः ॥१२८॥**

ठिक, पाशगड, ठिक्क, जलसार्य र तिलाशय : यी चराविशेष (ठिक) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

**चराविशेष (महापक्षी)**

**जलपक्षी महापक्षी जलसाघतिवासकः ॥१२९॥**



जलपक्षी, महापक्षी र जलसाघतिवासक : यी चराविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**जलशायी (?)**

**जलशायी मण्डलीनो मन्दगः श्लेष्मलोऽविषी ।
सराजी राजिमन्तश्च जलसर्पः स दुन्दुभिः ॥१३०॥**

जलशायी, मण्डलीन, मन्दग, श्लेष्मल, अविषी, सराजी, राजिमन्त, जलसर्प र दुन्दुभि : यी जलसर्पका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**जलसर्प**

**द्विविगोडो निसश्चैव चित्री शल्पी च गोमुखः ॥१३१॥**

द्विविगोड, निस, चित्री, शल्पी र गोमुख : यी जलसर्प विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### क्षुद्रसारस

**अन्ये च प्लवगा ये ये ते सर्वे क्षुद्रसारसाः ।**
**श्वेताश्चित्राश्च धूम्राद्या नानावर्णानुगाह्वयाः ॥१३२॥**

अन्य जतिपनि पानीमा पौडने चराहरू छन् तिनलाई क्षुद्रसारस भनिन्छ । यी सेता, चित्रविचित्रका, ध्वाँसे आदि अनेक रङका हुन्छन् ।

### हाँस

**हंसो धवलपक्षो स्यात् चक्राङ्गो मानसालयः ॥१३३॥**

हंस, धवलपक्ष, चक्राङ्ग र मानसालय : यी सामान्य हाँसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कलहंसस्तु कादम्बः कलनादो मरालकः ॥१३४॥**

कलहंस, कादम्ब, कलनाद र मरालक : यी हाँसविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**एतेषु चञ्चुचरणेष्वरुणेषु राजहंसोऽपि धूसरतरेषु च मल्लिकाक्षः ।**
**कालेषु तेषु धवलो किल धार्तराष्ट्रः सोऽप्येष धूसरतनुस्तु भवेदभव्यः ॥१३५॥**

हाँसहरुमध्येमा पनि रातो चुचो र रातो खुट्टा हुने हाँसलाई राजहाँस, अर्को खरानी रङकोलाई मल्लिकाक्ष, समय समयमा रङ फेरिएर सेतो हुनेलाई धार्तराष्ट्र र रङ बदलिएर ध्वाँसे हुनेलाई अभव्य भनिन्छ ।

### पोथी हाँस

**हंसी तु वरटा ज्ञेया वरला वारला च सा ।**
**मराली मञ्जुगमना चक्राङ्गी मृदुगामिनी ॥१३६॥**

हंसी, वरटा, वरला, वारला, मराली, मञ्जुगमना, चक्राङ्गी र मृदुगामिनी : यी पोथी हाँसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कुखुरो

**कुक्कुटस्ताम्रचूडः स्यात् कालज्ञश्चरणायुधः ।**

**नियोद्धा कृकवाकुश्च विष्किरो नखरायुधः ॥१३७॥**

कुक्कुट, ताम्रचूड, कालज्ञ, चरणायुध, नियोद्धा, कृकवाकु, विष्किर र नखरायुध : यी कुखुरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### वनपरेवा

**स्यात् कपोतः कोकदेवो धूसरो धूम्रलोचनः ।**
**दहनोऽग्निसहायश्च भीषणो गृहनाशनः ॥१३८॥**

कपोत, कोकदेव, धूसर, धूम्रलोचन, दहन, अग्निसहाय, भीषण र गृहनाशन : यी वनपरेबाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### परेवा

**पारावतः कलरवोऽरुणलोचनश्च पारापतो मदनकाकुरवश्च कामी ।**
**रक्तेक्षणो मदनमोहनवाग्विलासी कण्ठीरवो गृहकपोतक एष उक्तः ॥१३९॥**



पारावत, कलरव, अरुणलोचन, पारापत, मदनकाकुरव, कामी, रक्तेक्षण, मदनमोहन, वाग्विलासी, कण्ठीरव र गृहकपोतक : यी परेवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### अन्य परेवा

**पारावतोऽन्यदेशीयः कामुको घुल्लुसारवः ॥१४०॥**

अन्यत्र देशमा हुने पारावतलाई कामुक र घुल्लुसारव भनिन्छ ।

### जलपरेवा

**जलपारावतः कामी ज्ञेयो गलरवश्च सः ॥१४१॥**

जलपारावत, कामी र गलरव : यी जलपरेवाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### भाले कोइली

**कोकिलः परपुष्टः स्यात् कालः परभृतः पिकः ।**

**वसन्तदूतस्ताम्राक्षो गन्धर्वो मधुगायनः ॥१४२॥**
**वासन्तः कलकण्ठश्च कामान्धः काकलीरवः ।**
**कुहूरवोऽन्यपुष्टश्च मत्तो मदनपाठकः ॥१४३॥**

कोकिल, परपुष्ट, काल, परभृत, पिक, वसन्तदूत, ताम्राक्ष, गन्धर्व, मधुगायन, वासन्त, कलकण्ठ, कामान्ध, काकलीरव, कुहूरव, अन्यपुष्ट, मत्त र मदनपाठक : यी भाले कोइलीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पोथी कोइली**

**कोकिला त्वन्यपुष्टा स्यान्मत्ता परभृता च सा ।**
**सुकण्ठी मधुरालापा कलकण्ठी मधूदया ॥१४४॥**
**वसन्तदूती ताम्राक्षी पिकी सा च कुहूरवा ।**
**वासन्ती कामगा चैव गन्धर्वा वनभूषणी ॥१४५॥**

कोकिला, अन्यपुष्टा, मत्ता, परभृता, सुकण्ठी, मधुरालापा, कलकण्ठी, मधूदया, वसन्तदूती, ताम्राक्षी, पिकी, कुहूरवा, वासन्ती, कामगा, गन्धर्वा र वनभूषणी : यी पोथी कोइलीका संस्कृत पर्यायवाची नामहरू हुन् । 

**सुँगा**

**शुकः कीरो रक्ततुण्डो मेधावी मञ्जुपाठकः ॥१४६॥**

शुक, कीर, रक्ततुण्ड, मेधावी र मञ्जुपाठक : यी सुँगाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**राजसुँगा**

**अन्यो राजशुकः प्राज्ञः शतपत्रो नृपप्रियः ॥१४७॥**

राजशुक, प्राज्ञ, शतपत्र र नृपप्रिय : यी राजसुँगाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मैना**

**सारिका मधुरालापा दूती मेधाविनी च सा ।**
**कवरी कुत्सिताङ्गी च कष्कलाङ्गी च शारिका ॥१४८॥**

सारिका, मधुरालापा, दूती, मेधाविनी, कवरी, कुत्सिताङ्गी, कष्कलाङ्गी र शारिका : यी मैनाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**बोल्ने मैना**

**पीतपादाह्युज्वलाक्षी रक्तचञ्चुश्च सारिका ।**
**पठन्ती पाठवार्ता च बुद्धिमती भूसारिका ॥१४९॥**
**गोराण्टिका गोकिराटी गोरिका कलहप्रिया ॥१५०॥**

पीतपादा, उज्वलाक्षी, रक्तचञ्चु, सारिका, पठन्ती, पाठवार्ता, बुद्धिमती, भूसारिका, गोराण्टिका, गोकिराटी, गोरिका र कलहप्रिया : यी बोल्ने मैनाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**काकाकुल**

**चकोरश्चन्द्रिकापायी कौमुदी जीवनोऽपि सः ।**
**चातकस्तोककः सोऽपि सारङ्गो मेघजीवनः ॥१५१॥**



चकोर, चन्द्रिकापायी, कौमुदीजीवन, चातक, तोकक, सारङ्ग र मेघजीवन : यी काकाकुलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**हलेसो**

**हारीतकस्तु हारीतस्तेजलश्च कपिञ्जलः ॥१५२॥**

हारीतक, हारीत, तेजल र कपिञ्जल : यी हलेसोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

धूसरी (परेवा विशेष ?)

**धूसरी पिङ्गला सूची भैरवी योगिनी जया ।**
**कुमारी सुविचित्रा च माता कोटरवासिनी ॥१५३॥**

धूसरी, पिङ्गला, सूची, भैरवी, योगिनी, जया, कुमारी, सुविचित्रा, माता र कोटरवासिनी : यी परेवा विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### तैलपा (साङ्लो ?)

**तैलपा तु परोष्णी स्याज्जतुकाऽजिनपत्रिका ॥१५४॥**

तैलपा, परोष्णी, जतुका र अजिनपत्रिका : यी तैलपाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### भृङ्ग (?)

**भृङ्गः कुलिङ्गो धूम्याटो दार्वाघातः शतच्छदः ॥१५५॥**

भृङ्ग, कुलिङ्ग, धूम्याट, दार्वाघात र शतच्छद : यी भृङ्गका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### विभिन्न चराहरू

**व्याघ्राटः स्याद्भरद्वाजः खञ्जनः खञ्जरीटकः ।**
**समन्तभद्रः कृष्णस्तु स्वल्पकृष्णः सुभद्रकः ॥१५६॥**
**द्वीपवासी मुनिश्चैव चातुर्मास्यविदर्शनः ।**
**चाषः किकीदिविः प्रोक्तो नीलाङ्गः पुण्यदर्शनः ॥१५७॥**



व्याघ्राट वा भरद्वाज (भद्राइ चरो), खञ्जन वा खञ्जरीटक (खञ्जन चरा), कालो समन्तभद्र, थोरै कालो सुभद्रक, द्वीपवासी, मुनि, चातुर्मास्यविदर्शन, चाष (ठेउवा चरो), किकीदिवि, नीलाङ्ग (सारस विशेष) र पुण्यदर्शन : यी चराविशेका नामहरू हुन् ।

### वर्तक

**वर्तको वर्तिकी वर्तिर्गाञ्जिकायश्च कथ्यते ॥१५८॥**

वर्तक, वर्तिकी, वर्ति र गाञ्जिका : यी वर्तक (?) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

### भँगेरो

**कलविङ्कस्तु चटकः कामुको नीलकण्ठकः ॥१५९॥**

कलविङ्क, चटक, कामुक र नीलकण्ठक : यी भँगेराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**भँगेरो**

**चटका कलविङ्की स्यात् चाटकैरस्तु तत् सुतः ॥१६०॥**

चटका र कलविङ्की भनेको भँगेरीको तथा चाटकैर भनेको भँगेराको बचेराको नाम हो ।

**बनभँगेरो**

**धूसरोऽरण्यचटकः कुजो भूमिशयश्च सः ।**

धूसर, अरण्यचटक, कुज र भूमिशय : यी बनभँगेराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कालो भँगेरो**

**भारीटः श्यामचटकः शैशिरः कणभक्षकः ॥१६१॥**

भारीट, श्यामचटक, शैशिर र कणभक्षक : यी कालोभँगेराका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**ध्वाँसे भँगेरो**

**धूसरोऽन्योऽतिसूक्ष्मः स्यात् चटको धान्यभक्षकः ।**
**गृहकृत्यक्षमो भीरुः कृषिद्विष्टः कणप्रियः ॥१६२॥**

ध्वाँसे रङको अर्को थरी अति सानो भँगेरोलाई संस्कृतमा अतिसूक्ष्म, धान्यभक्षक, गृहकृत्यक्षम, भीरु, कृषिद्विष्ट र कणप्रिय भनिन्छ ।

**लाभे चरो**

**लावा तु लावकः प्रोक्तो लावः स च लवः स्मृतैः ॥१६३॥**

लावा, लावक, लाव र लव : यी लाभे चरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**तित्रो**

**तित्तिरिस्तित्तिरश्चैव तैत्तिरो याजुषो गिरिः ॥१६४॥**

तित्तिरि, तित्तिर, तैत्तिर, याजुष र गिरि : यी तित्रोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कालो तित्रो**

**कृष्णोऽन्यस्तित्तिरिः शूरः सुभूतिः परिपालकः ॥१६५॥**

कृष्णतित्तिरि, शूर, सुभूति र परिपालक : यी कालो तित्रोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सानो जातको उल्लू चरो**

**गोत्रद्वेषी भूरिपक्षः शतायुः सिद्धिकारकः ।**
**क्षुद्रोलूकः शाकुनेयः पिङ्गलो डुण्डुलश्च सः ॥**
**वृक्षाश्रयी बृहद्रावः पिङ्गलाक्षो भयङ्करः ॥१६६॥**

गोत्रद्वेषी, भूरिपक्ष, शतायु, सिद्धिकारक, क्षुद्रोलूक, शाकुनेय, पिङ्गल, डुण्डुल, वृक्षाश्रयी, बृहद्राव, पिङ्गलाक्ष र भयङ्कर : यी सानो जातको लाटोकोसेरोका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**श्यामा चरो (?)**

**श्यामा वराही शकुनी कुमारी दुर्गा च देवी चटका च कृष्णा ।**
**स्यात् पोतकी पाण्डविका च वामा सा कालिका स्यात् सितबिम्बिनी च ॥१६७॥**

श्यामा, वराही, शकुनी, कुमारी, दुर्गा, देवी, चटका, कृष्णा, पोतकी, पाण्डविका, वामा, कालिका र सितबिम्बिनी : यी श्यामा चराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**जुनकिरी**

**प्रभाकीटस्तु खद्योतः खज्योतिरुपसूर्यकः ॥१६८॥**

प्रभाकीट, खद्योत, खज्योति र उपसूर्यक : यी जुनकिरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**तैलकीट**

**तैलिनी तैलकीटः स्यात् षड्बिम्बा दद्रुनाशिनी ॥१६९॥**

तैलिनी, तैलकीट, षड्बिम्बा र दद्रुनाशिनी : यी कीराविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**इन्द्रगोप**

**शक्रगोपस्तु वर्षाभू रक्तवर्णेन्द्रगोपकौ ॥१७०॥**

शक्रगोप, वर्षाभू, रक्तवर्ण र इन्द्रगोप : यी वीरबहुटी कीराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**भमरा**

**भ्रमरः षट्पदो भृङ्गः कलालापः शिलीमुखः ।**
**पुष्पन्धयो द्विरेफोऽलिर्मधुकृन्मधुपो द्विभः ॥१७१॥**
**भसरश्चञ्चरीकोऽलिः झङ्कारी मधुलोलुपः ।**
**इन्दीन्दिरश्च मधुलिट् मत्तो घुमुघुमारवः ॥१७२॥**

भ्रमर, षट्पद, भृङ्ग, कलालाप, शिलीमुख, पुष्पन्धय, द्विरेफ, अलि, मधुकृत्, मधुप, द्विभ(प), भसर, चञ्चरीक, अलि, झङ्कारी, मधुलोलुप, इन्दीन्दिर, मधुलिह, मत्त र घुमुघुमारव : यी भमराका संस्कृत पर्यायवाची नामहरू हुन् ।



**माहुरी**

**वर्वणा मक्षिका नीला सरघा मधुमक्षिका ॥१७३॥**

वर्वणा, मक्षिका, नीला, सरघा र मधुमक्षिका : यी माहुरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**ठूलो मौरीका पर्यायवाची नामहरू**

**गन्धोली वरटा क्षुद्रा क्रूरा स्यात् क्षुद्रवर्वणा ।**
**रंरिकश्छत्रकारी च तीक्ष्णदंष्ट्रो महाविषः ॥**
**पीतवर्णा दीर्घपादो मत्सर्यः क्रूरदंष्ट्रकः ॥१७४॥**

गन्धोली, वरटा, क्षुद्रा, क्रूरा, क्षुद्रवर्वणा, रंरिक, छत्रकारी, तीक्ष्णदंष्ट्रा, महाविष, पीतवर्णा, दीर्घपाद, मत्सर्य र क्रूरदंष्ट्रक : यी ठुलो मौरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वनमक्षिका (डाँस) का पर्यायवाची नामहरू**

**दंशो दुष्टमुखः क्रूरः क्षुद्रिका वनमक्षिका ॥१७५॥**

दंश, दुष्टमुख, क्रूर, क्षुद्रिका र वनमक्षिका : यी डाँसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मक्षिका (झिँगा) का संस्कृत पर्यायवाची नामहरू**

**मक्षिका त्वमृतोत्पन्ना वमनी चापला च सा ॥१७६॥**

मक्षिका, अमृतोत्पन्ना, वमनी र चापला : यी झिँगाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**लामखुट्टे**

**मशको वज्रतुण्डश्च सूच्यास्यः सूक्ष्ममक्षिका ।**
**रात्रिजागरदो धूम्रो नीलाभ्रस्त्वन्यजातयः ॥१७७॥**

मशक, वज्रतुण्ड, सूच्यास्य, सूक्ष्ममक्षिका, रात्रिजागरद, धूम्रो र नीलाभ्र यी लामखुट्टेका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**लामखुट्टे विशेष**



**अष्टाङ्घ्रिरष्टपादश्च गृहवासी च कृष्णकः ॥१७८॥**

अष्टपाद, गृहवासी र कृष्णक : यी लामखुट्टे विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कालिक (?)**

**कालिकः कोकिलः प्रोक्तः कालुञ्चः कृष्णदंष्ट्रकः ।**
**कसारिका दीर्घमूर्छा गृहवासा बिलाशयी ॥१७९॥**

कालिक, कोकिल, कालुञ्च, कृष्णदंष्ट्रक, कसारिका, दीर्घमूर्छा, गृहवासा र बिलाशयी : यी कालिकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**जुम्रा**

**यूका तु केशकीटः स्यात् स्वेदजः षट्पदः स्मृतः ॥१८०॥**

यूका, केशकीट, स्वेदज र षट्पद यी टाउकामा पर्ने जुम्राका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पक्ष्मजा (जुम्रा विशेष ?)

**पक्ष्मजा पक्ष्मयूका स्यात् सूक्ष्मा षट्चरणाऽपि सा ॥१८१॥**

पक्ष्मजा, पक्ष्मयूका, सूक्ष्मा र षट्चरणा : यी जुम्रा विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### शरीरका जुम्रा

**श्वेतयूकाऽङ्गवस्त्रोत्था लिक्षा यूकाङ्गवस्त्रके ॥१८२॥**

शरीरमा लगाइने कपडा पर्ने जुम्रालाई श्वेतयूका, अङ्गवस्त्रोत्था, लिक्षा र यूकाङ्गवस्त्रक : यी शरीरमा पर्ने जुम्राका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कीरा

**कथितेष्वेषु यो जीवः क्षोदीयान् वृश्चिकादिकः ।**
**तत्र तत्र बुधैर्ज्ञेयः स सर्वः कीटसञ्ज्ञकः ॥१८३॥**



बिच्छी आदि जेजति जीवका बारेमा बताइयो, ती सबैलाई कीरा भनिन्छ भनेर विद्वानहरूले बुझ्नू ।

### कीटिका (?)

**कीटिका चटिका प्रोक्ता वज्रदंष्ट्रा बहुप्रजा ।**
**कृशाङ्गी तामसी शूरा कीरिभारा महाबला ॥१८४॥**

कीटिका, चटिका, वज्रदंष्ट्रा, बहुप्रजा, कृशाङ्गी, तामसी, शूरा, कीरिभारा र महाबला : यी कीटिकाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मङ्कोर (कमिला विशेष)

**मङ्कोरो मङ्कटः कृष्णस्तीक्ष्णदंष्ट्रो विशालुकः ।**
**षट्पादकस्तु मात्सर्यो माकोटस्तूर्ध्वगुह्यकः ॥१८५॥**

मङ्कोर, मङ्कट, कृष्ण, तीक्ष्णदंष्ट्र, विशालुक, षट्पादक, मात्सर्य, माकोट र ऊर्ध्वगुह्यक : यी कमिलाविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**षड्बिन्दुकीट (गोबरमा हुने कीरा विशेष)**

**षड्बिन्दुर्बिन्दुकीटस्तु दीर्घकीटस्तु पादतः ॥१८६॥**

षड्बिन्दु, बिन्दुकीट र दीर्घकीट : यी गोब्रेकीरा विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वर्गप्रशस्ति**

**प्रसहन-विलम्बित-द्रुत-शय-प्रतुदाश्च विष्किरः ।**
**कीटा इति कथिताः नवधाऽत्र तिर्यञ्चः ॥१८७॥**

यस अध्यायमा शिकारी चरा, ढिला हिँड्ने, छिटो हिँड्ने, दुलो-गुफा र जलमा बस्ने, चिथरेर खाने चरा, छरेर खाने चरा र कीरा गरी नौ थरी जीवका बताइयो ।

**इत्थं नानातिर्यगाख्याप्रपञ्चव्याख्यापूर्णं वर्गमेनं विदित्वा ।**
**बुद्ध्या सम्यक् चाभिसन्धाय धीमान्वैद्यः कुर्यान्मांसवर्गप्रयोगम् ॥१८८॥**



अनेक प्रकारका जनावर र जीवहरूको विवरणले भरिएको यस अध्यायको गहन पश्चात् हरेक बुद्धिमान वैद्यले आफ्ना विरामीको उपचारको तयारी गर्नका लागि यो मांस वर्ग नामक अध्यायको प्रयोग गर्नुपर्दछ ।

**येनेभास्यपिता मृगाङ्कमुकुटः शार्दूलचर्माम्बरः**
**सर्पालङ्करणः सुपुङ्गवगतिः पञ्चाननोऽभ्यर्च्यते ।**
**तस्य श्रीनृहरीशितुः खलु कृतावेकोनविंशोऽभिधा-**
**चूडापीठमणावगादवसितिं सिंहादिवर्गो महान् ॥१८९॥**

शिरमा चन्द्रमालाई मुमुट धारण गरे जसरी धारण गर्ने, सिँहको छाला बेर्ने र साँढे जसरी जता मनलाग्यो त्याता विचरण गर्ने पाँचमुख भएका भगवान् शिवलाई सर्वसाधारणका राजा नरहरि भक्तिपूर्वक पूजा गर्दछन् । यिनै नरहरीले लेखेको अभिधान चूडामणि अन्तर्गतको उन्नाईसौं सिंहादी वर्ग नामक अध्यायले यहाँ विश्राम लिएको छ ।

**इति निघण्टुराजापरनाम्नाभिधानचूडामणौ सिंहादिवर्ग एकोनविंशतिः ॥१९॥**

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत सिंहादिवर्ग नामक उन्नाइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।१९।

# रोगादि वर्ग

## रोगका संस्कृत पर्यायवाची नामहरू

**गदो रुजा व्याधिरपाटवाम रोगामयातङ्कभयोपघाताः ।**
**रुङ्मान्द्यभङ्गार्तितमोविकार ग्लानिक्षयानार्जवमृत्युभृत्याः ॥१॥**

गद, रुजा, व्याधि, अपाटव, आम, रोग, आमय, आतङ्क, भय, उपघात, रुक्, मान्द्य, भङ्ग, अर्ति, तमोविकार , ग्लानि, क्षय, अनार्जव, मृत्यु र भृत्य : यी रोगका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## क्षयरोगका संस्कृत पर्यायवाची नामहरू

**राजयक्ष्मा क्षयो यक्ष्मा रोगराजो गदाग्रणीः ।**
**उष्मा शोषोऽतिरोगश्च रोगाधीशो नृपामयः ॥२॥**

राजयक्ष्मा, क्षय, यक्ष्मा, रोगराज, गदाग्रणी, उष्मा, शोष, अतिरोग, रोगाधीश र नृपामय : यी क्षयरोगका संस्कृत पर्यायवाची नामहरू हुन् ।



## पाण्डु, विसर्प, सुजन र खोकीका संस्कृत पर्यायवाची नामहरू

**पाण्डुरोगस्तु पाण्डुः स्यात् विसर्पः सचिवामयः ।**
**शोफः शोथस्तु श्वयथुः कासः क्षवथुरुच्यते ॥३॥**

पाण्डुरोगलाई पाण्डुरोग वा पाण्डु, सुकेलुतोलाई विसर्प वा सचिवामय, सुजनलाई शोफ वा शोथ वा श्वयथु र खोकीलाई कास वा क्षवथु भनिन्छ ।

## हाच्छिउँ, पिनास, नेत्ररोग र मुखरोगका संस्कृत पर्यायवाची नामहरू

**क्षुतन्तु क्षवथुः क्षुच्च प्रतिश्यायस्तु पीनसः ।**
**नेत्रामयो नेत्ररोगो मुखरोगो मुखामयः ॥४॥**

हाच्छिउँ आइरहने रोगलाई क्षुत, क्षवथु वा क्षुत्; पिनासलाई प्रतिश्याय वा पीनस; आँखाका रोगलाई नेत्रामय वा नेत्ररोग तथा मुखका रोगलाई मुखरोग वा मुखामय भनिन्छ ।

### कुष्ठ र सेतोकुष्ठका संस्कृत पर्यायवाची नामहरू

**दुश्चर्मा मण्डलं कोठस्त्वग्दोषश्चर्मदूषिका ।**
**कुष्ठन्तु पुण्डरीकः स्यात् श्वित्रन्तु चर्मचित्रकम् ॥५॥**

दुश्चर्मा, मण्डल, कोठ, त्वग्दोष, चर्मदूषिका, कुष्ठ र पुण्डरीक : यी कुष्ठरोगका तथा श्वित्र र चर्मचित्रक : यी सेतो कुष्ठरोग (श्वेतकुष्ठ) का संस्कृत पर्यायवाची नामहरू हुन् ।

### दुभी, दम, भैंसे लुतो र चिलाउने रोगका संस्कृत पर्यायवाची नामहरू

**किलाससिध्मे च शिखी श्वासः पामा विचर्चिका ।**
**कण्डूः कण्डूतिकण्डूया-खर्जूकण्डूयनानि च ॥६॥**

दुभीरोगलाई किलास वा सिध्म, दमरोगलाई शिखी वा श्वास, भैंसेलुतोलाई पामा वा विचर्चिका, तथा चिलाउने रोगलाई कण्डू, कण्डूति, कण्डूया, खर्जू वा कण्डूयन पनि भनिन्छ ।

### विभिन्न प्रकारको लुतो



**सञ्चारी शुण्ठिकास्फोटे पामपामे विचर्चिका ।**
**पीतस्फोटे तु पामा च क्षुद्रस्फोटे तु कञ्चिका ॥७॥**

फोका उठी फुटेर सर्ने खालको लुतोलाई पाम र नसर्ने खालको यस्तो लुतोलाई विचर्चिका भनिन्छ । पहेँलो भएर फोका उठी फुट्ने लुतोलाई पामा र ससाना विमिरा आई फुट्ने खालको लुतोलाई कञ्चिका भनिन्छ ।

### पिड्को, दादुरा, खटिरा र कपाल खुइलने रोगका संस्कृत पर्यायवाची नामहरू

**पिटका पिटिका प्रोक्ता मसूराभा मसूरिका ।**
**विस्फोटः स्फोटकः स्फोटः केशघ्नस्त्विन्द्रलुप्तकः ॥८॥**

पिड्कोलाई पिटका वा पिटिका, मुसुरो जस्तो रङ र आकार हुने पिड्कोलाई मसूरिका (दादुरा) भनिन्छ । खटिरालाई विस्फोट, स्फोटक वा स्फोट तथा कपाल खुइलने रोगलाई केशघ्न वा इन्द्रलुप्तक भनिन्छ ।

### गलशुण्डी, गलगाँड र गिजाका रोगका संस्कृत पर्यायवाची नामहरू

**गलशुण्डी तु शुण्डा स्याद्गलगण्डो गलस्तनः ।**
**दन्तार्बुदो दन्तमूलं दन्तशोथो द्विजव्रणः ॥९॥**

घाँटी वा लिगलिगे सुन्निने रोगलाई गलशुण्डी वा शुण्डा, गलगाँडलाई गलगण्ड वा गलस्तन तथा गिजामा हुने रोगलाई दन्तार्बुद, दन्तमूल, दन्तशोथ र द्विजव्रण भनिन्छ ।

### गानुगोला, ढाडतिरका गाँठा र शूलका संस्कृत पर्यायवाची नामहरू

**गुल्मस्तु जाठरग्रन्थिः पृष्ठग्रन्थौ गडुर्भवेत् ।**
**पङ्क्तिशूलन्तु शूलं स्यात् पाकजं परिणामजम् ॥१०॥**

गानुगोलालाई गुल्म वा जाठरग्रन्थि, ढाडतिर हुने गाँठोलाई पृष्ठग्रन्थी वा गडु तथा शूललाई पङ्क्तिशूल, शूल, पाकज वा परिणामज भनिन्छ ।

### लुतो, नाडीव्रण, हात्तीपाइले र विपादिका रोग



**लूता चर्मव्रणो वृक्कं नाडी नाडीव्रणो भवेत् ।**
**श्लीपदं पादवल्मीकं पादस्फोटो विपादिका ॥११॥**

लुतोलाई लूता वा चर्मव्रण भनिन्छ (मृगौलामा हुने ?) । नसामा हुने घाउलाई नाडीव्रण भनिन्छ । हात्तीपाइले रोगलाई श्लीपद वा पादवल्मीक तथा गलिनी फाट्ने वा हत्केला फुट्ने वा पैँताला फाट्ने रोगलाई विपादिका भनिन्छ ।

### कब्जियत, पेट फुल्ने रोग र अल्काई रोग

**विष्टम्भस्तु विबन्धः स्यादानाहो मलरोधनम् ।**
**अर्शांसि गुदकीलाः स्युर्दुर्नामानि गुदाङ्कुराः ॥१२॥**

कब्जियतलाई विष्टम्भ वा विबन्ध, दिसा रोकिएर पेट फुल्ने रोगलाई आनाह वा मलरोधन तथा अल्काईलाई अर्श, गुदकील, दुर्नाम वा गुदाङ्कुर भनिन्छ ।

### छेरपटी र वाकवाकी रोग

**मलवेगस्त्वतीसारो ग्रहणीरुक् प्रवाहिका ।**

**वमथुर्वान्तिरुद्गारश्छर्दिर्विच्छर्दिका वमिः ॥१३॥**

तारन्तार दिसा लागिरहने रोगलाई मलवेग वा अतीसार वा ग्रहणी वा प्रवाहिका भनिन्छ । बान्ता लाग्ने रोगलाई वमथु, वान्ति, उद्गार, छर्दि, विच्छर्दिका वा वमि भनिन्छ ।

### मुटुका रोग, दम र ज्वर

**हृद्रोगो हृद्गदो हृद्रुगुत्प्राणः श्वास उच्यते ।**
**ज्वरस्तु स ज्वरातङ्को रोगश्रेष्ठो महागदः ॥१४॥**

मुटुका रोगलाई हृद्रोग, हृद्गद वा हृद्रुक् भनिन्छ । दमलाई उत्प्राण वा श्वास भनिन्छ । जरोलाई ज्वर, ज्वरातङ्क, रोगश्रेष्ठ र महागद भनिन्छ ।

### विषमज्वर

**द्वन्द्वजो द्वन्द्वदोषोत्थाः शीताद्या विषमज्वराः ।**
**अतीत्यागन्तवस्ते द्वचैकाहिकत्र्याहिकादयः ॥१५॥**



द्वन्दज वा द्वन्द्वदोषोत्थ, शीत आदि विषमज्वर हुन्छन् । यो अतीति, आगन्तव, द्वचैक, आहिक, त्र्याहिक आदि अनेक थरी हुन्छ ।

### रक्तपित्त, वातपित्त र वातरक्त

**रक्तपित्तं पित्तरक्तं पित्तास्रं पित्तशोणितम् ।**
**इत्येवं रक्तवातादि द्वन्द्वदोषमुदाहरेत् ॥१६॥**

रक्तपित्त, पित्तरक्त, पित्तास्र र पित्तशोणित : यी रक्तपित्तका संस्कृत पर्यायवाची नामहरू हुन् । यसैगरी वातपित्त, वातरक्त, वातास्र र वातशोणित नामक वातरक्त पनि हुन्छ ।

### तिर्खा, मदात्यय र मद

**तृष्णोदन्या पिपासा तृण्मदातङ्को मदात्ययः ।**
**पानात्ययो मदव्याधिर्मदस्तूद्रिक्तचित्तता ॥१७॥**

तृष्णा, उदन्या, पिपासा र तृट् : यी तिर्खाका तथा मदातङ्क, मदात्यय, पानात्यय र मदव्याधि : यी

मदात्ययका एवं मद र उद्रिक्तचित्तता : यी मदका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**मूर्छा, स्वरबस्ने रोग, अनिच्छा र अरुची**

**मूर्छा तु मोहो मूढिश्च स्वरसादः स्वरक्षयः ।**
**अश्रद्धाऽनभिलाषः स्यादरुचिश्चाप्यरोचकः ॥१८॥**

मूर्छा, मोह र मूढि : यी बेहोस हुने रोगका, स्वरसाद र स्वरक्षय : यी स्वर बस्ने रोगका, अश्रद्धा र अनभिलाष : यी इच्छा नहुनुका तथा अरुचि र अरोचक : यी रुचि नहुनुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**प्रमेह, मूत्रकृच्छ्र र पत्थरी**

**मूत्रदोषस्तु विज्ञेयः प्रमेहो मेह इत्यपि ।**
**कृच्छ्रं तु मूत्रकृच्छ्रं स्यात् मूत्ररोधोऽश्मरी च सा ॥१९॥**

मूत्रदोष, प्रमेह र मेह : यी प्रमेहका, कृच्छ्र र मूत्रकृच्छ्र : यी मूत्रकृच्छ्रका तथा मूत्ररोध र अश्मरी : यी पत्थरीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वातरोग र शरीर काम्ने रोग**

**वातव्याधिश्चलातङ्को वातरोगोऽनिलामयः ।**
**कम्पस्तु वेपनं वेपः कम्पनं वेपथुस्तथा ॥२०॥**

वातव्याधि, चलातङ्क, वातरोग र अनिलामय : यी वातविकारका तथा कम्प, वेपन, वेप, कम्पन र वेपथु : यी काम्ने रोगका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**हाई र आलस्य**

**जृम्भा तु जृम्भिका जम्भा जृम्भणं जम्भिका च सा ।**
**आलस्यं मन्दता मान्द्यं कार्यप्रद्वेष इत्यपि ॥२१॥**

जृम्भा, जृम्भिका, जम्भा जृम्भण र जम्भिका : यी हाईका तथा आलस्य, मन्दता, मान्द्य र कार्यप्रद्वेष : यी आलस्यका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## तुन्द, जलोदर, आम र रक्त-रोग

**तुन्दः स्थविष्ठ इत्युक्तो जठरघ्नो जलोदरः ।**
**आमो मलस्य वैषम्याद्रक्तार्तिः शोणितामयः ॥२२॥**

पेट ज्यादै मोटो हुनु (तुन्दः स्थविष्ठ), पाचनशक्ति नाश हुनु (जठरघ्न), नाइटोनिरको छालाभित्र पानी भरिने रोग (जलोदर) र दिसा नियमित नभएर हुने आउँ रोग : यी पेटका रोग हुन् । रक्तजन्य रोगलाई रक्तार्ति वा शोणितामय भनिन्छ ।

## जालगर्दभ

**जालगर्दभकः प्रोक्तो जालरासभकामयः ।**
**जालखरगदो ज्ञेयः स गर्दभगदस्तथा ॥२३॥**

जालगर्दभक, जालरासभक, जालखरगद र गर्दभगद : यी जरो समेत आई शरीर सुन्निने रोगविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## विद्रधि, हृद्ग्रन्थि र भगन्दर



**विद्रधिः स्याद्विदरणं हृद्ग्रन्थिर्हृद्व्रणश्च सः ।**
**व्रणो भगप्रदेशे यः स भगन्दरनामकः ॥२४॥**

शरीरको बाहिरी वा भित्री भागमा हुने खटिरालाई विद्रधि वा विदरण, मुटुको गाँठोलाई हृद्ग्रन्थि वा हृद्व्रण तथा गुदद्वार वा योनिद्वार र तल्लोपेटको बीचमा पैदा हुने र फुटेपछि अत्यन्त पीडा हुने खटिरोलाई भगन्दर भनिन्छ । (गुदद्वार र अण्डकोषको बीचको भागलाई (पनि) भग भनिन्छ : यही ग्रन्थ) ।

## शिरःशूलादि रोग

**शिरःशूलादयो ज्ञेयास्तत्तदङ्गाभिधानकाः ।**
**इत्थमन्येऽपि बोद्धव्या भिषग्भिर्देहतो गदाः ॥२५॥**

शिर-शूल आदि जस्ता शूल जुन अङ्गमा हुन्छ त्यही अङ्गको नामका शूल हुन्छन् । यसरी विज्ञ वैद्यले अन्य रोगहरूका बारेमा पनि जान्नू ।

**सन्ताप र अन्तर्दाह**

**सन्तापः संज्वरस्तापः शोष ऊष्मा च कथ्यते ।**
**यश्चापि कोष्ठसन्तापः सोऽन्तर्दाह इति स्मृतः ॥२६॥**

ज्वरले शरीर तात्नुलाई सन्ताप, संज्वर, ताप, शोष वा ऊष्मा भनिन्छ । शरीरभित्र हुने जलन ( प्रायः सन्निपात ज्वरजन्य) लाई कोष्ठसन्ताप वा अन्तर्दाह भनिन्छ ।

**विविध अङ्गमा हुने डाहका नाम**

**स दाहो मुखताल्वोष्ठे दवथुश्चक्षुरादिषु ।**
**पाणिपादांसमूलेषु शाखापित्तं तदुच्यते ॥२७॥**

मुख, तालु र ओठको डाहलाई दाह, आँखामा हुने डाहलाई दवथु, हातगोडा र कुम हुने डाहलाई शापित्त भनिन्छ ।

**तन्द्रा र बेहोसी**



**तन्द्रा तु विषयाज्ञानं प्रमीला तन्द्रिका च सा ।**
**प्रलयस्त्विन्द्रियस्वापश्चेष्टानाशः प्रलीनता ॥२८॥**

शरीरका इन्द्रियले थाहा पाउनु पर्ने कुरा अर्थात् विषय थाहा नपाउने अवस्थालाई तन्द्रा, विषयाज्ञान, प्रमीला वा तन्द्रिका भनिन्छ । इन्द्रियको चेष्टानाश हुनु (बेहासी)लाई प्रलय, इन्द्रियस्वाप, चेष्टानाश वा प्रलीनता भनिन्छ ।

**उन्माद र आवेश**

**उन्मादो मतिविभ्रान्तिरुन्मनायितमित्यपि ।**
**आवेशो भूतसञ्चारो भूतक्रान्तिर्ग्रहागमः ॥२९॥**

बुद्धिभ्रम हुनुलाई उन्माद, मतिविभ्रान्ति वा उन्मनायित पनि भनिन्छ । भूतप्रेत आदि लाग्नुलाई आवेश, भूतसञ्चार, भूतक्रान्ति वा ग्रहागम भनिन्छ ।

**छारेरोग, जडता र सुस्ती**

**अपस्मारोऽङ्गविकृतिर्लोलाङ्गो भूतविक्रिया ।**

**स्तैमित्यं जडता जाड्यं शीतलत्वमपाटवम् ॥३०॥**

अपस्मार, अङ्गविकृति, लोलाङ्ग र भूतविक्रिया : यी छारेरोगका, स्तैमित्य, जडता र जाड्य : यी जडताका तथा शीतलत्व र अपाटव : यी सुस्तीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### त्रिदोषजन्य रोग

**वातिको वातजो व्याधिः पैत्तिकः पित्तसम्भवः ।**
**श्लैष्मिकः श्लेष्मसम्भूतः समूहः सान्निपातिकः ॥३१॥**

वातजन्य रोगलाई वातिक, पित्तजन्य रोगलाई पैत्तिक, कफजन्य रोगलाई श्लैष्मिक तथा त्रिदोजन्य रोगलाई सान्निपातिक भनिन्छ ।

### रोगीका पर्यायवाची नामहरू

**व्याधितो विकृतो ग्लास्नुर्ग्लानो मन्दस्तथाऽऽतुरः ।**
**अभ्यान्तोऽभ्यमितो रुग्नश्चामयाव्यपटुश्च सः ॥३२॥**



व्याधित, विकृत, ग्लास्नु, ग्लान, मन्द, आतुर, अभ्यान्त, अभ्यमित, रुग्न, आमयावी र अपटु : यी रोगीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रोगी विशेषलाई गरिने सम्बोधन

**तद्विशेषास्तु विज्ञेयास्तन्मत्वर्थीययोगतः ।**
**यथा ज्वरितकण्डूलवातकक्षयदद्रुणाः ॥३३॥**

कुनै रोगविशेष लागेको रोगीलाई त्यही रोग जनाउने शब्दको प्रयोगले सम्बोधन गरिन्छ । जस्तै :- ज्वर आएकालाई ज्वरित, लुतो आएकालाई कण्डूल, वातका रोगीलाई वातक, क्षयरोगका रोगीलाई क्षयद आदि ।

### रोगीका हुनुपर्ने गुण

**उत्साही द्विजदेवभेषजभिषग्भक्तोऽपि पथ्ये रतो**
**वीरो धर्मपरायणः प्रियवचा मानी मृदुर्मानदः ।**
**विश्वासी ऋजुरास्तिकः सुचरितो दाता दयालुः शुचि-**

**यः स्यात् काममवञ्चकः स विकृतो मुच्येत मृत्योरपि ॥३४॥**

रोगी उत्साही; ब्राह्मण, देवता, औषधीउपचार र वैद्यको भक्त; सल्लाह दिइए अनुसारका पथ्य खानपिन गर्ने, वीर, धार्मिक, मिठो बोल्ने, सच्चरित्र भएको, सज्जन, अरुलाई सन्मान गर्ने, विश्वास गर्ने, इमानदार, आस्तिक, असल चालचलन गर्ने, दानी, दयालु, वाहिरभित्र शुद्ध, काम नठग्ने र मर्न लाग्दा पनि यी गुण नछाड्ने किसिमको हुनुपर्दछ ।

### उपचार चाहने रोगीमा हुनुपर्ने गुण

**उत्साही द्विजदेवभेषजभिषग्भक्तोऽपि पथ्ये रतो**
**वीरो धर्मपरायणः प्रियवचा मानी मृदुर्मानदः ।**
**विश्वासी ऋजुरास्तिकः सुचरितो दाता दयालुः शुचि-**
**यः स्यात् काममवञ्चकः स विकृतो मुच्येत मृत्योरपि ॥३४॥**

रोगी उत्साही; ब्राह्मण, देवता, औषधीउपचार र वैद्यको भक्त; सल्लाह दिइए अनुसारका पथ्य खानपिन गर्ने, वीर, धार्मिक, मिठो बोल्ने, सच्चरित्र भएको, सज्जन, अरुलाई सन्मान गर्ने, विश्वास गर्ने, इमानदार, आस्तिक, असल चालचलन गर्ने, दानी, दयालु, वाहिरभित्र शुद्ध, काम नठग्ने र मर्न लाग्दा पनि यी गुण नछाड्ने किसिमको हुनुपर्दछ ।



### उपचारका पर्यायवाची नामहरू

**उपचारस्तूपचर्या चिकित्सा रुक्प्रतिक्रिया ।**
**निग्रहो वेदनानिष्ठा क्रिया चोपक्रमः समाः ॥३५॥**

उपचार, उपचर्या, चिकित्सा, रुक्प्रतिक्रिया, निग्रह, वेदनानिष्ठा क्रिया र उपक्रम : यी उपचारका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ओखतीका पर्यायवाची नामहरू

**भैषज्यं भेषजं जैत्रमगदो जायुरौषधम् ।**
**आयुर्योगो गदारातिरमृतं च तदुच्यते ॥३६॥**

भैषज्य, भेषज, जैत्र, अगद, जायु, औषध, आयुर्योग, गदाराति र अमृत : यी ओखतीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## ओखतीका प्रकार

**तच्च पञ्चविधं प्रोक्तं स्वस्वयोगविशेषतः ।**
**रसश्चूर्णं कषायश्चावलेहः कल्क इत्यपि ॥३७॥**

त्यो (ओखती) आआफ्ना योग अनुसार रस, चूर्ण, कषाय, अवलेह र कल्क गरी पाँच किसिमको हुन्छ ।

**रसो दृषदि सम्भिन्नो दिव्यद्रव्यसमन्वितः ।**
**चूर्णन्तु वस्तुभिः क्षुण्णैः कषायः क्वथितैस्तु तैः ॥३८॥**
**तैः पक्वैरवलेहः स्यात् कल्को मध्वादिमर्दितैः ॥३९॥**

ओखतीलाई विभिन्न तरिकाले निकालिएको तरल पदार्थलाई रस भनिन्छ । धुलो बनाइएको ओखतीलाई चूर्ण भनिन्छ । ओखतीको काँढापानीलाई कषाय भनिन्छ । विशेष तरिकाले पकाइएको ओखतीको लेदोलाई अवलेह भनिन्छ । मह आदि राखी बनाइएको ओखतीको लेप वा लेदोलाई कल्क भनिन्छ ।

## ओखतीको विभिन्न थरी काँडापानी

**पाचनः शोधनीयश्च क्लेदनश्च शमस्तथा ।**
**दीपनस्तर्पणः शोष इति सप्तविधाः स्मृताः ॥४०॥**
**पाचनोऽर्धावशेषश्च शोधनो द्वादशांशकः ।**
**क्लेदनश्चतुरंशस्तु शमश्चाष्टांशको मतः ॥४१॥**
**दीपनस्तु षडंशश्च तर्पणः पञ्चमांशकः ।**
**शोषणः षोडशांशश्च क्वाथभेदा इतीरिताः ॥४२॥**

पाचन, शोधनीय, क्लेदन, शम, दीपन, तर्पण र शोष गरी सात प्रकारका काँढापानी हुन्छन् । उमालेर आधा बनाइएको ओखती-पानीलाई पाचन, बाह्र भागको एक भाग बाँकी रहने गरी उमालिएको ओखती-पानीलाई शोधनीय, चार भागको एक भाग बाँकी रहने गरी उमालिएको ओखती-पानीलाई क्लेदन, आठ भागको एक भाग बाँकी रहने गरी उमालिएको ओखती-पानीलाई शम, छ भागको एक भाग बाँकी रहने गरी उमालिएको ओखती-पानीलाई दीपन, पाँच भागको एक भाग बाँकी रहने गरी उमालिएको ओखती-पानीलाई तर्पण र सोह्र भागको एक भाग बाँकी रहने गरी उमालिएको ओखती-पानीलाई शोषण भनिन्छ । यी काँढापानीका प्रकारहरू हुन् ।

### अनुपान आदि

**ज्ञेयं रसादिकथनादनन्तरं किलानुपानं कथयन्ति सूरयः ।**
**विलम्ब्य च क्रामणमेतदीरितं रात्रौ पुनः पाचनमेतदूचिरे ॥४३॥**

रस आदिका बारेमा बताए पछि विज्ञहरू अनुपानका बारेमा बताउँदछन् । ओखती सँगसँगै पिउने वा ओखती खाएपछि पिउने तोकिएको तरल पदार्थलाई अनुपान भनिन्छ । ओखती खाएको केही समय पछि पिइने यस्तो पदार्थलाई क्रामण र रातमा पिइने यस्तो पदार्थलाई पाचन भनिन्छ ।

### पथ्य

**आत्मनीनन्तु पथ्यं स्यादायुष्यं च हितञ्च तत् ॥४४॥**

शरीरले सहने खालको खानपिनलाई आत्मनीन, पथ्य, आयुष्य वा हित भनिन्छ ।

### आरोग्य

**किलपाटवमारोग्यमगदं स्यादनामयम् ।**
**कल्पस्तु पटुरुल्लाघो निरातङ्को निरामयः ॥४५॥**
**अगदो नीरुजो निरुगनातङ्कश्च कथ्यते ॥४६॥**

पाटव, आरोग्य, अगद, अनामय, कल्प, पटु, उल्लाघ, निरातङ्क, निरामय, अगद, नीरुज, निरुक् र अनातङ्क : यी आरोग्यका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### वैद्य

**वैद्यः श्रेष्ठोऽगदङ्कारो रोगहारी भिषग्विधिः ।**
**रोगज्ञो जीवनो विद्वान् आयुर्वेदी चिकित्सकः ॥४७॥**

वैद्य, श्रेष्ठ, अगदङ्कार, रोगहारी, भिषक्, विधि, रोगज्ञ, जीवन, विद्वान्, आयुर्वेदी र चिकित्सक : यी वैद्यका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### सद्वैद्य

**विप्रो वैद्यकपारगः शुचिरनूचानः कुलीनः कृती**

धीरः कालकलाविदास्तिकमतिर्दक्षः सुधीर्धार्मिकः ।
स्वाचारः समदृग्दयालुरखलो यः सिद्धमन्त्रक्रमः
शान्तः काममलोलुपः कृतयशा वैद्यः स विद्योतते ॥४८॥

ब्राह्मण वा विद्वान, वैद्यको पेसामा पोख्त, शुद्ध, अध्ययनशील, कुलीन, दक्ष वा पुरुषार्थी, धैर्यशाली, ओखती गर्न समय मात्रा आदि जान्ने, आस्तिक, सिपालु, बुद्धिमान्, धार्मिक, सदाचारी, सबैलाई समान ठान्ने, दयालु, सज्जन, ओखतीको क्रमका बारेमा जान्ने, शान्त, कामवासनामा नफस्ने र यश कमाएको वैद्यलाई असल वैद्य भनिन्छ ।

## कुवैद्य

अधीर कर्कशो लुब्धः सरोगो न्यूनशिक्षितः ।
पञ्च वैद्या न युज्यन्ते धन्वन्तरिसमा अपि ॥४९॥

अधीर, रुखो, लोभी, रोगी र कम पढेको : यी पाँच लक्षण भएको वैद्यलाई धन्वन्तरि सरहकै भएपनि उपचार गर्न लगाइँदैन ।

## वैद्य प्रशंसा



पुमर्थाश्चत्वारः खलु करणसौख्यैकसुभगा-
स्तदेतद्भैषज्यानवरतनिषेवैकवशगम् ।
तदप्येकायत्तं फलदमगदङ्कारकृपया
ततो लोके लोके न परमुपकर्तैवममुतः ॥५०॥
राजानो विजिगीषया निजभुजप्रक्रान्तमोजोदयात्-
शौर्यं सङ्गररङ्गसद्मनि यथा संविभ्रते सङ्गताः ।
यस्मिन्नौषधयस्तथा समुदिताः सिध्यन्ति वीर्याधिका
विप्रोऽसौ भिषगुच्यते स्वयमिति श्रुत्यापि सत्यापितम् ॥५१॥

जीवनका सिद्धान्त धर्म, अर्थ, काम र मोक्ष : यी चार हुन् । यी चार सिद्धान्त प्राप्त गर्न मानिसका दश वटै इन्द्रियहरू सही अवस्थामा रहनु पर्दछ । यो कुरा पूर्णतया ओखतीको विवेकपूर्ण प्रयोगमा निर्भर हुन्छ । ओखतीको विवेकपूर्ण प्रयोग चिकित्सकको पूर्णाधिकार हो र तिनको दया बिना यो गर्न सकिँदैन । यसरी मानवताको धर्म निभाउन सक्ने संसारमा अरु कोही छैन । युद्धमा विजय चाहने राजाहरूले जसरी आफ्ना वीर (शक्ति) हरूलाई एकत्रित गर्दछन्, त्यसरी नै रोगमाथि विजय चाहने वैद्यहरूले पनि आफ्नो शक्तिशाली ओखतीहरूको ज्ञानलाई एकत्रित गरी प्रयोग गर्दछन् । यस्तो विप्रलाई नै वैद्य भनिन्छ । यसरी नै वैद्यको परीक्षण हुने गर्दछ ।

**औषधिको सङ्ग्रह र उपयोग**

**यथावदुत्खाय शुचिप्रदेशजा द्विजेन कालादिकतत्त्ववेदिना ।**
**यथायथं चौषधयो गुणोत्तराः प्रत्याहरन्ते यमगोचरानपि ॥५२॥**

काल, परिस्थिति, ओखतीको गुण आदि जान्ने द्विजले शुद्ध स्थानको ओखती विधिपूर्वक खनी ( बटुली) मर्न लागेका रोगीलाई पनि जीवन दान दिने गर्दछन् ।

**“येन त्वां खनते ब्रह्मा येन त्वां खनते भृगुः ।**
**येनेन्द्रो येन वरुणः खनते येन केशवः ॥**
**तेनाहं त्वां खनिष्यामि सिद्धिं कुरु महौषध ॥५३॥**
**विप्रः पठन्निमं मन्त्रं प्रयतात्मा महौषधीम् ।**
**खात्वा खादिरकीलेन यथावत्तां प्रयोजयेत् ॥५४॥**

“हे महाऔषधी ! तिमीलाई (जसरी) ब्रह्माले खने, शुक्राचार्यले खने, इन्द्रले खने, वरुण अनि नारायणले खने, म तिमीलाई त्यसैगरी खन्दैछु । मलाई सफलता देऊ ।” यो मन्त्र बढ्दै शुद्ध आत्मा लिएर द्विजले खयर आदिको किलाको सहायताले ओखती खन्नू र विधिपूर्वक त्यसको प्रयोग गर्नू ।

**वीर्यं प्रकाश्य निजमोषधयः किलोचुरन्योन्यमुर्व्यपि दिवो भुवमाव्रजन्त्यः ।**
**जीवं मुमूर्षमपि यं हि वयं महिम्ना स्वेन स्तुवीमहि स जात्वपि नैव नश्येत् ॥५५॥**

स्वर्गबाट पृथ्वीमा आउँदा ओखतीहरूले एकआपसमा आफ्नो क्षमता र  सफलताका बारेमा छलफल गर्दै “हामी हरेक मरणासन्न रोगी व्यक्तिलाई बचाउन सक्षम हुनेछौं” भनेका थिए ।

**प्रत्यायिताः प्रमुदिता मुदितेनराज्ञा सोमेन साकमिदमोषधयः समूचुः ।**
**यस्मै द्विजो दिशति भेषजमाशु राजन् ! तं पालयाम इति च श्रुतिराह साक्षात् ॥५६॥**

औषधीहरु पृथ्वीमा आउँदा आफ्ना प्रसन्न भएका राजा सोम (चन्द्रमा) सँग “हे राजा ! जसका लागि भनेर द्विजले हामीलाई खनी जे निर्देशन दिन्छ, त्यो निर्देशनलाई हामी सधैं पालना गर्नेछौं । अर्थात् रोगीलाई बचाउनेछौं । यसरी (वा यसो गर्न)  हामी साक्षात् वेदबाट नै निर्देशित भएका छौं ।”

**आसामोशो लिखितपठितः स द्विजानां हि राजा**
**सिद्ध्यै याश्च द्विजमवृजिनं स्वाश्रयं कामयन्ते ।**
**तास्वेवान्यः प्रसरति मदाद्यस्तु जात्या च गत्या**
**हीनः शून्यो जगति कुपिताः पातयन्त्येनमेताः ॥५७॥**

द्विजका राजा (चन्द्रमा वा इन्द्र ?) ले आदेश दिएका औषधीहरू द्विज (ब्राह्मण वा असल वैद्य) कै आश्रयमा रही अन्य धेरै प्रकारका औषधीहरुलाई जन्माउँदछन् । अहङ्कारी तथा कुलिनता वा पहिचानको स्पष्ट ज्ञान एवं परिष्कृत साधन नहुने व्यक्तिले यी औषधीको प्रयोग गर्ने प्रयाश गर्दछ भने उ यी औषधीहरूको क्रोध (असर) बाट नष्ट हुन्छ ।

### अष्टाङ्ग आयुर्वेद

**द्रव्याभिधानगदनिश्चयकायसौख्यं शाल्यादिभूतविषग्रहबालवैद्यम् ।**
**विद्याद्रसायनवरं दृढदेहहेतुमायुःश्रुतेर्द्विवचतुरङ्गमिहाह शम्भुः ॥५८॥**

भगवान् शिवले द्रव्याभिधान (द्रव्य, ओखती, जडीबुटी आदि कुराको वर्णन भएको खण्ड), गदनिश्चय (रोग पहिचान खण्ड), कायसौख्य (रोग र उपचारको निर्णय भएको खण्ड), शाल्यादि ( चिकित्सा खण्ड), भूत (अदृश्य हानिकारक शक्तिका बारेमा वर्णन भएको खण्ड), विष (विषविकार खण्ड), बाल (बालकको चिकित्सा खण्ड) र रसायन (औषधीहरुको मिश्रण, कायाकल्प आदि बताइएको खण्ड) गरी  शरीरलाई बलियो र निरोगी बनाउने आठ वटा खण्ड (अष्टाङ्ग) का बारेमा बताउनु भएको छ ।

**अष्टाङ्गं शल्यशालाक्यकायभूतविषं तथा ।**
**बालो रसायनं वृष्यमिति कैश्चिदुदाहृतम् ॥५९॥**

केही विद्वानहरूले शल्य, शालाक्य, काय, भूत, विष, बाल, रसायन र वृष्य गरी आयुर्वेदका आठ-अङ्ग हुन्छन् भनी बताएका छन् ।

**अष्टाङ्गज्ञः सुवैद्यो हि कियद्धीनो यथाऽङ्गतः ।**
**अङ्गहीनः स विज्ञेयो न श्लाघ्यो राजमन्दिरे ॥६०॥**

आयुर्वेदका आठ वटै अङ्गका बारेमा ज्ञान हुने वैद्यलाई नै असल वैद्य भनिन्छ । यी आठ अङ्गमध्ये केही कम ज्ञान हुने वैद्य अपाङ्ग जस्तै हुन्छ र उ राजवैद्य हुन लायक हुँदैन ।

### पण्डितका संस्कृत पर्यायवाची नामहरू

प्राज्ञो विज्ञः पण्डितो दीर्घदर्शी धीरो धीमान् कोविदो लब्धवर्णः ।
दोषज्ञः सन्दूरदर्शी मनीषी मेधावी ज्ञः सूरिविज्ञौ विपश्चित् ॥६१॥
वैज्ञानिकः कृतमुखः सङ्ख्यावान् मतिमान् कृती ।
कुशाग्रीयमतिः कृष्टिः कुशलो विदुरो बुधः ॥६२॥
निष्णातः शिक्षितो दक्षः सुदीक्षः कृतधीः सुधीः ।
अभिज्ञो निपुणो विद्वान् कृतकर्मा विचक्षणः ॥६३॥
विदग्धश्चतुरश्चैव प्रौढो बोद्धा विशारदः ।
सुमेधाः सुमतिस्तीक्ष्णः प्रेक्षावान् विबुधो विदन् ॥६४॥

प्राज्ञ, विज्ञ, पण्डित, दीर्घदर्शी, धीर, धीमान्, कोविद, लब्धवर्ण, दोषज्ञ, दूरदर्शी, मनीषी, मेधावी, ज्ञ, सूरि, विज्ञ, विपश्चित्, वैज्ञानिक, कृतमुख, सङ्ख्यावान्, मतिमान्, कृती, कुशाग्रीयमति, कृष्टि, कुशल, विदुर, बुध, निष्णात, शिक्षित, दक्ष, सुदीक्ष, कृतधी, सुधी, अभिज्ञ, निपुण, विद्वान्, कृतकर्मा, विचक्षण, विदग्ध, चतुर, प्रौढ, बोद्धा, विशारद, सुमेधा, सुमति, तीक्ष्ण, प्रेक्षावान्, विबुध र विदन् : यी पण्डितका संस्कृत पर्यायवाची नामहरू हुन् ।



### बुद्धि

मनीषा धिषणा प्रज्ञा धारणा शेमुषी मतिः ।
धीर्बुद्धिः प्रतिपत् प्रेक्षा प्रतिपत्तिश्च चेतना ॥६५॥
संविज्ज्ञप्तिश्चोपलब्धिश्चिन्मेधा मननं मनः ।
भानं बोधश्च हृल्लेखः सङ्ख्या च प्रतिभा च सा ॥६६॥

मनीषा, धिषणा, प्रज्ञा, धारणा, शेमुषी, मति, धी, बुद्धि, प्रतिपत्, प्रेक्षा, प्रतिपत्ति, चेतना, संवित्, ज्ञप्ति, उपलब्धि, चित्, मेधा, मनन, मन, भान, बोध, हृल्लेख, सङ्ख्या र प्रतिभा : यी बुद्धिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रोगसँग सम्बन्धित केही शब्दहरू

आदानं रोगहेतुः स्यान्निदानं रोगलक्षणम् ।
चिकित्सा तत् प्रतीकारः आरोग्यं रुङ्निवर्तनम् ॥६७॥

रोगको कारणलाई आदान वा रोगहेतु, रोगको पहिचानलाई निदान वा रोगलक्षण, उपचारलाई चिकित्सा वा रोगप्रतिकार तथा निरोगी हुनुलाई आरोग्य वा रुङ्निवर्तन भनिन्छ ।

### केही पथ्य खानेकुरा

**मण्डः पेया विलेपी च यवागूः पथ्यभेदकाः ।**
**भक्तैर्विना द्रवी मण्डः पेया भक्तसमन्विता ॥**
**विलेपी बहुभक्ता स्याद्यवागूर्विरलद्रवा ॥६८॥**

पथ्यका मण्ड, पेया, विलेपी र यवागू गरी चार प्रकार हुन्छन् । भातबिनाको तरल पदार्थ (भातको माड) लाई मण्ड, भातसहितको तरल पेय (भातको खोले) लाई पेया, भातको मात्रा बढी हुने पेयलाई विलेपी र थोरै पानी अति कम हुने भतको पेयलाई यवागू भनिन्छ ।

### सूप

**विदलं माषमुद्गादि पक्वं सूपाभिधानकम् ॥६९॥**

दलिएका मास, मुगी आदिको पकाइएको रसलाई सूप भनिन्छ ।



### आहार आदिको परिभाषा

**पादाहारं पथ्यमाहुश्च वैद्या विद्यादर्धाहारमाहारसञ्ज्ञम् ।**
**पादोनं स्याद्भोजनं भोगमन्यद्विद्याच्छेषं वातदोषप्रसूत्यै ॥७०॥**

भोक लाग्दा पेटमा जति अट्दछ त्यसको एक चौथाई मात्र खानुलाई “पथ्य आहार”, आधा खानुलाई “आहार”, चार भागको एक भाग बाँकी रहने गरी खानुलाई “भोजन” र अलिकति पनि बाँकी नराखी खानुलाई “भोग” भनिन्छ । भोगले मानिसको शरीरमा वात(वायु)जन्य रोगहरू पैदा गर्दछ ।

### भोजनका संस्कृत पर्यायवाची नामहरू

**अन्नं जीवनमाहारः कूरं कशिपुरोदनम् ।**
**अन्धो भिस्साऽदनं भोज्यमन्नाद्यमशनं तथा ॥७१॥**

अन्न, जीवन, आहार, कूर, कशिपु, ओदन, अन्ध, भिस्सा, अदन, भोज्य, अन्नाद्य र अशन : यी भोजनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**खानपिनका प्रकार**

**भोज्यं पेयं तथा चोष्यं लेह्यं खाद्यञ्च चर्वणम् ।**
**निष्पेयं चैव भक्ष्यं स्यादन्नमष्टविधं स्मृतम् ॥७२॥**

भोज्य (नचपाइकन खाइने), पेय (पिइने), चोष्य (चुसिने), लेह्य (चाटिने), खाद्य, चर्वण (चपाएर खाइने), निष्पेय (घटघट पिइने) र भक्ष्य गरी आठ प्रकारका खानेपिउने कुराहरू हुन्छन् ।

**व्यञ्जनं सूपशाकादि मिष्टान्नं तेमनं स्मृतम् ।**
**उपदंशो विदंशः स्यात् सन्धानो रोचकश्च सः ॥७३॥**

सागपात आदिको परिकारलाई व्यञ्जन, सूप भनिन्छ । यसैगरी यसको मिठाई र तरकारी (तेमन) हुन्छ । अन्नमा रुचि बढाउने मूलाका चाना आदि (उपदंश), तिर्खा लगाउने खाना (विदंश), अचार आदि अमिलो बनाइएका कुरा र भोक जगाउने खाने कुरा (रोचक) पनि हुन्छन् ।

**खानुका पर्यायवाची नामहरू**

**जेमनमभ्यवहारः प्रत्यवसानञ्च भोजनं जग्धिः ।**

**बल्भनमशनं स्वदनं निघसाहारौ च निगरणं न्यादः ॥७४॥**

जेमन, अभ्यवहार, प्रत्यवसान, भोजन, जग्धि, बल्भन, अशन, स्वदन, निघस, आहार, निगरण र न्याद : यी भोजनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**खानपिनका संस्कृत पर्यायवाची नामहरू**

**जक्षणं भक्षणं लेहः स्वादनं रसनस्वदौ ।**
**चर्वणं पानपीती च धयनं चूषणं भिदाः ॥७५॥**

जक्षण, भक्षण, लेह, स्वादन, रसन, स्वद, चर्वण, पानपीती, धयन र चूषण : यी खानपिनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**छ थरी रस**

**मधुरो लवणस्तिक्तः कषायोऽम्लः कटुस्तथा ।**
**सन्तीति रसनीयत्वादन्नाद्ये षडमी रसाः ॥७६॥**

अन्न आदिमा गुलियो, नुनिलो, तीतो, टर्रो, अमिलो र पिरो गरी छ थरी रस हुन्छन् ।

**मधुरं लौल्यमित्याहुरिक्ष्वादौ च स लक्ष्यते ॥७७॥**

उखु आदिमा हुने गुलियो रसलाई मधुर वा गौल्य भनिन्छ ।

**लवणस्तु पटुः प्रोक्तः सैन्धवादौ स दृश्यते ॥७८॥**

सिँधेनुन आदिमा पाइने नुनिलो रसलाई लवण वा पटु भनिन्छ ।

**तिक्तश्च पिचुमन्दादौ व्यक्तमास्वाद्यते रसः ॥७९॥**

नीम आदिमा पाइने तीतो रसलाई तिक्त भनिन्छ ।

**कषायस्तुवरः प्रोक्तः स तु पूगीफलादिषु ॥८०॥**

सुपारी आदिमा पाइने टर्रो रसलाई कषाय वा तुवर भनिन्छ ।



**अम्लस्तु चिञ्चाजम्बीरमातुलुङ्गफलादिषु ॥८१॥**

अमिली, ज्यामिर, बिमिरो आदिमा पाइने अमिलो रसलाई अम्ल भनिन्छ ।

**कटुस्तु तीक्ष्णसञ्ज्ञः स्यान् मरीचादौ स चेक्ष्यते ॥८२॥**

मरीच आदिमा पाइने पिरो रसलाई कटु वा तीक्ष्ण भनिन्छ ।

**गुलियो रस**

**मधुरश्च रसश्चिनोति केशान् वपुषः स्थैर्यबलौजोवीर्यदायी ।**
**अतिसेवनतः प्रमेहशैत्यं जडतामान्द्यमुखान् करोति दोषान् ॥८३॥**

गुलियो रसले कपाल बढाउँदछ, शरीरलाई स्थिर राख्दछ तथा बल, ओज र वीर्य प्रदान गर्दछ । गुलियो धेरै खानाले प्रमेह रोग, शीतरोग, लाटोपन, पाचनशक्तिको नाश हुने रोग र मुखका रोग उत्पन्न हुन्छन् ।

## नुनिलो रस

**लवणो रुचिकृद्रसोऽग्निदायी पचनः स्वादुकरश्च सारकश्च ।**
**अतिसेवनतो जराञ्च पित्तं सितिमानञ्च ददाति कुष्ठकारी ॥८४॥**

नुनिलो रस रुचिप्रद, पाचनशक्ति बढाउने, खाएको कुरा पचाउने, स्वादिलो बनाउने र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ । यो धेरै खानाले बुढ्यौली चाँडै लेराउने, पित्तविकार गर्ने, शरीर सेतो पार्ने र कुष्ठरोग हुने सम्भावना हुन्छ ।

## तीतो रस

**तिक्तो जन्तून् हन्ति कुष्ठं ज्वरार्तिं कासं दाहं दीपनो रोचनश्च ।**
**मर्त्यैर्गाढं प्रत्यहं सेवितश्चेत्तीव्रं दत्ते राजयक्ष्माणमेषः ॥८५॥**

तीतो रसले पेटका कीरा, कुष्ठरोग, ज्वर, खोकी र डाह नाश गर्दछ । यो रस दीपनी र रोचनी हुन्छ । नित्य र नियमित तीतो खाएमा क्षयरोग हुन्छ ।



## टर्रो रस

**कषायनामा निरुणद्धि शोफं वर्णं तनोर्दीपनपाचनश्च ।**
**सत्त्वापहोऽसौ शिथिलत्वकारी निषेवितः पाण्डु करोति गात्रम् ॥८६॥**

टर्रो रसले शरीरमा हुने सुजन नाश गर्दछ र शरीरको वर्णमा निखार लेराउँदछ । यो दीपनी र पाचनी हुन्छ । धेरै टर्रो रस खानाले शरीरमा शिथिलता पैदा गर्ने र पाण्डुरोग निकाल्ने सम्भावना हुन्छ ।

## अमिलो रस

**अम्लाभिधः प्रीतिकरो रुचिप्रदः प्रपाचनोऽग्नेः पटुताञ्च यच्छति ।**
**भ्रान्तिञ्च कुष्ठं कफपाण्डुताञ्च काष्र्यञ्च कासं कुरुतेऽतिसेवितः ॥८७॥**

अमिलो रस आनन्ददायक, रुचिप्रद, पाचक र पाचकाग्निलाई सक्रिय बनाउने (भोक जगाउने) गुणको हुन्छ । नियमित रूपमा धेरै अमिलो खाएमा भ्रम, कुष्ठ, कफविकार, पाण्डु, कालोपन र खोकी लाग्दछ ।

## पिरो रस

**कटुः कफं कण्ठजदोषशोफमन्दानलश्वित्रगदान्निहन्ति ।**
**एषोऽपि दत्ते बहुसेवितश्चेत् क्षयावहो वीर्यबलक्षयं च ॥८८॥**

पिरो रसले कफविकार, घाँटीका रोग, सुजन, कमजोर पाचनशक्तिको रोग र सेतो कुष्ठ जस्ता रोग नाश गर्दछ । तर नियमित धेरै खाने गरे यो रसले क्षयरोग लगाउनुका साथै वीर्य र बल समेत नाश गर्दछ ।

## दुई थरी रस मिसाउँदाको गुण

**कटुः कषायश्च कफापहारिणौ माधुर्यतिक्तावपि पित्तनाशनौ ।**
**पट्वम्लसञ्ज्ञौ च रसौ मरुद्धरौ इत्थं द्विशोऽमी सकलामयापहाः ॥८९॥**
**अन्योऽन्यं मधुराम्लौ कटुतिक्तकौ च रसौ ।**
**कटुलवणौ च स्यातां मिश्ररसौ तिक्तलवणौ ॥९०॥**

पिरो र टर्रो रसको मिश्रणले कफविकार नाश गर्दछ । गुलियो र तीतो रसको सम्मिश्रणले पित्तविकार नाश गर्दछ । नुनिलो र अमिलो रसको मिश्रणले वातविकार नाश गर्दछ । यसरी दुई थरी रसको मिश्रणले सबै थरी निको हुने गर्दछ ।

**लवणमधुरौ विरुद्धावथ कटुमधुरौ च तिक्तमधुरौ च ।**
**साधारणः कषायः सर्वत्र समानतां धत्ते ॥९१॥**

नुनिलो र गुलियो, पिरो र गुलियो तथा तीतो र गुलियो रस एक आपसमा विरोधी हुन्छन् । टर्रो रस सबै रससँग समान व्यवहार गर्दछ ।

## समयको अन्तरालमा वा पचेपछिको रसको स्वाद

**सन्धत्ते मधुरोऽम्लतां च लवणो धत्ते यथावत्स्थितिं**
**तिक्ताख्यः कटुतां तथा मधुरतां धत्ते कषायाह्वयः ।**
**अम्लस्तिक्तरुचिं ददाति कटुको यात्यन्ततस्तिक्तता-**
**मित्येषां स्वविपाकतोऽपि कथिता षण्णां रसानां स्थितिः ॥९२॥**

लामो समयपछि अर्थात् पचेपछि गुलियो रस अमिलो, नुनिलो जस्ताको तस्तै, तीतो रस पिरो, टर्रो रस रस गुलियो, अमिलो रस तीतो र पिरो रस अत्यन्त तीतो हुन्छ । यसरी छ थरी रसको पचेपछिको स्वादका बारेमा बताइयो ।

### मिश्रणबाट बन्ने रसको सङ्ख्या

**मधुरोऽम्लः कटुस्तिक्तः पटुस्तुवर इत्यमी ।**
**क्रमादन्योऽन्यसङ्कीर्णा नानात्वं यान्ति षड्रसाः ॥९३॥**

गुलियो, अमिलो, पिरो, तीतो, नुनिलो र टर्रो यी छ रस क्रमैले अर्को रससँग मिसिएपछि बेग्लै अनेक थरी रस बन्दछन् ।

**आद्याद्यो मधुरादिश्चेदेकैकेनोत्तरेण युक् ।**
**द्विकभेदाः पञ्चदश पर्यायैः पञ्चभिस्तथा ॥९४॥**

गुलियो आदि दुई थरी रस क्रमशः एक पछि अर्को पाँच रसमा मिसाए पछि पन्ध्र थरी रस बन्दछन् । (१) गुलियो र अमिलो, (२) गुलियो र पिरो, (३) गुलियो र तीतो, (४) गुलियो र नुनिलो (५) गुलियो र टर्रो (६) अमिलो र पिरो (७) अमिलो र तीतो (८) अमिलो र नुनिलो (९) अमिलो र टर्रो (१०) पिरो र तीतो (११) पिरो र नुनिलो (१२) पिरो र टर्रो (१३) तीतो र नुनिलो (१४) तीतो र टर्रो तथा (१५) नुनिलो र टर्रो ।

**आद्यः सानन्तरः प्राग्वदुत्तरेण युतो यदा ।**
**चतुर्भिरपि पर्यायैराद्ये प्रोक्ता भिदा दश ॥९५॥**

यसैगरी एउटा रसमा अन्य दुई थरी रस मिसाउँदा तीन थरी रसको मिश्रणबाट दश थरी रस बन्दछन् । (१) गुलियोमा अमिलो र नुनिलो (२) गुलियोमा अमिलो र पिरो (३) गुलियोमा अमिलो र टर्रो (४) गुलियोमा अमिलो र तीतो । (१) गुलियोमा नुनिलो र पिरो (२) गुलियोमा नुनिलो र तीतो ( ३) गुलियोमा नुनिलो र टर्रो । (१) गुलियोमा पिरो र तीतो (२) गुलियोमा पिरो र टर्रो तथा (१) गुलियोमा तीतो र टर्रो ।

**एवं द्वितीये षड्भेदास्तृतीये च त्रयः स्मृताः ।**
**चतुर्थे चैक इत्येते त्रिकभेदास्तु विंशतिः ॥९६॥**

यसैगरी दोश्रो अर्थात् अमिलो रसमा अन्य दुई थरी रस मिसाउँदा तीन थरी रसको मिश्रणबाट छ थरी रस बन्दछन् । (१) अमिलोमा नुनिलो र पिरो (२) अमिलोमा नुनिलो र तीतो (३) अमिलोमा

नुनिलो र टर्रो । (१) अमिलोमा पिरो र तीतो (२) अमिलोमा पिरो र टर्रो । (१) अमिलोमा तीतो र टर्रो । यसैगरी रसमा अन्य दुई थरी रस मिसाउँदा तीन थरी रस बन्दछन् । (१) नुनिलोमा पिरो र तीतो (२) नुनिलोमा पिरो र टर्रो (३) नुनिलोमा तीतो र टर्रो । यसैगरी पिरोमा अन्य दुई रस मिसाउँदा एक थरी रस बन्दछ । (१) पिरोमा तीतो र टर्रो । यसरी तीन थरी रसको मिश्रणबाट बीस थरी रस बन्दछ ।

**आद्यौ सानन्तरौ त्रिः षडेकैकाग्रिमयोगतः ।**
**त्यक्ते द्वितीये चत्वारः स्वाग्रिमैकैकसंयुते ॥९७॥**
**आद्ये त्यक्ते तु पञ्च स्युः स्वाग्रिमैकैकसंयुते ।**
**चतुष्कभेदा इत्येते क्रमात् पञ्चदशेरिताः ॥९८॥**
**ततः पञ्चकभेदाः षडेकैकत्यागतः स्मृताः ।**
**एकः सर्वसमासेन व्यासे षडिति सप्त ते ॥९९॥**
**एवं त्रिषष्टिराख्याता रसभेदाः समासतः ।**
**तारतम्येष्वसङ्ख्यातास्तान्वेत्ति यदि शङ्करः ॥१००॥**

यसैगरी शुरुका दुई थरी रसमा पछिल्ला दुई थरी रसको मिश्रणबाट तीन, दुई एक गरी छ थरी तथा क्रमशः दोश्रो छाडी हुने चार थरी रसको मिश्रणबाट चार थरी नै रस बन्दछन् । (१) गुलियो र अमिलोमा नुनिलो र पिरो (२) गुलियो र अमिलोमा नुनिलो र तीतो (३) गुलियो र अमिलोमा नुनिलो र टर्रो । (१) गुलियो र अमिलोमा पिरो र तीतो (२) गुलियो र अमिलोमा पिरो र टर्रो । (१) गुलियो र अमिलोमा तीतो र टर्रो । (१) गुलियो र नुनिलोमा पिरो र टर्रो (२) गुलियो र नुनिलोमा पिरो र तीतो (३) गुलियो र नुनिलोमा तीतो र टर्रो (४) गुलियो र नुनिलोमा पिरो र अमिलो । (१) अमिलो र नुनिलोमा पिरो र तीतो (२) अमिलो र नुनिलोमा पिरो र टर्रो (३) अमिलो र नुनिलोमा तीतो र टर्रो । (१) अमिलो र पिरोमा तीतो र टर्रो । (१) नुनिलो र पिरोमा तीतो र टर्रो । यसरी चार थरी रसको मिश्रणबाट जम्मा पन्ध्र थरी रस बन्दछन् । यसैगरी पाँच थरी रसको मिश्रणबाट छ थरी तथा छ थरी रसको मिश्रणबाट एक थरी रस बन्दछ । (१) गुलियो, अमिलो र नुनिलोमा पिरो र तीतो (२) गुलियो, अमिलो र नुनिलोमा पिरो र टर्रो (३) गुलियो, अमिलो र नुनिलोमा तीतो र टर्रो । (१) गुलियो, अमिलो र पिरोमा तीतो र टर्रो । (१) गुलियो, नुनिलो र पिरोमा तीतो र टर्रो । (१) अमिलो, नुनिलो र पिरोमा तीतो र टर्रो । यसरी संक्षेपमा चौसठ्ठी (त्रिसठ्ठी भनिएको) रसका बारेमा बताइयो । अझ यसमा मिसाउँदै जाँदा अनेक थरी रस बन्दछन् । यसको सङ्ख्या बताउन भगवान् शङ्कर मात्र सक्नु हुन्छ ।



**पौष्टिक र वीर्यवर्धक**

**बृंहणं पुष्टिदं पोष्यमुत्कं पीनत्वदञ्च तत् ।**

**वीर्यवृद्धिकरं वृष्यं वाजीकरणबीजकृत् ॥१०१॥**

बृंहण, पुष्टिद, पोष्य, उत्क र पीनत्वद : यी पौष्टिकका संस्कृत पर्यायवाची नामहरू हुन् । वीर्यवृद्धिकर, वृष्य, वाजीकरण र बीजकृत् : यी वीर्यवर्धकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### तृप्ति र बहने द्रव्य

**आप्यायनं तर्पणञ्च प्रीणनं तोषणञ्च तत् ।**
**निःष्यन्दनमभिष्यन्दि नेत्रद्रावं सरञ्च तत् ॥१०२॥**

आप्यायन, तर्पण, प्रीणन र तोषण : यी तृप्तिका संस्कृत पर्यायवाची नामहरू हुन् । निष्यन्दन, अभिष्यन्दि, नेत्रद्राव र सर : यी बहने द्रव्यका नाम हुन् ।

### वर्गप्रशस्ति

**इति बहुविधरोगव्याधितोपक्रमोऽत्र**
**प्रकृतभिषगनुक्ताहारपथ्यप्रयोगम् ।**
**इममखिलमुदित्वा वर्गमुत्सर्गसिद्धान्**

**प्रवदतु स च विद्वानामयप्रत्ययास्तान् ॥१०३॥**

यस अध्यायमा धेरै थरी रोग र रोगीहरूका बारेमा उल्लेख गरिएको छ । साथै, अहिलेसम्म वर्णन नगरिएका दोष, आहार र पथ्यका बारेमा पनि चिकित्सकका लागि यहाँ वर्णन गरिएको छ । यस अध्यायबाट यी सबै कुरा जानेपछि एउटा दक्ष चिकित्सकले आफ्ना रोगीहरूलाई तिनका रोगका बारेमा ढुक्क भएर सल्लाह दिन सक्दछ ।

**येन व्याधिशतान्धकारपटलीनिष्कासनाभास्कर-**
**प्रायेणापि पुनस्तरां प्रविहिता हन्त द्विषां व्याधयः ।**
**तस्यायं कृतिवाचि विंशतितमः श्रीमन्नृसिंहेशितुः**
**शान्तिं नामकिरीटमण्डनमणौ वर्गो गदादिर्गतः ॥१०४॥**

समानार्थी शब्दहरू वर्णन गर्ने ग्रन्थहरूमध्येको रत्न समानको, सैयौं रोगहरूले गर्दा फैलिएको चरम अन्धकारलाई सूर्यले जसरी हटाउने तथा त्यही समयमा आफ्ना शत्रुहरूमा त्यस्तै रोगहरू फैलाउन सक्षम राजा नरहरीले लेखेको अभिधान चूडामणि नामक ग्रन्थको गदादि वर्ग वा शान्ति वर्ग नामक बीसौं अध्याय समाप्त भएको छ ।

इति श्रीमन्नरहरिपण्डितविरचिते निघण्टुराजापरनाम्नाभिधानचूडामणौ रोगप्रकरणं नाम विंशो वर्गः ॥२०॥

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु वा अभिधानचूडामणि अन्तर्गत रोगप्रकरण नामक बीसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।२०।

## सत्वादि वर्गः

### त्रिगुण र त्रिदोष

**सत्त्वं रजस्तमश्चेति पुंसामुक्तास्त्रयो गुणाः ।**
**तेषु क्रमादमी दोषाः कफपित्तानिलाः स्थिताः ॥१॥**

सत्व, रज र तम गरी मानव शरीरमा तीन गुण हुन्छन् । यिनले क्रमशः कफविकार, पित्तविकार र वातविकारको प्रतिनिधित्व गर्दछन् ।

**सत्त्वं श्लेष्मा रजः पित्तं तमश्चापि समीरणः ।**
**द्रव्यस्य मानमुद्रिक्तं पुंसि पुंस्यनुवर्तते ॥२॥**

सत्वलाई कफविकारले, रजलाई पित्तविकारले तथा तमलाई वातविकारले जेलिरहेको हुन्छ । शरीरको वनावट वा गुण अनुसार यसको स्थितिमा विभिन्नता हुने गर्दछ ।

**सत्त्वं मनोविकाशः स्यात् सत्त्वायत्ता तथा स्थितिः ॥३॥**



सत्व मनको सीमारहित विस्तार हो र यसमा नै यसको अस्तित्व निर्भर रहने गर्दछ ।

**रजो रूषणमुद्रेकः कालुष्यं मतिविभ्रमः ॥४॥**

रजोगुणले मनलाई विकृत पारी बुद्धिलाई अस्तव्यस्त र भ्रामक बनाउँदछ ।

**तमस्तिमिरमान्ध्यञ्च चित्तोन्मादश्च मूढता ।**
**हृदयावरणं ध्वान्तमन्धकारो विमोहनम् ॥५॥**

तमोगुणले अन्धकार वा जडत्वको प्रतिनिधित्व गर्दै मानिसमा भ्रम, पागलपन, मन्दबुद्धि, अन्तरदृष्टिमा कमी र निद्रालाई जन्म दिने गर्दछ ।

### वात

**वातो गन्धवहो वायुः पवमाना महाबलः ।**
**स्पर्शनो गन्धवाही च पवनो मरुदाशुगः ॥६॥**
**श्वसनो मातरिश्वा च नभस्वान्मारुतोऽनिलः ।**

**समीरणो जगत्प्राणः समीरश्च सदागतिः ॥७॥**
**जवनः पृषदश्वश्च तरस्वी च प्रभञ्जनः ।**
**प्रधावनोऽनवस्थानो धूननो मोटनः खगः ॥८॥**

वात, गन्धवह, वायु, पवमान, महाबल, स्पर्शन, गन्धवाही, पवन, मरुत्, आशुग, श्वसन, मातरिश्वा, नभस्वान्, मारुत, अनिल, समीरण, जगत्प्राण, समीर, सदागति, जवन, पृषदश्व, तरस्वी, प्रभञ्जन, प्रधावन, अनवस्थान, धूनन, मोटन र खग : यी वायुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**अन्येऽपि वायवो देहे नाडीचक्रप्रवाहकाः**
**मया वितत्य नोक्तास्ते ग्रन्थगौरवभीरुणा ॥९॥**

शरीरमा रही नसा आदिको चक्रलाई सञ्चालन गर्न अन्य वायुहरू पनि हुन्छन् । ग्रन्थ मोटो हुने डरले मैले त्यसका बारेमा यहाँ उल्लेख गरिन ।

### गुण अनुसारको प्रकृति

**सत्त्वादिगुणसम्भिन्नदोषत्रयवशात्मना ।**
**आभ्यन्तरश्च बाह्यश्च स्वरूपं सन्निरुच्यते ॥१०॥**

सत्व आदि त्रिगुण भन्दा फरक कफ आदि त्रिदोषले मन आदिलाई नियन्त्रण गर्दै मानिसका शरीरमा भित्री र बाहिरी अनेक रूप बनाउने वा देखाउने गर्दछ ।

### सात्विक प्रकृति

**सत्त्वाढ्यः शुचिरास्तिकः स्थिरमतिः पुष्टाङ्गको धार्मिकः**
**कान्तः सोऽपि बहुप्रजः सुमधुरक्षीरादिभोज्यप्रियः ।**
**दाता पात्रगुणादृतो द्रुततमं वाग्मी कृपालुः समो**
**गौरः श्यामतनुर्घनाम्बुतुहिनस्वप्नेक्षणः श्लेष्मलः ॥११॥**

सात्विक प्रकृतिको मानिस शुद्धतामा रहने, आस्तिक, स्थिर बुद्धि भएको, शरीरका अङ्ग पुष्ट भएको, धार्मिक, असल, धेरै सन्तान हुने, नम्र, दूध आदि खान रुचाउने, दानी, अरुका गुणको कदर गर्ने, छिटोछरितो, विद्वान् वा मौकामा सत्य कुरा बोल्न सक्ने, दयालु, सबैलाई समान ठान्ने, गोरो वा कालो शरीरको, सपनामा बादल-पानी वा तुषारो वा हिउँ बढी देख्ने र कफप्रकृतिको हुन्छ ।

### राजस प्रकृति

**राजस्यो लवणाम्लतिक्तकटुकप्रायोष्णभोजी पटुः**
**प्रौढो नातिकृशोऽप्यकालपलितो क्रोधप्रपञ्चान्वितः ।**
**द्राघीयान्महिलाशयो वितरिता सोपाधिकं याचितो**
**गौराङ्गः कनकादिदीप्तिललितः स्वप्नी च पित्तात्मकः ॥१२॥**

राजस प्रकृतिको मानिस नुनिलो, अमिलो, तीतो, पिरो र प्रायः तातो खान मन पराउँदछ । यस्ता मानिस चलाख, गम्भीर वा अभिमानी, कम दुब्लो, चाँडै कपाल फुल्ने, रिसाहा, झगडालु, ठुलो शरीरका, महिलाको जस्तो स्वभाव हुने, क्षमताभन्दा बढी दान दिन खोज्ने, गोरो, सुनको जस्तै चम्किलो शरीरका, राम्रो वा कामुक सपना बढी देख्ने र पित्तप्रकृतिका हुन्छन् ।

### तामस प्रकृति

**निद्रालुर्बहुभाषकः सुकुटिलः क्रूराशयो नास्तिकः**
**प्रायः पर्युषितातिशीतविरसाहारैकनिष्ठोऽलसः ।**
**कार्येष्वत्यभिमानवानसमये दाता यथेच्छं कृशः**
**स्वप्ने व्योमगतिः सितेतरतनुर्वातूलकस्तामसः ॥१३॥**

धेरै सुत्न चाहने, बोलीरहनु पर्ने, धूर्त, निष्ठुर, नास्तिक, प्रायः बासी र अति चिसो कुरा खान रुचाउने, रुखो, खानमा बढी ध्यान दिने, अल्छी, काममा अति घमण्डी, इच्छाअनुसार दान दिने, दुब्ला, सपनामा आकाशमा उडिरहने, कालो शरीरका र वातप्रकृतिका मानिसलाई तामसप्रकृतिका मानिस भनिन्छ ।

### मिश्रित प्रकृति

**सत्त्वादयो गुणा यत्र मिश्रिताः सन्ति भूयसा ।**
**मिश्रप्रकृतिकः सोऽयं विज्ञातव्यो मनीषिभिः ॥१४॥**
**सत्त्वादिरजसा मिश्रे श्रेष्ठं सत्त्वादितामसे ।**
**मध्यमं रजसा मिश्रे कनीयो गुणमिश्रणम् ॥१५॥**

सत्व आदि तीन गुण मिसिएका व्यक्तिलाई विद्वानहरूले मिश्र प्रकृतिको मानिस भनी जान्नू । मिश्र प्रकृतिमा पनि सत्व र रज मिसिएकोलाई उत्तम, सत्व र तामस मिसिएकोलाई मध्यम तथा रज र तम मिसिएकोलाई अधम मानिएको छ ।

### त्रिगुणले मानिसमा पार्ने प्रभाव

**सत्त्वं चित्तविकाशमाशु तनुते दत्ते प्रबोधं परं**
**कालुष्यं कुरुते रजस्तु मनसः प्रस्तौति चाव्याकृतिम् ।**
**आन्ध्यं हन्त हृदि प्रयच्छति तिरोधत्ते स्वतत्त्वे धियं**
**सन्धत्ते जडतां च सन्ततमुपाधत्ते प्रमीलां तमः ॥१६॥**

सत्व गुणले तत्काल बुद्धिको विकास गरी मानिसलाई अत्यन्त जागरुक बनाउँदछ । रजोगुणले मनलाई रुखो पार्दै अन्याय गर्नतिर लगाउँदछ । तमोगुणले मनलाई अन्धकारमा राखी बुद्धिलाई सही मार्गबाट विचलित पार्दछ । यो गुणले मानिसलाई धेरै सुस्त बनाई बढ्दो अज्ञानताको अन्धकारमा डुबाउँदछ ।

### वातका गुण

**वातः स्वैरः स्याल्लघुः शीतरूक्षः सूक्ष्मस्पर्शज्ञानकस्तोदकारी ।**
**माधुर्यान्ने सोऽभ्रकालेऽपराह्णे प्रत्यूषेऽन्ने याति जीर्णे च कोपम् ॥१७॥**

वात स्वेच्छाचारी, हलुका, चिसो, रुखो, सूक्ष्म, स्पर्शको ज्ञान दिने, दुःखदायक, अन्नमा मिठास लेराउने तथा वर्षकालमा, अपराह्नमा, बिहान सबेरै र खाएको कुरा पचेपछि विकृत हुने गर्दछ ।

### पित्तका गुण

**पित्तञ्च तिक्ताम्लरसञ्च सारकं चोष्णं द्रवं तीक्ष्णमिदं मधौ बहु ।**
**वर्षान्तकाले भृशमर्धरात्रे मध्यन्दिनेऽन्नस्य जरे च कुप्यति ॥१८॥**

पित्त तीतो, अमिलो, मलमूत्रलाई तलतिर सार्ने, गर्मी गर्ने, तरल र तिक्खर हुन्छ । यो वसन्तमा, वर्षा ऋतुको अन्तमा, आधा रातमा, मध्य दिनमा र अन्न पच्ने क्रममा विकृत हुने गर्दछ ।

### कफका गुण

**श्लेष्मा गुरुः श्लक्ष्णमृदुः स्थिरस्तथा स्निग्धः पटुः शीतजडश्च गौल्यवान् ।**
**शीते वसन्ते च भृशं निशामुखे पूर्वेऽह्नि भुक्तोपरि च प्रकुप्यति ॥१९॥**

कफ पचाउन कठिन वा भारी, नरम, कोमल, स्थिर, चिल्लो, तिव्र, चिसो, जड र गुलियो हुन्छ । यो चिसो समयमा, वसन्त ऋतुमा, साँझमा, बिहान र खाना खाएपछि विकृत हुने गर्दछ ।

## त्रिदोषका भेद

**दोषत्रयस्य ये भेदा वृद्धिक्षयविकल्पतः ।**
**तानतः सम्प्रवक्ष्यामि सङ्क्षेपार्थं समञ्जसम् ॥२०॥**

त्रिदोष बढ्दा र कम हुँदाका अनेक भेदहरु म सङ्क्षेपमा बताउँदछु ।

**एकैकवृद्धौ स्युर्भेदास्त्रयो ये वृद्धिदास्त्रयः ।**
**तत्राप्येकतरा ह्यर्थे षडेवं द्वादशैव ते ॥२१॥**

एउटा दोष वृद्धि हुँदा वा घट्दा अरु दोष बढ्ने र घट्ने गरी दोषका बाह्र अवस्था हुन्छन् । सातौँ (वा तेह्रौँ) अवस्थामा भने त्रिदोष नै एकनासले बढ्ने गर्दछन् ।

जस्तै :

| धेरै बढ्ने दोष | थोरै बढ्ने दोष |
|---|---|
| वात+पित्त | कफ |
| वात+कफ | पित्त |
| पित्त+कफ | वात |
| वात | पित्त+कफ |
| पित्त | वात+कफ |
| कफ | वात+पित्त |



**वृद्धान्योऽन्यव्यत्याभ्यां षट् त्रिवृद्ध्या तु सप्तमः ।**
**वृद्धोऽन्योऽन्यो वृद्धतरः परो वृद्धतमस्त्विवति ॥२२॥**
**तारतम्येन षड्भेदास्त एवं पञ्चविंशतिः ।**
**एवं क्षयेऽपि तावन्तस्ततः पञ्चाशदीरिताः ॥२३॥**

यसैगरी बढ्ने, ठिक्क बढ्ने र धेरै बढ्ने आधारमा पनि दोषका बाह्र अवस्था हुन्छन् । सातौँ (वा तेह्रौँ) अवस्थामा भने त्रिदोष नै एकनासले बढ्ने गर्दछन् । यसरी दोषवृद्धिका पच्चीस अवस्था हुन्छन् र क्षय हुँदा पनि पच्चीस तरिकाले नै क्षय हुने गर्दछ । यसरी दोष वृद्धि र क्षयका जम्मा पचास अवस्था हुने गर्दछन् ।

| धेरै बढ्ने | ठिक्क बढ्ने | बढ्ने |
|---|---|---|
| वात | पित्त | कफ |
| वात | कफ | पित्त |
| पित्त | कफ | वात |
| पित्त | वात | कफ |
| कफ | वात | पित्त |
| कफ | पित्त | वात |

**वृद्धोऽन्योऽन्यः समोऽन्यश्च क्षीणस्त्विवति पुनश्च षट् ।**
**द्विवृद्धचैकक्षयादुक्तव्यत्ययाच्च पुनश्च षट् ॥२४॥**

अर्को एउटा दोष बढ्दा अर्को दोष यथास्थितिमा रहने र घट्ने तथा दुई थरी दोष बढ्दा वा घट्दा अरु दोष बढ्ने वा घट्ने गरी दोषका छ, छ थरी अवस्था हुन्छन् । जस्तै :

| विकृत हुने दोष | सामान्य अवस्थामा रहने दोष | घट्ने दोष |
|---|---|---|
| वात | पित्त | कफ |
| पित्त | वात | कफ |
| कफ | पित्त | वात |
| कफ | वात | पित्त |
| वात | कफ | पित्त |
| पित्त | कफ | वात |



| घट्ने दोष | बढ्ने दोष |
|---|---|
| वात | पित्त+कफ |
| कफ | वात+कफ |
| पित्त | पित्त+वात |
| वात+पित्त | कफ |
| वात+कफ | पित्त |
| पित्त+कफ | वात |

**एते द्वादशतः सर्वे द्विषष्टिः समुदाहृताः ।**
**त्रिषष्टिस्त्वन्तिमो भेदस्त्रयाणां प्रकृतौ स्थितिः ॥२५॥**

यी बाह्र अवस्था समेत गरी दोष बढघटका बैसठ्ठी अवस्था हुन्छन् । अर्को अन्तिम त्रिसठ्ठीयौं अवस्थामा भने त्रिदोष सामान्य अवस्थामा रहन्छन् ।

**एवं दोषत्रयस्यैतान् भेदान्विज्ञाय तत्त्वतः ।**
**ततो भिषक् प्रयुञ्जीत तदवस्थोचिताः क्रियाः ॥२६॥**

यसरी त्रिदोषका अवस्थाका बारेमा राम्ररी ज्ञान हासिल गरी वैद्यले उपचारका क्रममा त्रिदोषको अवस्था अनुसारका विधि अपनाउनु पर्दछ ।

### समयका पर्याय र किसिम

**कालस्तु वेला समयोऽप्यनेहा दिष्टश्चलश्चावसरोऽस्थिरश्च ।**
**सोऽप्येष भूतः किल वर्तमानस्तथा भविष्यन्निति च त्रिधोक्तः ॥२७॥**

काल, वेला, समय, अनेहा, दिष्ट, चल, अवसर र अस्थिर : यी समयका संस्कृत पर्यायवाची नामहरू हुन् । समय भूत, वर्तमान र भविष्य गरी तीन किसिमको हुन्छ ।

### भूत, वर्तमान र भविष्यकालका पर्यायवाची नामहरू

**भूते वृत्तमतीतञ्च ह्यस्तनं निसृतं गतम् ।**

**वर्तमाने भवच्चाद्यतनं स्यादधुनातनम् ॥२८॥**
**अनागतं भविष्ये स्यात् श्वस्तनञ्च प्रगेतनम् ।**
**वत्स्यर्यद्वर्तिष्यमाणं च स्यादागामि च भावि च ॥२९॥**

भूत, वृत्त, अतीत, ह्यस्तन, निसृत र गत : यी बितेको समयका; वर्तमान, भवत्, अद्यतन र अधुनातन : यी चलिरहेको समयका तथा अनागत, भविष्य, श्वस्तन, प्रगेतन, वत्स्यर्त्, वर्तिष्यमाण, आगामि र भावि : यी आउने समयका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### साधारण, विशेषण र चौथाई र थोरैका पर्याय

**साधारणन्तु सामान्यं तत् सर्वत्रानुवर्तते ।**
**विशेषणं विशेषश्च सकृत्स्थाने च वर्तते ॥**
**तुर्यं पादं चतुर्थांशमीषत्किञ्चित्तथोच्यते ॥३०॥**

साधारणलाई सामान्य भनिन्छ र सबैतिर यही शब्द प्रयोग गरिन्छ । विशेषणलाई विशेष पनि भनिन्छ र विशेष अवस्था वा स्थानमा प्रयोग गरिन्छ । एक चौथाईलाई तुर्य, पाद वा चतुर्थांश भनिन्छ । थोरैलाई इषत् वा किञ्चित् भनिन्छ ।

## शङ्कर स्तुति

**भूषापीयुषांशुस्वच्छोद्योतप्रस्यन्दामन्दस्वच्छन्दापूराम्भःस्वर्गङ्गासङ्गोन्मीलनमौलिम् ।**
**मेरुश्रीकैलासक्रीडासङ्घाटीशोभनाम्भःश्लाघाजङ्घालश्रीगौरीगूढाङ्गं वन्दे शम्भुम् ॥३१॥**

मेरु पर्वतको शिखर अर्थात् कैलाश पर्वतमा बस्ने, काखमा सुन्दर र मनपर्ने गहना लगाएकी पार्वतीलाई राखेका, दुवै (शिव र पार्वती) आकाशबाट झर्ने स्वर्गकी गङ्गाको आनन्ददायी र चिसो पानीले भिजिरहेका, कपालबाट तपतप पानी चुहाइरहेका, ती टप्केका पानीमा चन्द्रमाको किरण चम्किँदा उहाँको सौन्दर्यलाई उजागर गरिरहेको देखिने यस्ता भगवान् शिवलाई म (नरहरि) नमस्कार गर्दछु ।

## पल, क्षण, नाडी, प्रहर र दिनरात

**शब्दोच्चारे सकलगुरुके षष्टिवर्णप्रमाणे**
**मानं काले पलमिति दश स्यात् क्षणस्तानि तैस्तु ।**
**षड्भिर्नाडी प्रहर इति ताः सप्त सार्धास्तथाऽहो-**
**रात्रो ज्ञेयः सुमतिभिरसावष्टभिस्तैः प्रदिष्टः ॥३२॥**

शब्द उच्चारण गर्दा साठी वटा लामा स्वर-वर्ण उच्चारण गर्न लाग्ने समयलाई समयमानमा पल भनिन्छ । यस्तो दश पलको एक क्षण हुन्छ । छ क्षणको एक नाडी तथा साडे सात नाडीको एक प्रहर हुन्छ । यस्तो आठ प्रहरको एक दिनरात हुन्छ ।

## पक्ष, महिना र संवत्सर

**पक्षः स्यात् पञ्चदशभिरहोरात्रैरुभाविमौ ।**
**मासौ द्वादशभिर्मासैः संवत्सर उदाहृतः ॥३३॥**

पन्ध्र अहोरात्रको एक पक्ष, दुई पक्षको एक महिना र बाह्र महिनाको एक संवत्सर हुन्छ ।

## ऋतु र अयन

**द्विशश्चैत्रादिभिर्मासैर्विज्ञेया ऋतवश्च षट् ॥३४॥**
**त्रिभिस्त्रिभिः क्रमादेतैः स्याताञ्च विषुवायने ॥३५॥**

चैत्र महिनादेखि शुरु भई दुई दुई महिनाका छ वटा ऋतुहरू हुन्छन् । तीन तीन वटा ऋतुको क्रमशः उत्तरायण र दक्षिणायन गरी दुई अयन हुन्छ ।

## विघटिका, घटिका र मुहूर्त

**पलं विघटिका प्रोक्ता नाडी तास्तु त्रिविंशतिः ।**
**नाडी तु घटिका प्रोक्ता तद्द्वयञ्च मुहूर्तकम् ॥३६॥**

पललाई विघटिका (करिब चौबीस सेकेण्ड) पनि भनिन्छ । नाडीलाई घटिका (साठी पल) पनि भनिन्छ । दुई घटिकाको एक मुहूर्त हुन्छ ।

## प्रहरका संस्कृत पर्यायवाची नामहरू

**यामः प्रहर इत्युक्तो दिनभागो दिनांशकः ॥३७॥**

याम, प्रहर, दिनभाग र दिनांशक : यी प्रहरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## दिनरातका संस्कृत पर्यायवाची नामहरू



**अहोरात्रदिवारात्राहर्दिवाऽहर्निशानि च ॥३८॥**

अहोरात्र, दिवारात्र, अहर्दिवा र अहर्निशा : यी दिनरातका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## दिनका संस्कृत पर्यायवाची नामहरू

**घस्रो दिनोऽपि दिवसो वासरो भास्वरो दिवा ॥३९॥**

घस्र, दिन, दिवस, वासर, भास्वर र दिवा : यी दिनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## प्राह्ण, अपराह्ण, मध्याह्न र सायाह्न

**प्राह्णापराह्णमध्याह्नसायाह्नाः स्युस्तदंशकाः ॥४०॥**

बाह्र बज्नुभन्दा अघिको समयलाई प्राह्ण, बाह्र बजे पछिको समयलाई अपराह्ण, बाह्र बजेको समयलाई मध्याह्न र साँझको समयलाई सायाह्न भनिन्छ । यी दिनका भागहरू हुन् ।

बिहानका संस्कृत पर्यायवाची नामहरू

प्रातर्दिनादिः प्रत्यूषो निशान्तः प्रत्युषोऽप्युषः ।
व्युष्टश्चाहर्मुखं कल्यं प्रगे प्राह्णं प्रभातकम् ॥४०॥

प्रात, दिनादि, प्रत्यूष, निशान्त, प्रत्युष, अप्युष, व्युष्ट, अहर्मुख, कल्य, प्रग, प्राह्ण र प्रभात : यी बिहानका संस्कृत पर्यायवाची नामहरू हुन् ।

घामका पर्याय

आतपस्तु दिनज्योतिः सूर्यालोको दिनप्रभा ।
रविप्रकाशः प्रद्योतस्तमोऽरिस्तपनद्युतिः ॥४१॥

आतप, दिनज्योति, सूर्यालोक, दिनप्रभा, रविप्रकाश, प्रद्योत, तमोऽरि र तपनद्युति : यी घामका संस्कृत पर्यायवाची नामहरू हुन् ।

प्रकाशका पर्याय



रोचिर्दीप्तिर्द्युतिः शोचिस्त्विडोजो भा रुचिः प्रभा ।
विभा लोकप्रकाशश्च तेज ओजायितश्च रुक् ॥४३॥

रोचि, दीप्ति, द्युति, शोचि, त्विड्, ओज, भा, रुचि, प्रभा, विभा, लोकप्रकाश, तेज, ओजायित र रुक् : यी प्रकाशका संस्कृत पर्यायवाची नामहरू हुन् ।

साँझका पर्याय

सायं सन्ध्या दिनान्तश्च निशादिर्दिवसात्ययः ।
सायं पितृप्रसूश्चाथ प्रदोषः स्यान्निशामुखम् ॥४४॥

सायंसन्ध्या, दिनान्त, निशादि, दिवसात्यय, साय, पितृप्रसू, प्रदोष र निशामुख : यी साँझका संस्कृत पर्यायवाची नामहरू हुन् ।

छायाका पर्याय

छाया विभानुगा श्यामा तेजोभीरुरनातपः ।

**अभीतिरातपाभावो भावालीना च सा स्मृता ॥४५॥**

छाया, विभानुगा, श्यामा, तेजोभीरु, अनातप, अभीति, आतपाभाव र भावालीना : यी छायाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रातका पर्याय

**शर्वरी क्षणदा रात्रिर्निशा श्यामा तमस्विनी ।**
**तमी त्रियामा शयनी क्षपा यामवती तमा ॥४६॥**
**नक्तं निशीथिनी दोषा ताराभूषा विभावरी ।**
**ज्योतिष्मती तारकिणी काली साऽपि कलापिनी ॥४७॥**

शर्वरी, क्षणदा, रात्रि, निशा, श्यामा, तमस्विनी, तमी, त्रियामा, शयनी, क्षपा, यामवती, तमा, नक्त, निशीथिनी, दोषा, ताराभूषा, विभावरी, ज्योतिष्मती, तारकिणी, काली र कलापिनी : यी रातका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### रातका किसिम



**सा ज्यौत्स्नी चन्द्रिकायुक्ता तमिस्रा तु तमोऽन्विता ॥४८॥**

चन्द्रमाको किरण सहितको रातलाई ज्यौत्स्नी र अँध्यारो रातलाई तमिस्रा भनिन्छ ।

### रातका भाग

**अर्धरात्रो निशीथे स्यान्मध्यरात्रश्च स स्मृतः ॥४९॥**

आधा रातलाई अर्धरात्र, निशीथ वा मध्यरात्र भनिन्छ ।

### चन्द्रकिरणका पर्याय

**ज्योत्स्ना तु चन्द्रिका चान्द्री कौमुदी कामवल्लभा ।**
**चन्द्रातपश्चन्द्रकान्ता शीताऽमृततरङ्गिणी ॥५०॥**

ज्योत्स्ना, चन्द्रिका, चान्द्री, कौमुदी, कामवल्लभा, चन्द्रातप, चन्द्रकान्ता, शीता र अमृततरङ्गिणी : यी चन्द्रमाको किरणका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कान्तिका पर्याय

**कान्तिस्तु सुषमा शोभा छविश्छाया विभा शुभा ।**
**श्रीर्लक्ष्म्यर्कप्रियाऽभिख्या भानं भातिरुमा रमा ॥५१॥**

कान्ति, सुषमा, शोभा, छवि, छाया, विभा, शुभा, श्री, लक्ष्मी, अर्कप्रिया, अभिख्या, भान, भातिरुमा र रमा : यी कान्तिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### अन्धकारका पर्याय

**तमस्तमिस्रं तिमिरं ध्वान्तं सन्तमसं तमः ।**
**अन्धकारश्च भूच्छायं तच्चान्धतमसं घनम् ॥५२॥**

तमस्, तमिस्र, तिमिर, ध्वान्त, सन्तमस, तम, अन्धकार, भूच्छाय, अन्धतमस र घन : यी अन्धकारका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### घाम, छाया, चन्द्रकिरण र अन्धकारका गुण



**आतपः कटुको रूक्षश्छाया मधुरशीतला ।**
**त्रिदोषशमनी ज्योत्स्ना सर्वव्याधिकरं तमः ॥५३॥**

घाम पिरो र रुखो हुन्छ । छाया गुलियो र शीतल हुन्छ । चन्द्रकिरणले त्रिदोष नाश गर्दछ र अन्धकारले सबै किसिमका रोगहरू जन्माउँदछ ।

### परेवा तिथिका पर्याय

**पक्षादिः प्रथमाऽऽद्या च पक्षतिः प्रतिपच्च सा ॥५४॥**

पक्षादि, प्रथमा, आद्या, पक्षति र प्रतिपदा : यी परेवा तिथिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पूर्णिमा र औंसी

**पक्षान्तोऽर्केन्दुविश्लेषः पर्व पञ्चदशी तथा ।**
**द्वितीयं तु भवेत् पर्व चन्द्रार्कात्यन्तसङ्गमः ॥५५॥**

पक्षको अन्तमा जब सूर्य र चन्द्रमा छुट्टाछुट्टै (एउटै रेखामा हुँदैनन् वा टाढा हुन्छन्) त्यसलाई

पूर्णिमा (पञ्चदशी) र अर्को पक्षको अन्तमा सूर्य र चन्द्रमा अति नजिक हुँदाको अवस्थालाई औंसी (पर्व) भनिन्छ ।

### तिथि र पक्ष

**प्रतिपदमारभ्यैताः क्रमात् द्वितीयादिकाश्च पञ्चदश ।**
**पक्षे तिथयो ज्ञेयाः पक्षश्च सितोऽसितो द्विविधः ॥५६॥**

परेवादेखि शुरु गरेर द्वितीया आदि हुँदै पन्ध्र वटा तिथि हुन्छन् । पक्ष पनि शुक्ल र कृष्ण गरी दुई वटा हुन्छन् ।

### शुक्लपक्षका पर्याय

**सितस्त्वापूर्यमाणः स्यात् शुक्लश्च विशदः शुदि ॥५७॥**

सित, आपूर्यमाण, शुक्ल, विशद र शुदि : यी शुक्लपक्षका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कृष्णपक्षका पर्याय



**असितो मलिनः कृष्णो बहुलो वदि च स्मृतः ॥५८॥**

असित, मलिन, कृष्ण, बहुल र वदि : यी कृष्णपक्षका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मण्डल

**दिवसैर्यत्र तत्रापि वसुसागरसम्मितैः ।**
**भिषक्क्रियोपयोगाय मण्डलं भिषजां मतम् ॥५९॥**

आयुर्वेदमा विशेष उपचारको लागि वर्षदिन भित्र कुनै पनि बेला अठहत्तर (वसुसागर) दिनको एक समय-चक्र बनाइन्छ जसलाई वैद्यहरू मण्डल भन्दछन् । (डा.साङ्ग्धरले वसुसागरको अर्थ अठचालीस लगाएका छन्) ।

### पूर्णिमाका पर्याय र प्रकार

**पूर्णिमा पौर्णमासी च ज्यौत्स्नी चेन्दुमती सिता ।**

**सा पूर्वाऽनुमांतज्ञैया राका स्यादुत्तरा च सा ॥६०॥**

पूर्णिमा, पौर्णमासी, ज्यौत्स्नी, इन्दुमती र सिता : यी पूर्णिमाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसमा पहिलो थरी पूर्णिमालाई अनुमति र दोश्रो थरीलाई राका भनिन्छ ।

**औंसीका पर्याय र प्रकार**

**दर्शस्तु स्यादमावास्याऽमावस्याऽर्केन्दुसङ्गमः ।**
**सा पूर्वा तु सिनीवाली द्वितीया तु कुहूर्मता ॥६१॥**

दर्श, अमावास्या, अमावस्या र अर्केन्दुसङ्गम : यी औंसीका संस्कृत पर्यायवाची नामहरू हुन् । पहिलो थरी औंसीलाई सिनीवाली र दोश्रो थरीलाई कुहू भनिन्छ ।

**पक्ष**

**मासार्धस्तु भवेत् पक्षः स पञ्चदशरात्रकः ॥६२॥**

महिनाको आधालाई पक्ष भनिन्छ र यो पन्ध्र रातको हुन्छ ।



**महिना**

**द्विपक्षस्तु भवेन्मासस्चैत्राद्या द्वादशाश्च ते ॥६३॥**

दुई पक्षको एक महिना हुन्छ । यी चैत आदि नाम गरेका बाह्र वटा हुन्छन् ।

**चैतका पर्याय**

**चैत्रस्तु चैत्रिकश्चैत्री मधुः कालादिकश्च सः ॥६४॥**

चैत्र, चैत्रिक, चैत्री, मधु र कालादिक : यी चैतका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**वैशाख र जेठका पर्याय**

**वैशाखो माधवो राधो ज्यैष्ठः शुक्रस्तपस्तथा ॥६५॥**

वैशाख, माधव र राधा : यी वैशाखका संस्कृत पर्यायवाची नामहरू हुन् । ज्येष्ठ, शुक्र र तप : यी जेठका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### असार र साउनका पर्याय

**आषाढः शुचिरुक्तः श्रावणिकः श्रावणो नभाश्चापि ॥६६॥**

आषाढ र शुचि असारका तथा श्रावणिक, श्रावण र नभ साउन महिनाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### भदौका पर्याय

**भाद्रो भाद्रपदोऽपि प्रौष्ठपदः स्यान्नभो नभस्यश्च ॥६७॥**

भाद्र, भाद्रपद, प्रौष्ठपद, नभ र नभस्य : यी भदौका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### असोजका पर्याय



**इषस्त्वाश्वयुजश्च स्यादाश्विनः शारदश्च सः ॥६८॥**

इषस्, आश्वयुज, आश्विन र शारद : यी असोजका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### कात्तिकका पर्याय

**कार्तिको बाहुलोऽपि स्यादूर्जः कार्तिकिकश्च सः ॥६९॥**

कार्तिक, बाहुल, ऊर्ज र कार्तिकिक : यी कात्तिकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मंसिरका पर्याय

**मार्गः सहा मार्गशीर्ष आग्रहायणिकोऽपि सः ॥७०॥**

मार्ग, सहा, मार्गशीर्ष र आग्रहायणिक : यी मंसिरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### पुसका पर्याय

**पौषस्तु पौषिकस्तैषः सहस्यो हैमनोऽपि च ॥७१॥**

पौष, पौषिक, तैष, सहस्य र हैमन : यी पुसका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### माघ र फागुनका पर्याय

**माघस्तपाः तपस्यस्तु फाल्गुनो वत्सरान्तकः ॥७२॥**

माघ र तपस् माघका तथा फाल्गुन र वत्सरान्तक फागुनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ऋतु

**चैत्रादिमासौ द्वौ द्वौ स्युर्नाम्ना षड्तवः क्रमात् ॥७३॥**

चैत आदि दुई-दुई महिनाका छ वटा ऋतुहरू हुन्छन् ।

**भवेद्वसन्तो मधुमाधवाभ्यां स्यातां तथा शुक्रशुची निदाघः ।**
**नभोनभस्यौ जलदागमः स्यादिषोर्जवाभ्यां शरदं वदन्ति ॥७४॥**



चैत र वैशाखलाई वसन्त, जेठ र असारलाई निदाघ वा ग्रीष्म, साउन र भदौलाई वर्षा तथा असोज र कात्तिकलाई शरद ऋतु भनिन्छ ।

**हेमन्तकालस्तु सहःसहस्यौ तपस्तपस्यौ शिशिरः क्रमेण ।**
**मासद्विकेनेति वसन्तकाद्या धीमद्भिरुक्ता ऋतवः षडेते ॥७५॥**

यसैगरी मंसिर र पुसलाई हेमन्त तथा माघ र फागुनलाई शिशिर ऋतु हुन्छन् । दुई दुई महिनाका क्रमैले वसन्त आदि गरिएका छ वटा ऋतु हुन्छन् भनी विद्वानहरूले बताएका छन् ।

### वसन्तका पर्याय

**ऋतुराजो वसन्तः स्यात् सुरभिर्माधवो मधुः ।**
**पुष्पमासः पिकानन्दः कान्तः कामरसश्च सः ॥७६॥**

ऋतुराज, वसन्त, सुरभि, माधव, मधु, पुष्पमास, पिकानन्द, कान्त र कामरस : यी वसन्त ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### ग्रीष्मका पर्याय

**निदाघस्तूष्मको घर्मो ग्रीष्म ऊष्मागमस्तपः ।**
**तापनश्चोष्णकालः स्यादुष्णश्चोष्णागमश्च सः ॥७७॥**

निदाघ, ऊष्मक, घर्म, ग्रीष्म, ऊष्मागम, तप, तापन, उष्णकाल, उष्ण र उष्णागम : यी ग्रीष्म ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### वर्षा ऋतुका पर्याय

**वर्षाः प्रावृड्वर्षकालो घर्मान्तो जलदागमः ।**
**मयूरोल्लासकः कान्तश्चातकाह्लादनोऽपि सः ॥७८॥**

वर्षा, प्रावृट्, वर्षकाल, घर्मान्त, जलदागम, मयूरोल्लासक, कान्त र चातकाह्लादन : यी वर्षा ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### शरदका पर्याय



**शरद्वर्षावसायः स्यान्मेघान्तः प्रावृडत्ययः ॥७९॥**

शरद्, वर्षावसाय, मेघान्त र प्रावृडत्यय : यी शरद ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### हेमन्तका पर्याय

**ऊष्मापहस्तु हेमन्तः शरदन्तो हिमागमः ॥८०॥**

ऊष्मापह, हेमन्त, शरदन्त र हिमागम : यी हेमन्त ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### शिशिरका पर्याय

**शिशिरः कम्पनः शीतो हिमकूटश्च कोटनः ।**
**इत्येतन्नामतः प्रोक्तमृतुषट्कं यथाक्रमम् ॥८१॥**

शिशिर, कम्पन, शीत, हिमकूट र कोटन : यी शिशिर ऋतुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसरी छ वटा ऋतुका पर्यायवाची नामका बारेमा क्रमैले बताइयो ।

## हरेक दिनका छ ऋतुको प्रतिनिधित्व गर्ने समय

**इह सुरभिनिदाघमेघकालाः शरद्धिमशिशिरहायनाः क्रमेण ।**
**प्रतिदिनमृतवः स्युरूर्ध्वमर्कोदयसमयाद्दशकेन नाडिकानाम् ॥८२॥**

यी छ वटै ऋतुका लक्षण हरेक दिनमा पनि हुन्छ । सूर्य उदयपछिका प्रत्येक दश दश घडीले वसन्त, ग्रीष्म आदि बेग्लाबेग्लै छ वटा ऋतुको प्रतिनिधित्व गर्दछन् ।

## उत्तरायण

**मकरक्रान्तिमारभ्य भानोः स्यादुत्तरायणम् ॥८३॥**

माघेसङ्क्रान्तिका दिनदेखि सूर्य उत्तरायणमा प्रवेश गर्दछन् ।

## दक्षिणायन

**कर्कटक्रमणादूर्ध्वं दक्षिणायनमुच्यते ॥८४॥**



साउने सङ्क्रान्तिदेखिको सूर्यको गतिलाई दक्षिणायन भनिन्छ ।

## विषुव

**यदा तुलायां मेषे च सूर्यसङ्क्रमणं क्रमात् ।**
**तदा विषुवती स्यातां विषुवे अपि ते स्मृते ॥८५॥**

सूर्य तुला र मेष राशिमा प्रवेश गर्ने समयलाई विषुवती वा विषुव भनिन्छ ।

## संवत्सर र यसका पर्याय

**कालज्ञैः षष्टिराख्याता वत्सराः प्रभवादयः ।**
**शरत् संवत्सरोऽब्दश्च हायनो वत्सरः समाः ॥८६॥**

समयका विज्ञहरूले प्रभव आदि गरिएका साठी वटा वर्षका बारेमा बताएका छन् । शरत्, संवत्सर, अब्द, हायन, वत्सर र सम : यी वर्षका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**ऋतु अनुसार बहने वायुका गुण**

**वसन्ते दक्षिणो वातो भवेद्वर्षासु पश्चिमः ।**
**उत्तरः शारदे काले पूर्वो हैमन्तशैशिरे ॥८७॥**
**पूर्वस्तु मधुरो वातः स्निग्धः कटुरसान्वितः ।**
**गुरुर्विदाहशमनो वातदः पित्तनाशनः ॥८८॥**

वसन्त (र ग्रीष्म) ऋतुमा दक्षिणी, वर्षा ऋतुमा पश्चिमी, शरद् ऋतुमा उत्तरी तथा हेमन्त र शिशिर ऋतुमा पूर्वी हावा चल्दछ । पूर्वी हावा गुलियो, चिल्लो, पिरो, पचाउन कठिन, डाह शान्त पार्ने, वातविकार गर्ने र पित्तविकार नाश गर्ने गुणको हुन्छ ।

**दक्षिणः षड्रसो वायुश्चक्षुष्यो बलवर्धनः ।**
**रक्तपित्तप्रशमनः सौख्यकान्तिबलप्रदः ॥८९॥**

दक्षिणी वायु  छ रसले युक्त, आँखाका लागि हितकर, बलवर्धक, रक्तपित्तलाई शान्त पार्ने तथा सुख, चमक र बल प्रदायक हुन्छ ।

**पश्चिमो मारुतस्तीक्ष्णः कफमेदोविशोषणः ।**
**सद्यः प्राणापहो दुष्टः शोषकारी शरीरिणाम् ॥९०॥**



पश्चिमी वायु तिक्खर, कफ र बोसो सोस्ने, प्राणवायुलाई खिच्ने र शरीर सुकाउने गुणको हुन्छ ।

**उत्तरः पवनः स्निग्धो मृदुर्मधुर एव च ।**
**सकषायरसः शीतो दोषाणाञ्च प्रकोपणः ॥९१॥**

उत्तरी वायु चिल्लो, गुलियो, स्वादिलो, टर्रो, शीतवीर्यको र त्रिदोषलाई विकृत पार्ने गुणको हुन्छ ।

**दिशा**

**कृत्वैकमवधिं तस्मादिदं पूर्वञ्च पश्चिमम् ।**
**इति देशौ निर्दिश्येते यया सा दिगिति स्मृता ॥९२॥**

कुनै निश्चित स्थानमा बसी यतातिर पूर्व र यतातिर पश्चिम भनी देखाइने अवस्थालाई दिशा वा दिक् भनिन्छ ।

**दिगाशा च हरित्काष्ठा ककुप्सा च निदेशिनि ।**
**सा च देशविभागेन दशधा परिकल्प्यते ॥९३॥**

दिक्, आशा, हरित्, काष्ठा, ककुप्सा र निदेशिनि : यी दिशाका संस्कृत पर्यायवाची नामहरू हुन् । स्थान अनुसार दश थरी दिशाको कल्पना गरिएको छ ।

**ज्योतींषि तपनादीनि ज्योतिश्चक्रभ्रमीक्रमात् ।**
**यतो नित्यमुदीयन्ते सा पूर्वाख्या दिगुच्यते ॥९४॥**

जताबाट अन्तरिक्षमा घुमिरहेका चन्द्र, सूर्य आदि तेजपिण्ड दिनहुँ उदाउँदछन् त्यो दिशालाई पूर्व भनिन्छ ।

**पूर्वा च दक्षिणा चैव पश्चिमा चोत्तराऽपि च ।**
**प्रादक्षिण्यक्रमेणैताश्चतस्रः स्युर्महादिशः ॥९५॥**

भ्रमण गतिका आधारमा पूर्व, दक्षिण, पश्चिम र उत्तर गरी चार महादिशा हुन्छन् ।

**पूर्वा प्राची पुरो मघोन्यैन्द्री माघवती च सा ।**
**शामनी दक्षिणाऽवाची यामी वैवस्वती च सा ॥९६॥**

पूर्वा, प्राची, पुरस्, मघोनी, ऐन्द्री र माघवती : यी पूर्व दिशाका तथा शामनी, दक्षिणा, अवाची, यामी र वैवस्वती : यी दक्षिण दिशाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पश्चिमा तु प्रतीची स्याद्वारुणी प्रत्यगित्यपि ।**
**उत्तरा दिक् तु कौबेरी दैवी सा स्यादुदीच्यपि ॥९७॥**

पश्चिम, प्रतीची, वारुणी र प्रत्यग् : यी पश्चिम दिशाका तथा कौबेरी, दैवी र उदीची : यी उत्तर दिशाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**दिशोर्द्वयोर्द्वयोर्मध्ये यो भागः कोणसञ्ज्ञकः ।**
**विदिशस्ताश्चतस्रश्च प्रोक्ता उपदिशस्तथा ॥९८॥**

दुई दिशाको बीचमा हुने भागलाई कुनु वा कोण भनिन्छ । यसैलाई उपदिशा वा विदिशा भनिन्छ । उपदिशा चार वटा हुन्छन् ।

**आग्नेयी स्यात्प्राच्यवाच्योस्तु मध्ये नैरृत्याख्या स्यादवाचीप्रतीच्योः ।**
**वायव्याऽपि स्यादुदीचीप्रतीच्योरैशानी स्यादन्तरा प्राच्युदीच्योः ॥९९॥**

पूर्व र दक्षिण दिशाको बीचको कोणलाई आग्नेय, दक्षिण र पश्चिम दिशाको बीचको कोणलाई नैरृत्य, पश्चिम र उत्तर दिशाको बीचको कोणलाई वायव्य तथा उत्तर र पूर्व दिशाको बीचको कोणलाई ईशान भनिन्छ ।

**उपरिष्टाद्दिगूर्ध्वं स्यादधस्तादधरा स्मृता ।**
**अन्तस्त्वभ्यन्तरं प्रोक्तमन्तरं चान्तरालकम् ॥१००॥**

माथितिरको दिशालाई ऊर्ध्व र तलतिरको दिशालाई अध भनिन्छ । ऊर्ध्व र अधको बीचको भागलाई अभ्यन्तर, अन्तर वा अन्तरालक भनिन्छ ।

## नापो

**स्पष्टस्त्वष्टयवैर्देशो मितो ज्ञेयोऽङ्गुलाह्वयः ।**
**स्याच्चतुर्विंशकैस्तैस्तु हस्तो हस्तचतुष्टयम् ॥१०१॥**
**दण्डो दण्डैर्द्विसाहस्रैः क्रोशस्तेषां चतुष्टयम् ।**
**योजनं स्यादिति ह्येष देशस्योक्तो मितिक्रमः ॥१०२॥**

आठ यवको एक अङ्गुल, चौबीस अङ्गुलको एक हात, चार हातको एक दण्ड, दुई हजार दण्डको एक क्रोश र चार क्रोशको एक योजन हुन्छ ।

## धान आदिको नापो

**इति प्रस्तावतो वैद्यस्योपयुक्ततया मया ।**
**परिमाणं तथोन्मानमिति द्वितयमीर्यते ॥१०३॥**
**धान्ये सा निष्टिका पुंसो यत्तु मुष्टिचतुष्टयम् ।**
**तद्द्वयेनाष्टिका ज्ञेया कुडवस्तद्द्वेन तु ॥१०४॥**
**प्रस्थस्तु तच्चतुष्केण तच्चतुष्केण चाढकी ।**
**ताश्चतस्रो भवेद्द्रोणः खारी तेषान्तु विंशतिः ॥१०५॥**

वैद्यको उपयोगका लागि अब दोश्रो परिमाण (नाप) का बारेमा बताइन्छ । चार मुठी अनाजको एक निष्टिका हुन्छ । यस्तो दुई निष्टिकाको एक अष्टिका (मानु) हुन्छ ।  दुई अष्टिकाको एक कुडव (

कुरुवा) हुन्छ । चार कुडवको एक प्रस्थ (पाथी) हुन्छ । चार प्रस्थको एक आढकी हुन्छ । चार आढकीको एक द्रोण र बीस द्रोणको एक खारी हुन्छ ।

### औषधीको नापो

**गोधूमद्वितयोन्मितिस्तु कथिता गुञ्जा तया सार्धया**
**वल्लो वल्लचतुष्टयेन भिषजां माषो मतस्तच्चतुः ।**
**निष्को निष्कयुगं तु सार्धमुदितः कर्षः पलं तच्चतु-**
**स्तद्वत्तच्छतकेन चाथ च तुला भारस्तुलाविंशतिः ॥१०६॥**

दुई गोधूम (गहुँ) को एक गुञ्जा, साढे एक गुञ्जाको एक वल्ल, चार वल्लको एक माष, चार माषको एक निष्क, साढे चार निष्कको एक कर्ष, चार कर्षको एक पल, सय पलको एक तुला र बीस तुलाको एक भार हुन्छ ।

### वर्गप्रशस्ति

**इत्थं सत्त्वरजस्तमस्त्रिगुणिकानुक्रान्तदोषत्रय-**
**प्रक्रान्तोचितकालदेशकलनाभिख्यानसुख्यापितम् ।**
**वर्गं स्वर्गसभासु भास्वरभिषग्वर्यातिवीर्यामय-**
**ध्वंसाश्चर्यकरीं प्रयाति मतिमानेनं पठित्वा प्रथाम् ॥१०७॥**

यस वर्गमा सत्व, रज र तम गरी त्रिगुण; त्रिदोष र समयका विविध प्रकारका बारेमा विस्तारपूर्वक वर्णन गरिएको छ । यो अध्यायको ज्ञान हुने चिकित्सक कुनै पनि विद्वत्-सभामा शब्दज्ञानका दृष्टिले उत्कृष्ट मात्र हुँदैन, ओखतीको पहिचानमा मार्गदर्शक भई अत्यन्त कडा रोगहरू पनि जरै समेत उखल्न सक्ने बन्दछ ।

**सङ्ग्रामोत्सङ्गरिङ्गत्तुरगखुरपटोद्धूतधात्रीरजोभिः**
**संरम्भं याति सान्द्रे तमसि किल शमं यद्द्विषां याति सत्त्वम् ।**
**तस्यैषोऽप्येकविंशः श्रयति खलु कृतौ नामनिर्माणचूडा-**
**रत्नापीडे प्रशान्तिं नरहरिकृतिनः कोऽपि सत्त्वादिवर्गः ॥१०८॥**

जसका शत्रुको युद्ध गर्ने परम इच्छा र अस्तित्व दौडिरहेका घोडाहरुका कारण उडेको धूलाले बनाएको डरलाग्दो अन्धकारमा हरायो, त्यस्ता राजा नरहरिले स्पष्ट शब्दावलीको प्रयोग गरी लेखेको सत्वादि वर्ग नामक यो एक्काईसौं अध्याय निरपेक्ष ढङ्गले शान्त भई समाप्त भएको छ ।

## इति श्रीनरहरिपण्डितविरचिते राजनिघण्टौ सत्त्वादिरेकविंशो वर्गः ॥२१॥

श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत सत्त्वादि वर्ग नामक एक्काइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।२१।

# मिश्रकादि वर्गः

## विमिश्रकाख्य वर्ग

**यान्यौषधानि मिलितानि परस्परेण सञ्ज्ञान्तरैर्व्यवहृतानि च योगकृद्भिः ।
तेषां स्वरूपकथनाय विमिश्रकाख्यं वर्गं महागुणमुदारमुदीरयामः ॥१॥**

विभिन्न प्रकारका ओखतीहरू एकै ठाउँमा मिसाएर त्यसलाई फरक नाममा प्रयोग गर्ने गरिन्छ । यस्ता धेरै प्रभावकारी ओखतीहरुको विशेषता र मिश्रणका बारेमा यो मिश्रकादि वर्गमा वर्णन गरिएको छ ।

### त्रिकटु

**पिप्पली मरिचं शुण्ठी त्रयमेतद्विमिश्रितम् ।
त्रिकटु त्र्यूषणं त्र्यूषं कटुत्रयकटुत्रिकम् ॥२॥**

पिप्ला, मरिच र सुठोको मिश्रणलाई त्रिकटु, त्र्यूषण, त्र्यूष, कटुत्रय वा कटुत्रिक भनिन्छ ।



### त्रिफला

**हरीतकी चामलकं विभीतकमिति त्रयम् ।
त्रिफला त्रिफली चैव फलत्रयफलत्रिके ॥३॥**

हर्रो, अमला र बर्रो : यी तीनको मिश्रणलाई त्रिफला, त्रिफली, फलत्रय वा फलत्रिक भनिन्छ ।

### मधुरत्रिफला

**द्राक्षाकाश्मर्यखर्जूरीफलानि मिलितानि तु ।
मधुरत्रिफला ज्ञेया मधुरादिफलत्रयम् ॥४॥**

अङ्गुर, खमारी र छोकडाको मिश्रणलाई मधुरत्रिफला वा मदुरादिफलत्रय भनिन्छ ।

### सुगन्धित्रिफला

**जातीफलं पूगफलं लवङ्गकलिकाफलम् ।**

**सुगन्धित्रिफला प्रोक्ता सुरभित्रिफला च सा ।।५।।**

जाइफल, सुपारी र ल्वाङको मिश्रणलाई सुगन्धित्रिफला वा सुरभित्रिफला भनिन्छ ।

**वरार्धक र आद्यपुष्पक**

**चन्दनं कुङ्कुमं वारि त्रयमेतद्वरार्धकम् ।**
**त्रिभागकुङ्कुमोपेतं तदुक्तं चाद्यपुष्पकम् ।।६।।**

चन्दन, केसर र सुगन्धवालको मिश्रणलाई वरार्धक भनिन्छ । तीन गुना बढी केसर मिसाइएको यो मिश्रणलाई आद्यपुष्पक भनिन्छ ।

**लवणत्रय**

**सैन्धवञ्च विडश्चैव रुचकं चेति मिश्रितम् ।**
**लवणत्रयमाख्यातं तच्च त्रिलवणं तथा ।।७।।**

सिँधे, विड् र सौँचर नुनको मिश्रणलाई लवणत्रय वा त्रिलवण भनिन्छ ।



**क्षारत्रय**

**सर्जिक्षारं यवक्षारं टङ्कणक्षारमेव च ।**
**क्षारत्रयं समाख्यातं त्रिक्षारञ्च प्रकीर्तितम् ।।८।।**

सज्जिखार, जवाखर र सुहागाको मिश्रणलाई क्षारत्रय वा त्रिक्षार भनिन्छ ।

**समत्रितय**

**हरीतकी नागरञ्च गुडश्चेति त्रयं समम् ।**
**समत्रितयमित्युक्तं त्रिसमञ्च समत्रयम् ।।९।।**

हर्रो, अदुवा र खुँदोको बराबर मात्राको मिश्रणलाई  समत्रितय, त्रिसम वा समत्रय भनिन्छ ।

**मधुरत्रय**

**सितामाक्षिकसर्पींषि मिलितानि यदा तदा ।**

**मधुरत्रयमाख्यातं त्रिमधु स्यान्मधुत्रयम् ॥१०॥**

चिनी, मह र घिउको मिश्रणलाई मधुरत्रय, त्रिमधु वा मधुत्रय भनिन्छ ।

### त्रिशर्करा

**गुडोत्पन्ना हिमोत्पन्ना मधुजातेति मिश्रितम् ।**
**त्रिशर्करा च त्रिसिता सितात्रयसितात्रिके ॥११॥**

खुँदोको, कपुरको र महको सखरको मिश्रणलाई त्रिशर्करा, त्रिसिता, सितात्रय वा सितात्रिक पनि भनिन्छ ।

### अञ्जनत्रितय

**कालाञ्जनसमायुक्ते पुष्पाञ्जनरसाञ्जने ।**
**अञ्जनत्रितयं प्राहुस्त्र्यञ्जनं चाञ्जनत्रयम् ॥१२॥**

कालाञ्जन (सुर्मा विशेष), पुष्पाञ्जन र रसाञ्जनको मिश्रणलाई अञ्जनत्रितय, त्र्यञ्जन वा अञ्जनत्रय भनिन्छ ।



### त्रिदोष

**वातः पित्तं कफश्चेति त्रयमेकत्र संयुतम् ।**
**दोषत्रयं त्रिदोषं स्याद्दोषत्रितयमित्यपि ॥१३॥**

वात, पित्त र कफ एकै ठाउँमा एकत्रित हुँदा वा तीन वटैका विकारले उत्पन्न हुने रोगलाई दोषय, त्रिदोष वा दोषत्रितय भनिन्छ ।

### समदोषत्रय

**वातपित्तकफा यत्र समतां यान्ति नित्यशः**
**त्रिदोषसममित्येतत् समदोषत्रयं तथा ॥१४॥**

जब वात, पित्त र कफ निरन्तर बराबर रहने गर्दछन् तब त्यसलाई त्रिदोषसम वा समदोषत्रय भनिन्छ ।

### त्रिकण्टक

**बृहती चाग्निदमनी दुःस्पर्शा चेति तु त्रयम् ।**
**कण्टकारीत्रयं प्रोक्तं त्रिकण्टं कण्टकत्रयम् ॥१५॥**

बिहीँ, सिस्नु र दुःस्पर्शाको मिश्रणलाई कण्टकारीत्रय, त्रिकण्ट वा कण्टकत्रय भनिन्छ ।

### त्रिकार्षिक

**नागरातिविषा मुस्ता त्रयमेतत् त्रिकार्षिकम् ॥१६॥**

सुठो, अतीस र मोथेको मिश्रणलाई त्रिकार्षिक भनिन्छ ।

### चातुर्भद्रक

**गुडूच्या मिलितं तच्च चातुर्भद्रकमुच्यते ॥१७॥**

त्रिकार्षिकमा गुर्जो मिसाएपछि त्यसलाई चातुर्भद्रक भनिन्छ ।



### त्रिजातक, चातुर्जातक

**त्वगेलापत्रकैस्तुल्यैस्त्रिसुगन्धि त्रिजातकम् ।**
**नागकेशरसंयुक्तं चातुर्जातकमुच्यते ॥१८॥**

दालचिनी, अलैँची र तेजपातको बराबर मात्राको मिश्रणलाई त्रिसुगन्धी वा त्रिजातक भनिन्छ । यसमा नागकेसर मिसाएपछि चातुर्जातक हुन्छ ।

### कटुचातुर्जात

**एलात्वक्पत्रकैस्तुल्यैर्मरिचेन समन्वितैः ।**
**कटुपूर्वमिदं चान्यच्चातुर्जातकमुच्यते ॥१९॥**

अलैँची, दालचिनी, तेजपात र मरिचको मिश्रणलाई कटुचतुर्जातक भनिन्छ ।

### देवकर्दम

**श्रीखण्डागुरुकर्पूरकाश्मीरैस्तु समांशकैः ।**
**मृगाङ्कमुकुटार्होऽयं मिलितैर्देवकर्दमः ॥२०॥**

श्रीखण्ड, अगरु, कपुर र केसरको बराबर मात्राको मिश्रणलाई देवकर्दम भनिन्छ । यो भगवान् शिवको मुकुटमा सजिएको हुन्छ ।

### यक्षधूप

**कर्पूरागुरुकस्तूरी कक्कोलैर्यक्षधूपकः ।**
**एकीकृतमिदं सर्वं यक्षकर्दम इष्यते ॥२१॥**

कपुर, अगर, कस्तुरी र फलकपुरको मिश्रणलाई यक्षधूप भनिन्छ ।

### यक्षकर्दम

**कुङ्कुमागुरुकुरङ्गनाभिकाचन्द्रचन्दनसमांशसम्भृतम् ।**
**त्र्यक्षपूजनपरैकगोचरं यक्षकर्दममिमं प्रचक्षते ॥२२॥**

केसर, अगर, कस्तुरी, कपुर र चन्दनको मिश्रणलाई शिव पूजाका लागि उपयुक्त यक्षकर्दम पनि भनिन्छ ।

### पञ्चसुगन्धिक

**कर्पूरकक्कोललवङ्गपुष्पगुवाकजातीफल पञ्चकेन ।**
**समांशभागेन च योजितेन मनोहरं पञ्चसुगन्धिकं स्यात् ॥२३॥**

कपुर, फलकपुर, ल्वाङ, सुपारी र जाइफल : यी पाँच कुराको बराबर मात्राको मिश्रणलाई मनोहर पञ्चसुगन्धिक भनिन्छ ।

### पञ्चकोल

**पिप्पलीपिप्पलीमूल चव्यचित्रकनागरैः ।**
**सर्वैरेकत्र मिलितैः पञ्चकोलकमुच्यते ॥२४॥**

पिप्ला, पिप्लाको जरा, चाभो, चितु र सुठोको मिश्रणलाई पञ्चकोलक भनिन्छ ।

### पञ्चवेतस

**न्यग्रोधोदुम्बराश्वत्थप्लक्षवेतसवल्कलैः ।**
**सर्वैरेकत्र मिलितैः पञ्चवेतसमुच्यते ॥२५॥**

बर, डुम्री, पीपल, पाखरी र वेतका बोक्रा बटुलेर एकै ठाउँमा गरिएको मिश्रणलाई पञ्चवेतस पनि भनिन्छ ।

### लघुपञ्चमूल

**शालिपर्णी पृश्निपर्णी बृहती कण्टकारिका ।**
**तथा गोक्षुरकश्चेति लघ्विदं पञ्चमूलकम् ॥२६॥**

साकिनु, चाल्ने सिस्नु (पृश्निपर्णी), ठूलो बिही, कण्टकारी र ओदानेकाँडोको मिश्रणलाई लघुपञ्चमूल भनिन्छ ।



### महापञ्चमूल

**बिल्वोऽग्निमन्थः श्योनाकः काश्मर्यः पाटला तथा ।**
**सर्वैस्तु मिलितैरेतैः स्यान्महापञ्चमूलकम् ॥२७॥**

बेल, गिनेरी, टटलो, खमारी र पाडरीको जराको मिसावटलाई महापञ्चमूल भनिन्छ ।

### दशमूल

**पञ्चमूलकयोरेतद्द्वयश्च मिलितं यदा ।**
**तदा भिषग्भिराख्यातं गुणाढ्यं दशमूलकम् ॥२८॥**

उपरोक्त लघुपञ्चमूल र महापञ्चमूलको मिश्रणलाई वैद्यहरूले श्रेष्ठ गुणको दशमूल भनी बताएका छन् ।

**मध्यमपञ्चमूल**

**बलापुनर्नवैरण्डसूर्यपर्णीद्वयेन च ।**
**एकत्र योजितेनैतन्मध्यमं पञ्चमूलकम् ॥२९॥**

बलु, पुनर्नवा, अँडिर, बनमुगी र बनमासको मिश्रणलाई मध्यम पञ्चमूल भन्दछन् ।

**पञ्चामृतयोग**

**गुडूची गोक्षुरश्चैव मूषली मुण्डिका तथा ।**
**शतावरीति पञ्चानां योगः पञ्चामृताभिधः ॥३०॥**

गुर्जो, ओदानेकाँडो, मुसली, सानो गोरखमुण्डी र कुरिलोको मिश्रणलाई पञ्चामृत भनिन्छ ।

**दिव्यपञ्चामृत**

**गव्यमाज्यं दधि क्षीरं माक्षिकं शर्करान्वितम् ।**
**एकत्र मिलितं ज्ञेयं दिव्यं पञ्चामृतं परम् ॥३१॥**



गाईको घिउ, गाईको दही, गाईको दूध, मह र चिनीको मिश्रणलाई दिव्य पञ्चामृत भनिन्छ ।

**पञ्चगव्य**

**गोमूत्रं गोमयं क्षीरं गव्यमाज्यं दधीति च ।**
**युक्तमेतद्यथायोगं पञ्चगव्यमुदाहृतम् ॥३२॥**

गहुँत, गाईको गोबर, गाईको दूध, गाईको घिउ र गाईको दहीको मिश्रणलाई पञ्चगव्य भनिन्छ ।

**पञ्चनिम्ब**

**निम्बस्य पत्रत्वक्पुष्प फलमूलैर्विमिश्रितैः ।**
**पञ्चनिम्बं समाख्यातं तत् तिक्तं निम्बपञ्चकम् ॥३३॥**

नीमको पात, बोक्रा, फूल, फल र जराको तीतो मिश्रणलाई पञ्चनिम्ब वा निम्बपञ्चक भनिन्छ ।

## अम्लपञ्चफल

**कोलदाडिमवृक्षाम्लं चुल्लकी साम्लवेतसा ।**
**फलं पञ्चाम्लमुद्दिष्टमम्लपञ्चफलं स्मृतम् ॥३४॥**

बयर, दाडिम, वृक्षाम्ल, चुल्लकी ? र अम्लवेतसका फलको मिश्रणलाई अम्लपञ्चफल वा अम्लपञ्चफल भनिन्छ ।

## फलाम्लपञ्चक

**जम्बीरनारङ्गसहाम्लवेतसैः सतिन्तिडीकैश्च सबीजपूरकैः ।**
**समांशभागेन तु मेलितैरिदं द्वितीयमुक्तञ्च फलाम्लपञ्चकम् ॥३५॥**

ज्यामिर, सुन्तला, अम्लवेतस, अमिली र बिमिरोको बराबर भागको मिश्रणलाई दोश्रो प्रकारको फलाम्लपञ्चक भनिन्छ ।

## अम्लवर्ग



**चाङ्गेरी लिकुचाम्लवेतसयुतं जम्बीरकं पूरकं**
**नारङ्गं फलषाडवस्त्विति तु पिण्डाम्लञ्च बीजाम्लकम् ।**
**अम्बष्ठासहितं द्विरेतदुदितं पञ्चाम्लकं तद्द्वयं**
**विज्ञेयं करमर्दनिम्बुकयुतं स्यादम्लवर्गाह्वयम् ॥३६॥**

चरिअमिलो (चाङ्गेरी), बडहर (लिकुच), अम्लवेतस, ज्यामिर र बिमिरो तथा सुन्तला, अनार (फलषाडव), कैथ (पिण्डाम्ल), वृक्षाम्ल वा कोकम र अम्बष्ठा : यी दुई पञ्चाम्ल अनि पनेरु (करमर्द) र कागती समेतलाई अम्लवर्ग भनिन्छ ।

## पञ्चसिद्धौषधि

**तैलकन्दः सुधाकन्दः क्रोडकन्दो रुदन्तिका ।**
**सर्पनेत्रयुताः पञ्चसिद्धौषधिकसञ्ज्ञकाः ॥३७॥**

तैलकन्द (गुर्बो), सुधाकन्द (?), क्रोडकन्द (?), रुदन्तिका (रुदिलो) र सर्पनेत्र (सर्पको काफल) को मिश्रणलाई पञ्चसिद्धऔषधि भनिन्छ ।

### पञ्चशैरीष

**शैरीषं कुसुमं मूलं फलं पत्रं त्वगित्ययम् ।**
**कीटारिः कथितो योगः पञ्चशैरीषकाभिधः ॥३८॥**

शिरिषको फूल, जरा, फल, पात र बोक्राको कीरानाशक मिश्रणलाई पञ्चशैरीष भनिन्छ ।

### पञ्चाङ्ग

**त्वक्पत्रकुसुमं मूलं फलमेकस्य शाखिनः ।**
**एकत्र मिलितं तच्चेत् पञ्चाङ्गमिति सञ्ज्ञितम् ॥३९॥**

एउटै बोटको बोक्रो, पात, फूल, जरा र फललाई संयुक्तरूपमा पञ्चाङ्ग भनिन्छ ।

### पञ्चगण

**विदारिगन्धा बृहती पृश्निपर्णी निदिग्धिका ।**
**श्वदंष्ट्रा चेति सम्प्रोक्तो योगः पञ्चगणाभिधः ॥४०॥**



शालपर्णी, बिहीँ, सतिबयर, सुकुमेल र ओदाने काँडोको मिश्रणलाई पञ्चगण भनिन्छ ।

### पञ्चशूरण

**अत्यम्लपर्णी काण्डीर मालाकन्द द्विशूरणैः ।**
**प्रोक्तो भवति योगोऽयं पञ्चशूरणसञ्ज्ञकः ॥४१॥**

अत्यम्लपर्णी (चर्चरे वा जोगे लहरो वा पुनरी), काण्डीर (जलधनिया), मालाकन्द र दुई प्रकारका शूरण (ओल ?)को मिश्रणलाई पञ्चशूरण भनिन्छ ।

### महापञ्चविष

**शृङ्गिकः कालकूटश्च मुस्तको वत्सनाभकः ।**
**सक्तुकश्चेति योगोऽयं महापञ्चविषाभिधः ॥४२॥**

शृङ्गिक, कालकूट, मुस्तक (पहिचान नभएको), वत्सनाभक र सक्तुकको मिश्रणलाई महापञ्चविष भनिन्छ ।

**उपविष**

**स्नुह्यर्ककरवीराणि लाङ्गली विषमुष्टिका ।**
**एतान्युपविषाण्याहुः पञ्च पाण्डित्यशालिनः ॥४३॥**

सिउँडी, आँक, करवीर, लाङ्गली (?) र बकाइनु (विषमुष्टिका) : यी पाँचलाई पण्डितजनले पञ्च उपविष भनी बताएका छन् ।

**पञ्चमूत्र**

**गवामजानां मेषीणां महिषीणां च मिश्रितम् ।**
**मूत्रेण गर्दभीनां यत्तन्मूत्रं मूत्रपञ्चकम् ॥४४॥**

गाई, बाख्री, भेडी, भैंसी र पोथी गधाको मिश्रित मूत्रलाई पञ्चमूत्र भनिन्छ ।

**त्रिलोह, पञ्चलोह**



**सुवर्णं रजतं ताम्रं त्रयमेतत्त्रिलोहकम् ॥४५॥**
**वङ्गनागसमायुक्तं तत् प्राहुः पञ्चलोहकम् ॥४६॥**

सुन, चाँदी र तामा : यी तीन धातुलाई त्रिलोह भनिन्छ । त्यस (त्रिलोह) मा राङ र सिसा मिसाएपछि त्यसलाई पञ्चलोह भनिन्छ ।

**दोश्रो पञ्चलोह**

**सुवर्णं रजतं ताम्रं त्रपु कृष्णायसं समम् ।**
**ग्रहाङ्गमिति बोद्धव्यं द्वितीयं पञ्चलोहकम् ॥४७॥**

सुन, चाँदी, तामा, सिसा र कालो फलाम बराबर मात्रामा मिसाएपछि त्यो ग्रहाङ्ग ? वा दोश्रो थरीको पञ्चलोह हुन्छ ।

**पञ्चक्षार**

**यव मुष्कक सर्जानां पलाश तिलयोस्तथा ।**

**क्षारैस्तु पञ्चभिः प्रोक्तः पञ्चक्षाराभिधो गणः ॥४८॥**

जवाखर, बुढेत्रो (मुष्कक), सर्ज (साज), पलाँस र तिल : यी पाँच कुराको क्षारको मिश्रणलाई क्षारपञ्चक वा पञ्चक्षार भनिन्छ ।

### लवणपञ्चक र लवणषट्क

**काचसैन्धव सामुद्र विड्क सौवर्चलैः समैः ॥४९॥**
**स्यात् पञ्चलवणं तच्च मृत्स्नोपेतं षडाह्वयम् ॥५०॥**

काच, सिँधे, सामुद्री, विड् र सौवर्चल बराबर मात्रामा मिसाएपछि त्यो पञ्चलवण हुन्छ । यसमा मृत्स्ना (माटोबाट निकालिएको नुन ?) मिसाएपछि लवणषट्क हुन्छ ।

### क्षारषट्क

**धवापामार्गकुटजलाङ्गलीतिलमुष्कजैः ।**
**क्षारैरेतैस्तु मिलितैः क्षारषट्कमुदाहृतम् ॥५१॥**



धयैँरो (धव), दतिवन (अपामार्ग), ठुलोकुरो (कुटज), लाङ्गली (?), तिल र बुढेत्रो (मुष्क)को क्षारको मिश्रणलाई क्षारषट्क भनिन्छ ।

### सप्तधातु

**रसासृङ्मांसमेदोऽस्थिमज्जाशुक्रसमाह्वयैः ।**
**शरीरस्थैर्यदैरेतैः सप्तधातुमयो गणः ॥५२॥**

रस, रगत, मासु, बोसो, हाड, मासी र शुक्र समेतलाई शरीरमा रहेका सात धातु भनिन्छ ।

### महारसाष्टक

**दरदः पारदं सस्यो वैक्रान्तं कान्तमभ्रकम् ।**
**माक्षिकं विमलश्चेति स्युरेतेऽष्टौ महारसाः ॥५३॥**

हिङ्गुल (दरद), पारो (पारद), सिसा (सस्य), विकृत हीरा (वैक्रान्त), कान्तिसार फलाम (कान्त), अभ्रक, माक्षिक (सुनामखी ?) र विमल (रूपामक्खी) : यी आठलाई अष्टमहारस वा महारसाष्टक भनिन्छ ।

## उपरस

**खेचराञ्जनकङ्कुष्ठगन्धालगैरिकक्षितीः ।**
**शैलेयाञ्जनसम्मिश्राः शंसन्त्युपरसान् बुधाः ॥५४॥**

खेचर (लौह-नुन विशेष), अञ्जन (सुर्मा बनाइने खनिज पदार्थ विशेष), कङ्कुष्ठ (कङ्कुष्ठ भनेको पहाडी माटो विशेष हो), गन्धाल (?), गैरिक (गेरु), क्षिती (मातृका ?), शैलेयाञ्जन : यिनलाई उपरस भनिन्छ ।

## सामान्यरस

**कम्पिल्लगौरीचपलाकपर्दसशैलसिन्दूरक वह्निजारान् ।**
**पाषाणिनो वोदरशृङ्गयुक्तानित्यष्ट सामान्यरसानि चाहुः ॥५५॥**

कम्पिल्ल, गौरी, चपला, कपर्द, शैल, सिन्दूर, वह्निजार र पाषाणि वा वोदरशृङ्ग : यी आठलाई सामान्य रस भनिन्छ ।



## अष्टलोह

**पञ्चलोहसमायुक्तैः कान्तमुण्डकतीक्ष्णकैः ।**
**कल्पितः कथितो धीरैरष्टलोहाभिधो गणः ॥५६॥**

पञ्चलोहमा कान्त (कान्तिसार लौह), मुण्डक (?) र तीक्ष्णक (?) को मिश्रण भएपछि त्यो अष्टलोह हुन्छ ।

## क्षारदशक

**शिग्रुमूलकपलाशचुक्रिकाचित्रकार्द्रकसनिम्बसम्भवैः ।**
**इक्षुशैखरिकमोचकोद्भवैः क्षारपूर्वदशकं प्रकीर्तितम् ॥५७॥**

शिग्रू (सैजन), मूलक (मूला), पलाश, चुक्रिका (अमिली), चित्रक (चितु), आर्द्रक (अदुवा), निम्ब (नीम), इक्षु (उखु), शैखरिक (अपामार्ग) र मोचक (बुढेत्रो)को क्षारलाई क्षारदशक भनिन्छ ।

### मूत्रदशक

**मूत्राणि हस्तिमहिषोष्ट्रगवाजकानां मेषाश्व रासभक मानुष मानुषीणाम् ।**
**यत्नेन यत्र मिलितानि दशेति तानि शास्त्रेषु मूत्रदशकाह्वयभाञ्जि भान्ति ॥५८॥**

हात्ती, राँगो, उँट, गाई, बाख्री, भेडो, घोडा, गधा, पुरुष र स्त्री : यी दशको मूत्रलाई मूत्रदशक भनिन्छ ।

### मधुर जीवकादि गण

**स्याज्जीवकर्षभक युग्मयुग द्विमेदाकाकोलिकाद्वययुतद्धिकसूप्यपर्ण्याः ।**
**जीव्या मधूकयुतया मधुराह्वया योगो महानिह विराजति जीवकादिः ॥५९॥**

जीवक, ऋषभक, ऋद्धि, वृद्धि, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, मुद्गपर्णि (बनमुगी), माषपर्णि (बनमास), जीवन्ती (जिरीको साग) र मधूक (महुवा) को मिश्रणलाई मधुर जीवकादि गण भनिन्छ ।

### अष्टवर्ग



**जीवकर्षभकौ मेदे काकोल्यावृद्धिवृद्धिके ।**
**एकत्र मिलितैरेतैरष्टवर्गः प्रकीर्तितः ॥६०॥**

जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धिको मिश्रणलाई अष्टवर्ग भनिन्छ ।

### सर्वौषधि गण

**कुष्ठमांसी हरिद्राभिर्वचा शैलेय चन्दनैः ।**
**मुरा कर्चूर मुस्ताभिः सर्वौषधमुदाहृतम् ॥६१॥**

कुट, जटामसी, हलेदो, बोझो, शिलाकुङ्कुम (शैलेय), सेतो चन्दन, रातो चन्दन, कालो जटामसी ( मुरा), कचुर (सेतो हलेदो) र नागरमोथे : यी दश थरी औषधीको मिश्रणलाई सर्वौषधी भनिन्छ ।

### वेशवार गण

**अजाजी मरिचं शुण्ठी ग्रन्थि धान्यं निशाह्वयम् ।**

पिप्पली मरिचश्चेति वेशवारगणो मतः ॥६२॥

जीरा, मरिच, सुठो, पिप्लाको जरा, धनिया, हलेदो, पिप्ला र मरिचको सम्मिश्रणलाई वेसवारगण भनिन्छ ।

### सुगन्धामलक

सर्वौषधिसमायुक्ताः शुष्काश्चामलकत्वचः ।
यदा तदाऽयं योगः स्यात् सुगन्धामलकाभिधः ॥६३॥

सर्वौषधीमा सुकाइएको अमलाको धुलो मिसाएपछि त्यसलाई सुगन्धामलक भनिन्छ ।

### सन्तर्पण वा तृप्तिदायक द्रव्य

द्राक्षादाडिमखर्जूरकदलीशर्करान्वितम् ।
लाजाचूर्णं समध्वाज्यं सन्तर्पणमुदाहृतम् ॥६४॥

अङ्गुर, दारिम, खजुर, केरा, मिश्री, लाजाको धुलो, मह र घिउलाई तृप्तिदायक द्रव्य भनिन्छ ।



### मन्थ

सक्तुभिः सर्पिषाऽभ्यक्तैः शीतवारिपरिप्लुतैः ।
नात्यच्छो नातिसान्द्रश्च मन्थः इत्यभिधीयते ॥६५॥

भुटेको जौको सातुलाई घिउमा मोलेर शीतल जलमा घोली तयार पारिएको न धेरै बाक्लो न धेरै पातलो पेय पदार्थलाई मन्थ भनिन्छ ।

### रक्तवर्ग

दाडिमं किंशुकं लाक्षा बन्धूकञ्च निशाह्वयम् ।
कुसुम्भपुष्पं मञ्जिष्ठा इत्येतै रक्तवर्गकः ॥६६॥

दारिम, पलाँश, लाहा, विजयशाल, हलेदो, कुसुमको फूल र मजिठोलाई रक्तवर्ग भनिन्छ ।

### शुक्लवर्ग

खटिनीश्वेतसंयुक्ताः शङ्खशुक्तिवराटिकाः ।

**भृष्टाश्मशर्करा चेति शुक्लवर्ग उदाहृतः ॥६७॥**

चक, शङ्ख, सिपी, कौडी र चूनलाई शुक्लवर्ग भनिन्छ ।

### भार्ग्यादि गण, किरातादि गण र अष्टादशाङ्ग

**भार्गीशटीपुष्करवत्सबीजदुरालभाशृङ्गिपटोलतिक्ताः ।**
**किरातविश्वेन्द्रकणेन्द्रबीजधान्यानि तिक्तं सुरदारुकञ्च ॥६८॥**
**अष्टादशाङ्गाभिध एष योगः समागमे स्याद्दशमूलकेन ।**
**द्विधा च भार्ग्यादिक एक एष ज्ञेयो द्वितीयस्तु किरातकादिः ॥६९॥**

चिण्डे, कपुरहलेदो, पुष्कर, इन्द्रजौ, दुरालभा, शृङ्गि, परबर र कटुकीमा दशमूल मिसाएपछि यसलाई भार्ग्यादि गण भनिन्छ । किरात, सुठो, ठुलोकुरो, जीरा वा पिप्ला, इन्द्रजौ, धनिया, कुटकी र देवदारमा दशमूल मिसाएपछि किरातकादि गण भनिन्छ । यी दुवैको मिश्रणलाई अष्टादशाङ्ग भनिन्छ ।

### शिखरिणी बनाउने विधि



**द्वात्रिंशत् पलसम्मितं दधि पलान्यष्टौ च खण्डं पल-**
**स्यार्धं चेन्मरिचस्य तेन तुलितं युक्तं त्वगेलाह्वयम् ।**
**मध्वाज्यं च युतं तदर्धमिलितं संशोधितैर्योजिता**
**भाण्डे स्याद्धिमवासिते शिखरिणी श्रीकण्ठभोग्या गुणैः ॥७०॥**

बत्तीस पला (करिब दुई किलो वा २५६ तोला) दही, आठ पला (करिब ५०० ग्राम वा ६४ तोला) चिनी, आधा पला (करिब २ तोला) कालो मरिचको धुलो, चौथाई पला (करिब १ तोला) दालचिनीको धुलो, चौथाई पला (करिब १ तोला) सुकुमेलको धुलो, यति नै मात्रामा घिउ र मह ( असमान मात्रा) हाली शिखरिणी बनाउनू । पहिले दही, चिनी, मह र घिउलाई बेस्सरी फिट्नू । अनि यसलाई सफा मलमलको कपडामा छान्नू । अनि राम्ररी धूलो पारिएका बाँकी कुरा हालेर पुनः फिट्नू र कपुर दलिएको माटाको भाँडामा हाली चिसो ठाउँमा राख्नू । यसपछि महादेवले पिउन योग्य गुणको शिखरिणी तयार हुन्छ ।

### वर्गप्रशस्ति

**इत्थं नानामिश्रयोगाभिधानादेनं वर्गं मिश्रकाख्यं विदित्वा ।**
**वैद्यः कुर्याद्योगमत्रत्यसञ्ज्ञाप्रज्ञासञ्ज्ञो बन्धुभिर्येन धीरः ॥७१॥**

विभिन्न प्रकारमा सामग्री मिसाएर अनेक थरी ओखती बनाउने विधि वर्णन गरिएको हुनाले यस अध्यायको नाम मिश्र वर्ग राख्नु उचित हुन्छ । टिक्न चाहने प्रत्येक वैद्यले यहाँ दिइएका विभिन्न नाम र मिश्रण विधिका बारेमा राम्रैरी ज्ञान हासिल गरेपछि आफ्ना सहकर्मीको सहयोगमा ओखती बनाई त्यो ओखतीको विवेकपूर्ण प्रयोग गर्नुपर्दछ ।

**शौर्यासङ्गरता रमा स्वयमुमा शखच्छिवासङ्गिनी**
**सा वाणी चतुराननप्रणयिनी श्रीसम्मिता यं श्रिता ।**
**तस्यागादभिधानशेखरमणौ वर्गो नृसिंहेशितु-**
**र्हाविंशोऽवसितिं कृतौ कृतधियां यो मिश्रकाख्यो मतः ॥७२॥**

धनकी देवी लक्ष्मीले सधैं पराक्रमी व्यक्तिलाई मान्दछिन्, शुभदायक दुर्गा सधैं शिवका साथमा रहन रुचाउँदछिन् अनि वचनकी देवी सरस्वती सृष्टिकर्ता ब्रह्मालाई मात्र मान्दछिन् । तर पनि यी तीन वटै देवीहरू आआफ्ना गुणहरू सहित त्रिदेवलाई समेत श्रेष्ठ मान्ने पराक्रमी र समृद्ध राजा नरहरिको शरणमा आएका छन् । तिनै राजा नरहरि आफ्नो ग्रन्थ अभिधान चूडामणिको मिश्रक नामक बाईसौं अध्याय पूरा गर्दछन् ।

**इति श्रीनरहरिपण्डितविरचिते निघण्टुराजापरपर्यायवत्यभिधानचूडामणौ**
**मिश्रकाख्यो वर्गो द्वाविंशः ॥२२॥**



श्री नरहरि पण्डितद्वारा लिखित राजनिघण्टु अन्तर्गत मिश्रवर्ग नामक बाइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद पूर्ण भयो ।२२।

## एकार्थादि वर्गः

## अनेकार्थादि वर्ग :

### एकार्थ वर्गः

**श्रीश्च लक्ष्मीफले ज्ञेया त्वसनो बीजवृक्षकः ।**
**शालूकं पद्मकन्दे स्यात् सदापुष्पो रविद्रुमे ॥१॥**

श्री र लक्ष्मीफल दुवै शब्दले बेलको रूखलाई बुझाउँदछ । असन र बीजवृक्ष शब्दले विजयशाललाई बुझाउँदछ । शालूक र पद्मकन्दले कमलको गानु वा कन्दलाई बुझाउँदछ । सदापुष्प र रविद्रुमले आँकलाई बुझाउँदछ ।

**कुबेरको नन्दिवृक्षे गोकण्टो गोक्षुरे तथा ।**
**दन्तफलस्तु पिप्पल्यां कसेरुर्भद्रमुस्तके ॥२॥**

कुबेरक र नन्दिवृक्ष भनेको टुनी, गोकण्ट र गोक्षुर भनेको ओदानेकाँडो, दन्तफल र पिप्पली भनेको पिप्ला तथा कसेरु र भद्रमुस्तक भनेको कसुर हो ।



**नागरोत्था कच्छरुहा अङ्कोले दीर्घकीलके ।**
**वल्लकी सल्लकीवृक्षे मातुलुङ्गे तु पूरकः ॥३॥**

नागरोत्था र कच्छरुहा भनेको नागरमोथे, अङ्कोल र दीर्घकीलक भनेको अङ्कुल, वल्लकी र सल्लकी भनेको काँढेसल्लो तथा मातुलुङ्ग र पूरक भनेको बिमिरो हो ।

**ब्रह्मघ्नी तु कुमारी स्यादङ्कोले गूढकमल्लिका ।**
**अतिविषा श्वेतवचोपकुञ्ची स्थूलजीरके ॥४॥**

ब्रह्मघ्नी (व्रणघ्नी हुनुपर्ने) र कुमारी भनेको घिउकुमारी, अङ्कोल र गूढकमल्लिका भनेको अङ्कुल, अतिविषा र श्वेतवचा भनेको अतीस तथा उपकुञ्ची र स्थूलजीरक भनेको मुङ्रेलो हो ।

**कवचः स्यात् पर्पटके लवणं तु पयोधिजम् ।**
**बृहत्त्वक् सप्तपर्णे स्यात् काम्भोजी वाकुची तथा ॥५॥**

कवच र पर्पटक भनेको पित्तपापडा, लवण र पयोधिज भनेको सामान्य नुन, बृहत्त्वक् र सप्तपर्ण भनेको छतिवन तथा काम्भोजी र वाकुची भनेको बकुची हो ।

**कीटपादी हंसपाद्यां कुनटी तु मनःशिला ।**
**वैकुण्ठमर्जके प्राहुर्भूधात्र्यान्तु तमालिनी ॥६॥**

कीटपादी र हंसपादी भनेको कानेसिन्को, कुनटी र मनःशिला भनेको मनशिला, वैकुण्ठ र अर्जक भनेको सानोतुलसी वा वनतुलसी हो तथा भूधात्री र तमालिनी भनेको भुइँ अमला हो ।

**शतकुन्दः शरीरे स्यादग्निकाष्ठं तथाऽगुरौ ।**
**सूक्ष्मपत्री शतावर्यां क्षीरपर्ण्यर्कसञ्ज्ञके ॥७॥**

शतकुन्द र शरीर भनेको सेतो करवीर, अग्निकाष्ठ र अगुरु भनेको अगर, सूक्ष्मपत्री र शतावरी भनेको कुरिलो तथा क्षीरपर्णी र अर्क भनेको आँक हो ।

**शौण्डी तु पिप्पली ज्ञेया कस्तूर्यां मदनी तथा ।**
**ब्रह्मपर्णी पृश्निपर्ण्यां चित्रपर्णी च सा स्मृता ॥८॥**



शौण्डी र पिप्पलीले पिप्लालाई, मदनीले कस्तूरीलाई तथा ब्रह्मपर्णी, पृश्निपर्णी र चित्रपर्णीले सतिबयरलाई बुझाउँदछ ।

**छत्रपर्णः सप्तपर्णे पीलुपर्णी तु तुण्डिका ।**
**शाकश्रेष्ठस्तु वृन्ताके शङ्करः शमिरुच्यते ॥९॥**

छ(प?)त्रपर्ण र सप्तपर्णले छतिवनलाई, पीलुपर्णी र तुण्डिकाले गोलकाँक्रीलाई, शाकश्रेष्ठ र वृन्ताकले भन्टालाई तथा श(ङ्क)ङ्करले शमी वृक्षलाई बुझाउँदछ ।

**गोरटः स्याद्विट्खदिरे तुण्डिश्चारण्यबिम्बिका ।**
**विष्णुगुप्तं तु चाणक्यमूलेऽनन्ता यवासके ॥१०॥**

गोरट भनेको विट्खदिर (गनाउने खयर), तुण्डि भनेको अरण्यबिम्बिका (गोलकाँक्री), विष्णुगुप्त भनेको चाणक्यमूल (ठूलो वा प्युठाने मूला) र अनन्ता भनेको यवासक (दुरालभा) हो ।

**कपिकच्छुरात्मगुप्ता वातपोथस्तु किंशुके ।**
**पीता तु रजनी ज्ञेया बोधिवृक्षस्तु पिप्पलः ॥११॥**

कपिकच्छु भनेको आत्मगुप्ता (काउसो), वातपोथ भनेको किंशुक (पलाँश), पीता भनेको रजनी (हलेदो) तथा बोधिवृक्ष भनेको पिप्पल हो ।

**उशीरे समगन्धिः स्याद्धिङ्गुले चूर्णपारदः ।**
**हिङ्गावगूढगन्धः स्याद्गोदन्ते विस्रगन्धिके ॥१२॥**

उशीर भनेको समगन्धि (खसखस), हिङ्गुल भनेको चूर्णपारद (हिङ्गुल), हिङ्गु भनेको अवगूढगन्ध (हिङ) तथा गोदन्त भनेको विस्रगन्धिक (हरिताल) हो ।

**शम्यामीशान इत्याहुर्दिवान्धो घूक उच्यते ।**
**पयस्या क्षीरकाकोल्यां शतवेध्यम्लवेतसे ॥१३॥**

ईशान भनेको शमी, दिवान्ध भनेको घूक (उल्लू), पयस्या भनेको क्षीरकाकोली (दूधे कल्छेलहरो) र शतवेधी भनेको अम्लवेतस हो ।

**रोचनी नारिकेले च भूधात्र्यां चारुहा स्मृता ।**
**प्रियां प्रियङ्गुके प्राहुः खराह्वा चाजमोदके ॥१४॥**

रोचनी भनेको नारिकेल (नरिवल ?), भूधात्री भनेको आरुहा (भुइँअमला), प्रिया भनेको प्रियङ्गु (दयाँलो) तथा खराह्वा भनेको अजमोदा हो ।

**तगरं दण्डहस्ती स्याद्रसोनो लशुने स्मृतः ।**
**तपस्विनी जटामांस्यां मेघपुष्पेऽजशृङ्गिका ॥१५॥**

दण्डहस्ती भनेको तगर, रसोन भनेको लशुन (लसुन), तपस्विनी भनेको जटामांसी (जटामसी) तथा मेघपुष्प भनेको अजशृङ्गिका (मेढाशृङ्गी) हो ।

**ज्ञेयं मातुलपुष्पं तु धुस्तूरे चोरके रिपुः ।**
**शष्पं बालतृणं प्रोक्तं शैलेयं चाश्मपुष्पके ॥१६॥**

मातुलपुष्प भनेको धुस्तूर (धतुरो), चोरक भनेको रिपु (गन्धपालाविशेष), शष्प भनेको बालतृण (नीलो दूबो) तथा शैलेय भनेको अश्मपुष्पक (पत्थरकुङ्कुम) हो ।

**श्रीपुष्पं तु लवङ्गे स्याद्बालपुष्पी तु यूथिका ।**

**स्थूलपुष्पं तु झेण्डूके चित्रके दारुणः स्मृतः ॥१७॥**

श्रीपुष्प भनेको लवङ्ग (ल्वाङ), बालपुष्पी भनेको यूथिका (जुही), स्थूलपुष्प भनेको झेण्डूक ( मखमली, ठूलो सयपत्री ?) तथा चित्रक भनेको दारुण (चितु) हो ।

**अथ स्याद्विषपुष्पं तु पुष्पं श्यामदलान्वितम् ।**
**बलभद्रः कदम्बोऽन्यः शाखोटे भूतवृक्षकः ॥१८॥**

विषपुष्प भनेको श्यामदलपुष्प (मइनफल), बलभद्र भनेको कदम्बविशेष (धूलिकदम्ब) तथा शाखोट भनेको भूतवृक्ष (खाक्सी) हो ।

**रामा तमालपत्रे स्याद्भूर्जे चर्मदलो मतः ।**
**आत्मशल्या शतावर्यां पिक्यां कलभवल्लभा ॥१९॥**

रामा भनेको तमालपत्र (तेजपात), भूर्ज भनेको चर्मदल (भोजपात), आत्मशल्य भनेको शतावरी ( कुरिलो) र पिकी भनेको कलभवल्लभा (पोथीकोइली) हो ।

**विप्रप्रिया पलाशे च ज्वरारिस्तु गुडूचिका ।**

**कण्टकार्यां तु श्वेतायां ज्ञेया तु कपटेश्वरी ॥२०॥**

विप्रप्रिया भनेको पलाँश, ज्वरारि भनेको गुडूचिका (गुर्जो) र कपटेश्वरी भनेको सेतो कण्टकारी हो ।

**पाण्डुफलं पटोले स्याच्छालिपर्ण्यां स्थिरा मता ।**
**गायत्री खदिरे प्रोक्ता स्यादेर्वारुस्तु कर्कटी ॥२१॥**

पाण्डुफल भनेको पटोल (परबर), शालिपर्णी भनेको स्थिरा (बनगहत), गायत्री भनेको खदिर ( खयर) तथा एर्वारु भनेको कर्कटी (काँक्रोविशेष) हो ।

**नीवारेऽरण्यशालिः स्यात् पार्वत्यां गजपिप्पली ।**
**स्पृक्कायां देवपुत्री स्यादङ्कोले देवदारु च ॥२२॥**

नीवार भनेको अरण्यशालि (नाभो धान), पार्वती भनेको गजपिप्पली, स्पृक्का भनेको देवपुत्री ( कपुरपाती) तथा अङ्कोल भनेको देवदारु (देवदार) हो ।

**रीठा प्रकीर्यके प्राहुर्दन्त्यां केशरुहा स्मृता ।**
**आम्रस्तु सहकारे स्यात् ज्ञेयस्ताले द्रुमेश्वरः ॥२३॥**

रीठा भनेको प्रकीर्यक (रिठ्ठो), दन्ती भनेको केशरुहा (अजयपालविशेष), आम्र भनेको सहकार (आँप) तथा ताल भनेको द्रुमेश्वर (ताड) हो ।

**दुष्पुत्रश्चोरके प्रोक्तो माडे चैव वितानकः ।**
**माचिषा मण्डके प्रोक्ता मार्जारी मृगनाभिजा ॥२४॥**

दुष्पु(प)त्र भनेको चोरक (गन्धपालाविशेष), माड भनेको वितानक (ताडविशेष), माचिषा भनेको मण्डक (माड ?) तथा मार्जारी भनेको मृगनाभिजा (कस्तूरी) हो ।

**तिन्तिडीके तु बीजाम्लः कदल्यां तु सकृत्फला ।**
**जर्तिलश्चारण्यतिले तार्क्ष्यशैलं रसाञ्जने ॥२५॥**

तिन्तिडीक भनेको बीजाम्ल (वृक्षाम्ल), कदली भनेको सकृत्फला (केरा), जर्तिल भनेको अरण्यतिल (वनमा हुने कालो तिल वा खनजोत नगरी बाँझो जमिनमा छरिएको तिल) तथा तार्क्ष्यशैल भनेको रसाञ्जन हो ।



**विभीतके कलिन्दः स्याच्छालिर्ज्ञेया तु पाटला ।**
**रङ्गमाता तु लाक्षायामग्निज्वाला तु धातकी ॥२६॥**

विभीतक भनेको कलिन्द (बर्रो), शालि भनेको पाटला (धान ?), रङ्गमाता भनेको लाक्षा (लाहा) तथा अग्निज्वाला धनेको धातकी (धयैँरो) हो ।

**तिनिशे स्याद्भस्मगर्भा मधूल्यां मधुकर्कटी ।**
**सितगुञ्जा काकपीलौ चन्द्रायान्तु गुडूचिका ॥२७॥**

भस्मगर्भा भनेको तिनिश, मधूली भनेको मधुकर्कटी (दाखविशेष), सितगुञ्जा भनेको काकपीलु ( सेतो रातीगेडी) तथा चन्द्रा भनेको गुडूचि (गुर्जो) हो ।

**नटश्चाशोकवृक्षे स्याद्दाडिमे फलषाडवः ।**
**निष्पावे तु पलङ्कः स्यात् कलशी पृश्निपर्णिका ॥२८॥**

नट भनेको अशोकवृक्ष (अशोकको रूख), दाडिम भनेको फलषाडव (दारिम), निष्पाव भनेको पलङ्क (सिमी) तथा कलशी भनेको पृश्निपर्णिका (सतिबयर) हो ।

**राजान्ने दीर्घशूकः स्याज्जरणः कृष्णजीरके ।**
**पिङ्गा चैव हरिद्रायां श्वेतशूके यवः स्मृतः ॥२९॥**

राजान्न भनेको दीर्घशूक (शालिधानविशेष), जरण भनेको कृष्णजीरक (कालो जीरा), पिङ्गा भनेको हरिद्रा (हलेदो) र श्वेतशूक भनेको यव (जौ) हो ।

**श्यामाके तु त्रिबीजः स्यादाढक्यां तुवरी स्मृता ।**
**गोधूमेऽथ मृदुः प्रोक्तः करला त्रिपुटा तथा ॥३०॥**

श्यामाक भनेको त्रिबीज (सामाधान), आढकी भनेको तुवरी (रहर), गोधूम भनेको मृदु (?) तथा करला भनेको त्रिपुटा (खेसरी) हो ।

**सूपश्रेष्ठो हरिन्मुद्गे राजान्ने ह्रस्वतण्डुलः ।**
**मकुष्ठो वनमुद्गे स्यान्मकुष्ठे च कृमीलकः ॥३१॥**



मुगीलाई सूपश्रेष्ठ भनिन्छ । राजान्न भनेको ह्रस्वतण्डुल (शालिधान विशेष), मकुष्ट भनेको वनमुद्ग (वनमुगी) तथा मकुष्ठ भनेको पनि कृमिलक (वनमुगी) हो ।

**कृष्णः काश्मीरवृक्षे स्यात् विषतिन्दुर्विषद्रुमे ।**
**पलाशे पत्रकः प्रोक्तो न्यग्रोधो रोहिणः स्मृतः ॥३२॥**

कृष्ण भनेको काश्मीरवृक्ष (?), विषतिन्दु भनेको विषद्रुम (कुचिला), पत्रक भनेको पलाश र न्यग्रोध भनेको रोहिण (बर) हो ।

**नारिकेले रसफलस्तथा ताले तु शम्बरः ।**
**विकङ्कतो मृदुफले केसरे बकुलः स्मृतः ॥३३॥**

नारिकेल भनेको रसफल (नरिवलको रूख), ताल भनेको शम्बर (साँभर नुन ?), विकङ्कत भनेको मृदुफल र केसर भनेको बकुल (मौलसिरी) हो ।

**शेफाली सिन्धुवारे च मत्स्याक्षे हिलमोचिका ।**
**वास्तुके श्वेतचिल्ली स्यात् वेल्लिका स्यादुपोदकी ॥३४॥**

शेफाली भनेको सिन्धुवार (सिमाली), मत्स्याक्षी भनेको हिलमोचिका (?), वास्तुक भनेको श्वेतचिल्ली (बेथेविशेष) तथा वेल्लिका भनेको उपोदकी (पवै) हो ।

**आरामवल्लिकायां तु मूलपोती तु विश्रुता ।**
**मकरन्दः पुष्परसे जात्यां तु सुमना स्मृता ॥३५॥**

आरामवल्लिकालाई मूलपोती (पवैविशेष), पुष्परस (फूलको रस)लाई मकरन्द तथा सुमना ( चमेली) लाई जाती भनिन्छ ।

**आम्रातके पीतनकः क्षौद्रे पुष्पासवः स्मृतः ।**
**मृदुः कन्या तु सम्प्रोक्ता जीवा स्याज्जीवके तथा ॥३६॥**

आम्रातक भनेको पीतनक (अमारो), क्षौद्र भनेको पुष्पासव (मह), मृदु भनेको कन्या (घिउकुमारी) तथा जीवा भनेको जीवक हो (?) ।

**छिन्नायां तु गुडूची स्यान्नारायण्यां शतावरी ।**
**सर्जे तु बस्तकर्णी च शलाटुर्बिल्वके तथा ॥३७॥**

छिन्ना भनेको गुडूची (गुर्जो), नारायणी भनेको शतावरी (कुरिलो), सर्ज भनेको बस्तकर्णी (साल) तथा शलाटु भनेको बिल्व (बेल) हो ।

**सर्जान्तरे चाश्वकर्णो गोकर्णी स मधौरसे ।**
**कृष्णं नीलाञ्जने प्राहुराखुकर्णी तु शम्बरी ॥३८॥**

सर्जान्तर (सालविशेष) लाई अश्वकर्ण भनिन्छ । गोकर्णी भनेको मधुरस (मरुईलहरो), कृष्ण भनेको नीलाञ्जन (कालाञ्जन) तथा आखुकर्णी भनेको शम्बरी (द्रवन्ती) हो) ।

**दुर्गा तु श्यामयक्षी स्याद्भूतो मुस्ताऽथ दुर्ग्रहः ।**
**अपामार्गोऽथरक्ता तु मञ्जिष्ठायां शटस्तथा ॥३९॥**

दुर्गा भनेको श्यामयक्षी (श्यामपक्षी ?) हो । भूतमुस्तालाई दुर्ग्रह (दतिवन), अपामार्गलाई रक्त ( रातो दतिवन) तथा मजिठोलाई शट भनिन्छ ? ।

**धुस्तूरे ब्रह्मजा ब्राह्मी गन्धर्वः कोकिले स्मृतः ।**

**सरटी तु दुरारोहा बाहुल्यां तर्वटः स्मृतः ॥४०॥**

धुस्तूर (धतुरो) ब्रह्मजा भनेको ब्राह्मी, गन्धर्व भनेको कोकिल (कोइली), सरटी भनेको दुरारोहा (छेपारो) तथा बाहुली भनेको तर्वट (ताप्रे वा चकौंते ?) हो ।

**सर्षपं तु दुराधर्षो ह्रीवेरं बालके तथा ।**
**हैमवती चाल्परसा भिषङ्माताऽटरूषके ॥४१॥**

सर्षप भनेको दुराधर्ष (सर्सिउँ), ह्रीवेर भनेको बालक (सुगन्धबाल), हैमवती भनेको अल्परसा (?) तथा भिषङ्माता भनेको अटरूषक (असुरो) हो ।

**ब्रह्मपुत्री तु भार्गी स्याद्धस्तिपर्णी तु कर्कटी ।**
**तुलसी बहुमञ्जर्यां कटभ्यां गर्दभी स्मृता ॥४२॥**

ब्रह्मपुत्री भनेको भार्गी (?), हस्तिपर्णी भनेको कर्कटी (काँक्रो), बहुमञ्जरी भनेको तुलसी तथा कटभी भनेको गर्दभी (सेतो अपराजिता) हो ।

**कच्छुघ्नी हवुषायाञ्च शाल्मली च यमद्रुमे ।**
**सूक्ष्मैला चैव कोरङ्ग्यां गन्धाढ्यां धूम्रपत्रिका ॥४३॥**

कच्छुघ्नी भनेको हपुषा (सीजर), शाल्मली भनेको यमद्रुम (सिमल), सूक्ष्मैला भनेको कोरङ्गी (सुकुमेल) तथा गन्धाढ्या भनेको धूम्रपत्रिका (सूर्ति ?) हो ।

**शैलजा गजपिप्पल्यां क्षीरिणी तु कुटुम्बिनी ।**
**देवबलायां त्रायन्ती कटी च खदिरे स्मृता ॥४४॥**

शैलजा भनेको गजपिप्पली, क्षीरिणी भनेको कुटुम्बिनी (दूधे झारविशेष), देवबला भनेको त्रायन्ती (मुडिलो) तथा कटी (कण्टी ?) भनेको खदिर (खयर) हो ।

**इन्दीवरा करम्भायां कन्दे चेन्दीवरं स्मृतम् ।**
**पुष्पान्तरे राजकन्या पार्थिवे तगरं तथा ॥४५॥**

इन्दीवरा भनेको करम्भ (बोकेझार), कन्द भनेको इन्दीवर (?), पुष्पान्तर भनेको राजकन्या (केविका फूल) तथा पार्थिव भनेको तगर हो ।

**सागरे रत्नगर्भश्च रत्नगर्भा तु मेदिनी ।**
**सुवर्णे काञ्चनं ज्ञेयं हेमदुग्धा तु काञ्चनी ॥४६॥**

रत्नगर्भ भनेको सागर, रत्नगर्भा भनेको मेदिनी (पृथ्वी), काञ्चन भनेको सुन तथा हेमदुग्धा भनेको काञ्चनी (सियालकाने) हो ।

**प्रसारिण्यां राजबला कर्पूरे हिमवालुकः ।**
**हिमं कर्पूरके प्राहुर्गोशीर्षं चन्दनं स्मृतम् ॥४७॥**

प्रसारिणी भनेको राजबला (प्रसारणी), हिमवालूक भनेको कपूर, हिम भनेको पनि कपूर तथा गोशीर्ष भनेको सेतोचन्दन हो ।

**ब्रह्मदारुः स्मृतः फञ्ज्यां पण्यन्धा पणधा स्मृता ।**
**वत्सादनी गुडूच्याञ्च सोमवल्ल्यन्त्रवल्लिका ॥४८॥**

ब्रह्मदारु भनेको फञ्जी (?), पण्यन्धा भनेको पणधा (झारविशेष), वत्सादनी भनेको गुडूची (गुर्जो) तथा सोमवल्ली भनेको यन्त्रवल्लिका (यज्ञवल्लिका ?, सोमलता) हो ।

**नद्याम्रे च समष्ठिलोऽथ रजनी स्यात् कालमेष्यां बुधैः**
**दुग्धार्हस्तिलके पलाण्डुरिति च स्याद्दीपने चोक्ततः ।**
**मोचा हस्तिविषाणके च कथिता भार्ग्यां तु पद्मा स्मृता**
**निम्बे शीर्णदलस्तथाऽत्र कथितः स्याद्धान्यराजो यवे ॥४९॥**

नद्याम्र भनेको समष्ठिला (नाककोरे), रजनी भनेको कालमेषी (?), दुग्धार्ह भनेको तिलक (?), पलाण्डु भनेको दीपन (प्याज), मोचा भनेको हस्तिविषाणक (केरा), भार्ङ्गी भनेको पद्मा (चिण्डे), निम्ब भनेको शीर्णदल (नीम) तथा धान्यराज भनेको यव (जौ) हो ।

**॥ इत्येकार्थकवर्गः ॥**

॥ एकार्थक वर्गको नेपाली भावानुवाद समाप्त भयो ॥

**द्व्यर्थकवर्गः**
**दुईअर्थी शब्दहरू**

**सौराष्ट्र्यां रुचिदे चैव सन्धानञ्च प्रचक्षते ।**
**पलाशिके शटी लाक्षा कितवश्चोरके शठे ॥१॥**

सन्धान : सौराष्ट्री (गोपीचन्दन) र रुचिदा (?) । पलाशिका : शटी (कपुरहलेदो) र लाक्षा (लाहा)। कितव : चोरक (गन्धपालाविशेष) र शठ (धतुरो) ।

**बलाका बर्हिणश्चैव मेघानन्दः प्रकीर्तितः ।**
**आकाशेऽभ्रके गगनं जलूका मत्कुणास्रपोः ॥२॥**

मेघानन्द : बलाका (पोथी बकुल्लो, मेघनादा ?) र बर्हिण (मयूर) । गगन : आकाश र अभ्रक । जलूका : मत्कू(कु)ण (उडुस) र अस्र(श्र)प (जूका ?) ।

**नासा नक्षत्रयोर्नाडी कोलायां शुण्डिके कणा ।**
**ज्वरघ्नश्छिन्नवास्तूके ललना चारसर्जयोः ॥३॥**



नाडी : नासा (नाक) र नक्षत्र । कणाः कोला (पिप्ला) र शुण्डिका (?)। ज्वरघ्न : छिन्ना (गुर्जो ) र वास्तूक  (बेथे)। ललन : चार (चिरौंजी) र सर्ज (साल)।

**मञ्जिष्ठायां गुडूच्यान्तु कुमारी नागपूर्विका ।**
**मुद्गरे सप्तपर्णे स्यात्सप्तच्छदमुदाहृतम् ॥४॥**

नागकुमारी : मञ्जिष्ठा (मजिठो) र गुडूची (गुर्जो)। सप्तच्छद : मुद्गर (बेली ?) र सप्तपर्ण (छतिवन)।

**कृत्रिमकं विड्के काचे पाक्यञ्च यवजे विडे ।**
**सर्पान्तरे पटोले च कुलकः समुदाहृतः ॥५॥**

कृत्रिमक : विड् (बिरेनुन) र काच (काँचेनुन) । पाक्य : यवज (जवाखार) र विड् (बिरेनुन) । कुलक : सर्पान्तर (सर्पविशेष) र पटोल (परबर) ।

**जन्तुकायान्तु वास्तुके विज्ञेया चक्रवर्तिनी ।**
**मधुरा जीवके प्रोक्ता मेदायाञ्च तथा स्मृता ॥६॥**

चक्रवर्तिनी : जन्तुका र वास्तूक (बेथे) । मधुर : जीवक र मेदा ।

**कर्कन्धूश्चेति सम्प्रोक्तो बदरे पूतिमारुते ।**
**वासन्ती कोकिलायान्तु दन्त्यापुष्पं प्रचक्षते ॥७॥**

कर्कन्धू : बदर (बयर) र पूतिमारुत (बेलको रूख वा जङ्गली बयरको झाडी) । वासन्ती : कोकिला (पोथी कोइली) र दन्तीपुष्प (?) ।

**चन्द्राब्जे चोत्पलं कुष्ठे कृकरश्चन्व्यवातयोः ।**
**चपला मद्य मागध्योर्धरण्यां खदिरे क्षमा ॥८॥**

उत्पल : चन्द्राब्ज (सेतो चन्द्रकमल) र कुष्ठ (कुट) । चपला : मद्य (मदिरा) र मागधी (पिप्ला) । क्षमा : धरणी (पृथ्वी) र खदिर (खयर) ।

**सिन्धुपुष्पं कदम्बे च बकुले चाथ लोमशा ।**
**काकोल्याञ्च वचायाञ्च सूक्ष्मैला चेन्द्रवारुणो ॥९॥**

सिन्धुपुष्प : कदम्ब (कदम) र बकुल (मौलसिरी) । लोमशा : काकोली (?) र वचा (बोझो) । सूक्ष्मा : एला (सुकुमेल) र इन्द्रवारुणी (?)।



**ऐन्द्र्यां गोदावरी चैव गौतम्यां रोचना तथा ।**
**कुसुम्भेऽरण्यजे चैव कौसुम्भं कुसुमाञ्जने ॥१०॥**

गोदावरी : ऐन्द्री (?) र गौतमी (नदी) । कौसुम्भ : अरण्यकुसुम्भ (जङ्गली कुसुम) र कुसुमाञ्जन ( गाजलविशेष, पुष्पाञ्जन) ।

**शटी गन्धनिशायाञ्च चोरके चाथ कर्कटी ।**
**देवदाल्यां त्रपुस्याञ्च शताह्वायां शतावरी ॥११॥**

शटी (कपुरहलेदो) : गन्धनिशा (कपुरहलेदोविशेष) र चोरक (गन्धपालाविशेष)। कर्कटी : देवदाली (सानो बनतोरियाँ) र त्रपुसी (काँक्रो) । शतावरी र शताह्वा : कुरिलो

**मिशिस्तु तुत्थनीलिन्यां सूक्ष्मैलायां तथा स्मृता ।**
**वितुन्नकन्तु भूधात्र्यां ख्याता कुस्तुम्बरी तथा ॥१२॥**

मांश : तुत्थनीलि र सूक्ष्मैला (सुकुमेल) । वितुन्नक : भूधात्री (भुईअमला) र कुस्तुम्बरी (धनिया) ।

**वर्हिर्दर्भे मयूरे च प्लक्ष मर्कटयोः प्लवः ।**
**आखुपर्णी सुतश्रेण्यां प्रत्यक्श्रेण्यां तथा स्मृता ॥१३॥**

वर्हि : दर्भ (कुश) र मयूर (बर्हि) । प्लव : प्लक्ष (पाखरी) र मर्कट (वानर) । आखुपर्णी : सुतश्रेणी (?) र प्रत्यक्श्रेणी (मुसाकाने वा मुसापाते झार)।

**वस्त्रे तमालपत्रे च अंशुकः समुदाहृतः ।**
**दर्भे च कुशिके वज्रं कङ्गुधान्ये प्रियङ्गुके ॥१४॥**

अंशुक : वस्त्र (कपडा) र तमालपत्र (तेजपात) । वज्र : दर्भ (कुश) र कुशिक (?) । कङ्गु : कङ्गुधान्य (कागुनु) र प्रियङ्गु ।

**कङ्गुरङ्गारवल्ली तु फञ्जी हस्तिकरञ्जयोः ।**
**वक्रपुष्पमगस्त्ये च पलाशे च श्वपुच्छकम् ॥१५॥**



अङ्गारवल्ली : फञ्जी (चिण्डे) र हस्तिकरञ्ज (चेप्टे पाङ्गो)। वक्रपुष्प : अगस्त्य (अगस्ति) र पलाश (पलाँश)।

**माषपर्ण्यां शुनःपुच्छे चिल्ली स्याच्छाकलोध्रयोः ।**
**अथवा चेन्द्रवारुण्यां शक्राह्वेन्द्रयवं तथा ॥१६॥**

श्वपुच्छक : माषपर्णी (बनमास) र शुनपुच्छ (?) । चिल्ली : शाक (बेथे साग) र लोध्र (?) । शक्र : इन्द्रवारुणी (ऐरेलु) र इन्द्रयव (इन्द्रजौ) ।

**काकभाण्डी काकतुण्डयां ख्याता हस्तिकरञ्जके ।**
**दीर्घाङ्कुश्यां पलाशे च याज्ञिकोऽथ ...॥**

काकभाण्डी : काकतुण्डी (कागचुच्चे) र हस्तिकरञ्ज (चेप्टे पाङ्गो) । याज्ञिक : दीर्घाङ्कुशी (?) र पलाँश ।

**...विदारिका ॥१७॥**
**काश्मर्याञ्च शृगाल्याञ्च टेण्टी च मृगधूर्तके ।**

**भल्लूकोऽथ रुदन्त्याञ्च गोक्षुरे चणपत्रकः ॥**
**कटुका गजपिप्पल्योः ख्याता च शकुलादनी ॥१८॥**

विदारिका : काश्मरी (खमारी) र शृगाली (बिराले लहरो) । भल्लूक : टेण्टी (टटलो) र मृगधूर्तक (भालु ?) । चणपत्रक : रुदन्ती (रुदिलो) र गोक्षुर (सानो गोखरु)। शकुलादनी : कटुका (कुटकी) र गजपिप्पली ।

**मन्थानके समाख्यातो राजवृक्षस्तृणाधिपे ।**
**मदने कुटिले चैव तगरं चाथ रक्तिका ॥१९॥**

राजवृक्ष : मन्थानक (पाटे घाँस) र तृणाधिप । तगर : मदन र कुटिल ।

**गुञ्जायां राजिकायाञ्च पिशुनञ्चापि कुङ्कुमे ।**
**तगरेऽथ यवाह्वायां यवक्षारं यवासिका ॥२०॥**

रक्तिका : गुञ्जा (रातीगेडी) र राजिका (रायो) । पिशुन : कुङ्कुम (केशर) र तगर । यवाह्वा : यवक्षार (जवाखार) र यवासिका (यवानिका, ज्वानु)।



**अङ्कुरौदनयोः कूरो दन्तीमधुकपुष्पयोः ।**
**मधुपुष्पञ्च शोफघ्नो शालिपर्णी पुनर्नवे ॥**
**बालपत्रो यवासे च खदिरे चाथ बालके ॥२१॥**

कूर : अङ्कुर र ओदन (भोजन) । मधुपुष्प : दन्ती (अजयपाल) र मधुकपुष्प (कुकुरडाइनु) । शोफघ्न : शालिपर्णी (साकिनु) र पुनर्नवा (रातो पुनर्नवा) । बालपत्र : यवास (दुरालभा) र खदिर (खयर) ।

**उदीच्यमुत्तरे देशे कपिः कीश तुरुष्कयोः ।**
**लाङ्गली दर्भयोः सीरी प्रग्रहे जलवेतसे ॥**
**व्याधिघातो लवङ्गञ्च श्रीगन्धे दिव्यचन्दने ॥२२॥**

उदीच्य : बालक (सुगन्धबाल) र उत्तरदेश (उत्तरतिरको)। कपि : कीश (वानर) र तुरुष्क ( शिलारस) । सीरी (शीरी) : लाङ्गली (?) र दर्भ (कुश)। व्याधिघात : प्रग्रह (राजवृक्ष विशेष), जलवेतस (पानीबेत) । लवङ्ग : श्रीगन्ध (?) र दिव्यचन्दन (?)।

**स्वादुकण्टकमाचख्युर्गोक्षुरे च विकङ्कते ।**

**वंशवीजे यवफलो वत्सके धान्यमाकवे ॥२३॥**

स्वादुकण्टक : गोक्षुर (सानो गोखुर) र विकङ्कत ।यवफल : वंशवीज (बाँसका गेडा) र वत्सक ( ठुलोकुरो) ।

**देवप्रियः अगस्त्यः स्याद्वचाश्वेतादिपिच्छरी ।**
**गोलोभ्यां(म्यां) गृञ्जनं प्रोक्तं लशुने वृत्तमूलके ॥२४॥**

देवप्रियः भृङ्गीराज र अगस्ति । गोलोमी : वचा (बोझो), सेतो दूबो (श्वेतादिपिच्छरी) । गृञ्जन : छ्यापी (लसुनको एक जात) र वृत्तमूलक (वर्तुलम्, डल्लेमूला) ।

**कुङ्कुमे रामठे बाह्लिर्बलायामोदनी भवेत् ।**
**महासमङ्ग चैश्वर्यां जटामांस्यां जटा स्मृता ॥२५॥**

बाह्लि (वाह्लिक) : रामठ (हिङ) र कुङ्कुम (बाह्लिक, केशर) । बला : मोदनी (बाला वा जुही) र महासमङ्ग (बलु) । ईश्वर : जटामसी र जटा ।

**कस्तूरी मृगनाभौ च धुस्तूरे परिकीर्तिता ।**
**हंसपाद्यां मुसल्याञ्च ख्याता गोधापदी बुधैः ॥२६॥**

कस्तूरी शब्दले मृगनाभी (बिना) र धुस्तूर (धतुरो)लाई बुझाउँदछ भनिएको छ । विद्वानहरू गोधापदी शब्दले हंसपादी (कानेसिन्को) र मुसली (मुसलीकन्द)लाई बुझाउँदछ भन्दछन् ।

**तपस्वी हिङ्गुपत्र्याञ्च प्रकीर्य्ये रौप्य-मुक्तयोः ।**
**तारं स्यान्माषपर्ण्यां तु लिङ्गयाञ्चाहुः स्वयम्भुवम् ॥२७॥**

तपस्वी : घिउकुमारी । हिङ्गुपत्री : जिम्बु । प्रकीर्य्य : डल्ले पाङ्ग्रो, रिठ्ठो । तार : चाँदी र मोती । स्ययम्भू : माषपर्णी (बनमास) र लिङ्ग (आफैं उत्पन्न ज्योतिर्लिङ्ग) ।

**सहस्रवेधी कस्तूर्य्यां रामठेऽथाब्ज केसरे ।**
**पुन्नागे तुङ्गमाचख्युस्त्रिवृद्धान्यविशेषयोः ॥२८॥**

सहस्रवेधी : कस्तूरी र रामठ (हिङ) । तुङ्ग : केसर र पुन्नाग ।....? ।

**मसूरोऽप्यथ विश्वायां शुण्ठी प्रतिविषा तथा ।**

**श्रीगन्धं गन्धपाषाणे गन्धसारेऽथ पिच्छिले ॥२९॥**

........मसूर : मुसुरो । विश्वा : शुण्ठी (सुठो) र प्रतिविषा (अतीस) । श्रीगन्ध : गन्धपाषाण ( गन्धक) र गन्धसार (श्रीखण्ड) । पिच्छिल : ....।

**शाल्मली शिंशपे वासा बृहत्यौ हिंस्रिकाभिधे (सिंहिकाभिधे) ।**
**मर्कटस्त्वजमोदायां वनौकसि च विश्रुतः ॥३०॥**

...शाल्मली (सिमल) र शिंशप (सिसौ) । सिंहिका : वासा (असुरो) र बृहती (ठूलो बिहीँ) । मर्कट : अजमोदा र वनौका (बाँदर) ।

**स्याल्लाङ्गली गुडूच्यां तु विशल्यामथ तेजिनी ।**
**तेजोवत्यां तु मूर्वायां चाङ्गेरी लोणशाकयोः ॥३१॥**
**लोणिका चापि ...।**

विशल्या : गुडूची (गुर्जो) र लाङ्गली (कलिहारी नामक विष, लाङ्गलिनी) । तेजिनी : तेजोवती र मूर्वा (मरुइ लहरो, तेजस्विनी) । लोण (लोणा, लोणिका) : चाङ्गेरी (चरीअमिलो) र लोणशाक ( नुनढिकी साग) ।



**.... पिण्याकं तिलकिट्ट तुरुष्कयोः ।**
**बृहत्यां चैव वृन्ताके वार्ताकी च....॥**

पिण्याक : तिलकिट्ट (तिलको पिना) र तुरुष्क (शिलारस) । बृहती : वृन्ताक (भन्टा) र वार्ताकी ( ठूलो बिहीँ) ।

**...सदाफलम् ॥३२॥**
**उदुम्बरे बिल्ववृक्षे कज्ञा(त्था) खदिरवृक्षयोः ।**
**खदिरे चाथ सामुद्रं लवणे चाब्धिफेनके ॥३३॥**

सदाफल : उदुम्बर (डुम्री) र बिल्ववृक्ष (बेलको रूख) । कत्था : खयरको रूख र खयर । सामुद्र : नुन र समुद्रफेन ।

**ग्रन्थिलो गोक्षुरे बिल्वे कटुका मीनपित्तयोः ।**
**मत्स्यपित्ताऽथ रजनी हरिद्रा-नीलिकाख्ययोः ॥३४॥**

ग्रन्थिल : गोखुर र बेल (?) । कटुका : मीनापत्ता (?) र मत्स्यापत्ता (कुटकी) । रज(ञ्ज)नी : हलेदो र नीर ।

**मिश्रेयके मुरल्याञ्च वातपत्रोऽथ मुस्तके ।**
**अब्दोऽभ्रके श्वेतपद्मे पुष्करं पुष्करे मतम् ॥३५॥**

मिश्रेया : मदिसे सुप वा सागविशेष । मुरल : माछोविशेष । वातपत्र : ? । मुस्तक : मोथे । अब्द : नागरमोथे । अभ्रक : अभ्रख । पुष्कर : सेतो कमल र तलाउ ।

**तुण्डिकेर्यां च कार्पासे तुण्डिका च प्रशस्यते ।**
**धुस्तूरे च विडे धूर्तः श्रीवेष्टे सूचिपत्रके ॥३६॥**

तुण्डिकेरिका (तुण्डिकेरी) : कपास र गोलकाँक्री । धूर्त : धुस्तूर (धतुरो) र विड (बिरेनुन) । श्रीवेष्ट : तारपिन । सूचिपत्रकम् : झारविशेष, उखुविशेष ।

**वृक्षधूपो हिमांशौ स्यात् कर्पूरे च प्रकीर्त्तितः ।**
**जातीफलं तु शैलूषे श्रीफले च सितावरी ॥३७॥**



वृक्षधूप : सल्लाको खोटो । हिमांशु : कपुर । कर्पूर : कपुर । जातीफलम् : जाइफल । शैलूष : बेलको रूख । श्रीफल : बेल, अमला, खिर्नी, नरिवल, कुभिण्डो, आँक । सितावरी : बाकुची । ( शितावरी : सुनिषण्णक ।) ।

**सूचिपत्रे तु वाकुच्यां शर्करा गण्डदूर्वयोः ।**
**मत्स्यण्डिका तु द्राक्षायां चराब्दे तापसप्रिया ॥३८॥**

सूचिपत्र : झारविशेष, सुनिषण्णक, उखुविशेष । बाकुची : बकुची । शर्करा : सखर । गण्डदूर्वा : उशीर; घोडेदूबो । मत्स्यण्डिका : खुँदो । द्राक्षा : अङ्गुर । तापसप्रिया : दाख

**फञ्जी तु वोकडी चैव अजान्त्र्यान्तु प्रचक्षते ।**
**अर्कावर्त्ते रवौ सूर्य्यः पेयं क्षीरे जले स्मृतम् ॥३९॥**

फञ्जी : सानो बाटुलपाते, चिण्डे, मजिठो । वोकडी : साँढे गनाउने दूधे लहरो । अजान्त्री : साँढे गनाउने दूधे लहरो । ठुलो (सानो) बाटुलपाते । रवि : सूर्य र आँक । पेयम् : दूध र पानी ।

**कर्पूरे चुक्रके चन्द्रः क्षौद्रे ताप्ये च माक्षिकम् ।**
**मञ्जिष्ठा तगरे भण्डी तूच्चटा गुञ्जमुस्तयोः ॥४०॥**

चन्द्र : कर्पूर (कपुर) र चुक्रक (अमिलो पालुङ्गो) । माक्षिक : क्षौद्र (मह) र ताप्य (धातुमाक्षिक) । भण्डी : मञ्जिष्ठा (मजिठो) र तगर (?) । उच्चटा : गुञ्ज (रातीगेडी) र मुस्ता (नागरमोथे) ।

**सुवर्चलं मातुलिङ्गे रुचके च सुवर्चला ।**
**अर्कावर्त्ते तु मण्डूक्यां ...॥**

रुचक : मातुलिङ्ग (बिमिरो) र सुवर्चल वा सौवर्चल (सौँचर नुन) । अर्कभक्त, मण्डूकी र सुवर्चला : हुहुरे । मण्डुकी र सुवर्चला : ब्राह्मी ।

**... ह्रीवे(बे)र पिचुमर्दयोः ॥४१॥**
**निम्बोऽथ सप्तलायान्तु सप्तला नवमल्लिका ।**
**लाङ्गल्यां गजपिप्पल्यां ख्याता वह्निशिखा तथा ॥४२॥**

ह्रीवेर : सुगन्धबाल । पिचुमर्द (पिचुमन्द) : नीम । निम्ब : नीम । सप्तला : हात्तीकाने (सप्तला) र नवमल्लिका (नेवारी फूल) । लाङ्गली : नरिवल, (कलिहारी नामक विष, लाङ्गलिनी), जलपिप्ला । ज्योतिष्वह्निशिखा : कलिहारी विष, धयैँरो, गजपिप्पलि ।

**ज्योतिष्मत्यां काकजङ्घा पारावतपदी तथा ।**
**दुरालभा यवासे च यासे च...॥**

पारावतपदी : ज्योतिष्मती (ठूलो मालकागुनो) र काकजङ्घा । दुरालभा : यवास र यास ।

**...क्षुरको मतः ॥४३॥**
**गोचु (क्षु?)रे कोकिलाक्षे च क्षुरे गोकण्टके क्षुरः ।**
**पुष्करञ्च पलाशे च क्षीरश्रेष्ठः प्रकीर्तितः ॥४४॥**

क्षुरक : गोचुर (गोक्षुर ?, गोखुर) र कोकिलाक्ष (तालमखाना) । क्षुर : सानो जातको गोखुर वा गोकण्टक, मुजविशेष, पिडार । क्षीरश्रेष्ठ : पुष्कर र पलाँश (?) ।

**सोमो धान्याभ्रके सोमे प्रिया मद्येऽङ्गनान्तरे ।**
**मुनिद्रुर्घण्टुकाऽगस्त्येऽथामृणालमुशीरके ॥४५॥**

**लामज्जके ...।**

सोम : सोमलता, चन्द्रमा, अमृत, कपुर आदि । धान्याभ्रकम् : आयुर्वेद अनुसार धानको सहायताले प्रशोधन गरिएको अभ्रक वा यस्तो प्रशोधन-प्रक्रिया । प्रिया : मद्य (मदिरा) र अङ्गना (पत्नी) । मुनिद्रु (मुनिद्रुम) : टेण्टुका : टटलो । मुनिद्रु (मुनिद्रुम) : अगस्त्य : अगस्ति । अमृणाल : उशीर : खसखस । अमृणाल : लामज्जक : झारविशेष ।

**...ब्रह्मवृक्षो रक्तागस्त्ये पलाशके ।**
**वटे प्लक्षे च शृङ्गी स्यात् कान्तारो वनवंशयोः ॥४६॥**

ब्रह्मवृक्ष वा ब्रह्मवृक्षक : रक्तागस्त्य ? : डुम्री । ब्रह्मवृक्ष वा ब्रह्मवृक्षक : पलाश : पलाँस । शृङ्गी : वट : बर । शृङ्गी : प्लक्षा : पाखरी । कान्तार : वन । कान्तार : वंश : उखु ।

**भूतृणे धान्यके छत्रं मूलके शिग्रुमूलके ।**
**मूलकञ्च यमानी तु दीपिका बस्तमोदयोः ॥४७॥**

भूतृण : धान्यक : ? : सानो पिर्रे झार । भूतृण : छत्र : पिर्रेविशेष । मूलक : शिग्रूमूलक : सजिवन ? । मूलक : मुला । दीपिका : दीप्यका : यमानी : यवानी : ज्वानु । दीपिका : दीप्यका : बस्तमोदा : अजमोदा ।

**एलवालुककर्कट्योर्वालुकं क्षीरभूरुहम् ।**
**ताम्रं चोदुम्बरे चाथ भूर्जेन्द्रा श्रवणी तथा ॥४८॥**

वालुक : एलवालुकम् : सिलटिमुर । कर्कटी : बालुकी : काँक्रोविशेष । उदुम्बर : क्षीरभूरुह : क्षीरवृक्ष : (महुवा, पीपल), खिर्नी र डुम्री । उदुम्बर : ताम्र : तामा । भूर्ज : भोजपत्र । इन्द्रा : इन्द्रेनी लहरो । श्रवणी : सानो गोरखमुण्डी ।

**रीत्यां पुष्पाञ्जने रीतिः सचिवो मन्त्रि धूर्तयोः ।**
**चाणका मूलके मिश्रे शालयोऽथार्कसारिवे ॥४९॥**
**आस्फोतायान्तु ... ।**

रीति : पित्तल र रीतिक (पुष्पाञ्जन) । सचिव : मन्त्रि र धूर्त (कालो धतुरो) । मिश्र वा चाणाख्यमूलक : ठूलो जातको मुला । मूलक : मुला । शाल : साल । अर्क : आँक । सारिवा : शारिबा, अनन्तमूल, काढेबोटे दुरालभा, सिस्नु । आस्फोता : सेतो सारिवा ।

**.....पर्जन्यो वृष्टिदारुहरिद्रयोः ।**
**लकुचं चुक्रवास्तुके लिकुचेऽथ गुणा मता ॥५०॥**

पर्जन्य : वृष्टि (वर्षा) । पर्जन्या : दारुहरिद्रा (चुत्रो) । लिकुच : चुक्रवास्तुक (अमिलो पालुङ्गो) । लिकुच : लकुच (बडहर) ।

**दूर्वायां मांसरोहिण्यां सातला मांसरोहिणी ।**
**उभे चर्मकषायन्तु नीवारे पिण्डकर्बुरे ॥५१॥**

दूर्वा : दूबो । मांसरोहिणी : ऐँसेलु । सातला : सप्तला (सातला वा हात्तीकाने वा सिकाकाई) । चर्मकषा : सात धारे सिउँडी । ऐँसेलु । हात्तीकाने । नीवार : नाभो धान । पिण्डकर्बुर (पिण्डखर्जूर) : ? ।

**मुनिप्रियो वरायान्तु गुडूची तु विडङ्गके ।**
**रसन्तु पारदे बोले रसः पारद चर्मणोः ॥५२॥**

मुनिप्रिय : नाभो धान । छोहोरा । बिमिरोको रूख । वरा : गुडूची (गुर्जो) र विडङ्ग (वायुविडङ्ग) । रस : पारद (पारो) र बोल । रस : पारद (पारो) र चर्मसार वा चर्माम्भ (शरीरभित्र बन्ने खानपिनको रस) ।

**भल्लूकः शुनके ऋक्षे पद्मिन्यां नलिनीत्विभी ।**
**किंशुके प्रवरौ ख्यातौ आरूके परिकीर्तिताः ॥५३॥**

भल्लूक : शुनक (कुकुर) र ऋक्ष (भालु) । पद्मिनी : नलिनी (कमलको पूरा बोट) र इभी (ढोई) । किंशुक : पलाँस । प्रवर : अगर वा धुपी । आरूक : आरु, सुङ्गुर, गँगटो ।

**चित्रके मेथिकाबीजे ज्योतिष्कश्चाथ वार्षिके ।**
**त्रायमाणाऽन्यपुष्ट्याञ्च मेथिकाचित्रमूलयोः ॥५४॥**
**वल्लरी ...।**

ज्योतिष्क : चित्रक (सेतो चितु) र मेथिकाबीज (मेथी) । वार्षक वा वार्षिक वा वार्षिकी : त्रायमाणा (मुडिलो) र वर्षे बेली । अन्यपुष्ट : कोइली । अन्यपुष्टा : पोथी कोइली । मेथिका : मेथी । चित्र :

तरबुजो, ऑडर, अशोक, चित्तल आदि । मूल : पिप्लाको जरा, ओल आदि । चित्रमूल : ? । वल्लरी : लहरा, मेथी, बोझो, पालुवा, लहरे दुबो आदी ।

**...चाथ कलभो धुस्तूरे च गजार्भके ।**
**त्रुटिनीलिकयोरेला शिखण्डी च मयूरके ॥५५॥**
**सुवर्णयूथिकायाञ्च ...।**

कलभ : धुस्तूर (धतुरो) र गजार्भक (छावा) । त्रुटि : नीलिक (?) र ऐला (सुकुमेल) । शिखण्डी : मयूर र पहेँलो जुही ।

**...कारवे रुचके तथा ।**
**तत्प्रोक्तं कृष्णलवणं दाडिमे च कपित्थके ॥५६॥**
**स्मृतं कुचफलं ...।**

कारव : काग । रुचक : सौँचर नुन वा बिमिरो । कृष्णलवण : सौँचर नुन । कुचफल : दारिम र खयर ।



**...शाकश्रेष्ठः कुष्माण्डके तथा ।**
**कलिङ्गे च स्मृतश्चाथ खगो वायौ च पक्षिणि ॥५७॥**

शाकश्रेष्ठः बेथे, भन्टा, जिरीको साग, जीवन्तीविशेष । कुष्माण्डी, कुष्माण्डक : कुभिण्डो । कुष्माण्डिका : शालिधानविशेष । कलिङ्ग : तरबुजो, ठुलोकुरो र शिरीष । खग : वायु र चरा ।

**धनुर्वृक्षो धन्वनागे स स्याद्भल्लात इत्यपि ।**
**घेटुके खड्गशिम्ब्याञ्च पृथुशिम्ब्यथ...॥**

धनुर्वृक्ष : धन्वन : दबदबे रूख । भल्लात : भलायो । घेटुक : ? । खड्गशिम्बी : तरबारे सिमी । पृथुशिम्ब : सानो खाले टटलो ।

**...चेतना ॥५८॥**
**पथ्यारुष्कस्तु निचुले अशोके वञ्जुलः स्मृतः ।**
**कपिकच्छ्वां त्वपामार्गे मर्कटी ...।**

चेतना : पथ्या (हर्रो) । पथ्या : नफल्ने चटेल, गोठाले काँक्रो, हर्रो, रातीगेडी आदि । अरुष्क : भलायो । वञ्जुल : निचुल (बेत) र अशोक । मर्कटी : कपिकच्छु : काउसो र अपामार्ग : दतिवन ।

**...चान्यपक्षिणी ॥५९॥**
**भारद्वाजो भवेद्वन्यकार्पासे चाथ गुग्गुलौ ।**
**दहनागुरौ पुरश्च प्रोक्ताथ जतुपत्रिका ॥६०॥**

भारद्वाज : चराविशेष र वन्यकार्पास : वनकपास । पुर : दहनागुरु (गुजराती धूप) र गुग्गुल ( गोकुलधूप) । जत्रुपत्रिका : ? ।

**क्षुद्राश्मभेदे चाङ्गेर्यामतसी शालिपर्णिका ।**
**एकमूला तु कुम्भी स्यात् पाटलीद्रोणपुष्पयोः ॥६१॥**

क्षुद्राश्मभेद : ? । चाङ्गेरी : चरीअमिलो । एकमूला : अतसी (आलस) र शालिपर्णी (खिरौंलो, मासलहरी, सतिबयर) । कुम्भी : पाटली (पाडरी) र द्रोणपुष्पी ।

**वाराही च हरिक्रान्ता विष्णुक्रान्ताऽभिधा मता ।**
**सारङ्गश्चातके रङ्का शङ्खो वारिभवे नखे ॥६२॥**



विष्णुक्रान्ता : वाराही (रानीगिंठो) र हरिक्रान्ता (नीलो अपराजिता) । सारङ्ग : चातक (काकाकुल) र रङ्का : ? । शङ्ख : शङ्ख । वारिभव : ? । नख : नखी र नङ ।

**मांसलं तु फले प्रोक्तं वृन्ताके तु कलिङ्गके ।**
**निष्पत्रिकायां वंशाग्रे करीरं सम्प्रकीर्त्तितम् ॥६३॥**

मांसल : वृन्ताकफल (भन्टा) र कलिङ्गफल (तरबुजो) । करीर : निष्पत्रिका (करीर वा करील) र वंशाग्र (बाँसको सुप्लो वा तामा वा टुसो) ।

**माषपर्ण्यान्तु गुञ्जायां काम्भोजी चाथ पूतना ।**
**गन्धमांस्यां हरीतक्यां चित्राङ्गं म्लेच्छतालयोः ॥६४॥**

काम्भोजी : माषपर्णी (काम्बोजी, बनमास) र गुञ्जा (रातीगेडी) । पूतना : गन्धमांसी (जटामसी) र हरीतकी (हर्रो) । चित्राङ्ग : म्लेच्छ (हिङ्गुल) र ताल (हरिताल) ।

**अङ्कोलके तु मदनं ख्यातं गन्धोत्कटे बुधैः ।**
**तिनिशे शिंशपायान्तु भस्मगर्भः प्रकीर्त्तितः ॥६५॥**

अङ्कोल : मदन (अङ्कुल) । गन्धोत्कट : दमन, दमना झार । भस्मगर्भ : तिनिश र शिंशपा (कैलो सिसौ) ।

**वाते मरुद्गदे चैव ख्यातो वैद्यैः समीरणः ।**
**क्षीरं दुग्धे तवक्षीरे क्षवथुः क्षुतकासयोः ॥६६॥**

वात : वायुजन्य रोग र वायु । क्षीर : दूध र दहीयुयैँलो । क्षवथु : खोकी । र हाच्छिउँ आइरहने रोग ।

**सितमन्दारके पुष्पविशेषे कुरवः स्मृतः ।**
**सुषवी कटुहुञ्च्याञ्च विश्रुता स्थूलजीरके ॥६७॥**

कुरव : सितमन्दारक (सेतो आँक) र पुष्पविशेष (रातो कटसरैया) । सुषवी : मुगरेलो, करेलो, जीरा । कटुहुञ्चि : ? । स्थूलजीरक : मुगरेलो ।

**कण्टकी खदिरे प्रोक्ता वृन्ताके चाथ नीलिका ।**
**सिन्दुवारे तु नीलिन्यां पिके चैवाथ कोकिला ॥६८॥**
**कोकिलाक्षे च ...।**

कण्टकी : खदिर (खयर) र वृन्ताक (भन्टा) । नीलिका : नीलिनी (नीर) र सिन्दुवार (सिमाली) । पिक : भाले कोइली र तालमखाना ।

**...गान्धार्य्यां पत्री स्यात्सा यवासके ।**
**चक्राङ्गी चैव रोहिण्यां मञ्जिष्ठायां प्रकीर्त्तिता ॥६९॥**

गान्धारी : दुरालभा । यवास : दुरालभा । पत्री : ताड, दमना, खयर, रूख, चरा आदि । चक्राङ्गी : कुटकी, मजिठो, काकडासिङ्गी, मुसाकर्णी, सुदर्शनलता । रोहिणी : गुर्जो, ऐँसेलु, कुटकी, मजिठो, खमारी, हर्रो मञ्जिष्ठा : मजिठो ।

**मसूरा त्रिवृतायाञ्च प्रोक्ता धान्यविशेषके ।**
**गिरिजं गैरिकं प्रोक्तं शिलाजतु प्रशस्यते ॥७०॥**

मसूरा : त्रिवृत (सेतो निसोत) र धान्यविशेष (मुसुरो) । गिरिजम् : गैरिक (गेरु) र शिलाजतु (शिलाजित) ।

**चन्द्रिका चन्द्रकान्तौ च निर्गुण्ड्याञ्च प्रकीर्तिता ।**
**फञ्जी योजनबल्यां तु भार्ग्यां ....।**

चन्द्रकान्त : चन्दन, चन्द्रकान्तमणि । चन्द्रिका : लहरे बेली, चन्द्रमाको किरण, सेतो कण्टकारी, मेथी, सुकुमेल, निर्गुण्डी : सिमालीविशेष । फञ्जी : सानो बाटुल्पाते । योजनबल्ली : मजिठो । फञ्जी : भार्ग्य (भार्ङ्गी, चिण्डे) ।

**...चैवाथ नीलिका ॥७१॥**
**मृगाक्षी श्रीफलीकायां मृगाक्षी धात्रिकाफलम् ।**
**ख्याताऽमृतफले चाथ श्यामेक्षुः कोकिलाक्षकः ॥७२॥**
**इक्षुरके ...।**

नीलिका : श्रीफला (नीर) । मृगाक्षी : गोठालेकाँक्रो । धात्रिकाफलम् : अमला । अमृतफल : परबर, पारेबत । अमृतफला : दाख । श्यामेक्षु र कोकिलाक्षक : कालो उखु । इक्षुर : कालो उखु ।

**...वक्रशल्यां कटुबिम्बी प्रचक्षते ।**
**दन्त्यन्तरे विभाण्ड्यां च प्रख्याता कर्तरी बुधैः ॥७३॥**

वक्रशल्य : झारविशेष । कटुबिम्बी : ? । दन्ती : अजयपाल । विभाण्डी : मृगासिङ्गा । कर्तरी : ? ।

**अभया च समाख्याता हरीतक्यमृणालयोः ।**
**जन्तुकायां जनन्यान्तु भ्रामरी च भिषग्वरैः ॥७४॥**

अभया : हरीतकी (हर्रो) र अमृणाल (खसखस) । जन्तुका : जननी । जननी : जन्तुका भ्रामरी : पुत्रदात्री ।

**गोरसे रोचने गव्यं कार्पास्यां चव्यचव्यके ।**
**गोरोचना रोचनायां ख्याता स्याद्वंशरोचना ॥७५॥**

गव्य : गोरस र रोचन (गोरोचन) । चव्य : कार्पास (कपास) र चव्यक (चाँबो) । रोचना : गोरोचन र वंशरोचन (वंशलोचन) ।

**ज्योतिष्मत्यां पक्षिभेदे पिङ्गला च प्रकीर्तिता ।**
**अमृते शालिपर्ण्यान्तु सुधा च परिकीर्तिता ॥**
**रसराजः समाख्यातः पारदे च रसाञ्जने ॥७६॥**

पिङ्गला : ज्योतिष्मती (मालकागुनु) र पक्षिभेद (लाटोकोसेरो विशेष) । सुधा : अमृत र शालिपर्णी (साकिनु) । रसराज : पारो र रसाञ्जन ।

**वल्लीकरञ्जे सितपाटलायां कुबेरनेत्राऽथ जटादिमांस्याम् ।**
**मांसी रुदन्त्यां लवणे महीजे कान्तायसाश्मे तु हि रोमकाख्यम् ॥७७॥**

वल्ली : चाभो, लहरो, सिस्नु, विष्णुक्रान्ता । करञ्ज : करौँजी । सितपाटला : ? । कुबेरनेत्र : कुबेराक्षी ? । मांसी : जटामसी । महामांसी : रुदन्ती : रुदिलो । लवण : नुन । महीज : रूख । महीजम् : अदुवा । कान्त : कान्तिसार, चन्द्रमा आदि । कान्तायस : कान्तलौह । रोमक : चुम्बक, नुनविशेष ।



**॥ इति द्व्यर्थकवर्गः ॥**

॥ दुई अर्थ दिने शब्दहरू समाप्त भए ॥

## त्र्यर्थकवर्गः
## तीन अर्थ दिने शब्दहरू

**सितजे शतपत्रे च वासन्त्यां माधवी भवेत् ।**
**ज्योतिष्मत्यां किणिह्याञ्च सुपुष्प्यां कटभी स्मृता ॥१॥**

माधवी- सितज (महको चिनी) वा सितजा (मिश्री), शतपत्र (कमल) र वासन्ती (सानो नेवारी फूल) । कटभी- ज्योतिष्मती (मालकागुनो), किणिही (कालो कराही) र सुपुष्पी (सेतो अपराजिता)।

**पुनर्नवेन्द्रगोपौ तु वर्षाभूर्दर्दुराः स्मृताः ।**
**सुकुमारस्तु श्यामाके चम्पके क्षवके तथा ॥२॥**

वर्षाभू : इन्द्रगोप (वीरबहुटी नामक कीरा), पुनर्नवा र दर्दुर (भ्यागुतो) । सुकुमारः- श्यामाक ( सामाधान), चम्पक (चाँप) र क्षवक (बोडी) ।

**स्पृक्का तु सुकुमारायां नेपाली मालती स्मृता ।**
**महाबला गवाक्षी च गिरिकर्णी गवादनी ॥३॥**


स्पृक्काः-सुकुमारा (कपुरपाती), नेपाली (नेवारी) र मालती (चमेली) । महाबलाः- गवाक्षी ( खाक्सी), गिरिकर्णिका (सेतो अपराजिता) र गवादनी (ऐरेलु) ।

**अरिष्टस्तक्रभेदे च निम्बे च लशुने तथा ।**
**कटुका वंशदूर्वास्तु शतपर्वा च किंशुकः ॥४॥**
अरिष्ट-तक्रभेद (मोहीविशेष), निम्ब (नीम) र लशुन (लसुन) । कटुका-वंश, दूर्वा र शतपर्वा ( कुटकी) ।

**ज्योतिष्मत्यां पलाशे च नन्दीवृक्षेऽथ लाङ्गली ।**
**हलिन्यां गजपिप्पल्यां नारिकेले प्रशस्यते ॥५॥**

किंशुक-ज्योतिष्मती (मालकागुनु), पलाश (पलाँश) र नन्दीवृक्ष (टुनी) । लाङ्गली- हलिनी ( कलिहारी नामक विष), गजपिप्पली (चाभोको फल) र नारिकेल (नरिवल) ।

**कदम्बे मल्लिकाख्ये च शिरीषे वृत्तपुष्पकः ।**
**गिरिकर्णीन्द्रवारुण्यां पिण्डिन्याञ्च गवादनी ॥६॥**

वृत्तपुष्पक-कदम्ब (कदम), मल्लिका (मोतिया, वृत्तपुष्पा) र शिरीष (वृत्तपुष्प) । गवादनी-गिरिकर्णी (नीलो अपराजिता), इन्द्रवारुणी (ऐरेलु) र पिण्डनी (गाईलाई खुवाइने पिण्ड ?) ।

**शिरीषे मधुके दन्त्यां मधुपुष्पन्तु वञ्जुलः ।**
**अशोके चैव भेरिण्यां निचुले चाथ नाकुली ॥७॥**

मधुपुष्प- शिरीष, मधुक (महुवा) र दन्ती (अजयपाल) । वञ्जुल-अशोक, भेरिणी (?) र निचुल ( बेत) ।

**सर्पाक्ष्यां सितक्षुद्रायां यवतिक्तेऽथ दर्दुरः ।**
**भल्लातके ऋषभकेऽनडुहि च प्रशस्यते ॥८॥**

नाकुली-सर्पाक्षी (गन्धनाकुली), सितक्षुद्रा (सेतो कण्टकारी) र यवतिक्ता (कालानाथ) । दर्दुर-भल्लातक (भलायो), ऋषभक र अनडुहि (गाई) ।

**मयूरके मेथिकायां चित्रके च भवेच्छिखी ।**
**कदल्यामजमोदायां गजे हस्तीति सञ्ज्ञका ॥९॥**

शिखी-मयूर, मेथिका (मेथी) र चित्रक (सेतो चितु) । हस्ती-कदली (केरा), अजमोदा र गज ( हात्ती) ।

**अमोघा पद्मभेदे स्यात् पाटल्याञ्च विलङ्गके ।**
**कुल्माषः काञ्जिके वंशे गन्धमाल्यां सुविश्रुतः ॥१०॥**

अमोघ-पद्मभेद (कमलविशेष), पाटली (पाडरी) र विल(ड?)ङ्गक (वायुविडङ्ग)। कुल्माष-काञ्जिक (काँजी), वंश (?) र गन्धमाली (?) ।

**सोमायां महिषीवल्लीब्राह्मी हेमलताः स्मृताः ।**
**वंशे स्यान्नारिकेले च ताले च तृणराजकः ॥११॥**

सोमा (सौम्या ?)-महिषीवल्ली (भैँसेलहरो ?), ब्राह्मी (ठुलो मालगागुनु) र हेमलता (पहेँलो जिरी साग) । तृणराजक-वंश (?), नारिकेल (नरिवल) र ताल (ताड) ।

**मुस्तायामभ्रके मेघे घनश्चाथ पितृप्रियः ।**
**अगस्त्ये भृङ्गराजे च कालशाके च विश्रुतः ॥१२॥**

घन-मुस्ता (मोथे), अभ्रक र मेघ (बादल) । पितृप्रिय-अगस्त्य (अगस्ति), भृङ्गराज ( नीलो भृङ्गीराज) र कालशाक (करेमु, नरिचो) ।

**दन्तशठस्तु चाङ्गेर्यां जम्बीरेऽथ कपित्थके ।**
**दहनोऽरुष्करे प्रोक्तो वृश्चिकाल्याञ्च चित्रके ॥१३॥**

दन्तशठ-चाङ्गेरी (चरीअमिलो), जम्बीर (ज्यामिर) र कपित्थक (कैथ) । दहन-अरुष्कर (भलायो), वृश्चिकाली (भेडासिङ्गी ?) र चित्रक (चितु) ।

**विडङ्गे च जयन्त्याञ्च मोटायां च बला स्मृता ।**
**आम्रातके शिरीषे च प्लक्षे चैव कपीतनः ॥१४॥**

बला-विडङ्ग (वायुविडङ्ग ?), जयन्ती र मोटा (?) । कपीतन-आम्रातक (अमारो), शिरीष र प्लक्ष (पाखरी) ।



**कुडुहुञ्च्यां कारवल्ली काण्डीरे चीरपद्मके ।**
**यवासे क्षुद्रखदिरे कार्पासे च मरुद्भवा ॥१५॥**

कारवल्ली-कुडुहुञ्ची (काँक्रोविशेष), काण्डीर (करेलो) र चीरपद्मक (?) । मरुद्भव-यवास ( दुरालभा), क्षुद्रखदिर (?) र कार्पास (कपास) ।

**समुद्रान्ता च स्पृक्कायां कार्पासे च यवासके ।**
**मण्डूकपर्णी मण्डूक्यां मञ्जिष्ठाऽऽदित्यकान्तयोः ॥१६॥**

समुद्रान्ता-स्पृक्का (कपुरपाती), कार्पास (कपास) र यवासक (दुरालभा) । मण्डूकपर्णी- मण्डूकी ( ब्राह्मी), मञ्जिष्ठा (मजिठो) र आदित्यकान्ता (हुहुरे ?) ।

**ऋषभके तु वासायां बलीवर्दे वृषः स्मृतः ।**
**चम्पेयं चम्पके प्रोक्तं किञ्जल्के नागकेसरे ॥१७॥**

वृष-ऋषभक (बुटीविशेष), वासा (असुरो) र बलीमर्द (साँढे) । चाम्पेय-चम्पक (चाँप), किञ्जल्क ( कमलको केसर) र नागकेसर ।

**उशीरे च लवङ्गे च श्रीखण्डे वारिसम्भवः ।**
**पलितं शैलजे श्यामे शुभ्रकेशे च विश्रुतम् ॥१८॥**

वारिसम्भव-उशीर (खसखस ?), लवङ्ग (ल्वाङ) र श्रीखण्ड । पलित-शैलज (पत्थरकुङ्कुम), श्याम (?) र शुभ्रकेश (फुलेको कपाल)।

**कुन्दुरुको धूपभेदे शल्लक्याञ्च तृणान्तरे ।**
**पृथ्वीकायां हिङ्गुपत्री स्थूलैला कलिका स्मृता ॥१९॥**

कुन्दुरुक-धूपभेद (काँडेसल्लाको खोटो), शल्लकी (गोब्रेसल्लो) र तृणान्तर (सिरु) । पृथ्वीका-हिङ्गुपत्री (जिम्बु), स्थूलैला (अलैंची) र कलिका (?) ।

**शतपत्रो राजकीरे कमले पुष्पभेदके ।**
**न्यग्रोधस्त्वाखुपर्ण्याञ्च विषपर्ण्यां वटे स्मृतः ॥२०॥**



शतपत्र-राजकीर (राजसुँगा), कमल र पुष्पभेद (गुलाफ ?) । न्यग्रोध-आखुपर्णी (मुसाकाने झार), विषपर्णी (?) र वट (बर) ।

**क्षुद्राग्निमन्थे तर्कारी जीमूते चाग्निमन्थके ।**
**श्वेते रौप्ये च मीनाण्ड्यां सिता च परिकीर्तिता ॥२१॥**

तर्कारी-क्षुद्राग्निमन्थ (सानो गिनेरी), जीमूत (सानो बनतोरियाँ) र अग्निमन्थक (ठुलो गिनेरी) । सिता-श्वेत (सेतो), रौप्य (चाँदी) र मीनाण्डी (चिनी) ।

**सोमवल्कस्तु रीठायां कदरे कृष्णगर्भके ।**
**शैलेयके शिलाह्वा च कुनट्याञ्च शिलाजतौ ॥२२॥**

सोमवल्क-रीठा (रिट्ठो), कदर (सेतो खयर) र कृष्णगर्भक (काफल) । शिलाह्वा-शैलेयक ( पत्थरकुङ्कुम ?), कुनटी (मनशिला) र शिलाजतु (सिलाजित) ।

**पाटलायां माषपर्ण्यां काश्मर्यां कृष्णवृन्तिका ।**

**जटामांस्याञ्च मांसे च लाक्षायाञ्च पलं स्मृतम् ॥२३॥**

कृष्णवृन्तिका-पाटला (वाडरी ?), माषपर्णी (बनमास) र काश्मरी (खमारी) । पलम्-जटामांसी ( जटामसी), मांस (मासु) र लाक्षा (लाहा) ।

**समङ्गायां रक्तपादी मञ्जिष्ठा च बला स्मृता ।**
**भल्लातके बिल्वतरौ पार्थे वीरतरुः स्मृता ॥२४॥**

समङ्गा-रक्तपादी (लज्जावती), मञ्जिष्ठा (मजिठो) र बला (बलु) । वीरतरु-भल्लातक (भलायो), बिल्वतरु (वीरतरु) र पार्थ (काउलो) ।

**दुःस्पर्शायां कण्टकारी कपिकच्छुर्दुरालभा ।**
**वत्सादन्यां गुडूची च तार्क्ष्यीच गजपिप्पली ॥२५॥**

दुःस्पर्शा-कण्टकारी, कपिकच्छु (काउसो) र दुरालभा । वत्सादनी-गुडूची (गुर्जो), तार्क्ष्यी ( पातालगरुडी) र गजपिप्पली (चाभोका गेडा) ।



**आमण्डे पुष्करे कञ्जे पद्मपत्रं प्रचक्षते ।**
**कालेयकं तु दार्व्याञ्च कुङ्कुमे हरिचन्दने ॥२६॥**

पद्मपत्र-आमण्ड (अँडिर), पुष्कर (पुष्करमूल) र कञ्ज (कमल) । कालेयक-दार्वी (चुत्रो), कुङ्कुम र हरिचन्दन ।

**श्रीखण्डे चाजगन्धे स्याच्छ्रीवेष्टे तिलपर्णिका ।**
**लोध्रे पूगीफले चैव तूले च क्रमुकः स्मृतः ॥२७॥**

तिलपर्णिका-श्रीखण्ड, अजगन्धा (अजमोदा) र श्रीवेष्ट (तारपिन) । क्रमुक-लोध्र (रातो लोध), पूगीफल (सुपारी) र तूल (किम्बु) ।

**पिप्पल्यां यूथिकायाञ्च जीरके माधवी भवेत् ।**
**अजमोदा शताह्वायां मिशिश्चैव शतावरी ॥२८॥**

माधवी-पिप्पली (मागधी, पिप्ला), यूथिका (मागधी, जुही) र जीरक (मागध, जीरा) । शताह्वा-अजमोदा, मिशि (सुप) र शतावरी (कुरिलो) ।

**त्रपुस्यां कर्कटी तौसी तथा स्याद्वनकर्कटी ।**
**कुस्तुम्बर्याञ्च भूधात्र्यां धान्यं व्रीह्यादिकं स्मृतम् ॥२९॥**

कर्कटी-त्रपुसी (काँक्रो), तौसी (?) र वनकर्कटी (बनकाँक्रो) । धान्य-कुस्तुम्बरी (कुस्तुम्बुरु, धनियाँ), भूधात्री (भुईअमला) र व्रीहि (धानविशेष)।

**त्रपुसी देवदाली च घोटिके शफले स्मृता ।**
**तण्डुल्यां यवतिक्ता च शशाण्डुल्यब्दनादयोः ॥३०॥**

त्रपुसी-देवदाली (सानो बनतोरियाँ), घोटिका (हाडेबयर, घोडी ?) र शफल (?) । तण्डुली-यवतिक्ता (कालानाथ), शशाण्डुली (काँक्रोविशेष) र अब्दनाद (मेघगर्जन ?) ।

**सुरदारुर्गन्धबध्वोश्चण्डायां गन्धमादिनी ।**
**श्यामेक्षुके क्षुरकेऽपि काकाक्षे कोकिलाक्षकः ॥३१॥**

सुरदारु-गन्धर्ववधू (गन्धबन्धु, आँपको बोट ?), चण्डा (?) र गन्धमादिनी (?) । कोकिलाक्षक : श्यामेक्षुक (कालो उखु), क्षुरक (तालमखाना) र काकाक्ष (काकाक्षी, कौवाठोरी ?) ।



**वराङ्गं मस्तके गुह्ये त्वचायाञ्च प्रशस्यते ।**
**कर्ण्यां श्वेतकिणिह्याञ्च कटभ्यां गिरिकर्णिका ॥३२॥**

वराङ्ग-मस्तक (टाउको), गुह्य (स्त्रीको जननेन्द्रिय र त्वचा (दालचिनी) । गिरिकर्णिका- कर्णी ( नीलो अपराजिता), श्वेतकिणिही (सेतो कराही) र कटभी (अपराजिता ?) ।

**पतङ्गोऽर्के मधूके च पट्टरञ्जनके तथा ।**
**द्राक्षा च शतवीर्यायां दूर्वा चैव शतावरी ॥३३॥**

पतङ्ग- अर्क (?), मधूक (पानी महुवा) र पट्टरञ्जनक (बकचन्दन) । शतवीर्या-द्राक्षा (मुनक्का), दूर्वा (दुबो) र शतावरी (कुरिलो) ।

**शुण्ठौ प्रतिविषा चैव विश्वायाञ्च शतावरी ।**
**जया हरिद्रा विजया जयन्त्याञ्च प्रशस्यते ॥३४॥**

शुण्ठी-प्रातिविषा (आतिस), विश्वा (सुठो) र शतावरी (कुरिलो) । जयन्ती-जया (जयन्ती), हरिद्रा ( हलेदो) र विजया (हर्रो) ।

**कच्छुरायां दुरालम्भा स्वयङ्गुप्ता यवासकः ।**
**पुण्ड्रेक्षौ चाथ गोधूमे रसाले च प्रचक्षते ॥३५॥**

कच्छुरा-दुरालम्भा (लहरे दुरालभा), स्वयंगुप्ता (काउसो) र यवासक (दुरालभा) । पुण्ड्र-इक्षु ( उखु), गोधूम (गहुँ ?) र रसाल (आँप ?) ।

**द्राक्षायान्तु रसाला स्याद्वक्ष्यते च भिषग्वरैः ।**
**हैमवत्यां वचा श्वेतक्षीरिणी लोमशा स्मृता ॥३६॥**

द्राक्षा-रसाला । हैमवती-वचा (बोझो), श्वेतक्षीरिणी (थाकल) र लोमशा (?) ।

**बिल्वे धात्रीफले चैव श्रीफलं चार्द्रचिक्कणे ।**
**जात्यां पक्षिविशेषे च कमलं सारसं स्मृतम् ॥**
**तिलके च छिन्नरुहा सुषवी केतकी भवेत् ॥३७॥**



श्रीफल-बिल्व (बेल), धात्रीफल (अमला) र आर्द्रचिक्कण (ताजा सुपारी) । कमल-जाती, पक्षीविशेष र सारस । छिन्नरुहा-तिलक (तिल्को), सुषवी (मुगरेलो ?) र केतकी (केत्तुके) ।

**वंशः सर्जद्रुमे वेणौ कुलाम्नाये च कीर्तितः ।**
**सलिले वत्सनाभे च व्याले चैव विषं स्मृतम् ॥३८॥**

वंश-सर्जद्रुम (साल), वेणु (बाँस) र कुल (कुल) । विष-सलिल (पानी), वत्सनाभ (विषविशेष) र व्याल (विषधर, सर्प ?) ।

**स्थूलकन्दो मुखालुः स्यात् शूरणं हस्तिकन्दकम् ।**
**आम्रातके पीतनकेऽप्यम्लिका च पलाशिका ॥३९॥**

स्थूलकन्द-मुखालु (तरुल), शूरण (ओल) र हस्तिकन्दक (जँाति तरुल) । पलाशिका- आम्रातक (अमारो?), पीतनक (अमारो ?) र अम्लिका (पलाशी) ।

**विषदोह्यां महानिम्बे मदने विषमुष्टिकः ।**
**तगरे कुङ्कुमे प्रोक्तो धुस्तूरे च शठः स्मृतः ॥४०॥**

विषमुष्टिक-विषदोही (?), महानिम्ब (बकाइनु) र मदन (मइनफल) । शठ-तगर, कुङ्कुम र धुस्तूर (धतुरो) ।

**कपित्थः स्वर्णयूथ्याञ्च कुष्माण्डे नागपुष्पके ।**
**तिलके चातिमुक्ते च इक्षुभेदे च पुण्ड्रकः ॥४१॥**

कपित्थ-स्वर्णयूथी, कुष्माण्ड र नागपुष्पक । पुण्ड्रक-तिलक (टिकाविशेष), अतिमुक्ता (नेवारी फूल) र इक्षुभेद (उखुविशेष) ।

**आखोटे वारुणी चैव गवाक्ष्यां चर्मवादिनी ।**
**तोयवल्ल्याञ्च काण्डीरो महादुग्धाऽमृतस्रवा ॥४२॥**

चर्मवादिनी-आखोट, वारुणी र गवाक्षी । तोयवल्ली-काण्डीर (करेलो), महादुग्धा र अमृतस्रवा (जडेलो) ।

**पृथ्व्यां पुनर्नवा मेदा धारिणी च प्रशस्यते**
**मुचुकुन्दे जयापुष्पे गणेर्यां हरिवल्लभा ॥४३॥**



पृथ्वी-पुनर्नवा (सेतो), मेदा र धारिणी । हरिवल्लभा-मुचुकुन्द, जयापुष्प (जपापुष्प ?) र गणेरी ।

**कामुके लघुकाश्मर्यां कैडर्योऽन्यकरञ्जके ।**
**द्राक्षाऽन्तरे शिखरिणी नेवाल्यां दधिभेदके ॥४४॥**

कैडर्य-कामुक, लघुकाश्मरी (काफल) र अन्यकरञ्ज (करञ्जभेद, बल्ढ्याङ्ग्रो) । शिखरिणी-द्राक्षान्तर (दाखविशेष ?), नेवाली (नेवारी फूल) र दधिभेदक (दहीको परिकार) ।

**कुटजेन्द्रयवौ प्रोक्तौ पुष्पकासीसवत्सके ।**
**क्षौद्रे मद्यान्तरे प्रोक्तो मधुयष्ट्यां मधुः स्मृतः ॥४५॥**

पुष्पकासीस-कुटज, इन्द्रयव र वत्सक (पुष्पकासीस) । मधु-क्षौद्र (मह), मद्यान्तर (?) र मधुयष्टि (जेठीमधु) ।

**चटके स्वरसे चैव नीलकण्ठो मयूरके ।**
**शोणितं कुङ्कुमे रक्ते रक्तगन्ध इति स्मृतम् ॥४६॥**

नीलकण्ठ-चटक (भँगेरो), स्वरस (सारस ?) र मयूर । रक्तगन्ध-शोणित (रगत), कुङ्कुम र रक्त ( रातो) ।

**तर्कारी देवदाल्याञ्च अरण्यां वह्निमण्डले ।**
**वसर्यां वृश्चिके चैव काकबन्ध्या सकृत्प्रजा ॥४७॥**

तर्कारी-देवदाली (सानो बनतोरियाँ), अरणी (ठुलो गिनेरी) र वह्निमण्डल (?) । सकृत्प्रजा-वसरी (वत्सरी), वृश्चिकाली र काकब(व)न्ध्या ।

**कट्वङ्ग्याञ्च कटभ्याञ्च पटोल्यां दधिपुष्पिका ।**
**धुस्तूरे केसरे हेम्नि सुवर्णं सम्प्रचक्षते ॥४८॥**

दधिपुष्पिका-कट्वङ्गा (खट्वाङ्गी ?, काउछे सिमी), कटभी (सेतो अपराजिता) र पटोली । सुवर्ण-धुस्तूर (धतुरो), केसर र हेम (सुन) ।

**सुवर्णायां हरिद्रायां वारुणी कणगुग्गुलुः ।**
**वाराह्यां शिशुमार्यां च कन्दभेदे च शूकरी ॥४९॥**



कणगुग्गुल-सुवर्ण (पहेँलो गोकुलधुप), हरिद्रा (हलेदो) र वारुणी (?) । शूकरी-वाराही (सुगुर्नी वा पोथी बनेल), शिशुमारी र कन्दभेद ।

**पलाण्ड्वन्तरे लसुने मूले चाणक्यसञ्ज्ञके ।**
**महाकन्दः समाख्यातो वैद्यशास्त्रार्थकोविदैः ॥५०॥**

महाकन्द-पलाण्डुभेद (रातो प्याज), लसुनविशेष र चाणक्यमूल (ठुलो जातको मुला) ।

**लोहे च वनरम्भायां लघुपाषाणभेदके ।**
**त्रिष्वेतेषु च गिरिजा प्रोक्ता यत्र भिषग्वरैः ॥५१॥**

गिरिजा-लोह, वनरम्भा (वनकेरा) र लघुपाषाणभेद (सानो पाषाणभेद) ।

**जरणः कासमर्दे तु रामठे कृष्णजीरके ।**
**स शमं जायते तीक्ष्णं तगरे च प्रशस्यते ॥५२॥**

जरण-कासमर्द (ठुलो तापे), रामठ (हिङ) र कृष्णजीरक (कालो जिरा) ।

**दुरालभायां कपिकच्छुके स्यात् तथा शिखर्यां दुरभिग्रहा च ।**
**महासमङ्गा बहुपुत्रिका च सा सारिवा स्यात् फणिजिह्विकायाम् ॥५३॥**

दुरभिग्रहा-दुरालभा (लहरे दुरालभा), कपिकच्छु (काउसो) र शिखरी (दतिवन) । फणिजिह्विका-महासमङ्गा (नागबलु), बहुपुत्रिका र सारिवा ।

**॥ इति त्र्यर्थकवर्गः ॥**

तीन अर्थ दिने शब्दहरूको अध्याय सकिएको छ ।

## ॥ चतुरर्थकवर्गः ॥
## चार अर्थ दिने शब्दहरू

**अम्लिकायान्तु चाङ्गेर्यां मोचिका चाम्रचिञ्चके ।**
**वयःस्थायाञ्च काकोल्यौ दार्वी च सोमवल्लरी ॥१॥**

मोचिका : अम्लिका (अमिली), चाङ्गेरी (चरिअमिलो), आम्र (आँप) र चिञ्चका (अमिलीको रस ?) । सोमवल्लरी : वयस्था (गुर्जो), काकोली (कल्छे लहरो), क्षीरकाकोली (दुधे कल्छेलहरो) र दार्वी (चुत्रो) ।

**जन्तुकायां पुत्रदात्र्यां षट्पद्यां भ्रमरी त्वचौ ।**
**भ्रमरी चारको वैद्य शास्त्रमायुष्मते स्मृतः ॥२॥**

भ्रमरी र त्वच : जन्तुका, पुत्रदात्री र षट्पदी (पोथी भमरो) । भ्रमरी : जन्तुका, पुत्रदात्री, षट्पदी र चारक ।

**अभया चिर्भिटा बन्ध्या कर्कोटी च मृगादनी ।**

**पथ्यायां सम्प्रवक्ष्यन्ते चतस्रश्च भिषग्वरैः ॥३॥**

पथ्या-अभया (हर्रो), चिर्भिटा (काँक्रो विशेष), बन्ध्याकर्कोटी (फल नफल्ने चठेल) र मृगादनी ( गोठाले काँक्रोविशेष) ।

**कुष्ठे कुन्दुरुके निम्बे राजके राजभद्रकः ।**
**कटके काचके लोहे तिलके गन्धभेदकः ॥४॥**

राजभद्रक-कुष्ठ (कूट), कुन्दुरुक (खोटो), निम्ब (नीम) र राजक (रजौटा, कालो अजिङ्गर) । गन्धभेदक-कटक, काचक, लोह र तिलक ।

**मीनाख्यायां महाराष्ट्र्यां काकमाच्यां ततः परम् ।**
**ब्रह्ममण्डूकिकायान्तु मत्स्याक्षी च प्रचक्षते ॥५॥**

मत्स्याक्षी- मीना (मत्स्याक्षी), महाराष्ट्री (मरहट्टी ?), काकमाची (कबई) र ब्रह्ममण्डूकी (ब्राह्मी) ।

**नक्तञ्चर कौशिके स्याद्वल्गुजे दुण्डुभे पुरे ।**

**शिफाऽजगन्धाकारव्यो मेथिका चाजमोदिका ॥६॥**

नक्तञ्चर-कौशिक (लाटोकोसेरो), वल्गुज (बोको, बाख्रो ?), दुण्डुभ (?) र पुर (?) । शिफा-अजगन्धा, कारवी (सुप), मेथिका (मेथी) र अजमोदिका ।

**पञ्चास्ये मर्कटे चाश्वे मण्डूके च हरिः स्मृतः ।**
**श्यामालङ्का त्रिपूटायां स्थूलैला वृत्तमल्लिका ॥७॥**

हरि-पञ्चास्य (सिंह), मर्कट (बाँदर), अश्व (घोडा) र मण्डूक (भ्यागुतो) । त्रिपूटा-श्यामा, लङ्का ( खेसरी), स्थूलैला (अलैँची) र वृत्तमल्लिका ।

**लोहञ्च लोहजे कांस्ये कृष्णलोहे तथाऽगुरौ ।**
**खर्जूर्यां नारिकेले च ताले वंशे दुरारुहा ॥८॥**

लोहम्-लोह (फलाम), कांस्य (काँस धातु), कृष्णलोह (काँचो फलाम) र अगुरु (काठेधुपी) । दुरारुहा-खर्जूरी (खजूर), नारिकेल (नरिवल), ताल (ताड) र वंश (बाँस) ।

**शुण्ठीमरिचपिप्पल्यां कणामूले चतुरूषणम् ।**
**अग्निस्त्वरुष्करे जारे निम्बुके चित्रके तथा ॥९॥**

चतुरूषण-शुण्ठी (सुठो), मरिच, पिप्पली (पिप्ला) र कणामूल (पिप्लाको जरा) । अग्नि-अरुष्कर (भलायो), जार, निम्बुक (कागती) र चित्रक (सेतो चितु) ।

**भूताङ्कुशस्त्वपामार्गे सुकुमारश्च राजिका ।**
**त्वचे चाक्षबले चैव प्रोक्तस्तत्र भिषग्वरैः ॥१०॥**

भूताङ्कुश (?) -अपामार्ग, सुकुमार, राजिका र त्वचा र अक्षबल) ।

**शमी हरिद्रा वृद्धिश्च लक्ष्मी स्यात् पद्मचारिणी ।**
**जम्बूकी सोममत्स्याक्षी क्रोडी ब्राह्मी च कीर्तिता ॥११॥**

पद्मचारिणी-शमी, हरिद्रा (हलेदो), वृद्धि र लक्ष्मी । जम्बूकी-सोम, मत्स्याक्षी, क्रोडी र ब्राह्मी ।

**मार्कवे भ्रामरे भृङ्गस्त्वचे पक्षिविशेषके ।**

**रोचनं स्याद्दाडिमके जम्भे निम्बे च पूरके ॥१२॥**

भृङ्ग-मार्कव (भृङ्गीराज), भ्रामर (भमरो), त्वचा (दालचिनी), पक्षिविशेष (भीमराज चरा) । रोचन-दाडिम (दारिम), जम्भ (ज्यामिर, रोचनक), निम्ब (निम्बूक, कागती, रोचना) र पूरक (रोचनफल, बिमिरो) ।

**सिताब्जे दमने व्याघ्रे रुग्भेदे पुण्डरीककः ।**
**जलजं मौक्तिके शङ्खे लोणक्षारे लवङ्गके ॥१३॥**

पुण्डरीक-सिताब्ज (सेतो कमल), दमन (दमना झार), व्याघ्र (बाघ) र रुग्भेद (कुष्ठरोग) । जलज-मौक्तिक (मोति), शङ्ख, लोणक्षार (लवणक्षार) र लवङ्ग (ल्वाङ ?) ।

**वन्ध्याकर्कोटकी चैव बृहत्यन्या च लक्ष्मणा ।**
**सुतदा पुत्रदायान्तु चतस्रः परिकीर्तिताः ॥१४॥**

पुत्रदा-वन्ध्याकर्कोटकी (फल नफल्ने चठेल), अन्यबृहती, लक्ष्मणा र सुतदा ।



**उशीरं गृञ्जनञ्चैव मधुपुष्पञ्च वञ्जुलः ।**
**दीर्घपत्रे च केतक्यां कन्यायां दीर्घपत्रिका ॥१५॥**

वञ्जुल-उशीर, गृञ्जन र मधुपुष्प (अशोक) । (तीन अर्थ ? बेत) । दीर्घपत्रिका-दीर्घपत्र, केतकी (केत्तुके, दीर्घपत्रा) र कन्या । (तीन अर्थ ?)

**वासन्ते रुचके प्लक्षे कलिङ्गे देवसर्षपः ।**
**लामज्जके दीर्घमूलं यासे वेल्लन्तरे शठे ॥१६॥**

देवसर्षप-वासन्त, रुचक, प्लक्ष र कलिङ्ग । दीर्घमूल-लामज्जक (झारविशेष), यास (दुरालभा), वेल्लन्तर र शठ ।

**तथा स्याच्छालिपर्ण्याञ्च दीर्घमूला स्मृता बुधैः ।**
**रामायां त्रायमाणायां कन्याऽशोकश्च सातला ॥१७॥**

दीर्घमूला-शालिपर्णी (साकिनु) । कन्या-रामा (घिउकुमारी), त्रायमाणा (मुडिलो ?), अशोक र सातला (हात्तीकाने ?) ।

**अमृतं वेदनक्षारे सुधायाञ्च तथा विषे ।**
**वराहः शिशुमारे च वाराह्यां शूकरे घने ॥१८॥**

अमृत-वेदन, क्षार, सुधा (अमृत) र विष । वराह-शिशुमार (वराहक, सोंस), वाराहीकन्द (रानी गिठो), शूकर (बनेल) र घन (बादल, अभ्रक ?) ।

**वाराहे वञ्जुले कासे नादेयी जलवेतसे ।**
**शारदो बकुले राष्ट्र्यां सारिवाकृष्णमुद्गयोः ॥१९॥**

नादेय-वाराह, वञ्जुल, कास (काँस) र जलवेतस (पानीबेत) । शारद-बकुल (मौलसिरी, शारदिक), राष्ट्री (शारदी, जलपिप्ला, महाराष्ट्री ?), सारिवा (अनन्तमूल, शारदा) र कृष्णमुद्ग (मुगीविशेष) ।

**कुब्जके वार्षिकायाञ्च फलिन्यां योषिति प्रिया ।**
**काश्मीरं कुङ्कुमे देशे पौष्करे मृगनाभिजे ॥२०॥**

प्रिया-कुब्जक (चमेली ?), वार्षिका (बर्खे बेली), फलिनी (प्रियङ्गु ?) र योषित् (स्त्री) । काश्मीर-कुङ्कुम (केसर), देश (काश्मीर), पौष्कर (पुष्करमूल) र मृगनाभिज (कस्तुरीको जात)।

**केसरो बकुले हेम्नि किञ्जल्के च कासीसके ।**
**जम्बीरस्यान्मरुवके गुच्छे चार्जुनयुग्मके ॥२१॥**

केसर-वकुल (मौलसिरी), हेम (नागकेशर ?), किञ्जल्क (कमलको केसर) र कासीस (हीराकसी) । जम्बीर-मरुवक (मरुवा), गुच्छ, अर्जुन र यमलार्जुन ।

**वसुके वसुराजार्ककृष्णागुरु पुनर्नवाः ।**
**जपानृकन्दान्यक्षुद्रा मुचुकुन्देषु लक्ष्मणा ॥२२॥**

वसुक-वसु (ठुलो मौलसिरी), राजार्क (राज आँक), कृष्णागुरु (कालोधुपी) र पुनर्नवा (?) । लक्ष्मणा-जपा, नृकन्दा, अन्यक्षुद्रा र मुचुकुन्द ।

**हर्षणे सारसे कामी चक्रे पारावते तथा ।**
**मूषके कुक्कुटे क्रोढ्यां वृश्चिके च बहुप्रजः ॥२३॥**

कामी-हर्षण (कामुकता ?), सारस, चक्र (चखेवा) र पारावत (परेवा) । बहुप्रज-मूषक (मुसा),

कुक्कुट (कुखुरा ?), क्रोढ्या (क्रोड ?, सुँगुर) र वृश्चिक (बिच्छी) ।

**अजशृङ्गी च मञ्जिष्ठा-युक्ता कर्कटशृङ्गिका ।**
**प्रतिविषासमायुक्ता शृङ्ग्याश्चैव प्रशस्यते ॥२४॥**

शृङ्गी-अजशृङ्गी (भेडासिङ्गी), मञ्जिष्ठा (मजिठो), कर्कटशृङ्गी र प्रतिविषा (अतीस) ।

**सुरसे तुलसी ब्राह्मी निर्गुण्डी कणगुग्गुलुः ।**
**चीनायां कारवल्याञ्च वचायां लवणे पटुः ॥२५॥**

सुरसा-तुलसी, ब्राह्मी, निर्गुण्डी (सिमालीविशेष) र कणगुग्गुलु (गोकुलधुप, सुरस) । पटू-चीना ( चिनक वा चिनाक, चिनियाँ कपुर, पटु), कारवल्ली (करेलो, पटु), वचा (बोझो) र लवण (नुन) ।

**पाटल्यां श्यामकिणिही ताम्रवल्ली तथाऽपरम् ।**
**जीवन्तिका ताम्रपुष्पी कथिताः शास्त्रकोविदैः ॥२६॥**

पाटली-श्यामकिणिही (कालो कराही), ताम्रवल्ली (मजिठो), जीवन्तिका (?) र ताम्रपुष्पी (पाडरी) ।



**हिङ्गुले कुङ्कुमे रक्तमस्रे चोक्तञ्च पद्मके ।**
**दुग्धी गोडुर्भूपलाशे काकोल्यां दुग्धफेनके ॥२७॥**

रक्तम्-हिङ्गुल, कुङ्कुम (केसर), अस्र (रगत) र पद्म (रातो कमल) । दुग्धी-गोडु, भूपलाश, काकोली र दुग्धफेन (गोठाले साग ?)।

**मुसली स्वर्णुलो चैव कण्टकारीन्द्रवारुणी ।**
**आख्याता हेमपुष्प्याञ्च नानार्थज्ञविशारदैः ॥२८॥**

हेमपुष्पी-मुसली (मुसलीकन्द), स्वर्णुल (स्वर्णुली), कण्टकारी र इन्द्रवारुणी ।

**निशायाञ्चैव नीलिन्यां हरिद्रायामलक्तके ।**
**रजनीति समाख्याता आयुर्वेदेषु धीमता ॥२९॥**

रजनी-निशा (रात), नीलिनी (नीर, रञ्जनी), हरिद्रा (हलेदो) र अलक्तक (लाहा ?) ।

**॥ इति चतुरर्थकवर्गः ॥**

चार वटा अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## ॥ पञ्चार्थकवर्गः ॥

**अजमोदाऽजगन्धा च शिखण्डी कोकिलाक्षकः ।**
**अपामार्गस्तु पञ्चैते मयूर इति शब्दिताः ॥१॥**

मयूर(क) : अजमोदा (मायूरी), अजगन्धा (पूतिमयूरिका), शिखण्डी (मयूर), कोकिलाक्षक (?) र अपामार्ग (मयूरक, दतिवन) ।

नोट : यस अध्यायमा "मयूर" शब्दले अजगन्धालाई पनि बुझाउँदछ भनिएको छ । तर नरहरिले सम्बन्धित अध्यायमा अजगन्धाको पर्यायवाची शब्दमा भने "पूतिमयूरिका" भनी उल्लेख गरेका छन् । यसैगरी मयूर शब्दको एक अर्थ अजमोदा बताइएको छ तर मूल अध्यायमा अजमोदाको पर्यायवाची शब्दमा "मायूरी" उल्लेख गरिएको छ । यसैगरी मयूर शब्दको एक अर्थ अपामार्ग भनी दिइएको भएपनि मूल अध्यायमा अपामार्गको पर्यायवाची शब्द "मयूरक" उल्लेख भएको पाइन्छ । कोकिलाक्षको अर्थ तालमखाना वा कालो उखु हुन्छ । यसको पर्यायवाची शब्दमा मयूर उल्लेख भएको पाइँदैन । यस्तै किसिमको समस्या यस अध्यायका प्रायः सबै श्लोकमा देखिएको छ ।

**कदली शाल्मली मोचा नीली शोभाञ्जनं तथा ।**
**पञ्चस्वेतेषु मोचाख्यां प्रयुञ्जन्ति भिषग्वराः ॥२॥**

मोचा : कदली (केरा), शाल्मली (सिमल), मोचा (?), नीली (नीर) र शोभाञ्जन (सजिवन, मोचक) ।

**सुरभिः शल्लकी वोकं कदम्बश्चम्पकः सुरा ।**
**यवो दर्भो हरिद्रा च पवित्रे हिज्जलस्तिलः ॥३॥**

सुरभि : शल्लकी (काँडेसल्लो, सल्लकी), वोक (?), कदम्ब (कदम), चम्पक (चाँप) र सुरा (मदिरा) । पवित्र : यव (जौ), दर्भ (कुश), हरिद्रा (हलेदो), हिज्जल (?) र तिल ।

**यमानी जीरकश्चैव मोदाऽब्जा रक्तचित्रकः ।**
**निम्बुश्चेति च पञ्चैवं दीप्यकाः समुदाहृताः ॥४॥**

दीप्यक : यमानी (ज्वानु, यवानी), जीरक (जिरा, दीप्य वा दीपक), मोदाब्ज (अजमोदाको पर्यायवाची शब्द दीप्यक भावप्रकाश निघण्टुमा उल्लेख भएको पाइन्छ तर राजनिघण्टुको मूल श्लोकमा छैन), रक्तचित्रक (चितुविशेष) र निम्बु (?) ।

**कपिकच्छूः कोविदारः पन्नगः कृतमालकः ।**
**तथा छिन्नरुहा चेति कुण्डलीपञ्चकं स्मृतम् ॥५॥**

कुण्डलीपञ्चक : कपिकच्छू (काउसो), कोविदार (कोइरालो), पन्नग (सर्प), कृतमालक (राजवृक्ष) र छिन्नरुहा (गुर्जो) ।

**शलाटुरग्निमन्थश्च क्षुद्राग्निमथनं तथा ।**
**काश्मीरी शिंशपा चैव श्रीपर्णी पञ्चधा स्मृता ॥६॥**

श्रीपर्णी : शलाटु (बेल), अग्निमन्थ (ठूलो गिनेरी), क्षुद्राग्निमथन (सानो गिनेरी), काश्मीरी ( काश्मरी, खमारी) र शिंशपा (सिसौ) ।

**महासमङ्गा वन्दाका जतुका चामृतस्रवा ।**
**महामेदा च पञ्चैता ज्ञेया वृक्षारुहाः बुधैः ॥७॥**

वृक्षारुहा : महासमङ्गा (नागबलु, वृक्षारुहा), वन्दाका (ऐँजेरु, वन्दाक), जतुका (?), अमृतस्रवा ( जडेलो, वृक्षारुहा) र महामेदा ।



**गोविशेषे मृगादन्यां शिंशपारेणुकाह्वयोः ।**
**रीत्यन्तरे च विबुधैः कपिला पञ्चसु स्मृता ॥८॥**

कपिला : गोविशेष (गाईविशेष), मृगादनी (कपिलाक्षी, गोठाले काँक्रोविशेष), शिंशपा (कालो सिसौ), रेणुका (कबाफचिनी) र रीतिभेद (पित्तलविशेष) ।

**कायस्थायाञ्च काकोल्यौ पथ्यैला बहुमञ्जरी ।**
**व्यालस्तु चित्रक व्याघ्र सिंह दुष्टद्विपादिषु ॥९॥**

कायस्था : काकोली (कल्छे लहरो), क्षीरकाकोली (दुधे कल्छे लहरो), पथ्या (हर्रो), ऐला (अलैँची) र बहुमञ्जरी (तुलसी) । व्याल : चित्रक (सेतो र रातो चितु), व्याघ्र (बाघ), सिंह, दुष्टद्विप (सजिलै वशमा पार्न नसकिने हात्ती) आदि ।

**वृन्ताके चान्यवारुण्यां क्षुद्रायां चिर्भिण्टाह्वये ।**
**लिङ्गिन्याञ्चेति पञ्चसु ज्ञेया चित्रफला बुधैः ॥१०॥**

चित्रफला : वृन्ताक (भन्टा), अन्यवारुणी (ठूलो जातको ऐरेलु), क्षुद्र (सामान्य कण्टकारी), चिर्भिण्ट(गोठाले काँक्रो) र लिङ्गिनी (शिवलिङ्गी) ।

**बर्बरो हिङ्गुले बाले भारङ्ग्यां हरिचन्दने ।**
**असिते चार्जके चैव कथितः शास्त्रकोविदैः ॥११॥**

बर्बर : हिङ्गुल, बाल (बोल ?), भारङ्गी (चिण्डे), हरिचन्दन (पहेँलोचन्दन) र असित अर्जक (कालो तुलसी)।

**यमान्यामजमोदायां वचायां दीप्यके तथा ।**
**अरक्तलशुने चैव ह्युग्रगन्धा तु पञ्चसु ॥१२॥**

उग्रगन्धा : यमानी (यवानी, ज्वानु), अजमोदा, वचा (बोझो), दीप्यक (?) र अरक्तलशुन (सेतो लसुन) ।

**महाबलायां सम्प्रोक्ता सहदेवी तु नीलिनी**
**वत्सादनी देवसहा पिप्पली पञ्चसु स्मृता ॥१३॥**

महाबला : सहदेवी (महाबलु), नीलिनी (नीर), वत्सादनी (पातालगरुडी), देवसहा (महाबलु) र पिप्पली (?)।

**ज्योतिष्मत्यां काकतुण्ड्यां काकमाच्यां तथैव च ।**
**वायसी काकजङ्घायां काक्यां चैव तु पञ्चधा ॥१४॥**

वायसी : ज्योतिष्मती (मालकागुनु), काकतुण्डी (कौवाठोरी), काकमाची (कबई), काकजङ्घा र काकी (वायसोलिका, कल्छेलहरो) ।

**लिङ्गिनी स्वर्णजीवन्ती रौद्री स्यान्नाकुली तथा ।**
**बन्ध्याकर्कोटकी चैव ईश्वर्यां सम्प्रचक्षते ॥१५॥**

ईश्वरी : लिङ्गिनी (शिवलिङ्गी), स्वर्णजीवन्ती, रौद्री (रुद्रजटा), नाकुली (चाँदमरुवा) र वन्ध्याकर्कोटकी (फल नफल्ने चठेल) ।

**वसन्तदूत्यां गणिकारिकाऽऽम्रवासन्तिकापाटलकोकिलाश्च ।**
**वत्सादनी वाकुचिका गुडूची सोमा समण्डूकिकसोमवल्ल्याम्॥१६॥**

वसन्तदूती : गणिकारिका (गणिकारी), आम्र (आँप), वासन्तिका (सानो नेवारी), पाटल (पाडरी) र कोकिला (कोइली) ।
सोमवल्ली : वत्सादनी (पातालगरुडी), वाकुचिका (बकुची), गुडूची (गुर्जो), सोमा (सोमलता) र मण्डूकिका (ब्राह्मी)।

**चक्री नखान्तरे कोके दद्रुघ्ने तिनिशे खरे ।**
**सिन्धुजे तिलके धात्र्यां पारदे टङ्कणे शिवम्॥१७॥**

चक्री : नखान्तर (नखीविशेष), कोक (चक्र, चखेवा), दद्रुघ्न (ताप्रे), तिनिश र खर (चक्रीवान्, गधा) । शिवम् : सिन्धुज (सिँधेनुन वा सामुद्री नुन), तिलक, धात्री (अमला, शिवा ?), पारद ( शिव, पारो) र टङ्कण (सेतो सुहागा) ।

**जाती सुरीरी कटुतुम्बिनी च छुछुन्दरी रेणुरसाऽजपुत्री ।**
**स्वर्णेऽप्यथो गुग्गुलुकेसराखु शठेषु धीराः कनकं वदन्ति॥१८॥**



छुछुन्दरी (?) : जाती, सुरीरी, कटुतुम्बिनी, रेणुरसा र अजपुत्री । कनक : स्वर्ण (सुन), गुग्गुलु ( गोकुलधुप), केसर, आखु (मुसो) र शठ (धतुरो) ।

**॥ इति पञ्चार्थकवर्गः ॥**

पाँच अर्थ दिने शब्दहरू उल्लेख भएको अध्याय समाप्त भयो ।

## ॥ षडथवर्गः ॥

**बृहद्बला वरी ताली कटुकाऽतिविषा तथा ।**
**काकोली चैव षड्वर्गं वीरायाञ्च प्रचक्षते ॥१॥**

वीरा : बृहद्बला, वरी (वरा, मदिरा), ताली (भुइँअमला), कटुका, अतिविषा (अतीस) र काकोली (कल्छे लहरो) । नोट : कटुकाको अर्थ कुटकी र तीते गोलकाँक्री दिइएको छ । तर यी दुईको पर्यायवाची शब्दमा वीरा पाइँदैन ।

**सातला क्षीरकाकोली विभाण्डी चाजशृङ्गिका ।**
**कुञ्जरो दर्दुरश्चैव षड्विषाणीति कीर्त्तिता ॥२॥**

विषाणि : सातला (विषाणिका, हात्तीकाने), क्षीरकाकोली (क्षीरविषाणिका, दुधे कल्छेलहरो), विभाण्डी (विषाणिका, मृगासिङ्गा), अजशृङ्गिका (विषाणिका, भेडासिङ्गी), कुञ्जर (विषाणि, हात्ती) र दर्दर ।
दर्दुरको अर्थ भ्यागुतो, बादल, पहाड आदि हुन्छ तर ती कुनै पनि अर्थ बुझाउने शब्दको पर्यायमा विषाणि शब्द उल्लेख भएको पाइएन ।



**नीलदूर्वा निशाऽऽह्वश्च रोचना च हरीतकी ।**
**बहुपुष्पी भिषग्वर्यैः शिवायां षडमी स्मृताः ॥३॥**

शिवा : नीलदूर्वा (नीलो दूबो), निशा (हलेदो), निशाका पर्याय, रोचना (गोरोचन), हरीतकी (हर्रो) र बहुपुष्पी । नोट : बहुपुष्पीको एक अर्थ धयँरो हुन्छ तर धयँरोको पर्यायमा शिवा लेखिएको पाइएन ।

**निम्ब खर्जूरि तालीसं मरिचं वृत्तमूलकम् ।**
**पलाण्डुश्चेति षडमी निम्बसञ्ज्ञाः प्रकीर्त्तिताः ॥४॥**

निम्ब : निम्ब (नीम), खर्जूरि, तालीस, मरिच, वृत्तमूलक र पलाण्डु ।

**मूर्वा स्पृक्का सहदेवादेवद्रोणी च केसरम् ।**
**आदित्यभक्ताः षडिति देवीसञ्ज्ञाः प्रकीर्त्तिताः ॥५॥**

देवी : मूर्वा (मरुइ लहरो), स्पृक्का (कपुरपाती), सहदेवा (महाबला), देवद्रोणी (द्रोणपुष्पी), केसर

र आदित्यभक्ता (हुहुर) ।

**ब्राह्मणः क्षत्रियो वैश्यो दन्तः सर्पः खगस्तथा ।**
**द्विजद्विजन्मशब्दाभ्यामीरिताः सूरिभिः सदा ॥६॥**

द्विज वा द्विजन्म : ब्राह्मण, क्षत्रिय, वैश्य, दन्त, सर्प र खग (चरा) ।

**गवादनी चैव दूर्वा गण्डदूर्वा च हस्तिनी ।**
**प्रतीची मदिरा चेति वरुण्यां षट् सुसम्मताः ॥७॥**

वारुणी : गवादनी (ऐरेलु), दूर्वा (दूबो), गण्डदूर्वा (घोडेदूबो), हस्तिनी, प्रतीची (पश्चिम दिशा) र मदिरा ।

**हपुषा पीतनिर्गुण्डी विष्णुक्रान्ता जयन्तिका ।**
**सितादिकर्णी शङ्खिन्यो षडेता अपराजिताः ॥८॥**

अपराजिता : हपुषा, पीतनिर्गुण्डी, विष्णुक्रान्ता, जयन्तिका (जयन्ती), सितादिकर्णी र शङ्खिनी ।



**कुमारी च वराही च वन्ध्याकर्कोटकी मृदुः ।**
**स्थूलैला स्थूलपर्णी च षट्कन्याश्च कुमारिकाः ॥९॥**

कुमारिका : कुमारी (घिउकुमारी), वराही (कौमारी, रानीगिठो), वन्ध्याकर्कोटकी (फल नफल्ने चठेल), स्थूलैला (अलैंची), स्थूलपर्णी र षट्कन्या ।

**बीजद्रुमे गजे चैव सीसके नागकेसरे ।**
**विषे च पन्नगे चेव षट्सूक्तो नाग इत्यपि ॥१०॥**

नाग : बीजद्रुम, गज (हात्ती), सीसक (नागपुरग, सिसा), नागकेसर, विष र पन्नग (सर्प)।

**सूक्ष्मैला च महाराष्ट्री मत्स्याक्षी काकमाचिका ।**
**गण्डदूर्वा च गण्डूकी मत्स्यादन्यां षडीरिताः ॥११॥**

मस्त्स्यादनी : सूक्ष्मैला, महाराष्ट्री, मत्स्याक्षी, काकमाचिका, गण्डदूर्वा र गण्डूकी ।

**माणे कलिङ्गे कोशाम्रे शल्ये काके च धूर्तके ।**
**मदनश्च समाख्यातः षडमी समुदाहृताः ॥१२॥**

मदन : माण, कलिङ्ग, कोशाम्र, शल्य, काक र धूर्तक (धूर्त, धतुरो) ।

**दोडी गुडूची मेदा च काकोली हरिणी तथा ।**
**जीवन्ती चैव षट् प्रोक्ता जीवन्त्याञ्च भिषग्वरैः ॥१३॥**

जीवन्ती : दोडी (डोडी, जीवन्तीविशेष), गुडूची (गुर्जो), मेदा (जीवनी), काकोली (जीविनी), हरिणी (?) र जीवन्ती (जिरीको साग) ।

**धूम्राट भृङ्गयोः खलु मांसले च प्लक्षे शिरीषे कुटजे कुलिङ्गः ।**
**द्राक्षा च दूर्वा जरण कणा च कृष्णाभिधा बाकुचिका कटुश्च ॥१४॥**

कुलिङ्ग : धूम्राट, भृङ्ग, मांसल (कलिङ्ग, मांसलफल, तरबुजो), प्लक्ष, शिरीष (कलिङ्ग) र कुटज ( कलिङ्ग, ठुलोकुरो) । कृष्णा : द्राक्षा (दाख), दूर्वा (दूबो), जरण (जरणा, कालो जिरा), कणा, बाकुचिका र कटु ।



**॥ इति षडर्थवर्गः ॥**

छ अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## ॥ सप्तार्थवर्गः ॥
## सात थरी अर्थ दिने शब्दहरू

**भद्रायान्तु बला नीली दन्ती काश्मरी सारिवा ।**
**श्वेताद्रिकर्णी गौरी च सप्त प्रोक्ता भिषग्वरैः ॥१॥**

भद्रा : बला (बलु), नीली (नीर), दन्ती (अजयपाल), काश्मरी (खमारी), सारिवा (कालो), श्वेताद्रिकर्णी (अद्रिकर्णी, सेतो अपराजिता) र गौरी (हलेदो) ।

**मञ्जिष्ठा कटुका पथ्या काश्मरी चन्द्रवल्लभा ।**
**वन्दाको रजनी चैव रोहिण्यां सप्त च स्मृताः ॥२॥**

रोहिणी : मञ्जिष्ठा (मजिठो), कटुका (कटुकी), पथ्या (हर्रो), काश्मरी (खमारी), चन्द्रवल्लभा (?), वन्दाक (तरुरोहिणी, ऐँजेरु) र रजनी (?) ।

**धात्री बहुफलायां स्याच्छर्दिनी काकमाचिका ।**
**काम्भोजी च शशाण्डूली कटुहुञ्ची च बालुकी ॥३॥**



बहुफला : धात्री (?), छर्दिनी (?), काकमाचिका (काकमाची, कबई), काम्भोजी (काम्बोजी, बनमास), शशाण्डूली (काँक्रोविशेष), कटुहुञ्ची (काँक्रोविशेष) र बालुकी (काँक्रोविशेष) ।

**माण्डूकी ब्रह्मजा शङ्खपुष्पी ज्योतिष्मती मुनिः ।**
**विष्णुक्रान्ता वचा श्वेता मेध्यायां सप्त सम्मताः ॥४॥**

मेध्या : माण्डूकी (?), ब्रह्मजा (ब्राह्मी), शङ्खपुष्पी, ज्योतिष्मती (मालकागुनु), मुनि, विष्णुक्रान्ता र श्वेतवचा (सेतो बोझो) ।

**आखुकर्णी सुतश्रेणी इन्द्राह्वा च कलिङ्गकः ।**
**गण्डदूर्वा गवाक्षी च चित्रायामृक्षमेकतः ॥५॥**

चित्रा : आखुकर्णी (मुसाकाने), सु(श्रु)तश्रेणी (मुसाकाने विशेष), इन्द्राह्वा, कलिङ्गक (तरबुजो, चित्र), गण्डदूर्वा (घोडेदूबो), गवाक्षी (?) र ऋक्ष (?) ।

**रास्ना पाठा प्रियङ्गुश्च सितक्षुद्रा हरीतकी ।**
**श्रेयस्याञ्चेति सम्प्रोक्ता अम्बष्ठा गजपिप्पली ॥६॥**

श्रेयसी : रास्ना (गाईतियारे), पाठा (गुन्दरगानु), प्रियङ्गु, सितक्षुद्रा (?), हरीतकी (हर्रो), अम्बष्ठा र गजपिप्पली ।

## ॥ इति सप्तार्थवर्गः ॥

सात अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## ॥ अष्टार्थवर्गः ॥

### आठ अर्थ दिने शब्दहरू

**विजया काञ्चनद्वन्द्वं मञ्जिष्ठा च वचा तथा ।**
**स्यात्तथा श्वेतनिर्गुण्डी जयन्ती काञ्जिकाऽभया ॥१॥**

विजया : स्वर्ण (?), धत्तूर (?), मञ्जिष्ठा (मजिठो), वचा (बोझो), श्वेतनिर्गुण्डी (सिमालीविशेष), जयन्ती (फूलविशेष), काञ्जिका (?) र अभया (हर्रो) ।

**एरण्डनद्याम्रलताकरञ्जाः स्याद्ब्रह्मदण्डी पनसः कुसुम्भः ।**
**स्याद्गोक्षुरः कण्टफले च धूर्तो भिषग्भिरष्टाविति सम्प्रदिष्टाः ॥२॥**

कण्टफल : एरण्ड (?), नद्याम्र (नाककोरे, कण्टकिफल), लताकरञ्ज (करञ्जविशेष, कण्टफल), ब्रह्मदण्डी (कण्टपत्रफला), पनस (रूखकटहर), कुसुम्भ (?), गोक्षुर (सानो गोखुर) र धूर्त (धतुरो)।

**स्वर्णे कपिच्छे दधिनारिकेलयोः स्याज्जीवके चेत् स्थलपद्मके तथा ।**

**मयूरकेतो समधूकके तथा माङ्गल्यमष्टाविति सम्प्रचक्षते ॥३॥**

माङ्गल्य : स्वर्ण (मङ्गल्य, सुन), कपिच्छ (?), दधि (दही), नारिकेल (नरिवल), जीवक, स्थलपद्मक (थलकमल), मयूरकेतु (?) र समधूक (?) ।

## ॥ इति अष्टार्थवर्गः ॥

आठ अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## नवार्थवर्गः

### नौ अर्थ दिने शब्दहरू

**वातारिर्जतुकायाञ्च भल्लयां नीलदवञ्जयोः ।**
**टेन्दुकामण्डयोर्भार्ग्यां निर्गुण्डयां शूराणे स्मृतः ॥१॥**
**धात्री गुडूची रास्ना च द्विधा दूर्वा हरीतकी ।**
**लिङ्गनी तुवरी मद्यं धीमतायां नवौषधी ॥२॥**
**ब्राह्मी वराही लशुनी विषञ्च शुक्लादिकन्दः सितकण्टकारी ।**
**भूम्याहुली चेदपराजिता च शुण्ठीति चैतासु महौषधी स्यात् ॥३॥**

वातारि शब्दले जतुका, भल्ली, नीलद, वञ्जुल, टेन्दुका, मण्ड, भार्गी, निर्गुण्डी र शूरणलाई बुझाउँदछ । धीमता शब्दले धात्री, गुडूची, रास्ना, दूर्वा, गण्डदूर्वा, हरीतकी, लिङ्गनी, तुवरी र मद्य गरी नौ थरी ओखतीलाई बुझाउँदछ । महौषधि शब्दले ब्राह्मी, वराही, लशुनी, विष, शुक्लादिकन्द, सितकण्टकारी, भूम्याहुली, अपराजिता र शुण्ठीलाई बुझाउँदछ ।

**॥ इति नवार्थवर्गः ॥**



नौ अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## दशार्थवर्गः

### दश थरी अर्थ दिने शब्दहरू

**सितायां वाकुची दूर्वा मद्यं धात्री कटुम्बिनी ।**
**चन्द्रिका च प्रिया पिङ्गा त्रायमाणा च तेजिनी ॥१॥**

सिता शब्दले वाकुची, दूर्वा, मद्य, धात्री, कटुम्बिनी, चन्द्रिका, प्रिया, पिङ्गा, त्रायमाणा र तेजिनीलाई बुझाउँदछ ।

**॥ इति दशार्थवर्गः ॥**

दश थरी अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## एकादशार्थवर्गः

### एघार थरी अर्थ दिने शब्दहरू

**स्यादभ्रमांसी तुलसी हरिद्रा तालन्तथा रोचन हेम मोचाः ।**
**जनप्रिया योजनवल्लिका स्यात् समल्लिका चन्द्रशशी च गौर्याम्॥१॥**
**दूर्वा निशा ऋद्धिवचा प्रिया च सा माषपर्णी शिमिरोचना त्वथ ।**
**त्रायन्तिका जीवनिका महाबला मङ्गल्यकायामिति चन्द्रमाह्वयाः ॥२**
**प्रियङ्गुछिन्ना त्रिवृता कणाह्वया वन्दाकदूर्वा तुलसी च नीलिनी ।**
**दुर्गा खगः कस्तुरिकृष्णसारिवा श्यामा महीन्दुः कथिता भिषग्वरैः ॥३॥**

गौरी शब्दले अभ्रमांसी, तुलसी, हरिद्रा, ताल, गोरोचन, सुन, मोच, जनप्रिया, योजनवल्लिका वा मल्लिका, चन्द्र र शशीलाई बुझाउँदछ । मङ्गल्यका शब्दले दुबो, रात, ऋद्धि, वचा, प्रिया, माषपर्णी, शिमिरोचना, त्रायन्तिका, जीवनिका, महाबला र चन्द्रमालाई बुझाउँदछ । श्यामा शब्दले प्रियङ्गु, छिन्ना, त्रिवृता, पिप्ली, वन्दाकदूर्वा, तुलसी, नीलिनी, दुर्गा, खग, कस्तुरि, कृष्णसारिवालाई बुझाउँदछ भने विज्ञ वैद्यहरूले बताएका छन् ।



### ॥ इति एकादशार्थवर्गः ॥

एघार थरी अर्थ दिने शब्दहरूको अध्याय समाप्त भयो ।

## उपसंहार

**इत्थं विचिन्त्य विनिवेशिततत्तदेकानेकार्थनाम गणसङ्ग्रहपूर्णमेनम् ।**
**वर्गं विचार्य भिषजा बहुभक्तिभाजा ज्ञेया स्वयं प्रकरणानुगुणाः प्रयोगाः ॥४॥**

यसरी यस अध्यायमा एक वा धेरै समानार्थी शब्दहरूलाई विचार गरेर समावेश गरिएको छ । सन्दर्भ अनुसार शब्द हरु (वा ओखतीको उचित प्रयोग गर्ने निर्णय चिकित्सक आफैले अध्ययनका आधारमा पूर्ण विश्वासका साथ गर्नुपर्दछ ।

**एको यश्च मनस्विनामचतुरो यश्च द्वयोरश्विनो-**
**स्त्र्यक्षाच्चचतुरो नृपञ्चवदनो नाम्नाऽरिषण्णा जयी ।**
**एकार्थादिरमुष्य नाम-रचना-चूडामणौ यस्त्रयो-**
**विंशोऽसौ समपूरि सार्धममुना ग्रन्थेन वर्गो महान्॥५॥**

जो दृढ सङ्कल्पी छन्, जो दिव्य चिकित्सक अश्विनीकुमार तथा भगवान शिवका तीन नेत्रका सामु अती नम्र छन् अनि जसले रिस, लोभ आदि छ वटा शत्रुलाई जितेका छन्, यस्ता नरहरीले लेखेको आफ्नो अनुपम ग्रन्थ अभिधान चूडामणिको एकार्थादि वर्ग नामक तेइसौं वर्ग (अध्याय) समाप्त भएको छ ।

**इति श्रीनरहरिपण्डितविरचिते निघण्टुराजापरपर्यायवत्यभिधानचूडामणा-**
**वेकार्थाद्यभिधानस्त्रयोविंशो वर्गः ॥२३॥**

**श्रीनरहरि पण्डितले रचना गरेको निघण्टुराज (राजनिघण्टु) वा अभिधान चूडामणि नामक ग्रन्थको**
**एकार्थक आदि शब्द भएको तेईसौं अध्यायको**
**नेपाली भावानुवाद समाप्त भयो ।**

**॥ सम्पूर्णोऽयं ग्रन्थ : ॥**

**नेपाल नामक अति प्राचीन र पवित्र देशको बागमती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गाउँ,**
**वडा नं.३, चारघरटोलमा जन्म भई सोही अञ्चलको काठमाडौँ जिल्ला, गोकर्णेश्वर नगरपालिका,**
**वडा नं.७, दक्षिणढोका बस्ने केदारनाथका नाती एवं माधवप्रसादका छोरा**
**म मोहन प्रसाद सापकोटाद्वारा गरिएको राजनिघण्टुको**
**नेपाली भावानुवाद समाप्त भयो ।**

**॥ शुभं भूयात् ॥**

## केही शब्द र अर्थ

अकरकरा :- वर्षातको शुरुमा पहाडी भूभागमा उम्रने, डाँठ र हाँगा कान्छी औंला जति मोटा र एक बित्ता लामा हुने, भित्र खोक्रो हुने, भुसिला, टुप्पामा पातका गुच्छा हुने र पहेँलो केसर हुने एक पोथ्रो । यसको पिरो र परपऱ्याउने स्वाद हुन्छ, अकरकला, अकारकरभ ।

अगस्ति :- पन्ध्र बीस हात अग्लो हुने, माटोभैँ फुस्रो बोक्रा हुने, सेतो काठ सेता भेट्ना र फिक्का गुलाफी रङको टुप्पा हुने, एक हात लामा कोसा लाग्ने, चार अमल जति लामा चेप्टा खालका घुम्रिएका फूल कार्तिक वा मंसिर महिनामा फुल्ने र फूलको अचार वा तरकारी खाइने एक किसिमको रुख । यसका सेता, राता, पहेँला र काला गरी चार प्रकारका फूल हुन्छन् र यसैका आधारमा यसलाई चार प्रकारका मानिएको छ । यसको फूललाई बकपुष्प भनिन्छ ।

अतिसार :- खाएका कुरा नपची पातलो दुर्गन्धी दिसा भइरहने रोग; आउँको रोग । यसका कफजन्य, वातजन्य, पित्तजन्य, आमजन्य, सन्निपातजन्य र शोकजन्य गरी छ किसिम हुन्छ । यो रोगमा सामान्यतः आमाशय सुन्निएर खाएको कुरा नपची पातलो दिसा र डकार आइरहन्छ, अमन हुन्छ र शरीर लखतरान भएर गल्दछ ।

अधा :- आधा टाउको दुख्ने रोग, अर्धभेदक, अर्धावभेदक ।

अनुपान :- खाना वा ओखती खाएपछि त्यसलाई पचाउन लगत्तै पिइने पेय पदार्थ ।

अनुलोमन :- कब्जियत भएर पेटभित्र रहेको मल वा रोकिएको मूत्रलाई खुकुलो बनाई आन्द्राभुँडी सफा गर्दै तलतिर धकेलेर दिसापिसाब मार्फत बाहिर निकाल्ने औषधी । जस्तै : हर्रो ।

अन्धो :- परेलाका डिलमा आउने एक किसिमको खटिरो; अन्नो । अञ्जननामिका, अर्जुन ।

अपची :- घाँटीमा माला लगाए जसरी खटिरा आई फोका उठेर पीप बग्ने एक रोग, गण्डमाला रोगको एक प्रकार ।

अपतन्त्र :- वायुविकारबाट हुने रोग । यो रोग हुँदा शरीर टेढो हुने, टाउको र कञ्चट दुख्ने, गला बज्ने, आँखा तन्कने र सास फेर्न कठिनाई हुने गर्दछ ।

अपतानक :- आइमाईमा गर्भपात हुँदा र पुरुषमा ठूलो चोटपटक लाग्दा वा धेरै रगत जाँदा हुने रोग । यसमा पटकपटक बेहोस हुने, कफले गर्दा घाँटीबाट घ्यारघ्यार आवाज आउने गर्दछ ।

अपबाहुक :- पाखुरामा हुने वायुले नसा सुकाएर पाखुरा सुकाउने एक रोग ।

अभिष्यन्द :- पोल्ने, रातो हुने तथा आँशु भरिरहने र चिप्रा लागिरहने आँखाको रोग, अधिमन्थ ।

अभिष्यन्दी :- थलथले गुणले गरुङ्गोपनबाट रस निकाल्ने चौबीस थरी शिरा नामका नसाहरू थुनेर शरीरलाई भारी (गरुङ्गो)

अरुषिका :- कफ, रगत बिग्रेर वा कीराका कारणले आउने धेरै मुख हुने र अति दुख्ने खटिरो ।

अर्दित :- मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष (फेसियल प्यारालाइसिस) ।

अर्म :- आँखाको पुतलीमाथि सेतो दाग वा छिटा जस्तो हुने आँखाको रोग ।

अलसक :- एक प्रकारको अजीर्ण रोग ।

अल्काई (रोग):- गुदद्वारको भित्रपट्टि खटिरो आई रगत बग्ने रोग । अर्श, अलकाई, गदगुदज, गुदाङ्कुर, दुर्नामक, दुर्नाम, हर्सा ।

अष्ठीला :- मूत्राशयमा गाँठा पलाएर मूत्रत्यागमा अवरोध हुने एक रोग (प्रोस्टेट ग्ल्याण्ड) ।

आक्षेप :- शरीर काम्ने वा नसाभित्र हावा छिरी कुनै अङ्ग भट्कार्ने रोग, आक्षेपक ।

आध्मान :- पेट फुल्ने एक रोग, अपानवायु रोकिनाले छालाको थैलो फुले जसरी पेट फुल्ने रोग ।

आनाह :- पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग ।

आम :- खाएपिएका कुरा पचेपछि बन्ने रस । सामान्यतः "आम" पनि रसै हो तर आहार राम्ररी नपाकी वा नपची बनेको रस हो (शार्ङ्गधर) ।

आमदोष :- कमजोर पाचनशक्तिका कारण शरीरमा नपचेका खानेकुरा सडेर बन्ने विषालु तत्व ।

आमवात :- आमरस वा आउँका कारण हुने जोर्नी दुख्ने वातरोग ।

आस्थापन वास्त :- विभिन्न औषधीको काँढापानी बनाई त्यो काँढापानीलाई छदाउन वा दिसा पिसाब गराउन प्रयोग गर्ने विधि ।

इन्द्रलुप्त :- रौंको जरामा रहने रगत खराब भएर रौं झारिदिने र फेरी रौं पलाउन नदिने रोग ( के.यन.स्वामि), कपाल झर्ने रोग विशेष (चरक.सं.) । तालुखुइलने रोग ।

उदावर्त :- अपानवायु माथितिर सरी मलमूत्रलाई पनि माथिमाथि तान्ने पेटको रोग । अपानवायु, दिसा, पिसाब, हाई आँसु, हाच्छिउँ, डकार, बान्ता, शुक्र, भोक, तिर्खा, निःश्वास र निद्रा आउन लाग्दा जबरजस्ती रोक्ने गरे यो रोग लाग्दछ । रोग लागिसकेपछि दिसा, पिसा र अपानवायु बन्द हुन्छ । पेट कराउने गर्दछ । शरीर कमजोर भई दुख्न थाल्दछ ।

उन्माद :- पागलपन, कडा रिस, मानसिक रोग ।

ऊरुस्तम्भ :- तिघ्रा शिथिल हुने रोग, आढ्यवात ।

ऊर्ध्ववात :- धेरै डकार आउने रोग ।

कण्डू :- शरीर चिलाउने रोग ।

कण्डेउलो :- कमरमुनिको फिलाको हाड जुन् तीन भागको हुन्छ । त्रिक, त्रिकस्थि ।

कब्जियत :- पेटमा मल रोकिएर बस्ने रोग विशेष (आनाह) ।

कलेजोका मांसखण्ड :- कालखण्ड, यकृत् ।

कल्क :- कुनै नरम वा सुकेको ओखतीलाई पानी मिसाई पिसेपछि बन्ने धुलो वा लेदो ।क्रक ।

कला :- धातु भित्र रहने हँडिदो (हल्का हरियो रङ तथा अमिलो र उग्लिएको स्वादको पदार्थ) जो शरीरको तातोले पच्ने गर्दछ, त्यसलाई कला भनिन्छ ।

कान्तिसारलौह :- जुन फलामे भाँडोमा राखेको पानीमा तेल पर्दा फैलिँदैन, तातेको भाँडामा फुराएको हिङमा गन्ध आउँदैन, नीमको रस पर्दा गुलियो बन्दछ, दूध तताउँदा उम्लेर जाँदैन, पानी राखेर चना भिजाउँदा कालो हुन जान्छ, यस्तो गुण भएको फलाममलाई कान्तिसारलौह भनिन्छ । कान्तम् ।



काम्बलिक :- फलको रसलाई अमिला फल वा कन्दमूल हाली (प्रायः तिलको छोप र अनारदाना) तयार पारिने अमिलो पेय पदार्थ ।

कालकूट :- भारतको श्रृङ्गवेर, कोंकण, काकोदाचल पहाडतिर हुने पीपलको रुखको जस्तो चोप आउने नौथरी कन्दविषमध्येको एक विष ।

कुष्ठरोग (विशेष) :- किटिभ ।

कुष्ठरोग (टाटे) :- कोठ, मण्डलक ।

कुष्ठरोग (सेतो) :- कुष्ठ, श्वित्र ।

कृच्छ्र :- मूत्रकृच्छ्र आदि पिसाबसम्बन्धी रोगहरू ।

कोठी :- छालामा आउने कोठी, तिलकालक ।

क्लम :- कुनै परिश्रम नगर्दा पनि शरीर थाकेर मन खिन्न हुनु ।

क्रोष्टशीर्ष :- क्रोष्टशीर्षक, क्रोष्टुशीर्षक, वायु र रगत बिग्रेर घुँडाको बीचमा स्यालको टाउको जस्तो खुब ठूलो र मोटो अत्यन्त दुख्ने गरी सुन्निने रोग वा रोगी ।

क्षतक्षीण :- धेरै परिश्रम वा मैथुनका कारण छाती भित्रको रस वा मासु सुक्ने रोग ।

क्षवथु :- हाच्छिउँ आइरहने एकप्रकारको नाकको रोग ।

खिल :- चर्मकील ।

खोकी :- कास

ग्रहणी :- जठराग्निको आधार भएकी नाइटोभन्दा केही माथि ग्रहणी (खानपिन ग्रहण गर्ने) एउटा नाडी हुन्छे । यिनको काम नपचेको कुरा पचाई मलमूत्र मनाएर शरीर बाहिर निकाल्नु हो । यो नाडीमा कुनै विकार भई खाएपिएको नपची बाहिर निस्कने वा पचेपनि पटकपटक गरेर बाहिर निस्कने रोगलाई ग्रहणी भनिन्छ । अन्य अर्थ : खाएको चिजमा बोसे आन्द्रोले गर्नुपर्ने काम

गर्न नसक्दा हुन जाने पेटको रोग । यसले पेट फुल्ने, दुख्ने, दिसा लागिरहने र भोक नलाग्ने समस्या हुन्छ ।

गानुगोला (रोग) :- गुल्म । (क) नसा सुन्निएर गाँठो पर्नु । (ख) वात आदि दोषले छाती वा पेटमा हुने हावाको गोला पर्ने रोग ।

गुदभ्रंश :- गुदद्वारको भित्री भाग बाहिर आउने वा गुदद्वारमा मुजा पर्ने एक रोग ।

गृध्रसी :- कम्मरको जोर्नी, कम्मर, ढाड र गोडा निदाई सियाले घोचेझैं दुख्ने र काम्ने, वात वा पित्त विकारले हुने एक रोग ।

ग्राही :- जुन औषधीले पेटभित्रको अग्निलाई बाल्दछ, “आम” आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई “ग्राही” भनिन्छ । जस्तै : सुठो, जीरा, चाभा आदि ।

ग्लानि :- थकाइ, सुस्तता, अरुचि, घिन, पछुतो, मानसिक कष्टबाट हुने लाचारीको दुःख ।

घाउ :- अरुस्, ईर्म, व्रण ।

घाउ (विशेष) :- नसासम्म गढेको नथाक्ने घाउ, नाडीव्रण ।

चिप्रा :- दूषिका ।

चिलाइ (लुतो जस्तै रोग) :-कण्डु, कण्डू, कण्डूया, खर्जू ।

छारेरोग :- अपस्मार, अपस्मृति, मृगी ।

छेदन :- जुन औषधीले एक आपसमा मिली जमेर बसेको कफ आदि दोषलाई आफ्नो तागतले अलग गरी फोर्दछ (तर बाहिर निकाल्न सक्ने क्षमता हुन्न) त्यसलाई “छेदन” भनिन्छ । जस्तै : यवक्षार, मरिच, शिलाजित आदि ।

जठराग्नि :- आयुर्वेद अनुसार तीन थरी अग्निमध्ये नाइटो र मुटुको बीचमा रही पित्तरूपले खाएको कुरा पचाउने अग्नि ।

जतुमणि :- शरीरको छालामा टाटा हुने एक रोग ।

जाड्य :- (क) लोसेपन, सुस्ती । (ख) मूर्खपन । (ग) जडपन, चेतना नहुने अवस्था ।

तूनी :- मूत्राशयबाट दुख्दै गुदद्वार वा तल्लो पेटसम्म दुख्ने एक वातरोग । तूणी ।

तोद :- पीडा, दुःख ।

त्रिकटु :- सुठो, मरिच र पिप्पला बराबर मिसाई तयार पारिएको धुलो । फलत्रिकम्, व्योष ।

त्रिदोष :- वात, पित्त र कफ यी तीन दोष वा यी तीन दोषबाट हुने रोग ।

त्रिफला :- फलत्रिकम्, वरा, श्रेष्ठा ।

दाद :- दद्रु ।

दादुरा :- मसूरिका ।

दारुणक :- टाउको रुखो भई भुसजस्तो धुलो झर्ने रोग विशेष । चाया ।

दीपन :- जुन औषधीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ त्यस्ता औषधीलाई “दीपन” भनिन्छ । जस्तैः सुप ।

दीपनपाचन :- जुन औषधीले पाचकाग्निलाई पनि बाल्दछ र आमलाई पनि पचाउँदछ त्यस्ता औषधीलाई “दीपनपाचन” भनिन्छ । जस्तै : चितू, अरिड ।

दुबी :- किलास, सिध्म ।

दूषीविष :- शरीरका धातुलाई बिगार्ने खालका विष ।

दोलायन्त्र :- काँढापानी आदि पातला पदार्थ हालिएका कुनै गाग्रा आदिमा भरी शुद्ध हुने ओखतीलाई ( त्यसपछि) पोको पारी झुण्डयाएर पसिना निकाल्ने विधिलाई दोलायन्त्र भनिन्छ ।

धातुको व्यथा :- प्रमेह, मेह ।

धान्याभ्रक :- धानका सहायताले अभ्रख शुद्ध पार्ने तरिका वा त्यसरी शुद्ध पारिएको अभ्रख । टुक्रा पारिएका अभ्रकलाई यसको एक चौथाई धानमा मिसाउनू र कुनै बलियो कपडामा पोको पार्नू । अनि कुनै फराकिलो भाँडामाथि यसलाई हातले समाउनू र पानी हाल्दै माड्दै गर्नू । यसो गर्दा

पाकोमा भएको जति अभ्रख तल भाँडामा पानी मिसिएर आउँदछ । यसरी सबै अभ्रख पानीसँग मिसिएर आएपछि पानी निथारेर फाल्नू । अभ्रखको धुलो घाममा सुकाउनू । यसलाई धान्याभ्रख भनिन्छ ।

नकुलान्ध :- न्याउरीमुसाको जस्ता आँखा हुने र रङ्गीबिरङ्गी देखिने आँखाको एक रोग ।

निलोतुथो :- तामाको उपधातु; तामाको नीलो क्षार वा लवण । तुत्थक, नीलाञ्जन, नीलाञ्जना, सङ्ग ।

नौसादर :- एक प्रकारको फस्को र कडा क्षार पदार्थ ।

पक्वातिसार :- गाढा पहेंलो र पातलो दिसा हुने रोग (ब्लोस डाएरिया) ।

पक्वाशय :- आन्द्रासँग जोडिएको भुँडिको तल्लो भाग, पाकाशय ।

पक्षाघात :- वायुविकारले गर्दा शरीरको एक हर वा कुनै अङ्ग अथवा पूरै शरीर निधाएझैं हुन गई चल्न चरपटाउन नसकिने रोग ।

पचाउन कठिन :- गुरु, सर ।

पथ्य :- रोग नभड्काउने, रोगीलाई हित गर्ने, फाइदा गर्ने, योग्य, उचित ।

परिणामशूल :- खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाइ, पक्तिशूल ।

पाचन :- जुन औषधीले आमलाई पचाउँदछ तर पाचकाग्निलाई बाल्दैन त्यस्ता औषधीलाई “पाचन” भनिन्छ । जस्तै : नागकेसर ।

पाण्डु :- सम्पूर्ण शरीर र रौँ सेतो हुने एक रोग; श्वेतकुष्ठ; सेतो कोढ ।

पातालयन्त्र :- घोप्टो र उत्तानो पारी मुखमुख जोडेर बनाइने रसादि ओखती पकाइने माटोको यन्त्र (भाँडो) विशेष ।

पामा :- धेरै पीप बगिरहने, धेरै पोल्ने र चिलाउने, ससाना बिमिरा आउने लुतो विशेष, भैंसे लुतो विशेष, यसलाई अठार थरीका कुष्ठरोगमध्येको एक मानिन्छ ।

पार्श्वशूल :- उरोग्रह ।

पिडका :- सानातिनो खटिरो वा पिलो वा पिड्को ।

पिनास :- प्रतिश्याय ।

पिल्लम् :- अलिअलि चिप्रा वा पानी निस्कने आँखाको एक रोग ।

पुण्डरीक :- सेतो कमलको पातजस्तै सेतो र भित्री भाग रातो हुने हल्का उठेको देखिने, बीचमा केही रातो हुने अठार प्रकारका कुष्ठ रोगमध्ये एक ।

पूतिनासा :- नाक गनाउने रोग विशेष ।

प्रत्यष्ठीला :- वातरोग विशेष ।

प्रदर :- स्त्री-जननेन्द्रियबाट सेतो पानी बग्ने रोग ।

प्रदेह :- फोका वा खटिरामा लगाइने लेप

प्रमाथि :- जुन द्रव्य आफ्नो शक्तिले कान, मुख, नाक आदि प्वालबाट वा अरु प्वालबाट शरीरभित्र सञ्चित कफ आदि दोष र गढेका रोगलाई बाहिर निकाल्दछ त्यसलाई वा त्यस्तो गुणलाई “प्रमाथि” भनिन्छ । जस्तै : मरिच, बोझो आदि ।

प्रमेह :- पिसाबसँग मिसिई वीर्य अथवा शरीरका अरू धातु पातलिएर जाने विभिन्न रोगहरू ।

प्रवाहिका :- कुपित भएको वायुले गर्दा सञ्चित भएको कफ मलसहित भई गुदद्वारबाट धेरै पटकपटक गरी निस्कने रोग ।

प्रसेक :- मुखबाट न्याल वा योनिबाट पानी बहने रोग । बमन, मुखबाट पानी र नाकबाट सिङान झरिरहने रोग, एक निको पार्न कठिन हुने रोग ।

फलामको किट :- मण्डूर, मुण्ड ।

बृंहण :- शरीर वर्धक ।

भगन्दर :- गुदद्वार र अण्डकोशको मध्यमा आउने खटिरा विशेष ।

भस्मक :- जति खाएपिए पनि पच्ने र खाएपिएको कुरा पचाउन नपाउँदा शरीरका धातुलाई तानेर पचाउने रोग ।

| | |
|---|---|
| भिरङ्गी रोग :- | रक्तविकारले जननेन्द्रियमा खाटिरा आउने एक सङ्क्रामक रोग, उपदंश, फिरङ्ग । |
| भेदन :- | वात आदि दोषले पेटभित्र अड्किएका वा गोटा परेर बसेका मलमूत्रलाई टुक्राटुक्रा पारी मलद्वार वा मूत्रनली मार्फत बाहिर निकाल्ने औषधी वा गुण । जस्तै : कटुकी । |
| मण्डल :- | यो शब्दको अर्थ आयुर्वेदका पुस्तकमा आठ दिनदेखि अठचालीस दिनसम्म लगाएको पाइन्छ । |
| मण्डलकुष्ठ :- | सेतो, रातो, सारो, नरम र चिल्लो छाँटको कोढ रोग, जसको आकार एक अर्कोसँग मिल्दोजुल्दो हुन्छ । |
| मदकारी :- | जे कुरा (खानपिन गर्ना) ले बुद्धिलाई लोप गराउँदछ त्यसलाई “मदकारी” भनिन्छ । यस्ता कुरामा तमोगुण बढी हुन्छ । जस्तै : सुरा, मद्य आदि । |
| मदात्ययः- | मात लाग्ने खालका खानपिन वा व्यवहार बढी गरेका कारण हुने रोग । |
| मन्थ :- | ओखतीको धुलो वा कुटेर मसिनो पारिएको लेदोलाई चार पल पानी सहित माटाको हाँडीमा हाली  मथेर निकाली छानिएको रस । |
| मन्यास्तम्भ :- | गर्दनको नसो साह्रो हुने एक रोग । |
| मलमूत्र बन्द हुने रोग :- | आनाह, विबन्ध । |
| मशक :- | छालामा आउने कालो वा रातो ससाना मासुका दाना (मुसा) । |
| मुर्दासङ्ग :- | वेदार नामक पर्वतको टाकुरामा पाइने, टल्कने, पहेँलो रङको, घाउखीटरामा लगाइएने एक औषधी । कुष्ठ । |
| मूढवात :- | कुनै एक ठाउँमा गुटमुटिएको वायु । |
| मूत्रकृच्छ्र :- | पिसाबले च्याप्ने तर गर्न खोज्दा थोपा थोपा मात्र हुने रोग । |
| मूत्राघात :- | पिसाब बन्द हुने बाह्र थरीको रोग । |
| योगवाही :- | शरीर भित्र गर्मी गर्ने पदार्थसँग मिलेर अति गर्मी गर्ने र ठण्डी गर्ने पदार्थसँग मिली अति ठण्डी गर्ने औषधी वा त्यस्तो गुण । |
| रक्तपित्त :- | मुख, कान, आँखा, नाक, गुदद्वार तथा मूत्रद्वारबाट रगत बहने रोग । |
| रक्तप्रमेह :- | पुरुषका पिसाबबाट गनाउने खालको रगत बहने एक रोग । |
| रसाञ्जन :- | चुत्राको काँडा, बोक्रा वा जराको काँढापानीमा त्यति नै दूध मिसाएर खुवा जस्तो हुने गरी पकाइएको ओखती सुकाएर पारिएको धुलो । तार्क्षज । |
| रसायनी :- | बुढचौली आउन नदिने वा बूढालाई तन्नेरी गराउने ओखती वा गुण । जुन औषधीले शरीरको बुढचौली (सत्तरी वर्ष पछि) मा हुने रोग र (सबै उमेरका) जरो आदि रोगलाई निको पार्दछ त्यसलाई वा त्यस्तो गुणलाई “रसायन” भनिन्छ । जस्तै : गुर्जो, रुदन्ती (हिमाली सागजातको बूटी विशेष), गोकुलधूप, हर्रो आदि । |
| रेचन :- | पेटमा रहेका राम्ररी पचेका वा केही नपचेका खाएका कुरालाई पातलो बनाई मलद्वारतिर धकेल्ने औषधी वा गुण । जस्तै : सेतो निशोध । |
| रेतस :- | पुरुषको शरीरमा रहेको शुक्र धातुलाई सक्रिय (चैतन्य) बनाउने वा उत्पन्न गर्ने खालका औषधीलाई वा गुणलाई “रेतस” भनिन्छ । जस्तै : दूध, माष, भलायोको फलको गुदी, अमला आदि । |
| लङ्घन :- | नखाएर, बान्ता गरेर, दिसा गरेर, रगत निकालेर, तातो पानी पिएर, पसिना निकालेर, बान्ता र दिसा दुबै उपायले, पानी नपिएर, हावामा बसेर, घाममा बसेर, खाएको पचाएर, खाना नखाएर, परिश्रम गरेर र शिरो विरेचन गरेर शरीरलाई हलुका बनाउने आयुर्वेदीक तरिका । |
| लुतो :- | कण्डू, कच्छू, खर्जू, पामन्, पामा, विचर्चिका । |
| लेखन :- | जुन औषधीले रस आदि धातु वा वात आदि दोषलाई (भित्रभित्रै) सुकाएर (वा घटाएर) शरीरबाट बाहिर निकाली दिन्छ त्यसलाई वा त्यस्तो गुणलाई “लेखन” भनिन्छ । जस्तै : ठूलो बिही, तातो पानी, बोझो, जौ आदि । |

वमन :- जुन औषधीले नपचेका तर पित्त र कफ बनेर पेटभित्र अड्किएका कुरालाई बलपूर्वक मुख मार्फत (बान्ता गराई) निकाल्दछ त्यसलाई वा औषधीमा हुने त्यस्तो गुणलाई “वमन” भनिन्छ । जस्तै : मैनफल ।

वाजीकर :- जुन औषधीले पुरुषको धातु बढाई त्यस मार्फत स्त्रीमा रोमाञ्च सहितको शक्ति सञ्चार (मैथुन सुख) पैदा गर्दछ त्यसलाई “वाजीकरम्” भनिन्छ । जस्तैः गुनालु (एकजातको बलु भ्कार), जाइफल, कुरिलो, दूध, सखर, काउसोका गेडा आदि ।

वातरक्त :- हातगोडाका औंला वा अरु भागका जोर्नी सुनिई दुख्ने रोग

वातोदर :- वायुविकारबाट उत्पन्न हुने पेटको रोग विशेष ।

विकाशि :- जुन औषधीले (नपच्दै) शरीरका सबै बन्धनलाई खुकुलो पार्दछ र रसादि धातुका तेजलाई त्यो धातुबाट सोस्दछ त्यसलाई वा त्यस्तो गुणलाई “विकाशि” भनिन्छ । जस्तै : सुपारी, कोदो ।

विचर्चिका :- खोप लगाउँदा देखिने जसरी छालामा केही सुन्निएर रातो टाटा देखिने र पछि त्यसमाथि सेतो र चम्किलो पाप्रा देखिने र त्यो उप्किएपछि रगत आउने दादजस्तै एक प्रकारको छालाको रोग ।

विदारीका :- घाँटीको रोग विशेष । कानको रोग विशेष । काखीका फोका आउने रोग विशेष ।

विद्रधि (रोग) :- गुदद्वार, वस्ति, नाभि, कोखा, तिघ्राका जोर्नी, मिर्गौला, मुटु, कलेजो, फियोमा पैदा भएर कालान्तरमा फुट्ने खटिरा विशेष ।

विदाह :- पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्नु ।

विलेपी :- चामलभन्दा चार गुना बढी पानी हालेर पकाइने खाद्य वस्तु ।

विश्वाची :- पाखुराको पछाडिदेखि औंलासम्म हुने कण्डरा नामक नसा सुकेर हात खुम्च्याउन फैलाउन नसकिने रोग ।

विष्टम्भ :- दिसा रोकिएर पेट फुल्ने रोग विशेष ।

विष्टम्भी :- मलमूत्र अवरोध गर्ने, विष्टिम्भि ।

विष (गरविष) :- दुई वा दुईभन्दा बढी द्रव्यको संयोगले पैदा हुने विष ।

विषमज्वर :- कहिले चिसो कहिले तातो, कहिले मन्द र कहिले तीव्र भएर अनियमित रूपले आउने जरो; कामजरो ।

विषाद :- चाहना पूरा नहुँदा मनमा हुने दुःख, शारीरिक शिथिलतावा निश्चेष्टता, डिप्रेशन ।

विसर्प :- शरीरमा ससाना फोका उठी जरो आउने छालाको एक रोग । सुके लुतो ।

विस्फोट :- छाला काला, रातो र पातलो हुने एक प्रकारको कुष्ठरोग, विष्फोटक ।

विस्रम् :- काँचो मासुको गन्ध आउने ।

वैक्रान्त :- खानीबाट निकाल्दा विकृत रूप भएको हिरा ।

व्यङ्ग :- मुखभरि ससाना खटिरा वा काला दाना दाना आउने रोग ।

व्यवायि :- नपाकेको तर खाएपछि शरीर भरी फैलिने र मदिरा वा विष जसरी पच्ने (र असर गर्ने) औषधीलाई वा गुणलाई “व्यवायि” भनिन्छ । जस्तै : भाँग, अफिम आदि ।

शमन :- मानिसले खाएपिएको कुरासँग विद्वेष नगरी ती शरीरभित्र जहाँ छन् त्यहीं गई ती कुरासँग मिसिएर तिनको दोष नष्ट गर्ने (वान्ता वा दिसा नलगाई रोग ठिक गर्ने) औषधी वा गुण । जस्तैः अमला ।

शालाक्यतन्त्र :- नाक, कान, मुख, आँखा आदिको चिकित्सा गर्ने शास्त्र ।

शीतपित्त :- चिसो र पित्तविकारले शरीरमा डाबर आए जसरी आउने एक किसिमको दाद ।

शुक्रल :- जुन औषधीले शुक्र वृद्धि गर्दछ त्यसलाई वा त्यस्तो गुणलाई “शुक्रल” भनिन्छ । जस्तै : अश्वगन्धा, मुसलीकन्द, सखर, कुरिलो आदि ।

शूकदोष :- जननेन्द्रिय बढाउन प्रयोग गरिएका ओखती दल्नाले पुरुषलाई हुने रोग ।

| | |
|---|---|
| शूल :- | (क) टाउको, हात, गोडा आदि कुनै पनि अङ्गमा हुने ज्यादा दुखाइ । (ख) वायुप्रकोपले हुने पेटको ज्यादा दुखाइ । (ग) वातरोग । गानु, गानो, गानुगोला, गोला । |
| शोधन :- | जुन औषधीले वात दोषका कारण शरीरभित्र कतै जमेर बसेका मललाई फोरफार गरी माथि नाकमुखबाट वा तल मलमूत्रद्वारबाट बाहिर निकाल्दछ, त्यसलाई वा त्यस्तो गुणलाई “संशोधन” भनिन्छ । जस्तैः देवदार । |
| शोफ :- | शरीरको कुनै अङ्ग सुन्निनु, शोथ । |
| शोष :- | शरीर सुक्नु, छ किसिमका क्षयरोग । |
| श्वास :- | दम; कमजोरी, रोग, परिश्रम आदिले छिटोछिटो चल्ने सास; धक्ने रोग; धम्कीको रोग । |
| सूक्ष्म :- | जुन औषधी रौंका प्वालप्वालमा छिर्दछ त्यसलाई व त्यस्तो गुणलाई “सूक्ष्म” भनिन्छ । जस्तै : सिधेनुन, ठूलो कण्टकारी, नीम वा अडिरको तेल आदि । |
| सूर्यावर्त :- | जति जति घाम माथि आयो उतीउती टाउको दुख्दै जाने र घाम अस्ताउँदै गएपछि कम हुँदै जाने  रोग । |
| सोमरोग :- | आइमाईको योनिबाट सङ्लो सेतो पानी बग्ने रोग । |
| संस्रन :- | पछी पच्ने सम्भावना रहेका तर वात आदि दोषले गर्दा कतै पेटभित्र अड्किएका खाएको कुरालाई नपच्दै तल्लो भागमा लेराई मलद्वार मार्फत निकाल्ने खालका औषधी  वा गुण । जस्तै : राजवृक्ष फलको गुदी । |
| स्तम्भन :- | (क) रुखो, शीतल टर्रो र चाँडै पच्ने अवस्थाकम र वायुलाई उल्टो गतिमा हिँडाउने ओखती वा गुण । (ख) वीर्य आदि धातु वा दिसा रोक्ने ओखती वा गुण । (ग) शरीरको कुनै अङ्ग वा पूरै शरीर चल्न चरपटाउन नसक्ने स्थिति वा अवस्था । जुन औषधी रुखो, ठण्डीग नैं र टर्रो स्वादका हुनाका कारण पाकेपछि हलुका हुन्छन् र वातदोष जन्माउँदछन् तिनलाई वा त्यस्तो गुणलाई “स्तम्भन” भनिन्छ । जस्तै : ठूलो कुरो, टटेलो आदि । |
| स्तैमित्य :- | इन्द्रियले काम नगर्ने वा जड हुने अवस्था । |
| स्फिच् :- | कमरमा लागेको मासु । |
| स्वर बस्नु :- | स्वरभेद । |
| हनुस्तम्भ :- | चिउँडो र कञ्चटको बीचको हाड नचल्ने रोग । |
| हलीमक :- | पाण्डुरोग विशेष । |
| हारिद्र :- | हलेदाको पातभैँ पात तथा गानो हुने, हलेदाको खेतमा हुने नौथरी विषमध्ये एक । |
| हैजा :- | विशूचिका । |

